वि.सं. २०४७ सालमा तत्कालीन सरकारले प्रजातन्त्र पुर्नस्थापनाका लागी भएका संघर्षहरुमा संलग्न भएको कारणबाट विभिन्न व्यक्तिहरुको हरण तथा जफत भएको सम्पत्ति गृह मन्त्रालयले छानविन गरी एकिन भएपछि हदबन्दिको टुङ्गो लगाएर फिर्ता दिने निर्णय गरेकोमा मन्त्री परिषद्को मिति २०४७/०२/१४, २०४७/०४/०८ र २०४७/०५/०३ गतेको निर्णयको अपव्याख्या, दुरुपयोग र विपरित समेत गरी मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन कर्मचारीहरु प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतका कर्मचारीले आफ्नो पदिय जिम्मेवारीको दुरुपयोग गरेर बदनियतपूर्वक कानून विपरित सुनिती राणा समेतका नाममा ललिता निवास क्याम्पभित्रको सरकारी जग्गा मिति २०४९/०७/२५ गते मि.नं. १०२४ बाट साविक नगर २३ क्ष को २६ कित्ता (३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४, ५१, ५३, ५९, ७९) को क्षेत्रफल २६-६-१-० रोपनी, मिति २०४९/०७/२५ गते मि.नं. १०२५ बाट साविक नगर २३ ह का २१ कित्ता ( ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, १६, २७, ११) र २३ क्ष का ६ कित्ता ( १८, २०, २१, २२,२३, २४) गरी जम्मा २७ कित्ताको क्षेत्रफल ४९-०-३-० रोपनी,मिति २०४९/०९/२३ गते मि.नं. १०२४ बाट साविक नगर २३ क्ष को १९ कित्ता ( ३०, ३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३) को जम्मा क्षेत्रफल २८-१५-१-० रोपनी र २०४९/०९/२३ मि.नं. १०२५ बाट साविक नगर २३ क्ष को ४ कित्ता (२५, २६, २७ र २९) जग्गाको जम्मा क्षेत्रफल ७-१४-०-० रोपनी समेत गरी जम्मा ११२-४-१-० रोपनी दर्ता गरी दिएको देखिन्छ।

उक्त जग्गा जग्गाधनी दर्ता श्रेष्तामा पहिले नै किर्ते भई बसेको ३४ कित्ता जग्गा मध्ये गुठीको श्रेष्ता खारेज गरी कानून विपरीत रैकरमा परिणत गरी मालपोत विभागका तत्कालीन प्रमुख मुकुन्द प्रसाद आचार्यको पत्रादेशमा मालपोत कार्यालय डिल्लीबजारले निर्णय गरी जग्गा दर्ता कायम गरीदिएको र सो पश्चात निजहरुले गरेको कानून विपरितको कामको प्रमाण लोप गर्ने क्रममा व्यक्तिको नाममा जग्गा दर्ता गर्न निर्णय भएको मि.नं. १०२४ र १०२५ को फायल खरिदार गोपाल कार्की समेतको मिलेमतोमा गायब गरीदिएको देखिन्छ। सो पश्चात किर्तेबाट दर्ता भएको सो जग्गा मध्येबाट मिति २०४९/१०/१८, मिति २०५०/०२/२६, मिति २०५१/१०/०४ गते साविक २३ ह को कित्ता नं. १३, १७, ११, २१, २७, २८, १९, ३४ र ३६ साथै २३ क्ष को कित्ता नं. २०, २६, २२, ८३, ९२ र ७० को जम्मा क्षेत्रफल १६-१०-०-० रोपनी जग्गा तत्काल मालपोत कार्यालय डिल्लीबजार, भूमी सुधार कार्यालय र जिल्ला प्रशासन कार्यालय लगायत विभिन्न सरकारी कार्यालयहरूमा कार्यरत कर्मचारीहरु कलाधर देउजा समेतका कर्मचारीले आफ्नो परिवार / नातेदार इन्द्रबहादुर थापा समेतका ११ जनाका नाममा हालैदेखिको वकसबाट जग्गा प्राप्त गरेको।

साथै बिचौलिया राम कल्याण अधिकारी र रामनाथ घिमिरेले ६ रोपनी जग्गा समेत हालै देखिको वकस पत्रबाट प्राप्त गरी कुल २२-१०-०-० रोपनी जग्गा घुस वापत लिएको, सुनिती राणा समेतको नाममा ११२-४-१-० रोपनी जग्गा फिर्ता आईसके पश्चात भूमि सुधार कार्यालय काठमाडौंका तत्कालीन भूमि सुधार अधिकृत उमानाथ प्रसाद ज्ञवालीले मिति २०५५/०१/०६ गते जग्गा कमाउने किसान मात्र भएको ललिता निवास क्याम्प भित्रको जग्गामा तत्कालिन लेखापढी व्यवसायी राम कुमार सुवेदी समेतको मिलेमतोमा हर्क नारायण डंगोल समेतका ४१ जनालाई मोही कायम गराई सुनिती राणा समेतका नाममा दर्ता भएको जग्गा मध्ये आधा जग्गाको हक हस्तान्तरण गर्ने निर्णय समेत गरेको र सोही निर्णयका कारण समरजंग कम्पनीको नामको अन्य जग्गामा समेत मोहीको हक स्थापित हुन गएको देखिन्छ।

यसरी तत्कालीन सरकारले मिति २०२१/०८/१५ गते प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गामा कोहि कसैको हकदैंया नरहने कानूनी प्रावधान हुँदाहुँदै उक्त जग्गाको फिल्डबुक तथा श्रेष्तामा कमाउने किसानको नाम मोही महलमा उल्लेख गरेको मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन प्रमुख धर्म प्रसाद गौतम तथा साविक नापीमा खटिई फिल्डबुक श्रेष्ता तयार गर्ने कर्मचारी समेतले ललिता निवास क्याम्प भित्रको ३४ कित्ता जग्गामा व्यहोरा फरक पारी किर्ते गरी गुठी कायम गरेको र किर्ते भैरहेको गुठीको श्रेष्ता खारेज गरी कानून विपरीत रैकरमा परिणत गर्ने गरी पत्रादेश गर्ने मालपोत विभागका तत्कालीन प्रमुख मुकुन्द प्रसाद आचार्य तथा यसरी किर्ते भैसकेको जग्गा हालै देखिको वकसपत्र बाट प्राप्त गर्ने जग्गाधनीहरु समेतले किर्ते तथा ठगी गरी सरकारी जग्गा हिनामिना हानी नोक्सानी गरेको हुँदा केन्द्रीय अनुसन्धान ब्यूरो, महाराजगंजको छानविन प्रतिबेदन समेतको आधारमा थप अनुसन्धान समेत गरी जग्गा प्राप्त गर्ने सुनिती राणा समेतमा व्यक्तिहरु, मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन कार्यालय प्रमुख कलाधर देउजा समेतका कर्मचारीहरु,परिवार तथा आफन्तको नाममा हालैदेखिको वकसपत्र प्राप्त गर्ने तत्कालीन समयमा विभिन्न सरकारी कार्यालयमा कार्यरत सरकारी कर्मचारीहरु, जग्गा प्राप्त गर्ने उर्मिला शाह समेतका व्यक्तिहरु, जग्गा प्राप्त गर्ने हर्क नारायण डंगोल समेतका मोही भनिएका व्यक्तिहरु, मोहीको वारेश बसी संलग्न कर्मचारीहरुसँगको मिलेमतोमा काम गरी सोहि जग्गा खरिद गर्ने राम कुमार सुबेदी समेत विरुद्द खण्डमा उल्लेखित प्रतिवादीहरुले योजना प्रपञ्च गरी सँगठित रुपमा आफ्नो हक नपुग्ने अर्काको हकको चल-अचल धनमाल हक पुग्नेलाई वा जस्का जिम्मामा रहेको छ, उसलाई ललाई फकाई प्रलोभनमा पारी आफ्नो हक नभएको सम्पत्तिमा आफ्नो हक पुग्ने फरक व्यहोराको कागज समेत बनाई पेश गरी झुक्याई झुट्ठो कुरालाई सद्धे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल-अचल धनमाल आफ्नो हो भनी किर्ते लिखत बनाई बिक्रि वितरण गरेको हुँदा निज प्रतिवादीहरु तथा सो कार्यमा संलग्न निज प्रतिवादीहरुको वयान पोलबाट खुल्ने तथा अनुसन्धानबाट पत्ता लाग्न आउने अन्य व्यक्तिहरु समेतका व्यक्तिहरुलाई कानून बमोजिम कारबाही गरी पाऊ भन्ने व्यहोराको मुकुन्द प्रसाद पन्तको जाहेरी दरखास्त।

**ख) <u>मुकुन्द प्रसाद पन्तको जाहेरी दर्खास्त (छुट जग्गा २०६२):</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१।०८।१५ गते निर्णय गरी जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम ललिता निवास क्याम्प समेतको जग्गा (२९९ रोपनी ९ आना ३ पैसा) मध्ये सुवर्ण शमशेर र कञ्चन शमशेरको भाग १४ रोपनी ११ आना बाहेक बाँकी २८४ रोपनी १४ आना ३ पैसा जग्गा समेतको घर लगायत सम्पूर्ण संरचना सार्वजनिक कामको निमित्त आवश्यक भएकोले ऐ. ऐन बमोजिम राज्यबाट उचित क्षतिपूर्ती दिई अधिग्रहण गरेको।

प्रचलित कानून बमोजिम मुआब्जा दिई ललिता निवास क्याम्पको जग्गा तत्कालीन सरकारले अधिग्रहण गरेपश्चात सुवर्ण शमशेरको छोरा शाही नेपाली सेनामा कार्यरत कनक शमशेरले आफ्नो क्याम्पमा रहेको गोठ, तबेला सहित आठ रोपनी जग्गामा बसोबास गर्न पाउँ भनी तत्कालीन श्री ५ मा निवेदन गरे पश्चात श्री ५ को सरकारको मिति २०२२।०४।१० गतेको निर्णय भई मालपोत कार्यालय, काठमाडौंबाट साविक काठमाडौं नगर पंचायत वडा नं. २३ 'स' कि.नं. १६ को जग्गा कित्ता काट भई कि.नं. २५ र २६ बनेकोमा कि.नं. २५ को क्षेत्रफल ८ रोपनी जग्गा मिति २०३६।०७।२३ मा कनक शमशेरले प्राप्त गरेको।

कनक शमशेरले साविक २३ स को कित्ता नं. २५ को जग्गा आफ्नो नाममा दर्ता गराउने क्रममा कित्ता नम्वर २६ को क्षेत्रफल ०-१२-२-० रोपनी जग्गा आफूले भोगिरहेको कम्पाउण्ड भित्र भएतापनि ८ रोपनी भन्दा

बढी भएको उक्त ०-१२-२-० रोपनी जग्गा आफ्नो नभई श्री ५ को सरकारको जग्गा हो भनी कनक शमशेर स्वयंले मिति २०३५।१२।२१ गते मालपोत कार्यालय, डिल्लीबजारमा निवेदन दिई आफ्नो हक छाडि सकेको जग्गा स्वत: श्री ५ को सरकारको नाममा दर्ता हुनुपर्नेमा मालपोत कार्यालयका तत्कालीन कर्मचारीहरुले सो नगरी जग्गाधनी दर्ता श्रेष्तामा **"कि.नं. २६ को x-१२-२ रोपनी बाँकी"** उल्लेख गरी फरक व्यहोरा पारेको र नापीको कर्मचारीले फिल्डमा समेत नछुट्याई जग्गा कनक समसेरको घर-कम्पाउण्डभित्र पारी भोगचलन गरीरहेको।

तत्कालीन सरकारले अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको साविक वडा नम्वर २३ "स" को कित्ता नम्वर १६ कित्ताकाट भई कायम भएको कि.नं. २६ को क्षेत्रफल १२ आना २ पैसा मेरो छुट जग्गा भनी कनक शमशेरको श्रीमती सुनीति राणाले मिति २०५८।०२।०८ गते "का.जि. साविक नगर वडा नं. २३ स हाल का.म.न.पा. वडा नम्वर ४ को कि.नं. २६ को १२ आना २ पैसा जग्गा नयाँ नापी हुँदाका बखत मेरो नाममा नापजाँच भएको उक्त जग्गा हाल का.जि. का.म.न.पा. वडा नं. ४ सिट नं. १०२-१०२५-१५ को कि.नं.१११ र सिट नं. १०२-१०२५-२० को कि.नं. ४८ कायम भएको हुँदा उक्त जग्गा दर्ता गरी जग्गाधनी प्रमाण पूर्जा पाउँ" भनी नापी गोश्वारा, महाराजगंजमा निवेदन दिएको।

मालपोत कार्यालय डिल्लीबजारको पत्र संख्या ०६१/०६२ को जवाफ दिंदा कार्यालयमा रहेका फिल्डबुक लगायतका अभिलेख विवरणहरु फरक पारी नापी शाखा काठमाडौंले उक्त जग्गाको जग्गाधनी सुनीति राणा भनी खुलाई च.नं. ८२८९ मिति २०६२/१/२८ को पत्रबाट मालपोत कार्यालय डिल्लीबजारलाई फरक व्यहोरा लेखी पठाएको र छुट जग्गा दर्ता समितिले खडा गरेको निर्णय पर्चामा समेत साविक नगर २३ स को कि.नं. २६ को क्षेत्रफल ०-१२-२-० जग्गा मोही कनक शमशेर र जग्गाधनी सुनीति राणा भनी उल्लेख गरेको।

काठमाडौ महानगरपालिका वडा नम्वर ४ को तत्कालीन वडा सचिव शिवजी भट्टराईले समेत तत्काल प्रचलित कानून अनुसार राज्यले क्षतिपूर्ती दिई अधिग्रहण गरेको श्री ५ को सरकारको जग्गालाई निजले अतिक्रमण गरी **जोत कमोद** गरेकै आधारमा निज सुनीति राणाकै जग्गा भएकोले निजको नाममा दर्ता नामसारी गरी जग्गाधनी दर्ता प्रमाणपूर्जा उपलव्ध गराई दिनुहुन सिफारिस गर्दछु भनी मालपोत कार्यालय, काठमाडौंलाई झुठो व्यहोराको सिफारिस गरी सरकारी सम्पत्तिमा हानी नोक्सानी पुऱ्याउने कार्यमा सहयोग गरेको।

उक्त जग्गा निवेदककै पैतृक जग्गा हो, निवेदकको माग बमोजिम निजकै नाममा दर्ता गरीदिए फरक पर्ने छैन र यो सरकारी तथा सार्बजनिक र व्यक्ति विशेषको जग्गा समेत होईन भन्ने व्यहोराको मिति २०६२।०१।११ गतेको सर्जमिन मुचुल्का तयार भई पेश भएकोमा सो सर्जमिन मुचुल्कामा हस्ताक्षर गर्ने का.म.नं.पा. ४ बस्ने रामकृष्ण ठकुरी समेतका ७ जना व्यक्तिहरुले झुठा व्यहोरा लेखाइ दिएको। मालपोत कार्यालय काठमाडौंको मिति २०६०।०५।३१ गतेको पत्र बमोजिम गोरखापत्रमा मिति २०६०।०६।०३ गतेको हकदावी सम्बन्धी पैतिस दिने सार्वजनिक सूचना प्रकाशित भएकोमा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाको रेखदेख र संरक्षण गर्ने जिम्मेवारी भएको समरजंग कम्पनीको तर्फबाट तत्कालीन कार्यालय प्रमुख अर्जुन प्रसाद भण्डारी दावी गर्न नगएको।

मिति २०६०/४/२३ गतेको रुक्म शमशेर समेतले गरीदिएको मञ्जुरनामा कागजमा साविक २३ स को कि.नं. २६ को ०-१२-२-० रोपनी जग्गाको जग्गाधनी प्रमाण पूर्जा लिन बाँकी रहेको, जग्गाधनी प्रमाणपूर्जा दिएमा हाम्रो मञ्जुरी छ भन्ने व्यहोरा उल्लेख भएको तर निज रुक्म शमशेरले केन्द्रीय अनुसन्धान ब्यूरोको

छानबिन प्रतिवेदनमा उल्लेखित छानबिन समिति समक्ष गरीदिएको कागजमा "...उल्लेखित कागज बत्तिसपुतली स्थित मेरी माहिली भाउजु शैलजा राणाको घरमा गरिएको हो। मेरी जेठी भाउजु सुनीति राणाले आफु बसोबास गरी राखेको का.जि.का.म.पा. ४ बालुवाटार स्थित निवास कम्पाउण्डको जग्गा मिलाउनु पर्‍यो, छुट जग्गा दर्ताका लागि तपाईंहरुको पनि मन्जुरीनामा चाहियो, लेखि दिनुहोस भनी अनुरोध गर्नु भएकोले म समेतले सो अवस्थामा उक्त जग्गामा हाम्रो कुनै पनि किसिमको हक दावी छैन भनी मन्जुरीनामा दिएका हौं। उक्त जग्गा दर्ता सम्बन्धमा भएको काम कारवाही कानून सम्मत वा कानून विपरित के हो मलाई थाहा भएन" भन्ने व्यहोरा खुलाई लेखाई दिएबाट सो मञ्जुरीनामा कागज समेत फरक व्यहोराको रहेको।

हेमाद्री शमशेरले मालपोत कार्यालय, डिल्लीबजारमा मिति २०६२/१/११ मा दिएको हकदावी छाडी दिएको निवेदनमा दर्ता हुन छुट भएको वडा नं. २३ स को कि.नं. २६ को क्षेत्रफल ०-१२-२-० रोपनी जग्गा मेरो आमा सुनीति राणाको नाममा एकलौटी ना.सा. दर्ता भएमा मेरो मञ्जुरी छ भनी निवेदन दिएको तर छानबिनको क्रममा मालपोत कार्यालय, डिल्लीबजारबाट प्राप्त भएको टिप्पणी र आदेश कागजमा "...मिति ०३५।१२।२१ मा का.नं.प. वडा २३ 'स' कि.नं. १६ को क्षेत्रफल ८-१२-२ मध्ये ०-१२-२ कट्टा गरी पुर्जा पाउँ भन्ने माग र माग अनुसार रोपनी ८-०-० कनक शमशेर ज.ब.रा.को नाउँमा बाँकी ०-१२-२ श्री ५ को सरकारले प्राप्त गर्ने गरी साविक कि.नं. १६ बाट कित्ता फोड भैकि.नं. २५, कनक शमशेर, कि.नं. २६ श्री ५ को सरकार कायम गरी दिनुपर्ने उल्लेख भएको र सो टिप्पणी र आदेशको प्रतिलिपि मिति २०५७/३/२१ गते निज हेमाद्री शमशेरले नै बुझेर लगेको देखिए बाट साविक २३ स को कि.नं. २६ को क्षेत्रफल श्री ५ को सरकारको भई श्री ५ को सरकारको नाममा दर्ता हुनु पर्ने स्पष्ट देखिएको र सो तथ्य निज हेमाद्री शमशेरलाई जानकारी रहेको, साथै उक्त व्यहोरा उल्लेख भएको टिप्पणी र आदेश भएको फाईल मालपोत कार्यालय काठमाडौंमा पत्राचार गरी माग गर्दा फाईल फेला नपरेको भन्ने जवाफ प्राप्त हुन आएकोले जग्गा दर्ता गर्ने समयका कर्मचारीहरु र उक्त फाईलको प्रमाणित प्रतिलिपी माग गरी लिई जाने हेमाद्रि शमशेर समेतले उक्त फाईल नष्ट गरेको।

२०६२/१/११ को मा. पो. का. डिल्लीबजारको नापी शाखालाई विवरण खुलाई पठाईदिने भनी लेखेको पत्र साथ संलग्न रहेको जग्गाको मोठ विवरण (१२५ ठेलीको ११८ पाना) मा जग्गाधनीको नाम थरको महलमा नाम खाली र मोहीको नाम थरको महलमा मोही कनक शमशेर ज.ब.रा. उल्लेख भएकोमा, मिति २०६२/१/२८ च. नं. ८२८९ को नापी शाखा काठमाण्डौँको पत्रमा उल्लेखित विवरणमा साविक २३स कि नं. २६ को जग्गाधनीको महलमा सुनीति राणा र हालको सिट नं. १०२५-१५ को कि नं. १११ क्षेत्रफल ३९२.९९ सिट नं. १०२५-२० को कि नं. ४८ क्षेत्रफल १४.८६ र जग्गाधनीको महलमा बाँकी उल्लेख भएको। साविकको फिल्डबुकको जग्गाधनीको महलमा समेत केही नलेखी खाली रहेको। यसरी २०३६।०७।२३ मै मालपोत कार्यालयको जग्गाधनी श्रेष्ताको जग्गाधनी महलमा फरक व्यहोरा पारी कीर्ते व्यहोरा भएको श्रेष्ताका अतिरिक्त २०६२।१।२८ को नापी शाखाको पत्रमा अर्को फरक व्यहोरा पारी जग्गाधनीको महलमा सुनीति राणा उल्लेख गरी थप कीर्ते भएको देखिन्छ। फलत: यिनै कागजातको आधारबाट सरकारी जग्गा सुनीति राणाको नाममा दर्ता भई उक्त जग्गा सम्बन्धमा सरकारको हक मरेको।

यसरी मालपोत कार्यालय, डिल्लीबजारमा तत्कालीन समयमा कार्यरत कर्मचारीहरुले २०२१ सालमै अधिग्रहण भई आएको श्री ५ को सरकारको ललिता निवासको जग्गा सुनीति राणाको हक नपुग्ने नेपाल सरकारको नाममा स्वत: दर्ता हुनु पर्ने उल्लेखित कि.नं. को जग्गा हकभोगको नाममा स्थानीय निकायको फरक व्यहोराको झुठो सिफारिस, व्यहोरा फरक भएको कीर्ते सर्जमिन मुचुल्का लगायत तयार पारी गैह्रकानूनी रुपमा

कर्मचारी समेतको मिलेमतो र बदनियतमा मिति २०६२।०२।०३ गतेको मालपोत कार्यालय, डिल्लीबजारको प्र.मा.अ. टिकाराम घिमिरेको निर्णयबाट निज कनक शमशेरको हकदार पत्नी सुनीति राणाको नाममा उक्त दर्ता भएकोमा आफ्नै कार्यालयमा भएको उक्त जग्गाको साविक श्रेस्ता तथा श्रोतको बिषयमा यथार्थ जानकारी हुँदाहुँदै सो विपरीत आधार प्रकृयाको आड हाली तत्कालिन श्री ५ को सरकारको नाममा दर्ता हुनुपर्ने उक्त कि.नं. २६ को ०-१२-२-० रोपनी सरकारी जग्गा सुनीति राणाको नाममा दर्ता गरी सरकारी सम्पत्ति हिनामिना तथा हानि नोक्सानी गरेको देखिएको हुँदा २०३६ सालमा जग्गाधनी दर्ता श्रेष्तामा **"कि.नं. २६ को x-१२-२ रोपनी बाँकी"** उल्लेख गर्ने मालपोत कार्यालय, डिल्लीबजारको कर्मचारी, फिल्डमा छुट्याउने जिम्मेवारी भएको नापी कार्यालयको कर्मचारीहरु, २०६२।०२।०३ को निर्णय मिसिलमा संलग्न प्र.मा.अ. टिकाराम घिमिरे समेत संलग्न अन्य ५ जना कर्मचारीहरु, जग्गा प्राप्त गर्ने सुनीति राणा र निजलाई जग्गा दिन मञ्जुरीनामा दिने अन्य व्यक्तिहरु, सिफारिस दिने वडा सचिव शिवजी भट्टराई, सर्जमिन मुचुल्कामा संलग्न वडा सचिव कृष्णराज विष्ट समेत अन्य व्यक्तिहरु, समरजंग कम्पनीका प्रमुख अर्जुन प्रसाद भण्डारी लगायत केन्द्रीय अनुसन्धान ब्यूरो, महाराजगंजको छानबिन प्रतिवेदन समेतको आधारमा थप अनुसन्धान समेत गरी प्रकरण नं. ३ मा उल्लेखित हेमाद्री शमसेर ज.ब.राणा समेत प्रतिवादीहरुले योजना, प्रपञ्च गरी सँगठित रुपमा आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल हक पुग्नेलाई वा जसका जिम्मामा रहेको छ उसलाई ललाई फकाई जाल परिपञ्च गरी आफ्नो हक नभएको सम्पत्तिमा आफ्नो हक पुग्ने कीर्ते कागज बनाई पेश गरी झुक्याई झुठ्ठो कुरालाई सद्दे हो भनी धोका दिई आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो हो भनी लिखत गरी बिक्री ब्यबहार गरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु तथा सो कार्यमा संलग्न निज प्रतिवादीहरुको बयान पोलबाट खुल्ने तथा अनुसन्धानबाट पत्ता लाग्न आउने अन्य ब्यक्तिहरु समेतले साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम सजायँ गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ र दफा २५१ बमोजिम र साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १, ७, ९, १२ नं. र हाल प्रचलित मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद -२५ ,लिखत सम्बन्धी कसूरको दफा २७६ बमोजिम तथा अन्य प्रचलित कानून बमोजिम समेत कारबाही गरी बिगो बमोजिमको क्षतिपुर्ति समेत दिलाई भराई पाउँ साथै उक्त जग्गा हाल को-कसको नाममा छ अनुसन्धानबाट खुलाई निजहरुलाई समेत कानून बमोजिम गरी पाउँ भन्ने ब्यहोराको समरजंग कम्पनिका कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरी दरखास्त ।

**ग) मुकुन्द प्रसाद पन्तको जाहेरी दर्खास्त (सट्टापट्टा २०६७ साल):**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१।०८। १५ गते निर्णय गरी जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम ललिता निवास क्याम्प समेतको जग्गा (२९९ रोपनी ९ आना ३ पैसा) मध्ये सुवर्ण शमशेर र काञ्चन शमशेरकोभाग १४ रोपनी ११ आना बाहेक बाँकी २८४ रोपनी १४ आना ३ पैसा जग्गा समेतको घर लगायत सम्पूर्ण संरचना सार्वजनिक कामको निमित्त आवश्यक भएकोले ऐ. ऐन बमोजिम राज्यबाट उचित क्षतिपूर्ती दिई अधिग्रहण गरेको,

अधिग्रहण गरिएको जग्गा समरजंग कम्पनीको संरक्षणमा राखिएकोमा उक्त जग्गा कमाउने जोताहा किसानहरु ५७ जनाको निवेदन अनुसार राज्यलाई थप आवश्यकता नपरे सम्मको लागि मोहीयानी हक कायम नहुने गरी कमाउन दिने र समरजंग कम्पनीले अन्य जग्गाहरु सरह उक्त जग्गाको कुत बुझ्नु भनीभूमि सुधार

मन्त्रालयबाट लेखि आएको पत्रलाई उल्लेख गरी बागमती अञ्चलाधीशको कार्यालयबाट मिति २०२३।०६।२३ गते समरजंग कम्पनीलाई पत्रादेश भएको,

यसरी ललिता निवास क्याम्प भित्रको जग्गाहरु तत्कालीन सरकारले प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सो जग्गा सरकारलाई आवश्यक नपरेसम्म मोहीयानी हक कायम नहुने गरी कमाउन दिएकोले सो जग्गा कमाउने व्यक्तिहरु मोहीयानी हक प्राप्त नहुने जोताहा किसान मात्र भएको, जग्गा प्राप्ति ऐन, २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुनेछ भन्ने कानूनी व्यवस्था भएको, जग्गा प्राप्ती ऐन, २०३४ को दफा २३ को उपदफा २ र ३ बमोजिम "जग्गाको स्वामित्व सरेको मितिदेखी नै उक्त जग्गाको लगत कट्टा भएको मानिनेछ" भन्ने व्यवस्था भएको, जग्गा प्राप्ती ऐन २०३४ को दफा ३१ "जग्गा कमाएको नाताले .... मोहीयानी हक प्राप्त हुनेछैन" बमोजिम पनि २०२३ साल देखि जग्गा कमाउने कसैको पनि उक्त जग्गामा मोहीयानी हक कायम नहुने र लगत श्रेस्तामा देखिएका मोही २०२३/६/२३ मा जग्गा कमाउन निबेदन दिने तिनै किसानको भएको साविक नापीको फिल्डबुकबाट देखिएको हुँदा मोहीयानी नहुने तथा पहिलो नापी बाट तयार भएको नापीकोफिल्डबुकमा "यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधियाँमा कुत बुझाई कमाई आएको" भनी उल्लेख गरेको पाईएकोले सो जग्गामा उल्लेखित व्यक्तिहरु मोही नभई जोताहा किसान मात्र भएको,

ललिता निवास क्याम्पभित्रको उक्त जग्गामा मोही कोही नभएता पनि भूमिसुधार कार्यालय, काठमाडौंमा सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ भनी नक्कली मोहीहरु श्री कृष्ण महर्जन समेतले मिति २०६६।०९।१३ गते निवेदन दिएको, सम्मानित सर्बोच्च अदालतको उक्त फैसलामा कोहि कसैलाई मोही कायम नगरेको भएता पनि निबेदनमा "सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ" भन्ने झूठो तथा कीर्ते व्यहोरा उल्लेख गरेको,

विशिष्ट व्यक्तिहरूको निवास परिसर विस्तार सम्बन्धमा भौतिक योजना तथा निर्माण मन्त्रालयबाट आर्थिक वर्ष २०६५/०६६ मा गुरु योजना तयार भई नेपाल सरकारको २७-७-२-२ रोपनी सरकारी जग्गामा मोहीको भाग कट्टा गरी प्राप्त हुने १३-६-२-०, राजकुलो र बाटोबाट प्राप्त हुने ०-१५-०-२ समेत गरी कुल १४-५-२-२ जग्गा विशिष्ट व्यक्तिहरूको निवास परिसर विस्तार गर्ने भन्नेव्यहोरा सहितको प्रस्ताव भौतिक योजना तथा निर्माण मन्त्रालयले नेपाल सरकार (म.प.) मा मिति २०६६।१२।१९ गते पेश गरेकोमा मिति २०६६।१२।२९ गते मन्त्रिपरिषदको बैठकबाट उक्त प्रस्ताव बमोजिम गर्ने भनी निर्णय भएको।

सम्मानित सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसलामा कोहि कसैलाई मोही कायम नगरेको, मिति २०६६/१०/१०,च.नं. ९००९ को मालपोत कार्यालय, डिल्लीबजारबाट तत्कालीन प्र.मा.अ. प्रेम बहादुर खापुङबाट पत्राचार भएको सो पत्रमा सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम भएको जग्गा भनी कार्यालयको अभिलेख भन्दा फरक मोहीहरुको नामावली उल्लेख गरेको, भौतिक योजना तथा निर्माण मन्त्रालयको मिति २०६६।१२।१९ गतेको प्रस्तावमा उल्लेखित मोहीहरूको नामावली मालपोत कार्यालय डिल्लीबजारको च. नं. ९००९, मिति २०६६।१०।१० गतेको पत्रलाई आधार लिई तयार गरिएकोले सो प्रस्तावको अनुसूची १ मा फरक व्यहोराको झुठा नामहरु समावेश गरी कीर्ते गरेको, मालपोत कार्यालय, डिल्लीबजारबाट प्राप्त विवरणमा ९-८-१-१ रोपनी सरकारी जग्गा लुकाई २७-७-२-२ रोपनी मात्र देखाएको, यसरी म.प. मा गलत तथा झुठो व्यहोराको प्रस्ताव तयार भई पेश गरिएको,

तत्कालिन भूमि सुधार तथा व्यवस्था मन्त्रालयको मिति २०६७/१/२७ को प्रस्तावको लागि टिप्पणी उप सचिव हुपेन्द्रमणी के.सी. बाट उठान भएकोमा, उक्त टिप्पणीमा सह सचिव जित बहादुर थापाले हस्ताक्षर गरी फाईल अगाडी बढिसकेपछि उप सचिव हुपेन्द्रमणी के.सी. को हस्तलिखतमा"मालपोत कार्यालय डिल्लीबजारबाट" थप गरी कीर्ते गरेको, यसरी म.प. मा झुठो व्यहोराको कीर्ते प्रस्ताव तयार भई पेश गरिएको, फलस्वरुप म.प. को निर्णय भुमिसुधार कार्यालयबाट कार्यान्वयन नभई मालपोत कार्यालयबाट हुन गएको,

नेपाल सरकार म.प.को मिति २०६६/१२/२९ र मिति २०६७।०१।३१ को निर्णयमा ५७० मिटर लामो ८ मिटर चौडा बाटो निर्माण गर्न आवश्यक क्षेत्रफल ८-१४-३-० रोपनी जग्गा मध्ये नेपाल सरकारको नाममा रहेको क्षेत्रफल १-११-२-० रोपनी र व्यक्तिको नाममा दर्ता रहेको क्षेत्रफल ७-३-१-१ रोपनी (सट्टाभर्ना नपाउने) गरी निर्णय भएको तर सोही म.प.को निर्णय संलग्न अनुसूची ३ मा उल्लेखित सरकारी जग्गाको जम्मा क्षेत्रफल ४-१४-२-३ रोपनी र व्यक्तिका जग्गाको क्षेत्रफल ४-०-०-२ रोपनी भई गराई अनुसूची ४ को बिपरित समेत हुने गरी प्रस्ताव तयार पार्ने कर्मचारीहरुले फरक तथा कीर्ते व्यहोराको कागजात तयार गरी संलग्न गरेको, यसरी म.प. मा गलत तथा झुठो व्यहोराको कीर्ते प्रस्ताव तयार भई पेश गरिएको,

म.प. मा निर्णयार्थ पेश भएको फरक व्यहोराको कीर्ते समेत भएको कागजात सहितको प्रस्तावहरु पेश भई नेपाल सरकार म.प. लाई तथ्यगत भ्रममा पारी नेपाल सरकार म.प. बाट निर्णय भई सोपश्चात म.प. को निर्णयहरु कार्यान्वयनको क्रममा उक्त म.प. को निर्णयहरुको अपव्याख्या र दुरुपयोग एवं विपरित समेत गरी बाबुराजा महर्जन समेत १२ जना  नक्कली मोहीहरूको नाममा जम्मा १३-१५-०-१ रोपनी जग्गा दर्ता गरी नेपाल सरकार समरजंग कम्पनीको सरकारी जग्गा हिनामिना तथा हानि नोक्सानी गरेको,

म.प. को निर्णयको कार्यान्वयनको क्रममा जग्गाहरु व्यक्ति विशेषको नाममा दा.खा. गर्दा समेत का.म.न.पा. वडा नं. ४ को च.नं. १९८२, मिति २०५९/३/१२ को जोतभोग सम्बन्धी सिफारिस पेश गरिएको, सो सिफारिस विचौलिया राम कुमार सुवेदीको मिलोमतोमाझुठो विवरण (रामकृष्ण महर्जनको हकमा झुठा रहेको) सहितको सिफारिस तयार भएको, सोहि क्रममा बेरितको (मिति उल्लेख नभएको र कर्मचारीको हस्ताक्षर नभएको) र फरक व्यहोरा उल्लेख गरी कीर्ते सर्जमिन मुचुल्का समेत प्रयोग भएको, गुठी तहसिल शाखाबाट भएको उक्त सर्जमिन मुचुल्कामा मोही, साँध सँधियारहरुलाई मोही छुट्याउने कागज हो भनी सहिछाप गराई अरु नै (पशुपति टिकिन्छा गुठीको जग्गा लगायतको) फरक व्यहोरा उल्लेख गरी कीर्ते गरेको,

बिचौलिया रामकुमार सुवेदीको हस्तलिखतमा तयार भएको मोही भनिएका व्यक्तिहरुको निवेदनमा अन्य ब्यक्तिको हकमा समेत जग्गा माग दाबी लिईएको र उक्त निवेदनहरु समेतमा "मालपोत कार्यालयको मिति २०६६/१०/१०,च.नं. ९००९ को पत्र,म.प. को मिति २०६६/१२/२९ को निर्णय, सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को  फैसला समेतबाट हामीलाई मोही कायम गरेको हुँदा म.प. को निर्णय बमोजिम जग्गाधनी प्रमाण पूर्जा पाउँ"भनी झुठा र फरक व्यहोराको विवरण उल्लेख भएको,

म.प.को निर्णयहरु कार्यान्वयनको क्रममा मालपोत कार्यालय, डिल्लीबजारको मि.नं. ५५ को टिप्पणी र आदेश खण्डमा समेत  व्यहोरा फरक पारिएको, कतिपय व्यहोरा (मोहीका नाम समेतका तथ्य) लुकाई उल्लेख नगरी व्यहोरा फरक पारी कीर्ते गरेको, तत्कालीन प्र.मा.अ. हरिकृष्ण तिमल्सिनाले जग्गा प्राप्त गर्न मोही भनिएका व्यक्तिहरु, बिचौलिया राम कुमार सुवेदी समेतको मिलेमतोमा यसरी फरक व्यहोरा तथा कीर्ते भएको कागजातहरुको आधारमा सरकारी तथा सार्वजनिक जग्गा हानी नोक्सानी गरेको,

म.प. मा निर्णयार्थ पेश भएको फरक व्यहोराको कीर्ते प्रस्तावहरु पेश भई नेपाल सरकार म.प. लाई तथ्यगत भ्रममा पारी नेपाल सरकार म.प. बाट निर्णय भई सके पश्चात म.प. को निर्णयहरु कार्यान्वयनको क्रममा उक्त म.प. को निर्णयहरुको अपव्याख्या र दुरुपयोग एवं विपरित समेत गरी म.प. को निर्णयको कार्यान्वयनको चरणमा बाटो निर्माण गर्दा व्यक्तिको जग्गाको क्षेत्रफल ३-१२-३-१ रोपनी र सरकारी जग्गाको क्षेत्रफल ४-१५-३-१ रोपनी गरी जम्मा ८-१२-२-२ रोपनी गएको देखिँदा बाटोको नाममा नेपाल सरकारको ४-१५-३-१ रोपनी हानी नोक्सानी हिनामिना भएको,

यसरी मिति २०६६/१२/२९ र २०६७/०१/३१ गते नेपाल सरकार मन्त्रिपरिषदको निर्णय पश्चात मालपोत कार्यालय, डिल्लीबजारले मिति २०६७/०८/१६ गते नेपाल सरकार, समरगंज कम्पनीको नाममा रहेको २७ रोपनी ७ आना सरकारी जग्गा मध्येबाट आधा जग्गा १३-१५-०-१ बाबुराजा महर्जन समेत १२ जना मोही भनिएका व्यक्तिहरुको नाममा दर्ता हुनासाथ ती जग्गाहरु १ महिनाभित्र विचौलिया शोभाकान्त ढकाल, राम कुमार सुवेदी तथा निजहरुको परिवारका सदस्यहरुको नाममा तुरुन्तै हक हस्तान्तरण भएको,

राम कुमार सुबेदीले मोही  भनिएका १३ जनाको तर्फबाट वारेस भई (माग बमोजिमका जग्गा साबिक २१ कित्ताको ३३-२-१-० रोपनीसँग भिडेको भनी नापीको पत्र र २०६९/६/१८ को म. प. को निर्णयमा उल्लेख रहेको) ४ फरक कार्यालयमा फरक मितिमा फरक निबेदन दिएको  देखिएको: १) मिति २०५९ र २०६० मा बिभिन्न मितिमा गुठी संस्थानमा पशुपती टिकिन्छा गुठीको जग्गा हो भनी मागदाबी गरी  छुट्टा छुट्टै निबेदन दिएको, २) मिति २०६६/९/१३ मा सम्मानित सर्बोच्च अदालतको फैसलाको सन्दर्भ जोडेर भूमिसुधार कार्यालयमा मोही कायम गरी पाउँ भनी निबेदन दिएको ३) मिति २०६७/१/३१ को मन्त्रिपरिषदको निर्णयपछि मालपोत कार्यालय डिल्लिबजारमा जग्गाधनी पूर्जा पाउँ भनी निबेदन दिएको र १२ जनाले १३-१५-०-१ रोपनी जमिन प्राप्त गरेका, ४) तिनै १३ जना मध्येका ४ जनाको हकमा बाँकी रहेको ४ कित्ता ३-१२-३-० रोपनी जग्गा पशुपती टिकिन्छा गुठीको मोही कायम गर्न मिति २०६९/११/१४ मा गुठी तहसिल कार्यालय कालमोचनमा निबेदन दिएको र ४-१४-३-२ रोपनी जग्गा द्वारिकामान  महर्जन लगायतले प्राप्त गरेका। यसर्थ,बिचौलिया राम कुमार सुबेदीले अनुकुलता हेरी एउटै जग्गा घरी गुठी र घरी मोहीको नाममा माग दाबी गर्नु, सबै समयमा एकै (२०६०/२/२० र मिति नभएको) को सर्जमिन मुचुल्का प्रयोग हुनु  र मिति २०६७/८/१६ मा (सरकारको) मोही, व्यक्तिसँग सट्टापट्टा  र बाटोको नाममा समेत गरी जम्मा ३३-६-२-० रोपनी गई (१४-१०-३-२.५ रोपनी को सट्टापट्टा प्राप्त भई) १८-१४-३-२  रोपनी जग्गा र सोही कित्ताहरुबाट बाँकि जग्गा ४-१४-३-२ रोपनी जग्गा मिति २०७०।१।२७ मा पशुपती टिकिन्छा गुठीको नाममा दर्ता हुनु तथा दुबै मितिमा गएका जग्गा लगतै वारेश बसेका निज रामकुमार सुवेदी लगायतको नाममा नामसारी हुनुले निज राम कुमार सुवेदीले सरकारी कर्मचारी समेतको मिलेमतो, प्रपञ्चमा कीर्ते र झुठो कागजात समेत बनाई पेश गरी नेपाल सरकारको जग्गा मोहीको नाममा प्राप्त गरी ठगी गरेको।

यसरी सरकारी/सार्वजनिक जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरूबाटै मन्त्रिपरिषदमा झूठो र किर्ते समेतको फरक व्यहोराको प्रस्ताव पेश गरी तथा म.प. लाई तथ्यगत भ्रममा पारी मन्त्रिपरिषदको निर्णय र बहाल रहेको कानूनको दुरुपयोग र अपव्याख्या एवं मन्त्रिपरिषदको निर्णय विपरित समेत गरी बदनियतपूर्वक राज्यलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी मोही हक र बाटोको नाममा समेत जम्मा १८-१४-३-२ रोपनी सरकारी जग्गा हिनामिना गरी हानीनोक्सानी पुर्याएको एवं बाँकी करिब १३ रोपनी जग्गा सट्टापट्टा भई भाटभटेनीडेभलपर्सप्रा.लि. समेतको नाममा गएकोले केन्द्रीय अनुसन्धान ब्यूरो, महाराजगंजको

छानबिन प्रतिवेदन समेतको आधारमा थप अनुसन्धान समेत गरी यसरी झुट्ठो व्यहोरा पारी कीर्ते समेत गरी म.प. मा निर्णयार्थ मिति २०६६।१२।१९ गते तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालयबाट पेश भएको प्रस्तावमा संलग्न तत्कालीन सचिव दीप बस्न्यात समेत संलग्न ६ जना व्यक्ति, मिति २०६७।०१।२७ गते तत्कालीन भूमि सुधार तथा व्यवस्था मन्त्रालयबाट पेश भएको प्रस्तावमा संलग्न सचिव छविराज पन्त समेत संलग्न ३ जना व्यक्ति, मिति २०६७।०३।२८ गते तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालयबाट वालुवाटारमा अवस्थित विशिष्ट व्यक्तिहरुको सरकारी निवास भवन परिसर क्षेत्रको जग्गा प्राप्त गरी विस्तार सम्बन्धी अनुसूची संसोधन गर्ने सम्बन्धी प्रस्ताव पेश गर्नमा संलग्न तत्कालीन सचिव दीप बस्न्यात समेत संलग्न ६ जना व्यक्ति, मालपोत कार्यालय, डिल्लीबजारबाट तयार भएको मि.नं. ५५ मा संलग्न प्र.मा.अ. हरिकृष्ण तिमल्सिना लगायत संलग्न ५ जना कर्मचारी, मालपोत कार्यालयको च.नं. ९००९, मिति २०६६/१०/१० को कीर्ते व्यहोराको पत्र काट्ने प्र.मा.अ. प्रेम बहादुर खापुङ सहित संलग्न २ जना अन्य कर्मचारी, बिचौलिया राम कुमार सुवेदी, जग्गा कारोबारी शोभाकान्त ढकाल, जग्गा प्राप्त गर्ने व्यक्ति बाबुराजा महर्जन लगायत १२ जना मोही समेतको मिलेमतो र योजनामा ललिता निवास क्याम्प भित्रको १८-१४-३-२ रोपनी सरकारी जग्गा व्यक्ति तथा बाटोको नाममा दर्ता गरी गराई र करिब १४ रोपनी जग्गा माधवी सुवेदी लगायत १३ जना र डि.एल.एफ. डेभलपर्स– १ को नाममा सट्टापट्टा स्वरुप दिई जम्मा ३३-६-२-० रोपनी जग्गा हिनामिना तथा हानीनोक्सानी गर्ने, गराउने बिरुद्व खण्डमा उल्लेखित प्रतिवादीहरुले योजना, प्रपञ्च गरी सँगठित रुपमा आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल हक पुग्नेलाई वा जसका जिम्मामा रहेको छ उसलाई ललाई फकाई जाल परिपञ्च गरी आफ्नो हक नभएको सम्पत्तिमा आफ्नो हक पुग्ने कीर्ते कागज बनाई पेश गरी झुक्याई झुठ्ठो कुरालाई सद्दे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो  हो भनी लिखत गरी बिक्रि ब्यबहार समेत गरी किर्ते तथा ठगी गरी आफु तथा अन्य बिभिन्न व्यक्तिहरुलाई गैह्रकानूनी र अनुचित फाईदा लिएको र सार्वजनिक र सरकारी सम्पति हिनामिना र हानी नोक्सानी पुर्याकिएको हुनाले  निज प्रतिवादीहरु तथा सो कार्यमा संलग्न निज प्रतिवादीहरुको बयान पोलबाट खुल्ने तथा अनुसन्धानबाट खुल्न आउने अन्य ब्यक्तिहरु समेतले साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम सजायँ गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम, साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १,७, ९ र १२ नं. तथा हाल प्रचलित मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद -२५, लिखत सम्बन्धी कसूरको दफा २७६ बमोजिम तथाअन्य प्रचलित कानून बमोजिम कारबाही गरी ऐ. ऐन बमोजिम बिगो बमोजिमको क्षतिपुर्ति समेत दिलाई भराई पाउँ भन्ने  समेत व्यहोराको मिति २०७६।१०।२७ गतेको समरजंग कम्पनीमा कार्यरत ऐ. कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरी दरखास्त ।

**घ) मुकुन्द प्रसाद पन्तको जाहेरी दर्खास्त (पशुपती टिकिन्छा गुठी २०६९):**

ललिता निवास क्याम्प भित्रको जग्गा भीम शमशेरले लालमोहरबाट प्राप्त गर्दा “वि.सं. १९८७ माघ २९ गतेका दिन मेदवन्दी भए बमोजिमको वालुवाटारको चकलावन्दी भित्रको साँधको साविक खेत २६० रोपनी १ आना १२ पैसा ३ दामको भएकोमा हालको नापजाँच गर्दा २८७ रोपनी ५ आना ८ पैसा २ दाम ८ जवाको यकै चकला भएको देखिएको हुँदा यस भित्र तेज नरसिंह महर्जन देखि जितमान घले आदी गरी ३८ जना व्यक्तिको

बिर्ताको जग्गा पनि पर्न गएको र क्याम्प भित्र परी एकछत्त भईसकेको'' उल्लेख भएकोले उक्त जग्गामा गुठी तथा मोही नभएको, साथै उक्त लालमोहरमा टिकिन्छा गुठी समेत उल्लेख भएको नदेखिएको,

तत्कालीन श्री ५ को सरकारले मिति २०२१।०८।१५ गते निर्णय गरी जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम ललिता निवास क्याम्प समेतको जग्गा (२९९ रोपनी ९ आना ३ पैसा) मध्ये सुवर्ण शमशेर र कञ्चन शमशेरको भाग १४ रोपनी ११ आना बाहेक बाँकी २८४ रोपनी १४ आना ३ पैसा जग्गा समेतको घर लगायत सम्पूर्ण संरचना सार्वजनिक कामको निमित्त आवश्यक भएकोले ऐ. ऐन बमोजिम राज्यबाट उचित क्षतिपूर्ती दिई अधिग्रहण गरेको,

जग्गा प्राप्ति ऐन, २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया  कायम नरही जग्गा श्री ५ को सरकारको हुनेछ भन्ने कानूनी व्यवस्था रहेको, पहिलो नापी र दोस्रो नापीमा जग्गा कमाउने जोताहा किसानहरुले समेत टिकिन्छा गुठीको जग्गा हो भनी पहिचान गर्न नसकेको अवस्थामा ललिता निवास क्याम्प भित्र कुनै पनि गुठीको जग्गा नरहेको, जग्गा प्राप्ती ऐन, २०३४ को दफा २३ को उपदफा २ र ३ बमोजिम ''जग्गाको स्वामित्व सरेको मितिदेखी नै उक्त जग्गाको लगत कट्टा भएको मानिनेछ'' भन्ने व्यवस्था भएबाट सरकारी लगतमा जनिएका अघिल्ला ब्यहोरा सबै स्वत: कट्टा भएको हुँदा उक्त जग्गामा कोही मोही तथा गुठी नभएको प्रष्ट भएको,

अधिग्रहण गरिएको जग्गा समरजंग कम्पनीको संरक्षणमा राखिएकोमा उक्त जग्गा कमाउने जोताहा किसानहरु ५७ जनाको निवेदन अनुसार राज्यलाई आवश्यक नपरे सम्मको लागी मोहीयानी हक कायम नहुने गरी कमाउन दिने र समरजंग कम्पनीले अन्य जग्गाहरु सरह उक्त जग्गाको कुत बुझ्नु भनीभूमि सुधार मन्त्रालयबाट लेखि आएको पत्रलाई उल्लेख गरी बागमती अञ्चलाधीशको कार्यालयबाट मिति २०२३।०६।२३ गते समरजंग कम्पनीलाई पत्रादेश भएको,

वि.सं. २०५९ सालमा निवेदक मोही भनिएका व्यक्तिहरुको तर्फबाट वारेस राम कुमार सुवेदीले उक्त जग्गाहरू पशुपति टिकिन्छा गुठीको लगतबाट भिड्ने जग्गा हो भनी मागदावी सहित निबेदन दिएकोमा मोही भनिएका व्यक्तिहरूलाई टिकिन्छा गुठीको बारेमा केही जानकारी नभएको, मोही भनिएका मानिसहरूलाई आफ्नो नाममा जग्गा आएको र आफ्नो नामबाट जग्गा गएको भन्ने जानाकरी समेत नभएको, २०६९ सालतिर राम कुमार सुवेदीले नै मोहीहरूलाई तपाईहरूको जग्गा केही गुठीमा रहेछ भन्ने जानकारी दिएको भनी खुलाईदिएको केन्द्रीय अनुसन्धान व्यूरोको छानविन प्रतिवेदनबाट देखिएकोले मिति २०५९/०७/०५ समेत को निबेदन ब्यहोरा झूठो रहेको देखिएको,

उक्त निवेदनहरु पश्चात गुठी संस्थान तहसिल तथा शाखा कार्यालयबाट भएको बेरितको सर्जमिन मुचुल्काको सम्बन्धमा गुठी संस्थान तहसिल कार्यालयको २०६० सालको सर्जमिन मुचुल्कामा उल्लेख भएको टिकिन्छा गुठीको सम्बन्धमा निवेदकहरूलाई नै कुनै जानकारी नभएको कुरा निवेदकहरूले केन्द्रीय अनुसन्धान व्यूरोको छानविन समितिलाई खुलाईदिएको प्रतिवेदनबाट देखिएको, सर्जमिनमा रोहवरमा बस्ने वडा सचिव शिवजी भट्टराईले समेत आफूलाइ टिकिन्छा गुठीको सम्बन्धमा केही थाहा नभएको, तत्कालीन समयमा निवेदकहरुले दिएको निवेदनमा उल्लेखित जग्गा उनीहरूले नै जोतकमोद गरी आएको भन्ने बुझेर मात्र रोहवरमा बसिदिएको भन्ने कागज गरीदिएको देखिएबाट समेतबाट उक्त सर्जमिन मुचुल्का झूठो र कीर्ते रहेको,

गुठी संस्थान तहसिल शाखा कार्यालय २०६९/११/२० को टिप्पणी निर्णय र मालपोत कार्यालयको निर्णयमा गुठी संस्थान तहसिल शाखा कार्यालयले आफ्नो निर्णयमा सम्मानित सर्वोच्च अदालतको २०६४

सालको निर्णय लाई आधार लिएको र सोहिलाई मालपोत कार्यालयको निर्णयमा आधार लिएको, गुठी तहसिलले सर्वोच्च अदालतको उक्त निर्णयलाई आधारका रुपमा लिएको (झुठो कीर्ते ब्यहोरा) र निवेदकहरूको नाममा दावी भएका जग्गा दर्ता सम्बन्धमा सर्वोच्च अदालतले सम्मानित अख्तियार दुरुपयोग अनुसन्धानको निर्णय बदर गर्नु बाहेक मोही कायम गर्ने सम्बन्धमा केही बोलेको नदेखिएको,सुवर्ण शमशेरका हकदार सुनीति राणा, शैलजा राणा र रुक्म शमशेरले मिति २०६०।०८।११ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा गरी दिएको भनिएको कागजको सम्बन्धमा, उक्त कागज गुठी केन्द्रीय कार्यालयमा नभई बत्तिसपुतली स्थित भाउजु शैलजा राणाको घरमा गरेको र आफ्नो ब्यहोरा सो नभई फरक परेको भनी रूक्म शमशेर राणाले मिति २०७६/९/२३ गते केन्द्रीय अनुसन्धान व्यूरोद्वारा गठित छानबिन समिति समक्ष खुलाई कागज गरी दिएको प्रतिवेदनबाट देखिएको, सो कागजमा सम्बन्धित कर्मचारीले सही नगरेको, साथै कागजमा संस्थानको छाप समेत नरहेको, गुठी जग्गा दर्ता सम्बन्धी कारवाही गर्ने काम शाखा कार्यालयको भएकोमा केन्द्रीय कार्यालयले गराएको, सुरु निवेदन समेत केन्द्रीय कार्यालयमा दिएको; आदिबाट उक्त कागज बेरित, फरक ब्यहोराको र कीर्ते देखिएको,

निवेदकहरूले गरेको निवेदनमा मलीकुली खेत र असैगाल ललिता निवास क्याम्पभित्रको जग्गासँग लगत भिड्छ भनीगुठी संस्थान तहसिल शाखाको पत्र भनी भूमि सुधार मन्त्रालयले उठाएको टिप्पणीमा उल्लेख भएको सम्बन्धमा असैगाल र मलिकुली खेत भनिएकोमा ११९१ र ११९४ को रसिदमा असैगाल खेत लेखिएको तर १९६३ सालको टिकिन्छा गुठीको लगतमा असैगाल षेतका मोही नित्यान श्रेष्ठ छुस्याबहाल लेखिएको, श्रेष्ठ दावी गर्ने मोहीहरूका पुर्खा नभएको र छुस्याबहाल उनीहरूको ठेगाना पनि नभएको,मलिकुली खेत बालुवाटार क्षेत्रमा पर्छ भन्ने केही प्रमाण कतैबाट खुल्न नआएको, निवेदकहरू, सिफारिस गर्ने वडा सचिवले समेतले टिकिन्छा गुठीको सम्बन्धमा केही थाहा नभएको भन्ने कागज गरीदिएको, १९८७ सालको लालमोहरबाट पनि उक्त स्थानमा पहिला कुनै गुठी रहेको भए पनि एक छत्र भैसकेको (गुठी टुटेको) भन्ने देखिन आएको, २०२१ सालमा राजपत्रमा प्रकाशित अधिग्रहणको सूचना, २०२३ सालमा अंचलाधीश कार्यालयले समरजंग कम्पनीलाई लेखेको पत्र आदिबाट पनि ललिता निवास क्षेत्रमा टिकिञ्चा गुठी रहेको भन्ने तथ्य स्थापित हुन नआएको हुँदा "मलीकुली खेत र असैगाल खेत ललिता निवास क्याम्पभित्रको जग्गासँग लगत भिड्छ" भन्ने गुठी संस्थान तहसिल तथा शाखा कार्यालयको ब्यहोरा झूठो र कीर्ते रहेको,

गुठी संस्थान केन्द्रीय कार्यालयका तत्कालीन प्रशासक बलीराम प्रसाद साह तेलीले मिति २०६९।१०।५ गते गरेको निर्णयको सम्बन्धमा, उक्त निर्णय गर्दा अप्रमाणित राणाहरूको तर्फबाट पेश भएको कागज र दावी लिइएका जग्गासँग सम्बन्धित नरहेको ११९१ र ११९४ को रसिद र समरजंग कम्पनीको गैरजिम्मेवार र झूठो पत्र समेतलाई आधारको रुपमा उल्लेख गरेको,

समरजंग कम्पनीले गुठी संस्थानबाट सोधिएका जग्गाहरूको सम्बन्धमा अभिलेख नदेखिएकोले त्यहीँ कार्यालयको रेकर्ड हेरी आवश्यक कारवाही गर्न हुन भनी मिति २०५९/०४/१० र २०६०।०४।०९ मा पत्र पठाएको सम्बन्धमा,अर्जुन भण्डारीको हस्ताक्षर भई गएको उक्त जवाफ कार्यालयको अभिलेखभन्दा फरक सरकारी जग्गा हानीनोक्सानी गर्ने, गराउने मनसायले लेखिएको,अर्जुन भण्डारी बिचौलिया रामकुमार सुवेदीको गलत प्रभाव तथा प्रलोभनमा परी राम कुमार सुवेदीले गरीदिएको खेस्रामा उल्लेखित च.नं. समेत एउटै राखी तथा गुठी संस्थानले सार्बजनिक सूचना जारी गर्दा समेत दावी गर्न नगई मौन बसेकोबाट समरजंगको जग्गा गुठीको नाममा दर्ता भई व्यक्तिको नाममा मोही कायम हुन गएको देखिएको,

गुठी संस्थान केन्द्रीय कार्यालयबाट टिकिन्छा गुठीको नाममा दर्ता गर्ने कारवाहीको क्रममा गुठी संस्थानबाट भूमि सुधार मन्त्रालयलाई उक्त जग्गा सम्बन्धमा आफ्नो धारणा व्यक्त गर्ने क्रममा उक्त जग्गाहरू गुठी संस्थान ऐनको दफा ३९ बमोजिम नभई छुट जग्गा दर्ता अन्तर्गत दर्ता हुनु पर्ने भन्ने जवाफ पठाएको देखिन्छ र सो कुरालाई भूमि सुधार मन्त्रालयले सो जग्गा दर्ता सम्बन्धी उठाएको टिप्पणीमा समेत उल्लेख गरेको छ। मन्त्री परिषदमा ती जग्गा दर्ता सम्बन्धी प्रस्ताव पेश हुँदा जग्गा कुन प्रकृया अन्तर्गत दर्ता हुने भन्ने तोकेको पाईदैन र मन्त्रिपरिषदबाट पनि त्यसरी निर्णय भएको पाईदैन। तर गुठी संस्थानका प्रशासकले सो जग्गा गुठीको नाममा दर्ता गर्ने भनी गुठी संस्थान ऐनको दफा ३९ बमोजिम निर्णय गरेको देखिन्छ। टिकिन्छा गुठीको नाममा दर्ता भएका जग्गाहरू पहिले गुठीको नाममा दर्ता कायम रहेको अवस्था नरहेको, २०४२ सालमा धर्म प्रसाद गौतमले नेपाल सरकार गुठीको नाममा गएको भनी गैर कानूनी रूपमा श्रेस्तामा जनाएको बिषयमा समेत मालपोत विभागको निर्णयवाट सो व्यहोरा गलत भएको भन्ने पत्राचार भईसकेको र श्री र को सरकार समरजंग कम्पनीको नाम श्रेस्तामा जनिए तापनि श्री ५ को सरकारको नाममा दर्ता प्रमाणित भई नसकेको कारण उक्त जग्गाको प्रकृति हेर्दा गुठी संस्थान ऐनको दफा ३९ अन्तर्गत निर्णय हुनु पर्ने नदेखिने,

सर्बेक्षक घमन कुमार कार्कीको प्रतिबेदन बमोजिम नापी कार्यालयको मिति २०६९।१२।५ को पत्रको सम्बन्धमा, साविक वडा नं २३ का कित्ता नं २२,३१,७३,३५ का जग्गाहरु हाल साविकमा भिडाई मालपोत कार्यालयलाई लेखेको उक्त पत्रमा"उक्त स्थानमा फिल्ड चेक गर्दा सरकारी सार्वजनिक जग्गा नघुसेको र बाटो तथा सार्वजनिक उपभोगमा नरहेको"भनी उल्लेख भएकोमा उक्त पत्रमा साविक भिडाई पठाइएका कि. नं. हरू ३१४ र २९५ बाटो रहेको तथा ती दुई कित्ता मध्ये कि. नं. २९५ व्यक्तिको नाममा दर्ता समेत भएको पाइएकोले साविक भिडेको भन्ने उक्त प्रतिबेदन र साविक भिडाई पठाइएको पत्रको व्यहोरा झूटो र कीर्ते रहेको,

भूमिसुधार कार्यालयको मिति २०७०।०१।०८ को निर्णय (उप-सचिव भेष बहादुर कार्की समेतको राय टिप्पणी) को सम्बन्धमा, गुठी संस्थानको मिति २०६९।१०।५ को निर्णयमा मोही कायम गर्ने सम्बन्धी निर्णय नभएको र गुठी संस्थानलाई मोही कायम गर्ने अख्तियारी समेत नभएको अवस्थामा भूमि सुधार कार्यालयले गरेको निर्णयमा गुठी संस्थानको उक्त निर्णयले मोही कायम गरेको लगायत व्यहोरा उल्लेख गरी उक्त कार्यालयले टिकिन्छा गुठीको नाममा दर्ता गर्न भनी निर्णय गरेका कित्ता भन्दा बढी नयाँ नापीको कि. नं. २५९,२३२,३१४ मा समेत मोही कायम हुने निर्णय गरेकोले उक्त निर्णयबाट नेपाल सरकारको नाममा रहेको जग्गामा मोही कायम हुन गई हानीनोक्सानी भएको देखिएको,

निबेदकको २०६९/११/१४ को निबेदन, नापीको २०६९/११/१७ र २०६९/१२/५ को पत्र मालपोत कार्यालयको २०७०।०१।१२को निर्णय को सम्बन्धमा, किता नं २५९,२३२,२८०,३१४ को समेत साविक कित्ताहरूमा भिडेको भनी गुठी तहसिल कार्यालयमा झूठा दावी ब्यहोराको निवेदन परेको। नापी कार्यालयले तहसिल कार्यालयलाई लेखेको पत्रमा २५९,२३२,२८०,३१४ भिडेको भनी उल्लेख भएको। तहसिल कार्यालयबाट मालपोत कार्यालयलाई सोहि अनुसार निर्णय गरी पठाएकोमा मालपोत कार्यालयले पुन: सोधेकोमा नापी कार्यालयले किता नं २५९, २३२, ३१४ को भिडेको भनी पठाएको, मालपोत कार्यालयबाट २०७०।१।१२ मा किता नं २५९, २३२ टिकिन्छा गुठीको नाममा दर्ता गर्ने निर्णय गरेको, टिकिन्छा गुठीको नाममा श्रेस्तामा जनाउँदा कित्ता नं. २७८ को ०-११-२-२ को ठाउँमा १-११-२-२ उल्लेख गरेको। यसरीगुठी संस्थानको निर्णय र मन्त्रिपरिषदको निर्णयमा समेत उल्लेख नभएको कित्ताहरू पछिबाट निवेदन, नापीको पत्र र

मा.पो. का.को निर्णय र श्रेष्तामा गलत र फरक व्यहोरा पारी कीर्ते गरी गुठीको नाममा गई व्यक्तिको नाममा मोही कायम भएको,

मन्त्रिपरिषदको निर्णयको आधारमा जम्मा ३ रोपनी १२ आना ३ पैसा जग्गा पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गर्ने भनी मिति २०६९।१०।०५ गते गुठी संस्थानका प्रशासक बलिराम प्रसाद साह तेलीले निर्णय गरेको भएता पनि मालपोत कार्यालय, डिल्लीबजारबाट ४-१४-३-२ रोपनी जग्गा नेपाल सरकार समरजङ्ग कम्पनीको दर्ता स्रेष्ता सच्याई गुठीमा दर्ता गरेको देखिन्छ, यसरी निर्णयहरु भन्दा बाहिर गएर १-२-०-२ रोपनी बढि जग्गा टिकिन्छा गुठीको नाममा गरीदिएबाट कर्मचारीहरुले नेपाल सरकारलाई हानीनोक्सानी पुऱ्याएको कुरा प्रष्ट हुन्छ,

नेपाल सरकार मन्त्रिपरिषदमा पेश भएको प्रस्तावमा समरजंग कम्पनीको नाममा दर्ता भएको जग्गाको दर्ता सच्याई श्री ५ को सरकारको नाममा दर्ता गर्ने भन्ने उल्लेख भएको देखिन्छ। तर उक्त जग्गाको श्रेस्तामा जग्गाधनीको नाममा श्री ५ को सरकार समरजंग कम्पनी नभई श्री ५ को सरकार मात्र उल्लेख भएको र जग्गाधनीको महलमा श्री ५ को सरकार उल्लेख भए तापनि दर्ता प्रमाणित भई सकेको अवस्था नरहेको, गुठी संस्थान र मालपोत कार्यालय समेतको विभिन्न मितिको निर्णयहरुबाट साविक श्री ५ को सरकार समरजंग कम्पनीको नामको दर्ता श्रेस्ता खारेज गरी पशुपती टिकिन्छा गुठीको नाममा दर्ता कायम भई मोही भनिएका व्यक्तिहरु देव नारायण महर्जन समेत ५ जनाको नाममा मोही कायम भई टिकिन्छा गुठीको नाममा जग्गा दर्ता भएको लगतै करिव १० दिन भित्र उक्त जग्गा सोभा कान्त ढकाल, राम कुमार सुबेदी, माधवी सुबेदी र उमा कुमारी ढकालको नाममा गएको।

यसरी माथि उल्लेखित व्यहोराहरूबाट श्री ५ को सरकारको नाममा रहेको जग्गा टिकिन्छा गुठीको नाममा दर्ता भई व्यक्तिको नाममा मोही कायम गरी श्री ५ को सरकारलाई हानीनोक्सानी पुर्याउने कामको सिलसिलामा २०६०।०८।११ मा गुठी संस्थान केन्द्रीय कार्यालय कागज गरेको भनी घरैमा झुटो कागज गर्ने रूक्म शमशेर राणा समेतका व्यक्तिहरू सो कार्यमा संलग्न गुठी संस्थान केन्द्रीय कार्यालयका कर्मचारीहरू, मालपोत कार्यालयको निर्णय विपरित २०७०।१।१७ गते नयाँ नापीको वडा नं ४ कि. नं. ७८ को क्षेत्रफल उल्लेख गर्दा ०-११-२-२ लाई सच्याई १-११-२-२ उल्लेख गर्ने मालपोतका कर्मचारी तथा सोही अनुसार राम कुमार सुवेदी लगायतका व्यक्तिको नाममा नामसारी गर्ने कर्मचारीहरू, मोही भनिएका द्वारिकामान महर्जन, आफै वारेश वसेको जग्गामा कीर्ते भएको क्षेत्रफल बमोजिमको जग्गा पास गराई लिने राम कुमार सुवेदी र उनका सहयोगी सोभा कान्त ढकाल, गलत मुचुल्का बनाई झुक्याइ हस्ताक्षर गर्ने गुठी संस्थान तहसिल शाखाका डबलसिंह ठगुन्ना लगायतका कर्मचारीहरू, सो मुचुल्कामा हस्ताक्षर गर्ने मचाबाबु प्रजापति लगायतका १५ जना व्यक्तिहरू, सर्जमिन नगरी सिफारिस गर्ने तत्कालीन वडाध्यक्ष रत्न प्रसाद जोशी, आफूले सर्जमिन नै नगरी गुठी संस्थान तहसिल शाखा कार्यालयको कीर्ते सर्जमिनको आधारमा (निजले केन्द्रीय अनुसन्धान व्यूरोमा गठित छानविन समितिमा गरेको कागजका आधारमा) सिफारिस गर्ने वडा नं ४ का तत्कालीन सचिव शिवजी भट्टराईले कीर्ते तथा ठगी गरी सरकारी जग्गा हिनामिना हानिनोक्सानी गरी निजहरुलाई साविक मुलुकी ऐन, २०२० को कीर्ते कागजको महलको १,२, ९ र १२ नं. मा परिभाषित कसूर र अपराध भएको हुँदा ऐ. ऐनको ९ नं. र १२ नं. बमोजिम सजायँ मागदावी सहित र उक्त कसूरले हालको कानूनी व्यवस्थामा समेत निरन्तरता पाई मुलूकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा १ र २ मा परिभाषित कसूर अपराध भई सोही ऐनको दफा २७६ को उपदफा ३ को देहाय ग बमोजिम सजायँ र साविकको मुलुकी ऐन, २०२० ठगीको

महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम सजायँ गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम समेतको कसूरमा कारवाही हुन अनुरोध गर्दछु।

त्यस्तै समरजंग कम्पनीका तत्कालीन कार्यालय प्रमुखहरू अर्जुन पसाद भण्डारी र रमेश कुमार पोखरेल, गलत टिप्पणी उठाउने गुठी संस्थान तहसिल कार्यालयमा कार्यरत जय प्रसाद रेग्मी लगायतका कर्मचारीहरू, गुठी संस्थान केन्द्रीय कार्यरत तत्कालीन प्रशासक दिलिप कुमार भट्ट लगायतका कर्मचारीहरु, टिप्पणी सदर गर्ने २०६३ सालका विभागीय मन्त्री प्रभु नारायण चौधरी र २०६९ सालका विभागीय मन्त्री चन्द्रदेव जोशी, भूमि सुधार मन्त्रालयमा टिप्पणी आदेश गर्ने २०६३ सालका सचिव रविन्द्रमान जोशी लगायतका कर्मचारीहरू र २०६९ सालका सचिव दिनेशहरि अधिकारी लगायतका कर्मचारीहरू, २०६९ सालमा गुठी संस्थान केन्द्रीय कार्यालयमा टिप्पणी आदेश र निर्णय गर्ने गुठी प्रशासक बलिरामप्रसाद साह लगायतका कर्मचारीहरू, जग्गा प्राप्त गर्ने देव नारायण महर्जन लगायतका मोहीहरू, लगत लगत भिडाई पत्राचार गर्ने तत्कालीन नापी अधिकृत मग्नु दत्त, घमन कुमार कार्की लगायतका कर्मचारीहरू, गलत मोही कायम गर्न निर्णय गर्ने भूमि सुधार कार्यालयका तत्कालीन उप-सचिव भेष बहादुर कार्की लगायतका कर्मचारीहरू, मन्त्रिपरिषदले निर्णय गरे भन्दा बढी कित्ता जग्गा गुठीको नाममा निर्णय गर्न टिप्पणी र आदेश गर्ने मालपोत कार्यालयमा कार्यरत तत्कालीन प्रमुख मालपोत अधिकृत दिनेश प्रसाद शर्मा लगायतका कर्मचारीहरू, टिकिन्छा गुठीको नाममा दर्ता भएको जग्गाको मोही हक दर्ता भएको दश दिन भित्रै आफ्नो नाममा दर्ता गराइ लिने माधवी सुवेदी र उमा कमारी ढकाल लगायतका व्यक्तिहरुले योजना प्रपञ्च गरी सँगठित रुपमा आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल फरक व्यहोराको कागज समेत बनाई पेश गरी झुक्याई झुठ्ठो कुरालाई सद्दे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो हो भनी लिखत गरी बिक्रि ब्यहार गरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु तथा सो कार्यमा सलग्न निज प्रतिवादीहरुको बयान पोलबाट खुल्ने तथा अनुसन्धानबाट पत्ता लाग्न आउने अन्य ब्यक्तिहरु समेतले साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम सजायँ गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम समेतको कसूरमा तथा साबिक मुलुकी ऐन कीर्ते कागजको १ नं. २ नं., ७ नं.,९ नं. र १२ नं. बमोजिमको कसूरलाई हालको मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ ले निरन्तरता दिएकोले सोही दफा २७६ को उपदफा (३) र अन्य प्रचलित कानून बमोजिम कारबाही गरी बिगो बमोजिमको क्षतिपुर्ति समेत दिलाई भराई पाउँ साथै उक्त जग्गा हाल को कसको नाममा छ अनुसन्धानबाट खुलाई निजहरुलाई समेत कानून बमोजिम गरी पाउँ भनी यो जाहेरी दरखास्त लेखि पेश गरेको छु भन्ने समेत ब्यहोराको मिति २०७६।१०।२७ गतेको समरजंग कम्पनीमा कार्यरत ऐ. कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरी दरखास्त।

ङ) **<u>सँगठीत कसूर मुद्दामा समेत अनुसन्धान गरी पाउ भन्ने ब्यहोराको प्रहरी प्रतिवेदन:</u>**

उपरोक्त सम्बन्धमा मुकुन्द प्रसाद पन्तको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी डबल सिंह ठगुन्ना समेत भएको निज प्रतिवादी समेतले तत्कालिन श्री ५ को सरकारबाट रितपूर्वक मुआब्जा दिई अधिग्रहण गरिएको

काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी कर्मचारीहरुबाटै झुठो र कीर्ते समेतको फरक ब्यहोराको प्रस्ताव पेश गरी मन्त्रिपरिषदको निर्णय र बहाल रहेको कानूनको दुरुपयोग गरी बदनियत पूर्वक राज्यलाई हानी हुने र ब्यक्ति बिशेषलाई फाइदा हुने गरी मोही भनिएका ब्यक्तिहरु, पशुपति टिकिन्छा गुठी समेतको नाममा जग्गा दर्ता गरी सार्वनजिक र सरकारी जग्गा हिनामिना र हानि नोक्सानी पुऱ्याएको भन्ने सरकारी छाप दस्तखत कीर्ते/ लिखत सम्बन्धी कसूर मुद्दामा अनुसन्धानको क्रममा जाहेरवाला मुकुन्द प्रसाद पन्तले दिएको साविकको मुलुकी ऐन किर्ते कागजको महल तथा हाल प्रचलितमुलुकी अपराध संहिता, २०७४ को लिखत सम्बन्धी कसूर अपराध मुद्दाको अनुसन्धानको सिलसिलामासंकलन भएका जाहेरी दरखास्तहरु, प्रहरी प्रतिबेदनहरु,भूमि सुधार तथा मालपोत कार्यालय काठमाडौं समेतका बिभिन्न कार्यालयहरुबाट प्राप्त पत्र, गुठी संस्थान केन्द्रीय कर्यालय समेतबाट प्राप्त भएका बिभिन्न समयमा उठान भएका टिप्पणी र आदेश समेतबाट निम्न तथ्य र आधारहरु समेत देखिएको र सोबाट प्रतिवादीहरु घमन कुमार कार्की समेतले गैह्र कानूनी तवरले अर्थोपार्जन गर्ने आपराधिक सँगठन बनाई सँगठित भई आपराधिक समूहका सदस्य बीच अपराध गर्नका लागि पिरामिड शैलीमा तहगत जिम्मेवारीहरु बाँडफाँड गर्दैनेपाल सरकारको नाममा रहेको काठमाडौं जिल्ला, बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा लिने खाने नियतलेकीर्ते गरीतीन वा तीन भन्दा वढी व्यक्तिहरुको अपराधिक समूह बनी **सँगठित अपराध निवारण ऐन, २०७० को परिभाषित कसूर** गरेको खुल्न देखिन आएको, मुलुकी ऐनमा सामूहिक रुपमा भएका अपराधमा संलग्न अभियुक्तहरुले समान रुपमा सजायको भागीदार हुनु पर्ने कानूनको सर्वमान्य सिद्धान्त अन्तर्गत रहेको सोही व्यवस्थालाई मूर्त रुप **मुलुकी अपराध संहिता, २०७४ को दफा ३१ ले समेत निरन्तरता दिएको**, सोही कुराविशेष ऐनको रुपमा प्रचलित सँगठित अपराध निवारण ऐन, २०७० मा समेत कसैले आपराधिक समूहको लाभको लागि,आपराधिक समूहको निर्देशनमा, आपराधिक समूहको तर्फबाट, आपराधिक समूहसँग मिलेर वाआपराधिक समूहको संस्थापक सदस्य वा सदस्य भई जानी जानी कुनै गम्भीर अपराध गरेमा सँगठित अपराध गरेकोमानिने छ भन्ने व्यवस्था रहेको छ। प्रस्तुत कसूरको वारदातको अपराध कार्यविधि (Modus Operandi) हेर्दा प्रतिवादीहरु धेरै जनाको समूह भई सामूहिक रुपमा गरेको कार्यबाट अपराधले पूर्णता पाएको देखिंदा सरकारी छाप दस्तखत किर्ते मुद्दा दर्ता भई अनुसन्धान भई रहेकोहुँदा प्रस्तुत मुद्दाको पक्राउ प्रतिवादी घमन कुमार कार्की समेतका सबै प्रतिवादी तथा निजहरुको बयानपोलबाट खुल्न आउने प्रतिवादीहरु समेतले विगत देखि हाल सम्म समूहमा नै रही विभिन्न काल खण्डमा सँगठित रुपमा कसूर गरेको खुल्न आएकोले निजहरुलाई सँगठित अपराध निवारण ऐन, २०७० बमोजिमको मुद्दामा समेत अनुसन्धान तथा कारवाही गर्नुपर्ने देखिंएको भन्ने व्यहोराको प्रहरी प्रतिवेदन।

**<u>अनुसन्धान तथा तहकिकातको क्रममा संकलित आधार प्रमाणहरु:</u>**

१. ललिता निवास क्याम्प भित्रको जग्गा भीम शमशेरले लालमोहरबाट प्राप्त गर्दा "वि.सं. १९८७ माघ २९ गतेका दिन मेदवन्दी भए बमोजिमको वालुवाटारको चकलावन्दी भित्रको साँधको साविक खेत २६० रोपनी १ आना १२ पैसा ३ दामको भएकोमा हालको नापजाँच गर्दा २८७ रोपनी ५ आना ८ पैसा २ दाम ८ जवाको यकै चकला भएको देखिएको हुँदा यस भित्र तेज नरसिंह महर्जन देखि जितमान घले आदी गरी ३८ जना व्यक्तिको बिर्ताको जग्गा र तलेज्यूगुठी, देवाली गुठी, ईन्द्रजात्रा गुठी सानुगुठीको जग्गाहरु पनि पर्न गएको र क्याम्प भित्र

परी एकछत्त भईसकेको" उल्लेख भएकोले उक्त जग्गामा गुठी तथा मोही नभएको, साथै उक्त लालमोहरमा टिकिन्छा गुठी समेत उल्लेख भएको नदेखिएको,

२. तत्कालीन श्री ५ को सरकारले मिति २०२१।०८।१५ गते निर्णय गरी जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम ललिता निवास क्याम्प समेतको जग्गा (२९९ रोपनी ९ आना ३ पैसा) मध्ये सुवर्ण शमशेर र कञ्चन शमशेरकोभाग १४ रोपनी ११ आना बाहेक बाँकी २८४ रोपनी १४ आना ३ पैसा जग्गा समेतको घर लगायत सम्पूर्ण संरचना सार्वजनिक कामको निमित्त आवश्यक भएकोले ऐ. ऐन बमोजिम राज्यबाट उचित क्षतिपूर्ती दिई अधिग्रहण गरेको,

३. जग्गा प्राप्ति ऐन, २०१८ को दफा १६ मा मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुनेछ भन्ने व्यवस्था रहेको, पहिलो नापी र दोस्रो नापीमा जग्गा कमाउने जोताहा किसानहरुले समेत टिकिन्छा गुठीको जग्गा हो भनी पहिचान गर्न नसकेको अवस्थामा ललिता निवास क्याम्प भित्र कुनै पनि गुठीको जग्गा नरहेको, जग्गा प्राप्ती ऐन, २०३४ को दफा २३ को उपदफा २ र ३ बमोजिम "जग्गाको स्वामित्व सरेको मितिदेखी नै उक्त जग्गाको लगत कट्टा भएको मानिनेछ" भन्ने व्यवस्था भएबाट सरकारी लगतमा जनिएका अघिल्ला ब्यहोरा सबै स्वत: कट्टा भएको हुँदा उक्त जग्गामा कोही मोही तथा गुठी नभएको प्रष्ट भएको,

४. अधिग्रहण गरिएको जग्गा समरजंग कम्पनीको संरक्षणमा राखिएकोमा उक्त जग्गा कमाउने जोताहा किसानहरु ५७ जनाको निवेदन अनुसार राज्यलाई आवश्यकनपरेसम्मको लागी मोहीयानी हक कायम नहुने गरी कमाउन दिने र समरजंग कम्पनीले अन्य जग्गाहरु सरह उक्त जग्गाको कुत बुझ्नु भनीभूमि सुधार मन्त्रालयबाट लेखि आएको पत्रलाई उल्लेख गरी बागमती अञ्चलाधीशको कार्यालयबाट मिति २०२३।०६।२३ गते समरजंग कम्पनीलाई पत्रादेश भएको,

५. वि.सं. २०५९ सालमा निवेदक मोही भनिएका व्यक्तिहरुको तर्फबाट वारेस राम कुमार सुवेदीले उक्त जग्गाहरू पशुपति टिकिन्छा गुठीको लगतबाट भिड्ने जग्गा हो भनी मागदावी सहित निबेदन दिएकोमा मोही भनिएका व्यक्तिहरूलाई टिकिन्छा गुठीको बारेमा केही जानकारी नभएको, मोही भनिएका मानिसहरूलाई आफ्नो नाममा जग्गा आएको र आफ्नो नामबाट जग्गा गएको भन्ने जानकारी समेत नभएको, २०६९ सालतिर राम कुमार सुवेदीले नै मोहीहरूलाई तपाईहरूको जग्गा केही गुठीमा रहेछ भन्ने जानकारी दिएको भनी खुलाईदिएको भन्ने समेतको व्यहोरा केन्द्रीय अनुसन्धान व्यूरोको छानविन प्रतिवेदनबाट देखिएकोले मिति २०५९/०७/०५ समेत को निबेदन ब्यहोरा झूठो रहेको देखिएको,

६. उक्त निवेदनहरु पश्चातगुठी संस्थान तहसिल तथा शाखा कार्यालयबाट भएको बेरितको सर्जमिन मुचुल्काको सम्बन्धमा गुठी संस्थान तहसिल कार्यालयको २०६० सालको सर्जमिन मुचुल्कामा उल्लेख भएको टिकिन्छा गुठीको सम्बन्धमा निवेदकहरूलाई नै कुनै जानकारी नभएको कुरा निवेदकहरूले केन्द्रीय अनुसन्धान व्यूरोको छानविन समितिलाई खुलाईदिएको प्रतिवेदनबाट देखिएको, सर्जमिनमा रोहवरमा बस्ने वडा सचिव शिवजी भट्टराईले समेत आफूलाइ टिकिन्छा गुठीको सम्बन्धमा केही थाहा नभएको, तत्कालीन समयमा निवेदकहरुले दिएको निवेदनमा उल्लेखित जग्गा उनीहरूले नै जोतकमोद गरी आएको भन्ने बुझेर मात्र रोहवरमा बसिदिएको भन्ने कागज गरीदिएको देखिएबाट समेतबाट उक्त सर्जमिन मुचुल्का झूठो र कीर्ते रहेको,

७. गुठी संस्थान तहसिल शाखा कार्यालय २०६९/११/२० को टिप्पणी निर्णय र मालपोत कार्यालयको निर्णयमा गुठी संस्थान तहसिल शाखा कार्यालयले आफ्नो निर्णयमा सम्मानित सर्वोच्च अदालतको २०६४/११/३०

गतेको फैसला लाई आधार लिएको रसोहिलाई मालपोत कार्यालयको निर्णयमा आधार लिएको, गुठी तहसिलले सर्वोच्च अदालतको उक्त निर्णयलाई आधारका रुपमा लिएको (झुठो कीर्ते ब्यहोरा) र निवेदकहरूको नाममा दावी भएका जग्गा दर्ता सम्बन्धमा सर्वोच्च अदालतले सम्मानित अख्तियार दुरुपयोग अनुसन्धानको निर्णय बदर गर्नु  बाहेक मोही कायम गर्ने सम्बन्धमा केही बोलेको नदेखिएको,सुवर्ण शमशेरका हकदार सुनीति राणा, शैलजा राणा र रुक्म शमशेरले मिति २०६०।०८।११ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा गरी दिएको भनिएको कागजको सम्बन्धमा, उक्त कागज गुठी केन्द्रीय कार्यालयमा नभई बत्तिसपुतली स्थित भाउजु शैलजा राणाको घरमा गरेको र आफ्नो ब्यहोरा सो नभई फरक परेको भनी रूक्म शमशेर राणाले मिति २०७६/९/२३ गते केन्द्रीय अनुसन्धान व्यूरोद्वारा गठित छानबिन समिति समक्ष खुलाई कागज गरी दिएको प्रतिवेदनबाट देखिएको, सो कागजमा सम्बन्धित कर्मचारीले सही नगरेको, साथै कागजमा संस्थानको छाप समेत नरहेको, गुठी जग्गा दर्ता सम्बन्धी कारवाही गर्ने काम शाखा कार्यालयको भएकोमा केन्द्रीय कार्यालयले गराएको, सुरु निवेदन समेत केन्द्रीय कार्यालयमा दिएको; आदिबाट उक्त कागज बेरित, फरक ब्यहोराको र कीर्ते देखिएको,

८. निवेदकहरूले गरेको निवेदनमा मलीकुली खेत र असैगाल ललिता निवास क्याम्पभित्रको जग्गासँग लगत भिड्छ भनीगुठी संस्थान तहसिल शाखाको पत्र भनी भूमि सुधार मन्त्रालयले उठाएको टिप्पणीमा उल्लेख भएको सम्बन्धमा असैगाल र मलिकुली खेत भनिएकोमा ११९१ र ११९४ को रसिदमा असैगाल खेत लेखिएको तर १९६३ सालको टिकिन्छा गुठीको लगतमा असैगाल षेतका मोही नित्यान श्रेष्ठ छुस्याबहाल लेखिएको, श्रेष्ठ दावी गर्ने मोहीहरूका पुर्खा नभएको र छुस्याबहाल उनीहरूको ठेगाना पनि नभएको,मलिकुली खेत बालुवाटार क्षेत्रमा पर्छ भन्ने केही प्रमाण कतैबाट खुल्न नआएको, निवेदकहरू, सिफारिस गर्ने वडा सचिवले समेतले टिकिन्छा गुठीको सम्बन्धमा केही थाहा नभएको भन्ने कागज गरीदिएको, १९८७ सालको लालमोहरबाट पनि उक्त स्थानमा पहिला कुनै गुठी रहेको भए पनि एक छत्र भैसकेको (गुठी टुटेको) भन्ने देखिन आएको, २०२१ सालमा राजपत्रमा प्रकाशित अधिग्रहणको सूचना, २०२३ सालमा अंचलाधीश कार्यालयले समरजंग कम्पनीलाई लेखेको पत्र आदिबाट पनि ललिता निवास क्षेत्रमा टिकिञ्चा गुठी रहेको भन्ने तथ्य स्थापित हुन नआएको हुँदा ''मलीकुली खेत र असैगाल खेत ललिता निवास क्याम्पभित्रको जग्गासँग लगत भिड्छ'' भन्ने गुठी संस्थान तहसिल तथा शाखा कार्यालयको ब्यहोरा झूठो र कीर्ते रहेको,

९. गुठी संस्थान केन्द्रीय कार्यालयका तत्कालीन प्रशासक बलीराम प्रसाद साह तेलीले मिति २०६९।१०।५ गते गरेको निर्णयको सम्बन्धमा,उक्त निर्णय गर्दा अप्रमाणित राणाहरूको तर्फबाट पेश भएको कागज र दावी लिइएका जग्गासँग सम्बन्धित नरहेको ११९१ र ११९४ को रसिद र समरजंग कम्पनीको गैरजिम्मेवार र झूठो पत्र समेतलाई आधारको रुपमा उल्लेख गरेको,

१०. समरजंग कम्पनीले गुठी संस्थानबाट सोधिएका जग्गाहरूको सम्बन्धमा अभिलेख नदेखिएकोले त्यहीँ कार्यालयको रेकर्ड हेरी आवश्यक कारवाही गर्न हुन भनी मिति २०५९/०४/१० र २०६०।०४।०९ मा पत्र पठाएको सम्बन्धमा,अर्जुन भण्डारीको हस्ताक्षर भई गएको उक्त जवाफ कार्यालयको अभिलेखभन्दा फरक सरकारी जग्गा हानीनोक्सानी गर्ने, गराउने मनसायले लेखिएको,अर्जुन भण्डारी बिचौलिया रामकुमार सुवेदीको गलत प्रभाव तथा प्रलोभनमा परी राम कुमार सुवेदीले गरीदिएको खेस्रामा उल्लेखित च.नं. समेत एउटै राखी तथा गुठी संस्थानले सार्बजनिक सूचना जारी गर्दा समेत दावी गर्न नगई  मौन बसेकोबाट समरजंगको जग्गा गुठीको नाममा दर्ता भई व्यक्तिको नाममा मोही कायम हुन गएको देखिएको,

११. गुठी संस्थान केन्द्रीय कार्यालयबाट टिकिन्छा गुठीको नाममा दर्ता गर्ने कारवाहीको क्रममा गुठी संस्थानबाट भूमि सुधार मन्त्रालयलाई उक्त जग्गा सम्बन्धमा आफ्नो धारणा व्यक्त गर्ने क्रममा उक्त जग्गाहरू गुठी संस्थान ऐनको दफा ३९ बमोजिम नभई छुट जग्गा दर्ता अन्तर्गत दर्ता हुनु पर्ने भन्ने जवाफ पठाएको देखिन्छ र सो कुरालाई भूमि सुधार मन्त्रालयले सो जग्गा दर्ता सम्बन्धी उठाएको टिप्पणीमा समेत उल्लेख गरेको छ। मन्त्री परिषदमा ती जग्गा दर्ता सम्बन्धी प्रस्ताव पेश हुँदा जग्गा कुन प्रकृया अन्तर्गत दर्ता हुने भन्ने तोकेको पाईदैन र मन्त्रिपरिषदबाट पनि त्यसरी निर्णय भएको पाईदैन। तर गुठी संस्थानका प्रशासकले सो जग्गा गुठीको नाममा दर्ता गर्ने भनी गुठी संस्थान ऐनको दफा ३९ बमोजिम निर्णय गरेको देखिन्छ। टिकिन्छा गुठीको नाममा दर्ता भएका जग्गाहरू पहिले गुठीको नाममा दर्ता कायम रहेको अवस्था नरहेको, २०४२ सालमा धर्म प्रसाद गौतमले नेपाल सरकार गुठीको नाममा गएको भनी गैर कानूनी रूपमा श्रेस्तामा जनाएको बिषयमा समेत मालपोत विभागको निर्णयवाट सो व्यहोरा गलत भएको भन्ने पत्राचार भईसकेको र श्री र को सरकार समरजंग कम्पनीको नाम श्रेस्तामा जनिए तापनि श्री ५ को सरकारको नाममा दर्ता प्रमाणित भई नसकेको कारण उक्त जग्गाको प्रकृति हेर्दा गुठी संस्थान ऐनको दफा ३९ अन्तर्गत निर्णय हुनु पर्ने नदेखिने।

१२. सर्बेक्षक घमन कुमार कार्कीको प्रतिबेदन बमोजिमनापी कार्यालयको मिति २०६९।१२।५ को पत्रको सम्बन्धमा,साविक वडा नं २३ का कित्ता नं २२,३१,७३, ३५ का जग्गाहरु हाल साविकमा भिडाई मालपोत कार्यालयलाई लेखेको उक्त पत्रमा"उक्त स्थानमा फिल्ड चेक गर्दा सरकारी सार्वजनिक जग्गा नघुसेको र बाटो तथा सार्वजनिक उपभोगमा नरहेको"भनी उल्लेख भएकोमा उक्त पत्रमा साविक भिडाई पठाइएका कि. नं. हरू ३१४ र २९५ बाटो रहेको तथा ती दुई कित्ता मध्ये कि. नं. २९५ व्यक्तिको नाममा दर्ता समेत भएकोपाइएकोले साविक भिडेको भन्ने उक्त प्रतिबेदन र साविक भिडाई पठाइएको पत्रको व्यहोरा झूटो र कीर्ते रहेको,

१३. भूमिसुधार कार्यालयको मिति २०७०।०१।०८ को निर्णय (उप-सचिव भेष बहादुर कार्की समेतको राय टिप्पणी) को सम्बन्धमा, गुठी संस्थानको मिति २०६९।१०।५ को निर्णयमा मोही कायम गर्ने सम्बन्धी निर्णय नभएको र गुठी संस्थानलाई मोही कायम गर्ने अख्तियारी समेत नभएको अवस्थामाभूमि सुधार कार्यालयले गरेको निर्णयमा गुठी संस्थानको उक्त निर्णयले मोही कायम गरेको लगायत व्यहोरा उल्लेख गरी उक्त कार्यालयले टिकिन्छा गुठीको नाममा दर्ता गर्न भनी निर्णय गरेका कित्ता भन्दा बढी नयाँ नापीको कि. नं. २५९,२३२,३१४ मा समेत मोही कायम हुने निर्णय गरेकोले उक्त निर्णयबाट नेपाल सरकारको नाममा रहेको जग्गामा मोही कायम हुन गई हानीनोक्सानी भएको देखिएको,

१४. निबेदकको २०६९/११/१४ को निबेदन, नापीको २०६९/११/१७ र २०६९/१२/५ को पत्र मालपोत कार्यालयको २०७०।०१।१२को निर्णय को सम्बन्धमा,किता नं २५९,२३२,२८०,३१४ को समेत साविक कित्ताहरूमा भिडेको भनी गुठी तहसिल कार्यालयमा झूठा दावी ब्यहोराको निवेदन परेको। नापी कार्यालयले तहसिल कार्यालयलाई लेखेको पत्रमा २५९,२३२,२८०,३१४ भिडेको भनी उल्लेख भएको। तहसिल कार्यालयबाट मालपोत कार्यालयलाई सोहि अनुसार निर्णय गरी पठाएकोमा मालपोत कार्यालयले पुन: सोधेकोमा नापी कार्यालयले किता नं २५९, २३२, ३१४ को भिडेको भनी पठाएको, मालपोत कार्यालयबाट २०७०।१।१२ मा किता नं २५९, २३२ टिकिन्छा गुठीको नाममा दर्ता गर्ने निर्णय गरेको, टिकिन्छा गुठीको नाममा श्रेस्तामा जनाउँदा कित्ता नं. २७८ को ०-११-२-२ को ठाउँमा १-११-२-२ उल्लेख गरेको। यसरीगुठी संस्थानको निर्णय र मन्त्रिपरिषदको निर्णयमा समेत उल्लेख नभएको कित्ताहरू पछिबाट निवेदन, नापीको पत्र र

मा.पो. का.को निर्णय र श्रेष्तामा गलत र फरक व्यहोरा पारी कीर्ते गरी गुठीको नाममा गई व्यक्तिको नाममा मोही कायम भएको,

१५. मन्त्रिपरिषदको निर्णयको आधारमा जम्मा ३ रोपनी १२ आना ३ पैसा जग्गा पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गर्ने भनी मिति २०६९।१०।०५ गते गुठी संस्थानका प्रशासक बलिराम प्रसाद साह तेलीले निर्णय गरेको भएता पनि मालपोत कार्यालय, डिल्लीबजारबाट ४-१४-३-२ रोपनी जग्गा नेपाल सरकार समरजङ्ग कम्पनीको दर्ता स्रेष्ता सच्च्याई गुठीमा दर्ता गरेको देखिन्छ, यसरी निर्णयहरु भन्दा बाहिर गएर १-२-०-२ रोपनी बढि जग्गा टिकिन्छा गुठीको नाममा गरीदिएबाट कर्मचारीहरुले नेपाल सरकारलाई हानीनोक्सानी पुर्याएको कुरा प्रष्ट हुन्छ,

१६. नेपाल सरकार मन्त्रिपरिषदमा पेश भएको प्रस्तावमा समरजंग कम्पनीको नाममा दर्ता भएको जग्गाको दर्ता सच्च्याई श्री ५ को सरकारको नाममा दर्ता गर्ने भन्ने उल्लेख भएको देखिन्छ । तर उक्त जग्गाको श्रेस्तामा जग्गाधनीको नाममा श्री ५ को सरकार समरजंग कम्पनी नभई श्री ५ को सरकार मात्र उल्लेख भएको र जग्गाधनीको महलमा श्री ५ को सरकार उल्लेख भए तापनि दर्ता प्रमाणित भई सकेको अवस्था नरहेको,गुठी संस्थान र मालपोत कार्यालय समेतको विभिन्न मितिको निर्णयहरुबाट साविक श्री ५ को सरकार समरजंग कम्पनीको नामको दर्ता श्रेस्ता खारेज गरी पशुपती टिकिन्छा गुठीको नाममा दर्ता कायम भई मोही भनिएका व्यक्तिहरु देव नारायण महर्जन समेत ५ जनाको नाममा मोही कायम भई टिकिन्छा गुठीको नाममा जग्गा दर्ता भएकोलगतै करिव १० दिन भित्र उक्त जग्गा सोभा कान्त ढकाल, राम कुमार सुबेदी, माधवी सुबेदी र उमा कुमारी ढकालको नाममा गएको।

यसरी माथि उल्लेखित व्यहोराहरूबाट श्री ५ को सरकारको नाममा रहेको जग्गा टिकिन्छा गुठीको नाममा दर्ता भई व्यक्तिको नाममा मोही कायम गरी श्री ५ को सरकारलाई हानीनोक्सानी पुर्याउने कामको सिलसिलामा २०६०।०८।११ मा गुठी संस्थान केन्द्रीय कार्यालय कागज गरेको भनी घरैमा झुटो कागज गर्ने रूक्म शमशेर राणा समेतका व्यक्तिहरू सो कार्यमा संलग्न गुठी संस्थान केन्द्रीय कार्यालयका कर्मचारीहरू, मालपोत कार्यालयको निर्णय विपरित २०७०।१।१७ गते नयाँ नापीको वडा नं ४ कि. नं. ७८ को क्षेत्रफल उल्लेख गर्दा ०-११-२-२ लाई सच्याई १-११-२-२ उल्लेख गर्ने मालपोतका कर्मचारी तथा सोही अनुसार राम कुमार सुवेदीलगायतका व्यक्तिको नाममा नामसारी गर्ने कर्मचारीहरू, मोही भनिएका द्वारिकामान महर्जन, आफै वारेश वसेको जग्गामा कीर्ते भएको क्षेत्रफल बमोजिमको जग्गा पास गराई लिने राम कुमार सुवेदी र उनका सहयोगी सोभा कान्त ढकाल, गलत मुचुल्का बनाई झुक्याइ हस्ताक्षर गर्ने गुठी संस्थान तहसिल शाखाका डबलसिंह ठगुन्ना लगायतका कर्मचारीहरू, सो मुचुल्कामा हस्ताक्षर गर्ने मचाबाबु प्रजापति लगायतका १५ जना व्यक्तिहरू, सर्जमिन नगरी सिफारिस गर्ने तत्कालीन वडाध्यक्ष रत्न प्रसाद जोशी, आफूले सर्जमिन नै नगरी गुठी संस्थान तहसिल शाखा कार्यालयको कीर्ते सर्जमिनको आधारमा (निजले केन्द्रीय अनुसन्धान व्यूरोमा गठित छानविन समितिमा गरेको कागजका आधारमा) सिफारिस गर्ने वडा नं ४ का तत्कालीन सचिव शिवजी भट्टराईले कीर्ते तथा ठगी गरी सरकारी जग्गा हिनामिना हानिनोक्सानी गरी निजहरुलाई साविक मुलुकी ऐन, २०२० को कीर्ते कागजको महलको १,२, ९ र १२ नं. मा परिभाषित कसूर र अपराध भएको हुँदा ऐ. ऐनको ९ नं. र १२ नं. बमोजिम सजायँ मागदावी सहित र उक्त कसूरले हालको कानूनी व्यवस्थामा समेत निरन्तरता पाई मुलूकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा १ र २ मा परिभाषित कसूर अपराध भई सोही ऐनको दफा २७६ को उपदफा ३ को देहाय ग बमोजिम सजायँ र साविकको मुलुकी ऐन, २०२० ठगीको

महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम सजायँ गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम समेतको कसूरमा कारवाही गरीपाउँ भन्ने जाहेरी दरखास्त।

त्यस्तै समरजंग कम्पनीका तत्कालीन कार्यालय प्रमुखहरू अर्जुन प्रसाद भण्डारी र रमेश कुमार पोखरेल, गलत टिप्पणी उठाउने गुठी संस्थान तहसिल कार्यालयमा कार्यरत जय प्रसाद रेग्मी लगायतका कर्मचारीहरू, गुठी संस्थान केन्द्रीय कार्यरत तत्कालीन प्रशासक दिलिप कुमार भट्ट लगायतका कर्मचारीहरु, टिप्पणी सदर गर्ने २०६३ सालका विभागीय मन्त्री प्रभु नारायण चौधरी र २०६९ सालका विभागीय मन्त्री चन्द्रदेव जोशी, भूमि सुधार मन्त्रालयमा टिप्पणी आदेश गर्ने २०६३ सालका सचिव रविन्द्रमान जोशी लगायतका कर्मचारीहरू र २०६९ सालका सचिव दिनेशहरि अधिकारी लगायतका कर्मचारीहरू, २०६९ सालमा गुठी संस्थान केन्द्रीय कार्यालयमा टिप्पणी आदेश र निर्णय गर्ने गुठी प्रशासक बलिरामप्रसाद साह लगायतका कर्मचारीहरू, जग्गा प्राप्त गर्ने देव नारायण महर्जन लगायतका मोहीहरू, लगत लगत भिडाई पत्राचार गर्ने तत्कालीन नापी अधिकृत मग्नु दत्त, घमन कुमार कार्की लगायतका कर्मचारीहरू, गलत मोही कायम गर्न निर्णय गर्ने भूमि सुधार कार्यालयका तत्कालीन उप-सचिव भेष बहादुर कार्की लगायतका कर्मचारीहरू, मन्त्रिपरिषदले निर्णय गरे भन्दा बढी कित्ता जग्गा गुठीको नाममा निर्णय गर्न टिप्पणी र आदेश गर्ने मालपोत कार्यालयमा कार्यरत तत्कालीन प्रमुख मालपोत अधिकृत दिनेश प्रसाद शर्मा लगायतका कर्मचारीहरू, टिकिन्छा गुठीको नाममा दर्ता भएको जग्गाको मोही हक दर्ता भएको दश दिन भित्रै आफ्नो नाममा दर्ता गराइ लिने माधवी सुवेदी र उमा कमारी ढकाल लगायतका व्यक्तिहरुले योजना प्रपञ्च गरी सँगठित रुपमा आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल फरक व्यहोराको कागज समेत बनाई पेश गरी झुक्याई झुट्टो कुरालाई सद्दे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो हो भनी लिखत गरी बिक्रि ब्यहार गरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु तथा सो कार्यमा सलग्न निज प्रतिवादीहरुको बयान पोलबाट खुल्ने तथा अनुसन्धानबाट पत्ता लाग्न आउने अन्य ब्यक्तिहरु समेतले साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम सजायँ गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम समेतको कसूरमा तथा साबिक मुलुकी ऐन कीर्ते कागजको १ नं. २ नं.,७ नं.,९ नं. र १२ नं. बमोजिको कसूरलाई हालको मुलकी अपराध संहिता, २०७४ को दफा २७६ ले निरन्तरता दिएकोले सोही दफा २७६ को उपदफा (३) र अन्य प्रचलित कानून बमोजिम कारबाही गरी बिगो बमोजिमको क्षतिपुर्ति समेत दिलाई भराई पाउँ साथै उक्त जग्गा हाल को कसको नाममा छ अनुसन्धानबाट खुलाई निजहरुलाई समेत कानून बमोजिम गरी पाउँ भनी यो जाहेरी दरखास्त लेखि पेश गरेको छु भन्ने समेत ब्यहोराको मिति २०७६।१०।२७ गतेको समरजंग कम्पनीमा कार्यरत ऐ. कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरी दरखास्त।

ललिता निवास क्याम्पभित्रको उक्त जग्गामा मोही कोही नभएता पनि भूमिसुधार कार्यालय, काठमाडौंमा सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ भनी नक्कली मोहीहरु श्री कृष्ण महर्जन समेतले मिति २०६६।०९।१३ गते निवेदन दिएको, सम्मानित सर्बोच्च

अदालतको उक्त फैसलामा कोहि कसैलाई मोही कायम नगरेको भएता पनि निबेदनमा “सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ” भन्ने झूठो तथा कीर्ते ब्यहोरा उल्लेख गरेको,

विशिष्ट व्यक्तिहरूको निवास परिसर विस्तार सम्बन्धमा भौतिक योजना तथा निर्माण मन्त्रालयबाट आर्थिक वर्ष २०६५/०६६ मा गुरु योजना तयार भई नेपाल सरकारको २७-७-२-२ रोपनी सरकारी जग्गामा मोहीको भाग कट्टा गरी प्राप्त हुने १३-६-२-०, राजकुलो र बाटोबाट प्राप्त हुने ०-१५-०-२ समेत गरी कुल १४-५-२-२ जग्गा विशिष्ट व्यक्तिहरूको निवास परिसर विस्तार गर्ने भन्नेव्यहोरा सहितको प्रस्ताव भौतिक योजना तथा निर्माण मन्त्रालयले नेपाल सरकार (म.प.) मा मिति २०६६।१२।१९ गते पेश गरेकोमा मिति २०६६।१२।२९ गते मन्त्रिपरिषदको बैठकबाट उक्त प्रस्ताव बमोजिम गर्ने भनी निर्णय भएको।

सम्मानित सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसलामा कोहि कसैलाई मोही कायम नगरेको, मिति २०६६/१०/१०,च.नं. ९००९ को मालपोत कार्यालय, डिल्लीबजारबाट तत्कालीन प्र.मा.अ. प्रेम बहादुर खापुङबाट पत्राचार भएको सो पत्रमा सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम भएको जग्गा भनी कार्यालयको अभिलेख भन्दा फरक मोहीहरुको नामावली उल्लेख गरेको, भौतिक योजना तथा निर्माण मन्त्रालयको मिति २०६६।१२।१९ गतेको प्रस्तावमा उल्लेखित मोहीहरूको नामावली मालपोत कार्यालय डिल्लीबजारको च. नं. ९००९, मिति २०६६।१०।१० गतेको पत्रलाई आधार लिई तयार गरिएकोले सो प्रस्तावको अनुसूची १ मा फरक व्यहोराको झुठा नामहरु समावेश गरी कीर्ते गरेको, मालपोत कार्यालय, डिल्लीबजारबाट प्राप्त विवरणमा ९-८-१-१ रोपनी सरकारी जग्गा लुकाई २७-७-२-२ रोपनी मात्र देखाएको, यसरी म.प. मा गलत तथा झुठो व्यहोराको प्रस्ताव तयार भई पेश गरिएको,

तत्कालिन भूमि सुधार तथा व्यवस्था मन्त्रालयको मिति २०६७/१/२७ को प्रस्तावको लागि टिप्पणी उप सचिव हुपेन्द्रमणी के.सी. बाट उठान भएकोमा, उक्त टिप्पणीमा सह सचिव जित बहादुर थापाले हस्ताक्षर गरी फाईल अगाडी बढिसकेपछि उप सचिव हुपेन्द्रमणी के.सी. को हस्तलिखतमा “मालपोत कार्यालय डिल्लीबजारबाट” थप गरी कीर्ते गरेको, यसरी म.प. मा झुठो व्यहोराको कीर्ते प्रस्ताव तयार भई पेश गरिएको, फलस्वरुप म.प. को निर्णय भुमिसुधार कार्यालयबाट कार्यान्वयन नभई मालपोत कार्यालयबाट हुन गएको,

नेपाल सरकार म.प.को मिति २०६६/१२/२९ र मिति २०६७।०१।३१ को निर्णयमा ५७० मिटर लामो ८ मिटर चौडा बाटो निर्माण गर्न आवश्यक क्षेत्रफल ८-१४-३-० रोपनी जग्गा मध्ये नेपाल सरकारको नाममा रहेको क्षेत्रफल १-११-२-० रोपनी र व्यक्तिको नाममा दर्ता रहेको क्षेत्रफल ७-३-१-१ रोपनी (सट्टाभर्ना नपाउने) गरी निर्णय भएको तर सोही म.प.को निर्णय संलग्न अनुसूची ३ मा उल्लेखित सरकारी जग्गाको जम्मा क्षेत्रफल ४-१४-२-३ रोपनी र व्यक्तिका जग्गाको क्षेत्रफल ४-०-०-२ रोपनी भई गराई अनुसूची ४ को बिपरित समेत हुने गरी प्रस्ताव तयार पार्ने कर्मचारीहरुले फरक तथा कीर्ते व्यहोराको कागजात तयार गरी संलग्न गरेको, यसरी म.प. मा गलत तथा झुठो व्यहोराको कीर्ते प्रस्ताव तयार भई पेश गरिएको,

म.प. मा निर्णयार्थ पेश भएको फरक व्यहोराको कीर्ते समेत भएको कागजात सहितको प्रस्तावहरु पेश भई नेपाल सरकार म.प. लाई तथ्यगत भ्रममा पारी नेपाल सरकार म.प. बाट निर्णय भई सोपश्चात म.प. को निर्णयहरु कार्यान्वयनको क्रममा उक्त म.प. को निर्णयहरुको अपव्याख्या र दुरुपयोग एवं विपरित समेत गरी बाबुराजा महर्जन समेत १२ जना नक्कली मोहीहरूको नाममा जम्मा १३-१५-०-१ रोपनी जग्गा दर्ता गरी नेपाल सरकार समरजंग कम्पनीको सरकारी जग्गा हिनामिना तथा हानि नोक्सानी गरेको,

म.प. को निर्णयको कार्यान्वयनको क्रममा जग्गाहरु व्यक्ति विशेषको नाममा दा.खा. गर्दा समेत का.म.न.पा. वडा नं. ४ को च.नं. १९८२, मिति २०५९/३/१२ को जोतभोग सम्बन्धी सिफारिस पेश गरिएको, सो सिफारिस विचौलिया राम कुमार सुवेदीको मिलोमतोमाझुठो विवरण (रामकृष्ण महर्जनको हकमा झुठा रहेको) सहितको सिफारिस तयार भएको, सोहि क्रममा बेरितको (मिति उल्लेख नभएको र कर्मचारीको हस्ताक्षर नभएको) र फरक व्यहोरा उल्लेख गरी कीर्ते सर्जमिन मुचुल्का समेत प्रयोग भएको, गुठी तहसिल शाखाबाट भएको उक्त सर्जमिन मुचुल्कामा मोही, साँध सँधियारहरुलाई मोही छुट्याउने कागज हो भनी सहिछाप गराई अरु नै (पशुपति टिकिन्छा गुठीको जग्गा लगायतको) फरक व्यहोरा उल्लेख गरी कीर्ते गरेको,

बिचौलिया रामकुमार सुवेदीको हस्तलिखतमा तयार भएको मोही भनिएका व्यक्तिहरुको निवेदनमा अन्य ब्यक्तिको हकमा समेत जग्गा माग दाबी लिईएको र उक्त निवेदनहरु समेतमा "मालपोत कार्यालयको मिति २०६६/१०/१०,च.नं. ९००९ को पत्र,म.प. को मिति २०६६/१२/२९ को निर्णय, सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलासमेतबाट हामीलाई मोही कायम गरेको हुँदा म.प. को निर्णय बमोजिम जग्गाधनी प्रमाण पूर्जा पाउँ"भनी झुठा र फरक व्यहोराको विवरण उल्लेख भएको,

म.प.को निर्णयहरु कार्यान्वयनको क्रममा मालपोत कार्यालय, डिल्लीबजारकोमि.नं. ५५ को टिप्पणी र आदेश खण्डमा समेत व्यहोरा फरक पारिएको, कतिपय व्यहोरा (मोहीका नाम समेतका तथ्य) लुकाई उल्लेख नगरी व्यहोरा फरक पारी कीर्ते गरेको, तत्कालीन प्र.मा.अ. हरिकृष्ण तिमल्सिनाले जग्गा प्राप्त गर्न मोही भनिएका व्यक्तिहरु, बिचौलिया राम कुमार सुवेदी समेतको मिलेमतोमा यसरी फरक व्यहोरा तथा कीर्ते भएको कागजातहरुको आधारमा सरकारी तथा सार्वजनिक जग्गा हानी नोक्सानी गरेको,

म.प. मा निर्णयार्थ पेश भएको फरक व्यहोराको कीर्ते प्रस्तावहरु पेश भई नेपाल सरकार म.प. लाई तथ्यगत भ्रममा पारी नेपाल सरकार म.प. बाट निर्णय भई सके पश्चात म.प. को निर्णयहरु कार्यान्वयनको क्रममा उक्त म.प. को निर्णयहरुको अपव्याख्या र दुरुपयोग एवं विपरित समेत गरी म.प. को निर्णयको कार्यान्वयनको चरणमा बाटो निर्माण गर्दा व्यक्तिको जग्गाको क्षेत्रफल ३-१२-३-१ रोपनी र सरकारी जग्गाको क्षेत्रफल ४-१५-३-१ रोपनी गरी जम्मा ८-१२-२-२ रोपनी गएको देखिँदा बाटोको नाममा नेपाल सरकारको ४-१५-३-१ रोपनी हानी नोक्सानी हिनामिना भएको,

यसरी मिति २०६६/१२/२९ र२०६७/०१/३१ गते नेपाल सरकार मन्त्रिपरिषदको निर्णय पश्चात मालपोत कार्यालय, डिल्लीबजारले मिति २०६७/०८/१६ गते नेपाल सरकार, समरगंज कम्पनीको नाममा रहेको २७ रोपनी ७ आना सरकारी जग्गा मध्येबाट आधा जग्गा १३-१५-०-१ बाबुराजा महर्जन समेत १२ जना मोही भनिएका व्यक्तिहरुको नाममा दर्ता हुनासाथ ती जग्गाहरु १ महिनाभित्र विचौलिया शोभाकान्त ढकाल,राम कुमार सुवेदी तथा निजहरुको परिवारका सदस्यहरुको नाममा तुरुन्तै हक हस्तान्तरण भएको,राम कुमार सुबेदीले मोही भनिएका १३ जनाको तर्फबाट वारेस भई (माग बमोजिमका जग्गा साबिक २१ कित्ताको ३३-२-१-० रोपनीसँग भिडेको भनी नापीको पत्र र २०६९/६/१८ को म. प. को निर्णयमा उल्लेख रहेको) ४ फरक कार्यालयमा फरक मितिमा फरक निबेदन दिएको देखिएको: १) मिति २०५९ र २०६० मा बिभिन्न मितिमा गुठी संस्थानमा पशुपती टिकिन्छा गुठीको जग्गा हो भनी मागदाबी गरी छुट्टा छुट्टैनि बेदन दिएको, २) मिति २०६६/९/१३ मा सम्मानित सर्बोच्च अदालतको फैसलाको सन्दर्भ जोडेर भूमिसुधार कार्यालयमा मोही कायम गरी पाउँ भनी निबेदन दिएको ३) मिति २०६७/१/३१ को मन्त्रिपरिषदको निर्णयपछि मालपोत कार्यालय डिल्लिबजारमा जग्गाधनी पूर्जा पाउँ भनी निबेदन दिएको र १२ जनाले १३-१५-०-१ रोपनी जमिन प्राप्त गरेको,

४) तिनै १३ जना मध्येका ४ जनाको हकमा बाँकी रहेको ४ कित्ता ३-१२-३-० रोपनी जग्गा पशुपती टिकिन्छा गुठीको मोही कायम गर्न मिति २०६९/११/१४ मा गुठी तहसिल कार्यालय कालमोचनमा निबेदन दिएको र ४-१४-३-२ रोपनी जग्गा द्वारिकामान महर्जन लगायतले प्राप्त गरेका । यसर्थ,बिचौलिया राम कुमार सुबेदीले अनुकुलता हेरी एउटै जग्गा घरी गुठी र घरी मोहीको नाममा माग दाबी गर्नु, सबै समयमा एकै (२०६०/२/२० र मिति नभएको) सर्जमिन मुचुल्का प्रयोग हुनु र मिति २०६७/८/१६ मा (सरकारको) मोही, व्यक्तिसँग सट्टापट्टा र बाटोको नाममा समेत गरी जम्मा ३३-६-२-० रोपनी गई (१४-१०-३-२.५ रोपनी को सट्टापट्टा प्राप्त भई) १८-१४-३-२ रोपनी जग्गा र सोही कित्ताहरुबाट बाँकि जग्गा ४-१४-३-२ रोपनी जग्गा मिति २०७०।१।२७ मा पशुपती टिकिन्छा गुठीको नाममा दर्ता हुनु तथा दुबै मितिमा गएका जग्गा लगतै वारेश बसेका निज रामकुमार सुवेदी लगायतको नाममा नामसारी हुनुले निज राम कुमार सुवेदीले सरकारी कर्मचारी समेतको मिलेमतो, प्रपञ्चमा कीर्ते र झुठो कागजात समेत बनाई पेश गरी नेपाल सरकारको जग्गा मोहीको नाममा प्राप्त गरी सरकारी छाप दस्तखत किर्ते गरेको,

यसरी सरकारी/सार्वजनिक जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरूबाटै मन्त्रिपरिषदमा झूठो र किर्ते समेतको फरक व्यहोराको प्रस्ताव पेश गरी तथा म.प. लाई तथ्यगत भ्रममा पारी मन्त्रिपरिषदको निर्णय र बहाल रहेको कानूनको दुरुपयोग र अपव्याख्या एवं मन्त्रिपरिषदको निर्णय विपरित समेत गरी बदनियतपूर्वक राज्यलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी मोही हक र बाटोको नाममा समेत जम्मा १८-१४-३-२ रोपनी सरकारी जग्गा हिनामिना गरी हानीनोक्सानी पुर्याएको ।

१) प्रतिवादी घमन कुमार कार्की समेतले आफ्नो वा अरु कसैको लागि कुनै लाभ उठाउने नियतले सँगठित तबरले तहगत रुपमा सँगठित भई आपराधिक लाभ लिने नियतले कसूर गरेको देखिएको ।

२) प्रतिवादीहरुले आपराधिक समूहको बीचमा योजना सल्लाह भई नेपाल सरकारलाई हानी पुर्याउने नियतले जिम्मेवारहरु बाँडफाड गरी उक्त कसूर गरेको मिसिल संलग्न कागजातबाट देखिएको ।

३) आर्थिक लाभ लिने खाने भनी प्रतिवादीहरुले सँगठीत रुपमा पूर्व योजना वनाई अपराध गर्ने उद्देश्य र आशय गरे गराएको देखिन्छ ।

४) प्रतिवादीहरुले२०४९साल देखि बिभिन्न मितिमा पटक पटक कसूर सम्पन्न गर्न विभिन्न प्रयोग र प्रयत्न गरेको देखिन्छ

५) प्रतिवादीहरुले एकापसमा सँगठित भई “Omerta” a code of silence about criminal activity and a refusal to give evidence to the police.अपराधिक गतिविधिको बारेमा गोपनीयता राख्दै अति गोप्य रुपमा पेशेवर अपराधिको रुपमा विभिन्न समयमा नक्कल मोही खडा गर्ने, फरक तथा किर्ते व्यहोराको मुचुल्का खडा गर्ने गलत ब्यहोराको ।

६) टिप्पणी र आदेश खडा गर्ने सोबाट आपराधिक समूहका सदस्यहरुलाई परिचालन गरेको थप chain of custody स्थापित भएको छ ।

७) प्रतिवादीहरुले तहगत रुपमा कामको जिम्मेवारी बाँडफाँड गरी किर्ते कागजात तयार गरी बनाई प्रचलनमा ल्याईअर्थोपार्जन गर्न सकिने भएकोले आफ्नो दलाल एजेन्टहरु तथा आपराधिक समूहका सदस्यको सहयोगमा नक्कली मोही समेत छानेको (selection of victim) देखिएकोले यी प्रतिवादीहरुले अपराधिक समूहमा रही सँगठित तवरले कसूर अपराध गरेको प्रष्ट हुन आउछ ।

८) प्रतिवादीहरुका बीचमा नक्कली साक्षि खोजी गर्ने योजना भई मिसिल संलग्न रहेको पत्र कागजातहरु मध्ये बिभिन्न समयका मुचुल्का, टिप्पणी र आदेशनक्कली मोहीहरु खडा गर्ने बन्दोवस्तीको जिम्मा लिई आबश्यक बन्दोबस्ती मिलाई यी प्रतिवादीहरु आपराधिक समूहका सदस्यहरु परिचालन गरी कसूर अपराध गरेको खुल्न देखिन आएको निज प्रतिवादीहरु उपर आयोगका अनुसन्धान अधिकृत अच्यूत मणि न्यौपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेत भएको सरकारी जग्गा व्यक्तिका नाममा दर्ता सम्बन्धी मुद्दा विशेष अदालत, काठमाडौंमा दर्ता नं ०७६-CR-०२७० मा मिति २०७६/१०/२२ गते दर्ता भएको भन्ने सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोग, टंगाल, काठमाडौंको च नं ६५२०० मिति २०८०/०३/१७ गतेको मिसिल संलग्न पत्रबाट खुली आएको । त्यसै गरी वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेत १७५ जना भएको सार्वजनिक जग्गा गैर कानूनी रुपमा व्यक्ति तथा संस्था विशेषको नाममा कायम गरी हिनामिना गरी भ्रष्टाचार गरेको मुद्दा दर्ता नं ०७६-CR-०२७० भएको मुद्दा हाल यस अदालतमा विचाराधीन अवस्थामा रहेको भन्ने सम्मानित विशेष अदालत, बबरमहल, काठमाडौंको च नं ८१४२ मिति २०८०/०३/१७ गतेको मिसिल संलग्न पत्रबाट खुली आएको। केन्द्रीय अनुसन्धान ब्यूरोको च नं ४४१८ मिति २०७८/०९/२१ गतेको पत्रबाट लेखी आएका राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीहरु उपर सम्पत्ति शुद्धीकरण (मनी लाउण्डरिङ्ग) सम्बन्धी कसूरमा यस विभागको सूचना दर्ता नं २६९५/१३४-०७८-०७९ मिति २०७९/०३/१३ गते दर्ता भई प्रारम्भिक जाँच बुझको क्रममा रहेको भन्ने सम्पत्ति शुद्धीकरण अनुसन्धान विभाग, पुल्चोक, ललितपुरको च नं १९५७ मिति २०८०/०३/१७ गतेको मिसिल संलग्न पत्रबाट खुली आएकोले यी प्रतिवादीहरुले सँगठित अपराध निवारण ऐन, २०७० अनुसारको कसूर गरेको र निज प्रतिवादीहरुले गरेको कसूर अपराधको प्रकृति सामान्य अपराध भन्दा पृथक छ, बृहतयोजना र बिस्तारित तयारीका साथ प्रतिवादीहरुले फरक फरक भूमिकामा रही विगत देखि हालसम्म को विभिन्न काल खण्डमा सामूहिक रुपमा कसूर वारदात गरी उक्त नेपाल सरकारको नाममा रहेको जग्गा हालको समयसम्म पनि खरिद बिक्री गर्ने कसूरको निरन्तरता जारी नै राखेको देखिंदा उक्त कार्य सँगठित अपराधले परिभाषित गरेको कसूर अन्तर्गत नै पर्ने देखिएकोले हाल सम्मको अनुसन्धानबाट खुल्न आएका जाहेरी दरखास्त तथा प्रहरी प्रतिवेदनमा उल्लेख भएका प्रतिवादीहरु घमन कुमार कार्की समेतलाई सँगठित अपराध मुद्दामा समेत अनुसन्धान तथा कारवाही गरी पाउ भन्ने ब्यहोराको प्र.ना.उ. रुगम बहादुर कुँवर समेतको प्रहरी प्रतिवेदन।

**(च) अनुसन्धानबाट खुल्न आएको थप प्रतिवादीहरुलाई समेत अनुसन्धान गरी कारबाही गरी पाउ भन्ने ब्यहोराको प्रहरी प्रतिवेदन (जग्गा फिर्ता २०४९):**

समरजंग कम्पनीका कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी शैलजा राणा समेत भएको लिखत/किर्ते सम्बन्धि कसूर मुद्दामा तत्कालिन श्री ५ को सरकारबाट रितपूर्वक मुआब्जा दिई अधिग्रहण गरिएको काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरू समेतबाट मिति २०४७/०२/१४, मिति २०४७/०४/०८ र मिति २०४७/०५/०३ गतेको जफत जग्गा मात्र फिर्ता दिने मन्त्रिपरिषदको निर्णयको अपव्याख्या, दुरुपयोग र विपरित समेत हुने गरी बहाल रहेको कानूनको दुरुपयोग गरी बदनियतपूर्वक आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल सम्पत्ति आफ्नो हो भनी श्री ५ को सरकार समरजंग कम्पनीलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी झूठ्ठा, फरक तथा किर्ते समेतको फरक व्यहोराका सरकारी कागजात तयार पारी तत्कालिन श्री ५ को सरकार समरजंग कम्पनी को संरक्षणमा रहेको

ललिता निवास क्याम्प भित्रको ११२-४-१-० (एक सय बाह्र रोपनी चार आना एक पैसा ) रोपनी क्षेत्रफलको सरकारी जग्गा रुक्म शमशेर ज.ब.रा. समेतका ब्यक्तिहरुको नाममा ना.सा.दा.खा. गरी सार्वजनिक र सरकारी जग्गा हिनामिना र हानिनोक्सानी पुर्‍याएको भन्ने लिखत / किर्ते सम्बन्धी कसुर मुद्दामा अनुसन्धानको क्रममा जाहेरवाला मुकुन्द प्रसाद पन्तले मिति २०७६।१०।२७ गते दिएको किटानी जाहेरी दरखास्त कानून बमोजिम दर्ता गरी अनुसन्धान हुने क्रममा केन्द्रीय अनुसन्धान ब्यूरोबाट गठित छानबिन समितिको प्रतिवेदन समेतबाट उक्त कसूर वारदातमा योगराज पौडेल समेतको योजना सहयोग र संलग्नतामा उक्त कसूर वारदातले पूर्णता पाएको र वारदात घटाउन, प्रमाण लुकाउन वारदात अघि र पछि समेत निजहरुको संलग्नता भएको पुष्टि हुन आएकोले अनुसन्धानबाट खुल्न आएको योगराज पौडेल समेतलाई पक्राउ गरी कानून बमोजिम गरी पाउँ भन्ने समेत व्यहोराको प्रतिवेदन।

**(छ) <u>अनुसन्धानबाट खुल्न आएको थप प्रतिवादीहरुलाई समेत अनुसन्धान गरी कारबाही गरी पाउ भन्ने ब्यहोराको प्रहरी प्रतिवेदन (छुट जग्गा दर्ता २०६२)</u>:**

समरजंग कम्पनीका कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरीले बादी नेपाल सरकार प्रतिवादी हेमाद्री शमसेर ज.ब.राणा समेत भएको किर्ते/लिखत सम्बन्धी कसूर मुद्दामा तत्कालिन श्री ५ को सरकारबाट रितपुर्वक अधिग्रहण गरेको काठमाडौं जिल्ला साबिक का.न.प. वडा नं. २३ "स" को कि.नं.१६ को ८- १२-२-० जग्गा कित्ता काट भई कित्ता नं.२५ र २६ भएकोमा २०३६ सालमा उक्त जग्गाहरु मध्ये कित्ता नं. २५ को ८-०-०-० रोपनी जग्गा कनक शमसेरको नाममा दर्ता कायम भए पछि कित्ता नं. २६ को ०-१२-२-० जग्गा स्वत तत्कालिन सरकारको नाममा हुनु पर्नेमा सो नगरी उक्त ०-१२-२-० जग्गा हालको नयाँ नापीमा कायम काठमाडौं जिल्ला काठमाण्डौँ महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित सिट नं. १०२५-२० को कि.नं.४८ को क्षेत्रफल ०००१४.८६ ब.मि. जग्गा र सिट नं. १०२५-१५ को कि.नं.१११ को क्षेत्रफल ००३९२.९९ ब.मि. सरकारी जग्गा किर्ते गरेका तथ्य बिपरितका झुठो ब्यहोराको कागजातहरु बनाई सो कागजातहरुको आडहाली मालपोत कार्यालय डिल्लीबजारबाट मिति २०६२।२१३ मा सुनिती राणाको नाममा दर्ता कायम गरेको कसूर मुद्दामा अनुसन्धानको सिलसिलामा मिसिल संलग्न रहेको तथ्य प्रमाणहरु भएको कागजातहरु, छानबिन समितिको प्रतिबेदन समेतबाट शिवजी भट्टराई समेतको योजना, सहयोग र संलग्नतामा उक्त कसूर वारदारले पूर्णता पाएको र वारदात घटाउन, प्रमाण लुकाउन वारदात अघि र पछि समेत निजहरुको संलग्न भएको एकिन हुन आएकोले अनुसन्धानबाट खुल्न आएका शिवजी भट्टराई समेतलाई पक्राउ गरी कानून बमोजिम गरी पाउन र एकिन नाम, थर, उमेर र वतन नखुलेका व्यक्तिहरुको हकमा एकिन खुलि आए पछि पक्राउ गरी कानून बमोजिम गरी पाउँ भन्ने समेत व्यहोराको प्रतिवेदन।

**(ज) <u>अनुसन्धानबाट खुल्न आएको थप प्रतिवादीहरुलाई समेत अनुसन्धान गरी कारबाही गरी पाउ भन्ने ब्यहोराको प्रहरी प्रतिवेदन (जग्गा सट्टापट्टा २०६७)</u>:**

समरजंग कम्पनीका कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी श्रीकृष्ण महर्जन समेत भएको निज प्रतिवादीहरुले प्रधानमन्त्री निवास परिसर बिस्तारको क्रममा मन्त्रिपरिषदमा झूठो र किर्ते समेतको फरक व्यहोराको प्रस्ताव पेश गरी तथा म.प. लाई तथ्यगत भ्रममा पारी मन्त्रिपरिषदको निर्णय र बहाल रहेको कानूनको दुरुपयोग र अपव्याख्या एवं मन्त्रिपरिषदको निर्णय विपरित समेत गरी बदनियतपूर्वक राज्यलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी मोही हक र बाटोको नाममा समेत जम्मा १८-१४-३-२ रोपनी सरकारी जग्गा हिनामिना गरी हानीनोक्सानीपुर्‍याएको एवं बाँकी करिब १३ रोपनी जग्गा सट्टापट्टा भई

भाटभटेनी डेभलपर्सप्रा.लि. समेतको नाममा गएकोलेसार्वजनिक र सरकारी सम्पति हिनामिना र हानी नोक्सानीपुऱ्याएकोभन्ने किर्ते / लिखत सम्बन्धी कसुर मुद्दामा अनुसन्धानको क्रममा जाहेरवाला मुकुन्द प्रसाद पन्तले मिति २०७६।१०।२७ गते दिएको किटानी जाहेरी दरखास्त कानून बमोजिम दर्ता गरी अनुसन्धानको क्रममा मिसिल संलग्न हुन आएका सम्बद्ध कार्यालयहरुबाट प्राप्त कागजातहरु र केन्द्रिय अनुसन्धान ब्यूरोबाट गठित छानबिन समितिको प्रतिवेदन समेतबाट उक्त कसूर वारदातमा संजय कुमार साह समतको योजना सहयोग र संलग्नतामा उक्त कसूर वारदातले पूर्णता पाएको र वारदात घटाउन, प्रमाण लुकाउन वारदात अघि र पछि समेत निजहरुको संलग्नता भएको पुष्टि हुन आएकोले अनुसन्धानबाट खुल्न आएका संजय कुमार साह समेतलाई पक्राउ गरी कानून बमोजिम गरीपाउँ भन्ने समेत व्यहोराको प्रतिवेदन।

**(झ) <u>अनुसन्धानबाट खुल्न आएको प्रतिवादीहरुलाई समेत अनुसन्धान गरी कारबाही गरी पाउ भन्ने ब्यहोराको प्रहरी प्रतिवेदन (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

समरजंग कम्पनीका कार्यालय प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी रुक्म शम्शेर राणा समेत भएको निज प्रतिवादीहरुले नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गाको जग्गाधनीको लगत कट्टा गरी श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गराई आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल फरक व्यहोराको कागज समेत बनाई पेश गरी झुक्याई झुठ्ठो कुरालाई सद्दे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो हो भनी लिखत गरी बिक्रि व्यवहार गरी लिखत सम्बन्धी कसूर समेत गरेको भन्ने मुद्दामा अनुसन्धानको क्रममा जाहेरवाला मुकुन्द प्रसाद पन्तले मिति २०७६।१०।२७ गते दिएको किटानी जाहेरी दरखास्त कानून बमोजिम दर्ता गरी अनुसन्धान हुने क्रममा केन्द्रीय अनुसन्धान व्यूरोको छानबीन प्रतिवेदनबाट र अनुसन्धानको क्रममा थप खुल्न आएका उक्त कसूर वारदातमा धर्म प्रसाद गौतम समेतको योजना सहयोग र संलग्नतामा उक्त कसूर वारदारले पूर्णता पाएको र वारदात घटाउन, प्रमाण लुकाउन वारदात अघि र पछि समेत निजहरुको संलग्न भएको पुष्टि हुन आएकोले अनुसन्धानबाट खुल्न आएका धर्म प्रसाद गौतम समेतलाई कानून बमोजिम गरीपाउँ भन्ने समेत व्यहोराको प्रहरी प्रतिवेदन।

**२. <u>प्रतिवादी राम कुमार सुवेदीको बयान:</u>**

**(क) <u>प्रतिवादी राम कुमार सुवेदीको बयान (जग्गा फिर्ता २०४९):</u>**

बरामदी मुचुल्कामा उल्लेखित दशी मेरो रोहवरमा मेरो घरबाट प्रहरीले रितपूर्वक बरामद गरेको ठिक साँचो हो र बरामदी मुचुल्कामा भएको मेरो नामको दस्तखत मैले गरेको दस्तखत हो हेरी चिनी सनाखत गरी दिएँ। नेपाल सरकारको जग्गामा मोही लाग्दैन भन्ने कुरा मलाई थाहा छ। म लेखापढी व्यवसायी भएको र ललिता निवास क्याम्प भित्र जग्गा कमाउने मोहीहरुको तर्फबाट मात्र मैले निवेदन लेखिदिई वारेससम्म बसी मिति २०५० देखि मोहीहरूको तर्फबाट काम गर्दै आएको हुँ। उक्त जग्गाको जग्गाधनी र मोही बीच भूमि सुधार कार्यालय काठमाडौंमा मोही लगत कट्टा र मोही कायम मुद्दा चलि भूमि सुधार कार्यालय काठमाडौंले मोहीहरूको पक्षमा मोही कायम गर्ने गराउने फैसला गरेको र उक्त फैसला विरूद्ध जग्गाधनीको पक्षबाट पुनरावेदन अदालत पाटनमा पुनरावेदन पर्दा समेत पुनरावेदन अदालत पाटनले सुरु भूमि सुधार कार्यालय काठमाडौंको फैसलालाई सदर गरी दिएकोले सोही फैसलाको आधारमा भूमि सुधार कार्यालय काठमाडौंले जग्गाधनी र मोहीहरू बीच जग्गा बाँडफाँड समेत गरीदिए पछि उक्त जग्गाहरू बिक्री वितरण भएको थाहा छ। उक्त जग्गा बिक्री गर्ने जग्गाधनी शैलजा राणा, सुनिती राणा, रूक्म शम्सेर ज.ब.रा., हेमन शम्सेर ज.ब.रा., हाटक शम्सेर ज.ब.रा. समेत उक्त

जग्गाको साविकका मोहीहरू हुन् भने खरिद कर्तामा मिन बहादुर गुरुङ्ग, उमा कुमारी ढकाल, मेरो श्रीमती माधवी सुबेदी लगायतका मानिसले खरिद गरेको हो । सो जग्गा खरिद गर्ने मुख्य लगानी कर्ता मिन बहादुर गुरूङ्ग हुन् । म तथा मेरो परिवारको नाममा ललिता निवास क्याम्प रहेका जग्गाहरु अन्य व्यक्तिहरूसँग साझेदारीमा छन् । ललिता निवास क्याम्प भित्रका मोहीहरूको नाममा जग्गाधनी प्रमाण पुर्जा तयार भएर आएपछि निजहरुले उक्त जग्गाहरु बिक्री गर्ने प्रस्ताव गरेकाले सोहि प्रस्ताव स्वीकार गरी म समेतले निजहरुबाट जग्गा खरिद गरेका हौं । निजहरूबाट जग्गाहरु खरिद गर्दा लिखतमा उल्लेखित रकम तिरी बुझाइ लाग्ने राजश्व समेत दाखिला गरी कानून बमोजिम लिखत पास पारीत गरी जग्गा खरिद गरेका हौं । यसरी जग्गा खरिद गर्दा मेरो भागमा परेको रकम नगदै भुक्तानी गरेको हुँ । उल्लेखित जग्गाहरु पटक पटक गरी खरिद गरिएको र खरिद गर्दा मेरो स्व-आर्जनबाट आएको रकम मध्ये बचत गरी राखेको केहि रकम, अंश बापत प्राप्त रकम र व्यक्तिगत ऋणसमेतबाट खरिद गरेको र पछि खरिद गरेका जग्गाहरुको हकमा शुरुमा खरिद गरेका जग्गाहरु मिन बहादुर गुरुङ र निजका परिवारका सदस्यको नाममा समेत बिक्री गरी सोहिबाट प्राप्त रकम समेतबाट खरिद गरेको हुँ । तत्कालिन समयमा भूमि सुधार कार्यालय काठमाडौंको मिति २०५५/०१/०६ को मोही कायम फैसला र पुनरावेदन अदालत पाटन ललितपुरको भूमि सुधार कार्यालय काठमाडौंको सुरु फैसला सदर भन्ने मिति २०५७/०३/०६ को फैसला पश्चात मोहीहरुले उक्त फैसला कार्यान्वयन गरी भूमि सुधार कार्यालय काठमाडौंबाट फैसला कार्यान्वयन गरी मोही जग्गा धनि बीच जग्गा बाँडफाँड गरी मोहीहरुले आ-आफ्नो नाममा ज.ध. प्रमाणपुर्जा लिए पश्चात त्यसरी ज.ध. प्रमाणपुर्जा पाउने जम्मा २६ जना मोहीहरु मध्ये २२ जना मोहीहरुले उनीहरु एक आपसमा सर सल्लाह गरी हामीहरुको जग्गामा बाटो घाटो छैन, हामीहरु मध्ये कतिपयका जग्गा सरकारी निवाससँग जोडिएका छन्, हामीहरुले एकमुष्ट जग्गा बिक्री गरौं भनी उनिहरुबीच सल्लाह भएछ र सोही बमोजिम तिर्थमायाका छोरा लोक बहादुर महर्जन, विल बहादुर महर्जन, बाबुराजा महार्जन, श्री कृष्ण महर्जन समेतले जग्गा बिक्रिको प्रस्ताव ल्याएका थिए । उक्त जग्गाहरु आफुले बचत गरी राखेको रकम लगायत ऋण सपाटी समेतबाट संगोलनामामा रहने गरी खरिद गरेको हो । म लेखापढी व्यवसायी भएको र ललिता निवास क्याम्प भित्रको जग्गाको सम्बन्धमा मैले मिति २०५० साल देखि मात्र लेखापढी व्यवसायीको नाताले ललिता निवास क्याम्प भित्रको मोहीहरूको निवेदन लेखिदिने वारेश बसी दिने काम गरेको हुँ । मैले त शैलजा राणा, सुनिती राणा, रूक्म शम्सेर ज.ब.रा., हेमन शम्सेर ज.ब.रा., हाटक शम्सेर ज.ब.रा. समेतको नामको जग्गाधनी प्रमाण पूर्जाको मोही महलमा लेखिएका मोहीहरूको नाम र निज मोहीहरूले उपलव्ध गराएका उल्लेखित जग्गाको फिल्ड बुक, २ नं. अनुसूची, मोहीले जग्गाधनीलाई बुझाएको कुतबालीको भरपाई रसिद, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानीय निकायको सिफारिस पत्र, मागदाबीको जग्गा निज निबेदकले नै जोत कमोद गरेको छ भन्ने साँध सँधियारको सर्जमिन मुचुल्का समेतका आधारमा तिनै मोहीहरूले भने बमोजिम निबेदन लेखि दिएको र निजहरूकै अनुरोध बमोजिम वारेश समेत बसी व्यवसायिक काम गरेको हुँ । मैले जग्गाधनीको नामको जग्गाधनी प्रमाण पुर्जा र सोहीको श्रेस्ता पुर्जा र नापीका बखतको फिल्ड बुक र भुमी सुधार कार्यालय काठमाडौंमा भएको २ नं. अनुसूची समेतको प्रमाणको आधारमा ललिता निवास क्याम्प भित्रका जग्गाको मोहीहरूको मोहीयानी हक प्राप्तीको लागि निवेदन लेखिदिने वारेश बसी दिने समेतका काम गरेको हुँ । म लेखापढी व्यवसायीको नाताले मोहीहरुले उपलब्ध गराएको कागज प्रमाण र निजहरुले भने बमोजिम मात्र मैले काम गरीदिएको हुँ । मैले मोहीहरुले देखाएको राणाहरुको नामको जग्गाधनी प्रमाण पुर्जा र मालपोत कार्यालयमा रहेको राणाहरुकै ज.ध. श्रेस्ता प्रमाण पुर्जामा लेखिएको मोहीहरुको नामहरु र नापी कार्यालयको

फिल्डबुक उतार प्रमाण पत्रमा र भू.सु. कार्यालय काठमाडौंमा रहेको मोहीहरुको २ नम्बर सूचीहरुको आधारमा निवेदन लेखिदिने र निजहरुले भने बमोजिम नै वारेस समेत बसी काम गरी दिएको हुँ। उल्लेखित जग्गाहरु निज जग्गाधनीहरुसँग खरिद गर्दा केहिको पुरै कित्ता जग्गा र केहिको केहि प्रतिशत जग्गा मात्र खरिद गरिएको हुँदा तिरेको रकमको आधारमा शोभाकान्त ढकालको श्रीमती उमा कुमारी ढकाल्नी, साबिक जग्गाधनीहरु समेतसँग सगोलनामामा मेरो श्रीमती माधवी सुबेदीको स्वामित्व रहन गएको हो । उल्लेखित जग्गाहरु प्राप्त गर्दा मेरो श्रीमती समेतका जग्गाधनी प्रमाण पुर्जामा उल्लेखित व्यक्तिहरुको बराबरी शेयर रहेको थियो । उल्लेखित जग्गाहरु मेरो श्रीमती समेतको नाममा स्वामित्व हस्तान्तरण भई आईसके पश्चात हाल साबिक गर्दा क्षेत्रफल बढे नबढेको यकिन भन्न सक्दिन । मिन बहादुर गुरूङ र साबित्री गुरुङको ५१ प्रतिशत सेयर र म र शोभाकान्त ढकालको ४९ प्रतिशत सेयर रहने गरी ४ जना भई भाटभटेनी डेभलपमेन्ट कं.प्रा.लि. नामको कम्पनी दर्ता गरेको हौं। कम्पनीको नाममा पास गरिएको करिब ९(नौ) रोपनी जग्गा बिक्री पछी हाल कम्पनीको नाममा ४-७-०-० भए जस्तो लाग्छ । मिति २०६० साल तिर अधिवक्ता युवराज कोईराला मार्फत राणाजीहरुको पनि जग्गा बिक्रीमा छ, उक्त जग्गा तपाईहरुले किनिदिनुपर्यो , राणाजीहरुसँग सबै कुरा म मिलाउछु भनी निज राणाजीहरुलाई भेटाई जग्गा खरिद गर्ने गराउने कुरा भए बमोजिम राणजीहरुको जग्गा मिन बहादुर गुरुङ लगायत हामी सबै मिलि जग्गा खरिद गर्दाको क्रममा कर्मचारी भनिएका व्यक्तिहरु मध्ये जगत प्रसाद पुडासैनी, गेहनाथ भण्डारी समेत आई कुराकानी गरी ललिता निवास क्याम्प भित्र हाम्रो पनि जग्गा छ, तपाईहरुले किनिदिनुपर्यो, हामी लगायत हामी तर्फका सबै जग्गाधनी साथिहरुलाई हामी समन्वय गर्छौ भन्नु भएको र सोही बमोजिम उहाँहरू मार्फतका सबै जग्गावालाहरुलाई उहाँहरूले नै भेटाई मोलमोलाई गरी तत्कालिन समय अनुसारको चलनचल्तिको मूल्य तिरी खरिद गरेका हौं। शोभाकान्त ढकालको हस्तलिखित भएको खेस्रा कागज तिर्थमाया महर्जनको जग्गा शोभाकान्त ढकाल समेतले खरिद गर्ने कुराको शुरुवातमा सहमति पत्रको लागी निज तिर्थमाया महर्जनको घरमा बसी गरिएको हो। खेस्रामा लेखिएको राम कुमार सुबेदी समेत र हामी भन्ने शब्द शोभाकान्त ढकाल र म समेतलाई भन्न खोजेको हो। उक्त खेस्रा मैले भने बमोजिम शोभाकान्त ढकालले गरेका हुन्। उक्त खेस्रा बमोजिमको सहमति तत्काल नभएकाले उक्त खेस्रा सोहि स्थानमा छाडि हामी हिँडेका थियौं। यर्थाथमा उल्लेखित जग्गाको कुतवाली हामी मोही हौ भनी समरजंग कम्पनीमा कुतबाली बुझाएको भर्पाइ रसिद लिएर आउनु भएको थियो। राणाजीहरुले जग्गा फिर्ता पाईसकेपछी उहाँ लगायत सबै मोहीहरुले जग्गाधनीहरु शैलजा राणा समेतका नाममा भुमि सुधार कार्यालय काठमाडौंमा मिति २०५० साल देखि मिति २०५७ साल सम्म कुतबाली धरौटी राखि आउनु भएको थियो। पछी तेही धरौटी रकम पनि ज.ध शैलजा राणा समेतले भुमि सुधार कार्यालय काठमाडौं मार्फत बुझि लिएको अवस्था छ । काम गर्ने गराउने क्रममा निज तिर्थमाया महर्जन र निजका छोरा लोक बहादुर महर्जन समेतले भने अराए बमोजिम निवेदन लेखि दिई वारेस समेत बसी काम गरी दिएको हो। ललिता निवास क्याम्प भित्रका सम्पूर्ण मोहीहरुले सुरुमा समरजंग कम्पनी कार्यालयमा कुत वाली बुझाई आएका रैछन । राणाहरुले जग्गा फिर्ता पाएको र राणाजीहरुको ज.ध.प्रमाणपुर्जा बनेपछी राणाजीहरुले मोही लगत कट्टाको निवेदन मोहीहरु बिरुद्ध भूमिसुधार कार्यालय काठमाडौंमा मिति २०५० सालमा हाले पछी सोही मिति २०५० सालदेखि प्रत्येक मोहीहरुले आ आफुले कामएको जग्गा कित्ताहरुको सालै पिच्छेको कुतबाली बापतको रकम जग्गा धनिहरु शैलजा राणा ,सुनिती राणा,रुक्म शम्सेर ज.ब.रा.,हेमन शम्सेर ज.ब.रा र हाटक शम्सेर ज.ब.रा समेतका नाममा भूमि सुधार कार्यालय काठमाडौंमा करिब मिति २०५७ साल सम्मको कुतवाली रकम धरौटी राखि आएका थिए । उहाँको बुबा बेखा नारायण महर्जनको काम बेखा नारायण

महर्जनले भने बमोजिम नै उहाँले दिएको प्रमाण कागजको आधारमा जग्गाधनी शैलेजा राणा समेत र मोही बेखा नारायण महर्जन समेत भएको जग्गामा जग्गाधनी शैलेजा राणा समेतले भूमी सुधार कार्यालय काठमाडौंमा निज बेखा नारायण महर्जनको नामको मोहीको लगत कट्टा गराई पाउँ भनी मुद्दा हालि बेखा नारायण महर्जनको घरमा भूमी सुधार कार्यालय काठमाडौंबाट म्याद पुर्जी गई सो पुर्जी निजले बुझेर भूमी सुधार कार्यालय काठमाडौंमा निबेदन हालि दिनु पर्‍यो भनी निजसँग भएको प्रमाण कागजातहरू लिई म कहाँ आएकोले मैले निबेदन लेखि दिई भूमी सुधार कार्यालयमा वारेश समेत बसी निजको मोही कायम गरी पाउनको लागि मैले काम गरेको थिएँ । भूमी सुधार कार्यालय काठमाडौंमा निज बेखा नारायण महर्जनकै माग निबेदन बमोजिम मिति २०५५/०१/०६ का दिन भूमी सुधार कार्यालय काठमाडौंले मोही कायम हुने ठहर गरी फैसला समेत गरी दिएको र सो फैसला उपर पुनरावेदन अदालत पाटनमा जग्गाधनी शैलजा राणा समेतको पुनरावेदन समेत परी सो पुनरावेदन मुद्दा पनि मिति २०५७/०३/०६ गतेका दिन सुरू फैसला नै सदर गरी फैसला भएकोले तिनै फैसलाहरू कार्यान्वयन गरी पुन: भूमी सुधार कार्यालय काठमाडौंबाट जग्गा बाँडफाँड गराई लिई आफ्ना नाममा जग्गाधनी प्रमाण पुर्जा बनाएका हुन् । पछि निजले नै जग्गा बिक्री गर्छु भनी भनेकोले निजका छोराहरूनै साक्षी रोहवरमा बसी जग्गा बिक्री गरेका हुन् । जग्गा बिक्री गरी प्राप्त भएको लिखत बमोजिमको रकम निज बेखा नारायण महर्जनले नै बुझि लानु भएको थियो भन्ने समेत व्यहोराको प्रतिवादी रामकुमार सुबेदीको बयान ।

**(ख) <u>प्रतिवादी राम कुमार सुवेदीको बयान (छुट जग्गा दर्ता २०६२):</u>**

"लिखितम हामी तपसिलमा लेखिएका मानिसहरु आगे, का.जि. का.म.न.पा. वडा न.२३ स साबिक किता न.१६ किता काट भई कायम हुन आएको किता न.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा किता १ दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा लिन बाकी रहेकोमा हामी समेतको नाममा रहेको साबिक लगत मौजा हाडीगाउ हा.न.४५६ को २७२॥३॥२॥ बाट भिडी दर्ता हुने जग्गा सुबर्ण शमसेरको बुहारी कनक शमसेरको श्रीमती का.जि.का.म.न.पा. वडा न.४ बस्ने सुनिती राणाको नाममा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा दिएमा हामीहरुको पुर्ण मन्जुरी छ पछि मन्जुर छैन भनी कुनै अड्डा अदालतमा कुनै प्रकारको उजुर बाजुर गर्ने छैनौं गरेमा यसै मन्जुरीनामाको कागजले बद्दर गरी दिएमा हाम्रो मन्जुरी छ हामीले अड्डा अदालतबाट लागेको दण्ड जरिवाना दसौद आदेशले बाकी रहेको कोर्ट फि सरकारी बिगो समेत तिर्न बुझाउन बाँकी छैन । किनाराका साक्षीहरुका रोहबरमा हाम्रो राजीखुसी मन्जुरीले यो मन्जुरीनामा कागज लेखि लेखाई सहिछाप गरी मालपोत कार्यालय काठमाडौंमा चढायौ" मुकाम मालपोत कार्यालय काठमाडौं डिल्लीबजार हो भन्ने ब्यहोरा उल्लेख भएको मिति २०६०।०३।२३ को मन्जुरीनामा कागजमा साक्षीको रुपमा गरेको हस्ताक्षर मैले गरेको मेरो हो । अधिवक्ता युवराज कोईरालाले उक्त मन्जुरीनामा कागजमा साक्षीमा दस्तखत गरी दिनु भनेकोले मैले विश्वासमा दस्तखत गरी दिएको हो । यस सम्वन्धमा अन्य मलाई केही थाहा छैन भन्ने ब्यहोराको राम कुमार सुवेदीको बयान ।

**ग) <u>प्रतिवादी राम कुमार सुवेदीको बयान (जग्गा सट्टापट्टा २०६७):</u>**

ललिता निवास क्याम्प भित्रका जग्गाहरु मध्ये नगर ४ कि.नं. २७९ को क्षेत्रफल ०-१४-३-०, कि.नं. २७७ को क्षेत्रफल ०-१-३-०, कि.नं. २६५ को क्षेत्रफल ०-०-३-०, कि.नं. ३०८ को क्षेत्रफल ०-०-१-२, कि.नं. ५४८ को क्षेत्रफल १८८.७९ ब.मि., कि.नं. १४२ को १७४.८८ ब.मि., कि.नं. ७४७ को ७२.२९ ब.मि., कि.नं. ७५३ को ९.९५ ब.मि., कि.नं. ११ को क्षेत्रफल १-५-३-२, कि.नं. २६ को क्षेत्रफल ८७.४४ ब.मि., कि.नं. ३८ को क्षेत्रफल १३१.१६ ब.मि., कि.नं. १४४ को २९.८५ ब.मि., कि.नं. ५ को क्षेत्रफल ०-६-०-२, कि.नं. ३६ को क्षेत्रफल ४१२.३५ ब.मि., कि.नं. १३६ को १६६.९३ ब.मि., कि.नं. ७५१ को १३६१.७६ ब.मि., कि.नं.

२६६ को ०-०-३-०, कि.नं. ८ को ०-०-३-३, कि.नं. २९४ को ०-०-३-१, कि.नं. ३१६ को ०-७-३-१ र पशुपति टिकिन्छा गुठीको कि.नं. ४८ को क्षेत्रफल ०-३-०, कि.नं. २६२ को क्षेत्रफल ०-१०-३-०, कि.नं. २६७ को क्षेत्रफल ०-१३-३-३, कि.नं. २९५ को क्षेत्रफल ०-२-१-०, कि.नं. २५९ को क्षेत्रफल ०-२-१-१जग्गा मेरो श्रीमती माधवी सुबेदी र उमा कुमारी ढकालको संयुक्त नाममा छ। यसै गरी काठमाडौं नगर वडा नं. ४ को कि.नं. ८३ को क्षेत्रफल ०-१३-३-१ जग्गा र कि.नं. ५०७ को ०-१-०-० जग्गा म, शोभाकान्त ढकाल र मिन बहादुर गुरुङको संयुक्त नाममा छ। यसै गरी नगर ४ कि.नं. १३७ को क्षेत्रफल १२५.२० ब.मि. जग्गा, कि.नं. १३८ को ४३.७२ ब.मि., कि.नं. ५४ को ३५.७७ ब.मि. कि.नं. १२९ को ५१३.५० ब.मि., कि.नं. ६४२ को ३२.३१ ब.मि., कि.नं. ६४० को ११०.४८ ब.मि., कि.नं. ६४४ को ४८.३६ ब.मि., कि.नं. ६४६ को १९९.५४ ब.मि., कि.नं. ६३८ को ५३.६६ ब.मि., कि.नं. ६२३ को ६६.५८ ब.मि., कि.नं. ६१४ को ५८८.२३ ब.मि., कि.नं. १४३ को ९३.४० ब.मि. र कि.नं. ६३६ को जग्गा र पशुपति टिकिन्छा गुठीको कि.नं. ५६ को ३६२.८० ब.मि., कि.नं. ८० को ०-३-२-०, कि.नं. २७८ को १-११-२-२, कि.नं. २८४ को ०-२-३-०, कि.नं. २३२ को ०-१-१-० र कि.नं. १७१को १५०.५१ ब.मि. जग्गा म र शोभाकान्त ढकालको नाममा छ। कि.नं. २८२को क्षेत्रफल १-४-३-२, कि.नं. २८५ को क्षेत्रफल ०-२-१-२, कि.नं. २७० को क्षेत्रफल १-५-०-१, र कि.नं. ५६ को क्षेत्रफल १.९९ ब.मि. जग्गा उमा कुमारी ढकाल, माधवी सुबेदी र सरला गुरुङको संयुक्त नाममा छ। यसै गरी कि.नं. २६३ को क्षेत्रफल ०-९-३-२,कि.नं. २७१ को क्षेत्रफल १-१-०-२,कि.नं. ४०५ को क्षेत्रफल ३१९.९१ ब.मि., कि.नं. ५२० को क्षेत्रफल १०६.८७ ब.मि. जग्गा सरोज ढकाल र रुपेशसुबेदीको संयुक्त नाममा छ। यसै गरी कि.नं. २२१ को ०-७-०-०, कि.नं. २२३ को ०-८-१-१, कि.नं. २२४ को ०-१-२-३, कि.नं. ३०५ को ०-०-२-० जग्गा माधवी सुबेदी र राधा सिग्देलको संयुक्त नाममा छ। कि.नं. २७६ को ०-८-०-२, कि.नं. १०० को १-४-३-३, कि.नं. ७४९ को ५६.५७ ब.मि. जग्गा मेरो छोरा बिबेक कुमार सुबेदीको नाममा दर्ता छ। तत्कालिन श्री ५ को सरकारले मुआब्जा दिई रितपुर्वक अधिग्रहण गरेको का.जि.का.म.पा. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको ३३-६-२-० रोपनी जग्गा तपाई समेतको मिलोमतो योजना तथा परिपन्चमा झुठ्ठा र फरक व्यहोराको निवेदन, सिफारिश पत्र लगायतका किर्ते कागजातहरुको आधारमा विभिन्न मोही भनिएका ब्यक्तिहरुको मोही भाग र बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तारको क्रममा परिसर क्षेत्र भित्र पर्ने जग्गाको सट्टापट्टा स्वरुप बिभिन्न संस्था र ब्यक्तिहरु समेतको नाममा नामसारी दा.खा. गरी हानी नोक्सानी तथा हिनामिना गरी सरकारी छाप दस्तखत किर्ते/ लिखत सम्वन्धी कसूर गरेको भन्ने सम्बन्धमा म लेखापढी व्यवसायी भएको र मैले जे जति गरेँ, मेरो व्यावसायिक धर्म मात्र निर्वाह गरेको हुँ। मैले मोहीहरुले हाम्रो प्रमाण कागज यो हो, हाम्रो तर्फबाट यस्तो व्यहोराको निवेदन लेखि दिनुहोस भने बमोजिम निजहरुको प्रमाण कागजको आधारमा निवेदन लेखि दिएको हो, निजहरुले भने बमोजिम वारेश समेत बसी प्रक्रिया अगाडी बढाएको हो।उल्लेखित प्रक्रियामा कुनै किसिमको कमि कमजोरी वा बदनियत भएको भए उक्त निर्णय प्रक्रियामा सम्बद्ध निर्णयकर्ता र शुरुदेखि अन्त्य सम्म संलग्न जिम्मेवार कर्मचारी, पदाधिकारीलाई नै थाहा होला। मिति २०२१/८/१७ गते नेपाल गजेट भाग ३ खण्ड १४ अतिरिक्ताङ्क २३ मा प्रकाशित "जग्गा प्राप्ति ऐन २०१८ को दफा ७ को उप दफा १ ले दिएको अधिकार प्रयोग गरी श्री ५ को सरकारले ललिता निवास क्याम्प भित्रको माल तिरोको जग्गा रोपनी २९९-९-३ मध्ये सुवर्ण शमसेर कञ्चन शमसेरको भागको घर र जग्गा रोपनी १४-११-० श्री ५को सरकार लागि सकेकोले सो कट्टा गरी बाँकी रोपनी २८४-१४-३ दुईसय चौरासी रोपनी चौध आना तीन पैसा र सो जग्गामा रहेका सबै

घरहरु समेत" सार्वजनिक कामको निमित्त प्राप्त गर्ने मिति ०२१/८/१५ मा निर्णय गरेकोले जग्गाधनीलाई सो जग्गा घर कम्पाउण्डको मोल र जग्गा लिँदाको अरु नोक्सानी वापत उक्त ऐन बमोजिम क्षतिपुर्ती दिईने भन्ने व्यहोराको सूचना र मिति २०२१/९/६,७,८ र ९ गतेको गोरखापत्र दैनिकमा " जग्गाको क्षतिपुर्ती लिन आउनुहोस" भन्ने शिर्षकमा प्रकाशित सूचना देखाउँदा देखि पाएँ । मैले लेखापढी व्यवसायीको हैसियतमा ललिता निवास क्याम्प भित्रका मोहीहरुको मोहीयान हक प्राप्तीको लागि निवेदन लेखि दिने र वारेश बस्ने काम मात्र गरेको हो, माथि उल्लेखित नेपाल गजेट, गोरखापत्रमा प्रकाशित सूचनाहरुका सम्बन्धमा मलाई थाहा जानकारी थिएन । नेपाल सरकारको स्वामित्वमा रहेको जग्गामा मोही लाग्दैन भन्ने बुझेको छु । त्यस अवस्थामा मोहीहरुले सर्वोच्च अदालतबाट हाम्रो नाममा मोही कायम गर्ने आदेश भएको छ, सोहि अनुसार निवेदन पेश गरीदिनु भनी वारेशनामा समेत दिएकाले निजहरुको भनाईलाई बिश्वाश गरी सोही बमोजिमको निवेदन लेखि पेश गरेको हुँ । राममणी सिग्देल वारेस भई २०६७ पौष महिनामा भुमीसुधार कार्यलय, काठमाडौंमा सर्वोच्च अदालतको फैसला अनुसार मोही कायम गराई पाँउ भनी दिएको निवेदनकोप्रतिलिपी देखाउँदा देखि पाएँ, उक्त प्रतिलिपीमा भएको हस्त लिखत मेरो हो । हेरी चिन्हि सनाखत समेत गरी दिएँ, मिति २०५९/०७/०५ गते समेतमा रेना गुरुङ समेतको वारेस बसी ललिता निवास क्याम्प भित्रको साविक काठमाडौं नगर वार्ड नं. २३ ह को कि.नं. १५ को क्षे.फ. २-३-०, कि.नं. २४ को क्षे.फ. ०-९-० समेतका जग्गाहरु पशुपती टिकिन्छा गुठीको भएकाले गुठीको नाममा जग्गा दर्ता गरी नामसारी हाल साबिक समेत गरी पाउँ भनी गुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन दिएको र सोहि व्यहोरालाई समर्थन हुने गरी का.म.पा. ४ नं. वडा कार्यालयको च.नं. १९८२ मिति २०५९/३/३२ गतेको सिफारिश पत्र समेत पेश गरेको मिसिल संलग्न कागजातहरुबाट देखिन आएको, सोही जग्गाहरुका सम्बन्धमा निज रेना गुरुङ समेतका मोही भनिएका व्यक्तिहरुले नेपाल सरकार (म.प.) को २०६६/१२/२९ गतेको निर्णय पश्चात मिति २०६७/३/१ गते मालपोत कार्यालय काठमाडौंमा आफ्नो नाममा मोही भाग जग्गा दर्ता कायम गरी ज.ध.प्र. पुर्जा पाउँ भन्ने व्यहोराको निवेदनका प्रतिलिपीहरु देखाउँदा देखि पाएँ । उक्त निवेदनहरु मैले लेखेको हुँ । निवेदनको हस्तलिपी मेरो हो । हेरी चिन्ही सनाखत समेत गरी दिएँ । उक्त निवेदन व्यहोराका सम्बन्धमा २०५९ सालमा रेना गुरुङ समेतका ललिता निवास क्याम्प भित्रका जग्गाका मोहीहरु मैले संचालन गरेको लेखापढी केन्द्रमा आई मलाई भेटी ललिता निवास क्याम्प भित्रको जग्गाहरु मध्ये साविक काठमाडौं नगर वार्ड नं. २३ ह को कि.नं. १५ को क्षे.फ. २-३-०, कि.नं. २४ को क्षे.फ. ०-९-० समेतका जग्गाहरु पशुपती टिकिन्छा गुठीको भएको र हामी उक्त जग्गाको मोही भएकाले गुठीको नाममा जग्गा दर्ता गरी नामसारी हाल साबिक समेत गरी पाउँ भनी गुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन दिनु पर्यो भनेकाले निजहरुले भने बमोजिम निजहरुबाट प्राप्त प्रमाण कागजहरु समेत संलग्न राखी म वारेश बसी गुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन दिएको हुँ, गुठी संस्थानमा दिएका उल्लेखित निवेदनहरु उपर कारवाही चलिरहेकै बखत नेपाल सरकारले २०६६/२०६७ साल तिर बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार सम्बन्धी गुरुयोजना तयार पारी कार्यान्वयन गर्ने क्रममा म वारेश बसी गुठी संस्थान केन्द्रिय कार्यालयमा दिएको निवेदनमा उल्लेखित जग्गाहरु समेत परिसर क्षेत्र भित्र पर्ने र सो वापत परिसर क्षेत्र बाहिरको जग्गाबाट मोही हक वापत जग्गा दिने भन्ने नेपाल सरकार (म.प.) को निर्णय समेत भएकोले सोही मुताबिक मोहीहरुले भने बमोजिम मैले निवेदन लेखि मालपोत कार्यालय डिल्लिबजार काठमाडौंमा पेश गरेकोमा मालपोत कार्यालय डिल्लिबजार काठमाडौंको निर्णय बमोजिम निज मोहीहरुको नाममा जग्गा नामसारी दा.खा. भए पश्चात निज मोहीहरुले जग्गा बिक्री गर्ने भनी प्रस्ताव गरेकोले निजहरुसँग

मोल मोलाई गरी सहमति बमोजिमको मुल्य तिरी मालपोत कार्यालय काठमाडौंबाट रजिष्ट्रेशन पास पारित गराई खरिद गरी लिएको हो ।सम्मानित विशेष अदालतबाट प्राप्त मालपोत कार्यालयमा पेश गरेको काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको च.नं. १९८२ मिति २०५९/३/३२ गतेको पत्रको प्रतिलिपीको प्रथम पृष्ठको अन्तिम हरफमा कि.नं. ३७ क्षे.फ. १-१५-० जोताहा देव नारायण महर्जन र दोश्रो पृष्ठको अन्तिम हरफमा कि.नं. ७७ क्षे.फ. ०-१०-० र जोताहा द्वारिका मान महर्जन थप गरेको देखिएकोसम्बन्धमा तत्कालिन अवस्थामा गुठी संस्थान र मालपोत कार्यालय समेतमा निवेदन पेश गर्ने क्रममा आवश्यक भएको स्थानिय निकायको जोतभोगको सिफारिश मोहीहरुले ल्याई मलाई दिएकाले सोही सिफारिशलाई निवेदनसाथ संलग्न राखी पेश गरेको हुँ। तत्कालिन अवस्थामा के कुन मोहीले यसरी फरक व्यहोराको सिफारिश पत्र मलाई दिएका थिए, सो समेत यकिन भन्न सक्दिँन। मोहीहरुको आपसी सल्लाह बमोजिम मलाई वारेश राखि निजहरुको मोही छुट्याउने काम भएको हो। मैले कोहि कसैलाई डर त्रास देखाएको र प्रलोभनमा पारेको पनि होईन। निजहरुले किन त्यस्तो खुलाए मलाई थाहा भएन। मोहीहरु मध्ये बाबुराजा महर्जन र श्रीकृष्ण महर्जन समेतले अन्य मोहीहरु सँग सल्लाह गरी लेखापढी व्यवसायीको नाताले मलाई वारेश बसी मोही छुट्याई दिने काममा सहयोग गरी दिनु पर्यो भनी अनुरोध गरेकाले निजहरुको आग्रह बमोजिम ५७ जना मोहीहरु मध्ये करिब ४२/४३ जना मोहीहरुको वारेश बसी काम गरेको हुँ। डिल्लिबजारमा रहेको मेरो लेखापढी कार्यालयमा आएका बखत बाबुराजा महर्जन र श्रीकृष्ण महर्जन सँग चिनजान भएको र अन्य सँग निजहरु मार्फत चिनजान भएको हो। निजहरुको वारेश बसी काम गरेको लामो समय बिति सकेकोले निजहरु सबैको यकिन नाम थर वतन र सम्पर्क नम्बर समेत मलाई याद भएन। ललिता निवास क्याम्प भित्रको जग्गाहरु मोही भनिएका ब्यक्तिहरुको नाममा नामसारी हालसाबिक भई निजहरुको नाममा जग्गाधनी प्रमाण पुर्जा तयार भएर आएपछि निजहरुले उक्त जग्गाहरु बिक्री गर्ने प्रस्ताव गरेकाले सोहि प्रस्ताव स्वीकार गरी म समेतले निजहरुबाट जग्गा खरिद गरेका हौं। उल्लेखित जग्गाहरु खरिद गर्दा लिखतमा उल्लेखित रकम तिरी बुझाइ लाग्ने राजश्व समेत दाखिला गरी कानुन बमोजिम लिखत पास पारीत गरी जग्गा खरिद गरेको हो। यसरी जग्गा खरिद गर्दा मेरो भागमा परेको रकम नगदै भुक्तानी गरेको हुँ। उल्लेखित जग्गाहरु पटक पटक गरी खरिद गरिएको र खरिद गर्दा मेरो स्व -आर्जन बाट आएको रकम मध्ये बचत गरी राखेको केहि रकम, अंश बापत प्राप्त रकम र व्यक्तिगत ऋण समेत बाट खरिद गरेको र पछि खरिद गरेका जग्गाहरुको हकमा शुरुमा खरिद गरेका जग्गाहरु मिन बहादुर गुरुङ र निजका परिवारका सदस्यको नाममा समेत बिक्री गरी सोहि बाट प्राप्त रकम समेतबाट खरिद गरेको हुँ ।उल्लेखित जग्गाहरु मध्ये कि.नं. ५४ र १२९ का जग्गाहरु देव नारायण महर्जनबाट, कि.नं. ६१९ र ५९२ का जग्गाहरु तिर्थमाया महर्जनबाट, कि.नं. ५८६, ६१८, ६१६, १४३, ६२३, ५८६ र ६१४ का जग्गाहरु तिर्थमाया महर्जनबाट, कि.नं. ५४९ को जग्गा ग्वाराभाई महर्जनबाट कि.नं. ६२९ को जग्गा बाबुराजा महर्जनबाट र कि.नं. ६३८, ६४० र ६४६ का जग्गाहरु मचानानी महर्जनबाट शोभाकान्त ढकाल र म समेतको नाममा खरिद गरी लिएका हौं। यसै गरी कि.नं.५ र ३६ का जग्गाहरु श्रीकृष्ण महर्जनबाट, कि.नं. १३६ को जग्गा कान्छा महर्जनबाट, कि.नं. १४४, १३७, १३८ का जग्गाहरु देव नारायण महर्जनबाट उमा कुमारी ढकाल्नी र मेरो श्रीमती माधवी सुवेदीको नाममा खरिद गरी लिएको हो। उक्त जग्गाहरुको खरिद मिति र रकम समेत लिखतमा उल्लेख छ। उक्त जग्गाहरु खरिद गर्दा बिभिन्न व्यक्तिहरुबाट लिएको ऋण सापटीबाट खरिद गरिएको हो। मेरो आफ्नो स्व आर्जन बाट बचत गरेको रकम, मैले पैतृक अंश बापत पाएको रकम, आफन्तजनहरुबाट ऋण सापटी समेत लिई बि.सं. २०५७ साल देखि बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको केहि कित्ता

जग्गा सगोल दर्तामा रहने गरी साझेदारीमा खरिद गरेको हो, ऋण लिए दिएको लगायतका केहि कुनै किसिमको प्रमाण कागज हाल म सँग छैन । दाखिला गर्न सक्दिँन । ललिता निवास क्याम्प भित्रको केहि जग्गा पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गराउने क्रममा देव नारायण महर्जन समेतको वारेश भई मैले गुठी संस्थान केन्द्रिय कार्यालयमा निवेदन दिई मिसिल उठान भई कारवाहीको क्रममा गुठी कार्यालयबाट सो जग्गाको सम्बन्धमा के कसो हो ? भनी समरजंग कम्पनीलाई पत्राचार भएकोमा उक्त पत्र लिई म समरजंग कम्पनीको कार्यालयमा जाँदा उक्त कार्यालयका तत्कालिन प्रमुख अर्जुन भण्डारीले तपाईं लेखनदास मान्छे कस्तो खालको जवाफ लेख्नु पर्ने हो खेस्रा गरी दिनुहोस भनेकाले मैले खेस्रा गरी दिएको हुँ । देखाईएको खेस्रा सोहि अवस्थामा मैले तयार गरी दिएको खेस्रा हो । उक्त खेस्रा पत्रमा भएको हस्त लिपी मेरो हो । हेरी चिन्हि सनाखत समेत गरी दिएँ । सो अवस्थामा मैले समरजंग कम्पनिका तत्कालिन कार्यालय प्रमुख अर्जुन भण्डारीलाई रु. ४०,०००/- नगद दिएको पनि होईन, सानो टुक्रा घडेरी दिने सम्मको आश्वाशन दिएको होईन । आश्वाशन दिएको सम्बन्धमा मलाई थाहा भएन । उल्लेखित जग्गा सरकारी भएको सम्बन्धमा तत्कालिन अवस्थामा मलाई कुनै जानकारी थिएन । मोहीहरुले मलाई वारेश दिए बमोजिम मैले निजहरुको वारेश भई निवेदन समेत दिई निजहरुले अह्राए बमोजिमको काम गरेको हुँ, बिशिष्ट व्यक्तिको निवास परिसर बिस्तार गुरुयोजनामा परेका मोहीहरु र श्री पशुपति टिकिन्छा गुठीमा जग्गा दर्ता भई जग्गा प्राप्त गरेका व्यक्तिहरु समेत सुवर्ण शमसेरका हकवालाहरुले वि.सं. २०५० साल तिर भुमिसुधार कार्यालय काठमाडौंमा मोही लगत कट्टा गरी पाउँ भनी तिर्थमाया महर्जन समेतलाई प्रतिवादी बनाईदिएको निवेदनमा प्रतिवादी बनाईएका मोहीहरु हुन । यसरी साविक जग्गाधनीका परिवारले चिनेका मोहीहरु भएका कारण सोही आधार र भुमिसुधार कार्यालय काठमाडौं समेतले गरेको फैसलाबाट समेत कायम भएका मोही भएकाले सुवर्ण शमसेरका हकवालाहरुले प्राप्त गरेको जग्गामा मोहीयानी हक वापतको जग्गा प्राप्त गरीसकेको भएता पनि सो बाहेकका अन्य कित्ता जग्गाहरुमा मोहीयानी हक प्राप्त हुन बाँकी रहेको हुँदा सो समेतको लागि सम्बन्धित निकायमा निवेदन दिई मोहीयानी हक वापतको जग्गा प्राप्त गरेका हुन । म वारेश भई गुठी संस्थानमा पेश गरेको निवेदनमा नापीका बखत अज्ञानताले जग्गाधनी समरजंग कम्पनी लेखिन गएको भनी उल्लेख भएको सम्बन्धमा मलाई वारेशनामा दिने मोहीहरुले भने बमोजिमको निवेदन लेखि मैले गुठी संस्थानमा पेश गरेको हुँ । लेखापढी ब्यवासायीको नाताले मैले जे जती गरे, ललिता निवास क्याम्प भित्रका मोहीहरुले भने बमोजिम र निजहरुको कागज प्रमाणको आधारमानै गरे । जहा सम्म " कतियप कित्तामा मोही पक्षले माग गरेको जग्गामा निवेदक सित कायम भएको मोहीको नाता नमिल्ने तथा श्रेष्ता कायम नभएको" भन्ने व्यहोराको सम्वन्धमा निवेदकको माग दावी बमोजिम साबिक नापीका जग्गा कित्ताहरुलाई आधार मानी मागदावी गरिएको थियो । सो साबिक नापीका जग्गाहरु पुन: नया नापी हुँदा साबिक एउटा कित्ताको जग्गा अर्को कित्तामा गाभीन समेत गई नाप नक्सा समेत भएको हुँदा निवेदकको माग बमोजिमका जग्गा मालपोत कार्यालयले मेन्टिनेन्स नापी शाखा कार्यालयमा उल्लेखीत जग्गा कित्ताहरु हाल साबिक भिडाई पठाई दिने भनी मागदावीका प्रत्येक कित्ताहरु उल्लेख गरी पत्राचार समेत गरेबाट सोही मालपोत कार्यालय काठमाडौंको पत्रको आधारमा नापी कार्यालय काठमाडौंले साबिक नापीका जग्गा कित्ताहरु हाल नयाँ नापी बमोजिम यि-यि कित्ताहरु सँग भिडछ भनी कित्ताकाट गरी प्लट रजिष्ट्रर समेत कायम गरी नापी कार्यालयले मालपोत कार्यालय काठमाडौंलाई पत्राचार समेत गरेको र सोही नापीको पत्रको आधारमा हाम्रो जग्गा कित्ताहरु यसरी भिड्ने रहेछ भनी मोहीहरुले भने बमोजिम सोही नापीको पत्रको आधारमा मैले निवेदन लेखी मालपोत कार्यालयमा पेश

गरेको हो । निज ललिता निवास क्याम्प भित्रका जग्गा कमाई आएका मोहीहरुले ल्याएका कागज प्रमाणहरुको आधारमा मैले निवेदन लेखि दिई वारेश समेत बसी काम गरेको हुँ भन्ने समेत व्यहोराको बयान ।

**घ) प्रतिवादी राम कुमार सुवेदीको बयान (पशुपती टिकिन्छा गुठी २०६९):**

म लेखापढी ब्यवसाय गर्ने ब्यक्ति भएकोले ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गाका मोहीहरु संजय कुमार महर्जन र सकुलानन्द महर्जन, श्रीमती मोहन महर्जन, द्वारिकामान महर्जन, देवनारायण महर्जन समेतले मिति एकिन याद छैन अन्दाजी मिति २०५९/२०६० साल तिर) मसँग भेटी उनीहरुले हामीसँग भएको कागज प्रमाण फिल्डबुक उतार, भुमिसुधार कार्यालय काठमाडौंको २ नं. अनूसुची, निजहरुको नागरीकता प्रमाण पत्र, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानिय वडा कार्यालयको जोतभोग खुलेको सिफारिस पत्र, जग्गाधनीलाई कुतबाली वापत भुमिसुधार कार्यालय काठमाडौंमा बाली धरौटी राखेको रसिद लगायतका प्रमाण कागजातहरु देखाई हाम्रो तर्फबाट उल्लेखित जग्गाहरु श्री पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गर्न गुठी तहसिल कार्यालय कालमचन त्रिपुरेश्वरको नाममा निवेदन लेखि दिनुस भनी भनेकोले सोही बमोजिम मैले निवेदन लेखि दिएको हो । मैले निवेदन लेखि दिए पश्चात निज मोहीहरु र म भई गुठी तहसिल कार्यालय कालमचन त्रिपुरेश्वरमा पुगी निवेदन उक्त कार्यालयको दर्ता शाखामा बुझाउँदा दर्ता शाखाका कर्मचारीले गर्नु पर्ने काम, निवेदनमा तोक लगाउने, दर्ता गर्ने काम गरी सो निवेदन सम्बन्धित शाखामा बुझाई दिएको हो । त्यस पश्चात मोहीहरुले ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गाकालाई श्री पशुपती टिकिन्छा गुठी नाममा कायम गर्ने भनी वारेश लिखित रुपमा मलाई दिएकोले मैले मोहीहरुको हकमा जे जे गर्नु पर्ने कामहरु सम्बन्धित कार्यालयहरुमा पुगी आफैले गरेको हो । ललिता निवास क्याम्प भित्र रहेको ४-१४-३-२ रोपनी जग्गाको हकमा मैले निवेदन लेखि सम्बन्धीत गुठी तहसिल कार्यालय कालमोचन त्रिपुरेश्वरमा निवेदन दर्ता गराए पश्चात, सोही निवेदनबाट उठान भएको काम कारवाहीमा ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गाका २०७०/१/१७ मा साविक काठमाडौं नगर २३ क्ष को कि.न. ७३ (हाल सि.न.१०२५-१४ कि.नं.४८) र साविक काठमाडौं नगर २३ ह को कि.नं. २२ (हाल सि.नं.१०२५-१५ कि.नं. २६२,२६७,२९५,२५९)३१(हाल सि.नं.१०२५-१५ कि.नं. २७८,२८४,२३२) र ३५ (हाल सि.नं.१०२५-१५ कि.नं. ५६ र सि.नं.१०२५-२० कि.नं.८०) गरी नयाँ नापी अनुसार १० कित्ता जग्गाको हकमा गुठी कार्यालयले जग्गाधनी श्री पशुपती टिकिन्छा गुठी र निवेदकहरु मोहीहरु क्रमश: संजय कुमार महर्जन र सकुलानन्द महर्जन, श्रीमती मोहन महर्जन, द्वारिकामान महर्जन, देवनारायण महर्जन समेत कायम गरी जग्गा दर्ता गरी दिएको हो । निजहरुको नाममा जग्गा दर्ता भई सम्बन्धित निकायबाट जग्गाधनी प्रमाण पत्र बने पश्चात निज मोहीहरुले हामीहरुको मोहीयानि जग्गा बिक्री गर्छौं, तपाईहरुले किनी दिनुहोस भनेकोले सोही बमोजिम उक्त जग्गाहरु म र शोभा कान्त ढकाल भई आपसी सहमतीमा मूल्य कायम गरी मिति २०७०/१/२७ मा सम्बन्धित मालपोत कार्यालय मार्फत रजिष्ट्रेशन पास पारित गराई लाग्ने राजश्व तिरी संयुक्त दर्तामा रहने गरी खरिद गरी हालको नयाँ नापी अनुसार कि.नं. ४८, २५९, २६२, २६७,२९५ गरी ५ कित्ता जग्गाहरु मेरो श्रीमती माधवी सुवेदी र शोभा कान्त ढकालको श्रीमती उमा कुमारी ढकालको नाममा संयुक्त र हाल नापी अनुसार कि.नं. २३२,२७८,२८४,५६,८० गरी ५ कित्ता जग्गाहरु म राम कुमार सुवेदी र शोभाकान्त ढकालको नाममा संयुक्त रुपमा खरिद गरी लिएका हौ । उल्लेखित ललिता निवास क्याम्प भित्रको जग्गाहरु मध्ये केहि कित्ता जग्गा २०२१/२२ सालको नापी मै तयार भएको मालपोत कार्यालयमा रहने श्रेस्तामा जग्गाधनी कतै श्री ५ को सरकार गुठी कतै श्री ५ को सरकार लेखिएको र तिनै गुठी जनिएका जग्गाहरु समेत २०४२/०४३ साल तिर

गुठीको नाममा श्रेस्ता एकिकृत गरी श्रेस्तापूर्जा कायम रहेको समेत देखिएको लगायत १९९१/१९९४ सालमा सुवर्ण शमसेरको तहबिलमा मोहीहरुले कुतबाली बुझाएको भरपाई रसिदमा टिकिन्छा गुठी भनी उल्लेख भएको देखिएकोले तिनै प्रमाण कागजको आधारमा मैले निवेदन लेखि दिई मोहीहरुको आग्रह बमोजिम वारेश समेत भई काम गरी आएको हुँ। निवेदन लेख्ने क्रममा १९९१/१९९४ साल देखि सुवर्ण शमसेरका तहबिलमा उक्त जग्गा कमाए वापतमा कुतबाली तिरी आएको रसिद भरपाईम वारेश बसेका मोहीहरु मध्येका बाबुराजा महर्जनले ल्याई मलाई दिएका थिए।

उल्लेखित स्थानका जग्गाहरु मध्ये नगर ४ कि.नं. २७९ को क्षेत्रफल ०-१४-३-०, कि.नं. २७७ को क्षेत्रफल ०-१-३-०, कि.नं. २६५ को क्षेत्रफल ०-०-३-०, कि.नं. ३०८ को क्षेत्रफल ०-०-१-२, कि.नं. ५४८ को क्षेत्रफल १८८.७९ ब.मि. , कि.नं. १४२ को १७४.८८ ब.मि., कि.नं. ७४७ को ७२.२९ ब.मि., कि.नं. ७५३ को ९.९५ ब.मि., कि.नं. ११ को क्षेत्रफल १-५-३-२, कि.नं. २६ को क्षेत्रफल ८७.४४ ब.मि., कि.नं. ३८ को क्षेत्रफल १३१.१६ ब.मि., कि.नं. १४४ को २९.८५ ब.मि., कि.नं. ५ को क्षेत्रफल ०-६-०-२, कि.नं. ३६ को क्षेत्रफल ४१२.३५ ब.मि., कि.नं. १३६ को १६६.९३ ब.मि., कि.नं. ७५१ को १३६१.७६ ब.मि., कि.नं. २६६ को ०-०-३-०, कि.नं. ८ को ०-०-३-३, कि.नं. २९४ को ०-०-३-१, कि.नं. ३१६ को ०-७-३-१ र पशुपति टिकिन्छा गुठीको कि.नं. ४८ को क्षेत्रफल ०-३-०, कि.नं. २६२ को क्षेत्रफल ०-१०-३-०, कि.नं. २६७ को क्षेत्रफल ०-१३-३-३, कि.नं. २९५ को क्षेत्रफल ०-२-१-०, कि.नं. २५९ को क्षेत्रफल०-२-१-१ जग्गा मेरोश्रीमती माधवी सुबेदी र उमा कुमारी ढकालको संयुक्त नाममा छ।

यसरी साविक जग्गाधनीका परिवारले चिनेका मोहीहरु भएका कारण सोही आधार र भुमिसुधार कार्यालय काठमाडौं समेतले गरेको फैसलाबाट समेत कायम भएका मोही भएकाले सुवर्ण शमसेरका हकवालाहरुले प्राप्त गरेको जग्गामा मोहीयानी हक वापतको जग्गा प्राप्त गरीसकेको भएता पनि सो बाहेकका अन्य कित्ता जग्गाहरुमा मोहीयानी हक प्राप्त हुन बाँकी रहेको हुँदा सो समेतको लागि सम्बन्धित निकायमा निवेदन दिई मोहीयानी हक वापतको जग्गा प्राप्त गरेका हुन। म वारेश भई गुठी संस्थानमा पेशगरेको निवेदनमा नापीका बखत अज्ञानताले जग्गाधनी समरजंग कम्पनी लेखिन गएको भनी उल्लेख भएको सम्बन्धमा मलाई वारेशनामा दिने मोहीहरुले भने बमोजिमको निवेदन लेखि मैले गुठी संस्थानमा पेश गरेको हुँ। सिट नं. १०२-१०२५-१५, कि.नं. २७८,२८४, २३२,५६,८०,१७१ भएको जग्गाधनी प्रमाण पूर्जामा जग्गा धनि टिकिन्छा गुठी भएको, मोही महलमा म र शोभा कान्त ढकालको नाम भएको जग्गाधनी प्रमाण पूर्जा म समेतको हो। उक्त जग्गाधनी प्रमाणमा भएको फोटो म र शोभा कान्त ढकाल समेतको हो, सनाखत गरी दिएँ। उक्त जग्गा बिक्रीमा आएको र उक्त स्थानमा हाम्रो अरु जग्गा पनि भएको हुँदा साँध सिमानामा भएको जग्गा खरिद गर्ने भन्ने निर्णय भएको हुँदा उक्त जग्गाको मोहीयानी भाग खरिद गरेको हो। उक्त जग्गा खरिद गर्न पूर्व उक्त जग्गाको ज.ध.प्र.पूर्जा हेरि मालपोत कार्यालयबाट पास पारित हुने जानकारी लिई लिखत अनुसारको रकम बुझाई, अड्डामा लाग्ने दस्तुर बुझाई राजिनामाबाट संगोलमा खरिद गरेको हो, बरामद भई आएका जग्गाधनी प्रमाण पूर्जामा उल्लेखित जग्गा कित्ताहरु केही कतै धितो बन्धक राखि ऋणि लिने काम आजका मिति सम्म भएका छैन। मिसिल संलग्न रहेको नेपाल सरकार समरजंग कम्पनीको च.नं. ०५ को पत्र र सोही पत्रसाथ संलग्न रहेको हस्तलिखित खेस्रा पत्र देखाउदा देखि पाएँ सो खेस्रा पत्रमा भएको हस्ताक्षर मेरो हो सनाखत समेत गरी गरीदिए। समरजंग कम्पनीका तत्कालीन कार्यालय प्रमुख अर्जुन प्रसाद भण्डारीले गरी दिएको कागजमा काम गराए वापत रु. ५० हजार दिन्छु भनेको र दिने वेलामा रु. ४० हजार दिएको भनी खुलाएको सम्बन्धमा मलाई थाहा भएन। सो जग्गा

हाल मात्र नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा रहेछ भन्ने थाहा भयो । यी सवै कामहरु मैले निवेदकहरुले भने बमोजिम वारेसमा भई लेखापढी व्यबसायीको हैसियतमा निर्वाह गरेको हुँ उक्त सरकारी लिखत र तथ्यहरुको बारेमा हालमात्र थाहा भयो । पशुपति टिकिन्छा गुठीको भनी हाल मेरो नाममा समेत रहेको उल्लेखित कित्ता जग्गाहरु कानूनत: नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम हुन गएमा मलाई कुनै आपत्ति छैन । उक्त जग्गा म र शोभाकान्त ढकाल समेतले खरिद गरेको हो । उक्त जग्गा साबिक नगर २४(क) कि.नं. २१३ को क्षे.फ.०-४-३-० जग्गा लक्ष्मी नारायण महर्जनबाट मोही चन्द्र माया महर्जनको नाममा ना.सा.एवं हा.सा.दर्ता हुन आएको जग्गा हो । उक्त जग्गा ललिता निवास क्याम्प भित्रको कारबाहीमा आएका कित्ता जग्गा मध्येको होईन । ललिता निवास भन्दा बाहिरको जग्गा हो । म समेतको नाममा रहेको उल्लेखित ४-१४-०३-०२ क्षेत्रफलको जग्गाको काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको च.नं. २०१५ मिति २०७८।०८।२७ गतेको पत्रमा उल्लेखित चलनचल्तीको मुल्य अनुसार कुल मुल्य **रु.४७,३२,२०,०००/- ( सतचालीस करोड, बत्तिस लाख, बीस हजार)** हुन आएको थाहा भयो । यदि उल्लेखित जग्गाको दर्ता प्रकृया नै गलत हो भने उक्त कार्यमा संलग्न व्यक्ति र कर्मचारी समेतको उल्लेखित विगो रकम तिर्ने दायित्व रहन्छ भन्ने समेत व्यहोराको प्रतिवादी राम कुमार सुवेदीको बयान।

**३. प्रतिवादी शोभाकान्त ढकालको बयान:**

**(क) प्रतिवादी शोभाकान्त ढकालको बयान (जग्गा फिर्ता २०४९):**

राम कुमार सुवेदीसँग २०५७ सालको अन्तिमतिर जग्गा किन्ने प्रयोजनको लागी परिचय भएको हो । २०५७ सालको अन्तिम तिर निज राम कुमार सुवेदीले वालुवाटारको जग्गा बिक्रिमा छ, म सँग पुरा पैसा छैन मिलेर किनौ भन्ने प्रस्ताब राखेपछी प्रस्ताब अनुसार निजको श्रीमती माधवी सुवेदी र उमा कुमारीको नाममा जग्गा किन्ने तय भएको हो । उक्त खरिद भएको जग्गामा साविककै ज.ध.को भागमा ४/६ भाग यथावत राखी १/६ भाग माधवी सुवेदीको भागमा राखिएको र बाँकी १/६ भाग (करिब ३ रोपनी) जग्गा उमा कुमारीको नाममा हुने गरी संगोलमा राजीनामाबाट खरिद गरेको हो । यसै सन्दर्भमा राम कुमार सुवेदीसँग चिनजान सम्बन्ध हुन गएको हो । त्यसभन्दा पहिले कुनै सम्बन्ध थिएन । निज राम कुमार सुवेदी लेखापढी व्यबसाय पनि गर्ने र संगोलमा जग्गा भएको हुँदा उक्त कागजातहरु निजको घरमा रहन गएको हो ।२०५७ सालमा राम कुमार मार्फत जग्गा किन्ने प्रशताव आएको उक्त प्रशतावमा करिब ३ रोपनी जग्गा किन्नु पर्ने र उक्त जग्गाको करिब २४ लाख लगानी गर्नुपर्ने कुरा आएको, उक्त जग्गा पछी प्लट मिलाएर दिने, प्लट मिलाएर नदिदाँ सम्म उक्त जग्गाको रेखदेख एबं उक्त जग्गा सम्बन्धमा जग्गाधनीले नै सम्पुर्ण काम कारबाही गरीदिने कुरा भएको हुँदा संगोलनामामा जग्गा खरिद गरेको हो । यसरी जग्गा खरिद गरी लिदा मेरो परेको लगानि सुरक्षित भएको हुँदा खरिद गरी लिएको हो । का.जि.का.म.पा.वडा नं.४ वालुवाटार स्थित ललिता निवासको जग्गाको अधिग्रहण भएको बारेमा मलाई कुनै थाहा जानकारी थिएन । उक्त जग्गाका सम्बन्धमा म समेतलाई दिपक राज जोशीले काठमाडौं जिल्ला अदालतमा प्रतिवादी बनाई मुद्दा दायर गरेपछी मात्र बिबादको विषय थाहा हुन आएको हो । म र मेरो परिवारले उक्त क्षेत्रमा खरिद गरेको जग्गा ज.ध.प्र.पु. भएको जग्गा मात्र खरिद गरी लिएको हो । राणा परिवारसँग २०५९/०६० सालमा जग्गा किन्ने प्रयोजनको लागी तत्कालिन राणा परिवारको वकिल युवराज कोईरालाले लगेर परिचय गराएका हुन् । ललिता निवास क्याम्प भित्रको जग्गा २०६०/१२/२५ ,२०६१/०१/०८ मा राणा परिवारबाट एकै दिन एकै समयमा मिन बहादुर गुरुङको नेतृत्वमा ११ जना व्यक्तीहरुले खरिद गरी लिएको मलाई याद छ । यसै दिन मेरी श्रीमतीले केही जग्गा खरिद समेत गरेको हो । मेरो परिवारको नाममा रहेको

वालुवाटारको जग्गा डि.एल.एफ. समेतलाई बिक्रि गराउने कार्य मिन बहादुर गुरुङ समेतबाट भएको हो। म ,राम कुमार सुवेदी,मिन बहादुर गुरुङ र साबित्री गुरुङको नाममा भाटभटेनी डेभलपमेन्ट कं.प्रा.लि.नामको कम्पनी दर्ता रहेको छ। सो कम्पनीमा मिन बहादुर गुरूङ र साबित्री गुरुङको ५१ प्रतिशत सेयर , म र राम कुमार सुवेदीको ४९ प्रतिशत सेयर रहेको छ। २०५७ सालको अन्तिम तिर राम कुमार सुवेदीले वालुवाटारको जग्गा बिक्रिमा छ, मसँग पुरा पैसा छैन मिलेर किनौ भन्ने प्रस्ताब राखेपछी प्रस्ताब अनुसार निजको श्रीमती माधवी सुवेदी र उमा कुमारीको नाममा जग्गा किन्ने तय भएको हो। म र मेरो श्रीमतीले ललिता निवास भित्रको जग्गा खरिद गर्दा जग्गाधनी प्रमाणपुर्जा भएका ज.ध.हरुबाट खरिद गरी लिएको हो। मिति २०५७ सालको अन्तिम तिर राम कुमार सुवेदीले वालुवाटारको जग्गा बिक्रिमा छ, म सँग पुरा पैसा छैन मिलेर किनौ भन्ने प्रस्ताब राखेपछी प्रस्ताब अनुसार निजको श्रीमती माधवी सुवेदी र उमा कुमारीको नाममा जग्गा किन्ने तय भएको हो। उक्त खरिद भएको जग्गामा साविककै ज.ध.को भागमा ४/६ भाग यथावत राखी १/६ भाग माधवी सुवेदीको भागमा राखिएको र बाँकी १/६ भाग (करिब ३ रोपनी) जग्गा उमा कुमारीको नाममा हुने गरी संगोलमा राजीनामाबाट खरिद गरेको हो। माथि उल्लेखित हक हिस्सा अनुसार करिब १८ रोपनी जग्गामा संगोलमा हुन पुगेको हो तर बास्तबमा उमा कुमारीले करिब २४ लाख लगानी गरेको र उक्त लगानीले करिब ३ रोपनीमा हक हिस्सा हुने अवस्थामा खरिद गरिएको हो। उक्त जग्गाको हालसाबिक साबिककै जग्गा धनिको पहलमा भएको र निजहरुकै पहलमा उक्त जग्गा बिक्री समेत भईसकेको हुँदा घटबढको बारेमा थाहा जानकारी हुने विषय भएन। उमा कुमारी र माधवी सुवेदीले माथी उल्लेखित ४ जना मोही भनिएका जग्गाधनीको हालसाविक हुँदा कुनै क्षेत्रफल बढी नभएको सम्म मलाई थाहा छ। मेरो श्रीमती समेतका नाममा खरिद गरेको जग्गा गेहनाथ भण्डारी र राम कुमारजी मार्फत जग्गाधनीहरुसँग जग्गा खरिद गर्ने काम भएको हो। गेहनाथ भण्डारीको श्रीमती भुवन कुमारी चाँपागाई समेतको जग्गा निज गेहनाथ भण्डारी र राम कुमार सुवेदी साक्षी बसि बिक्री गरेको हो। मिति २०५७ सालमा राम कुमार सुवेदी मार्फत उक्त जग्गा बिक्रीमा आएको जानकारी हुन आएको हुँदा उहाकै सल्लाह अनुसार म र मेरो परिवारले ललिता निवास क्याम्प भित्रको जग्गा खरिद गरेका हौं। उक्त ललिता निवास भित्रको जग्गा खरिद गर्दा जग्गा धनि प्रमाणपुर्जा भएको जग्गा मालपोत कार्यलयको रजिष्ट्रेशन फाँटबाट प्रचलित कानूनी प्रकृया पुरा गरी खरिद गरी लिएको हो। मोही कायम हुने कुरा, जग्गा सरकारी हो, होईन भन्ने कुरा सम्बन्धित व्यक्ती र सम्बन्धित अड्डाको हो। ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाहरु हिनामिना भएको कुरा हामीले जग्गा खरिद गरी लिनु भन्दा अगाडी नै भएको कार्य हो भन्ने समेत व्यहोराको प्रतिवादी शोभाकान्त ढकालको बयान।

**ख) <u>प्रतिवादी शोभाकान्त ढकालको बयान (छुट जग्गा दर्ता २०६२):</u>**

लिखितम हामी तपसिलमा लेखिएका मानिसहरु आगे, का.जि. का.म.न.पा. वडा न.२३ स साबिक किता न.१६ किता काट भई कायम हुन आएको किता न.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा किता १ दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा लिन बाकी रहेकोमा हामी समेतको नाममा रहेको साबिक लगत मौजा हाडीगाउ हा.न.४५६ को २७२॥।३॥२॥ बाट भिडी दर्ता हुने जग्गा सुबर्ण शमसेरको बुहारी कनक शमसेरको श्रीमती का.जि.का.म.न.पा. वडा न.४ बस्ने सुनिती राणाको नाममा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा दिएमा हामीहरुको पुर्ण मन्जुरी छ पछि मन्जुर छैन भनी कुनै अड्डा अदालतमा कुनै प्रकारको उजुर बाजुर गर्ने छैनो गरेमा यसै मन्जुरीनामाको कागजले बद्दर गरी दिएमा हाम्रो मन्जुरी छ हामीले अड्डा अदालतबाट लागेको दण्ड जरिवाना दसौद आदेशले बाकी रहेको कोर्ट फि सरकारी बिगो समेत तिर्न बुझाउन बाँकी छैन। किनाराका साक्षीहरुका रोहबरमा हाम्रो राजीखुसी

मन्जुरीले यो मन्जुरीनामा कागज लेखि लेखाई सहिछाप गरी मालपोत कार्यालय काठमाडौंमा चढायौ" मुकाम मालपोत कार्यालय काठमाडौं डिल्लीबजार हो भन्ने ब्यहोरा उल्लेख भएको मिति २०६०।०३।२३ को मन्जुरीनामा कागजमा साक्षीको रुपमा मेरो नाम शोभाकान्त ढकाल भएको स्थानमा भएको दस्तखत मैले गरेको हो फरक छैन हेरी चिनि सनाखत गरीदिए । उक्त मन्जुरीनामाको कागजमा रुक्म शमसेर, शैलजा राणा, हाटक शमसेर, हेमन शमसेरले उक्त जग्गा दर्ताको लागि मन्जुरीनामा दिएको थाहा भएको हो । उक्त कागजबाट निजहरुको जग्गा दर्ता हुने वा नहुने मलाई जानकारी थिएन । निजहरुको वकिल युवराज कोईरालाले काठमाडौं बतिसपुतली स्थित रुक्म शमसेरको घर साक्षी बसी दिनु पर्यो भनेको हुँदा साक्षी बसि दिएको हो भन्ने ब्यहोराको प्रतिवादी शोभाकान्त ढकालले गरेको बयान ।

ग) **प्रतिवादी शोभाकान्त ढकालको बयान (जग्गा सट्टापट्टा २०६७):**

मिति २०७८/०९/०८ गतेको का.जि.का.म.पा ११ ताहाचल स्थित घर नं.१९, रामकुमार सुवेदीको घरमा गरेको खानतलासी बरामदी मुचुल्का साथ बरामद भई आएको शोभाकान्त ढकाल र रामकुमार सुवेदीको संयुक्त नामको का.म.पा ४ स्थित कित्ता नं.५४ र १२९ को जग्गाको सक्कल जग्गाधनी प्रमाण पुर्जा थान -१, समेतका म र मेरो परिवारका नामका जग्गाहरुको जग्गाधनी प्रमाण पुर्जा लगायतका कागजातहरु सम्बन्धमा वि.सं. २०५७ साल तिर रामकुमार सुवेदीले बालुवाटारको जग्गा बिक्रीमा आएको छ, मैले पनि किन्ने बिचार गरेको छु, तपाईंले पनि किन्ने भए घर सल्लाह गरेर किन्नुहोस भन्नु भएको हुँदा मैले घर सल्लाह गरी मेरी श्रीमतीको नाउँमा राम कुमार सुबेदीले भने अनुसार सगोलमा रहने गरी मालपोत कार्यालय डिल्लिबजारमा गई लिखत अनुसार आफ्नो भागमा परेको रकम तिरी तोकिएको राजश्व दाखिला गरी बाँडफाँडबाटजग्गाधनी प्रमाण पुर्जा प्राप्त गरेका उल्लेखित जग्गामा रहेका साबिकका मोहीहरुबाटराजिनामा पास गरी जग्गा हक हस्तान्तरण गरी लिएको हुँ, उल्लेखित जग्गाहरु म, मेरो श्रीमती तथा निज राम कुमार सुवेदी र निजको श्रीमती समेतको संयुक्त नाममा रहेको जग्गाहरु भएको, निज राम कुमार सुवेदी लेखापढी व्यवसायी समेत भएकोले उल्लेखित जग्गाधनी प्रमाण पुर्जाहरु र राजिनामा लिखत समेतका कागजातहरु निजकै घरमा सुरक्षित राखिएको हो, हाल निज राम कुमार सुवेदी, मिन बहादुर गुरुङ, साबित्री गुरुङ र म समेतको संयुक्त स्वामित्वमा भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि. समेत कम्पनि रजिष्ट्रारको कार्यालयमा दर्ता भई संचालनमा रहेकोले सो कम्पनिको व्यावसायिक साझेदार समेत हुन ।तत्कालिन श्री ५ को सरकारको मिति २०२१।०८।१५ गतेको निर्णय अनुसार अधिग्रहण गरेको बालुवाटार स्थित ललिता निवास क्याम्पको जग्गा सम्बन्धमा उल्लेखित जग्गा सरकारी हो भन्ने विवाद आए पश्चात अधिग्रहण सम्बन्धमा नेपाल गजेटमा प्रकाशित भएको सुचना अध्ययन गरेको छु । मेरो परिवारका सदस्यहरुको नाममा बिभिन्न व्यक्तिहरुबाट खरिद गरी लिएको जग्गाहरु मध्ये भुवन कुमारी चापागाईं र उर्मिला शाहबाट मेरो श्रीमती उमा कुमारी ढकाल्नी समेतको संयुक्त नाममा खरिद गरेको साविक कि.नं. ११ हालको कि.नं. २४३ र ८२ को क्षे.फ. ०-११-२-० जग्गा,विनिता अधिकारी र सुधिरा भट्टराईबाट मेरो छोरी लक्ष्मी ढकालको नाममा खरिद गरेको कि.नं. ३ को क्षे.फ. ०-३-०-२ जग्गा, कि.नं. २ को क्षे.फ. ०-०-१-१ जग्गा र कि.नं. ११५ को क्षे.फ. १-१५-२-० जग्गा बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना अन्तर्गत पर्ने भएको, उक्त जग्गा लक्ष्मी ढकालले लिनु पुर्व बिनिता अधिकारी, सुधिरा भट्टराई, चमेली श्रेष्ठ, बाबा कार्की, खेमलाल खरेल , अगम ढुङ्गाना समेत छ जनाको नाममा कायम भएकोमा सो मध्येका बिनिता अधिकारी र सुधिरा भट्टराईले मिति २०६३ साल असोज १ गते रजिष्ट्रेशन नं.५९६ "ग" बाट राजिनामा पास गरी उक्त जग्गा हाल लक्ष्मी ढकाल, चमेली श्रेष्ठ, बाबा कार्की, खेमलाल खरेल र अगम ढुङ्गानाको संयुक्त

नाममा हालको सिट नं. १०२५-१५ को कि.नं.२१९, ६१३,६१७, सिट नं. १०२५-१९ को कि.न.१४,३४ र १०२५-२० को कित्ता नं. १२८ का जग्गाहरु रहेका छन् । सो सम्बन्धमा उक्त जग्गाको सट्टापट्टा सोधभर्ना वापत जग्गा उपलब्ध गराउने भन्ने नेपाल सरकार (म.प.) बाट निर्णय भए बमोजिम आफ्नो हकभोगको जग्गाको सम्बन्धमा परिवारका सदस्यहरुले सट्टापट्टा सोधभर्नाको लागि मालपोत कार्यालय डिल्लिबजार, काठमाडौंमा निवेदन पेश गरी मालपोत कार्यालय डिल्लिबजार काठमाडौंको निर्णय बमोजिम सट्टापट्टा सोधभर्ना वापतको जग्गा प्राप्त गरेको हो ।। जाहेरवालाले आफ्नो जाहेरी दरखास्तमा किन त्यस्तो व्यहोरा लेखाए मलाई थाहा भएन । राम कुमार सुबेदीले बालुवाटारको जग्गा बिक्रीमा आएको छ, मैले पनि किन्ने बिचार गरेको छु, तपाईंले पनि किन्ने भए घर सल्लाह गरेर किन्नुहोस भन्नु भएको हुँदा मैले घर सल्लाह गरी मेरी श्रीमतीको नाउँमा राम कुमार सुबेदीले भने अनुसार सगोलमा रहने गरी मालपोत कार्यालय डिल्लिबजारमा गई लिखत अनुसार आफ्नो भागमा परेको रकम तिरी तोकिएको राजश्व दाखिला गरी बाँडफाँडबाटजग्गाधनी प्रमाण पुर्जा प्राप्त गरेका उल्लेखित जग्गामा रहेका साबिकका मोहीहरुबाटराजिनामा पास गरी जग्गा हक हस्तान्तरण गरी लिएको हो । २०५७ साल भन्दा पहिले हाम्रो परिवारले बालुवाटारमा जग्गा खरिद गरी लिएको छैन । खरिद गरी लिएका जग्गाहरुमा साबिकका जग्गाधनीहरुको जग्गामा ४/६ भाग जग्गा निज मोही भनिएका जग्गाधनीहरुको भागमा यथावत राखी १/६ भाग माधबी सुवेदीको भागमा र १/६ भाग मेरी श्रीमती उमा कुमारी ढकालको नाममा राजिनामाको व्यहोराबाट सगोलमा रहने गरी खरिद गरेको हो । मेरी श्रीमती उमाकुमारी ढकालको नाममा करिब ३ रोपनी जग्गा खरिद गरेको र उक्त जग्गामा करिव रू. २४ लाख लगानी भएको हो । उल्लेखितजग्गाहरु २०६०/०९/१५ मा हालसाबिक भए पछि मेरी श्रीमती उमाकुमारी ढकाल सँग सगोलमा रहेका जग्गाधनी र माधबी सुवेदी समेतले उक्त जग्गा मिन बहादुर गुरुङलाई बिक्री गर्ने निर्णय गरेको हुँदा सोही निर्णय अनुसार मिति २०६०/११/२५ र मिति २०६०/११/२९ मा ११ जना मोहीहरु र मेरी श्रीमती उमा कुमारी ढकाल समेतले बिक्री गरेका हौ । हाल साबिक गरेका मोही मध्येका अष्टनारायण महर्जन, हेरा माया महर्जन, मयजु महर्जन र मचाम प्रजापतीको जग्गा भाग मात्र राजिनामाको व्यहोराले उमा कुमारी ढकाल र माधबी सुवेदीले राजिनामाको व्यहोराबाट छोडपत्र गरी लिएको हो । बाँकी लक्ष्मी महर्जन लगायतका ६ जना मोही भनिएका जग्गाधनीहरुको जग्गा रजिष्ट्रेशन नं.३९४४ मिति २०६२/०५/३० मा सरला घले गुरुङलाई बिक्री गरेको हो । मेरो श्रीमती उमा कुमारी ढकालको नाममा ४ जना मोही मध्येको आधा भाग मात्र हक हिस्सा खरिद गरेको हो । उक्त जग्गामा लगानी भएको रकम राजिनामाको छोडपत्रमा उल्लेख रहेको छ । उक्त जग्गाको भुक्तानी बिक्री भएको जग्गा र बैंकबाट लिएको ऋणबाट नगदै भुक्तानी गरेको हो । मोही भनिएका जग्गाधनीहरु माधबी सुवेदी र मेरी श्रीमती उमा कुमारी ढकालले संयुक्तमा रहेको जग्गा मिन बहादुर गुरुङलाई बिक्री गर्ने निर्णय गरेको हुँदा सोही निर्णयलाई स्विकार गरी मिति २०६०/११/२५ र मिति २०६०/११/२९ गते मिन बहादुर गुरुङलाई ११ जना जग्गाधनीहरुले बिक्रीगरेका हुन । मलाई सम्झना भए सम्म सुनिति राणा समेतको जग्गा मिति २०६०/१२/२५ र मिति २०६१/०१/०८ गते सुवर्ण शमसेर राणाका हकदारहरुले एकै दिन एकै समयमा ११ जना ब्यक्तिहरुलाई जग्गा बिक्री गरेका हुन, मेरी श्रीमती उमा कुमारी ढकालले मात्र उक्त समयमा सुवर्ण शमसेर राणाका हकवालाहरु सँग केही जग्गा खरिद गरेको हो । उक्त जग्गाको भुक्तानी जग्गा खरिद गर्ने ११ जना मध्ये मेरी श्रीमती आफ्नो भागको रकम मिन बहादुर गुरुङ मार्फत शैलजा राणा समेलाई दिएको हो । यसरी उल्लेखित जग्गाहरु खरिद गर्दा साविक जग्गाधनीहरु मध्ये अधिकांशलाई नगदै र सुवर्ण शमसेर राणाका हकदारहरुलाई मिन बहादुर गुरुङले भुक्तानी गर्नुभएको हो । पैसाको मामलामा मिन बहादुर गुरुङलाई सबैले विश्वास गर्ने भएकोले जग्गा रजिष्ट्रेशन पास गर्ने

समयमा वहाँलाई रकम भुक्तानि गर्न जिम्मा दिएका हौं । अन्य भुवन कुमारी चापागाईं, शोदा कुमारी चापागाईं, उर्मिला शाह समेतका व्यक्तिहरुबाट समेत उल्लेखित स्थानका केहि कित्ता जग्गाहरु मेरो श्रीमती उमा कुमारी ढकालको नाममा खरिद गरी लिएकोमा उल्लेखित जग्गाहरु मध्ये अधिकांश कित्ता जग्गाहरु समेत डि.एल.एफ. प्रा.लि., भाटभटेनी डेभलपमेण्ट कम्पनी प्रा.लि., मिन बहादुर गुरुङ समेतलाई बिक्री भईसकेको छ । निजहरुले तोकेको रकम तिरी जग्गा खरिद गरेको हो । मैले निज मोही भनिएका व्यक्तिहरु सँग राम कुमार सुबेदीले ल्याएको प्रस्ताव अनुसार जग्गा खरिद गरेको हुँ, उल्लेखित जग्गाहरुमध्ये सिट नम्वर १०२५-१४ को कित्ता नम्वर १२ बाट कित्ताफोड भई कायम कि.नं. १४२ र सिट नम्वर १०२५-१५ को कित्ता नम्वर १०६ बाट कित्ता नं. ५४८ को जग्गा माधवी सुवेदी र मेरो श्रीमती उमा कुमारी ढकालको संयुक्त नाममा नेपाल सरकार (म.प.) को निर्णय र मालपोत कार्यालय डिल्लिबजार काठमाडौंको निर्णय समेतबाट सट्टापट्टा सोधभर्ना वापत प्राप्त भएको हो । अन्य जग्गाहरुको हकमा साबिक जग्गाधनीहरुलाई तोकिएको रकम तिरी बुझाई मालपोत कार्यालय डिल्लिबजारबाट तोकिएको राजश्व दाखिला गरी राजिनामा लिखत पास गरी म र मेरो श्रीमती समेतको नाममा स्वामित्व हस्तान्तरण भई आएको हो । उल्लेखित जग्गा खरिद गर्दा मेरो परिवार समेतको नाममा रहेको जग्गाहरु बिक्री बाट प्राप्त रकम, एस फाईनान्स लि., नेपाल ईन्भेष्टमेण्ट बैंक लि., एन.सि.सि. बैंक, यति डेभलपमेण्ट बैंक, मेगा बैंक, ग्लोबल बैंक समेतबाट ऋण, व्यक्तिगत ऋण, कृषिबाट प्राप्त आय समेतबाट खरिद गरी लिएको हो । मैले रेना गुरुङ, डिएलएफ डेभलपर्स प्रा.लि. समेतका बिभिन्न व्यक्ति र संस्थाहरुबाट खरिद गरेको उल्लेखित जग्गाहरु हाल सम्म मेरो र मेरो परिवारका सदस्यहरुको नाममा दर्ता कायम छ । म विगत ११ महिना देखि डिल्लिबजार कारागारमा रहेकोले के कति क्षेत्रफलको के कुन कित्ता जग्गाहरु मेरो परिवारको के कुन सदस्यको नाममा छ हाल यकिन भन्न सक्दिँन । राजिनामा लिखत र जग्गाधनी प्रमाण पुर्जाहरुमा उल्लेख छ । उक्त जग्गा खरिद गर्दा साबिकका जग्गाधनी र राम कुमार सुबेदीको श्रीमती माधवी सुबेदी समेत भई सगोलमा रहने गरी खरिद गर्ने सहमती भई सोहि बमोजिम खरिद गरिएको हुँदा साँध सिमाना छुट्याउने काम गरीएन । म र मेरो परिवारले खरिद गरेका जग्गा व्यक्ति बिशेषको नाममा जग्गा धनि प्रमाण पुर्जा भएको जग्गा मात्र खरिद गरेको हो। उक्त जग्गाको खरिद गर्नु पुर्व जग्गा धनि प्रमाण पुर्जा हेरि मालपोत कार्यालयबाट पास पारित हुने जानकारी लिई रोक्का मोठ ठिक छ भन्ने बुझि लिखत अनुसारको रकम तत्कालिन जग्गाधनीलाई बुझाई अड्डामा लाग्ने दस्तुर बुझाई प्रचलित कानूनी प्रक्रिया पुर्या ई जग्गा खरिद गरेको हो । उल्लेखित जग्गाहरु म समेतले तत्कालिन जग्गाधनीले तोकेको मोल बुझाई लाग्ने राजश्व समेत दाखिला गरी खरिद गरेको जग्गाहरु हो । मैले जग्गा खरिद गर्दाका बखत समेत उक्त जग्गाहरु सरकारी भन्ने कुरा थाहा पनि थिएन । कर्मचारीहरुलाई उपयोग गरी कागजातहरु मिलाउने, नक्कली मोहीहरु खडा गर्ने लगायतका काम म बाट भए गरेको होईन, ललिता निवास क्याम्प भित्रका जग्गाहरु मध्ये नगर ४ कि.नं. ४०६, ४०८ र ४२० समेत गरी जम्मा क्षेत्रफल ०-११-०-० जग्गा मेरो एकल नाममा छ । नगर ४ कि.नं. ७७, ७९, ८१, ८६ र ११३ समेत गरी जम्मा क्षेत्रफल १-६-०-० जग्गा म र मेरी श्रीमती उमा कुमारी ढकालको नाममा छ । नगर ४ कि.नं. १३७ को क्षेत्रफल १२५.२० ब.मि. जग्गा, कि.नं. १३८ को ४३.७२ ब.मि., कि.नं. ५४ को ३५.७७ ब.मि. कि.नं. १२९ को ५१३.५० ब.मि., कि.नं. ६४२ को ३२.३१ ब.मि., कि.नं. ६४० को ११०.४८ ब.मि., कि.नं. ६४४ को ४८.३६ ब.मि., कि.नं. ६४६ को १९९.५४ ब.मि., कि.नं. ६३८ को ५३.६६ ब.मि., कि.नं. ६२३ को ६६.५८ ब.मि., कि.नं. ६१४ को ५८८.२३ ब.मि., कि.नं. १४३ को ९३.४० ब.मि. र कि.नं. ६३६ को जग्गा र पशुपति टिकिन्छा गुठीको कि.नं. ५६ को ३६२.८० ब.मि.,कि.नं. ८० को ०-३-२-०,कि.नं. २७८ को १-११-२-२,कि.नं. २८४ को ०-२-३-०,कि.नं.

२३२ को ०-१-१-० र कि.नं. १७१को १५०.५१ ब.मि. जग्गा म र राम कुमार सुबेदीको नाममा छ। नगर ४ कि.नं. २७९ को क्षेत्रफल ०-१४-३-०, कि.नं. २७७ को क्षेत्रफल ०-१-३-०, कि.नं. २६५ को क्षेत्रफल ०-०-३-०, कि.नं. ३०८ को क्षेत्रफल ०-०-१-२, कि.नं. ५४८ को क्षेत्रफल १८८.७९ ब.मि. , कि.नं. १४२ को १७४.८८ ब.मि., कि.नं. ७४७ को ७२.२९ ब.मि., कि.नं. ७५३ को ९.९५ ब.मि., कि.नं. ११ को क्षेत्रफल १-५-३-२, कि.नं. २६ को क्षेत्रफल ८७.४४ ब.मि., कि.नं. ३८ को क्षेत्रफल १३१.१६ ब.मि., कि.नं. १४४ को २९.८५ ब.मि., कि.नं. ५ को क्षेत्रफल ०-६-०-२, कि.नं. ३६ को क्षेत्रफल ४१२.३५ ब.मि., कि.नं. १३६ को १६६.९३ ब.मि., कि.नं. ७५१ को १३६१.७६ ब.मि., कि.नं. २६६ को ०-०-३-०, कि.नं. ८ को ०-०-३-३, कि.नं. २९४ को ०-०-३-१, कि.नं. ३१६ को ०-७-३-१ र पशुपति टिकिन्छा गुठीको कि.नं. ४८ को क्षेत्रफल ०-३-०, कि.नं. २६२ को क्षेत्रफल ०-१०-३-०, कि.नं. २६७ को क्षेत्रफल ०-१३-३-३, कि.नं. २९५ को क्षेत्रफल ०-२-१-०, कि.नं. २५९ को क्षेत्रफल ०-२-१-१ जग्गा मेरो श्रीमती उमा कुमारी ढकाल र माधवी सुबेदीको संयुक्त नाममा छ। कि.नं. २८२ को क्षेत्रफल १-४-३-२, कि.नं. २८५ को क्षेत्रफल ०-२-१-२, कि.नं. २७० को क्षेत्रफल १-५-०-१ र कि.नं. ५६ को क्षेत्रफल १.९९ ब.मि. जग्गा उमा कुमारी ढकाल, माधवी सुबेदी र सरला गुरुङको संयुक्त नाममा छ। कि.नं. २८१ को क्षेत्रफल ०-०-२-३, कि.नं. २७४ को क्षेत्रफल ०-१३-३-२, कि.नं. २७५ को क्षेत्रफल ०-१-३-२, कि.नं. ३०७ को क्षेत्रफल ०-१-१-२, कि.नं. ४८ को क्षेत्रफल ०-४-२-२ र क्षेत्रफल याद नभएको कि.नं. ७४५ को जग्गा छोरा संदिप ढकालको नाममा छ। यसै गरी कि.नं. २६३ को क्षेत्रफल ०-९-३-२, कि.नं. २७१ को क्षेत्रफल १-१-०-२,कि.नं. ४०५ को क्षेत्रफल ३१९.९१ ब.मि.कि.नं. ५२० को क्षेत्रफल १०६.८७ ब.मि. जग्गा सरोज ढकाल र रुपेश सुबेदीको संयुक्त नाममा छ भन्ने व्यहोराको प्रतिवादी शोभाकान्त ढकालको बयान।

**घ) <u>प्रतिवादी शोभाकान्त ढकालको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

राजिनामाको लिखतमा उल्लेखित नाम र ठेगाना मेरो हो। मोहीयानी जग्गाको हक दिने, जग्गा दिने देबनारायण महर्जन, द्वारिकामान महर्जन र चन्द्रमाया महर्जनसँग जग्गा किन्ने प्रयोजनको लागि मात्र परिचय भएको हो। उक्त राजिनामामा उल्लेखित कि.नं.का जग्गा म र राम कुमार सुवेदीले देबनारायण महर्जन, द्वारिकामान महर्जन र चन्द्रमाया महर्जनबाट खरिद गरी लिएको हो। सिट नं. १०२-१०२५-१५, कि.नं. २७८, २८४, २३२, ५६, ८०, १७१ भएको जग्गाधनी प्रमाण पुर्जामा जग्गा धनि टिकिन्छा गुठी भएको, मोही महलमा म र राम कुमार सुवेदी नाम भएको जग्गाधनी प्रमाण पुर्जा म समेतको हो। उक्त जग्गाधनी प्रमाणमा भएको फोटो म र प्रतिवादी राम कुमार सुवेदी समेतको हो। हेरि चिन्ही मेरो र रामकुमार सुवेदीको हो भनी सनाखत समेत गरीदिए। उक्त जग्गा बिक्रीमा आएको र उक्त स्थानमा हाम्रो अरु जग्गाहरु हुँदा साँध सिमानामा भएको जग्गा खरिद गर्ने भन्ने निर्णय भएको हुँदा उक्त जग्गाको मोहीयानी भाग खरिद गरेको हो। सिट नं. १०२-१०२५-१५, कि.नं. २६२,२६७,२९५,२५९ र ४८ भएको जग्गा बिक्रीमा छ भन्ने जानकारी आएको र उक्त स्थानमा हाम्रो अरु जग्गा पनि भएको हुँदा साँधसिमानामा भएको जग्गा खरिद गर्ने भन्ने निर्णयगरी उक्त जग्गाको मोहीयानीभाग खरिद गरेको हो।

उक्त जग्गा खरिद गर्न पुर्व उक्त जग्गाको ज.ध.प्र.पु हेरि मालपोत कार्यालयबाट पास पारित हुने जानकारी लिई लिखत अनुसारको रकम बुझाई, अड्डामा लाग्ने दस्तुर बुझाई राजिनामाबाट सगोलमा मेरी श्रीमती उमा कुमारी ढकाल र माधवी सुवेदीले खरिद गरेका हुन्। उक्त जग्गाको जग्गाधनी प्रमाण पुर्जा देब नारायण महर्जन र द्वारिकामान महर्जनले नै प्राप्त गरेको अवस्था हो। उक्त जग्गाको जग्गाधनी प्रमाण पुर्जा जग्गा दिने व्यक्तिले नै

प्राप्त गरेको हुँदा उक्त जग्गाको जग्गाधनी प्रमाण पुर्जा के कसरी प्राप्त गरे र कसरी हालसाबिक गरे भन्ने बारेमा निज देब नारायण महर्जन र द्वारिकामान महर्जनलाई नै थाहा होला । म र मेरो परिवारले जग्गाधनी प्रमाण पुर्जा भएको जग्गा मात्र खरिद गरेको हो । म र मेरो श्रीमतीले पहिले जग्गाधनी प्रमाण पुर्जा भएको जग्गा खरिद गरी लिएको हो । उक्त जग्गा लिनु पुर्व उक्त जग्गा मालपोत कार्यालयबाट पास परित हुने जानकारी लिई उक्त जग्गाको मोठ श्रेस्ता ठिक छ भन्ने जानकारी लिएको र सो सम्बन्धमा राजिनामा पास गर्दाको अवस्थामा मालपोत कार्यालयको मोठ फाँट र श्रेस्ता फाँटबाट मोठ श्रेस्ता भिडाएर मात्र जग्गा पास गरेको हो । उक्त समयमा हाल म समेतको नाममा रहेको उल्लेखित नेपाल सरकारको जग्गा हो भन्ने थाहा भएन । काठमाडौं जिल्ला का.म.पा. वडा नं.०४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको ४-१४-३-२ रोपनी मध्ये म र मेरो र मेरो श्रीमतीको नाममा २-७-१-३ रोपनी मात्र खरिद गरी मोहीयानी हक कायम हुन आएको हो । उक्त जग्गा हामीले खरिद गर्दा जग्गा धनि प्रमाण पुर्जा भएको जग्गा खरिद गरेको हो । सिट नं. १०२-१०२५-१५, कि.नं. २७८,२८४,२३२,५६,८०,१७१ भएको जग्गाधनी प्रमाण पुर्जामा जग्गा धनि टिकिन्छा गुठी भएको, मोही महलमा म र राम कुमार सुवेदी नाम भएको जग्गाधनी प्रमाण पुर्जा म समेतको हो । राम कुमार सुबेदीले बालुवाटारको जग्गा बिक्रीमा आएको छ, मैले पनि किन्ने बिचार गरेको छु, तपाईंले पनि किन्ने भए निर्णय गरेर किन्नुहोस भन्नु भएको हुँदा मैले पनि निर्णय गरी केहि जग्गा खरिद गरी लिएको, निज राम कुमार सुवेदी मालपोत कार्यालय डिल्लीबजार अगाडी लेखापढी कार्यालय संचालन गरी बसेका व्यक्ती भएका कारण त्यहाँ जग्गा हालसाबिक लगायतका काममा आउने मानिसहरु सँग निजको चिनजान हुने गरेको र निज सँग तत्कालीन जग्गाधनीहरुले जग्गा बिक्रीको कुरा गर्दा बिक्रेताले प्रस्ताव गरेको मूल्य निज राम कुमार सुवेदीले म समेतलाई जानकारी गराउँदा चित्त बुझेकोले एकै स्थानको प्लट मिलान समेत हुने जग्गाहरु भएकाले म समेतले खरिद गरी लिएको हो । प्रतिवादीहरु मध्येका राणाहरु, राम कुमार सुवेदी, माधवी सुवेदी, उमा कुमारी ढकाललाई चिन्दछु । प्रतिवादी मध्येका राणाहरु, राम कुमार सुवेदीलाई जग्गा खरिद प्रयोजनको क्रममा चिनजान भएको हो । प्रतिवादी उमा कुमारी ढकाल मेरो श्रीमती हुन् । उल्लेखित जग्गा नेपाल सरकारको नाममा भएछ भने मेरो भन्नु केहि छैन । मैले खरिद गर्दाका मोहीसँग मेरो पैसा उठाउन कानूनी बाटो अवलम्बन गर्नेछु भन्ने समेत व्यहोराको प्रतिवादी सोभा कान्त ढकालको बयान ।

**४. प्रतिवादी माधवी सुवेदीको बयानः**

**(क) प्रतिवादी माधवी सुवेदीको बयान (जग्गा फिर्ता २०४९):**

मन्त्री परिषद्को मिति २०२१/०८/१५ गतेको अधिग्रहण को निर्णय सम्बन्धमा मलाई थाहा छैन । का.जि. का.म.पा.वडा न. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्र रहेको समरजंग कम्पनीको नाममा रहेको नेपाल सरकारको जग्गा व्यक्ति विशेषको नाममा ल्याई बिक्री वितरण गरेको भन्ने सम्बन्धमा मलाई केही थाहा छैन । उक्त स्थानमा भएको म समेतको नाममा रहेको जग्गा मेरो श्रीमान राम कुमार सुवेदीले खरिद गरेको हुनाले उहाँले के कसरी खरिद गर्नु भयो मलाई थाहा जानकारी भएन । नेपाल सरकारको जग्गामा मोही लाग्ने नलाग्ने सम्बन्धमा मलाई जानकारी छैन । का.जि.का.म.पा.वडा नं. ४ वालुवाटार स्थित ललिता निवास क्याम्प भित्र रहेको म तथा मेरो परिवारको नाममा रहेको जग्गा मेरो श्रीमान रामकुमार सुवेदीले खरिद गर्नु भएकोले सो सम्बन्धमा मलाई केही थाहा जानकारी भएन । सबै कुरा श्रीमान रामकुमार सुवेदीलाई थाहा जानकारी होला भन्ने समेत व्यहोराको प्रतिवादी माधवी सुबेदीको बयान ।

**ख) प्रतिवादी माधवी सुवेदीको बयान (जग्गा सट्टापट्टा २०६७):**

का.जि. का.म.पा. बालुवाटारमा मेरो श्रीमान र मेरो नाममा जग्गा छ के-कति जग्गा भन्ने मलाई एकिन थाहा छैन। जग्गा पास गर्नको लागी मालपोत कार्यालयमा गएको  मात्र थाहा छ । मेरो श्रीमान रामकुमार सुवेदीलाई थाहा छ। नेपाल सरकार तथा अन्य ब्यक्तिको नाममा दर्ता भएको जग्गामा मोहीयानी हक प्राप्त हुने, नहुने भन्ने मलाई थाहा जानकारी छैन । खरिदको श्रोत पनि श्रीमानलाई नै थाहा छ । उक्त जग्गाहरु के कति बेचियो, कति छ, यकिन गर्न सकिँन । मेरो श्रीमान रामकुमार सुवेदीले के कहाँ बाट रकम ल्याई उक्त जग्गा खरिद गर्नु भएको हो लगायतका कुराहरु मेरो श्रीमान राम कुमार सुबेदीलाई थाहा छ भन्ने समेत व्यहोराको प्रतिवादी माधवी सुवेदीको बयान ।

**ग) <u>प्रतिवादी माधवी सुवेदीको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

नेपाल सरकार तथा अन्य ब्यक्तिको नाममा दर्ता भएको जग्गामा मोहीयानी हक प्राप्त हुने, नहुने भन्ने मलाई थाहा जानकारी छैन । मेरो श्रीमान राम कुमार सुवेदीले मेरो नाममा मोहीहरुबाट जग्गा खरिद गरी पास गराउने भनी सबै काम गरी उमा कुमारी ढकाल र म माधवी सुवेदीको नाममा संयुक्त नाममा जग्गा खरिद गरेको हो । मेरो श्रीमान राम कुमार सुवेदीले मलाई काठमाडौं का.म.पा. वडा नं. ४ स्थित बालुवाटारमा म समेतको नाममा संयुक्तमा जग्गा खरिद गरी उक्त जग्गा पास गराउनको लागी मालपोत कार्यालय डिल्लीबजारमा लगेको हुँदा म डिल्लीबजार गई म समेतको नाममा बालुवाटारको जग्गा पास गरेका हौँ । मलाई मेरो श्रीमानले म समेतको नाममा का.जि. बालुवाटारमा जग्गा खरिद गरी राजिनामा पास गर्ने भनेकोले मालपोत कार्यालय डिल्लीबजारमा गई म समेतको नाममा जग्गा पास गरेको हो ।  राणा र मोहीहरुबाट खरिद गरेको हो भनी मेरो श्रीमान राम कुमार सुवदीले मलाई भन्नु भएको थियो । मलाई एकिन मिति याद भएन अन्दाजी मिति २०७० साल तिर मेरो श्रीमान राम कुमार सुवेदीले का.जि. का.म.पा. वडा नं. ४ बालुवाटारमा जग्गा खरिद गरी उक्त जग्गा म माधवी सुवेदी र उमा कुमारी ढकालको नाममा संगोलमा जग्गा पास गराउने भनी मालपोत कार्यालय, डिल्लीबजारमा गई म समेतको नाममा संयुक्तमा जग्गा पास गरेका थियौँ । मेरो श्रीमान राम कुमार सुवेदीलाई थाहा जानकारी भएर पनि मलाई उहाँले जानकारी नगराउनु भएकोले के-कसरी कागजात तयार गर्नु भएको हो भन्ने उहाँलाई नै थाहा जानकारी होला । भूमि सुधार तथा ब्यवस्था मन्त्रालय , मालपोत विभाग, मालपोत कार्यालय, काठमाडौंबाट जारी भएको सक्कल जग्गा धनि पुर्जाको दाँया भागमा जग्गा धनिको नाममा श्री पशुपती टिकिन्छा गुठी, मोहीको नाममा माधवी सुवेदी र उमा कुमारी ढकाल संयुक्त रहेको, बाँया भागमा गुठी संस्थानको छाप भएको र तल, माथी दुईवटा फोटो टाँसिएको सक्कल पुर्जा देखाउदा देखी पाँए । उक्त पुर्जाको तल पट्टी दाँया भागमा रहेको फोटो तथा उक्त  फोटोसाथ रहेको दस्तखत र हस्ताक्षर मेरो नै हो हेरि चिन्ही सनाखत गरीदिएँ । मेरो श्रीमान राम कुमार सुवेदीले मोहीहरुबाट जग्गा खरिद गरी मेरो नाममा पास गराउने भनी भनेकोले मेरो श्रीमानसंगै मालपोत कार्यालय डिल्लीबजार गई म र उमा कुमारी ढकालको नाममा संयुक्त रुपमा का.जि.का.म.पा. वडा नं. ४ बालुवाटार स्थितको जग्गा राजिनामा पास गराएका हौँ । ललिता निवास क्याम्प भित्रको उल्लेखित जग्गाहरु म समेतको नाममा दर्ता गराउने कार्य मेरो श्रीमान राम कुमार सुवेदी र शोभाकान्त ढकालले गर्नु भएको हो भन्ने समेत व्यहोराको प्रतिवादी माधवी सुवेदीको बयान ।

**५. <u>प्रतिवादी मिन बहादुर गुरुङको बयान</u>:**

**(क) <u>प्रतिवादी मिन बहादुर गुरुङको बयान (जग्गा फिर्ता २०४९)</u>:**

का.जि.का.म.पा. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको मलाई याद भए सम्मको सिट नं. १०२५-१५ को कि.नं. २८६ को ०-५-०-०, कि.नं. ५७ को ०-४-०-०, कि.नं. ५८ को ०-०-१-०, सिट नं. १०२५-२०

को कि.नं. ८१ को ०-१-०-०, कि.नं. १२ को ०-०-२-२, कि.नं. १४ को ०-०-०-०.५ समेत कुल क्षेत्रफल ०-१०-३-२.५ जग्गा र.नं. १०९१० बाट मिति २०६०/११/२५ गते बिद्या पौडेलबाट सरला घले गुरुङ र उमा कुमारी ढकालको संयुक्त नाममा  खरिद गरी लिएको, सिट नं. १०२५-१५ को कि.नं. १० को २-६-०-१, कि.नं. १७ को ०-१-०-२, कि.नं. ७९ को ०-४-२-३, कि.नं. ८२ को ०-२-०-२ समेत गरी जम्मा २-१४-०-० जग्गा र.नं. १२८२६ बाट मिति २०६०/१२/२५ गते शैलजा राणा, हेमनशमसेर ज.ब.रा. र हाटकशमसेर ज.ब.रा. बाट सरला घले गुरुङ, उमा कुमारी ढकाल र माधवी सुवेदीको संयुक्त नाममा खरिद गरी लिएको,सिट नं. १०२५-१५ को कि.नं. २८२ को १-४-३-२, कि.नं. २८५ को ०-२-१-२ समेत १-७-१-० जग्गा र.नं. १२८२८ बाट मिति २०६०/१२/२५ गते शैलजा राणा, हेमन शमसेर ज.ब.रा. र हाटकशमसेर ज.ब.रा. बाट सरला घले गुरुङ, उमा कुमारी ढकाल, माधवी सुवेदी र विनिता अधिकारीको संयुक्त नाममा खरिद गरी लिएको, सिट नं. १०२५-१४ को कि.नं. २३ को ५-२-०-०, कि.नं. ४ को ०-०-०-३, कि.नं. ११७ को ०-०-३-२, कि.नं. १३१ को ०-०-२-१, कि.नं. ६ को ०-०-०-१ समेत जम्मा ५-३-२-३ जग्गा रुक्म शमसेर ज.ब.रा., सुनिती राणा र शैलजा राणा समेतबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरी लिएको, सिट नं १०२५-१५ को कि नं  २१० को ०-१०-२-० जग्गा लक्ष्मी महर्जनको नामबाट सरला गुरुङ, माधवी सुवेदी र उमा कुमारी ढकाल्नीको नाममा संयुक्त नाममा रा.पा. भई खरीद गरेको,सिट नं.१०२५-१४ को कि नं ४७ को ०-०-१-२ , कि नं ४९ को ३-०-१-०, कि नं ४१ को ०-३-०-२ , कि.नं. ८ को ०-०-३-२ समेत जम्मा ३-४-२-२ रोपनी जग्गा बसनारायण महर्जनको नामबाट सरला गुरुङ, माधवी सुवेदी र उमा कुमारी ढकालको नाममा संयुक्त नाममा भई खरीद गरेको, सिट नं.१०२५-१४ को कि.नं. १२५ को ०-१-०-०, कि.नं. ११८ को ०-०-२-१, कि.नं. १२१ को ०-०-३-२, कि.नं. १२३ को ०-०-३-०, कि.नं. १२८ को ०-१०-३-० र कि.नं. १३० को ०-२-०-० समेत गरी जम्मा ०-१५-३-३ जग्गा बैकुण्ठ शर्मा रेग्मीको नामबाट सरला घले गुरुङको नाममा खरिद गरेको,सिट नं.१०२५-१४ को कि.नं. १२२ को ०-१-०-०, कि.नं. ११३ को ०-१-१-१, कि.नं. १२० को ०-०-२-३ समेत गरी जम्मा ०-३-०-० जग्गा बिद्या पौडेल गौतमकोनामबाट सरला घले गुरुङको नाममा खरिद गरेको,सिट नं. १०२५-१५ को कि.नं. २१३ को २-०-२-१, कि.नं. २३७ को ०-२-२-०, कि.नं. २३४ को ०-०-३-२, कि.नं. २०६ को ०-०-२-०, कि.नं. ३०१ को ०-०-१-०, कि.नं. ३०२ को ०-०-१-२, कि.नं. २०९ को ०-५-०-२, कि.नं. १४० को ०-०-३-० र कि.नं. १२७ को ०-०-३-० समेत गरी जम्मा २-९-२-३ जग्गा शैलजा राणा, हेमनशमसेर ज.ब.रा. र हाटकशमसेरज.ब.रा.को नामबाट सरला घले गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१२ कि.नं. २३ को ०-११-०-३, कि.नं. १५९ को ०-२-२-०, कि.नं. १६० को ०-०-२-०, कि.नं. २९९ को ०-१-०-१, कि.नं. २०४ को १-८-०-०, कि.नं. १६२ को ०-७-०-१, कि.नं. १६४ को ०-६-०-३, कि.नं. २०३ को ०-८-०-०, कि.नं. २०१ को ०-३-०-०, कि.नं. १९९ को ०-१५-३-२, कि.नं. ३८ को ०-२-०-१, कि.नं. १३५ को ०-४-१-१, कि.नं. १३९ को ०-७-०-३, कि.नं. १४१ को ०-५-०-०, कि.नं. १८१ को ०-२-१-३, सिट नं. १०२५-१९ को कि.नं. ९ को ०-१-०-०, कि.नं. ११ को ०-१०-०-२, कि.नं. १३ को ०-१०-०-२, सिट नं. १०२५-२० को कि.नं. १ को ०-०-३-३, कि.नं. २ को ०-३-२-२, कि.नं. ३ को ०-४-२-२, कि.नं. ७८ को ०-३-३-१, कि.नं. ७३ को ०-२-१-२, कि.नं. ७५ को ०-०-१-१, कि.नं. ५ को ०-६-१-३, सिट नं. १०२५-१४ को कि.नं. ५ को ०-१-०-१, कि.नं. २४ को ०-३-२-१, कि.नं. २५ को ०-०-०-२, सिट नं. १०२५-१५ को कि.नं. १४ को ०-०-२-०, कि.नं. १३६ को ०-०-२-२, कि.नं. १८ को ०-५-१-२, कि.नं. १३३ को ०-१३-०-१, कि.नं. १२९ को ०-४-१-२ र कि.नं. १८९ को १-२-०-२ समेत गरी जम्मा १२-१-१-१ जग्गा रुक्म शमसेर ज.ब.रा., सुनिती राणा

र शैलजा राणाको नामबाट सरला घले गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१५ को कि.नं. २०७ को ०-११-३-०, कि.नं. १२६ को १-२-३-३, कि.नं.११४ को ०-२-०-३, कि.नं. १२४ को ०-२-३-२, कि.नं. ११९ को ०-१-०-२, कि.नं. ११२ को ०-२-१-०, कि.नं. ११६ को ०-१-२-२, सिट नं. १०२५-१४ को कि.नं. ३ को ०-०-०-३ समेत गरी जम्मा २-६-३-३ जग्गा शैलजा राणा, हेमनशमसेर ज.ब.रा. र हाटक शमसेरज.ब.रा.नामबाट म मीन बहादुर गुरुङको छोरा कल्याण गुरुङको नाममा खरिद गरिएको,सिट नं. १०२५-१५ को कि.नं. ३१७ को १-४-१-०.५, कि.नं. ८३ को ०-१३-३-१ समेतको जग्गा २-२-०-०.५जग्गा बेखा नारायण महर्जन र हेमाद्री शमशेर राणाको नामबाट मीन बहादुर गुरुङ, शोभाकान्त ढकाल र राम कुमार सुवेदी समेतको ३ जनाको नाममा संयुक्त खरिद गरेकोसिट नं. १०२५-१४ को कि.नं. २७ को १-१-२-१ कि.नं. ३१ ०-३-१-३, कि.नं. ७ को ०-१-२-१, कि.नं. ३३ को ०-९-०-०, कि.नं. ३४ को ०-४-०-१ , कि.नं. ४० को ०-७-०-०, कि.नं. ४३ को ०-१-१-२, सिट नं. १०२५-१५ को कि.नं. १५१ को ०-५-०-०, कि.नं. १४९ को ०-१-०-०, कि.नं. १५२ को ०-१-१-१, कि.नं. १५३ को ०-६-२-३, कि.नं. १५४ को ०-४-१-१, कि.नं. १६९ को ०-१-३-२, कि.नं. १७० को ०-०-१-३, कि.नं. १७१ को ०-१-०-१, कि.नं. १६६ को ०-०-३-०, कि.नं. १७६ को कि.नं. ०-९-०-०, कि.नं.१७८ को ०-७-१-० समेतको जम्मा ५-२-२-३ रुक्म शमसेर ज.ब.रा., सुनिती राणा र शैलजा राणाको नामबाट मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१४ को कि.नं. ४४ को क्षेत्रफल ०-५-३-०, सिट नं. १०२५-१५ को कि.नं. ४६ को ०-५-१-०, समेत गरी जम्मा क्षेत्रफल ०-११-०-० रामदेवी महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१४ को कि.नं. ३२ को क्षेत्रफल ०-९-०-० लक्ष्मी नारायण महर्जन, उमा कुमारी ढकाल, माधवी सुवेदी को नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१४ को कि.नं. २८ को क्षेत्रफल ०-१-१-०, कि.नं. ३० को ०-५-२-०, सिट नं. १०२५-१५ को कि.नं.१५८ को ०-६-३-०, कि.नं.१६५ को ०-०-२-२, कि.नं. १६८ को ०-०-०-२ गरी जम्मा ०-१४-१-० जग्गा मोहन माया तण्डुकार, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं.१०२५-१५ को कि.नं. १७७ को क्षेत्रफल ०-७-१-० जग्गा सुश्री पुर्ण महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१५ को कि.नं. १९० को क्षेत्रफल ०-६-०-२, कि.नं.३०६ को ०-०-३-०, कि.नं. ७७ को ०-१-०-१, कि.नं. ७४ को ०-०-०-३ समेत गरी जम्मा ०-८-०-२ जग्गा राम कल्याण अधिकारीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१५ को कि.नं. २०८ को क्षेत्रफल ०-११-२-२, कि.नं. ३०० को क्षेत्रफल ०-०-१-२ समेत गरी जम्मा ०-१२-०-० विल बहादुर महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१४ को कि.नं. १६ को १-०-१-२, कि.नं. १५ को ०-१०-१-३, कि.नं. १७ को ०-०-२-०, कि.नं. ४२ को ०-०-१-३, कि.नं. ३६ को ०-०-१-२, कि.नं. ३५ को ०-०-३-३, सिट नं. १०२५-१५ को कि.नं. ४४ को ०-०-०-३, कि.नं. २८ को ०-१-१-२, कि.नं. १८० को ०-०-१-२, कि.नं. १७९ को ०-०-२-२ समेत गरी जम्मा १-१५-२-२ पंच नारायण महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको,सिट नं. १०२५-१९ को कि.नं. १० को १-१-०-० जग्गा आशा नारायण महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-२० को कि.नं. ७२ को ०-१२-०-२, कि.नं. ७६ को ०-०-१-२ समेत गरी जम्मा ०-१२-२-० जग्गा हेरा माया महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर

गुरुङको नाममा खरिद गरिएको,सिट नं. १०२५-१४ को कि.नं. १५७ को ०-०-३-०, कि.नं. १५० को ०-५-१-० गरी जम्मा ०-६-०-० जग्गा श्रीमति मोहन महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१४ को कि.नं. ३९ को ०-१५-०-३, कि.नं. ३७ को ०-०-३-१, सिट नं. १०२५-१५ को कि.नं.१३४ को ०-४-१-३, कि.नं. १३७ को ०-०-३-१, कि.नं. १३८ को ०-२-१-० समेत गरी जम्मा क्षेत्रफल १-७-२-० तरिवावु महर्जन, उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, सिट नं. १०२५-१५ को कि.नं. १८२ को ०-५-१-० जग्गा तिर्थनारां महर्जन,उमा कुमारी ढकाल र माधवी सुवेदीको नामबाट म मीन बहादुर गुरुङको नाममा खरिद गरिएको, यसै गरी म संचालक रहेको भाटभटेनी डेभलपमेण्ट कम्पनी प्रा.लि.को नाममा सरला घले गुरुङ, उमा कुमारी ढकाल, माधवी सुवेदी र विश्वराम खड्काबाट ४-७-२-० जग्गा खरिद गरिएको समेत म र मेरो परिवारका सदस्यहरु तथा कम्पनी समेतको नाममा करिब ३८-०-०-० (अठतिस रोपनी) जग्गा खरिद गरेकोमा करिब १४-०-०-० (चौध रोपनी) बिभिन्न व्यक्ति तथा संस्थाहरुलाई बिक्री गरी सकिएको र म, मेरो परिवारका सदस्यहरु र कम्पनी समेतको स्वामित्वमा करिब २४-०-०-० (चौबिस रोपनी) जग्गा बाँकी छ। खरिद गरेको जग्गाको मूल्य चुक्ता गरी, नेपाल सरकारलाई नियमानुसार बुझाउनु पर्ने राजश्व बुझाई मेरो नाममा खरिद गरी लिएको हुँ।

भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि. कम्पनी रजिष्ट्रारको कार्यालयमा दर्ता रही संचालनमा रहेको छ। उक्त कम्पनीको संचालकहरुमा म, मेरो श्रीमती साबित्री गुरुङ, रामकुमार सुवेदी र शोभाकान्त ढकाल रहेका छौं। म र मेरी श्रीमती साबित्री गुरुङको नाममा ५१% शेयर रहेको छ भने रामकुमार सुवेदी र शोभाकान्त ढकालको नाममा ४९% शेयर लगानी रहेको छ। हामीले ललिता निवास क्याम्प भित्र खरिद गरेको जग्गामा ढल, बाटो, बत्ती, आदीको व्यवस्था गर्न भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि. दर्ता गरेका हौं। ललिता निवास क्याम्प भित्रको अं. ५ (पाँच) रोपनी जग्गा भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि.को नाममा खरिद गरेका हौं। कम्पनीको संचालक समितिको अध्यक्ष भनी कोही कसैलाई तोकिएको छैन। ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाहरु हाल साविक भए पश्चात विभिन्न जग्गाधनीहरुसँग हामीले कम्पनीको नाममा समेत खरिद गरेका थियौं। मैले र मेरो परिवारका सदस्यहरुले जग्गा खरिद गर्दा नेपाल सरकारले जारी गरेको जग्गाधनी प्रमाण पूर्जा (लाल पूर्जा) हेरी मालपोत कार्यालय, डिल्ली बजार, काठमाडौंमा रहेको मोठ, श्रेस्ता भिडाई जग्गाधनीलाई रकम भुक्तानी गरी नेपाल सरकारले तोकेको राजश्व तिरी गरी जग्गा खरिद गरेका हौं। उल्लेखित जग्गाहरु खरिद गर्दाको समयमा सरकारी जग्गा भन्ने थाहा भएन। ललिता निवासको जग्गा म, मेरो परिवारका सदस्यहरु र म आवद्ध कम्पनी समेतको नाममा २०६१ साल फागुन महिना पछी तत्कालीन जग्गाधनीहरुसँग रहेको जग्गाधनी पूर्जाको आधारमा मालपोत कार्यालय, डिल्ली बजार, काठमाडौंमा रहेको मोठ, श्रेस्ता भिडाई जग्गाधनीलाई रकम भुक्तानी गरी नेपाल सरकारलाई जग्गा खरिद गरे बापत बुझाउनु पर्ने राजश्व बुझाई जग्गा खरिद गरेका हौं। म, मेरो परिवारका सदस्य तथा म आवद्ध कम्पनी समेतको नाममा खरिद गरेको ललिता निवास क्याम्प भित्रको जग्गा सरकारी हो भन्ने मलाई कुनै जानकारी थिएन भन्ने ब्यहोराको मिन बहादुर गुरुङको बयान।

**ख) प्रतिवादी मिन बहादुर गुरुङको बयान (जग्गा सट्टापट्टा २०६७):**

मेरो राम कुमार सुवेदी र शोभाकान्त ढकाल सँग २०६०/२०६१ साल तिर ललिता निवास क्याम्प भित्रको जग्गा खरिद गर्ने समयमा भेटघाट भई चिनजान भएको हो। सो पश्चात ललिता निवास क्याम्प भित्रको जग्गा हामी तिन जनाको संयुक्त नाममा समेत खरिद गरेका हौं। सो पश्चात हामी ३ जना मिली भाटभटेनी डेभलपर्स

प्रा.लि. खोली जग्गा बिकासको काम गरेका हौ । भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि. कम्पनी रजिष्ट्रारको कार्यालयमा दर्ता रही संचालनमा रहेको छ । उक्त कम्पनिको संचालकहरुमा म, मेरो श्रीमती साबित्री गुरुङ, रामकुमार सुवेदी र शोभाकान्त ढकाल रहेका छौ । म र मेरी श्रीमती साबित्री गुरुङको नाममा ५१% शेयर रहेको छ भने रामकुमार सुवेदी र शोभाकान्त ढकालको गरी ४९% शेयर लगानी रहेको छ । हामीले ललिता निवास क्याम्प भित्र खरिद गरेको जग्गामा ढल, बाटो, बत्ति आदीको ब्यवस्था गर्न भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि. दर्ता गरेका हौ । ललिता निवास क्याम्प भित्रको अं. ५ रोपनी जग्गा भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि.को नाममा खरिद गरेका हौ । कम्पनीको संचालक समितिको अध्यक्ष भनी तोकिएको छैन । ललिता निवास क्याम्प भित्रको जग्गाहरु हाल साबिक भए पश्चात विभिन्न जग्गाधनीहरुसँग हामीले कम्पनीको नाममा समेत खरिद गरेका हौ । नेपाल सरकारको स्वामित्वमा रहेको जग्गामा मोही लाग्छ, लाग्दैन मलाई केही थाहा छैन, म अनभिज्ञ रहेको छु । कम्पनीको बहुमत शेयर मेरो नाममा रहे पनि म अन्य ब्यवसायको सिलसिलामा ब्यस्त हुने भएको हुँदा उक्त कम्पनीको काम कारबाही रामकुमार सुबेदीले गर्ने भएको हुँदा बहुमत शेयर मेरो नाममा भए पनि मलाई जानकारी नभएको हो । २०६७ सालमा सम्माननीय प्रधानमन्त्रीज्यूको निवास विस्तारको क्रममा काठमाडौं जिल्ला का.म.पा वडा नं.४ को सिट नम्वर १०२५-१५ को साबिक कि.नं.७५ को ५९५.८० ब.मि. जग्गा मध्ये हालको कि.नं. २११ को ९९.३५ ब.मि. र ५९१ को ३३.७९ ब.मि. जग्गा जग्गाधनी पुर्जाको आधारमा खरिद गरेको हो । सो जग्गाहरु ब्यक्तिको नाममा कायम भए पश्चात खरिद गरिएको हो । सो जग्गा के कति रकममा को कसबाट खरिद गरिएको थियो हाल मैले बिर्सिए । मैले ब्यक्तिको जग्गा खरिद गरेको हुँ, सरकारी जग्गा खरिद गरेको होईन । ललिता निवास क्याम्प भित्रको मेरो, मेरो परिवार तथा मेरो आफन्तको नाममा दर्ता कायम भएको जग्गाहरु खरिद गर्दा स्थलगत रुपमा साँध सिमाना छुट्याईएको थियो । उक्त जग्गाहरुको साँध सिमाना हाल एकिन गर्न सक्दिँन । मोहीहरुको बारेमा मलाई कुनै जानकारी छैन । सो सम्वन्धमा निज रामकुमार सुवेदीलाई थाहा होला । सो जग्गाहरु मेरो परिवार तथा आफन्तहरुको लागी आवास बनाउनको लागी साथै भाटभटेनी सुपरमार्केट एण्ड डिपार्टमेन्ट स्टोरको गोदाम घर बनाउनको लागी खरिद गरिएको हो । उक्त समयमा उक्त जग्गाहरुमा जाने बाटो थिएन । सो जग्गासँग जोडिएको जग्गा खरिद गरी बाटो जोड्ने योजनाका कारण पहिले बाटो नभएको जग्गाहरु खरिद गरिएको हो । जग्गा पास गर्नको लागी घरबाटो सिफारिस लिएका थियौ । ललिता निवासको जग्गा म र मेरो परिवारले २०६१ सालको सेरोफेरोमा तत्कालिन जग्गाधनी सँग रहेको जग्गाधनी पुर्जाको आधारमा खरिद गरेका हौं । उक्त सरकारी जग्गा हिनामिना सम्वन्धमा मेरो तथा मेरो परिवारका सदस्यहरुको कुनै संलग्नता रहेको छैन । ललिता निवास क्याम्प भित्रको मेरो तथा मेरो परिबारहरुको नाममा खरिद गरेको जग्गामा मात्र मैले लगानी गरेको हो । निजले आफ्नो बयानमा किन त्यस्तो व्यहोरा लेखाए, मलाई थाहा भएन ।२०६७ सालमा बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना बमोजिम बिस्तारित क्षेत्रमा म समेतको नाममा रहेको भाटभटेनी डेभलपर्सको नाममा रहेको १० आना २ पैसा जग्गा परेको थियो । सो बापत सट्टापट्टा भनी के कुन कित्ताको के कति क्षेत्रफल सट्टापट्टा आएको थियो मलाई थाहा छैन । म र मेरो परिवारले जग्गाधनी पुर्जा र मोठ श्रेस्ता हेरी जग्गा खरिद गरेका हौ । मैले तथा मेरो परिबारले जग्गाधनी पुर्जा हेरी नियमानुसारको राजस्व तिरी सम्वन्धित जग्गाधनीहरुलाई नगदै रकम बुझाई जग्गा खरिद गरेका हौ । हाल अं २९ रोपनी जती जग्गा म, मेरो परिबार तथा नातेदारहरुको नाममा दर्ता कायम रहेको छ । म, मेरो परीवार तथा मेरो आफन्तको नाममा खरिद गरेको जग्गामा अं. २/३ करोड लगानी भएको छ । सो सम्वन्धमा मलाई थाहा छैन । नेपाल सरकारको नामबाट बिभिन्न व्यक्तिहरुको नाममा जग्गा नामसारी, दाखिल

खारेज भईसके पश्चात म समेतले साविक जग्गाधनी सँग तोकिएको मोल तिरी जग्गा खरिद गरेको हो । मैले भाटभटेनी सुपर मार्केटको परिसर बाहिर पारिवारीक आवास बनाउने सोच राखि रहेको थिएँ, यकिन मिति याद भएन, २०६० साल माघ महिनाको दिन बिहान पख श्रीमती साबित्री गुरुङ समेतलाई साथमा लिई मर्निङ वाकको क्रममा बालुवाटार पुग्दा चौरमा केही बालबालिकाहरु भलिबल खेल्दै गरेको देखेको थिएँ, उक्त जग्गामा घाँस, घारी र ढल बगिरहेको अवस्था थियो, उक्त जग्गा देख्दा यहाँ पनि खाली जग्गा रहेछ भन्ने थाहा पाएको हुँ, सो को करिब १०/१५ दिन पछि मेरो दाई नाताका रामकाजी कोने, विश्व प्रकाश पण्डित र दिपक भन्ने व्यक्ति समेतले भाटभटेनी स्थित भाटभटेनी सुपर मार्केटको प्राङ्गणमा मलाई भेटी बालुवाटारको जग्गा बिक्रीमा आएको छ, तपाईं पनि खरिद गर्ने भए कुरा गरौं भन्दा मैले मेरो लागि २/३ रोपनी जग्गा राखि दिनु भनेको थिएँ, सो को करिब २/३ दिन पछि शोभाकान्त ढकाल, राम कुमार सुवेदी, विश्व प्रकाश पण्डित, रामकाजी कोने समेत अन्य ३/४ जना मानिसहरु भाटभटेनी स्थित भाटभटेनी सुपर मार्केटको कार्यालयमा आई मलाई भेटी बालुवाटार स्थित शैलजा राणा, सुनिति राणा, रुक्म शमसेर ज.ब.रा., हेमाद्री शमसेर ज.ब.रा., हाटक शमसेर ज.ब.रा. र हेमन शमसेर ज.ब.रा. समेतको नाममा दर्ता कायम रहेको जग्गा खरिद गर्नु पर्यो भनी मलाई प्रस्ताव गरी जग्गाको जग्गाधनी दर्ता प्रमाण पुर्जा, नक्सा समेतका आवश्यक कागजात देखाएकोमा मैले कागज हेर्दा जग्गामा मोही समेत देखिएको, एक जनाको नाममा दर्ता रहेको जग्गा अर्को व्यक्तिको नाममा रहेको जग्गाले छेकेको, जग्गामा जाने बाटो समेत नभएकोले यस्तो झमेला भएको जग्गा खरिद गर्न सक्दिँन भन्दा शोभाकान्त ढकाल र राम कुमार सुवेदीले १५ दिन भित्र मोही मिलाउँछौं, राणा परिवारको जग्गा समेत खरिद गर्ने व्यवस्था मिलाउँछौं, तपाईंले जग्गा किन्दा फरक पर्दैन भनी विश्वाश दिलाएको र सो भन्दा अघि नै उक्त क्याम्प भित्रको केही जग्गा निज शोभाकान्त ढकाल, राम कुमार सुवेदी, विश्व प्रकाश पण्डित समेतले खरिद गरीसकेको भनी जानकारी गराएकोले निजहरुले भनेको कुरामा विश्वाश गरी ललिता निवास क्याम्प भित्रको जग्गाहरु नियमानुसार राजस्व तिरी सम्वन्धित जग्गाधनीलाई नगदै रकम दिई खरिद गरेको हुँ ।उक्त जग्गामा जानको लागि आवश्यक पहुँच मार्गको लागि समेत निज शोभाकान्त ढकाल र राम कुमार सुवेदीको पहलमा हेमाद्री शमसेर ज.ब.रा. सँग ०-१२-०-० रोपनी जग्गा राम कुमार सुवेदी, शोभाकान्त ढकाल र म समेतको संयुक्त नाममा खरिद गरेका हौं । हाल उक्त ०-१२-०-० रोपनी जग्गा ललिता निवास क्याम्प भित्रको जग्गामा रहेको भाटभटेनी सुपर मार्केटको गोदाम र सो भित्रका अन्य कित्ता जग्गामा जाने बाटोको रुपमा प्रयोग भईरहेको छ । तत्कालिन समयमा निज कुमार रेग्मी म समेतको स्वामित्वमा रहेको व्यवसायको कानूनी सल्लाहकार रहेको र निजले म सँग घर बनाउने प्रयोजनका लागि बालुवाटारमा जग्गा खरिद गर्ने ईच्छा व्यक्त गरेकाले मैले आफ्नो नाममा रहेको उल्लेखित कित्ता र क्षेत्रफलको जग्गा तत्काल चलनचल्तीको मुल्य लिई निजलाई बिक्री गरेको हुँ, के कति रकममा बिक्री गरें, लिखत हेर्दा थाहा हुन्छ । म तथा मेरो परिवारका सदस्यहरु र मेरो स्वामित्वको कम्पनी समेतको नाममा खरिद गरेको ललिता निवास क्याम्पको जग्गा मध्ये कि.नं. ७९ को २१७ व.मि. जग्गा वैशालि ट्रेड लिंकलाई, कि.नं. ८० को ५.९४ ब.मि. जग्गा माया गौचनलाई, कि.नं. ४६६ को २५.८ र कि.नं. ९४ को ४२.७ व.मि. जग्गा नुतन श्रेष्ठलाई, कि.नं. ६३ को ४७.७ व.मि. जग्गा विजेन्द्र जोशीलाई,कि.नं. १२८ को २७४ व.मि., कि.नं. ७० को ९५.४ व.मि. जग्गा संगिता राखेचालाई बिक्री गरेको छु, सो बाहेक अन्य को कसलाई के कति जग्गा बिक्री गरीयो, यकिन भन्न सक्दिँन ।मैले ललिता निवास क्याम्प भित्रको जग्गा खरिद गर्ने क्रममा २०६० सालको फागुन/चैत्र महिना तिर मात्रै राम कुमार सुवेदी र शोभाकान्त ढकाल समेतलाई चिनेको हुँ, तत्कालिन अवस्थामा म समेतले खरिद गरेको ललिता निवास क्याम्प भित्रको जग्गामा पहुँच मार्गको लागि समेत २०६०/०६१ साल

तिरै शोभाकान्त ढकाल र राम कुमार सुवेदीको पहलमा हेमाद्री शमसेर ज.ब.रा. सँग ०-१२-०-० रोपनी जग्गा राम कुमार सुवेदी, शोभाकान्त ढकाल र म समेतको संयुक्त नाममा खरिद गरेका थियौं, प्रधानमन्त्री निवास परिसर बिस्तारको क्रममा निवास परिसर बाहिरको बाटो २०६७ सालमा मात्र बनेको हो, उक्त बाटो तयार हुँदा तत्काल हामी समेतको स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको जग्गा हुँदै निर्माण भएको हो भन्ने समेत व्यहोराको प्रतिवादी मिन बहादुर गुरुङको बयान।

६. **प्रतिवादी सुधिर कुमार शाहको बयान (जग्गा फिर्ता २०४९):**

ललिता निवास क्याम्प भित्रको जग्गा मालपोत कार्यालयको अभिलेखमा हाल सम्म पनि व्यक्ति तथा संस्थाकै नाममा जग्गाधनी दर्ता श्रेष्ता कायम भएको छ । मालपोत ऐन, २०३४ को परिच्छेद -७ दफा २४ को उपदफा (२) मा "कसैले यो दफा प्रारम्भ हुनु भन्दा अघि वा पछि कुनै सरकारी वा सार्वजनिक जग्गा व्यक्ति विशेषको नाउँमा दर्ता गरी आवाद गरेकोमा त्यस्तो दर्ता स्वत: बदर हुने छ । त्यस्तो जग्गाको व्यक्ति विशेषको नाउँमा रहेको दर्ता लगत समेत मालपोत कार्यालय वा नेपाल सरकारले तोकेको अधिकारीले कट्टा गर्नेछ ।" भन्ने उल्लेख छ । ऐन बमोजिम उक्त जग्गाहरुको दर्ता स्वत: बदर हुनु पर्नेमा हालसम्म (३१ वर्षसम्म) बदर भएको छैन। मेरी श्रीमती उर्मिला शाहले तत्कालीन अवस्था (२०४६ साल देखि २०७६ साल) मा शिवपुरी माध्यामिक विद्यालय, महाराजगंजमा अध्यापन गर्दा एक जना नाम थाहा नभएका विद्यार्थीको अभिभावक मार्फत बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रका जग्गाहरु बिक्री गर्न खटिएको शर्माजी भन्ने बास्तबिक नाम थर वतन थाहा नभएको जग्गा दलालसँग भेट भई जग्गा समेत हेरेकी रैछन्। दलालले उक्त जग्गाको मोही र बाटो निकास एक वर्ष भित्रै मिलाई दिने भन्ने विश्वास दिलाएको रहेछ । तत् पश्चात मेरो श्रीमतीले उक्त जग्गा सस्तो मूल्यमा पाउने भएकोले उक्त जग्गा किन्नु पर्ने आफ्नो विचार मलाई भनीन् । म आफै पनि भक्तपुर मालपोत कार्यालयमा कार्यरत रहेको हुँदा मोही कायम भएको र बाटो निकास पनि नभएको जग्गा लिन हुन्न भनेर भन्दा श्रीमती र मेरो बीचमा केही असमझदारी समेत भयो । उक्त असमझदारीलाई सदा कायम राख्न पनि मिलेन र अन्तमा मेरो श्रीमतीले मेरो ईच्छा बिपरित आफ्नो दाजु बरुण कुमार शाहलाई जग्गाको पूर्जाको प्रतिलिपी र जग्गा भएको स्थान समेत देखाई आफ्नो व्यक्तिगत कमाई तथा अपुग रकम दाजुसँग मागी दलालसँग जग्गाधनी कहाँ गई रकम बुझाई आफ्नो नाममा जग्गा पास गरेको हो । राणा परिवारबाट अन्य को कसले (भुवन कुमारी चापागाई बाहेक) उक्त जग्गा पास गरेर लिए भन्ने विषय मेरो जानकारीमा छैन । उक्त समयमा म मालपोत कार्यालय, भक्तपुरमा कार्यालय प्रमुखको रुपमा कार्यरत थिएँ । त्यसबेला मेरो पिता जिवितै हुनुहुन्थ्यो र हाम्रो परिवार सगोलमा थियो । मेरो मुमाको २०३० सालमा देहान्त भएपछि मेरो बुबाले दोस्रो विवाह (श्रीमती शारदा शाहसँग) गर्नु भएको थियो । हालैको बकस पत्र पारित गरेर जग्गा प्राप्त गर्दा उक्त जग्गामा अन्य अंशियारहरुको हक नलाग्ने कानूनी व्यवस्था भएको हुँदा उक्त जग्गा बकसपत्रबाट पास गरी लिएको हो । त्यसबेला जग्गाको राजिनामा पास गरीलिंदा लाग्ने राजश्व दस्तुर भन्दा हालैको बकसपत्र पास गर्दा लाग्ने राजश्व दस्तुर धेरै कम हुन्थ्यो । त्यसबेला मालपोत कार्यालयहरुमा जग्गाको खरिद बिक्री हुँदा ६०% भन्दा बढी जग्गाहरु हालैको बकसपत्रबाट पास गर्ने प्रचलन थियो । जग्गाको दलालले फरक फरक कित्ताको जग्गाहरु सम्म बाटो खुलाईने, तत् पश्चात मोही छुट्याउने कार्य भए पछी दुबै जग्गाधनीहरुले फरक फरक कित्ताको जग्गा रोज्न सक्ने हुँदा जग्गाको प्लट मिल्न सक्ने तथा बाँकी १ कित्ता जग्गाको सम्बन्धमा दुबै जना संयुक्त जग्गाधनीले सगोलमा बिक्री गर्न सक्ने वा आफ्नो भागको आधा हिस्सा एक अर्कालाई बिक्री गर्न सक्ने भन्ने आश्वासन मेरो श्रीमती र भूवन कुमारी चापागाईलाई दिई उनीहरुलाई आश्वस्त पारेको रहेछ।

गेहनाथ भण्डारीसँग मेरो भेटघाट हामी दुबैको श्रीमतीहरुले जग्गा खरिद गरेको करिव ३ महिना पछि भएको हो। कुन महिनामा भन्ने सम्झना छैन। ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा व्यक्ती विशेषको नाममा ल्याउन गेहनाथ भण्डारीको भूमिका सम्बन्धमा मलाई थाहा छैन। माथि उल्लेखित जग्गा खरिद मेरी श्रीमती उर्मिला शाह समेतले गरेकी हुन्। खरिद गरेको जग्गा के कतिमा खरिद गरेको हो र सो जग्गा पछि के कतिमा मूल्य कायम बिक्री गरेको हो, रकम याद भएन।

मेरी श्रीमती उर्मिला शाहले संयुक्त रुपमा जग्गा खरिद गरेकी हुन्। मेरो श्रीमतीले आफ्नो दाजुलाई लिएर तथ्यहरु भिडाएको हो र दुबै तथ्यहरु प्रमाणित भैसकेपछि मात्र जग्गा खरिदको कार्य भएको हो।

श्रीमतीको व्यक्तिगत कमाई, दाईजो तथा पेवाको केही रकम र निजका दाजु कानून व्यवसायी बरुण कुमार शाहबाट प्राप्त ऋण सापटी समेतको रकमनै जग्गा खरिदको श्रोत हो। मोही र बाटो निकासको समस्या करिव ११ वर्ष सम्म सुल्झिन नसकेपछी मेरी श्रीमती समेतको नाममा दर्ता कायम रहेको जग्गा जग्गाधनीहरुले बिक्री गरेका हुन्। उक्त जग्गामा मोहीको हिस्सा कटाउँदा मेरो श्रीमतीको भागमा १-४-२-०(एक रोपनी चार आना दुई पैसा) जग्गा परेको थियो भन्ने ब्यहोराको प्रतिवादी सुधिर शाहको बयान।

**७. प्रतिवादी धर्म प्रसाद गौतमको बयान:**

**(क) प्रतिवादी धर्म प्रसाद गौतमको बयान (जग्गा फिर्ता २०४९):**

म २०४५ सालको अन्तिम तिरबाट २०५०/५१ साल सम्म मालपोत विभागमा शाखा अधिकृतको रुपमा काम गरे। सो पदमा कार्यरत रहँदा मेरो जिम्मेवारी महानिर्देशकले लाए अराए र तोकिए बमोजिमको कार्य गर्ने गरेको थिएँ। सरकारी जग्गामा मोही जनाउन मिल्दैन। सरकारी जग्गामा श्री ५ को सरकारको निर्णय बिना गुठी जनाउन मिल्दैन। राजगुठी भनेको सरकारी गुठी हो र यो गुठीको सम्पत्ति सरकारी सार्वजनिक सम्पत्तिनै हो। २०४४ सालमा सरकारी सार्वजनिक जग्गाहरु अभियानको रुपमा श्री ५ को सरकारको नाममा दर्ता गर्ने सिलसिलामा समरजंग कम्पनीको नाममा समेत जग्गाधनी पूर्जा बनाई जिल्ला प्रशासन कार्यालयमा पठाईएको थियो जस्तो लाग्छ। सो समरजंग कम्पनीका नाममा नापी भएको जग्गा समरजंग कम्पनीकै नाममा दर्ता भएको हुनु पर्छ। श्री ५ सरकार गुठी लेखिएको श्रेस्तामा गुठी भन्ने शब्द च्यातिएको भन्ने बुझिएकोमा गुठीमा पुर्जा पठाउने समयमा सो श्रेस्ता च्यातिएको थिएन। श्रेस्तामा श्री ५ सरकार उल्लेख गर्नुपर्नेमा श्री ५ सरकार गुठी उल्लेख भएको थियो। सरकारी जग्गामा मोही कायम हुँदैन। यदी साबिक देखिनै मोही कायम छ र सो जग्गा सरकारी सार्वजनिक होईन भने मोही कायम रहन सक्छ। राजपत्रमा समेत प्रकाशित गरी अधिग्रहण भएको जग्गामा मोही कायम हुन सक्दैन। गुठी जग्गा संरक्षण गर्ने प्रयोजनको लागि गुठीको पत्र अनुसार काठमाडौं जिल्लाका ६४ पञ्चायतका जग्गाधनी श्रेस्तामा गुठीको नाउँ जनिएका जग्गाहरुको श्रेस्ता बमोजिम हुबहु २ प्रति श्रेस्ता पूर्जा उतार गरी सो उतार प्रतिलाई प्रमाणित गरी १ प्रति श्रेस्ता मालपोत कार्यालय डिल्लीबजारको गुठी फाँटमा राखि अर्को प्रति जग्गाधनी पुर्जा एकमुष्ट रुपमा गुठी संस्थानमा पठाईएको हो। अभियानको रुपमा श्रेस्ता उतार गरी पठाईएको हुँदा नापीको फिल्डबुक हेरिएको थिएन।मोठ श्रेस्तामा ललिता निवास क्षेत्र भित्रको केही कित्ता जग्गामा श्री ५ को गुठी र केही कित्तामा श्री ५ सरकार गुठी उल्लेख थियो। काठमाडौं जिल्ला भरिकै, ६४ पञ्चायतकै राजगुठीका जग्गाहरुको पूर्जा एकमुष्ठ श्रेस्ता उतार गरी प्रमाणित गरी पठाईएको हो। ललिता निवास क्याम्प भित्रको जग्गाहरुको जग्गाधनी दर्ता श्रेस्ताको मलाई देखाईएको छायाँ प्रति "गुठी लगत तथा तहबिल कार्यालयको च.नं. २४२२ मिति २०४२/०१/१८ को पत्रानुसार तोक आदेशले वार्ड २३ क्ष कि.नं. ९, १०, ११,

१२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५ र ६६ को जग्गा श्री ५ को सरकार गुठी कायम भएको " भन्ने छेउमा र "गुठी लगत तथा तहबिल कार्यालयको च.नं.२४२२ मिति २०४२/०१/१८ को पत्रानुसार तोक आदेशले वार्ड २३ क्ष कि.नं. ६७, ६९, ७०, ७१, ८१, ८२ र ८३ को जग्गा श्री ५ गुठी कायम भएको" भन्ने बिबरण भएको उक्त जग्गाधनी दर्ता श्रेस्तामा मिति २०४२।०३।१६ गते भएको दस्तखत मैले गरेको मेरो दस्तखत हो।

उल्लेखित जग्गाहरु मध्ये कि.नं. ९ समेत उल्लेख भएको जग्गाधनी श्रेस्तामा श्री ५ गुठी, श्री ५ सरकार गुठी, श्री ३ गुठी कालमोचन गुठी उल्लेख भएका जग्गाहरु राजगुठनै हुने हुँदा सो जग्गाको पूर्जा पठाई दिन लेखि आए बमोजिम गुठीको कर्मचारीहरुको समेत सहयोग लिई श्रेस्ताको हुबहु उतार गरी सोलाई प्रमाणित गरी राजगुठी सम्पत्ति संरक्षण गर्ने उद्देश्यका साथ अभियानको रुपमा सो कार्य सम्पन्न भएको हो। मोठ श्रेस्ता सच्चाई उल्लेखित जग्गाहरु गुठीमा दर्ता भएको होईन। श्रेस्तामा श्री ५ को सरकार उल्लेख गर्नुपर्नेमा केही कित्तामा श्री ५ गुठी, केही कित्तामा श्री ५ सरकार गुठी जग्गाधनी उल्लेख गरेको कारणले नापीले बुझाएको श्रेस्ता बमोजिमनै गुठीमा पूर्जा पठाईएको हो। श्री ५ को सरकार गुठी जनिएका अन्य स्थानका जग्गाको पनि गुठी संस्थानमा पूर्जा पठाईएको थियो। अभियानको रुपमा सरकारी सार्वजनिक जग्गा दर्ता गर्ने क्रममा मोठ श्रेस्तामा श्री ५ को सरकार जनिएको वा सरकारी निकायको नाम उल्लेख भएको टुँडिखेल,सिंहदरवार, चारखाल लगायतका करिव ८० हजार रोपनी सरकारी सार्वजनिक जग्गा श्री ५ को सरकारको नाममा र सरकारी निकायका नाम उल्लेख भएको जग्गाहरु तत:तत: निकायका नाममा दर्ता गरी जिल्ला प्रशासन कार्यालयमा दर्ता गरी जग्गाधनी प्रमाण पूर्जा पठाएको हो। प्रश्नमा उल्लेखित जग्गाहरु गुठीको नभई श्री ५ को सरकारको हो भन्ने तथ्य मालपोत कार्यालय काठमाडौंले सुवर्ण सम्शेरका हकदारका नाममा नामसारी दर्ता गर्न २०४९ सालमा स्वीकृतिको लागि मालपोत विभागमा पठाएकोमा चिठ्ठि साथ संलग्न सुवर्ण सम्शेरले गरी दिएको २०१७ सालको लिखत, नापीले तयार पारेको फिल्डबुक उतार र गुठी संस्थानले अभियानको रुपमा गुठीको नामको पुर्जा गुठी संस्थानमा पठाउँदा भुलबस निजी गुठी वा रैकर जग्गाको पुर्जा प्राप्त भएमा गुठीमा आएको पुर्जाको लगत कट्टा गरी मालपोत कार्यालयमा फिर्ता पठाईने छ भन्ने गुठी संस्थानको मिति २०४२/०३/२०को पत्र समेतका आधारमा यो जग्गा गुठीको नभई सरकारी देखिएकोले मालपोत ऐनको दफा ७(३) बमोजिम जग्गाधनीको नाम थर सच्चाउने अधिकार मालपोत कार्यालयलाईनै भएकोले सोही ऐन बमोजिम गर्न निर्देशन दिएको हो। मालपोत विभागको मिति २०४९/०९/२२ को पत्रमा कार्यालयको माग बमोजिम स्विकृति नदिईएको। सुवर्ण सम्शेरका हकदारको नाममा नामसारी दाखिल खारिज गर्न लेखि पठाएको छैन र त्यस्तो कुनै निर्देशन समेत दिएको छैन भन्ने कुरा यही विवदिद जग्गाको विषयमा काठमाडौं जिल्ला अदालतमा चलेको दर्ता बदर गरी सरकारी कायम गरी पाउँ भन्ने मुद्दा मालपोत विभागले प्रतिउत्तर पेश गरेको छ।मालपोत विभागले जग्गाधनीको नाम संसोधन गर्न (श्री ५ को सरकारको नाममा कायम गर्ने प्रयोजनको लागि) निर्देशन दिएकोमा निर्देशन विपरित चिठ्ठी प्राप्त भएकै दिन सुवर्ण सम्शेरका हकदारका नाममा दर्ता गरेको भन्ने अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृतले अबगत गराउँदा मात्र जानकारी भयो। मालपोत कार्यालयले मिति २०४४/०९/२२ को निर्देशनको आफु अनुकुलको व्याख्या गरी सुवर्ण सम्शेरको हकवालाको नाममा नामसारी दाखिल खारिज गरेको रहेछ। विभागको निर्देशन बमोजिम कार्य संम्पादन गर्नु कार्यालयको कर्तव्य हो। निर्देशन स्पष्ट नभए स्पष्टताको लागि पुन: पेश गर्नु पर्नेमा सो नगरी आफू अनुकुल व्याख्या गरी कार्य गर्न अधिकारीनै जिम्मेवार हुन्छ। आफूले गरेको कामको जस अपजस अरुलाई थोपर्न मिल्दैन। कार्यालयले आफ्नो अधिकार र कर्तव्य बिर्षन मिल्दैन। मिति

२०४९/०९/२२ गतेको पत्रमा श्री ५ को सरकार मन्त्रीपरिषदका निर्णयहरु बमोजिम कति जग्गा जफत भएको र कति बाँकी छन्। बाँकी जग्गा श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता गरी जानकारी गराउन तथ्याङ्क राख्ने प्रयोजनका लागि निर्देशन भएको हो। श्री ५ को सरकारको निर्णय बमोजिम बमोजिम सो निर्णय बमोजिमको प्रकृया र कार्यविधी बमोजिम फिर्ता दिनुपर्ने ठहर भएका जग्गाको ज.ध पूर्जा सम्बन्धित ब्यक्तिलाई उपलव्ध गराएपछि श्री ५ को सरकारको निर्णय कार्यान्वयनको कार्य सम्पन्न हुने हुँदा मालपोत कार्यालयले श्री ५ को सरकारको निर्णय बमोजिम कार्यान्वयन गर्नु पर्छ। तथ्याङ्क प्रयोजनको लागि विवरण माग गरिएको सम्म हो। ललिता निवासको जग्गा फिर्ता दिनु, नामसारी गरी दिनु भन्ने समेतको निर्देशन भएको छैन । म मालपोत कार्यालय काठमाडौं डिल्लीबजारमा कार्यरत रहँदा सो पत्र बारे मलाई सम्झना छैन। पत्र प्राप्त भएको भए म समक्ष पेश हुनु पर्ने हो। माथी उल्लेखित विवरणको सम्बन्धमा मैले यसै कार्यालयमा मिति २०७६/०८/१७ गते केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समितिको संयोजक समक्ष गरीदिएको घटना विवरण कागजमा खुलाएको छु। साथै कार्यालयमा प्राप्त हुने सबै कागजात सम्बन्धित फाँटबाट पेश नभएसम्म जानकारी हुन अवस्था रहँदैन। सम्बन्धित फाँटले पेश गर्नुपर्ने फाँटवालाको जिम्मेवारी हो। माथी प्रश्नमा उल्लेख गरिएको विवरण बमोजिमको पत्र प्राप्त भएको भए अंचालाधिश कार्यालयको पत्र कार्यान्वयन नगर्ने नहुने भन्ने प्रश्नै उठ्दैन।पत्र वा फाईल म समक्ष पेश नभएको कारणले पत्र कार्यान्वयन नभएको हुन सक्छ ।

मालपोत कार्यालय काठमाडौंले ललिता निवास क्याम्प भित्रको ३४ कित्ता (वडा नं. २३ क्ष को कित्ता नं.९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०, ७१, ८१, ८२ र ८३) जग्गाहरू श्री ५ सरकार गुठीको नाममा दर्ता देखिएकोमा जफत भएका जग्गा श्री ५ को सरकारको निर्णय बमोजिम शुवर्ण शम्सेरका हकदारलाई फिर्ता दिनुपर्ने हुँदा स्वीकृति पाऊँ भनी स्वीकृति माग गरेकोमा पत्रसाथ प्रस्तुत कागजात हेर्दा १७ सालमा सुवर्ण शम्सेर राणाले पास गरी दिएको लिखतमा ललिता निवास क्षेत्र भित्र गुठीको जग्गा नदेखिएको, उल्लेखित जग्गाको फिल्डबुकमा उल्लेखित जग्गा गुठी भनी कतै उल्लेख भएको नदेखिएको र गुठी संस्थानको पत्र बमोजिम जग्गाधनी पूर्जा गुठी संस्थानमा पठाउँदा अभियानको रुपमा सो कार्य संपादन भएको हुँदा कुनै निजी गुठी वा रैकर जग्गा (सरकारी जग्गा पनि रैकर सरह हुन्छ)को जग्गाधनी प्रमाण पूर्जा प्राप्त हुन आएको देखिएमा गुठीमा आएको लगत कट्टा गरी प्राप्त पूर्जा मालपोत कार्यालयमा फिर्ता पठाईने छ भन्ने पत्र समेतबाट उल्लेखित जग्गा गुठीको नभई श्री ५ को सरकारको जग्गा देखिएकोले नापी गोश्वाराले उल्लेखित कित्ताको जग्गा श्री ५ को सरकारको नाममा मोठ श्रेस्ता कायम गर्नुपर्नेमा भुलबस केही कित्तामा गुठीको नाम उल्लेख गरेको देखिएको हुँदा जग्गाधनीको नाम थर फरक परेमा मालपोत ऐन २०३४ को दफा ७(३) मा संसोधन गर्न सकिने व्यबस्था रहेको र सो संसोधन गर्ने अधिकार मालपोत कार्यालयलाईनै भएको हुँदा सोही ऐन अनुरुप नाम संसोधन गर्ने क्षेत्राधिकार मालपोत कार्यालयलाईनै भएकोले नाम संसोधन गर्नको लागि निर्देशन दिएको हो । कार्यालयको माग बमोजिम स्वीकृति वा सहमति दिएको छैन । सुवर्ण शम्सेरको हकदारको नाममा दर्ता गर्नु भनी कही कतै भनिएको छैन । मोहन प्रसाद भट्टराई मेरो जेठी सासुको छोरा हुन । शशिकला सुब्बा भन्ने महिला को हुन मैले चिनेको छैन । श्रीमती खिमादेवी आङ्बुहाङ भन्ने महिला तत्कालिन मालपोत अधिकृत प्रेम बहादुर खापुंगको श्रीमती हुनुहुन्छ । म उहाँलाई चिन्दछु । निजहरुले जग्गा खरिद गरेको भनिएको समयमा म मालपोत विभागमा कार्यरत थिएँ । मोहन भट्टराई समेतका ब्यक्तिहरुले किन र कसरी जग्गा लिनु दिनु गरेका हुन निजहरुलेनै खुलाउन सक्ने कुरा हो । यसै विषयमा अख्तियारमा अनुसन्धानको क्रममा वयान गराउँदा मात्र मैले थाहा पाएको थिएँ । त्यपछि मैले

खोजतलास गर्दा मोहन भट्टराई र खिमादेवी आङ्बुहाङले २०४९ साल मंसीरमा जग्गा पास गरी लिएको र मोहन भट्टराई र शशिकला सुब्बाले २०५० जेष्ठमा जग्गा पास गरी लिएका रहेछन। मालपोत कार्यालयले स्वीकृती पाउँ भनी २०४९/०८/०१ मा मालपोत विभागमा पत्र पठाएको र पत्र पठाएको मिति भन्दा लगभग ५३ दिन अगाडीनै निजहरुले जग्गा पास गरेको लिखतबाट देखिन्छ भने शशिकला सुब्बा समेतले मालपोत विभागलाई चिठ्ठी पठाएको करिव ५ महिना पछि जग्गा पास गरेको देखिन्छ। मैले आफ्नो आफन्त र कर्मचारी तथा कर्मचारीको आफन्तको नाममा कुनै जग्गा पास गरे गराएको छैन। मेरो आफन्त मोहन प्रसाद भट्टराईले के-कसरी उल्लेखित जग्गा पास गरी लिएका हुन सो कुरा लिने दिनेलाई बुझेमा थाहा हुन्छ। मोहन प्रसाद भट्टराई आफ्नो कारोवार गर्न स्वतन्त्र छन् निजको कारोबारको विषय निजले नभनेसम्म मलाई थाहा हुने कुरै भएन। निजले यस विषयमा मलाई केही भनेका थिएनन्।निजले गरेको कार्यको जवाफदेहिता र जिम्मेवारी निजकै हुन्छ। एउटाले गरेको कामको जस अपजस अर्कालाई लाग्ने होईन निजहरुलेनै बेहोर्नु पर्छ भन्ने ब्यहोराको प्रतिवादी धर्म प्रसाद गौतमको बयान।

ख) **<u>प्रतिवादी धर्म प्रसाद गौतमको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

म मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंमा कार्यरत रहेको समयमा उल्लेखिरत जग्गाधनी श्रेस्ता मध्ये एउटा श्रेस्तामा श्री ५ गुठी र अर्कोमा श्री ५ सरकार गुठीका नाम उल्लेख भएको हुँदा गुठी संस्थानको पत्र बमोजिम नै उक्त जग्गाको जग्गा धनि पूर्जा पठाईएको हो। मैले गुठी संस्थानमा जग्गाधनी पूर्जा पठाईएको अवस्थामा श्रेस्ता च्यातिएको थिएन। पछि कसैले नियत बस वा अन्य कारणले च्यातिएको हुनुपर्छ। म कार्यरत हुँदाको अवस्थामा सो च्यातिएको भनिएको मोठ श्रेस्ता च्यातिएको थिएन भन्ने तथ्य त्रिताल समितिले नेपाल सरकारमा पेश गरेको प्रतिवेदनको पृष्ट ५४ को दफा १३ मा उल्लेख भएको पत्रको ब्यहोराबाट समेत प्रमाणित हुन्छ। म पछिको कुनै कार्यालय प्रमुखको पालामा नापीले बुझाएको मोठ श्रेस्ताको ठेली फुटाई नयाँ पुरानो श्रेस्ता एकै ठाँउमा मिसाई नयाँ ठेली बनाएको र नापीले जग्गाधनी कायम गरीसकेको जग्गाधनीले विक्री गरीसकेको र जग्गाधनीको नाममा जग्गा बाँकी नरहेको श्रेस्ता ठेलीबाट झिकी फालिएको भन्ने बुझियो। खारेज भएको श्रेस्ताको महत्व जग्गा कायम रहेको श्रेस्ता सरह हुन्छ। प्रमाणको लागि सुरक्षित राख्नु पर्ने श्रेस्ता मोठ ठेलीबाट हटाउने कार्य कानून विपरित हो। श्रेस्ता च्यातिएको बिषयमा श्रेस्ता मेरो कार्यकालमा सबुतै रहेको थियो र नापीले भुलबस श्री ५ को सरकारको जग्गा मध्ये कहि जग्गा श्री ५ सरकार गुठी, केहि जग्गा श्री ५ गुठी भनी जग्गाधनी श्रेस्तामा त्रुटी उल्लेख गरेको भन्ने तथ्य नापजाँच ऐन बमोजिम जग्गा नापजाँच गरी श्रेस्ता पूर्जा तयार गर्नु पर्ने कार्यविधी बिषयमा नापी विभागले प्रकाशित गरेको नापी प्राविधिक निर्देशिकाको दफा ३ र १४ मा उल्लेख भएको बिस्तृत निर्देशन बमोजिम जग्गाधनी श्रेस्ता पूर्जा तयार गर्नु पर्ने हुन्छ। नापी गोश्वाराले जग्गाधनीलाई पूर्जा वितरण गरे पछि नापीले तयार गरेको फिल्डबुक बमोजिम एक पञ्चायत भित्रका एक ब्यक्तिको फिल्डबुकमा जनिएको एउटै श्रेस्ता तयार गर्ने प्रयोजनका लागि तयार गरिएको नापी गोश्वारामा रहेने २ नं. तेरिज र नापी गोश्वाराले ततकालिन भूमि प्रशासन कार्यालयमा बुझाएको वितरण गर्न बाँकी जग्गाधनी पूर्जा र पूर्जा वितरण भर्पाई किताब भिडाई हेरिएमा समेत च्यातिएको भनिएको श्रेस्तामा उल्लेखत जग्गाधनीको नाम च्यातिएको नभई सबुतै थियो भन्ने तथ्य पुष्टी हुन्छ। म २०४१ मार्ग देखी २०४५ माघ सम्म मालपोत कार्यालय डिल्लीबजारमा कार्यरत थिएँ। का.मु. प्रमूख मालपोत अधिकृत पदमा कार्यरत थिएँ। म कार्यालय प्रमुख हुँदा मालपोत ऐन, नियम, विभागिय निर्देशन तथा सरकारी कर्मचारी सम्बन्धी नियमावली बमोजिम तोकिएको काम

कारवाही गर्ने जिम्मेवारी थियो । म साबिकको अर्थ मन्त्रालय अन्तर्गतको मालपोत विभाग, बबरमहल, काठमाडौंमा २०४५ साल अन्तिम महिना देखि एकिन याद भएन २०५०/२०५१ साल सम्म शाखा अधिकृत पदमा कार्यरत थिएँ। विभागको निर्देशकले तोकेको काम गर्ने जिम्मेवारी थियो।

मिसिल संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समितिको संयोजक समक्ष मिति २०६७ साल मार्ग १७ गते घटना विवरण कागज पाना-४ देखाउदा देखिपाएँ। उक्त घटना विवरण कागजमा भएको मेरो नाम अगाडी भएको दस्तखत मेरो नै हो। उक्त कागजको प्रकरण नं. ३ मा उल्लेखित कुराहरु मैले मिति २०६७ साल मार्ग १७ गते म आफैले खुलाई लेखेको ठिक साँचो हो । हेरि चिनी सनाखत गरीदिएँ । मिति २०४२।०१।१८ गते म मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंमा कार्यरत थिएँ। मिसिल संलग्न भूमिसुधार तथा ब्यवस्था मन्त्रालय मालपोत विभागको मिति २०४९।०९।२२ गतेको श्री मालपोत कार्यालय, डिल्लीबजार काठमाडौंलाई मिसिल पठाईएको सम्बन्धमा लेखिएको पत्र मलाई देखाउदा देखिपाएँ । उक्त पत्रमा मिति २०४९।९।२३ गते शाखा अधिकृतले गरेको दस्तखत मेरो हो हेरि चिनी सनाखत गरीदिएँ। गुठी लगत तथा तहविल कार्यालयको च.नं. २४२२ मिति २०४२।०१।१८ को पत्रानुसार तोक आदेशले वार्ड नं. २३ क्ष, का कि.नं.९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०, ७१, ८१, ८२ र ८३ को जग्गा श्री ५ सरकार गुठीका नाउमा गएको भन्ने जग्गाधनी दर्ता श्रेस्ता पाना-२ मलाई देखाउदा देखिपाएँ। उक्त श्रेस्तामा गरेको दस्तखत मेरो हो। सो स्थानमा गरेको अर्को दस्तखत गुठी फाँटको कुन कर्मचारीको हो, मलाई याद छैन। मालपोत कार्यालयको प.सं. ०४९।५०।१०२४, १०२५ जग्गा दर्ता च.नं.२७५२ मिति २०४९।९।१ को पत्रसाथ संलग्न फाइल पेश हुँदा काठमाडौं जिल्लामा २०४२।०४३ सालमा श्रेस्ताबाट गुठी जनिएका जग्गाको पूर्जा तयार गर्ने सिलसिलामा निजी गुठी तथा रैकर जग्गा गुठीमा दर्ता हुन आएमा गुठीको लगत कट्टा गर्ने गुठी संस्थानको मिति २०४२।०३।२० को निर्णय रहेको र पारित लिखत फिल्डबुक अनुसार यो जग्गा राजगुठीको नभई मिति २०१७।०३।३१ गतेको लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखिएकोमा नापीले श्रेस्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केहि कित्तामा श्री ५ को गुठी, केहि कित्तामा श्री ५ सरकार गुठी भनी गल्ती उल्लेख भएको देखिंदा गुठीको २०४२।०३।२० को निर्णय मिति २०१७।०३।३१ को लिखत र फिल्डबुक बमोजिम गरी श्री ५ को सरकार गुठी जनिएकोलाई संसोधन गर्ने अधिकार मालपोत ऐन २०३४ को दफा ७(३) बमोजिम मालपोत कार्यालयलाई नै भएकोले सोही ऐन बमोजिम संसोधन गर्न हुन भन्ने ब्यहोराको मालपोत विभागको मिति २०४९।९।२० को निर्णय बमोजिम मिति २०४९।०९।२२ गतेको पत्र मिति २०४९।९।२३ गते मैले सहिछाप गरी मा.पो.का. डिल्लीबजार पठाएको हो। मिति २०४२।०३।१६ गते गुठीमा श्रेस्ता पठाउदा गुठीले पठाएका पत्र बमोजिम श्रेस्तामा श्री ५ गुठी, श्री ५ सरकार गुठी, जग्गाधनी जनिएको कारणले जग्गाधनी पूर्जा गुठी संस्थानमा पठाईएको हो । मालपोत कार्यालय डिल्लीबजारले मिति २०४९।०९।०१ गते उल्लेखित जग्गा सुबर्ण शम्शेरको हकदारलाई फिर्ता गर्न स्वीकृति मागेकोमा फाईलमा संलग्न लिखतबाट सुबर्ण शम्शेरले १०१७ सालमा श्रीमती छोराहरुलाई पास गरी दिएको लिखतमा गुठी जग्गा नदेखिएको, नापीले तयार गरेको फिल्डबुकमा गुठी उल्लेख नभई सरकारी जग्गा देखिएको र गुठी संस्थानले निजी गुठीको जग्गा वा रकैर जग्गा (सरकारी जग्गा पनि रकैर हुने) को पूर्जा गुठी संस्थानमा प्राप्त भएको देखिए त्यस्तो जग्गाको गुठीको लगत कट्टा गरीनेछ भनी गुठी संस्थानले लेखि पठाएको हुँदा उल्लेखित जग्गा राज गुठीको नभई सरकारी जग्गा हो भन्ने पुष्टी भएकोले मालपोत ऐन २०३४ को दफा ७(३) बमोजिम संसोधन गरी

जग्गाधनी श्री ५ सरकारको नाममा कायम गर्नु पर्ने हुँदा मिति २०४९।०९।२० गतेको निर्णय बमोजिम पत्र पठाएको हो। जग्गाधनी श्रेस्तामा निर्देशन बमोजिम श्री ५ को गुठी, श्री ५ सरकार गुठी को नाम संसोधन गरी श्री ५ सरकारको नाममा कायम गर्नु पर्ने कर्तब्य र दायित्व मालपोत कार्यालय को हो। गुठी संस्थानको मिति २०४२।०३।१६ गतेको पत्र बमोजिम उल्लेखित सरकारी जग्गाको गुठीमा गएको लगत कट्टागरी मालपोत कार्यालयलाई पठाउनु पर्ने दायित्व गुठी संस्थान समेतको हो।

मिति २०४२।०३।१६ गतेमा कि.नं.९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०, ७१, ८१, ८२ र ८३ जग्गाहरु श्री ५ सरकार गुठी, श्री ५ गुठीको नाममा गएको भनी जनाएको ठिक साँचो हो। काठमाडौं जिल्लाका ६४ पञ्चायतका गुठी उल्लेख भएका हजारौ रोपनी जग्गाको श्रेस्ता अभियानको रुपमा एकै पटक गुठी संस्थानमा पठाईएको थियो। सो मध्ये के कति सरकारको जग्गा त्यसबेला गुठीमा दर्ता भएको को थियो थिएन मलाई थाहा छैन। श्री ५ गुठी, श्री ५ सरकार गुठी कहिले स्थापना भएको हुन्, यी गुठीहरु मिति २०४२।०३।२० गते भन्दा अगाडी गुठीमा दर्ता थिए, थिएनन र उक्त गुठी कुन प्रयोजनको लागी स्थापना भएको थियो गुठी संस्थानलाई थाहा होला। श्रेस्तामा गुठी उल्लेख नभएको कारणले उल्लेखित कि.नं. कि.नं. ७३, २२, ३१ र ३५ का जग्गाहरु गुठी संस्थानमा नपठाईएको हुनुपर्छ। ततकालिन अवस्थामा ब्यक्ति वा संस्थाको नाममा रहेको जग्गामा मोही कायम हुन्छ तर कुनै पनि सरकारी जग्गामा मोही कायम हुदैन। नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको जग्गालाई गुठीमा श्रेस्तामा गुठी भनी मैले जनाएको छैन। श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्ने काम मैले गरेको छैन। उक्त काम पछि भएको भन्ने मैले सुनि थाहा पाएको थिएँ। म मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंमा कार्यरत रहेको समयमा उल्लेखिरत जग्गाधनी श्रेस्ता मध्ये एउटा श्रेस्तामा श्री ५ गुठी र अर्कोमा श्री ५ सरकार गुठीका नाम उल्लेख भएको हुँदा गुठी संस्थानको पत्र बमोजिम नै उक्त जग्गाको जग्गा धनि पूर्जा पठाईएको हो। मैले गुठी संस्थानमा जग्गाधनी पूर्जा पठाईएको अवस्थामा श्रेस्ता च्यातिएको थिएन। पछि कसैले नियत बस वा अन्य कारणले च्यातिएको हुनुपर्छ। म कार्यरत हुँदाको अवस्थामा सो च्यातिएको भनिएको मोठ श्रेस्ता च्यातिएको थिएन भन्ने तथ्य त्रिताल समितिले नेपाल सरकारमा पेश गरेको प्रतिवेदनको पृष्ट ५४ को दफा १३ मा उल्लेख भएको पत्रको ब्यहोराबाट समेत प्रमाणित हुन्छ। म पछिको कुनै कार्यालय प्रमुखको पालामा नापीले बुझाएको मोठ श्रेस्ताको ठेली फुटाई नयाँ पुरानो श्रेस्ता एकै ठाँउमा मिसाई नयाँ ठेली बनाएको र नापीले जग्गाधनी कायम गरीसकेको जग्गाधनीले विक्री गरीसकेको र जग्गाधनीको नाममा जग्गा बाँकी नरहेको श्रेस्ता ठेलीबाट झिकी फालिएको भन्ने बुझियो। खारेज भएको श्रेस्ताको महत्व जग्गा कायम रहेको श्रेस्ता सरह हुन्छ।

प्रमाणको लागि सुरक्षित राख्नु पर्ने श्रेस्ता मोठ ठेलीबाट हटाउने कार्य कानून विपरित हो। श्रेस्ता च्यातिएको बिषयमा श्रेस्ता मेरो कार्यकालमा सबुतै रहेको थियो र नापीले भुलबस श्री ५ को सरकारको जग्गा मध्ये कहि जग्गा श्री ५ सरकार गुठी, केहि जग्गा श्री ५ गुठी भनी जग्गाधनी श्रेस्तामा त्रुटी उल्लेख गरेको भन्ने तथ्य नापजाँच ऐन बमोजिम जग्गा नापजाँच गरी श्रेस्ता पूर्जा तयार गर्नु पर्ने कार्यविधी बिषयमा नापी विभागले प्रकाशित गरेको नापी प्राविधिक निर्देशिकाको दफा ३ र १४ मा उल्लेख भएको बिस्तृत निर्देशन बमोजिम जग्गाधनी श्रेस्ता पूर्जा तयार गर्नु पर्ने हुन्छ। नापी गोश्वाराले जग्गाधनीलाई पूर्जा वितरण गरे पछि नापीले तयार गरेको फिल्डबुक बमोजिम एक पञ्चायत भित्रका एक ब्यक्तिको फिल्डबुकमा जनिएको एउटै श्रेस्ता तयार गर्ने प्रयोजनका लागि तयार गरिएको नापी गोश्वारामा रहने २ नं. तेरिज र नापी गोश्वाराले ततकालिन भूमि प्रशासन

कार्यालयमा बुझाएको वितरण गर्न बाँकी जग्गाधनी पूर्जा र पूर्जा वितरण भर्पाई किताब भिडाई हेरिएमा समेत च्यातिएको भनिएको श्रेस्तामा उल्लेखत जग्गाधनीको नाम च्यातिएको नभई सबुतै थियो भन्ने तथ्य पुष्टी हुन्छ। नापीको फिल्डबुक तथा जग्गाको मोठ श्रेस्तामा गुठी नजनिएको, श्री ५ को सरकार मात्र जनिएको जग्गा गुठीमा दर्ता गर्न मिल्दैन। नेपाल सरकारले प्रचलित कानुन बमोजिम अधिग्रहण गरेको जग्गामा कसैको हकदाबी लाग्दैन। बिर्ता उन्मुलन ऐन, २०१६ बमोजिम रैकर परिणत भएपछि सो बिर्ता जग्गा रैकरमा परिणत भई रैकर सरह मालपोत तिर्नु पर्ने हुन्छ। बिर्ता जग्गामा पनि गुठी जग्गा हुनसक्छ। त्यस्तो बिर्ता गुठी जग्गा रैकरमा परिणत भएपछि सो जग्गा रैतान नम्बरी हुन्छ तर बिर्ताको साबिक लगतमा नै गुठी उल्लेख भएको हुनुपर्छ। बिर्ताको लगतमा गुठी उल्लेख नभएको जग्गामा जग्गावालाले गुठीमा राख्ने लिखत गरीदिए बाहेक अन्य जग्गामा गुठी कायम हुन सक्दैन। मोहीहरु देव नारायाण महर्जन, द्वारिकामान महर्जन, संजय कुमार महर्जन, सकुलानन्द महर्जन, श्रीमती मोहन महर्जन म चिन्दिनँ। काठमाडौं बालुवाटार स्थित ललिता निवास क्याम्पमा पशुपति टिकिन्छा गुठी अस्तित्वमा भए नभएको गुठी संस्थान कार्यालयको अभिलेखबाट देखिनुपर्छ। पशुपति टिकिन्छा गुठी अस्तित्वमा भए नभएको मलाई थाहा छैन। फौजदारी अभियोगमा सजाय पाएको छैन। तर यसै प्रकरणमा अख्तियार दूरुपयोग अनुसन्धान आयोगले दायर गरेको मुद्दा विशेष अदालतमा बिचाराधिनमा छ। हाल तारिखमा छु भन्ने ब्यहोराको प्रतिवादी धर्म प्रसाद गौतमको बयान।

८. **प्रतिवादी रुद्र कुमार श्रेष्ठको बयान:**

(क) **प्रतिवादी रुद्र कुमार श्रेष्ठको बयान (जग्गा फिर्ता २०४९):**

२०५६ साल असार महिना देखि २०६० श्रावण महिना सम्म भूमिसुधार तथा ब्यवस्थापन विभाग, बबरमहल काठमाडौंमा महानिर्देशक पदमा कार्यालय प्रमुखको रुपमा कर्यरत थिएँ। उक्त कार्यालयको महानिर्देशकको हैषियतले मालपोत ऐन, नियम र तत्कालिन सरकारको नीति निर्देशन बमोजिम तोकिएको काम सम्पादन गर्ने, सबै मालपोत कार्यालयहरुको ऐन, नियमले निर्दिष्ट गरे अनुसार सुपरिवेक्षण, अनुगमन गरी आवश्यक निर्देशन दिने मेरो कामको जिम्मेवारी थियो। नेपाल गजेटको २०२१ र गोरखापत्रमा ललिता निवास अधिग्रहण सम्बन्धी सूचनाको छायाँ प्रति हाल आएर जानकारी भयो। अन्य विषयमा केही थाहा छैन। प्रचलित कानून बमोजिम अधिग्रहण सम्बन्धी सम्पूर्ण प्रकृया पुरा गरेको अवस्थामा जग्गामा पूर्व जग्गाधनी, मोही भनिएका व्यक्तिहरु तथा गुठी लगायतको हकदैया रहँदैन। उक्त भूमिसुधार तथा व्यवस्थान विभागको मिति २०५९।०६।२४ र २०६०/०४/२६ गतेको टिप्पणी र आदेश पत्रमा"हुन्छ" र "सदर" भन्दा मुनि गरेको दस्तखत मेरो हो।मेरो बाहेक तत्कालिन उप निर्देशक पुष्पराज उपाध्यय,तत्कालिन शाखा अधिकृत इन्द्र ढुङ्गाना समेत छन्। मालपोत कार्यालय, डिल्लिबजारबाट हालसाविक गर्ने सम्बन्धमा निर्देशन पाउ भनी पत्र आएकोले यस सम्बन्धमा २०५९/०६/२४ मैसाविक दर्ता श्रेस्ता प्रमाणित जग्गाधनीहरुको नाममा हालसाविक मिलान गर्ने कार्यमा साविकश्रेस्ता पुर्जा कै आधारमा गर्न बाधा नपर्ने ब्यहोराको निर्देशन सहित फाइल फिर्ता पठाउने भनी निर्देशन भइसकेको र अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट उक्त मिसिल छानबिन हुँदा केही गर्न नपर्ने भनी तामेलीमा राखेको ब्यहोराको जानकारी प्राप्त हुन आएकोले सोही निर्देशन अनुसार साविक व्यक्ति विशेषका नाममा दर्ता प्रमाणित रहेको जग्गा देखिएकोले सोही प्रमाणित श्रेस्ताको आधारमा नापी अनुसार कायम भएका जग्गा सोही श्रेस्तालाई आधार मानी हालसाविकश्रेस्ता मिलान गर्न बाधा नपर्ने ब्यहोरा सहित निर्देशन दिइएको हो साबिकमा ब्यक्ति विशेषको नाममा दर्ता प्रमाणित रहेको देखिएकोले सोही प्रमाणित श्रेस्ताका आधारमा हाल नापी अनुसार कायम भएको जग्गाहरु सोही श्रेस्तालाई आधार मानी हालसाविक मिलान गर्न बाधा नपर्ने भन्ने

व्यहोराको निर्देशन पठाउन मनासिव हुन्छ भन्ने मालपोत कार्यालय डिल्लीबजारको पत्र र विभागका शाखा अधिकृत र उप निर्देशकबाट प्राप्त रायको आधारमा "हुन्छ"भन्नेप्रशासकिय निर्देशन दिने काम म बाट भएको हो। यसमा मैले झुठा व्यहोराको कागज बनाएको पनि छैन र अर्काको हक जाने र आफूलाई फाइदा हुने गरी कुनै काम गरेको छैन। म समक्ष पेश भएको मिसिल संलग्न कागजात कीर्तेझुठा के हो मैले शंका गर्ने आधार नभएको र जिम्मेवार निकायबाट प्राप्त पत्र माथी शंका गर्नु पर्ने आधार नदेखिएकोलेप्रशासकिय काम अनुसार निर्देशन मात्र दिएको हो। झुठा कागज बनाई कीर्ते गरेको होईन। झुठा कागजबाट कसैले कीर्ते गरेको रहेछ भने निजले कानून बमोजिम सजाँय पाउनु पर्छ। ललिता निवास क्याम्प भित्रको मोठ श्रेस्ता र फिल्डबुकमा जग्गाधनी श्री ५ को सरकार जनिएको ३४ कित्ता (वडा नं. २३ क्ष को कित्ता नं. ९, १०, ११, १२ ,१३ ,१४ ,१५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५,६६,६७,६९,७०,७१,८१,८२ र ८३) जग्गाहरूको साबिक श्रेस्तामा मोहीको सम्बन्धमा पुर्जा पेश नभएकोले जानकारी भएन भन्ने ब्यहोराको प्रतिवादी रुद्र बहादुर श्रेष्ठको बयान।

**ख) <u>प्रतिवादी रुद्र कुमार श्रेष्ठको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

म २०५६ साल देखी २०६० साल साउन महिना सम्म भूमिसुधार तथा ब्यवस्थापन विभाग, बबरमहल काठमाडौंमा महा निर्देशक पदमा कार्यरत थिएँ। सो पश्चात सरुवा भई २०६० भाद्र महिना देखि २०६३ साल असार महिना सम्म भूमिसुधार तथा ब्यवस्था मन्त्रालय, सिहंदरवार, काठमाडौंमा सह सचिब पदमा कार्यरत रहेकोले मिति २०६२।०९।१२ गते म भूमिसुधार तथा ब्यवस्था मन्त्रालय सिहंदरवार, काठमाडौंमा कार्यरत थिएँ। मिति २०६७ चैत्र २६ गते नेपाल सरकारको सचिव पदबाट सेवा निबृत्त भई हाल ललितपुर स्थित घरमा नै बस्दै आएको छु। भूमिसुधार तथा ब्यवस्था मन्त्रालय, सिंहदरवारमा सह सचिब पदमा रहदा कर्मचारी प्रशासन सम्बन्धी, आन्तरिक प्रशासन र जग्गा प्रशासन शाखाको जिम्मेवारी तोकिएको थियो। ती शाखामा सचिबबाट अधिकार प्रत्यायोजन भए अनुसारका कार्य सम्पादन गर्ने, बिभिन्न शाखाहरुबाट राय टिप्पणी साथ प्राप्त फाइलहरुमा आफ्नो रायसाथ सचिब ज्यु समक्ष पेश गर्नु पर्ने दायित्व, कर्तब्य तथा जिम्मेवारी मेरो रहेको थियो। साविक नापीको फिल्डबुक तथा जग्गाको मोठ दर्ता श्रेस्तामा गुठी नजनिएको, श्री ५ को सरकार मात्र जनिएको जग्गा गुठीमा दर्ता गर्न मिल्दैन। नेपाल सरकारले प्रचलित कानून बमोजिम अधिग्रहण गरेको जग्गामा कसैको हकदाबी लाग्दैन। बिर्ता उन्मुलन ऐन, २०१६ बमोजिम रैकर परिणत भएपछि सो बिर्ता जग्गा रैकरमा परिणत भई रैकर सरह मालपोत तीर्नु पर्ने हुन्छ। टिप्पणीमा "श्रीमान्, उपर्युक्तानुसार गुठी संस्थानले उल्लेखित कित्ता जग्गाहरु गुठी कायम गर्नु पर्ने आधार औचित्य वारे एकिन राय लिनुपर्ने देखिंदा उक्त संस्थानबाट राय प्राप्त भएपछि यस बारे कारबाही टुङगो लगाउन उपर्युक्त हुने देख्दछु" भनी मिति २०६२।०९।१२ गते सह सचिब पद जनिई संकेत नं. "ड" दिईएको सहिछाप गरेको टिप्पणी मलाई देखाउदा देखिपाएँ। उक्त टिप्पणीमा संकेत नं. 'ड' दिईएको मिति २०६२।०९।१२ गते गरेको दस्तखत मेरो हो। हेरि चिनी सनाखत गरीदिएँ।

फाइल संलग्न गुठी संस्थानको पत्रानुसार गुठी कायम गर्नु पर्ने उल्लेखित जग्गाहरुको सम्पूर्ण विवरण आधार प्रमाण (मोठ श्रेस्ता पुर्जा, लगत, श्रेत्रफल, कित्ता नं.) उल्लेख गरी औचित्य र प्रचलित कानुनी आधारहरु तथा औचित्य बारे स्पष्ट नहुँदा उपर्युक्त विवरण र आधारहरु स्पष्ट गरी पेश गर्न गुठी संस्थानलाई लेखि पठाउन उपयुक्त हुने राय पेश गरेको हुँ। सो रायमा सचिब युवराज भुसालले हुन्छ भन्ने स्वीकृति जनाउनु भएको हो। नेपाल सरकारको नाममा दर्ता सच्याई पशुपती टिकिन्छा गुठी नाममा जग्गा दर्ता कायम गर्ने कार्य मैले गरेको

छैन । यो राय मन्त्रिपरिषदमा पेश गर्ने प्रस्ताव होईन । गुठी संस्थान केन्द्रीय कार्यालयकाबाट प्राप्त हुन आएको फाइल संलग्न आधार प्रमाणहरुबाट गुठी संस्थानलाई एकिन जवाफ लेखि पठाउन मैले राय ब्यक्त गरेको हुँ। त्यसपछिको अवस्था बारे मलाई जानकारी भएन । यसमा गुठी कायम गर्ने कार्यमा मेरो कुनै भुमिका पनि छैन र मेरो संलग्नता पनि छैन । गुठी संस्थानसँग एकिन राय आधार र औचित्य सहित १) छुट जग्गा दर्ता अन्तरगत कारबाही गर्ने मध्ये कुन बिषय को हो ? २) साविक देखि गुठीको जग्गामा के कसरी साविक र पुन: नापीमा अन्यका नाममा नाप नक्सा भएको हो ? ३) यस मन्त्रालयको च.नं. ९४० मिति २०६२।०६।०३ गतेको पत्रबाट सोधनी भएको नं. १६ र १९ नं. उल्लेख भएको बिषयमा के भएको हो ? भनी ३ बुदे निर्देशन सहित जवाफ माग गरिएको सम्म हो । म २०६३ साल असार महिना देखि अन्य मन्त्रालयमा सरुवा भई गएकोले त्यस पछिको प्रगति के के भयो मलाई जानकारी भएन । मैले कुनै अपराधिक मनसायका साथ केहि काम गरेको छैन । गुठी संस्थानले उल्लेखित कित्ता जग्गाहरु गुठी कायम गर्नु पर्ने आधार औचित्य वारे एकिन राय लिनुपर्ने देखिदा उक्त संस्थानबाट राय प्राप्त भएपछि यस बारे कारबाही टुङगो लगाउन उपर्युक्त हुने देख्दछु भन्ने राय ब्यक्त गरेको हुँ। त्यस कारण कीर्ते, सँगठित अपराध तथा अन्य प्रचलित कानून बमोजिम मलाई कारवाही हुनुपर्ने होईन ।

म समक्ष पेश भएको टिप्पणी फाइलमा १९६३ सालको लगत र १९८७ सालको लालमोहर संलग्न नरहेको हुँदा १९६३ सालको लगत र १९८७ सालको लालमोहर बारेमा मलाई जानकारी भएन । भूमिसुधार तथा व्यवस्था मन्त्रालय, सिंहदरवारमा कार्यरत रहदा म समक्ष पेश भएको टिप्पणीमा मिति २०६२।०९।१२ गते गुठी संस्थानले उल्लेखित कित्ता जग्गाहरु गुठी कायम गर्नु पर्ने आधार औचित्य वारे एकिन राय लिनुपर्ने देखिदा उक्त संस्थानबाट राय प्राप्त भएपछि यस बारे कारबाही टुङगो लगाउन उपर्युक्त हुने देख्दछु भन्ने राय ब्यक्त सम्मको काम गरेको हुँ । सो पश्चात २०६३ साल असार महिनामा अन्यत्र सरुवा भई गएको हुँदा यस पछिका बिषय मलाई थाहा भएन । गुठी संस्थानले उल्लेखित कित्ता जग्गाहरु गुठी कायम गर्नु पर्ने आधार औचित्य वारे एकिन राय लिनुपर्ने देखिदा उक्त संस्थानबाट राय प्राप्त भएपछि यस बारे कारबाही टुङगो लगाउन उपर्युक्त हुने देख्दछु भन्ने राय ब्यक्त गरेको हुँ । मेरो २०६३ असार महिनामा अन्य मन्त्रालयमा सरुवा भएको हुँदा मेरो संलग्नता हुने कुरा भएन । सो पश्चात के कसो भयो मलाई थाहा भएन । मोहीहरु देव नारायण महर्जन, सकुलानन्द महर्जन, द्वारिकामान महर्जन, संजय कुमार महर्जन, श्रीमती मोहन महर्जन म चिन्दिनँ । मोही मध्येका प्रतिवादी देव नारायण महर्जन हाल मसँगै प्रहरी हिरासतमा रहेको हुँदा निजलाई हाल चिनेको हुँ । प्रतिवादी राम कुमार सुबेदी, सोभा कान्त ढकाल, माधबी सुबेदी र उमा कुमारी ढकाललाई म चिन्दिनँ । निजहरुले के कसरी उल्लेखित जग्गा प्राप्त गरे मलाई थाहा भएन । बदनियतपूर्वक राज्यलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी पशुपती टिकिन्छा गुठीको नाममा ४-१४-३-२ रोपनी जग्गा दर्ता गरी सरकारलाई हानी नोक्सानी पुर्याउने कार्यमा संलग्न ब्यक्तिहरुको कासूर प्रमाणित भएको अवस्थामा सम्बन्धित कसूरदारहरुको बिगो तिर्ने दायित्व हो। मिति २०७६।१०।२७ गतेको जाहेरी दरखास्त देखाउदा देखिपाएँ । उक्त जाहेरी दरखास्तमा उल्लेखित प्रतिवादीहरुलाई चिन्दिनँ । मिति २०७८।०९।०१ गतेको प्रहरी प्रतिवेदन देखाउदा देखिपाएँ । सो प्रतिवेदनमा उल्लेखित दिलिप कुमार भट्ट, सेमन्तराज चापागाई, दिनेश हरी अधिकारी, युवराज भुसाल, नारायण गोपाल मलेगो, ईन्द्र प्रसाद ढुङ्गाना लाई जागिरको सिलसिलामा चिनेको हुँ । तेजराज पाण्डेलाई अख्तियार अनुसन्धान आयोगबाट विशेष अदालतमा दायर भएको मुद्दाको सिलसिलामा चिनेको हो । निजहरुसँग नाता सम्बन्ध केहि छैन । अन्य प्रतिवादीहरुलाई चिन्दिनँ । प्रस्तुत मुद्दामा पक्राउ परेका प्रतिवादी धर्म प्रसाद गौतम, रमेश कुमार पोखरेल, घमन कुमार कार्की, शिवजी भट्टराई, बाबुराज महर्जन, देवनारायण महर्जनलाई हाल प्रहरी हिरासतमा

चिनको हुँ । अन्य प्रतिवादीहरु कहाँ छन मलाई थाहा छैन । म समेतको बिरुद्ध यस कसूर समेत यस ब्यूरोमा आ.ब. २०७६/०७७ मा मुद्दा नं. २४ मा दर्ता भएको कीर्ते कसूर मुद्दामा थप सँगठित अपराध कसूर मुद्दामा समेत अनुसन्धान भईरहेको ब्यहोरा मलाई जानकारी गराउदा थाहा भयो । उल्लेखित कसूर मुद्दाको सम्बन्धमा सम्बन्धित मुद्दामा सम्पूर्ण ब्यहोरा खुलाई लेखाई दिनेछु भन्ने ब्यहोराको प्रतिवादी रुद्र कुमार श्रेष्ठको बयान ।

९. **प्रतिवादी शिवजी भट्टराईको बयान:**

(क) **प्रतिवादी शिवजी भट्टराईको बयान (जग्गा फिर्ता २०४९):**

म काठमाडौं महानगरपालिकाको ४ नं.वडा कार्यालयमा वडा सचिवको हैसियतमा २०५८ साल पुस महिना देखी २०६० साल माघ महिना सम्म दुई बर्ष कार्यरत भई २३ नं.वडा कार्यालयमा वडा सचिवको हैसियतमा सरुवा भई गएको थिए । हाल म काठमाडौं महानगरपालिकाको कार्यालयको सहकारी बिभागमा अधिकृत छैठौमा कार्यरत रहेको छु । म काठमाडौं महानगरपालिकाको ४ नं. वडा कार्यालयमा जन प्रतिनिधी नभएकोले म वडा अध्यक्ष समेतको जिम्मेवारी समेतले सम्पुर्ण काम गरेको थिए । मैले कार्यालयको दैनिकरुपमा हुने काम कारबाही गर्ने, गराउने, नागरीकता प्रमाणको सिफारिस, नाता प्रमाणित पत्रको सिफारिस, बिभिन्न घर जग्गाहरुको नामसारी, जग्गा दर्ताको सिफारिस, मोही दर्ता सिफारिस, मोही लगत कट्टा, मोही नामसारी, घर जग्गा खरिद बिक्रीको लागि घरबाटो सिफारिस, सम्पतीहरुको मुल्याङकन सिफारिस, जग्गाको चारकिल्लाको सिफारिस गर्ने, विभिन्न कार्यालयहरुको कामको लागि प्रतिनिधिको रोहवरको रुपमा काम गर्ने, नक्सा पासको लागि सुचना टाँस र सर्जमिनको रोहवर बस्ने, घर जग्गा कर र राजस्व असुली गर्ने समेतको काम कारवाही गरेको थिए । मलाई देखाईएको मिति २०६०।०५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखि पठाएको सिफारीस पत्रमा काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको वडा सचिवको हैसियतमा गरेको दस्तखत मैले गरेको मेरो नै दस्तखत हो, फरक छैन,उक्त मुचुल्कामा भएको "शिवजी भट्टराई सचिव का.म.पा.४ वडा" लेखिएको छाप पनि मेरो हो, हेरी चिनी सनाखत गरीदिए । मुचुल्काको व्यहोरा सम्बन्धमा मलाई याद भएन । मिति २०६० फागुन ३० गते रोज ७ शुभम् लेखिएको मुचुल्कामा भएको वडा सचिव शिवजी भट्टराईको नामको अगाडी भएको दस्तखत मेरो हो वा होईन एकिन साथ भन्न सक्दिन । श्री ५ को सरकारबाट रितपूर्वक मुआब्जा दिएको नदिएको भन्ने मलाई केही थाहा छैन । वडा कार्यालयहरुमा यस्ता किसिमका श्रेस्ताहरु कहि कतै आजका मिति सम्म रेकर्ड राख्ने गरेको मेरो जानकारीमा छैन । सरकारी अभिलेखहरु वडा कार्यालयमा नरहने । वडा कार्यालयको कामा केवल अनुरोधात्मक सिफारिस सम्बन्धित निकायलाई गर्ने हो । रेकर्ड हेर्ने कामा सम्बन्धित कार्यालयको हो । मैले कसैको लोभ प्रलोभनमा परी वा दवावमा झुठो व्यहोराको किर्ते मुचुल्का तयार गर्ने कार्य गरेको छैन । सो कार्यमा को कस्को संलग्नता छ मलाई थाहा छैन । मैले झुठो ब्यहोराको सर्जमिन मुचुल्का तयार गरेको छैन म उक्त मुचुल्काको रोहवरमा मात्र बसेको हो । सर्जमिन मुचुल्कामा सधियार र साँक्षीहरुले बोलेका कुराहरु सत्य साँचो हो भनी लेखाई सहिछाप गरेका थिए । निजहरुले झुठा ब्यहोरा लेखाएको भए सो कुरा मलाई थाहा भएन । मैले झुठा ब्यहोरा लेखाएको छैन तसर्थ मलाई कारवाही हुनु पर्दैन । जग्गाको ना.सा. दा.खा गर्दा घरबाटो सिफारिस लिनु पर्छ । तर बाटो कायम गर्ने सवलामा नापीबाट नै काम हुन्छ। वडाबाट आवस्यक परेमा प्रतिनिधि बोलाउन सक्छ । ललिता निवास क्याम्प भित्रको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको जग्गा विभिन्न व्यक्ति विशेषको नाममा ना.सा. दा.खा गर्दा घरबाटो शिफारिस लिएको थियो थिएन सो मलाई थाहा भएन । काठमाडौं महानगर लगायत नेपाल भर रहेको ७५३ नै स्थानिय तहमा भएको नेपाल सरकारको नाममा रहेको सार्वजनिक जग्गाहरुको अध्यावधिक गरी अध्यावधिक रेकर्ड

नेपाल सरकारका सबै सरोकारवाला निकायहरुमा सुरक्षित र जिम्मेवार ढंगले राखी कहिं कतैबाट यस्ता कुराहरुमा जिम्मेवार भई कार्य नगर्ने प्रयास गरेमा वा देखिएमा निजहरु उपर कडा कारवाही गर्नु पर्दछ र हरेक वर्ष त्यस्ता रेकर्डहरुको पुनराबलोकन समेत गर्नु पर्दछ। यस्ता सार्वजनिक जग्गाहरुको आम नागरीकले देख्ने गरी सूचना बोर्ड टाँस गरी सुरक्षित गर्नु पर्छ भन्ने व्यहोराको प्रतिवादी शिवजी भट्टराईको बयान।

**ख) प्रतिवादी शिवजी भट्टराईको बयान (छुट जग्गा दर्ता २०६२):-**

काठमाडौं महानगरपालिकाको ४ नं. वडा कार्यालय मा वडा सचिवको हैसियतमा म २०५८ साल पुस महिना देखी २०६० साल माघ महिना सम्म दुई बर्ष कार्यरत भई हाल म काठमाडौं महानगरपालिकाको कार्यालयको सहकारी बिभागमा अधिकृत छैठौमा कार्यरत रहि आएको छु। म काठमाडौं महानगरपालिकाको ४ नं. वडा कार्यालयमा वडा सचिवको हैसियतमा कार्यरत हुँदा जनप्रतिनिधी वडा अध्यक्ष नभएकोले मैले वडा अध्यक्ष समेतको जिम्मेवारीको सम्पुर्ण काम गरेको थिए। मैले कार्यालयको दैनिकरुपमा हुने नियमित कामकारबाही गर्ने, गराउने, नागरीकता प्रमाणको सिफारिस, नाता प्रमाणित पत्रको सिफारिस गर्ने, बिभिन्न घर जग्गाहरुको नामसारी गर्ने, जग्गा दर्ताको सिफारिस गर्ने, सम्पतीहरुको मुल्याङकन सिफारिस गर्ने, जग्गाको चारकिल्लाको सिफारिस गर्ने, विभिन्न कार्यालयहरुको कामको लागि प्रतिनिधिको रोहवरको रुपमा काम गर्ने, नक्सा पासको लागि सुचना टाँस र सर्जमिनको रोहवर बस्ने, घर जग्गा कर र राजस्व असुली गर्ने समेतको काम गरेको थिए। मिति २०६०।०५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखि पठाएको सिफारीस पत्रमा काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको वडा सचिवको हैसियतमा गरेको दस्तखत म शिवजी भट्टराईले गरेको मेरो नै दस्तखत हो, फरक छैन। नाता प्रमाणितको आधारबाट मृतक कनक शमसेरको हकदार श्रीमती सुनिती राणा र छोरा हेमाद्री शमसेर ज.ब.रा. देखिएको, निजहरुले पेश गरेको निबेदन समेतको संलग्न फिल्ड बुक, नागरीकता प्रमाण पत्र र उल्लेखित जग्गा निजहरुको घर कम्पाउण्ड भित्र रही निजहरुले नै भोगचलन गरी आएको देखिएकोले कानून बमोजिम छुट जग्गा निबेदकको नाममा दर्ता गरी जग्गाधनी प्रमाण पुर्जा उपलब्ध गराई दिनु भनी मालपोत कार्यालयलाई सिफारिस गरी दिएको हो। तत्कालिन समयमा उल्लेखित जग्गा सरकारी जग्गा भएको सम्बन्धमा मलाई केही थाहा थिएन, पछि मात्र सरकारी जग्गा भएको सुन्नमा आएको हो। मैले सिफारिस गरेबाट निबेदकबाट मैले कुनै प्रकारको लाभ लिएको थिएन र छैन, यसमा मलाई कानून बमोजिम हुन मन्जुर छु भन्ने ब्यहोराको प्रतिवादी शिवजी भट्टराईको बयान।

**ग) प्रतिवादी शिवजी भट्टराईको बयान (जग्गा सट्टापट्टा २०६७):**

काठमाडौं महानगरपालिकाको ४ नं.वडा कार्यालय मा वडा सचिवको हैसियतमा म २०५९/०८/१२ देखी २०६१/०९/२९ सम्म काठमाडौं महानगरपालिकाको २३ नं.वडा कार्यालयमा वडा सचिवको हैसियतमा सरुवा भई गएको थिए। हाल म काठमाडौं महानगरपालिकाको कार्यालयको सहकारी बिभागमा अधिकृत छैठौमा कार्यरत रहि आएको छु। मलाई मिसिल संलग्न रहेको यसमा साबिक नगर २३ ह कि.नं. ४० को क्षे.फ. ०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं. १० मध्ये भिड्ने हो, उक्त जग्गाको जोताहा महलमा हर्क नारायण डंगोल लेखिएको भए तापनि नापी अगावै देखी रामकृष्ण महर्जनले ने जोत भोग गरी आएकोले निजकै नाममा दर्ता हा.सा समेत गरी ज.घ.प्र.पु.उपलब्ध गराई दिएमा फरक पर्ने छैन भनी" गरेको सर्जमिन मुचुल्का देखाउँदा देखे, उक्त मुचुल्काको रोहबरमा काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको वडा सचिवको हैसियतमा गरेको दस्तखत म शिवजी भट्टराईले गरेको दस्तखत हो। फरक छैन, सो दस्तखत मेरो आफ्नै हो , हेरी चिन्ही सनाखत गरीदिए। गुठी संस्थान तहसील शाखाका कर्मचारीहरु सर्जमिन मुचुल्कामा रोहबरमा सहयोग गरीदिनु

भनी लिखित पत्र सहित वडा कार्यालयमा आउनु भए पश्चात गुठी संस्थान तहसील शाखाका कर्मचारी सहित म सम्वन्धित जग्गामा गई जग्गा हेरी म कार्यालयमा फर्किए पश्चात गुठी संस्थान तहसील कार्यालयबाट खटि आएका कर्मचारीहरुले सर्जमिन मुचुल्कामा बस्ने ब्यक्तिहरुको सहिछाप गरी वडा कार्यालयमा ल्याए पश्चात मैले उक्त सर्जमिन मुचुल्काको रोहवरमा वडा अध्यक्षको हैसियतले सही छाप गरेको हुँ। का.जि.का.म.पा. वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको साबिक २३ ह कि.नं. ४० को क्षेत्रफल ०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं. १० मध्ये भिडने हो उक्त जग्गाको जोताहा महलमा हर्क नारायण डंगोल लेखिएको भए तापनि नापी अगावै देखी रामकृष्ण महर्जनले नै जोत भोग गरी आएकोले निबेदक मोही रामकृष्ण महर्जनको नाममा दर्ता नामसारी हा.सा. समेत गरी ज.ध.प्र.पुर्जा उपलब्ध गराई दिए फरक पर्ने छैन भनी उक्त मुचुल्का गरिएको हो। उक्त मुचुल्का गुठी संस्थान तहसील शाखाका कर्मचारीहरु पुरुषोतम पौडेल र डबल सिंह ठगुन्नाले सम्वन्धित फिल्डमा बसी अन्य साक्षीहरुको दस्तखत गरी तयार गरी ल्याई मेरो कार्यालयमा आई मेरो दस्तखत गराएका हुन। मलाई गुठी संस्थान तहसील शाखाबाट खटि आएका कर्मचारीले हामीले मुचुल्कामा बस्ने मानिसहरु सबैको दस्तखत गराई सकेका छौ, तपाईको रोहबरमा दस्तखत गरीदिनु, काम तामेलमा सही हामी अफिसमा गई गर्ने छौ भनेका कारण गुठी संस्थान तहसील शाखाबाट खटि आएका कर्मचारीको विश्वासमा परी काम तामेल गर्ने कर्मचारीले दस्तखत नगरी मैले रोहबरमा दस्तखत गरीदिएको हुँ। उल्लेखित सर्जमिन मुचुल्कामा सहि छाप गर्ने साक्षी भनिएका ब्यक्तिहरुलाई समेतलाई म चिन्दिन। मलाई मिति २०६०/५/१२ गतेको, च.नं. ३८० को काठमाडौं महानगरपालिका वडा नं. ४ को श्री गुठी तहसिल कार्यालय, कालमोचन, काठमाडौंलाई लेखिएको पत्रको प्रतिलिपी देखाउँदा देखे, उक्त पत्रको अन्तमा शिवजी भट्टराई, सचिब , का.म.पा, ४ वडा भनी गरेको दस्तखत मेरो आफ्नै हो। हेरी चिनी सनाखत समेत गरीदिए। मोहीहरुले पेश गरेको निवेदन, फिल्ड बुक उतारको नक्कल, तत्कालीन वडा अध्यक्ष रत्न प्रसाद जोशीको मोहीहरुले जोती कमाएको भन्ने सिफारिस पत्र, गुठी तहशिल कार्यालयको सर्जमिन मुचुल्काको आधारमा जोताहा मोहीहरुले साबिक गुठी संस्थान अन्तर्गतको टिकिन्छा गुठी मौजे हाडिगाउँ मलिकुली खेतका मोही आशा मरु ज्यापुका नाममा रहेको खेत रोपनी १० मध्ये बाट भिड्ने जग्गा जोताहा मोहीहरुले साबिक देखी हाल सम्म निरन्तर जोत कमोद गरी आएको भनी सिफारिस दिएको हुँ। आफ्नो वडा एरियामा रहेका सरकारी तथा सार्वजनिक जग्गा सम्पती समेतको संरक्षण गर्ने दायित्व स्थानीय वडा कार्यालयको पनि हो। मलाई उल्लेखीत जग्गाहरु सरकारी जग्गाहरु हुन भन्ने थाहा थिएन। मोहीहरुले पेश गरेको निवेदन, फिल्ड बुक उतारको नक्कल, तत्कालीन वडा कार्यालयले मोहीहरुले जोती कमाएको भन्ने सिफारिस पत्र, गुठी तहशिल कार्यालयको सर्जमिन मुचुल्काको आधारमा मैले उल्लेखीत कित्ताको जग्गाहरु सम्वन्धीत मोहीले जोत भोग गरी आएकोले जोताहा मोहीहरुले साबिक देखी हाल सम्म निरन्तर जोत कमोद गरी आएको भनी सिफारिस तथा निबेदक मोहीको नाममा दर्ता नामसारी हा.सा. समेत गरी ज.ध.प्र.पुर्जा उपलब्ध गराई दिए फरक पर्ने छैन भन्ने मुचुल्काको रोहबरमा बसी सही गरेको हुँ। मैले मेरो पदिय जिम्मेवारी तथा आचरण विपरितको काम गरेको हैन छैन। मैले वडा सचिवको हैसियतले नियमानुसार आवश्यक कारबाही हुन उल्लेखित सिफारिस गरेको हो भन्ने समेत व्यहोराको प्रतिवादी शिवजी भट्टराईको बयान।

घ) **प्रतिवादी शिवजी भट्टराईको बयान (पशुपती टिकिन्छा गुठी २०६९):**

म काठमाडौं महानगरपालिकाको ४ नं. वडा कार्यालयमा मिति २०५८ सालको पुष महिना देखी मिति २०६० साल सम्म करिब २ बर्ष का.म.पा. वडा नं. ४ को वडा सचिवको पदमा कार्यरत थिएँ। सो अवधीमा

जनप्रतिनिधी नभएकोले म वडा अध्यक्ष समेतको जिम्मेवारी समेतले सम्पुर्ण काम गरेको थिए । मैले कार्यालयको दैनिक रुपमा हुने कामकारबाही गर्ने, गराउने, नागरीकता प्रमाणको सिफारिस, नाता प्रमाणित पत्रको सिफारिस, बिभिन्न घर जग्गाहरुको नामसारी, जग्गा दर्ताको सिफारिस, मोही कायम, मोही लगत कट्टा, मोही नामसारी, सम्पतीहरुको मुल्याङकन सिफारिस, जग्गाको चारकिल्लाको सिफारिस गर्ने, विभिन्न कार्यालयहरुको कामको लागि प्रतिनिधिको रोहवरको रुपमा काम गर्ने, नक्सा पासको लागि सुचना टाँस र सर्जमिनको रोहवर बस्ने, घर जग्गा कर र राजस्व असुली गर्ने समेतको काम कारवाही गरेको थिएँ । मिसिल संलग्न साबिक नगर २३ ह का कि.नं. १२,१५,२२,२४,२५,३१,३५,३७,४० र साविक नगर २३ क्ष का कि.नं. ४८,६८,६९,७३,७६,७७,७८ जग्गाहरुको जग्गाधनीमा पशुनाथ टिकिन्छा गुठी र मोहीमा मेरा नाउमा दर्ता हा.सा. समेत गरी ज.ध.प्र.पु. पाउँ भनी कान्छा महर्जन, रेना गुरुङ, मोहन महर्जनको वा राम कुमार सुवेदी, रेना गुरुङ, ग्वाराभाई महर्जन, द्वारिकामान महर्जन, देव नारायण महर्जनको वा राम कुमार सुवेदी, रामकृष्ण महर्जन, देव नारायण महर्जन, माचानानी महर्जन, आशामाया महर्जन, देव नारायण महर्जन, द्वारिकामान महर्जन र लक्ष्मी नारायण महर्जनको वारेस राम कुमार सुवेदी समेतले गुठी संस्थान, तहसिल शाखा कार्यालयमा निवेदन दिएको र उक्त निवेदनमा उल्लेख भएका कित्ता जग्गा कुन गुठीको हो साबिक देखि हाल सम्म कस्ले जोतभोग गरी आएको छ पछि सम्म फरक नपर्ने गरी बताई दुनुहोस् भनी सोधनी हुँदा होम्रो चित्त बुझ्यो उक्त जग्गा सम्बन्धमा हामीलाई थाहा भए सम्मको ब्यहोरा पछि सम्म फरक नपर्ने गरी तपसिलका बुदा बुदामा लेखि लेखाई गु. सं. तहसिल शाखा कार्यालयको बिभिन्न च.नं. र मितिको पत्रबाट खटी आउने कर्मचारी मार्फत यो सर्जमिन मुचुल्का गरी गु.सं. तहसिल शाखा कार्यालय काठमाडौंमा चढायौं । उक्त जग्गाको जोताह महत्वमा कान्छा महर्जन, रेना गुरुङ, मोहन महर्जन, रेना गुरुङ, ग्वाराभाई महर्जन, द्वारिकामान महर्जन, देव नारायण महर्जन, रामकृष्ण महर्जन, देव नारायण महर्जन, माचानानी महर्जन, आशामाया महर्जन, देव नारायण महर्जन, द्वारिकामान महर्जन र लक्ष्मी नारायण महर्जनको नाममा दर्ता हा.सा. समेत गरी जग्गाधनी प्रमाण पूर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन ब्यहोरा" भन्ने ब्यहोरा उल्लेख भएको सर्जमिन मुचुल्काहरु देखाउदा देखी पाएँ । उल्लेखित कित्ता जग्गाका सबै सर्जमिन मुचुल्काहरुमा रोहबर खण्डमा मेरो नामको अगाडी भएको दस्तखत मेरो नै हो हेरी चिनी सनाखत गरीदिए । म तत्कालीन समयमा जिल्ला काठमाडौं, का.म.पा. वडा नं. ०४ को वडा सचिव रहेको हुँदा सोही हैसियतमा गुठी संस्थानका कर्मचारीहरुले तयार गरेको सर्जमिन मुचुल्कामा रोहबरमा बसेको हुँ।

मिसिल संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समितिको संयोजक समक्ष मिति २०७६/०९/२३ गतेको मैले गरीदिएको घटना विवरण कागज पाना-४ मलाई देखाउदा देखी पाएँ । उक्त कागजमा मेरो नामको अगाडी भएको दस्तखत मेरो नै हो हेरी चिनी सनाखत गरीदिएँ । उक्त घटना बिवरण कागजको जवाफमा उल्लेखित बिवरण मैले नै खुलाई लेखाई दिएको बिवरण हो । मलाई मिसिल संलग्न यस वडा नं. ४ कार्यालयमा मोही जोताहा देबनारायण समेतका वारेस राम कुमार सुवेदीले संयुक्त निवेदन लेखि साबिक गुठी संस्थान अन्तर्गतको टिकिन्छा गुठी गौडो हाडिगाँउ मुलीखेत का कि.नं. ३५,७७,३१,३७ समेतका जग्गा जोताहा मोहीहरुले साबिक देखि हालसम्म निरन्तर जोत कमोद गरी आउनु भएको ब्यहोरा सिफारिस गरीन्छ भन्ने ब्यहोराको च.नं. ३८०, मिति २०६०/५/१२ गतेको गुठी संस्थान कार्यालयलाई सिफारिस गरिएको पत्र देखाउदा देखी पाएँ उक्त पत्रमा भएको दस्तखत मेरो नै हो हेरी चिनि सनाखत गरीदिएँ । उल्लेखित ललिता निवास क्याम्प भित्र रहेका अन्य कित्ता जग्गाको सम्बन्धमा का.म.पा. वडा नं. ०४ का पुर्व वडा अध्यक्ष रत्न प्रसाद जोशीले मोही दर्ता कायमको लागी गुठी संस्थान कार्यालयलाई सिफारिस गरेको देखिएको, गुठी संस्थान,

तहशिल कार्यालयले गरेको सर्जमिन मुचल्का, निवेदकले गुठी संस्थानमा पेश गरेका कागजातहरु, फिल्डमा गई हेर्दा निवेदक मोहीहरुले उक्त कित्ता जग्गा जोत कमोत गरीरहेको समेतको आधारमा उक्त ललिता निवास क्याम्प भित्रका साविक नगर २३ ह कित्ता नं. ३५,३७,३१ र साविक नगर २३ क्ष कित्ता नं. ७७ समेतको जग्गाको निवेदक उक्त सर्जमिन मुचुल्कामा म समेत रोहबर बसेको हुँदा सोही आधारमा साबिक गुठी संस्थान अन्तर्गतको टिकिन्छा गुठी गौडो हाडिगाँउ मुलीखेत का कि.नं. ३५,७७,३१,३७ समेतका जग्गा निवेदक जोताहा मोहीहरुले साबिक देखि हालसम्म निरन्तर जोत कमोद गरी आउनु भएको भनी सिफारिस गरेको हुँ । गुठी संस्थान कार्यालय तहसिल शाखा कार्यालयबाट का.म.पा. वडा नं. ०४ लाई पत्र मार्फत सर्जमिन मुचुल्कामा रोहबरमा बसिदिनको लागी अनुरोध भई आएकोमा गुठी संस्थान कार्यालय तहसिल शाखा कार्यालयबाट खटी आएका कर्मचारीहरुले म समेतको उपस्थितमा का.जि. का.म.पा. वडा नं. ४ वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा दर्ता सच्याई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गरी निवेदक मोहीको नाममा ज.ध. प्र. पुर्जा समेत उपलब्ध गराई दिए फरक पर्दैन भनी उक्त कित्ता जग्गामा सधियारहरु समेतलाई साक्षी राखी खडा गरेको सर्जमिन मुचुल्कामा म तत्कालीन समयको का.म.पा. वडा नं. ०४ वडा सचिव भएकोले रोहबरमा बसेको हुँ। उक्त सर्जमिन मुचुल्का गुठी संस्थान कार्यालय तहसिल शाखा कार्यालयबाट कर्मचारीहरुले तयार गरेको र सो मुचुल्का तयार गर्दा उक्त कित्ता जग्गाका सधियार र जग्गाका मोहीहरु समेत ललिता निवास क्याम्प भित्र प्रत्यक्ष उपस्थिती भएकोले रोहबरमा बसेको हुँ । उक्त सर्जमिन मुचुल्का गुठी संस्थान कार्यालय तहसिल शाखा कार्यालयका कर्मचारीहरुले मुचुल्का गर्दा उपस्थित गराएका उक्त कित्ता जग्गाका मोही र सधियारहरुलाई मैले सोधपुछ गर्दा मोही र सधियार हामि नै हौँ भनेका थिएँ तर निज ब्यक्तिहरु नै गलत ब्यक्तिहरु भएको भन्ने मलाई जानकारी भएन । मैले गुठी संस्थानका कर्मचारीको विश्वासमा सबै ठिक नै होला भनी रोहबरमा बसेको हुँ। यसमा को-कसको संलग्नता छ भन्ने उल्लेखित मुचुल्का तयार गर्ने गुठी संस्थानबाट खटिआएका कर्मचारीहरुलाई नै थाहा होला। म समेत का.जि. का.म.पा. वडा नं. ४ वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको उल्लेखित कित्ता जग्गा निवेदक मोहीको नाममा ज.ध. प्र. पुर्जा समेत उपलब्ध गराई दिए फरक पर्दैन भनी उक्त कित्ता जग्गामा सधियारहरु समेतलाई साक्षी राखी खडा गरेको सर्जमिन मुचुल्कामा तत्कालीन समयको का.म.पा. वडा नं. ०४ को वडा सचिवको हैसियतमा रोहबरमा समेत बसेको थिएँ तर उक्त सर्जमिन मुचुल्का तयार गर्ने र निवेदक हरुलाई गुठी संस्थान तहशिल कार्यालयका काम तामेल गर्ने कर्मचारीहरुले उपस्थित गराएको हुँदा निजहरुले गलत निवेदेकहरु उपस्थित गराई सर्जमिन मुचुल्का गराएको भन्ने मलाई थाहा नभएको र मैले निवेदकहरुलाई समेत सोधपुछ गर्दा निजहरुले हामीले जोत कमोत गर्दै आईरहेका छौँ भनी भनेकोले सोही अनुसार सिफारिस गरेको हुँ। मैले गुठी संस्थान तहशिल कार्यालयका कर्मचारीहरुको बिश्वासमा परी सिफारिस गरेको हुँ मेरो गलत मनसाय रहेको थिएन। उक्त जग्गामा निवेदकहरुले नै साविक देखी हाल सम्म निरन्तर जोत कमोत गर्दै आईरहेको भनी सिफारिस गरेको हुँ तर उक्त सिफारिस गरे वापत कोहीकसैसँगबाट कुनै रकम लिएको छैन् । कसैको प्रलोभनमा परी सिफारिस गरेको होईन । मलाई ललिता निवास क्याम्प भित्रको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको जग्गा झुट्ठा व्यहोराको कागज बनाइ अर्काको हक जाने र अर्कोलाई फाइदा हुने गरी काम गरी त्यस्तो झुट्ठा कागजबाट काम कीर्ते गरेको ठहर्छ भन्ने थाहा थियो। तर उक्त जग्गा सरकारको नाममा रहेको भन्ने थाहा नभएकोले म रोहबरमा बसी सिफारिस समेत गरेको हुँ तर मैले गलत मनसायले उक्त सिफारिस पत्र र सर्जमिन मुचुल्कामा रोहबरमा बसेको होईन् । हाल आएर बुझ्दा उक्त जग्गा नेपाल सरकार समरजंग कम्पनीको रहेको तर निवेदकहरुले गलत ब्यहोरा पेश गरेको र गुठी संस्थानले समेत

जग्गा एकिन नगरी सर्जमिन गरेको भन्ने सुन्न आएको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन मैले गुठी संस्थानको पत्र अनुसार आफ्नो दायित्व मात्र पुरा गरेको हुँ । मैले गरेको सिफारिस गरेको सिफारिस गलत देखिएमा मलाई प्रचलित कानून नेपाल सजाय हुनुपर्छ ।

मैले गुठी संस्थानको पत्र अनुसार आफ्नो दायित्व पुरा गरेको हुँ । गुठी संस्थानका कर्मचारीले गलत गरेको भए सो सम्बन्धमा मलाई जानकारी हुदैन् । सर्जमिन मुचुल्कामा रोहबरमा बसेको र सिफारिस पत्र पठाए बापत कोही कसैसँग रकम लिने दिने गरेको र आर्थिक लाभ लिएको छैन् । गुठी संस्थान तहशिल कार्यालयका कर्मचारीहरुले उक्त कित्ता जग्गाका मोहीहरु(निवेदक)हुन् भनी ललिता निवास क्याम्प भित्र उपस्थित गराएकोमा निजहरुलाई सोधपुछ गर्दा आफूहरु नै मोही रहेको भनी बताएको र उक्त जग्गामा मोही लाग्ने नलाग्ने भनी हेर्ने दायित्व गुठी संस्थानको भएको र गुठी संस्थानले मलाई पत्र मार्फत सहयोग गरीदिन अनुरोध गरेको कारण मैले उक्त जग्गाको स्रोत नबुझेको हुँ । मैले मेरो पदिय जिम्मेवारी तथा आचरण विपरितको काम गरेको हैन छैन, वडा सचिवको हैसियतले निबेदकहरु र गुठी संस्थानका कर्मचारीहरुले तयार गरेको कागजातहरुको आधार र गुठी संस्थान तहशिल कार्यालयको पत्रको आधारमा वडा सचिवको दायित्व अनुसार रोहबरमा बस्ने र सिफारिस गर्ने काम गरेको हुँ । पदिय जिम्मेवारी तथा आचरण विपरित कार्य गर्न कानूनले छुट दिदैन तर मैले पदिय जिम्मेवारी तथा आचरण विपरित कार्य गरेको छैन् । निबेदकहरुले पेश गरेको कागजातहरुमा उल्लेखित जग्गा सरकारी हो भन्ने कहि कतै नदेखिएको र फिल्डमा गई हेर्दा निवेदकहरुले हकभोग समेत गरीरहेको र गुठी संस्थानका कर्मचारीले निवेदकहरु नै उक्त कित्ता जग्गाका मोहीहरु हुन् भनी सर्जमिन मुचुल्का समेत तयार गरेकोले मैले वडा सचिवको हैसियतले सिफारिस गरेको हो । यसमा मलाई कानून बमोजिम होस् । यसमा म कुनै लोभ प्रलोभनमा परेको छैन र मलाई कोही कसैले कुनै प्रकारको दवाव दिएको थिएन । को-कसको संलग्नता रहेको छ भन्ने मलाई जानकारी छैन् । उक्त जग्गाको वास्तविक अवस्था बुझ्ने कार्य गुठी संस्थानको हो । गुठी संस्थानका कर्मचारीले निवेदकहरु नै उक्त कित्ता जग्गाका मोहीहरु हुन् भनी सर्जमिन मुचुल्का समेत तयार गरेको र निवेदकहरु नै मोही रहेको भनी कागजातहरु देखाएकोले वडा कार्यालयले फिल्डमा गई बुझ्ने दायित्व अनुसार फिल्डमा म आफै गई बुझ्दा निवेदकहरुले उक्त जग्गाको मोही आफूहरु नै रहेको भनी बताएको र कागजातहरु पेश गरेको हुँदा उक्त जग्गा निवेदकहरुले नै जोत कमोत गर्दै आईरहेको भनी सिफारिस गरेको हुँ । जग्गा सरकारी हो भन्ने कुरा मलाई थाहा थिएन । उल्लेखित उल्लेखित जग्गा सरकारी हो भन्ने मलाई थाहा भएको भए मैले झुठो ब्यहोराको कीर्ते सिफारिस गर्ने थिएन । म रोहबरमा बसेको सर्जमिन मुचुल्कामा उल्लेखित कित्ता जग्गा र मैले सिफारिस गरेको कित्ता जग्गा नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको भन्ने सम्बन्धमा मलाई जानकारी नभएको र उक्त कित्ता जग्गाहरुको सम्बन्धमा मलाई गुठी संस्थान तहसिल कार्यालयको पत्र मार्फत रोहबरमा बसिदिन अनुरोध भई आएको र सर्जमिन मुचुल्का समेत गुठी संस्थान तहसिल कार्यालयका कर्मचारीहरुले साक्षी बसेका ब्यक्तिहरुको उपस्थितीमा तयार गरेको हुँदा मैले गुठी संस्थानका कर्मचारीहरुले तयार गरेको सर्जमिन मुचुल्कामा साक्षी बसेका ब्यक्तिहरुलाई सोधपुछ गरी निजहरुको उपस्थितीमा म रोहबरमा बसेको, साविक नगर २३ ह को कि.नं. ३१ र ३५ समेतका मोहीहरु हामि हौँ हामिले नै साविक देखी हाल सम्म जोत कमोत गर्दै आईरहेको हुँदा सोही व्यहोरा गुठी संस्थान तहसिल कार्यालयमा सिफारिस गरी दिन हुन भनी उक्त कित्ता जग्गाको फिल्डबुक समेतको प्रतिलिपी सहित निवेदन पेश गरेको र सोही विषयमा मेरो रोहबरमा सर्जमिन मुचुल्का समेत भईसकेको हुँदा निज निवेदकहरु नै साविक देखी हाल सम्म निरन्तर जोत कमोत गर्दै आईरहेको भनी सिफारिस गरेको हुँ । तर मैले सिफारिस गरेको उक्त साविक नगर

२३ ह को कि.नं. ३१ र ३५ समेतका कित्ता जग्गाहरु के-कुन गुठीमा लैजान सर्जमिन मुचुल्का भएको र उक्त कित्ता जग्गा पशुपति टिकिन्छा गुठी वाहेक अन्य कुन-कुन गुठीमा गएको भन्ने मलाई एकिन जानकारी छैन । उक्त कित्ता जग्गाहरु रैकर भनी के-कसरी ब्यक्तिको नाममा दर्ता भएको हो मलाई थाहा छैन् । मैले निवेदकले पेश गरेको कागज र गुठी संस्थानका कर्मचारीहरुले तयार गरेको सर्जमिन मुचुल्काको आधारमा मात्र सिफारिस गरेको हुँ । गुठी संस्थानका कर्मचारीहरु र निवेदकहरुले गलत कागजात पेश गरी/गराई मलाई रोहबरमा राखेको तथा सिफारिस गर्नको लागी निवेदन दिएको भए सो सम्बन्धमा मलाई थाहा भएन । निजहरुले के-कसरी गलत कागजातहरु तयार गरे भन्ने मलाई जानकारी छैन् ।

मलाई सम्झन नसकिएका गुठीका कर्मचारी र आफुलाई गुठीको जग्गाको मोही हौँ भन्नेहरु आएर " हाम्रो जग्गाको मोही कायम गरीदिने बारे सर्जमिन छ, जग्गामा उपस्थित भईदिन आईदिनुस्" भनी अनुरोध गरेकोले म निज मोहीहरु र गुठीका कर्मचारीहरुले देखाएको जग्गा गेर्न गएको थिएँ । उक्त जग्गामा धान रोपीरहेका थिए । किसानहरुले काम गरीरहेका थिए । निज मोही भन्ने ब्यक्तिहरु र गुठीबाट खटी आएका कर्मचारी मैले गुठी संस्थान, तहसिल कार्यालयका कर्मचारीहरुले खेतमा बसेर सर्जमिन मुचुल्का तयार गरीरहेका थिए । तर मैले उक्त सर्जमिन मुचुल्कामा सहिछाप गर्ने ब्यक्तिहरुलाई चिन्दिन । सर्जमिन मुचुल्का गर्न समय लाग्ने भएकोले मैले गुठीका कर्मचारीहरुलाई मुचुल्का तयार गरी वडा कार्यालयमा ल्याउनुस् , मैले वडा कार्यालयमा नै सहिछाप गरीदिउला अनि कार्यालय छाप हानेर लैजानुहोला भनी वडा कार्यालयमा आएकोमा केही दिनमा वडा कार्यालयमा अन्दाजी ३० वटा सर्जमिन मुचुल्काको रोहबरमा मेरो दस्तखत गराई, वडाको कार्यालय छाप लगाई ति सर्जमिन मुचुल्का गुठी कार्यालयका कर्मचारीहरुले लिएर गएका थिएँ । उल्लेखित कित्ता जग्गाहरु आशामरु ज्यापूको नाममा रहेको खेत रोपनी १० मध्येबाट भिड्ने जग्गा हो भनी सर्जमिन मुचुल्का तयार गरेका थिएँ । आशामरु ज्यापू को हुन मलाई थाहा छैन् तर उक्त जग्गा ललिता निवास क्याम्प भित्र रहेकै जग्गाहरु हुन । निवेदकले वडा कार्यालयमा दिएको निवेदन, निवेदनसाथ पेश गरेका फिल्डबुक र गुठी संस्थान, तहसिल कार्यालयका कर्मचारीले मलाई रोहबरमा राखी गरेको सर्जमिन मुचुल्काको आधारमा नै सिफारिस गरेको हुँ । गुठी संस्थान, तहसिल कार्यालयका कर्मचारीले मोही भनी वडा कार्यालयमा निवेदन दिएका ब्यक्तिहरुको उपस्थितिमा नै खेतमा बसेर नै सर्जमिन गरेको हुँदा मैले रोहबर खण्डमा दस्तखत गरेको हुँ । उक्त सर्जमिन मुचुल्का तयार गर्ने कार्य गुठीका संस्थान, तहसिल कार्यालयका कर्मचारीहरुले गरेका थिएँ । गुठी संस्थानका कर्मचारीहरुले उक्त मचुल्कामा किन मिति उल्लेख गरेका थिएनन् भन्ने मलाई थाहा भएन। मैले अन्दाजी ३० थान मुचुल्कामा एकैपटक सहिछाप गरेको हुँदा उक्त सर्जमिन मुचुल्काहरुमा मिति भए/नभएको एकिन नगरेको तर मैले याद भए सम्म मैले मचुल्कामा सहिछाप गर्दा मिति उल्लेख गरेकोछु । कित्ता नं. ३१ र ७७ को मुचुल्कामा सहिछाप गर्दा भुलबश मिति उल्लेख नगरेको हुँ । म रोहबर बसेका सम्पुर्ण मुचुल्का गुठी संस्थानका कर्मचारीहरुले ललिता निवास क्याम्प भित्र रहेका उल्लेखित जग्गाहरुमा बसेर नै मुचुल्का तयार गरेको र गुठी संस्थान तहसिल कार्यालयबाट पत्र मार्फत मलाई रोहबरमा बसिदिनको लागी अनुरोध भई आएकोले निजहरुले तयार गरी ल्याएको मुचुल्कामा मैले वडा कार्यालयमा नै बसी सहिछाप गरेको हुँ । म समेतको बिरुद्ध यस कसूर समेत यस ब्यूरोमा आ.ब. २०७६/०७७ को मुद्दा नं. २४, २६ र २७ मा मुलूकी ऐन, २०२० अन्तर्गतको किर्ते कसुर मुद्दा र सँगठित अपराध निवारण ऐन,२०७० बमोजिम समेत अनुसन्धान भईरहेको मलाई पत्र मार्फत जानकारी गराईएको हुँदा जानकारी छ । मैले मोही भनी आएका ब्यक्तिहरुले वडा कार्यालयमा निवेदनसाथ पेश गरेका फिल्डबुक समेतका कागजातहरुको आधारमा सिफारिस र गुठी संस्थान

तहशिल कार्यालयका कर्मचारीहरुले तयार गरेको सर्जमिन मुचुल्कामा रोहबरमा बसेको हुँ । मैले मुलूकी ऐन, २०२० अन्तर्गतको किर्ते कसुर मुद्दा र सँगठित अपराध निवारण ऐन,२०७० बमोजिम कसूर गरेको देखिएमा कानून बमोजिम सजाय भोग्न मञ्जुर छु । कानून बिपरित काम गरी ब्यक्तिलाई मोही कायम गर्न सहयोग गरेका अनुसन्धानबाट पुष्टी हुन आउने ब्यक्तिहरुको नै उक्त विगो रकम तिर्ने दायित्व हो भन्ने ब्यहोराको प्रतिवादी शिवजी भट्टराईको बयान ।

**१०. प्रतिवादी बाबुराजा महर्जनको बयान:**

**(क) प्रतिवादी बाबुराजा महर्जनको बयान (जग्गा सट्टापट्टा २०६७):**

ललिता क्याम्प भित्रको सुवर्ण शम्शेर, हाटक शम्शेर, सुनिती राणा, रुक्म शम्शेर राणा समेतको भनिएको जग्गा मेरो बाबु बाजेको पाला देखी म, मेरो भाई मचाम महर्जन समेतले मोहीयानी जग्गा भोग चलन गर्दै आएका हौ। ललिता क्याम्प भित्रको जग्गा मध्ये ६ रोपनी १२ आना जग्गा मोहीयानी भोग चलन गर्दै आएको भनी बुवाले भन्नु हुन्थ्यो । मेरो बुबा आमाले भने बमोजिम सो मोहीयानी भोगचलन गर्दै आएको जग्गा सुवर्ण शम्शेरको हो भन्ने गर्नु हुन्थ्यो । पछी कुत बुझाउन भनी समरगंज कम्पनी भोटाहीटी र मालपोत कार्यालय डिल्लीबजार जाने गरीन्थ्यो । मालपोत कार्यालय डिल्लीबजार जाँदा सो कार्यालय नजिकै कानुन ब्यवसायीको कार्यालय संचालन गरी बस्ने राम कुमार सुवेदीसँग भेटघाट भई कुरा हुँदा निजले मोहीयानी हक छुट्याउने कामको लागी मुद्दा गर्नु पर्छ, म मुद्दा जिताईदिन्छु, मुद्दा जितेपछि मलाई पनि केहि जग्गा दिनुपर्छ भनेकोमा हामी सबै मोहीहरुले निजको प्रस्तावमा समर्थन जनाई निज राम कुमार सुवेदीलाई कामको जिम्मा दिएका थियौं । यसरी नै निज राम कुमार सुवेदीसँग चिनजान भएको हो । ललिता निवास क्याम्प भित्रको जग्गाको केही वर्षको कुत समरजंग कम्पनीको कार्यालय भोटाहिटीमा बुझाएको हो । उक्त ललिता निबास क्याम्प भित्रको जग्गा समरजंग कम्पनीको कार्यालय भोटाहिटीले रेखदेख गर्ने भएको हुँदा सो जग्गाहरुको कुत समरजंग कम्पनी भोटाहिटीमा बुझाएको हो । सरकारी जग्गा भनी समरजंगमा कुत बुझाएको होईन । राम कुमार सुवेदीसँग भेट भए पश्चात राम कुमार सुवेदीले मालपोत कार्यालयमा निवेदन पेश गरेमा मोही कायम हुन्छ र मोहीयानी हक बापत जग्गा प्राप्त हुन्छ भनी निबेदन लेखी दिई मेरो दस्तखत गराई पेश गरेका हुन । राम कुमार सुवेदीले मोहीहरुले आधा जग्गा पाउने नियम छ । म समेतले कमाई खाएको जग्गाको आधा जग्गा मोहीयानी हक कायम भए पश्चात उक्त जग्गा निजले भनेका ब्यक्तिहरुको नाममा रजिष्ट्रेशन पास गरीदिए पछि रोपनीको २० लाखको दरले दिने प्रलोभन देखाए पश्चात रकम पाउने आसमा निज राम कुमार सुवेदीले बोलाएको स्थानमा गई निजले भनेको कागजातहरुमा सहिछाप औठाछाप गरेको हुँ । सबै काम निज राम कुमार सुवेदीले गरेका हुन । रितपूर्वक अधिग्रहण गरेको नेपाल सरकारको स्वामित्वमा रहेको जग्गामा मोही लाग्दैन साथै नेपाल सरकारको स्वामित्वमा रहेका जग्गा जमिन ब्यक्ति विशेषले खरिद बिक्री गर्न सक्दैन । ललिता निवास क्याम्प भित्र रहेको जग्गा मेरो बाबु पंचनारायण महर्जन भन्ने तुयु भाई महर्जनको पाला देखी कमाई खाएको हुँदा हामीले मोहीयानी हक पाउनु पर्छ भनी विभिन्न कार्यालयहरुमा निवेदन दिएका हौ । बाबु बाजेको पाला देखी म समेतले मोहीयानी जग्गा भोग चलन गर्दै आएकोमा २०६५/०६६ सालमा मेरो बुबा आमाको मृत्यू भए पश्चात म घरको जेठो छोरा भएकोले उक्त जग्गा मेरो नाममा मोही कायम भएको हो । राम कुमार सुवेदीले मोहीहरुले आधा जग्गा पाउने नियम छ । म समेतले कमाई खाएको जग्गाको आधा जग्गा मोहीयानी हक कायम भए पश्चात उक्त जग्गा निजले भनेका ब्यक्तिहरुको नाममा रजिष्ट्रेशन पास गरीदिए पछि रोपनीको २० लाखको दरले दिने प्रलोभन देखाए पश्चात रकम पाउने आसमा निज राम कुमार सुवेदीले बोलाएको स्थानमा गई निजले भनेको कागजातहरुमा सहिछाप औठाछाप गरेको हुँ । कानुनत कुन कुन

जग्गामा मोहीयानी हक प्राप्त हुन्छ मलाई थाहा थिएन । मैले राम कुमार सुवेदीले भने बमोजिम गरी आर्थिक लाभ प्राप्त गर्ने प्रलोभनमा परि उक्त कार्य गरेको हुँ । हामीले मोही कायम गर्नको लागी भनी सर्बोच्चमा मुद्दा हालेकोमा हामीलाई सर्बोच्च अदालतले मोही कायम गरीदिएको हो भनी राम कुमार सुवेदीले बताएका थिए । राम कुमार सुवेदीले मालपोत कार्यालयमा निवेदन पेश गरेमा मोही कायम हुन्छ र जग्गा प्राप्त हुन्छ भनी निबेदन लेखी दिई मेरो दस्तखत गराई पेश गरेका हुन । राम कुमार सुवेदीले मोहीहरुले आधा जग्गा पाउने नियम छ । म समेतलाई कमाई खाएको जग्गाको आधा जग्गा मोहीयानी हक कायम भए पश्चात उक्त जग्गा निजले भनेका ब्यक्तिहरुको नाममा रजिष्ट्रेशन पास गरिदिए पछि रोपनीको २० लाखको दरले दिने प्रलोभन देखाए पश्चात रकम पाउने आसमा निज राम कुमार सुवेदीले बोलाएको स्थानमा गई निजले भनेको कागजातहरुमा सहिछाप औठाछाप गरेको हुँ । सो सम्वन्धमा मलाई केही थाहा छैन । सबै कामहरु तथा पत्रहरु राम कुमार सुवेदीले तयार गरी मलाई दस्तखत गराउने गरेका थिए । मोहीयानी हक बापत जग्गा प्राप्त हुने लोभमा रामकुमार सुवेदीले तयार गरीदिएको कागजातहरुमा मैले दस्तखत औंठाछाप गरीदिने गरेको थिएँ । राम कुमार सुवेदीले अन्य मोहीहरु को को छन् भेटाईदेउ भनेको कारण मैले देव नारायण महर्जन समेतका अन्य मोहीहरुलाई ईनबहाल क्लबमा बोलाई रामकुमार सुवेदीसँग भेटाईदिएको हो । कुत बुझाउन भनी समरगंज कम्पनी भोटाहिटी र मालपोत कार्यालय डिल्लीबजार जाँदा सो कार्यालय नजिकै कानुन ब्यवसायीको कार्यालय संचालन गरी बस्ने राम कुमार सुवेदीसँग भेटघाट भई चिनजान भएकोमा राम कुमार सुवेदीले मालपोत कार्यालय समेतमा मोही भनी निवेदन पेश गरेमा मोही कायम हुन्छ र जग्गा प्राप्त हुन्छ अन्य मोही भनिएका ब्यक्तिहरुलाई पनि भेटाईदिनु भने पश्चात का.जि. ईनबहालमा मोहीहरु सँग भेट गराईदिएको हुँ । सो पश्चात मोहीहरु आफै रामकुमार सुवेदीसँग भेट गर्न जाने गरेका थिए । मलाई राम कुमार सुवेदीले ललिता निवास क्याम्प भित्रका अन्य मोहीहरुलाई भेटाईदिनु भनेको हुँदा मैले अन्य मोहीहरुलाई राम कुमार सुवेदीसँग पहिलो पटक भेटाइदिएको हुँ । सो पश्चात अन्य मोहीहरु आफै रामकुमार सुवेदीसँग भेटने गरेका थिए । राम कुमार सुवेदीले मालपोत कार्यालय समेतमा मोही भनी निवेदन पेश गरेमा मोही कायम हुन्छ र जग्गा प्राप्त हुन्छ भनी निबेदन लेखी दिई मेरो दस्तखत गराई पेश गरेका हुन । राम कुमार सुवेदीले मोहीहरुले आधा जग्गा पाउने नियम छ । म समेतलाई निजले कमाई खाएको जग्गाको आधा जग्गा मोहीयानी हक कायम भए पश्चात उक्त जग्गा निजले भनेका ब्यक्तिहरुको नाममा रजिष्ट्रेशन पास गरीदिए पछि रोपनीको २० लाखको दरले दिने प्रलोभन देखाए पश्चात रकम पाउने आसमा निज राम कुमार सुवेदीले बोलाएको स्थानमा गई निजले भनेको कागजातहरुमा सहिछाप औठाछाप गरेको हुँ । मेरो बुबा पंच नारायण भन्ने तुयु भाई महर्जनको पाला देखी ललिता निवास क्याम्पको जग्गा कमाई खाएको हो । कि.नं. हाल याद भएन । ६ रोपनी १२ आना जग्गा भोग चलन गर्दै आईरहेका थियौ । उक्त जग्गा भोग चलन गरे बापतको जग्गाको तिरो कसैलाई बुझाएको छैन । राम कुमार सुवेदीसँग भेट भए पश्चात राम कुमार सुवेदीले कुतको धरौटी राखी मुद्दा हालेमा मोही कायम हुन्छ भनी लाग्ने रकम निज राम कुमार सुवेदीले जम्मा गरीदिएका हुन । सबै योजना राम कुमार सुवेदीको हो । निज राम कुमार सुवेदीले मोहीहरुलाई जम्मा गरी मोहीयानी हकको लागी मुद्दा हाल्नु पर्छ भनी सर्बोच्च अदालतमा मुद्दा हाल्न लगाई मोहीहरुको नाममा बिभिन्न निवेदनहरु तयार गरी सही छाप गराई विभिन्न कार्यालयमा पेश गरेका हुन् ।राम कुमार सुवेदीले सबै कुरा म मिलाउछु भनी निवेदन लेखी दिई पेश गर्न लगाएको हो । म समेतलाई कमाई खाएको जग्गाको आधा जग्गाको रजिष्ट्रेशन पास गरी दिई उक्त जग्गा निजले भनेका ब्यक्तिहरुको नाममा रजिष्ट्रेशन पास गरीदिए पछि रोपनीको २० लाखको दरले दिने प्रलोभन देखाए पश्चात रकम पाउने आसमा निज राम कुमार सुवेदीले बोलाएको स्थानमा गई निजले भनेको

कागजातहरुमा सहिछाप औठाछाप गरेको हुँ। मैले राम कुमार सुवेदीले भने बमोजिम गरी आर्थिक लाभ प्राप्त गर्ने प्रलोभनमा परि उक्त कार्य गरेको हुँ। राम कुमार सुवेदीले मोहीयानी हक कायम गरीदिन्छु भनी विभिन्न कागजमा मेरो दस्तखत गराई लिएकोमा पछि निजले तपाईको नाममा ३-६-०-० जग्गा आएको छ भनी कागजमा कित्ता नं.लेखी कागजको टुक्रा दिएको थियो। मेरो नामको जग्गाधनी पुर्जा मैले देखेको थिईन। सो मेरो नाममा दर्ता कायम भएको ३-६-०-० जग्गाको प्रति रोपनी २०,००,०००।–(बिस लाख) का दरले निज राम कुमार सुवेदीसँग रकम लिई निजले भनेको मानिसको नाममा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंमा डोर पास गरी दिएका हौं। उक्त जग्गा पास गरे बापत डिल्लीबजारमा गई राम कुमार सुवेदीबाट पटक पटक गरी रु.६७,५०,०००।– लिएको हुँ। राम कुमार सुवेदीले मालपोत कार्यालय समेतमा मोही भनी निवेदन पेश गरेमा मोही कायम हुन्छ र जग्गा प्राप्त हुन्छ भनी निबेदन लेखी दिई मेरो दस्तखत गराई पेश गरेका हुन। राम कुमार सुवेदीले मोहीहरुले आधा जग्गा पाउने नियम छ। म समेतलाई कमाई खाएको जग्गाको आधा जग्गा मोहीयानी हक कायम भए पश्चात उक्त जग्गा निज रामकुमार सुवेदीले भने बमोजिम रजिष्ट्रेशन पास गरीदिएको हुँ। को कसको नाममा रजिष्ट्रेशन पास गरिएको थियो मलाई थाहा थिएन। सबै कागजातहरु राम कुमार सुवेदीले तयार गरी ल्याई मलाई दस्तखत मात्र गराएका थिए। सो जग्गा बापत राम कुमार सुवेदीले मलाई पटक पटक गरी रु.६७,५०,०००।– दिएका थिए। सो बाहेक अन्य कुरा मलाई थाहा छैन। काठमाडौंको डिल्लीबजार स्थित राम कुमार सुवेदीको लेखापढी कार्यालयमा निजले तयार पारेका कागजातहरुमा सहिछाप, औठाछाप गरेको हुँ। आफुले कमाई खाएको खेत भएको हुँदा सो जग्गामा मोहीयानी बापत आधा जग्गा प्राप्त हुने र सो बिक्री गरी आर्थिक लाभ प्राप्त हुने प्रलोभनमा परि उक्त कार्य गरेको हुँ। यसमा कानून बमोजिम होस्। सबै कागजातहरु र प्रकृया निज राम कुमार सुवेदीले मिलाएको हुँदा मुख्य योजना निज राम कुमार सुवेदीको हुनु पर्छ। अन्य को को संलग्न रहेका छन्, मलाई थाहा छैन साथै कर्मचारीहरु को कसको संलग्नता रहेको छ , सो समेत मलाई थाहा छैन। उक्त जग्गा पास गरे बापत डिल्लीबजारमा गई राम कुमार सुवेदीबाट पटक पटक गरी रु.६७,५०,०००।- पाएको हो। उक्त रकम मैले बुवालाई दिएको थिएँ। सो रकम बुवाले भाई, बहिनीहरुको बिबाहमा, उपचार, भोजभतेर लगायतमा खर्च गरी मलाई रु.२०,००,०००।- जति नगद दिनुभएको थियो। उक्त रकम मैले छोरीहरुको बिबाहमा, घर खर्चमा, उपचारमा खर्च गरीसकेको छु। हाल कुनै रकम बाँकी रहेको छैन भन्ने समेत व्यहोराको प्रतिवादी बाबुराजा महर्जनको बयान ।

**ख) <u>प्रतिवादी बाबुराजा महर्जनको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

का.जि. का.म.पा. वडा नं. ४ वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गरी निवेदक मोहीको नाममा ज.ध.प्र.पुर्जा समेत उपलब्ध गराई दिए फरक पर्दैन भनी खडा गरेको सर्जमिन मुचुल्कामा साक्षी बस्ने क्रममा देब नारायण महर्जन, घमन कुमार कार्की, शिवजी भट्टराईसँग भटेघाट भई चिनजान भएको हो। निजहरुसँग नाता सम्बन्ध छैन। जाहेरी दरखस्तमा उल्लेखित प्रतिवादी धर्म प्रसाद गौतम समेत र प्रहरी प्रतिवेदनमा उल्लेखित प्रतिवादी चैत्य नारायण महर्जन लगायतका प्रतिवादीहरु मध्ये ललिता निवास क्याम्प भित्रको जग्गाका हालका जग्गाधनी राम कुमार सुवेदीलाई २०५० साल देखि नै चिनेको हुँ। मोहीहरु संजय कुमार महर्जन, सकुलानन्द महर्जन, श्रीमती मोहन महर्जन, द्वारिकामान महर्जन, देवनारायण महर्जन, साक्षीहरु रामकृष्ण महर्जन, आशामाया महर्जन, नानीहिरा महर्जन, बालगोपाल घिमिरे, बस नारायण महर्जन, ज्ञान नारायण महर्जन, रेणा गुरुङ, कान्छा महर्जन, नाती महर्जन, हेरामाया महर्जन, आशानारायण महर्जन, बुद्दि नारायण महर्जन, श्रीकृष्ण महर्जन, श्यामकृष्ण महर्जन, ग्वाराभाई महर्जन, मचानानी महर्जन,

मचाकाजी महर्जन, छोरीमैया महर्जन, सुश्री पूर्ण डंगोल, गोपाल महर्जन, बील बहादुर महर्जन, चैत्य नारायण महर्जन, लक्ष्मी नारायण महर्जन, तिर्थमाया महर्जन(ख), मचाम महर्जन, पंच नारायण महर्जन, मयजुहेरा महर्जन, मचाबाबु महर्जन, चन्द्रमाया महर्जन, देव नारायण महर्जन(क), दश नारायण महर्जन, रामदेवी महर्जन समेतलाई ललिता निवास क्याम्प भित्रको जग्गा पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गरी निवेदक मोहीको नाममा ज.ध.प्र.पुर्जा उपलब्ध गराई दिए फरक पर्दैन भनी खडा गरेको सर्जमिन मुचुल्कामा साक्षी जग्गाधनी प्रमाणपुर्जा प्राप्त गर्ने क्रममा चिनजान भएको थियो । सोही क्रममा प्रस्तुत कसूरमा जोडिएका मालपोत कार्यालय डिल्लीबजार, गुठी संस्थान तहसिल कार्यालय, नापी कार्यालय, वडा कार्यालयका कर्मचारीहरुहरुसँग चिनजान भएको थियो। निजहरुको एकिन नाम थर याद छैन। तुई भाई भन्ने पंच नारायण महर्जन मेरो बुवा हुन्। बुवाको मृत्यु भैसकेको छ। अन्य ब्यक्तिहरुलाई चिन्दिन ।

मिसिल संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समितिको संयोजक समक्ष मिति २०७६/०९/१५ गतेको घटना विवरण कागज पाना-३ देखाउदा देखिपाएँ। उक्त घटना विवरण कागजमा भएको मेरो नाम अगाडी भएको दस्तखत, औठाछाप मेरो नै हो। उक्त कागजको प्रकरण नं. ३ मा उल्लेखित कुराहरु मैले खुलाई लेखाई दिएको ठिक साँचो हो। हेरि चिनी सनाखत गरीदिएँ। मिसिल संलग्न मिसिल संलग्न रहेको "लिखितम हामी तपसिल बमोजिमका मानिस आगे सर्वे नापीमा हर्क नारायणका नाउमा नाप नक्सा भएतापनि नापीका समय अगावै देखि म राम कृष्ण महर्जनले जोतभोग गरी आएको साबीक नगर २३ ह कि.नं. ४० को क्षेत्रफल ०-१३-२ जग्गाधनीमा पशुपति टिकिन्छा गुठी र मोहीमा मेरा नाउमा दर्ता हा.सा. समेत गरी ज.ध.प्र.पु. पाउँ भनी रामकृष्ण महर्जनको वारेश राम कुमार सुवेदीको निवेदन पर्न आएकोले तपाईहरुलाई सोधनी गरीन्छ की उक्त कित्ता जग्गा कुन गुठीको हो ? साबिक देखि हाल सम्म कस्ले जोतभोग गरी आएको छ ? पछि सम्म फरक नपर्ने गरी बताई दुनुहोस् भनी सोधनी हुँदा हाम्रो चित्त बुझ्यो उक्त जग्गा सम्बन्धमा हामीलाई थाहा भए सम्मको ब्यहोरा पछि सम्म फरक नपर्ने गरी तपसिलका बुदा बुदामा लेखि लेखाई गु. सं. तहसिल शाखा कार्यालयको चलानी नं. २३८५ मिति ०६०।२।१५ गतेको पत्रबाट खटी आउने कर्मचारी मार्फत यो सर्जमिन मुचुल्का गरी गु.सं. तहसिल शाखा कार्यालय काठमाडौंमा चढायौं । तपसिल- यसमा सबिक नगर २३ ह कि.नं.४० को क्षेत्र फल ०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मध्ये भिड्ने हो। उक्त जग्गाको जोताह महत्वमा हर्क नारायण डंगोल लेखिएको भएतापनि नापी अगावै देखि रामकृष्ण महर्जनले नै जोत भोग आएकोले निजकै नाममा दर्ता हा.सा. समेत गरी जग्गाधनी प्रमाण पूर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन ब्यहोरा सत्य साँचो हो झुठ्ठा ठहरे कानून बमोजिम सहुँला बुझाउँला भनी सहिछाप गर्ने का.म.न.पा. वडा नं.१७ बस्ने बर्ष ५२ को पश्चिम तर्फका सधियार बाबुराजा महर्जन" भन्ने ब्यहोरा उल्लेख भएको सर्जमिन मुचुल्का मलाई देखाउँदा देखिपाएँ। उक्त मुचुल्कामा मेरो नाम अगाडी भएको दस्तखत, औठाछाप मेरो हो। हेरी चिनी सनाखत गरीदिएँ । ललिता क्याम्प भित्रको सुवर्ण शम्शेर, हाटक शम्शेर, सिनिता राणा, रुक्म शम्शेर राणा समेतको भनिएको जग्गा मेरो बाबु बाजेको पालाले देखी म, भाई मचाम महर्जन समेतले मोहीयानी जग्गा भोग चलन गर्दै आएको हो। ललिता क्याम्प भित्रको जग्गा मध्ये ६ रोपनी १२ आना जग्गा मोहीयानी भोग चलन गर्दै आएको भनी बुवाले भन्नु हुन्थ्यो। मेरो बुबा आमाले भने बमोजिम सो मोहीयानी भोगचलन गर्दै आएको जग्गा सुवर्ण शम्शेरको थियो। शुरमा सुबर्ण शम्शेर परिवारलाई बाली बुझाउने गरेका थियौं। पछि सो जग्गा सरकारले अधिग्रहण गरेपछी कुत बुझाउन भनी समरगंज कम्पनी भोटाहीटी र मालपोत कार्यालय डिल्लीबजार जाने गरीन्थ्यो। मालपोत कार्यालय डिल्लीबजार जाँदा सो कार्यालय नजिकै कानून ब्यवसायीको कार्यालय संचालन

गरी बस्ने राम कुमार सुवेदीसँग भेटघाट भई निजसँग कुरा हुँदा निजले मोहीयानी हक छुट्याउने कामको लागी मुद्दा गर्नु पर्छ, म मुद्दा जिताईदिन्छु, मुद्दा जितेपछि मलाई पनि केहि जग्गा दिनुपर्छ भनेकोमा हामी सबै मोहीहरुले निजको प्रस्तावमा समर्थन जनाई निज राम कुमार सुवेदीलाई कामको जिम्मा दिएका थियौं। यसरी नै निज राम कुमार सुवेदीसँग चिनजान भएको हो। २०६५/०६६ सालमा मेरो बुबा आमाको मृत्यू भए पश्चात म घरको जेठो छोरो भएकोले उक्त जग्गा मेरो नाममा मोही कायम भएको हो। हामी मोहीहरु राम्रोसँग पढ्न लेख्न नजान्ने भएको हुँदा हामी मोहीहरुको तर्फबाट वारेश राम कुमार सुवेदी बसी निवेदन डिल्लीबजार मालपोत कार्यालयमा पेश गरेका थियौं। सोही क्रममा राम कुमार सुवेदीले डिल्लीबजार स्थित निजको फर्ममा नै सर्जमिन मुचुल्का तयार गरी हामीलाई बोलाउथे र हामीहरुले उल्लेखित बिषयमा रामकृष्ण महर्जनको सर्जिमनको मुचुल्का समेतमा सहिछाप, औठाछाप गरेको थियौं। मोहीयानी भाग पाउने आशाले मैले राम कुमार सुवेदीले भने बमोजिम काम गरेको हुँ। सम्पूर्ण जिम्मा राम कुमार सुवेदीले लिएको हुँदा सोही क्रममा मैले राम कुमार सुवेदीले तयार गरेको अन्य मुचुल्काहरुमा निजले बोलाएको बखतमा निजको ल फर्ममा गईसहिछाप गरेको थिएँ। ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना भएको भन्ने उजुरीका सन्दर्भमा नेपाल सरकार (मन्त्रि परिषद) को निर्णय बमोजिम समरजंग कम्पनीको नाममा रहेको जग्गा दर्ता सच्याई पशुपति टिकिन्छा गुठीको लगत भिड्ने सम्बन्धमा मोही कायम भएको जग्गा भूमि सुधार बिभागले पास गरे पश्चात बिक्री कायम गरेको हो। उक्त जग्गा प्राप्त भए पछि राम कुमार सुवेदीले प्रति रोपनी २० लाखका दरले रकम दिन्छु, जग्गा हाम्रो नाममा पास गरी दिनुहोस् भनेकोमा मैले निज राम कुमार सुबेदीको प्रस्तावमा समर्थन जनाई उक्त जग्गा हामीहरुको नाममा आए पछि निजसँग रकम लिई हामीहरुले एकमुष्ट उक्त जग्गा राम कुमार सुवेदी र निजले भनेको मानिसको नाममा म समेतले डिल्लीबजार मालपोत कार्यालयमा रजिष्ट्रेशन पास गरी दिएका हौं। पशुपती टिकीन्छा गुठीका मसँग कागजताहरु केहि थिएनन्। सो समयमा राम कुमार सुवेदीले तयार गरेका कीर्ते कागजातहरुमा सहिछाप गरेका थियौं। मैले निज राम कुमार सुबेदीबाट ३ रोपनी ६ आना जग्गाको २० लाखका दरले पटक पटक गरी मालपोत कार्यालय डिल्लीबजारमा गई नगद रु. ६७ लाख ५० हजार बुझि लिएको थिएँ।

बुवा आमाले उक्त जग्गा सुबर्ण शम्शेरको भन्ने गरेको थिए। सोही कारण उक्त जग्गाको मोहीयानी भोग चलन गर्दै आएको हो। सुबर्ण शम्शेरलाई बाली बुझाउने गरेका थियौं। पछि सुबर्ण शम्शेर देश बाहिर भएको अवस्थामा बाली कस्लाई बुझाउने भने पश्चात समरजंग कम्पनीको कार्यालय भोटाहिटीमा बाली बुझाउने, तिरो तिर्ने गरेका थियौ। सो बापत समरजंग कम्पनीले रसिद दिने गरेको गरेको थियो। धेरै बर्ष भईसकेको हुँदा उक्त रसिदहरु सुरक्षित राख्न सकेको छैन। राम कुमार सुवेदीले भने अनुसार मोहीयानी जग्गा प्राप्त हुने र सो जग्गा राम कुमार सुवेदीलाई बिक्री गरी निजले रकम दिने प्रलोभन देखाएको हुँदा निज राम कुमार सुवेदीले भने बमोजिम म समेतले सर्जमिन मुचुल्कामा सहिछाप, औठाछाप गरेको हुँ। निजले अन्य के कस्तो प्रकृया मिलाए मलाई थाहा छैन। बाबु बाजेको पाला देखी म समेतले मोहीयानी जग्गा भोग चलन गर्दै आएकोमा २०६५/०६६ सालमा मेरो बुबा आमाको मृत्यू भए पश्चात म घरको जेठो छोरो भएकोले उक्त जग्गा मेरो नाममा मोही कायम भएको हो। शुरुमा सुबर्ण शम्शेर र पछि समरजंग कम्पनीलाईलाई कुत तिर्दै आएका थियौं। राम कुमार सुवेदीले मोहीहरु कमाई खाएको जग्गामा मोहीहरुले आधा जग्गा पाउने नियम छ भनेका थिए। म समेतलाई कमाई खाएको जग्गाको आधा जग्गाको रजिष्ट्रेशन पास गरी दिई उक्त जग्गा निजले भनेका ब्यक्तिहरुको नाममा रजिष्ट्रेशन पास गरीदिए पछि रोपनीको २० लाखको दरले दिने प्रलोभन देखाए पश्चात रकम पाउने प्रलोभनमा परि निज राम कुमार सुवेदीले बोलाएको स्थानमा गई निजले भनेको कागजातहरुमा सहिछाप औठाछाप गरेको हुँ। कानूनत

कुन कुन जग्गामा मोहीयानी हक प्राप्त हुन्छ मलाई थाहा थिएन । मैले राम कुमार सुवेदीले भने बमोजिम गरी आर्थिक लाभ प्राप्त गर्ने प्रलोभनमा परि उक्त कार्य गरेको हुँ । उक्त जग्गा मैले राम कुमार सुवेदीले प्रति रोपनी २० लाखका दरले रकम दिन्छु, जग्गा हाम्रो नाममा पास गरी दिनुहोस् भनेकोमा मैले निज राम कुमार सुबेदीको प्रस्तावमा समर्थन जनाई निज राम कुमार सुवेदीले तयार गर्न लगाएका सर्जमिन मुचुल्कामा सहिछाप गरेको हुँ । निजसँग रकम लिई जग्गा निजले भनेको मानिसको नाममा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंमा डोर पास गरी दिएका हौं । उक्त जग्गा पास गरे बापत डिल्लीबजारमा गई राम कुमार सुवेदीबाट पटक पटक गरी रु.६७ लाख ५० हजार पाएको हो । उक्त रकम मैले बुवालाई दिएको थिएँ । सो रकम बुवाले भाई, बहिनीहरुको बिबाहमा, उपचार, भोजभतेर लगायतमा खर्च गरी मलाई अन्दाजी २० लाख जति नगद दिनुभएको थियो । उक्त रकम मैले छोरीहरु बिबाहमा, उपचारमा, घर खर्च लगायत अन्य शिर्षकमा खर्च गरीसकेको छु । मोहीहरु देव नारायाण महर्जन, द्वारिकामान महर्जन, संजय कुमार महर्जन, सकुलानन्द महर्जन, श्रीमती मोहन महर्जनलाई साक्षी सर्जिमन बस्दाका बखत चिनेको हुँ । सो पश्चात निहरुसँग भटेघाट भएको छैन । निजहरु हाल के कहाँ छन् थाहा छैन । भाई मचाम महर्जन का.जि.का.म.पा. गंगबुमा स्थित घर तिर हुनुपर्छ । यसमा मेरो भएको ब्यहोरा यस प्रकार छ की मालपोत कार्यालय डिल्लीबजार जाँदा सो कार्यालय नजिकै कानून ब्यवसायीको कार्यालय संचालन गरी बस्ने राम कुमार सुवेदीसँग भेटघाट भई निजसँग कुरा हुँदा निजले मोहीयानी हक छुट्याउने कामको लागी मुद्दा गर्नु पर्छ, म मुद्दा जिताईदिन्छु, मुद्दा जितेपछि मलाई पनि केहि जग्गा दिनुपर्छ भनेकोमा हामी सबै मोहीहरुले निजको प्रस्तावमा समर्थन जनाई निज राम कुमार सुवेदीलाई कामको जिम्मा दिएका थियौं । काठमाडौं बालुवाटारको जग्गा तपाईहरुको नाममा बनाउने हो । तपाईहरुले कागजमा सहीछाप गरेपछि जग्गा तपाईहरुको नाममा आउछ । काम गर्दै गरौ । तपाईहरुलाई पैसा आउछ भनेर भनेका थिए । ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गाका मोहीहरुलाई भेटी प्रतिवादी राम कुमार सुवेदी समेतले हाम्रा नाउका भएको कागज प्रमाण, फिल्डबुक उतार, भुमिसुधार कार्यालय काठमाडौंको २ नं. अनूसुची, निजहरुको नागरीकता प्रमाण पत्र, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानिय वडा कार्यालयको जोतभोग खुलेको सिफारिस पत्र, जग्गाधनीलाई कुतबाली वापत भुमिसुधार कार्यालय काठमाडौंमा बाली धरौटी राखेको रसिद लगायतका प्रमाण कागजातहरु देखाई हाम्रो तर्फबाट उल्लेखित जग्गाहरु श्री पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गर्न गुठी तहसिल कार्यालय कालमचन तिपुरेश्वर समेतका कार्यालयमा पेश गर्ने भनी निवेदन समेतका कागजातमा सही छाप गराएका हुन । त्यहाँ गएपछि राम कुमार सुवेदी मोहीहरुको निवेदनमा वारेश बसी निवेदन लगायतका बिभिन्न कागजमा सहीछाप गराएका थिए । त्यस पश्चात राम कुमार सुवेदीले ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गाकालाई श्री पशुपती टिकिन्छा गुठी नाममा कायम गर्ने भनी लिखित रुपमा सबै कामहरु सम्बन्धित कार्यालयहरुमा पुगी राम प्रसाद सुवेदीले गरेका हुन । सोही कागजातबाट उठान भएको काम कारवाहीमा ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गा बाट सबिक नगर २३ ह कि.नं.४० को क्षेत्र फल ०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मध्ये भिड्ने हो ब्यहोराको मुचुल्कामा म समेतलाई साक्षी राखी राम कुमार सुवेदीले म समेतलाई झुक्याई नक्कली कागजातहरुको आधारमा नक्कली मोही कायम गराई उक्त जग्गा देब नारायण महर्जन समेतका मोहीहरुको नामबाट १० दिन भित्रमा राम कुमार सुवेदी समेतको नाममा मोही बिक्रि भएको जग्गाधनी प्रमाण पूर्जा बनाई उक्त जग्गा हाल पनि निजै राम कुमार सुवेदी समेतको नाममा दर्ता कायम छ । प्रतिवादी राम कुमार सुवेदी २०५० साल मालपोत कार्यालय डिल्लीबजारमा भेट चिनजान भएको हो । प्रतिवादी सोभा कान्त ढकाललाई विशेष अदालतमा

तारिखमा उपस्थित हुँदाको अवस्था चिनेको हुँ। काठमाडौं बालुवाटार स्थित ललिता निवास क्याम्पमा पशुपति टिकिन्छा गुठीको नाममा भएको जग्गा प्रतिवादी राम कुमार सुवेदीले निज र निजले भनेका मानिसहरुको नाममा रजिष्ट्रेशन पास गराएका थिए। पशुपति टिकिन्छा गुठीको नाममा भएको जग्गा सोभा कान्त ढकाल, माधबी सुबेदी, उमा कुमारी ढकाल समेतको नाममा रहेको कुरा हाल थाहा भयो। राम कुमार सुवेदीले तयार गरेको मुचुल्कामा सहिछाप, औठाछाप गरेको हुँ। काठमाडौं बालुवाटार स्थित ललिता निवास क्याम्पमा पशुपति टिकिन्छा गुठी अस्तित्वमा रहे नरहेको मलाई थाहा छैन। १९६३ सालको लगत र १९८७ सालको लालमोहरको बारेमा मलाई केहि थाहा छैन। काठमाडौंको डिल्लीबजार स्थित राम कुमार सुवेदीको संचालन गरेको ल फर्ममा निजले तयार गर्न लगाएका मुचुल्काहरुमा सहिछाप, औठाछाप गरेको हुँ। आफुले कमाई खाएको खेत भएको हुँदा सो जग्गामा मोहीयानी बापत आधा जग्गा प्राप्त हुने सो बिक्री गरी आर्थिक लाभ प्राप्त गर्ने प्रलोभनमा परि उक्त कार्य गरेको हुँ। यस कसूरमा संलग्न कर्मचारीहरु, मोहीहरु, साक्षीहरु, जग्गा प्राप्त गर्ने ब्यक्तिहरु समेतलाई कानून बमोजिम होस्। आशामाया महर्जन, रामकृष्ण महर्जन, लक्ष्मी महर्जन, कृष्ण महर्जनलाई सर्जमिन मुचुल्कामा साक्षी बस्ने क्रममा भेटघाट भई चिनजान भएको थियो। साक्षी बस्ने काम धैरै बर्ष अगाडी भएको र निजहरुसँग हाल भेटघाट नभएको हुँदा म निजहरु एकिन नाम थर, वतन, सम्पर्क नम्बर, हुँलिया समेतको विवरण खुलाउन सक्दैन। राम कुमार सिवेदी समेतको नाममा रहेको उल्लेखित ४-१४-०३-२ क्षेत्रफलको जग्गाको दर्ता प्रकृया नै गलत हो भने उक्त कार्यमा संलग्न व्यक्ति र कर्मचारी समेतको विगो रकम तिर्ने दायित्व रहन्छ। उक्त जग्गा कथित मोही कायम गरी सम्बन्धीत मालपोत कार्यालय मार्फत पास पारित गराई मोहीहरुलाई राजीनामा लिखतमा उल्लेखित रकम राम कुमार सुवेदीले बुझाई राम कुमार सुवेदी समेतको नाममा राजीनामा पास गरी उल्लेखित जग्गा लिएको हो। यसमा मेरो बुबा तुयुभाई महर्जन, भाई मचाम महर्जन र म समेतले रु.६७ लाख ५० हजार रकम पाएको हुँदा कानून बमोजिम होस् भन्ने ब्यहोराको प्रतिवादी बाबुराजा महर्जनको बयान।

**११. प्रतिवादी देव नारायण महर्जनको बयान:**

**(क) प्रतिवादी देव नारायण महर्जनको बयान (जग्गा सट्टापट्टा २०६७):**

मलाई हाल यस मुद्दामा पक्राउमा परेका प्रतिवादी बाबुराजा महर्जनले हामी सबै किसानका परिवारलाई हामीहरुले कमाउँदै आएको उल्लेखित ललिता निवास क्याम्प भित्रको जग्गा मोही छुट्याई दर्ता गर्न लागेका छन, का.जि. डिल्लीबजारमा कानुन व्यबसायीको कार्यालय (ल फर्म) संचालन गरी बस्ने कानुन ब्यबसायी राम कुमार सुबेदीले उक्त कामको जिम्मा लिएका छन भनी निज बाबुराजा महर्जनले मलाई का.जि. डिल्लीबजारमा लगी प्रतिवादी रामकुमार सुवेदीसँग भेटाए पश्चात निज प्रतिवादी रामकुमार सुवेदीलाई चिनेको हुँ। प्रतिवादी रामकुमार सुवेदीले ललिता निवास क्याम्प भित्रको हामीले कमाई खाएको जग्गाको आधा जग्गा पाउनु हुन्छ भनी बताएका थिए। मेरो बाबु बाजेको पाला देखी नै का.जि.का.म.न.पा.वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्र रहेको जग्गामा खेतीपाती तथा भोग चलन गर्दै आई रहेका थियौ। उक्त जग्गाको धनी को हुन मलाई थाहा भएन। बाबु बाजेको पालामा उक्त बालुवाटार एरियामा जग्गा खाली भएकाले सो जग्गामा मेरो बाबु बाजे लगायत अन्य ४०/५० जना व्यक्तिहरुले भोग चलन गर्दै आएका थिए। उक्त जग्गामा पहिले धान, आलु, तरकारी खेती गर्ने गरीन्थ्यो। मेरो बाबु बाजेले सो जग्गाको तिरो तथा उक्त जग्गाको कुत तिरेको मलाई याद छैन। साथै मैले समेत उक्त ललिता निवास क्याम्प भित्रको कमाई खाएको जग्गाको तिरो तथा कुत तिरेको छैन तर तत्काल उक्त जग्गा मेरो परिवारले मोहीको रुपमा उपभोग गरी रहेकोमा तत्काल मोही मध्येका हाल यस

ब्यूरोबाट पक्राउमा परेका बाबुराजा महर्जनले हामी सबै किसानका परिवारलाई हामीहरुले कमाउँदै आएको उल्लेखित ललिता निवास क्याम्प भित्रको जग्गा मोही छुट्याई दर्ता गर्न लागेका छन्। का.जि. डिल्लीबजारमा कानुन व्यबसायीको कार्यालय ( ल फर्म ) संचालन गरी बस्ने कानुन ब्यबसायी राम कुमार सुबेदीले उक्त कामको जिम्मा लिएका छन भनी म समेत अन्य किसानहरुलाई काठमाडौं जिल्ला डिल्लीबजार स्थित निज प्रतिवादी राम कुमार सुबेदीको कार्यालयमा (ल फर्म) लगी प्रतिवादी रामकुमार सुवेदीलाई भेटाई दिए पश्चात निज प्रतिवादी रामकुमार सुवेदीले मलाई काम हुन्छ ललिता निवास क्याम्प भित्रको हामीले कमाई खाएको जग्गाको मोही छुट्याई दिन्छु भनी बताएका थिए। तत्काल का.जि.कालिमाटी बस्ने राम कुमार सुबेदीले म समेतका अन्य मोहीहरुलाई ज्याठा नजिकै रहेको ईनबहाल क्लबमा बोलाई मिटिङ समेत राखी हामीले उपभोग गरीरहेको बालुवाटारको जग्गा मोही छुट्याई दिन्छु भनेका थिए। निज राम कुमार सुबेदीले म र अन्य मोहीहरु समेतलाई समय समयमा भेट्न बोलाउने गर्थे। निज राम कुमार सुबेदीलाई निजले संचालन गरेको डिल्लिबजार स्थित लेखापढी केन्द्रमा भेट भई कुरा हुँदा निजले तपाईंले कमाउनु भएको जग्गाको कुत तिर्नु पर्छ अहिले म तिरी दिन्छु, पछि हिसाब मिलाउँला भन्दा मैले हुन्छ भनेको थिएँ। निजले के कहाँ कति कुत बुझाए मलाई थाहा भएन। त्यस पछि समेत निज राम कुमार सुबेदीले मलाई पटक पटक भेट्न बोलाएका थिए। यसरी भेट्दा निजले मलाई बिभिन्न कागजहरुमा सहि छाप गराएका थिए। के कुन व्यहोराको कागजमा सहिछाप गराए मलाई थाहा भएन। पछि निजले मलाई तपाईंहरुले जग्गा नपाउने हुनु भयो, सो बापत रकम लिएर जानुहोस भनी मलाई डिल्लिबजार स्थित निजको लेखापढी केन्द्र र का.जि. ईनबहाल समेतमा पटक पटक भेटी बिभिन्न कागजमा सहिछाप समेत गराई पटक पटक गरी रु. २०,००,०००।–(बिस लाख) जति दिएका थिए। तत्पश्चात उक्त जग्गा के कुन प्रकृयाबाट के कसरी को कसको नाममा दर्ता भयो मलाई थाहा भएन। उक्त जग्गाबाट हामीले पैसा पाए पछी म लगायत अन्य मोहीबाट निज राम कुमार सुवेदीले भोज गर्न भनेर २५ हजारको दरले उठाएको समेत थियो तर निज राम कुमारले हामीबाट पैसा लिएपछी उ सम्पर्क बिहिन भयो र हामीलाई भोज समेत खुवाएन। म साधारण लेखपढ पनि गर्न नसक्ने भएको हुँदा सबै कागजातहरु रामकुमार सुवेदीले तयार गरी मलाई सहिछाप मात्र गराउने गरेका थिए। के-के कागजातहरु तयार गरी पेश गर्न लगाएका थिए मलाई थाहा छैन। मलाई प्रतिवादी रामकुमार सुवेदीले मेरो बाजे ड्राईभर भाइचा भन्ने आशाकाजी महर्जनको पाला देखी काठमाडौं जिल्ला का.म.पा वडा नं. ४ स्थित ललिता निवास क्याम्प भित्रको कमाई खाएको जग्गाको मोही छुट्याई जग्गा दर्ता गरीदिन्छु भनी मलाई विभिन्न कागजहरुमा औठाछाप गर्न लगाउने गरेका थिए। सबै निवेदनहरु निज प्रतिवादी रामकुमार सुवेदीले लेखी मैले दस्तखत गर्न नजान्ने भएको हुँदा मेरो औठा छाप गर्न लगाउने गरेका थिए। निवेदनहरुमा लेखिएको व्यहोराको सम्वन्धमा मलाई केही थाहा छैन। प्रतिवादी बाबुराजा महर्जनले ललिता निवास क्याम्प भित्रको जग्गाको मोही भनिएका ब्यक्तिहरुलाई का.जि. डिल्लीबजारस्थित प्रतिवादी रामकुमार सुवेदीको लेखापढी कार्यालयमा लगी सुरुमा भेटाएका हुन्। मेरो बाजे ड्राईभर भाइचा भन्ने आशाकाजी महर्जनको पाला देखीनै ललिता निवास क्याम्प भित्रको जग्गा कमाई आई मेरो बुबा नारायण महर्जनको मृत्यु भए पश्चात मैले समेत ४/५ बर्ष सो जग्गामा कमाई लगाएको थिए। सो जग्गाको के कति क्षेत्रफल रहेको थियो, मलाई थाहा छैन। मेरो बाबु बाजेको पालामा सो जग्गाको तिरो तिरेको सम्वन्धमा मलाई थाहा छैन। मेरो पालामा समेत मैले कही कतै तिरो तिरेको छैन। प्रतिवादी रामकुमार सुवेदीसँग भेट भए पश्चात प्रतिवादी रामकुमार सुवेदीले मैले कमाई खाएको ललिता क्याम्प भित्रको जग्गाको तिरो म आफै तिरिदन्छु भनेको थियो। के कँहा तिरीदियो मलाई थाहा छैन। ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोहीयानी

हक कायम कसरी भयो भन्ने कुरा मलाई थाहा छैन । सबै काम रामकुमार सुवेदीले गरेका हुँदा निज रामकुमार सुवेदीलाई नै थाहा होला । मैले मोहीको हैसियतमा के कुन कित्ताको के कति जग्गा प्राप्त गरेको थिए मलाई केही थाहा छैन । निज रामकुमार सुवेदीले मलाई निजको का.जि.डिल्लीबजार स्थित लेखापढी कार्यालयमा बोलाई मेरो नाममा मोही छुट्याईदिने भनी विभिन्न कागजहरुमा मेरो औठाछाप गर्न लगाउने गरेका थिए । मेरो नाममा के कुन कित्ताको के कति जग्गा आएको थियो , मलाई केही थाहा छैन । मैले जग्गाधनी पुर्जा समेत देखेको छैन । मेरो नाममा आएको जग्गा के कसलाई विक्री गरीयो सो सम्वन्धमा समेत मलाई केही थाहा छैन । मलाई निज रामकुमार सुवेदीले मेरो नाममा मोही कायम नहुने भनी मलाई पटक - पटक गरी रु. २०,००,०००।–(बिस लाख) नगदै दिएका थिए । निज रामकुमार सुवेदीले मलाई मेरो नाममा मोही कायम भएन भनी रकम दिए पश्चात मैले मेरो नाममा जग्गा आयो, आएन मैले कहिले पनि बुझिन । उक्त जग्गा हाल को कसको नाममा रहेको छ , सो समेत मलाई थाहा छैन । सबै निवेदनहरु रामकुमार सुवेदीले तयार गरी मेरो औठा छाप लगाई पेश गरेका हुन । के कुन निकायमा के कस्तो निवेदन पेश गरे मलाई थाहा छैन । मलाई जग्गा दिलाई दिने भनी प्रलोभन दिएका थिए । सोही कारण मैले निज राम कुमार सुवेदीले भनेको सबै कुरा मानेको हुँ । ललिता निवास क्याम्प भित्रको सिट नं. १०२५-१४ को कित्ता नं. ११ को १-५-३-२( ६९५.५३ व.मि.), कि.नं.२६ को ०-२-३-०(८७.४३ व.मि.), कि.नं.३८ को ०-४-०-२(१३१.५ व.मि.) र कि.नं. १४४ को २९.८५ व.मि. जग्गा मेरो नाममा आएको सम्वन्धमा मलाई थाहा छैन साथै मेरो नामबाट माधवी सुवेदी र उमा कुमारी ढकालको नाममा गएको पनि थाहा छैन । मैले आफुले बिक्री गरेको होईन । मलाई निज रामकुमार सुवेदीले मेरो नाममा मोही कायम भई जग्गा आएन भनी पटक पटक गरी रु.२०,००,०००।–(बिस लाख) दिएका थिए । सो बाहेक अन्य रकम लिएको पनि छैन । मैले आफुले जग्गा बिक्री गरेको पनि छैन । निज रामकुमार सुवेदीले मेरो औठाछाप लगाई बिक्री गरीदिएको हुनु पर्छ । निज रामकुमार सुवेदीले मलाई पटक –पटक गरी दिएको रु.२०,००,०००।–(बिस लाख) रकम मैले घर खर्च तथा ब्यबहार गरी खाई मासी सकेको छु । मलाई हाल आएर थाहा भयो की ललिता निवास क्याम्प भित्रको जग्गा झुठो व्यहोराको कीर्ते कागज र प्रमाण खडा गरी सरकारी जग्गा खरिद बिक्री गर्ने, गराउने, जग्गा हिनामिना गर्ने योजना बनाई मलाई बाबुराजा महर्जनले रामकुमार सुवेदी सँग चिनाएका रहेछन । सो काममा सबै रकम निज रामकुमार सुवेदीले खर्च गर्ने गरेका थिए । कति खर्च गरे कसलाई दिए मलाई थाहा छैन । हाल आएर थाहा भयो की ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा खरिद बिक्री गर्ने, गराउने योजना राम कुमार सुवेदी समेतका ब्यक्तिहरुको रहेछ । मलाई ललिता निवास क्याम्प भित्रको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको जग्गा सम्बन्धमा नेपाल सरकारलाई नोक्सान वा क्षति पुर्याउने र आफू वा अन्य कसैलाई लाभ पुर्याउने नियतले झुठ्ठा र फरक व्यहोराको लिखत बनाउने काम किर्ते गरेको ठहर्छ र यस्तो कार्य कानुन बिपरितको कार्य भएकोले कानुन बमोजिम दण्डनिय हुन्छ भन्ने थाहा थियो, राम कुमार सुवेदीले तयार गरी ल्याएका कागजहरुमा निजले भने बमोजिम मैले सहिछाप मात्र गरेको हुँ, व्यहोरा के लेखिएको थियो, सो समेत मलाई थाहा थिएन । सबै काम निज रामकुमार सुवेदीले गरीदिएका हुन् । मलाई बाबुराजा महर्जनले राम कुमार सुवेदीलाई भेटाई दिए पश्चात मेरो बाबु बाजेको पाला देखी कमाएको ललिता निवास क्याम्प भित्रको जग्गाको मोहीयानी हक दिलाई दिने भनी निज रामकुमार सुवेदीले तयार गरेका कागजातहरुमा औठा छाप लगाईदिएको थिए । पछि राम कुमार सुवेदीले जग्गा नआउने भयो सो बापत रकम लिनु भनी पटक-पटक गरी रु.२०,००,०००।–(बिस लाख) दिएका हुन । मैले जग्गा पाउने लोभमा निज राम कुमार सुवेदीले तयार गरेको

कागजातहररुमा औठाछाप लगाईदिएको मात्र हो । सो बाहेक अन्य कुराहरु मलाई थाहा छैन भन्ने समेत व्यहोराको देव नारायण महर्जनको बयान ।

**ख) प्रतिवादी देव नारायण महर्जनको बयान (पशुपती टिकिन्छा गुठी २०६९):**

मलाई प्रतिवादी बाबुराजा महर्जनले प्रतिवादी राम कुमार सुवेदीको अफिस डिल्लीबजार काठमाडौंमा लिएर गए। त्यहाँ गएपछि राम कुमार सुवेदीले कागजमा सहीछाप गराए । काठमाडौं बालुवाटारको जग्गा तपाईहरुको नाममा बनाउने हो तपाईले कागजमा सहीछाप गरेपछि जग्गा तपाईको नाममा आउछ । काम गर्दै गरौ । तपाईलाई पैसा आउछ भनेर भनेका थिए । के कुन कागजमा सहीछाप गराएका थिए थाहा भएन । पटक पटकका बिभिन्न मितिमा कहिले काठमाडौंको ईनबहाल भन्ने ठाउमा बोलाउथे कहिले राम कुमार सुवेदीको घरमा बोलाएर हाल सम्म नेपाली रु.२०,०००,००/- ( बीस लाख मात्र) मलाई राम कुमार सुवेदीले दिएका छन । राम कुमार सुवेदीले आफूलाई लेखापढी ब्यवसाय गर्ने ब्यक्ति हो भनेका थिए । ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गाका मोहीहरु म समेतलाई भेटी प्रतिवादी राम कुमार सुवेदी समेतले हाम्रा नाउका भएको कागज प्रमाण फिल्डबुक उतार, भूमिसुधार कार्यालय काठमाडौंको २ नं. अनूसुची, निजहरुको नागरीकता प्रमाण पत्र, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानिय वडा कार्यालयको जोतभोग खुलेको सिफारिस पत्र, जग्गाधनीलाई कुतबाली वापत भुमिसुधार कार्यालय काठमाडौंमा बाली धरौटी राखेको रसिद लगायतका प्रमाण कागजातहरु देखाई हाम्रो तर्फबाट उल्लेखित जग्गाहरु श्री पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गर्न गुठी तहसिल कार्यालय कालमचन तिपुरेश्वर समेतका कार्यालयमा पेश गर्ने भनी निवेदन समेतका कागजातमा सही छाप गराएका हुन । के कागजमा सही छाप गराएका हुन मलाई थाहा भएन । मेरो नाममा जग्गा आएको / भएको मैले जग्गाधनी प्रमाणपूर्जा देखिन । उक्त पूर्जा राम कुमार सुवेदी नै राखेका थिए । मेरो नाममा माथि उल्लेखित पशुपति टिकिन्छा गुठीको जग्गा मोही कायम गराउदा म गुठी संस्थान, शाखा कार्यालय, प्रधान कार्यालय र मालपोत तथा नापी समेतका कुनै पनि कार्यालयमा म उपस्थित भएको छैन । राम कुमार सुवेदीको लेखापढी ब्यवसाय गर्ने अफिसमा बसी मलाई उनीहरुले तयार गरेको कागजमा सही छाप गराएका हुन । त्यस पश्चात राम कुमार सुवेदीले ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गालाई श्री पशुपती टिकिन्छा गुठी नाममा कायम गर्ने भनी मबाट वारेश लिखित रुपमा लिएरसबै कामहरु सम्बन्धित कार्यालयहरुमा पुगी राम कुमार सुवेदीले गरेका हुन । सोही कागजातबाट उठान भएको काम कारवाहीमा ललिता निवास क्याम्प भित्रको रहेको ४-१४-३-२ रोपनी जग्गा बाट साविकको कि.नं. ३५ क्षेत्रफल ०-१४-३-० नयाँ कि.नं. ५६ को क्षेत्रफल ०-११-२-२ र कि.नं. ८० को क्षेत्रफल ०-३-०-० का.जि. नगर २३ ह को कि.नं. ३५ हाल सिट नं. १०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं. ८० मिति २०७०/०१/१७ गते मेरो नाममा मोही कायम भएको हो । मेरो नाममा मोही कायम भएको १० दिन भित्रमा उक्त जग्गा प्रतिवादी राम कुमार सुवेदी र शोभाकान्त ढकालको संयुक्त नाममा मोही कायम भएको जग्गाधनी प्रमाणपुर्जा बनेको हो । उक्त जग्गा मेरो नामबाट राम कुमार सुवेदी समेतको नाममा कायम हुँदा मलाई कुनै पनि रकम दिएका छैनन । हाल आएर माथि उल्लेखित साविकको कि.नं. ३५ क्षेत्रफल ०-१४-३-० नयाँ कि.नं. ५६ को क्षेत्रफल ०-११-२-२ र कि.नं. ८० को क्षेत्रफल ०-३-०-० जग्गाको जग्गा का.जि. नगर २३ ह को कि.नं. ३५ हाल सिट नं. १०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं. ८० का कित्ता जग्गा नेपाल सरकारको नाममा श्रेस्ता दर्ता कायम भएका जग्गा रहेछन । राम कुमार सुवेदी समेतले मलाई झुक्याई नक्कली कागजातहरुको आधारमा मलाई नक्कली मोही कायम

गराई उक्त जग्गा मेरो नामबाट १० दिन भित्रमा राम कुमार सुवेदी समेतले मोही बिक्री भएको जग्गाधनी प्रमाण पूर्जा बनाई उक्त जग्गा हाल पनि निजै राम कुमार सुवेदी समेतको नाममा दर्ता छ।

सरकारी जग्गामा मोही हक प्राप्त हुन्छ हुदैन मलाई थाहा छैन । सरकारी जग्गा के कसरी पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गरेका हुन सो कुरा मलाई थाहा छैन। सो कुरा राम कुमार सुवेदी समेतका अरु प्रतिवादीलाई थाहा होला । म गुठी तहसिल कार्यालय कालमोचन त्रिपुरेश्वरमा गएको छैन । वारेश राखेको कागज राम कुमार सुवेदीले बनाएका हुन । कसैले पनि सनाखत गराएनन । मिति २०५९/०७/०५ गते गुठी संस्थान केन्द्रीय कार्यालय डिल्लीबजारमा गुठी जग्गा हाल साविक नामसारी गरी दर्ता गरीपाउ भनी दिएको निवेदनमा काठमाडौं जिल्ला नगर वार्ड नं. २३ क्ष को कि.नं. ४८ क्षेत्रफल ०-१४-० र ऐ को कि.नं. ७६ क्षेत्रफल २-१२-० जग्गा उल्लेख गरी सो निवेदन राम कुमार सुवेदीले लेखि पेश गरेका हुन । साविकको कि.नं. ३५ क्षेत्रफल ०-१४-३-० नयाँ नापीको प्लट रजिष्टर फिल्डबुकमा जग्गाधनी श्री ५ को सरकार समरजंग कम्पनी मोही नाति महर्जन नयाँ कि.नं. ५६ को क्षेत्रफल ०-११-२-२ र कि.नं. ८० को क्षेत्रफल ०-३-०-० जग्गाको जग्गाधनी श्री पशुपति टिकिन्छा गुठी मोही तपाई देव नारायण महर्जन भई का.जि. नगर २३ ह को कि.नं. ३५ हाल सिट नं. १०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं. ८० मिति २०७०/०१/१७ गते मेरो नाममा राम कुमार सुवेदीले बनाई दिएका हुन । निवेदनमा माग गरेको कि.नं. ४८ र कि.नं. ७६ को जग्गा पनि राम कुमार सुवदीको श्रीमती माधवी सुवेदीको नाममा दर्ता छन । सो जग्गाहरु पनि नेपाल सरकारको नाममा रहेका जग्गा हुन पशुपति टिकिन्छा गुठीका जग्गाहरु होइनन । निवेदनमा उल्लेखित नाती महर्जन को हुन मलाई थाहा छैन। सरकारी जग्गाहरु पशुपति टिकिन्छा गुठिको नाममा कायम गराई मोही मेरो नाम समेतका कागजात जग्गाको प्रमाण पूर्जी प्रतिवादी राम कुमार सुवेदी र सम्बन्धित निकायका सरकारी कर्मचारीले गरेका हुन। मैले राम कुमार सुवेदीले तयार गरेको कागजहरुमा सहीछाप गरी दिएको हुँ। उक्त कित्ता जग्गाहरुको म मोही हकदार होईन। कागजमा सहीगरी दिए वापत राम कुमार सुवेदीले मलाई रु. २०,०००,००/- ( बीस लाख मात्र) दिएका थिए उक्त रकम मैले घरायसी प्रयोजनमा खर्च गरी सकेको छु। उक्त जग्गाको वास्तविक हकदार म होईन। उक्त जग्गा श्री पशुपती टिकिन्छा गुठीका नाममा दर्ता गर्ने गराउने क्रममा यो यो कर्मचारीहरुको संलग्नता थियो भनी मैले एकिन गर्न सक्दिन । सो कुरा राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीलाई थाहा होला। मैले राम कुमार सुवेदीलाई वारेश बनाई मोहीको तर्फबाट निवेदन दिनु भनेको छैन। लेखापढी ब्यवसायी गर्ने प्रतिवादी राम कुमार सुवेदीले मलाई रकम दिने लोभमा पारी झुक्याई कागजातहरु खडा गरेका हुन। मन्त्री परिषदको मिति २०२१/०८/१५ गतेको अधिग्रहणको निर्णय सम्बन्धमा मलाई थाहा छैन। गुठीको जग्गा सम्बन्धी कारवाही गर्ने शुरुको कार्यालय गुठी संस्थान तहसिल कार्यालय नै हो। मैले तहसिल शाखा कार्यालय रगुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन मैले दिएको छैन। नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको जग्गामा मोहीयानी हक प्राप्त हुन सक्दैन। नेपाल सरकारको जग्गामा मोही लाग्ने ब्यवस्था छैन भने सुनेको छु। जग्गाधनी शैलजा राणा सुनिती राणा, रुक्म शम्सेर जबरा, हाटक शम्सेर, हेमन शम्सेर, उमा कुमारी ढकाल, शोभाकान्त ढकाललाई म चिन्दिन । प्रतिवादी राम कुमार सुवेदी र बाबुराजा महर्जनलाई मात्र चिन्दछु । उक्त जग्गाहरु पशुपति टिकिन्छा गुठीका हुन भन्ने म सँग कुनै पनि प्रमाण कागज थिएनन। पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी बनाईएका कागजातहरु राम कुमार सुवेदीले कीर्ते गरी बनाएका हुन। मेरो नागरीकताको फोटोकपी चाहिन्छ भनेर राम कुमार सुवेदीले लिएका थिए। फिल्डबुक उतार, भुमिसुधार कार्यालय काठमाडौंको २ नं. अनूसुची, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानीय वडा कार्यालयको जोतभोग खुलेको सिफारिस पत्र,

जग्गाधनीलाई कुतबाली वापत भूमिसुधार कार्यालय काठमाडौंमा बाली धरौटी राखेको रसिद लगायतका प्रमाण कागजातहरु कीर्ते कागज हुन । मैले मेरो नागरीकताको फोटोकपी कागज बाहेक अरु कुनै पनि कागजात राम कुमार सुवेदीलाई दिएको छैन । मैले दिएको भनिएका नागरीकताको फोटो कपी बाहेकका कागजातहरु राम कुमार सुवेदीले कीर्ते बनाएका हुन् । सरकारी जग्गामा मोही लाग्दैन भन्ने कुरा मलाई राम्ररी थाहा छ । श्री पशुपति टिकिन्छा गुठीको नाममा रहेको जग्गाको हकमा मालपोतको श्रेस्ता पूर्जा र मोहीहरुको नाममा भएका उक्त जग्गाका फिल्डबुक २ नं. अनुसूची सम्बन्धित मोहीहरुका नागरीकता नाता प्रमाण, स्थानिय वडा कार्यालयहरुका सिफारिस लगायत सम्बन्धित निकायबाट सांध सधियारहरु समेतको रोहवरमा गरीएका स्थलगत सर्जमिन राम कुमार सुवेदीले बनाएका हुन । मैले मेरो नाममा बनाउने उक्त जग्गा रहेको स्थान पनि देखेको छैन र उक्त जग्गाको जग्गाधनी प्रमाणपुर्जा पनि देखेको छैन । सो कार्यमा को कस्को संलग्नता छ म एकिन साथ भन्न सक्दिन । मेरो नामबाट रामकुमार सुवेदीले मोही बिक्री भएको जग्गाधनी प्रमाण पुर्जा बनाउदा मलाई कुनै रकम दिएका छैनन् । म मालपोत कार्यालय तथा गुठी संस्थान कार्यालयमा गएको छैन। राम कुमार सुवेदीको अफिस काठमाडौं डिल्लीबजारमा मलाई बोलाई कागजमा सहीछाप गराएको थियो । टिकिन्छा गुठीको नाममा कुतबाली बुझाएको कागजात केही छैन । मेरो नाममा पूर्जा बनी सके पश्चात उक्त जग्गा राम कुमार सुवेदी समेत खरिद गरेको जग्गाको पूर्जाको बारेमा समेत मलाई केही थाहा छैन । मैले उक्त जग्गाको पूर्जा नै देखेको छैन । उक्त राजिनामाको लिखतमा उल्लेखित दिनेको महलमा भएको नाम मेरो हो, सहीछाप समेत मैले नै गरेको हुँ । सनाखत समेत गरी दिंए । सिट नं. १०२-१०२५-१५, कि.नं. २७८,२८४,२३२,५६,८०,१७१ भएको जग्गाधनी प्रमाण पूर्जामा जग्गा धनि टिकिन्छा गुठी भएको, मोही महलमा उल्लेखित नाम भएका ब्यक्तिहरु राम कुमार सुवेदीलाई मात्र चिन्दछु । झुठा र कीर्ते काम गरेमा सजाय हुन्छ भने कुरा मलाई थाहा छ भन्ने ब्यहोराको प्रतिवादी देवनारायण महर्जनको बयान ।

१२. **प्रतिवादी बालकृष्ण श्रेष्ठको बयान (जग्गा सट्टापट्टा २०६७):**

२०६६ साल देखी २०६९ साल सम्म भवन निर्माण संभार डिभिजन कार्यालयको सिनियर डिभिजनल ईन्जिनियर पदमा कार्यरत रहेको थिए ।२०६९ सालमा भवन बिभागमा पुन: सरुवा भयो । सोहि कार्यालयवाट २०७० सालमा सुपरिटेन्डेन्ट ईन्जिनियर पदमा बढुवा भई अवकास प्राप्त गरेको हुँ । मलाई ललिता निवास क्याम्प भित्रको जग्गाहरु श्री ५ को सरकाले अधिग्रहण गरे नगरेको सम्वन्धमा केही पनि थाहा छैन । सो जग्गाहरुको लगत राख्ने काम भूमिसुधार मन्त्रालय अन्तर्गत मालपोत कार्यालय, नापी कार्यालय, गुठी संस्थानको हो । सरकारले प्रचलित ऐन बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गा सरकारी जग्गा हुने गर्दछ । सरकारले मुआब्जा दिई अधिग्रहण गरेको जग्गाको लगत कट्टा गरी सके पश्चात उक्त जग्गा सरकारको नाममा आउने गर्दछ । मलाई मिसिल संलग्न रहेको शहरी विकास मन्त्रालय, आन्तरिक ब्यवस्थापन शाखाको चलानी नं १९६२, मिति २०७६/११/३० गतेको पत्रसाथ प्राप्त भएको काठमाडौं जिल्ला कामपा वडा नं४ वालुवाटारमा अवस्थित विशिष्ट ब्यक्तिहरुको सरकारी निवास भवन परिसर क्षेत्रको जग्गा प्राप्त गरी विस्तार गर्ने सम्वन्धमा भवन निर्माण संभार डिभिजन कार्यालयबाट मिति ०६६/१२/१८ गते उठाईएको टिप्पणी देखाऊँदा देखें, उक्त टिप्पणीमा बालकृष्ण श्रेष्ठ सिडिई भनी गरेको दस्तखत मेरो आफ्नै हो । हेरी चिनी सनाखत समेत गरीदिएँ । उक्त टिप्पणी तत्कालिन कार्यालय प्रमुख सुपरिटेण्डेण्ट ईन्जिनियर सुरोजराज राज कर्णिकारको आदेशमा म र तत्कालिन ईन्जिनियर राजेन्द्रमान श्रेष्ठ भई उठाई कार्यालय प्रमुख सुपरिटेण्डेण्ट ईन्जिनियर सुरोजराज राजकर्णिकार समक्ष पेश गरेका हौं । उल्लेखित टिप्पणी काठमाडौं जिल्ला का.म.पा. ४ बालुवाटार

स्थित प्रधानमन्त्री निवासको लागी विभिन्न संरचना निर्माण गर्नको लागी  जग्गा कम भएको हुँदा जग्गा थप गरी प्रधानमन्त्री निवास बिस्तार गर्नको लागी उक्त टिप्पणी उठाईएको हो । उक्त बिस्तारमा पर्ने थप जग्गाको लगत मालपोत कार्यालय, नापी कार्यालय र गुठी संस्थानबाट लिई सो कार्यालयहरुबाट प्राप्त जग्गाहरुको लगतमा नेपाल सरकार समरजंग कम्पनिको  नाममा(मोही जनिएको) ललिता निवास क्याम्प क्षेत्रको चार किल्ला भित्र जम्मा क्षेत्रफल २७-७-२-१ रोपनी सरकारी जग्गा मध्ये मोही भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५ जग्गा र साबिक बाटो तथा राजकुलो  गरी ०-१५-०-२ आएकोमा मालपोत कार्यालय, नापी कार्यालय र गुठी संस्थानबाट आएको पत्रमा नै मोही लागेको २७-७-२-१  रोपनी मध्ये आधा जग्गा मोहीको भनी जनिएको थियो। सोही आधारमा  सरकाले  पाउने १४-१०-३-२.५ रोपनी जग्गामा प्रधानमन्त्री निवास बिस्तार गर्ने योजना बनाईएको थियो । कुनै जग्गामा मोही रहे नरहेको, सट्टा पट्टा गर्ने सोध भर्ना दिने समेतका विषय म तत्काल कार्यरत रहेको  भवन निर्माण संभार डिभिजन  कार्यालयको जिम्मेवारी क्षेत्र भित्र पर्ने होईन । उक्त कार्यहरु भूमिसुधार मन्त्रालय अन्तर्गतको कार्यालयबाट हुने हुँदा सोही कार्यालयबाट गर्न/गराउनको लागी   म समेतले टिप्पणी उठाएको थिएँ । म प्राविधिक कर्मचारी भएको हुँदा सरकारी जग्गामा मोही लाग्ने , नलाग्ने सम्वन्धमा मलाई थाहा भएन । मालपोत कार्यालय, नापी कार्यालय र गुठी संस्थानबाट प्राप्त लगतमा समरजंग कम्पनिको मोही लागेको जग्गा भनी २७-७-२-१ रोपनी पठाई सो जग्गाहरु मध्ये मोहीलाई पर्ने आधा जग्गा भाग कटाई बाँकी रहने जग्गा   १३-११-३-०.५ रोपनी भनी लेखि आएको हुँदा सोही आधारमा जग्गाधनी नेपाल सरकार र मोहीमा विभिन्न ब्यक्तिको नाम उल्लेख गरी टिप्पणी उठाएको हो । मैले टिप्पणी उठाउँदा कुनै प्रचलित  नियम कानुनको उल्लघंन गरेको छैन । सम्वन्धित कार्यालयहरुबाट प्राप्त जग्गाहरुको लगतको आधारमा टिप्पणी उठाएको हुँ । मैले टिप्पणी तयार गरी पेश गर्ने क्रममा संलग्न अनुसुची तयार पार्दा  उल्लेखीत जग्गाहरुको साबिक श्रोत सम्वन्धमा अध्ययन गर्नु पर्ने  हुन्छ । हाम्रो कार्यालय प्राविधिक कार्यालय भएको कारण मैले टिप्पणी तयार गर्नु पूर्व उक्त जग्गाहरुको साबिक श्रोत सम्वन्धमा एकिन गरी पठाउनु भनी मालपोत कार्यालय, गुठी संस्थान र नापी कार्यालयलाई पत्राचार गरेकोमा सो कार्यालयबाट एकिन गरी पठाएको जग्गाको लगतको आधारमा सोही लगतलाई आधार बनाई अनुसुची तयार पारिएको थियो ।  सम्मानित सर्वोच्च अदालतको फैसला अध्ययन गर्ने काम विभाग तथा मन्त्रालयका कानून अधिकृतको हो । हामीले मालपोत कार्यालय, नापी कार्यालय र गुठी संस्थानलाई ललिता निवास भित्रको विशिष्ट ब्यक्तिहरुको निवास परिसर बिस्तार भित्र पर्ने जग्गाहरुको एकिन लगत पठाइदिन भनी पत्राचार गरिएकोमा नापी कार्यालय तथा मालपोत कार्यालयबाट प्राप्त लगतको आधारमा अनुसुची तयार गरिएको हो । प्रधानमन्त्री निवास बिस्तार सम्वन्धमा तयार भएको टिप्पणी र अनुसुची मन्त्रिपरिषदबाट स्विकृत भए पश्चात उक्त टिप्पणीको अनुसुचीमा केही जग्गाधनीको नाम र क्षेत्रफल गलत देखिएको हुँदा सच्चाई पुन: पेश गर्न आदेश भए बमोजिम पुन:लगतहरु चेकगरी सच्चाई मानविय गल्तीको कारण भुलवस क्षेत्रफल तथा जग्गाधनीको नाम फरक देखिएको हुँदा मैले उक्त अनुसुची सच्चाई टिप्पणी उठाई पुन: पेश गरेको हुँ । की मालपोत कार्यालय र नापी कार्यालयबाट प्राप्त भएको जग्गाको लगत अनुसारनै प्रधानमन्त्री निवास बिस्तार कार्यमा पर्ने कित्ताहरु सोधभर्ना, सट्टापट्टा  के कसरी लिन सकिन्छ भनी अनुसुची बनाई सम्वन्धीत कार्यालयबाट गर्नु पर्ने भनी टिप्पणी उठाएको हो । अधिग्रहण गरेको जग्गाको श्रेस्ता राख्ने, लगत कट्टा गर्ने, सरकारको नाममा ल्याउने जस्ता जग्गा सम्वन्धी कार्य सबै मालपोत कार्यालयको हो । जग्गा अधिग्रहण गर्ने कार्यालयलाई मात्र थाहा हुन्छ । सरकारी जग्गा, सार्वजनिक बाटो तथा राजकुलोमा मोही लाग्दैन । मिति २०६६।१२।२९ गतेको तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालयको प्रस्तावमा समावेश

भएको मोहीहरुको नामावली, फिल्डबुक र श्रेष्तामा भएको भन्दा फरक परेको होईन। मालपोत कार्यालय, नापी कार्यालय र गुठी संस्थानबाट आएको लगत अनुसार अनुसुची बनाई टिप्पणी तयार गर्ने क्रममा मानबिय त्रुटीले जग्गाधनीको नाम फरक पर्न गएको, जग्गाको क्षेत्रफल फरक पर्न गएको, केहीको नाम छुटन गएको हो मात्र हो सोही कारण अनुसुची संशोधन गर्ने टिप्पणी तयार गरेको हुँ। सरकारी तथा सार्वजनिक जग्गा सम्पती समेतको संरक्षण गर्ने दायित्व भवन निर्माण संभार डिभिजन कार्यालयको समेत हो। सरकारी कर्मचारीको हैसियतले आफूलाई प्राप्त भएको आदेशानुसार आफ्नो पदिय जिम्मेवारी अनुसारको काम गरेको मात्र हो भन्ने समेत व्यहोराको प्रतिवादी बालकृष्ण श्रेष्ठको बयान।

**१३. प्रतिवादी बालकृष्ण श्रेष्ठको थप बयान (जग्गा सट्टापट्टा २०६७):**

मालपोत कार्यालय र नापी कार्यालयबाट पठाएको विवरण अनुसार नै सरकारले प्राप्त गर्नु पर्ने **१४-१०-३-२.५ रोपनी** जग्गा प्रधानमन्त्री निवास कम्पाउण्ड बाहिरको जग्गामा हामीले चिन्ह लगाई मालपोत, नापी कार्यालयलाई के कसरी लिन सकिन्छ, भुमि सुधार मन्त्रालय मार्फत प्राप्त गर्ने भनी म समेतले टिप्पणी उठाई पेश गरेको हो। साबिक वडा नं. २३ क्ष को कि.नं. **१८ र २३** ह को कि.नं. ८ हालको सिट नं. १०२५-१५ कि.नं. ५६२, २४४, ८०, २४६ समेतका जग्गाहरु प्रधानमन्त्री निवास परिसर भित्र रहेको सम्वन्धमा मलाई थाहा छैन। प्रधानमन्त्री निवासमा सूरक्षाका लागी खटिएका सैनिक अधिकृतले विशिष्ट ब्यक्तिहरुको निवास वरिपरी गस्ती गर्ने बाटो नभएकोले सूरक्षा चुनौती भएको कारण बाटो आवश्यक छ भनी समय समयमा भन्ने गरेका थिए। सोही अनुसार गुरुयोजना तयार गर्ने क्रममा बाटो समेतको प्रस्ताब गरेको हो भन्ने ब्यहोराको प्रतिवादी बालकृष्ण श्रेष्ठको थप बयान।

**१४. प्रतिवादी कलाधर देउजाको बयान (जग्गा फिर्ता २०४९):**

तत्काल पेश गरेको मिसिलमा जग्गा अधिग्रहण भएको र सो बापत जग्गाधनीहरुले मआब्जा पाएको भन्ने कुनै प्रमाण देखिएन। साथै सुवर्ण सम्शेर र कञ्चन सम्शेरलेर नं. १५४७ मिति २०१७/३/३१ को लिखतबाट जम्म ११४ रोपनी जग्गा आफ्नो भगमा पाएको देखिन्छ। त्यस कारण माथी उल्लेखित सुचनामा १४ रोपनी मात्र भनी राज पत्रमा उल्लेखित संख्या मिल्दैन। सरकारी जग्गामा मालपोत कार्यालयबाट मोही वा गुठी कायम गर्न मिल्दैन। प्रजातन्त्रको पूर्नस्थापनामा लागेको कारणबाट राजनैतिक व्यक्तिको सम्पत्ति फिर्ता दिनको लागि आफ्नो माथिल्लो निकाय भूमिसुधार मन्त्रालय तथा विभागबाट त्यस्ता रोक्का तथा जफत सम्पत्ति सम्बन्धित ब्यक्तिलाई फिर्ता दिने २०४९/०९/२३ को विभागिय आदेश आएकोले कार्यालय प्रमूखकोहैषियतले सो आदेश पालना गरी सुवर्ण सम्शेरज.व.रा.को हकवालालाई जग्गा फिर्ता दिएको हो। राय किताब भनेको सम्बन्धित कार्यालयले गरेका कामहरुको छोटकरी विवरणहरु उल्लेख गरी व्यबस्थापन गरेको टिपोट हो। यो टिपोट हेरेर कुनै विषयमा के कस्तो कारवाही भएको थियो भनी हेर्न सकिन्छ। यो लेजर बुकमा उल्लेख गरी राखिन्छ यसको प्रयोजन कुनै मिसिलको छोटकरी विवरण पाउनु हो।मलाई मिसिल संलग्न राय किताबको छायाँ प्रति देखाउँदा देखें। उक्त राय किताब तत्कालिन जग्गा दर्ता फाँटका फाँटवाला ना.सु. जगत पुडासौनी र खरिदार युक्त श्रेष्ठले मिसिल ब्यबस्थापन गर्ने प्रयोजनको लागि तयार गरेका थिए। राय किताबमा भएको हस्ताक्षर मेरै हो। मलाई टिप्पणी र आदेशको छायाँ प्रति देखाउँदा देखें। उक्त टिप्पणी र आदेशमा भएको निर्णय मैले आफैले लेखि दस्तखत गरेको हुँ,हेरी चिनी सनाखत गरीदिएँ। मेरो बाहेक त्यस टिप्पणी र आदेशमा मालपोत कार्यालय डिल्लीबजारको जग्गा दर्ता फाँटका खरिदार युक्त श्रेष्ठ, नायव सुब्बा जगत पुडासैनी र मालपोत अधिकृत सुरेन्द्र मान कपालीको पनि हो।का.जि.का.म.पा.वडा नं.४ वालुवाटार स्थितमा रहेको ललिता निवास क्याम्पभित्रको

सरकारी जग्गा सुवर्ण शमशेर राणाको हकवालालाई मिति २०४९/०७/२५ र मिति २०४९/०९/२३ गते फिर्ता गरेको मि.नं. १०२४ र मि.नं.१०२५ मिसिलहरु निर्णय पश्चात सम्बन्धित फाँटका कर्मचारीको जिम्मा रहने विषय हो। सम्बन्धित फाँटबाट काम सकेपछी तामेली फाँटमा सुरक्षित राख्न पठाइन्छ। यस सम्बन्धि मिसिल पनि सोही बमोजिम तामेली फाँटमा रहेको हुनुपर्छ। पेश भएको मिसिलबाट उक्त जग्गाहरू अधिग्रहण भएको र सम्बन्धित जग्गाधनीले सो बापत क्षतिपूर्ति पाएको कुनै प्रमाण देखिएन। तत्काल देखिएको प्रमाणका आधारमा निर्णय भएको हो। मैले कुनै झुठ्ठा तथा फरक ब्यहोराको किर्ते लिखत तयार गरी सरकारी जग्गा ब्यक्तिको नाममा नामसारी दा.खा. गरेको होईन। मन्त्रीपरिषदको निर्णय र विभागिय आदेशको पालना गरेको हुँ।

यसमा उल्लेखित कित्ता नं. र क्षेत्रफलको जग्गा सुवर्ण सम्शेरको २०१७/३/३१ को अंशवण्डा र निजको साबिक लगत भित्रको जग्गा भएको तर नापीमाश्रेस्ता तयार गर्दा नापीले गुठी जनाई दिएकोले सो सुधार गरी दिन भुमिसुधार मन्त्रालयको ०४७/६/२ को पत्र उल्लेख गरी मालपोत विभागबाट ०४९/०९/२३ गतेको पत्रबाट आदेश भई आएकोले गुठी उल्लेख भएको श्रेस्ता मालपोत ऐन बमोजिम मालपोत कार्यालय डिल्लीबजारबाट सच्चाईएको हो। उक्त पत्रमा उल्लेख भएको श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा गुठी भनी उल्लेख भएको भन्ने शब्दले भ्रम परेको हुन सक्छ। नापी भएपछि सम्बन्धित जग्गाधनीले आफ्ना साबिकको प्रमाण देखाई श्रेस्ता प्रमाणित गरी नलगेसम्म त्यस्ताश्रेस्तामा जग्गाधनीको नाम श्री ५ को सरकार भन्ने उल्लेख गरी राखेको हुन्छ। यी कित्ताको जग्गाको सम्बन्धमा पनि जग्गाधनी सुवर्ण सम्शेरले दर्ता गरी नलगेसम्म जग्गाधनी श्री ५ को सरकार भन्ने नै उल्लेख गर्नु पर्नेमा गुठी लेखि दिई रहेछ। सोही विभागिय आदेशानुसार सच्चाईएको हो। मैले राणाहरुबाटहालै देखिको बकसपत्रको लिखत पारित गरी गराई जग्गा लिएको छैन र मैले कोही कसैलाई रिझाई सो बापत जग्गा लिएको पनि छैन। मेरो साढुँभाई नाता पर्ने ईन्द्र बहादुर थापाले के कसरी राणाको जग्गा हा.बा. गरी आफु समेतको नाममा लिए मलाई थाहा छैन। झुट्ठा व्यहोराको कागज बनाइ अर्काको हक जाने र आफूलाई फाइदा हुने गरी काम गरेमा कीर्ते हुन्छ भन्ने थाहा थियो। सुवर्ण सम्शेरको २०१७/३/३१ को अंशवण्डा भएको लिखत र साबिक लगत भित्रको जग्गा नापीमा श्रेस्ता तयार गर्दा नापीले गुठी जनाई दिएकोले सो सुधार गरी दिन भुमिसुधार मन्त्रालयको ०४७/६/२ को पत्र उल्लेख गरी मालपोत विभागबाट ०४९/०९/२३ गतेको पत्रबाट आदेश भई आएकोले गुठी उल्लेख भएको श्रेस्ता मालपोत ऐन बमोजिम मालपोत कार्यालय डिल्लीबजारबाट सच्चाईएको हो। उक्त पत्रमा उल्लेख भएको श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा गुठी भनी उल्लेख भएको भन्ने शब्दले भ्रम परेको हुन सक्छ। नापी भएपछि सम्बन्धित जग्गाधनीले आफ्ना साबिकको प्रमाण देखाई श्रेस्ता प्रमाणित गरी नलगेसम्म त्यस्ताश्रेस्तामा जग्गाधनीको नाम श्री ५ को सरकार भन्ने उल्लेख गरी राखेको हुन्छ। यसरी श्री ५ को सरकार भनी लेखिएको जग्गा सम्बन्धित जग्गाधनीले दर्ता गरी नलगेसम्म जग्गाधनी श्री ५ को सरकार भन्ने नै उल्लेख गर्नु पर्नेमा गुठी भनी लेखि दिई रहेछ। सोही व्यहोरा मालपोत ऐन र विभागिय आदेश अनुसार सच्चाईएको हो। यसमा मेरो अन्य दायित्व केही छैन भन्ने ब्यहोराको प्रतिवादी कलाधर देउजाको वयान।

**१५. <u>प्रतिवादी घमन कुमार कार्कीको बयान (पशुपती टिकिन्छा गुठी २०६९)</u>:**

म नापी कार्यालय डिल्लीबजार काठमाडौंमा पहिलो पटक बि.स. २०५७ साल देखी बि.स.२०५९ साल सम्म अमिनको रुपमा र दोस्रो पटक अन्दाजी बि.स. २०६९ साल देखी बि.स.२०७१ साल सम्म सर्भेक्षकको रुपमा कार्यरत थिएँ। नापी कार्यालयको सर्भेक्षकले मालपोत कार्यालयको पत्र अनुसार नापी अधिकृतको निर्देशनमा कित्ता काट गर्ने, हाल साविक, फिल्ड बुक उतार, फिल्ड भिजिट गर्ने, जग्गा नाप जाँच गर्ने र विभिन्न

कार्यालयहरुबाट पत्र मार्फत माग भएका बिवरणहरुको पत्र मार्फत जफाव दिने समेतको कार्य गर्नु पर्छ। मलाई सर्भेक्षकको रुपमा उल्लेखित काम कर्तब्य र जिम्मेवारीहरु नै तोकिएको थियो। तत्कालीन समयमा प्रतिवादी राम कुमार सुवदीले उक्त जग्गा व्यक्तिको नाममा गई सकेको, जग्गाधनी पुर्जा पाउन मात्र बाँकी रहेको भनी भूमी सुधार मन्त्रालय, सर्वोच्च अदालत, अख्तियार दुरुपयोग अनुसन्धान आयोग, मन्त्रिपरिषद र भूमीसुधार कार्यालय समेतको विभिन्न निर्णय र पत्रहरु सहित जग्गा ब्यक्तिको नाममा गईसकेको फाईल ल्याई उक्त कित्ता नम्बर ३१ सरकारी जग्गा नभएको भन्ने ब्यहोराको फिल्ड प्रतिवेदन र नापी कार्यालयले उक्त कित्तामा सरकारी जग्गा नरहेको भन्ने मालपोत कार्यालय डिल्लीबजारलाई पत्र लेख्नु मात्र बाँकी रहेको भनी मालपोत कार्यालयको पत्र लिई तत्कालीन नापी अधिकृत मग्नु दत्तलाई भेटी अनुरोध गरेकोमा मग्नु दत्तले निज राम कुमार सुवेदीले पेश गरेको कागजातहरुको आधारमा फिल्ड प्रतिवेदन पेश गर्नु भनी मलाई खटाईएकोमा म उक्त स्थानमा गई हेर्दा उक्त जग्गा ब्यक्तिले भोगचलन गरेको (खेती किसानी) गरीरहेको, राम कुमार सुवेदीले पेश गरेको कागजातहरुमा उक्त जग्गा ब्यक्तिको नाममा गई सकेको भन्ने ब्यहोराको पत्रहरु रहेको देखिएको र नापी अधिकृत मग्नु दत्तले सोही अनुसार नै फिल्ड प्रतिवेदन तयार गरी मालपोत कार्यालयलाई पत्र तयार गर्नु भनी मलाई भनेकोमा मैले सोही अनुसार पत्र र फिल्ड प्रतिवेदन तयार गरी मग्नु दत्तलाई पेश गरेकोमा मग्नु दत्तले मैले पेश गरेको प्रतिवेदन र पत्रको ब्यहोरा नमिलेको भनी आफैले ख्रेसा तयार गरी मलाई दिएकोमा मैले सोही खेस्रा अनुसार मिति २०६९।१२।५ गते मैले माथी उल्लेखित विवादिद भनिएका कित्ता जग्गा रहेको स्थान वालुवाटार स्थित ललिता निवास क्याम्प भित्र सरकारी जग्गा नघुसेको भनी प्रतिवेदन गरेको ठिक साँचो हो। उक्त प्रतिवेदनमा भएको हस्ताक्षर मेरो हो। मैले उक्त कित्ताको फिल्ड प्रतिवेदन पेश गरीसकेपछी तत्कालीन नापी अधिकृत मग्नु दत्तको निर्देशनमा राम कुमार सुवेदीले मालपोत कार्यालयको पत्र सहित उक्त कित्ता जग्गा ब्यक्तिको नाममा गई सकेको भन्ने सम्मानित सर्वोच्च अदालत समेतका निर्णय देखिएको, फिल्डमा गई हेर्दा उक्त जग्गा कपाउण्ड गरी खेती किसानी गरिएको, साविकको फिल्डबुकमा धानखेत भनी उल्लेख गरेको आधारमा पत्र तयार गरेकोमा मैले तयार गरेको पत्रको ब्यहोरा नमिलेको भनी निज नापी अधिकृत आफैले मलाई खेस्रा तयार गरी दिएकोले मैले सोही खेस्रा अनुसार नै पत्र तयार गरेको थिएँ। उक्त जग्गाको पत्र लेखिदिनको लागी उक्त जग्गा ब्यक्तिको नाममा गई सकेको भन्ने विभिन्न कागजातहरु रहेको मालपोत कार्यालयको पत्र सहितको फाईल लिई राम कुमार सुवेदीले नापी अधिकृत मग्नु दत्तलाई भेटी अनुरोध गरेको र मैले नापी अधिकृतको निर्देशनमा फिल्ड प्रतिवेदन र पत्र तयार गर्ने काम गरेको हुँदा यसमा फिल्ड प्रतिवेदन तयार गर्ने र सोही अनुसारको पत्र तयार गरीदिन भनी मालपोत कार्यालयको पत्र लिएर आउने राम कुमार सुवेदी, मलाई फिल्ड प्रतिवेदन र पत्र तयार गर्न लगाउने नापी अधिकृत मग्नु दत्त र मेरो नै संलग्नता रहेको छ। तर मैले कसैको प्रलोभन तथा दवावमा फिल्ड प्रतिवेदन तयार गरेको होईन। उक्त जग्गाको तत्कालीन समयमको वास्तविक अवस्था र मालपोत कार्यालयको पत्र मार्फत प्राप्त भएको निर्णयको आधारमा नै फिल्ड प्रतिवेदन तयार गरेको हुँ। मैले गलत प्रतिवेदन तयार गरेको छैन्।

मैले नापी अधिकृत मग्नु दत्तको निर्देशनमा पत्रको जवाफ पठाईसकेपछी उक्त जग्गा को-कसको नाममा दर्ता भयो र को-कसको नाममा रहेको छ भन्ने बुझेको थिएन। को-कसको नाममा जग्गा दर्ता भएको/नभएको सम्बन्धमा नापी अधिकृत, मालपोत अधिकृत, जिल्ला प्रशासन कार्यलयको प्रतिनिधी, भूमिसुधार कार्यालयको अधिकृत र स्थानिय विकास अधिकारीले संयुक्त बैठक बसी निर्णय गर्ने भएकोले सो सम्बन्धमा नापी अधिकृतलाई नै जानकारी हुन्छ। सो सम्बन्धमा मैले बुझ्नु पर्दैन। त्यसरी संयुक्त बैठक बसीसकेपछी के गर्ने भनी

निर्णय गर्ने अधिकार मालपोत अधिकृतमा निहित हुने भएकोले सो बिषयमा मालपोत कार्यालय नै जवाफदेही हुन्छ । मैले तत्कालीन नापी अधिकृत मग्नु दत्तको निर्देशनमा र मालपोत कार्यालयको पत्रमा उक्त जग्गा ब्यक्तिको नाममा गएको भन्ने निर्णय रहेको मन्त्रि परिषदको निर्णय, सर्वोच्च अदालतको फैसला, भूमी सुधार कार्यालयको निर्णय र मैरो घर समेत वडा नं. ०४ बालुवाटार अन्तगर्त पर्ने भएकोले म हिडडुल गर्ने समयमा मैलै उक्त जग्गामा खेती किसानी गरेको देखिरहेको समेतको आधारमा फिल्ड प्रतिवेदन तयार गरी मालपोत कार्यालय, डिल्लीबजारलाई मिति २०६९।१२।०५ गते हा.सा. विवरण सम्बन्धमा लेखेको पत्र, गुठी संस्थान शाखा कार्यालय काठमाडौंलाई मिति २०६९।११।१७ गते खुलाई पठाएको वारे लेखेको पत्र, मालपोत कार्यालय, डिल्लीबजारलाई मिति २०६९।१२।०१ गते कि.का. सम्बन्धमा लेखेको पत्र तयार गरी नापी अधिकृत मग्नु दत्तलाई पेश गरेको हुँ । मैले उल्लेखित मालपोत कार्यालयको पत्र साथ संलग्न कागजातहरु र फिल्डको वास्तविक अवस्था हेरी कार्यालयमा नै बसी प्रतिवेदन तयार गरी पेश गरेको हुँ । मैले कीर्ते कागजातहरु तयार गर्ने काम गरेको छैन् । कीर्ते काम कानून बिपरितको काम हो भन्ने मलाई थाहा थियो । मैले तत्कालीन समयमा प्रतिवादी राम कुमार सुवेदीले मालपोत कार्यालयको पत्रसहित ल्याएका कागजातहरुमा उल्लेखित कित्ता जग्गाहरु ब्यक्तिको नाममा गईसकेको भन्ने ब्यहोरा रहेको भनी राम कुमार सुवेदीले भनेकोमा मैले उल्लेखित कागजातहरुको अध्ययन गरी फिल्डमा समेत गई वास्तविक अवस्था बुझी प्रतिवेदन पेश गर्नु पर्नेमा उक्त जग्गा मेरो घरदेखी नजिकै रहेकोले हिडडुल गर्ने क्रममा समेत उक्त कित्ता जग्गामा खेती किसानी गरेको देखी तथा राम कुमार सुवेदीले भनेको कुरामा विश्वास गरी सरकारी जग्गा नघुसेको भन्ने समेत ब्यहोराको प्रतिवेदन तयार गरेको हुँ । सार्वजनिक पदमा आसिन ब्यक्ति (कर्मचारी) ले राम कुमार सुवेदीले पेश गरेका कागजातहरु सही या गलत के हुन् भन्ने एकिन नगरी प्रतिवेदन पेश गर्नु मेरो गल्ती हो । मैले नापी अधिकृत मग्नु दत्तको निर्देशनमा प्रतिवेदन र पत्र तयार गरेको कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको जग्गामा ब्यक्ति मोही कायम भएको देखिएमा मलाई प्रचलित कानून बमोजिम सजाय हुनु पर्छ । मैले माथि उल्लेखित प्रतिवादीहरु मध्ये राम कुमार सुवेदीलाई निजले मालपोत कार्यालय, डिल्लीबजार काठमाडौंको पत्र सहित हाल साबिकको लागी नापि कार्यालयमा आएको समयमा निजलाई चिनेको हुँ । हाल आएर निज राम कुमार सुवेदीले नक्कली साक्षी र मोहीहरु खडा गरी सोही अनुसारका निवेदन र सर्जमिन मुचुल्का समेतका कागजातहरु कागजातहरु तयार गरी विभिन्न निकायबाट निर्णय गराएका रहेछन् भन्ने सुनेको छु । मैले तत्कालीन मेरो कार्यालयका प्रमुख नापी अधिकृत मग्नु दत्तको निर्देशन बमोजिम मालपोत कार्यालयको पत्र र सो पत्रमा उल्लेखित कागजातहरुको आधारमा मग्नु दत्तले नै तयार गरेको खेस्राको आधारमा फिल्ड प्रतिवेदन र पत्र तयार गरेको मात्र हुँ । मैले मालपोत कार्यालयको पत्रसाथ पेश गरेको कागजातहरु र फिल्डमा गई हेर्दा उक्त कित्ता जग्गामा खेती किसानी गरी भोगचलन गरेको देखि सोही आधारमा नै सरकारी जग्गा नघुसेको भनी फिल्ड प्रतिवेदन तयार गरी पेश गरेको हुँ । निज राम कुमार सुवेदीले के-कसरी गलत कागजातहरु तयार गरी ब्यक्तिको नाममा जाने भनी निर्णय गराएका हुन् भन्ने मलाई थाहा भएन । ललिता निवास क्याम्प भित्र गुठी रहेको/नरहेको भन्ने सम्बन्धमा गुठी संस्थान कार्यालयलाई नै जानकारी हुन्छ । मैले उक्त ललिता निवास क्याम्प भित्र ब्यक्तिहरुले खेती किसानी गरेको देखी, राम कुमार सुवेदीले पेश गरेको कागजातहरुको आधारमा केही कित्ता जग्गा सम्बन्धमा सरकारी जग्गा नघुसेको भनी फिल्ड प्रतिवेदन लेखी पेश मात्र गरेको हुँ । मेरो फिल्ड प्रतिवेदन सही वा गलत के हो भन्ने जाँच गर्ने अधिकार नापी अधिकृतलाई हुने तर नापी अधिकृत मग्नु दत्तले चेकजाँच गरी ब्यहोरा सच्याई दिए पश्चात निजले सच्याई दिएको ब्यहोरा अनुसार मैले प्रतिवेदन तयार गरी

प्रतिवेदनमा सहीछाप गरी पेश गरेको हुँ। मलाई १९६३ सालको लगत र बि.सं.१९८७ सालको लालमोहर तथा कीर्ते ब्यहोराको कागज खडा गरी पशुपति टिकिन्छा गुठीको जग्गा भनी माग गरेको सम्बन्धमा मलाई जानकारी छैन् । मैले तत्कालीन समयमा प्रतिवादी राम कुमार सुवेदीले मालपोत कार्यालयको पत्रसहित ल्याएका कागजातहरुमा उल्लेखित कित्ता जग्गाहरु ब्यक्तिको नाममा गईसकेको भन्ने ब्यहोरा रहेको भनी राम कुमार सुवेदीले भनेकोमा मैले उल्लेखित कागजातहरुको अध्ययन गरी फिल्डमा समेत गई वास्तविक अवस्था बुझी प्रतिवेदन पेश गर्नु पर्नेमा राम कुमार सुवेदीले भनेको कुरामा विश्वास गरी तथा राम कुमार सुवेदीले पेश गरेका कागजातहरुको आधारमा प्रतिवेदन तयार गर्नु भन्ने नापी अधिकृत मग्नु दत्तको निर्देशनमा फाईलमा रहेका पुर्ण बिवरण अध्ययन नगरी, फिल्डमा म मात्र एक्लै गई उक्त कित्ता जग्गामा खेती किसानी गरेको देखी ब्यक्तिको भन्ने लागेर फिल्डको वास्तविक अवस्था नबुझी कार्यालयमा नै बसी प्रतिवेदन तयार गरी पेश गरेको थिएँ। हाल आएर बुझ्दा मैले गलत ब्यहोराको प्रतिवेदन पेश गरेको कारण समेतबाट श्री ५ समरजंग कम्पनीको नाममा दर्ता श्रेस्ता कायम रहेको सरकारी जग्गा पशुपती टिकिन्छा गुठिको नाममा दर्ता कायम गरी मोहीयानी हक समेत कायम भई नेपाल सरकारलाई हानि नोक्सानी पुगेको हुँदा मैले गरेको उल्लेखित कसूर अनुसार मलाई कानून बमोजिम कारवाही हुनुपर्छ। हाल उक्त जग्गा प्रतिवादी राम कुमार सुवेदी समेतका विभिन्न ब्यक्तिहरुको नाममा गएको हुँदा नेपाल सरकारलाई नोक्सानी पुगेको विगो रकम तिर्ने दायित्व निजै राम कुमार सुवेदी समेतका हाल जग्गाको मोही कायम भएका ब्यक्तिहरुको नै हो। मैले कोही कसैसँगबाट रकम लिएको र प्रलोभनमा परेको छैन्। तर मैले गलत प्रतिवेदन पेश गरेको कारण नेपाल सरकारको नाममा दर्ता रहेको जग्गामा ब्यक्ति मोही कायम भएको हुँदा मैले नैतिक दायित्व लिन्छु।

गुठी संस्थान कार्यालय र मालपोत कार्यालयले साविक नगर २३ ह. कि.नं. २२,३१,३५ र नगर २३ क्ष को कि.नं. ७७ जग्गा नयाँ नापीको कुन-कुन कित्ता सँग भिड्छ भनी नापी कार्यालय डिल्लीबजार काठमाडौंलाई पत्राचार गरेकोमा उल्लेखित साविक कित्ताका जग्गाहरुको नयाँ नापी (हाल साविक) मा जुन-जुन कित्ता भिड्छ सबै कित्ता पठाउनु पर्ने अनिवार्य भएकोले सोही अनुसार साविक र नयाँ नापीको नक्सा भिडाई जुन-जुन कित्ता भिड्छ सोही अनुसार पत्र तयार गरी पठाईएको हो। साविकका उल्लेखित ४ कित्ता जग्गाहरुमा कुन-कुन कित्ता भिड्ने भनी साविकको फिल्डबुक र नक्सा तथा हाल साविकको नक्सा र फिल्डबुक भिडाई हेर्दा हाल साविकका कित्ता नं. २८० र ३१४ समेत भिड्ने देखिएर नै भिड्ने भनी पत्रमा उल्लेख गरी पठाईएको हो। मैले प्रतिवेदन र पत्र तयार गरी पेश गरीसकेपछी रुजु गर्ने सर्भेक्षक राजेन्द्र प्रसाद मण्डल, प्रमाणित गर्ने नापी अधिकृत मग्नु दत्त र दुर्गादास महर्जनले पनि साविक र नयाँ नापीको नक्सा भिडाई हेर्दा भिडेमा मात्र पत्रमा सहिछाप गरी पठाउने नियमानुसार मैले पेश गरेको पत्रमा उहाँहरुले पनि साविक र नयाँ नापीको नक्सा भिडाई हेरी ठिक छ भनेपछी सोही पत्रमा सहिछाप गरी पेश गरेको हुँ। मालपोत कार्यालय, डिल्लीबजारलाई लेखको पत्रमा एक कित्ता छुट हुन गएकोले मालपोत कार्यालय, डिल्लीबजार तथा गुठी संस्थानलाई पत्र लेख्दा फरक-फरक ब्यहोरा उल्लेख भएको हो। उल्लेखित कार्यमा मेरो बदनियत छैन तर एक कित्ता छुट हुन गए वापत मलाई कानून बमोजिम हुने सजाय भोग्न मञ्जुर छु भन्ने ब्यहोराको प्रतिवादी घमन कुमार कार्कीको बयान।

१६. **प्रतिवादी गोपाल कार्कीको बयान (जग्गा फिर्ता २०४९):**

४ बर्ष भुमि सुधार बिभागमा काम गर्दाको बखतमा २०६० साल तिर १ बर्ष जति मालपोत कार्यालय डिल्लीबजारमा काजमा काम गरेँ। मिति २०६३/०४/०७ गते उक्त कार्यालयमा सरुवा भई सोही मिति देखी २०६५ चैत्र सम्म मालपोत कार्यालय डिल्लीबजारमा कार्यरत रहेको थिँए। तत्कालिन श्री ५ को सरकारले

बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण गरेको सम्बन्धमा मलाई थाहा भएन । ललिता निवास क्याम्प भित्रको जग्गा सरकारी जग्गा हो । नेपाल सरकारले (तत्कालिन श्री ५ को सरकारले) प्रचलित कानून बमोजिम अधिग्रहण गरेको जग्गामा पूर्व जग्गाधनी, मोही भनिएका व्यक्तिहरु तथा गुठी लगायतको कुनै पनि किसिमको हकदैया रहँदैन । मि.नं.१०२४/०४९/५०,मिति २०४९/०७/२५ र मि.नं. १०२५/०४९/५०,मिति २०४९/०९/२३ गतेको मिसिलहरुबाट ललिता निवास क्याम्प भित्रको तत्कालिन श्री ५ को सरकारले अधिग्रहण गरेको जग्गा मध्येको **क्षे.फ. ११२-४-१-०** को जग्गा राणाहरुलाई फिर्ता गरेको भन्ने मैले सुनेको थिएँ । म मालपोत कार्यालय डिल्लीबजारको तामेली फाँटमा कार्यरत रहँदाको अवस्थामा दिपक राज जोशीले मालपोत कार्यालय डिल्लीबजार समेतलाई विपक्षी बनाई सर्वोच्च अदालतमा दायर गरेको दुषित निर्णय एवं लिखतबदर मुद्दाको सिलसिलामा सर्वोच्च अदालतबाट निर्णय मिसिल माग भएकोले उक्त मिसिल ईजलाश समक्ष देखाई फिर्ता ल्याउनको लागि मालपोत कार्यालय डिल्लिबजारको च.नं. ४०२ मिति २०६४/११/३० गतेको पत्रसाथ मैले मि.नं. १०२४ र मि.नं. १०२५ का मिसिलहरु लिई महान्यायाधिवक्ताको कार्यालयमा गई महान्यायाधिवक्ता कार्यालय मार्फत सर्वोच्च अदालतमा लगि मिसिल देखाई फिर्ता लिई कार्यालयमा आएको हुँ । मालपोत कार्यालयबाट निर्णय भएका मिसिलहरु सम्बन्धित फाँटले तामेली फाँटमा बुझाई तामेली फाँटमा सुरक्षित रहने व्यवस्था रहेको र म तत्कालिन अवस्थामा तामेली फाँटको फाँटवाला कर्मचारी भएकाले उक्त मिसिलमा के रहेछ भनी हेर्दा श्री ५ को सरकार मन्त्री परिषदको निर्णय अनुसार श्री ५ को सरकारको नाममा कायम रहेको ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये **क्षे.फ. ११२-४-१-०**को जग्गा सुवर्ण शमसेरका हकवालाहरुलाई फिर्ता गरी नामसारी दाखिला खारेज गर्दाको शुरु टिप्पणी देखि निर्णय समेतको मिसिल र २०६० सालमा उक्त जग्गा हालसाविक हुँदाका सक्कल मिसिल कागजात समेत थिए । मलाई सम्झना भए सम्म उक्त मिसिलको टिप्पणी तत्कालिन खरिदार युक्त प्रसाद श्रेष्ठ, ना.सु. जगत प्रसाद पुडासैनी समेतबाट उठी तहगत रुपमा मालपोत अधिकृत सुरेन्द्र मान कपालीबाट राय सहित मिसिल पेश भई प्रमुख मालपोत अधिकृत कलाधर देउजाबाट टिप्पणी सदर निर्णय भई श्री ५ को सरकारको नाममा कायम रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा सुवर्ण शमसेर राणाका हकवालाहरुको नाममा हक हस्तान्तरण भई गएको हो, उक्त जग्गा बेचबिखन समेतको लागि हालसाबिक आवश्यक पर्ने भएकोले २०६० साल तिर तत्कालिन खरिदार जीवनाथ पोखरेलबाट हालसाबिकको टिप्पणी उठी तहगत रुपमा ना.सु. टिका बहादुर वि.सी., मालपोत अधिकृत हुपेन्द्रमणीके.सी.बाट राय सहित मिसिल पेश भई तत्कालिन प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेबाट टिप्पणी सदर गरी हालसाबिक गर्ने निर्णय भई उल्लेखित जग्गा हालसाबिक भएको हो । मिति २०४७/०२/१४ गते, मिति २०४७/०४/०८ गते, मिति२०४७/०५/०३ गतेकोश्री ५ को सरकार मन्त्रिपरिषदको निर्णयको अपव्याख्या, दुरुपयोग र विपरित समेत गरी मालपोत कार्यालय डिल्लीबजारका तत्कालिन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतका कर्मचारीले आफ्नो पदिय जिम्मेवारीको दुरुपयोग गरेर बदनियत पुर्वक कानून विपरित सुनिती राणा समेतका नाममा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा नामसारी दाखिला खारेज गरेको भन्ने सुनि थाहा पाएको हुँ । च.नं.२६१, मिति २०६४/०९/०९ गते र च.नं.३०८, मिति २०६४/१०/१० गतेको पत्र सम्बन्धमा तत्कालिन मालपोत अधिकृत डोर जंग कार्कीले दस्तखत गर्नु भएको हो । महान्यायाधिवत्ताको कार्यालय, रामशाहपथ, काठमाडौं मार्फत सर्वोच्च अदालतको ईजलाशमा उल्लेखित फायलहरु पेश गरी फिर्ता ल्याउनका लागि खटाईएको मालपोत कार्यालय, डिल्लीबजारको च.नं.४०२, मिति २०६४/११/३० गतेको पत्र र सम्मानित सर्वोच्च अदालतको

च.नं.२, मिति २०६४/११/०२ गतेको पत्रमा भएको हस्तलिपी मेरो आफ्नै हो । उक्त पत्रमा हस्ताक्षर गर्ने फाँटवाला कर्मचारी म स्वयमं हुँ । उक्त पत्रमा प्रमुख मालपोत अधिकृत चन्द्रमान श्रेष्ठको हस्ताक्षर रहेको छ । प्रमुख मालपोत अधिकृत चन्द्रमान श्रेष्ठ तत्कालिन मालपोत कार्यालय डिल्लीबजारको कार्यालय प्रमुख र म फाँटवाला तत्कालिन खरदार रहेको थिँए । मेरो भूमिका सो सययमा मिसिल तामेली फाँटको फाँटवाला हो । मालपोत कार्यालय काठमाडौंको चनं.४०२ को पत्रबाट मिसिल नं.१०२४ र १०२५ मेरो नाममा हस्ते बुझि लिएको हुँ । पत्रमा भएको हस्ताक्षर मेरो हो । उक्त मिसिल १०२४ र १०२५ मिति २०६० सालको हालसाविक सक्कल निर्णय मिसिल सँग फोटोकपी समावेश भएको मिसिल हाल उच्च अदालत गएको हो । त्यहाँबाट फिर्ता आयो आएन मलाई थाहा भएन ।१०२४ र १०२५ को मिसिल लगेपछि यसलाई सुरक्षित र रितपूर्वक राख्ने जिम्मेवारी मेरो हो । मि.नं.१०२४ र १०२५ को नक्कल र अर्को सक्कल मिसिलको सम्बन्धमा सम्मानित सर्वोच्च अदालतबाट कुनै प्रतिक्रिया नआएको र सो मिसिल मैले उक्त मालपोत कार्यालय तामेली फाँटमा दर्ता किताबमा दर्ता गरी फाँटमा आफैले राखेको हुँ । म मालपोत कार्यालय डिल्लीबजारबाटजि.वि.स.को कार्यालय गोरखा सरुवा भई जाँदा मैले तामेली दर्ता किताबमा दर्ता भई आफ्नो जिम्मामा रहेका मिसिलहरुतत्कालिन खरिदार गुरु प्रसाद घिमिरेलाई भर्पाई गरी बुझाएको थिएँ । उल्लेखित १०२४ र १०२५ नं. का मिसिलहरु तामेली फाँटको मिसिल दर्ता किताबमा दर्ता नभएकोले सो सम्बन्धमा बुझ बुझारथमा केही उल्लेख भएन । २०६० सालको हालसाबिक सम्बन्धी मिसिल तत्कालिन अवस्थामा उच्च अदालत पाटनमा पठाईएको हुँदा सोही अदालतमा थियो, फिर्ता आयो, आएन ? मलाई थाहा भएन । मालपोत कार्यालय डिल्लीबजारको तामेली फाँट जिम्मा लिई बसेको अवस्थामा मैले मिसिल १०२४ र १०२५ सुरक्षित राख्नु पर्नेमा त्रुटी भएको हो । उक्त कार्य गैह्-जिम्मेवारी भयो । उक्त मिसिल १०२४ र १०२५ मिति २०६० सालको हाल साविक सक्कल निर्णय मिसिल सँग फोटोकपी समावेश भएको मिसिल हाल उच्च अदालत गएको हो । त्यहाँबाट फिर्ता आयो आएन मलाई थाहा भएन भन्ने ब्यहोराको प्रतिवादी गोपाल कार्कीको बयान ।

**१७. प्रतिवादी लोकहरी घिमिरेको बयान (जग्गा फिर्ता २०४९):**

तत्कालिन श्री ५ को सरकारले बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण गरेको सम्बन्धमा मलाई केही थाहा छैन । सरकारले अधिग्रहण गरेको जग्गामा अन्य कसैको हकदैया रहँदैन । समरजंग कम्पनीको काम आशुतोष भगवान पशुपतिनाथलाई दैनिक ८० वटा र गुह्रेश्वरीलाई फुलको माला उनेर दिने। इन्द्र जात्रा चलाउने,बडा दशैमामौलापुजा गर्ने,वनकाली गौशालामा पुजा गर्ने,काठमाडौं उपत्यका भित्रका सडक अबरुद्ध हुने गरी लडे पडेका रुखहरु कटान गरी उठाई पशुपतिनाथ,गुह्रेश्वरी, पचली भैरव, कमल बिनायक आदीमा उठाईएको रुखको मुढा धुनी जगाउन दिने गरेको थियो । विशेष अवस्थामा राष्ट्र प्रमुखको सवारी हुँदा र विदेशी राष्ट्र प्रमुखहरुको सवारी हुँदा शहर सजाउने तथा शहरकोसडकहरुमा नेपाली तथा पाहुना राष्ट्रहरुकोझण्डा सजाउने कार्य गर्ने र वडा दशैंको बेलामा जिल्ला नुवाकोटको छत्रेदेउरालीबाट काठमाडौं सम्म फुलपाती ल्याई दशै घरमा भित्राउने सम्मको कार्य गर्ने गरेको थियो । काठमाडौं जिल्ला स्थित भोटाहिटी र लैनचौरमा मेरो कार्यकालमा समरजंग कम्पनीको नाममा जग्गाधनी पुर्जा लिई रेकर्ड राख्ने काम गरेको थिएँ । अन्य सम्पत्ति के कहाँ कति थियो थाहा भएन । समरजंग कम्पनीको रेखदेखमा रहेका सरकारी जग्गाहरुको कुत, अधिया बापत प्राप्त हुने/दाखिला हुने नगदी, जिन्सीको अभिलेखतत्कालिनसमरजंग कम्पनीका सहायक लेखापाल बिनोद प्रसाद पौडेलले राख्ने गरेकोले सो सम्बन्धमा निजलाईनै थाहा छ। मलाई थाहा छैन । म समरजंग कम्पनीको कार्यालय प्रमुख पदमा वहालरहँदा उल्लेखित अभिलेखहरु सहायक लेखापाल बिनोद

प्रसाद पौडेलको जिम्मामा रहेकोले म सरुवा भई जाँदा सहायक लेखापालको पनि सरुवा भई सकेकोले उक्त अभिलेख नयाँ आउने सहायक लेखापाल थापा भन्ने (नाम याद भएन) लाई बुझाएको हुनु पर्छ। सो सम्बन्धमा निजलाई थाहा जानकारी होला। मिति २०५१/११/०२ गतेको समरजंग कम्पनी कार्यालय, भोटाहिटीको पत्र देखाउँदा देखें । उक्त पत्रको बन्द बन्दमा भएको दस्तखत मेरो हो हेरि चिनी सनाखत गरीदिएँ उक्त पत्रमा भएको दस्तखत मेरो हो।केन्द्रिय सेवा विभाग, सिंहदरबारको हाल नामथर वतन थाहा नभएको डाइरेक्टरबाट मौखिक आदेश भएकोले मैले  सहायक लेखापाल बिनोद प्रसाद पौडेलले लेखि ल्याए बमोजिम मैले दस्तखत गरीदिएको हो ।मन्त्रीपरिषदको मिति २०४९/०७/२५ गतेको आधारमा जग्गा फिर्ता भएको जानकारी केन्द्रीय सेवा विभागलाई गराएको हो भन्ने ब्यहोराको प्रतिवादी लोकहरी घिमिरेको बयान ।

१८. **<u>प्रतिवादी बिनोद प्रसाद पौडेलको बयान (जग्गा फिर्ता २०४९):</u>**

तत्कालिन श्री ५ को सरकारले वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण गरेको सम्बन्धमा मलाई केही थाहा छैन । उक्त जग्गा सरकारी हो भन्ने हाल आएर थाहा पाएँ । ऐनमा भएको व्यबस्था बारेमलाई जानकारी छैन । तर नेपाल सरकारको नाममा रहेको सरकारी जग्गामा मोही वा गुठी जनाउन मिल्दैन । मलाई सरकारी लिखत कागजात किर्ते गर्ने कार्य कानूनबिपरित हो भन्ने थाहा छ । तर मैले झुट्टा ब्यहोराको कुनै पनि कागज बनाएको छैन र अर्काको हक जाने र झुट्टा कागजात बनाउने कुनै पनि किर्ते काम गरेको छैन । मैले कुनै किर्ते कार्य नगरेकोले मलाई सजाय हुनुपर्ने होइन म समरजंग कम्पनीमा मिति २०४३ साल देखि २०५१ सालसम्म कार्यरत थिए । समरजंग कम्पनीले सरकारी समारोह तथा विदेशी पाहुनाहरुको नेपाल भ्रमण हुँदा सडकको दायाँ बायाँ रहेको पोलमा राष्ट्रिय झण्डा राख्ने, सडकका दाँयाबाँयाकालडे पडेका रुखको ब्यबस्थापन गर्ने ।बिभिन्न राष्ट्रिय पर्वहरुमा परेड खेलाउने, ईन्द्र जात्राको लिंग, चिरठड्याउने र ढाल्ने कार्य, फूलपाती भित्राउने , पशुपतिनाथ र गुहेश्वरीमा फूलको माला उपलब्ध गराउने,आदी कार्य गर्दथ्यो ।समरजंग कम्पनीमा म लेखा सम्बन्धी कार्य गर्ने सह-लेखापाल थिए । सह-लेखापालको रुपमा दैनिक परि आएका आर्थिक प्रशासन सम्बन्धिकार्य,कर्मचारीकोतलब भत्ता भुक्तानी गर्ने, फाँटबारी तयार गर्ने ,लेखा परिक्षण गराउने आदी कार्य गर्दथे। म समरजंग कम्पनीमा कार्यरत हुँदा श्याम राज ध्वज राना र लोकहरी घिमिरे कार्यालय प्रमुख हुनुहुन्थ्यो । म समरजंग कम्पनीमा कार्यरत रहदा ललिता निवास सम्बन्धी महत्वपूर्णकागजातहरुकँहा थियो मलाई जानकारी छैन । समरजंग कम्पनीको रेखदेखमा रहेका सरकारी जग्गाहरुको कुत बापत बार्षिक रुपमा दिने गरी प्रति रोपनी अन्दाजी १८ पाथी धान र मकै अन्दाजी १० पाथिको दरले कुतबाली बुझाउने गरी तोकिएको थियो । उक्त कुतबापतको अन्नको रकम निर्धारण गर्न अञ्चलाधिस कार्यालयमा बैठक बसि निर्धारण गरीन्थ्यो । बैठकबाट दर निर्धारण भइ सकेपछी प्राप्त हुने कुतबाली बापतको रकम नियमानुसार नेपाल सरकारको राजश्व खातामा जम्मा गरीने गरीन्थ्यो । उक्त लेखासम्बन्धी अभिलेख मैरै जिम्मामा रहन्छ। समरजंग कम्पनीको कार्यालयको सह-लेखापाल पदमा कार्यरत रहँदा मैले राखेको अभिलेख सरुवा भई जाँदा उल्लेखित अभिलेखहरुकस्लाई बुझाए हाल याद भएन ।म सरुवा भइ जाँदा कार्यालयमा भएको लेखाको अभिलेख दुरुस्त बुझाएकोथिएँ । समरजंग कम्पनीकोम सह लेखापाल भएको कारण लेखा सम्बन्धी अभिलेखहरु मात्र मेरो जिम्मामा रहन्थ्यो । अन्य अभिलेखहरुप्रशासन/ प्रमुखको जिम्मामा रहनु पर्ने हो । मेरो कारणबाट ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा व्यक्ति विशेषको नाममा गएको होईन । सो कार्यमा मेरो भूमिका रहँदैन । उक्त पत्र मैले केन्द्रीय सेवा विभागको माग बमोजिम तत्कालिनकार्यलय प्रमुख लोकहरि घिमिरेको निर्देशन बमोजिम तयार गरेको हो । समरजंग कम्पनी कार्यालयको सह-लेखापाल भई काम गर्ने क्रममा ललिता निवास क्याम्प भित्रको कुनै पनि

जग्गा सम्बन्धी अभिलेख तथा जग्गा सम्बन्धिबिबरणहरु, पुर्जाहरु मेरो जिम्मामा थिएन र उक्त अभिलेख तथा जग्गा सम्बन्धी विवरण मैले देखेको थिईन । कार्यालयमा रहेको मोही सम्बन्धी विवरणको आधारमा कुत बापतको रकम बुझि नियमानुसार राजश्व खातामा जम्मा गरी सोको फाँटवारी समेत तालुक निकायमा पठाउने गरेको थिएँ। मिति २०५९/०४/१० र २०६०।०४।०९ को पत्रको सम्बन्धमा मलाई थाहा छैन। उक्त समयमा म अन्यत्र कार्यालय कौशितोषाखाना कार्यालयमा कार्यरत थिएँ। हालैदेखिको बकस बाट जग्गा लिने कर्मचारी र निजहरुको आफन्त कसैसँग चिनजान छैन । राणाहरुलाई ललिता निवास क्याम्पको सरकारी जग्गा व्यक्ति विशेषको नाममा ना.सा.दा.खा. गराउने कार्यमा मेरो भूमिका छैन। अन्य कर्मचारीहरुको भूमिका बारेमा मलाई जानकारी भएन भन्ने समेत व्यहोराको प्रतिवादी बिनोद प्रसाद पौडेलको बयान।

१९. **प्रतिवादी योगराज पौडेलको बयान (जग्गा फिर्ता २०४९):**

म तीन महिनाको लागि २०६१ सालको जेठ ४ गते देखि २०६१ सालको श्रावण मसान्तसम्ममालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंमा काजमा खटिएको थिएँ। सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता कायम हुन सक्दैन। ललिता निवास क्याम्प भित्रको जग्गाको विषयमा मलाई केही पनि जानकारी छैन। मैले आजसम्म सरकारी छाप तथा दस्तखत कीर्ते गरेको छैन । मलाई देखाईएका कागजात तथा त्यसमा भएको व्यहोरा र दस्तखत देखाउँदा हेरी देखें, उक्त व्यहोराको कागजातमा लेखिएको हस्तलिपि (अंक र अक्षरहरु) मैले लेखेको होईन। उक्त अंक र अक्षरहरु मेरा होईनन्। उल्लेखित कागजातमा भएका दस्तखतहरु मध्ये "नापी शाखालाई लेख्ने मनासिव देखि आदेशको लागि पेश गरेको छु"। भन्ने व्यहोराको तल भएको वायाँबाट पहिलो दस्तखतको दायाँ तर्फ भएको पहिलो दस्तखत मेरो जस्तो देखिन्छ । त्यस दस्तखतको तल मिति २०६१/०३/१४ लेखिएको छ। उक्त कागजातहरुमा भएका अन्य दस्तखतहरु को-कसका हुन्, मलाई थाहा भएन । मेरो जस्तो देखिने उक्त दस्तखत हाल साविकका सन्दर्भमा नापी शाखालाई लेख्ने मनासिव देखि आदेशको लागि पेश गरिएको हो। उल्लेखित व्यहोराको कागजात तयार मैले गरेको होईन। उक्त समयमा म मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंमा नायव सुब्बा पदमा कार्यरत थिएँ। उक्त समय तथा कार्यालयमा कार्यालय प्रमुखले तोके बमोजिमको कानून बमोजिम कार्य सम्पादन गर्ने मेरो जिम्मेवारी थियो । उल्लेखित कागजातमा भएका दस्तखतहरु मध्ये "नापी शाखालाई लेख्ने मनासिव देखि आदेशको लागि पेश गरेको छु"। भन्ने व्यहोराको तल भएको वायाँबाट पहिलो दस्तखतको दायाँ तर्फ भएको पहिलो दस्तखत मेरो जस्तो देखिन्छ। त्यस दस्तखतको तल मिति २०६१/०३/१४ लेखिएको छ । अन्य कागजातहरुमा भएका अन्य दस्तखतहरु को कसका हुन्, मलाई थाहा भएन भन्ने ब्यहोराको प्रतिवादी योगराज पौडेलको बयान।

२०. **प्रतिवादी नारायण राज मिश्रको बयान (जग्गा फिर्ता २०४९):**

म मालपोत कार्यालय काठमाडौं डिल्लीबजारमा २०६० साल श्रावण देखि २०६२ साल श्रावण सम्म कार्यरत रहेको थिएँ। २० वर्ष अगाडी कार्यरत रहेकोले एकिन मिति खुलाउन सकिन। तत्कालिन श्री ५ को सरकारले वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण गरेको सम्बन्धमा मलाई यस बारेमा केही थाहा जानकारी छैन ।उक्त जग्गा सरकारी जग्गा हो वा होईन भन्ने सम्बन्धमा समेत मलाई केही थाहा छैन । सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता कायम हुन सक्दैन। तर नेपाल सरकारले चाहेमा विशेष निर्णय गरी विभिन्न निर्णयबाट सुकुम्बासी वा अन्य प्रतिष्ठान निकायको नाममा दिन सक्छ। नेपाल सरकार (तत्कालिन श्री ५ को सरकार) ले प्रचलित कानून बमोजिम अधिग्रहण गरेको जग्गामा पूर्व जग्गाधनी, मोही भनिएका व्यक्तिहरु तथा गुठी लगायतको कुनै पनि किसिमको हकदैया रहँदैन । मिति २०२१ सालको नापीको फिल्डबुकमा

किसानको ब्यहोराको महलमा “ श्री ५ सरकारको तहविलमाअदिया तिरी खाएको हो ” भनी उल्लेख गरिएको देखिन्छ। मिति २०४७/१२/६ समेतमा भएको दोश्रो नापीको फिल्डबुकमा “जग्गावालाको नामथर र वतन तथा बाबु बाजेको नाम महलमा” श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको सम्बन्धमा स्पष्ट कुरा नापजाँच गर्ने अधिकारीबाट खुल्न सक्ने भएकोले मलाई यस सम्बन्धमा पूर्ण जानकारी छैन । नेपाल सरकारले पूर्जा पाएको सरकारी जग्गामा सामान्यतमोही र गुठी जनाउन हुदैनर मिल्दैन। ललिता निवास क्याम्प भित्रको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको जग्गा झुठ्ठा व्यहोराको कागज मैले बनाएकै छैन। ब्यक्ति विशेषको नाममा श्रेस्तापूर्जा कायम भएको जग्गाको निबेदकद्वारा हालसाबिक एवं श्रेस्ताअध्याबधिक माग भएको जग्गाको हालसाबिक गर्न अधिकार प्राप्त अधिकारीबाट भएको तोक आदेश बमोजिम प्रकृया पुरा गरी देखिएको ब्यहोराकोटिप्पणी सम्म उठाई पेश गरेको हुँ। मैले कीर्ते गरेको छैन।त्यसैले मलाई कुनै सजाँय हुनु पर्ने अवस्था छैन। मिसिल संलग्न मिति २०६० फागुन ३० गतेको सर्जमिन मुचुल्का पाना २ (दुई) देखाउँदा देखें। उक्त मुचुल्काको काम तामेल गर्ने महलमा भएको ख.नारायणराज मिश्रको नाममा भएको दस्तखत मेरै दस्तखत हो हेरी चिनि सनाखत गरी दिएँ। उक्त सर्जमिन मुचुल्का हालसाबिक तथा श्रेस्ताअध्यावधिक गर्ने सिलसिलामा उक्त जग्गा भएको स्थानमानै गई स्थानियप्रतिनिधी तथा साँध सँधियारको रोहवरमा मैले लेखि तयार गरेको मुचुल्का हो। उक्त जग्गा नयाँ नापीमा के-कसरी समरजंग कम्पनीको नाममा भनी फिल्डबुकमा उल्लेख भएको हो सो बारेमा मलाई जानकारी छैन। नाप नक्सा हुनु पूर्वको अवस्थामा जग्गाधनी रेखा घिमिरेको नाममा रहेको मालपोत कार्यालय डिल्लीबजारको श्रेस्ता र पूर्जामा भिडेको भनी नापी शाखाबाट प्राप्त भएको विवरणको आधारमा उक्त जग्गाको हाल साबिकको क्रममा यथार्थ व्यहोरा बुझ्न भनी कार्यालयबाट भएको सर्जमिन आदेश अनुसार मैले सर्जमिन मुचुल्का तयार पारेको हुँ । उक्त सर्जमिन मुचुल्कामा तयार गर्नु पुर्व नापी शाखाबाट साबिक र हालको जग्गाको श्रोत एकिन गरी नयाँ नापीकोउल्लेखितमा भिड्छ भनी प्राप्त भएको विवरणको आधारमा वडा अध्ययक्ष, वडा सचिव समेतको रोहवरमा जग्गा भएको स्थानमानै गई साँध सँधियार समेतलाई राखि यथार्थ विवरणको साँचो मुचुल्का तयार गरेको हुँ। मालपोत कार्यालय डिल्लीबजारबाट माग भएको विवरण उल्लेखित कित्तामा भिड्छ भनी विवरण दिने काम नापी शाखाबाट हुन्छ। यसकारण सोही आधारमा अधिकार प्राप्त अधिकारीको आदेश अनुसार म समेतले उक्त कार्य सम्पन्न गरेको हुँ। मैले केवल जग्गाधनीले आफ्नो श्रेस्तापूर्जा अनुसार माग गरेको हाल साबिक एवं श्रेस्ता अध्याबधिक प्रकृयाको लागि आफ्नो पदिय दायित्व अनुसारको कार्य सम्पन्न गरेको मात्र हुँ। मैले कुनै अपराधिक सँगठन बनाई आफुले फाईदा लिएको छैन भन्ने व्यहोराको प्रतिवादी नारायण राज मिश्रको बयान ।

२१. **प्रतिवादी अरुण कुमार श्रेष्ठको बयान (जग्गा फिर्ता २०४९)-**

सरकारी जग्गामा मोही र गुठी जनाउन मिल्दैन, तत्कालिन श्री ५ को सरकारले वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण गरेको सम्बन्धमा मलाई केही थाहा छैन । मिति २०२१ सालको नापीको फिल्डबुकमा किसानको ब्यहोराको महलमा “ श्री ५ सरकारको तहविलमा अदिया तिरी खाएको हो ” भनी उल्लेख गरिएको देखिन्छ। मिति २०४७/१२/६ समेतमा भएको दोश्रो नापीको फिल्डबुकमा “जग्गावालाको नामथर र वतन तथा बाबु बाजेको नाम महलमा” श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको सम्बन्धमा मलाई केही थाहा छैन। सरकारी जग्गामा गुठी जनाउन मिल्दैन र प्रचलित कानून बमोजिम अधिग्रहण गरेको जग्गामा पूर्व जग्गाधनी, मोही भनिएका व्यक्तिहरु तथा गुठी लगायतको कुनै किसिमको हकदैया रहँदैन। मैले जग्गा नापजाँच गर्दा जग्गा नापजाँच गराउने व्यक्तिहरुले समरजंग कम्पनीलाई बाली तिरेको रसिद र निजहरुले

भोगचलन गरेको जग्गा देखाए अनुसारको जग्गाको  मैले नापजाँच गरेको थिएँ। अन्य कुरा थाहा छैन मैले जग्गा नापजाँच गर्दा जग्गा नापजाँच गराउने व्यक्तिहरुले समरजंग कम्पनीलाई बाली तिरेको रसिद र निजहरुले भोगचलन गरेको जग्गा देखाए अनुसारको जग्गाको  मैले नापजाँच गरेको थिएँ। मैले नापजाँच गर्ने क्रममा व्यक्तिहरुले देखाएको बाली तिरेको रसिदको आधारमा ब्यक्तिको नाम उल्लेख गरेको थिएँ। मलाई तत्कालिन समयमा ललिता निवास क्याम्प भित्रको जग्गा सरकारी जग्गा हो भन्ने थाहा थिएन। समरजंग कम्पनी भन्ने सरकारी कम्पनी भन्ने थाहा नभएर जग्गा नापजाँच गराउने ब्यक्तिले देखाएको बाली तिरेको रसिदको आधारमा मोहीहरुको नाम उल्लेख हुन गएको हो।  का.जि.का.म.पा.वडा नं.४ वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीमा म बाहेक अन्य को को कर्मचारीहरु थिए याद छैन। उल्लेखित नक्सा सिट नं. १०२-१०२५-१४, नक्सा सिट नं. १०२-१०२५-१५ र नक्सा सिट नं. १०२-१०२६-१६ को नक्सा  म समेतले तयार पारेको हो, झुट्टा व्यहोराको कागज बनाइ अर्काको हक जाने र आफूलाई फाइदा हुने गरी काम गरी त्यस्तो झुट्टा कागजबाट काम कीर्ते गरेको ठहर्छ भन्ने थाहा थियो। मैले कुनै झुठा व्यहोरा को कागज बनाइको छैन। मैले केबल जग्गा नापजाँच गराउने व्यक्तिहरुले समरजंग कम्पनीलाई बाली तिरेको रसिद र निजहरुले भोगचलन गरेको जग्गा देखाए अनुसारको जग्गाको  मैले नापजाँच गरी जग्गा भोग चलन गर्ने मानिसहरुको नाम उल्लेख गरेको थिएँ।  मैले झुठो र कीर्ते समेतको फरक व्यहोराको प्रस्ताव पेश गरी कानूनको दुरुपयोग गरी बदनियत पूर्वक राज्यलाई हानी हुने र ब्यक्ति विशेषलाई फाईदा हुने गरी आपराधिक सँगठन बनाई सँगठित भई अपराध गर्नका लागि पिरामिड शैलीमा तहगत जिम्मेवारीहरु बाँडफाँड गरी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना गरी दुरुपयोग गरेको छैन भन्ने ब्यहोराको प्रतिवादी अरुण कुमार श्रेष्ठको बयान।

२२. **प्रतिवादी ध्रुव प्रसाद अर्यालको बयान (जग्गा फिर्ता २०४९):**

ललिता निवास प्रकरण सम्बन्धी उठान भएपछि मात्र मलाई पत्र पत्रिका मार्फत थाहा भयो। सो सम्बन्धमा प्रकाशित सुचना मिसिल संलग्न कागजबाट थाहा जानकारी पाएँ। प्रकाशित सुचना कार्यान्वयन गर्ने मालपोत कार्यालयमा म कार्यरत नरहेकोले यस विषयमा जानकारी भएन। पुन: नापीको क्षेत्र भनेको तत्कालिनश्रेस्ता पुर्जा कायम भएको हकमा मात्र अध्यावधिक गर्ने कार्य भएकोले अन्य जानकारी भएन। २०२५ साल पछि नाप नक्सा भएको सरकारी जग्गामा मोही नलाग्ने कुरा ऐन व्यवस्था छ। २०२५ साल पछि कुनै पनि सरकारी जग्गामा मोही  लाग्दैन। २०२५ साल भन्दा पहिले फिल्डबुकमा कायम भएका जग्गाधनी मोहीको हकमा के कसो हुने हो मलाई जानकारी भएन। गुठी जनाउन मिल्ने नमिल्ने सम्बन्धमा पनि मलाई केही जानकारी छैन। जग्गा नाप जाँचको क्रममा नापी गोश्वारा तथा नापी कार्यालयले जग्गा नापजाँच ऐन २०१९ को अधिनमा रही कार्य सम्पादन गर्ने गरेको छ। तत्कालिन श्री ५ को सरकारले सूचना निकाली अधिग्रहण गरेको जग्गा श्री ५ को सरकारको नाममा कायम हुनु पर्ने हो। सो कायम गर्ने सम्बन्धमा सम्बन्धी मालपोत कार्यालयबाट हुनु पर्ने भएकोले भए नभएको विषयमा मलाई जानकारी भएन। २०४७ सालको फिल्ड नापीको सम्बन्धमा म उक्त कार्यालयमा कार्यरत नभएको कारणले के कसो भएको हो मलाई जानकारी छैन। सम्बन्धित सरोकारवालालाई नै जानकारी होला। नेपाल सरकार (तत्कालिन श्री ५ को सरकार) ले प्रचलित कानून बमोजिम अधिग्रहण गरेको जग्गामा पूर्व जग्गाधनी, मोही भनिएका व्यक्तिहरु तथा गुठी लगायतको कुनै पनि किसिमको हकदैया रहन्छ वा रहँदैन भन्ने सम्बन्धमागुठी कायम हुने सम्बन्धमा मेरो कार्यक्षेत्र नभएकोले अन्य कुरा थाहा भएन।

सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता कायम हुन सक्दैन। उक्त कुरा जग्गा नापजाँच ऐन २०१९ मा समेत उल्लेख छ। का.जि.का.म.पा.वडा नं.४ वालुवाटार स्थितमा रहेको ललिता निवास क्याम्प भित्रको जग्गा मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९, ३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते नापी हुँदा म तत्कालिन ३ नम्बर नापी गोश्वारामा कार्यारत नै नरहेको ब्यहोरा अनुरोध छ। तत्कालिन नापी कार्यमा म संलग्न नभएकोले मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको सम्बन्धमा जानकारी भएन। तत्कालिन नापी कार्यमा म संलग्न नभएकोले नापीमा खटिएका कर्मचारीहरु, निजहरुको भुमिका,मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको सम्बन्धमा जानकारी भएन। उक्त ललिता निवास क्याम्प भित्रको जग्गा नापजाँच हुँदा मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९, ३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते म तत्कालिन ३ नम्बर नापी गोश्वारमा कार्यरत थिइन। उक्त मितिमा म खगोल तथा भू मापन महाशाखामा रा.प.अनंकित प्रथम प्राविधिक कम्प्यूटर पदमा कार्यरत भई सो अबधिमा सोही कार्यालयबाट १ बर्षे जुनियर नापी तालिममा सहभागिताको लागि नापी तालिम केन्द्रमा हाजिरमा थिए। नापी गोश्वाराले उक्त नक्सा, फिल्डबुक, प्लटरजिष्ट्रर आदी नापी कार्यालय डिल्लिबजारमा बुझाउने समयमा म कार्यरत भएकोले ट्रेस नक्सामा मात्रै मेरो नाम उल्लेख भएको देखियो। उक्त नाप नक्साको मिति २०४७/२०४८ मा उक्त कार्यालयमा नभएकोले यस विषयमा मलाई जानकारी भएन र उक्त नक्सामा मैले दस्तखत समेत गरेको छैन भन्ने ब्यहोराको प्रतिवादी ध्रुव प्रसाद अर्यालको बयान।

२३. **<u>प्रतिवादी रमेश कुमार पोखरेलको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

म समरजंग कम्पनीको कार्यालय प्रमुखको रुपमा २०६९ जेष्ठ देखी २०७१ असार महिना सम्म कार्यरत थिएँ। उक्त कार्यालयमा दरबन्दी धेरै जनाको दरबन्दी भएतापनि २०/२५ जना कर्मचारी कार्यरत थिए। सो मध्ये एक जना ना.सु.स्तरको कार्यालय प्रमुख, १ जना लेखापाल, १ जना खरिदार र बाँकी कार्यालय सहयोगी स्तरका कर्मचारीहरु थिए। म कार्यालय प्रमुख रहँदा मेरो जिम्मेवारी स्वदेश तथा विदेशका विशिष्ट ब्यक्तिहरुको सवारी हुँदा तोकिएको स्थानमा राष्ट्रिय झण्डा राख्ने तथा झिक्ने काम हुन्थ्यो। प्रत्येक बर्षको बडा दशैमा रत्नपार्क, ईशानदेबी, असन, ईन्द्रचोक लगायतमा स्थाहरुमा बोकाहरु तथा राँगा बलि दिई पुजा गर्ने काम हुन्थ्यो। अशान्ति तथा कुनै प्राकृतिक बिपत्ती नहोस भनी प्रत्येक बर्षको चैत्र महिनामा बोका बलि दिई पूजा गर्ने काम गरीन्थ्यो र ईन्द्र जात्रामा रथ तान्ने कार्यमा आवश्यक सहयोग गर्ने काम हुन्थ्यो। समरजंग कम्पनीको कार्यालय भोटाहिटीमा अवस्थित थियो। सो कार्यालय गृह मन्त्रालय अन्तर्गतको कार्यालय थियो। हाल सिंहदरवार स्थित गृह मन्त्रालयमा रहेको छ। म भन्दा अगाडीका कार्यालय प्रमुख चिरन्जिवी अधिकारी थिए र निज भन्दा अगाडी अर्जुन भण्डारी र लोकहरि घिमिरे थिए। म भन्दा पछाडी नायव सुब्बा प्रकाश पन्त कार्यालय प्रमुख थिएँ। म कार्यालय प्रमुख हुँदाका बखत नेपाल सरकार समरजंग कम्पनीको नाममा छ, छैन भन्ने कुरा म भन्दा अगाडीका कार्यालय प्रमुख चिरन्जिवी अधिकारीले मलाई नभनेको र कार्यालयमा रहेका अन्य कर्मचारीहरुले समेत सो कुराको जानकारी मलाई नगराएको साथै कार्यालयमा उक्त जग्गाको जग्गाधनी श्रेस्ता लगायतको अभिलेख समेत नभएको हुँदा का.जि. का.म.न.पा. वडा नं. ४ वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा नेपाल सरकार समरजंग कम्पनीको नाममा रहे नरेको मलाई थाहा भएन। म कार्यालय प्रमुख रहदा का.जि. का.म.न.पा. वडा नं. ४ स्थित वालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गाहरुको कुत समरजंग

कम्पनी कार्यालय भोटाहिटीले बुझ्ने गरेको थिएन । बिगतमा समरगंज कम्पनी कार्यालयले कुत बुझेको अभिलेख कार्यालयमा नरहेको हुँदा बिगतमा के कसो भएको थियो मलाई थाहा भएन । मिसिल संलग्न रहेको समरजंग कम्पनीको मिति २०५९।०४।१० गतेको पत्र देखाउदा देखिपाएँ । उक्त समयमा समरजंग कम्पनीको कार्यालय प्रमुख अर्जुन भण्डारी थिए । उक्त पत्रमा तत्कालीन कार्यालय प्रमुख अर्जुन भण्डारीले गरेको हुनुपर्छ । पत्र तयार गर्दा को कस्ले खेस्रा तयार गरे निज अर्जुन भण्डारीलाई नै थाहा हुनुपर्छ । प्रकाशित गरिएको हकदावी सम्बन्धी ३५ दिने सार्वजनिक सूचना प्राप्त भए पश्चात सरकारी जग्गाको हकदावी गर्न जानु पर्ने दायित्व मेरो हो तर सो प्रकाशित गरिएको हकदावी सम्बन्धी ३५ दिने सार्वजनिक सूचना मेरो कार्यालयमा टाँस भएन । उक्त सूचना कहाँ कहाँ टाँस भयो मलाई थाहा भएन सोही कारण हकदावी गर्न नसकिएको हो । गुठी तहसिल शाखा कार्यालय काठमाडौंबाट मिति २०६९/०४/१२ गते प्रकाशित गरिएको हकदावी सम्बन्धी ३५ दिने सार्वजनिक सूचना गो.प. मा प्रकाशित सूचना, गोरखापत्र पढ्ने बानी नभएको र उल्लेखित ब्यहोरा प्रकाशित भएको सूचना गुठी तहसिल शाखा कार्यालय काठमाडौंले समरजंग कार्यालय भोटाहिटीमा उपलब्ध नगराएकोले हकदावी हुन नसकेको हो । बि.स.१९८७ को लालमोहर, पहिलो नापीको फिल्डबुक, पहिलो नापीको श्रेस्ता, दोश्रो नापीको श्रेस्ता, हा.नं.४५६ को लगत, बि.स. २०२३/६/२३ मा बागमती अंचल कार्यालयबाट मोहीयानी हक नमागेता पनि कानून बमोजिम कुत बुझाई ५७ जवानलाई कमाई खान दिनु भन्ने समेत ब्यहोराको समरजंग कम्पनीलाई लेखेको पत्र धेरै बर्ष अगाडीको भएको र सो पत्र अभिलेख सम्बन्धी मलाई कोही कसैले जानकारी नगराएको हुँदा हकदावी हुन नसकेको हो । कुत सम्बन्धीको विवरण माथि उल्लेख गरीसकेको छु । म कार्यालयबाट रवाना भई जाँदा ना.सु. प्रकाश पन्तलाई छोडि गएको हुँ । तत्कालीन कार्यालय प्रमुख अर्जुन भण्डारीले ब्यक्तिगत महत्वकांक्षा राखी माथि प्रश्नमा उल्लेखित ब्यक्तिहरुसँग भटेघाट गरी उनिहरुको ईच्छा अनुसारको कार्य गरेको र पछि कोहि कसैबाट त्यसको विपरित नहोस् भनी कार्यालयका सो जग्गाहरुसँग सम्बन्धित सम्पूर्ण अभिलेखहरु नियोजित तवरले गायव गरिएको हुन सक्ने भएको हुँदा यसमा कानून बमोजिम होस् । १९६३ सालको लगत र १९८७ सालको लालमोहरको बारेमा मलाई केहि थाहा छैन । मोहीहरु देव नारायण महर्जन, द्वारिकामान महर्जन, संजय कुमार महर्जन, सकुलानन्द महर्जन, श्रीमती मोहन महर्जनलाई म चिन्दिनँ । प्रतिवादीहरु राम कुमार सुबेदी, सोभा कान्त ढकाल, माधबी सुबेदी र उमा कुमारी ढकाललाई म चिन्दिनँ । के कसरी श्रेस्ता तयार गरी हाल निजहरुको नाममा जग्गा आएको हो मलाई केहि थाहा छैन । काठमाडौं बालुवाटार स्थित ललिता निवास क्याम्पमा पशुपति टिकिन्छा गुठी अस्तित्वमा भए नभएको मलाई थाहा छैन । मैले त्यस्तो ग्रैहकानूनी तथा कीर्ते कार्य गरेको छैन । मैले कुनै गलत काम नगरेको हुँदा मलाई सजाय हुनुपर्ने होईन । यस कसूरमा संलग्न कर्मचारीहरु, मोहीहरु, साक्षीहरु, जग्गा प्राप्त गर्ने ब्यक्तिहरु समेतलाई कानून बमोजिम होस् । यस मुद्दामा म स्वयमको कुनै संलग्नता नरहेको हुँदा कानून बमोजिम कारवाही हुनुपर्ने होईन । समरजंग कम्पनीको जिम्मामा रहेको का.जि. का.म.न.पा. वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गाको अभिलेख समरजंग कार्यालयमा सुरक्षित नरहेको हुँदा हकदाबी हुन नसकेको हो । प्रस्तुत कसूरमा मैले कुनै पनि किसिमको नगद वा जिन्सी लिई लाभ लिने कार्य गरेको छैन । मैले कार्यालयको तोकिएको काम जिम्मेवारी पुर्बक गर्ने गरेको थिएँ । नियोजित रुपमा राम कुमार सुवेदी समेतले कीर्ते कागजातहरु तयार गरी उल्लेखित ४-१४-०३-२ क्षेत्रफलको जग्गा निज राम कुमार सुवेदी समेतको नाममा जग्गा श्रेस्ता कायम गर्ने कार्यमा संलग्न ब्यक्तिहरु र कर्मचारीहरु समेतको विगो रकम तिर्ने दायित्व हो भन्ने ब्यहोराको प्रतिवादी रमेश कुमार पोखरेलको बयान ।

**२४. प्रतिवादी सिपिका खेतानको बयान (जग्गा फिर्ता २०४९):**

नेपालमा जग्गा सम्बन्धी प्रावधानहरु बारे मलाई थाहा छैन । नेपाल सरकारको स्वामित्वमा रहेका जग्गा जमीन व्यक्ति विशेषले खरिद बिक्री गर्न सक्दैन भन्ने थाहा छ । ललिता निवास क्याम्प भित्र एक ढिक्का जग्गा विकास तथा प्लटिङ गरी बिक्रिमा रहेको जग्गाहरु मध्ये एउटा प्लट घडेरी बनाउनको निमित्त मैले खरिद गरेको हो । उक्त घडेरी डोर मार्फत रजिष्ट्रेसन पास गर्दा ४ वटा कित्ता र ४ जना व्यक्तिको नाममा रहेको थाहा भएको थियो । सम्बन्धित कित्ताका जग्गाधनीलाई जग्गाको मूल्य चुक्ता गरी रजिष्ट्रेसन पास गरी मैले खरिद गरेको हो । मीन बहादुर गुरुङ लगायतका जग्गाधनीहरुसँग सोही बेला पहिलो पटक भेट भएको हो । मैले जग्गा खरिद गर्दा अन्य व्यक्तिहरुले पनि डोर मार्फत जग्गा खरिद गरेको देखेको थिएँ । मीन बहादुर गुरुङ बाहेक अन्य जग्गाधनीहरु को थिए हाल मलाई याद भएन । मेरो नाममा हाल कायम रहेको जग्गा करिव १५/२० (पन्ध्र/ बीस) लाखमा खरिद गरेको जस्तो लाग्छ, खरिद मूल्य हाल बयानको क्रममा एकीन भएन । ललिता निवास क्याम्प भित्रको उल्लेखित कित्ता नं भएका जग्गाहरुहामीले घर निर्माण गर्ने प्रयोजनको लागि खरिद गरेका थियौं । खरिद गर्दाको बखत उक्त जग्गामा बाटो खुलाई साँध सिमाना छुट्याई ईंटाको पर्खाल लगाईएको थियो । हाल पनि म मैले खरिद गरेको जग्गाको सिमाना एकिन गर्न सक्छु । मैले खरिद गरेको जग्गाको ढिक्कामा छुट्टै आवास क्षेत्रको स्वरुप दिई आफ्नै कोलोनीको गेटको निर्माण भएको थियो । मेरो नाममा खरिद गरेको जग्गामा जाने बाटो थियो । जग्गा पास गर्नको लागि घर बाटो सिफारिस लिए नलिएको मलाई थाहा छैन । ललिता निवास क्याम्प भित्रको जग्गा सरकारी जग्गा हो र त्यसमा विवाद रहेको भन्ने कतैबाट थाहा नभएको कारण मैले खरिद गरेको हो । रजिष्ट्रेसन पास गर्दाको समयमा पनि कुनै प्रकारको शंकास्पदक्रियाकलापहरु नदेखिएको हुनाले उक्त जग्गा सफा भएको विश्वस्त थियौं । उक्त ढिक्का जग्गामा विकासको काम (बाटो, ढल, माटो भर्ने, सिमाना छुट्याई पर्खाल लगाउने) महिनौं देखि एकनासले कुनै बाधा विरोध नभई कार्य भई रहेको थियो । सोही कारण हामीलाई कहीं कतै गलत काम भई रहेको भन्ने शंका भएन । झुठ्ठो व्यहोराको कीर्ते कागज र प्रमाण खडा गरी हिनामिना गर्ने कार्यमा संलग्न व्यक्तिहरु सम्बन्धमा मलाई थाहा भएन । मिति २०७६/१०/२६ गते कुमार रेग्मीले खरिद गरेको जग्गा नेपाल सरकारलाई फिर्ता गरेको भन्ने पक्राउ परे पश्चात थाहा पाएको हुँ । ललिता निवास क्याम्प भित्रको जग्गा सम्बन्धमा वर्षौं देखि विभिन्न निकायबाट अनुसन्धान भई रहेको छ । ललिता निवास क्याम्प भित्रको मैले समेत खरिद गरेको जग्गा नेपाल सरकारको नै हो जस्तो मलाई आभास भएको छ । सरकारको जग्गा म नियमानुसार फिर्ता गर्न राजी छु । मीन बहादुर गुरुङ समेतले विकास गरी जग्गा बिक्रीको लागि राखिएको विभिन्न माध्यमबाट जानकारी प्राप्त भए पछी उक्त जग्गा मैले खरिद गरेको हो । खरिद गर्दाको दिनमा मात्र पहिलो पटक मीन बहादुर गुरुङ र अन्य जग्गाधनीहरुसँग भेट भएको हो । म कुनै सँगठित संस्थामा आवद्ध छैन । मैले जग्गा सम्बन्धित जग्गाधनीहरुसँग आफ्नो व्यक्तिगत नाममा खरिद गरेको हो । खरिद गर्दाको बखत उक्त स्थानमा जग्गाहरु को कसले खरिद गरे र को कसले बिक्री गरे, मलाई थाहा थिएन । हाल अनुसन्धानको क्रममा आए पछी मात्र हाम्रो समुदायका अन्य व्यक्तिहरुले पनि उक्त स्थानमा जग्गा खरिद गरेको कुरा थाहा भयो भन्ने ब्यहोराको प्रतिवादी सिपिका खेतानको बयान ।

**२५. प्रतिवादी संजय कुमार महर्जनको बयान:**

**(क) प्रतिवादी संजय कुमार महर्जनको बयान (जग्गा फिर्ता २०४९):**

का.जि.का.म.पा.वडा नं.४ वालुवाटार स्थितमा रहेको ललिता निवास क्याम्प भित्रको जग्गामा मेरो आमा आशा माया महर्जन समेतका मानिसहरुले जग्गा कमाई समरजंग कम्पनीलाई बाली तिरी रहेकोमा उक्त जग्गाको

मोही कायमको लागि मेरो आमा आशा माया महर्जन र सो जग्गा कमाउने अन्य मानिसहरुले समेत मोहीयानी भागको लागि निवेदन दिएको दिएको हो। मेरो आमाको मृत्यु पश्चात सो जग्गाको मोहीयानी हकको लागि मैले निवेदन दिएको हो। सबै काम राम कुमार सुवेदी मार्फत भएकोले निजले तयार पारेको कागजमा मैले सहिछाप गरी रकमा बुझि मोहीयानी हक छाडेको हुँ। हामीले भोग चलन गरेको जग्गाको जग्गाधनी शैलजा राना समेतका मानिस थिए र सो जग्गा कमाएर तिरो हामीले समरजंग कम्पनीमा बुझाउने गरेका थियो। मेरो परिवारले कमाएको ललिता निवास क्याम्प भित्रको जग्गामा मोहीयानी हक लाग्छ भनी सबै मोहीहरुले भने बमोजिम हामीले पनि निवेदन दिई आफ्नो हकको मोहीयानी हक बिक्री गरेको हो। यो सबै काम डिल्लीबजारमा लेखापढी सम्बन्धी काम गर्ने राम कुमार सुवेदीले गरीदिएको हो। २३क्ष कित्ता नं.३१ नगर ४ १०२५-१५ कि.नं.२९९(०-१-०१),२०४(१-८-०-०),१९९(०-१५-३-२) र २३क्ष कि.नं.७२ नगर ४ १०२५-१५ कि.नं.१८७(०-२-१-०) जग्गाहरु मेरो बाजे बराजु देखि जोताहा गरी कमाई आएकोले मोहीयानी हक दाबि गरी उक्त जग्गाको मोहीको हक बिक्री गरी मोही लगत कट्टा गरेको हो। सो कार्य सबै राम कुमार सुवेदीले गरी दिएकोले कति मूल्यमा बिक्री गरेको थाहा छैन मैले अन्दाजी सत्र लाख रुपैयामा पाएको थिएँ। जग्गा सम्बन्धी सम्पूर्ण कार्य राम कुमार सुवेदीले गरी दिएकोले मैले निजले भने बमोजिम गरेको मात्र हुँ। राम कुमार सुवेदीले हामीले कमाएको एउटा कित्ता जग्गा गुठीमा परेको छ भनी राम कुमार सुवेदीले भनेका थिए र सोही जग्गाको मोही कायम गर्न गुठी संस्थानमा निवेदन दिन लगाएकोले म समेतले गुठी संस्थानमा निवेदन दिएको हो। हामीले कमाएको ललिता निवास क्याम्प भित्रको जग्गाको तिरो पहिला समरजंग कम्पनीलाई र पछि भूमि सुधार कार्यालयमा बुझाउने गरेका थियौ। समरजंग कम्पनीलाई तिरो तिरेको रसिद भएको याद छैन। ललिता निवास क्याम्प भित्रको जग्गा नेपाल सरकारको जग्गा भन्ने हाल मात्र थाहा भयो। उक्त जग्गा हामीले पहिला देखिनै कमाई आएकोले कमाएको जग्गामा आधा हक लाग्छ भन्ने सुनेकोले आफ्नो मोहीयानी हक बिक्री गरेको हो भन्ने ब्यहोरा प्रतिवादी संजय कुमार महर्जनको बयान।

**ख)** **<u>प्रतिवादी संजय कुमार महर्जनको बयान (पशुपती टिकिन्छा गुठी २०६९):</u>**

मिसिल संलग्न जाहेरी दरखस्तमा उल्लेखित प्रतिवादी डबल सिंह ठगुन्ना समेत र प्रहरी प्रतिवेदनमा उल्लेखित प्रतिवादी चैत्य नारायण महर्जन लगायतका प्रतिवादीहरु मध्ये ललिता निवास क्याम्प भित्रको जग्गाका मोही प्रतिवादी राम कुमार सुवेदी, प्रतिवादी सकलानन्द महर्जन, साक्षी प्रतिवादी बाबुराजा महर्जनलाई चिन्दछु। सोभाकान्त ढकाल, माधवी सुवेदी, उमा कुमारी ढकाल लगायतका अन्य प्रतिवादीहरुलाई चिन्दिन। लिखितम हामी तपसिलका मानिसहरु आगे सर्वे नापीमा मेरा पति जित बहादुर महर्जनका नाउमा नाप नक्सा भएको साबीक नगर २३क्ष कि.नं. ७३ को क्षेत्रफल ०-३-०-० जग्गा निज पति परलोक भएकोले उक्त जग्गा ज.ध.मा पशुपति टिकिन्छा गुठी र मोहीमा मेरा नाउमा दर्ता नामसारी हा.सा. समेत गरीपाउँ भनी आशामाया महर्जनको वारेश राम कुमार सुवेदीको निवेदन पर्न आएकोले तपाईहरुलाई सोधनी गरीन्छ की उक्त कित्ता जग्गा कुन गुठीको हो ? साबिक देखि हाल सम्म कस्ले जोतभोग गरी आएको छ ? पछि सम्म फरक नपर्ने गरी बताई दिनुहोस् भनी सोधनी हुँदा हाम्रो चित्त बुझ्यो उक्त जग्गा सम्बन्धमा हामीलाई थाहा भए सम्मको ब्यहोरा पछि सम्म फरक नपर्ने गरी तपसिलका बुदा बुदामा लेखि लेखाई गु. सं. तहसिल शाखा कार्यालयको चलानी नं.२३८५ मिति ०६०।२।१५ गतेको पत्रबाट खटी आउने कर्मचारी मार्फत यो सर्जमिन मुचुल्का गरी गु.सं. तहसिल शाखा कार्यालय काठमाडौंमा चढायौं। तपसिल- यसमा सबिक नगर २३ ह कि.नं.७३ को क्षेत्र फल ०-३-०-० जग्गा पशुपतीनाथ टिकिन्छा गुठीको लगतमा खला नं.१० दर्तावाला मोही आशामरु ज्यापुको नाउमा भिड्ने जग्गा हो

फि.बु.को जोताहमा उल्लेखित जित बहादुर महर्जन निजको पति हुन र निजको शेष पछि हालसम्म निवेदक आशामाया महर्जनले नै जोत भोग गरी आएकोले निजकै नाममा नामसारी दर्ता हा.सा. समेत गरी जग्गाधनी प्रमाण पूर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भन्ने ब्यहोरा उल्लेख भएको सर्जमिन मुचुल्का देखाउदा देखिपाएँ। उक्त मुचुल्काको निवेदक खण्डमा उल्लेखित आशामाया महर्जन भन्ने ब्यक्ति मेरो आमा हुन्। निजको २०६० साल भाद्र महिना मृत्यु/परलोक भै सकेको छ। मिसिल संलग्न रहेको गुठी संस्थान शाखा कार्यालय काठमाडौं मिति २०७०/०१/१७ गते मा जग्गाधनीको नाम थर वतन मा श्री पशुपति टिकिन्छा गुठी, सिट नं. १०२-१०२५-१४, वडा नं. ४, कित्ता नं. ४८, मोहीको नाम, थर, वतन संजय कुमार महर्जन, सकलानन्द महर्जन समेत-२ संयुक्त उल्लेख भएको जग्गाधनी प्रमाण पुर्जा मलाई देखाउदा देखिपाएँ। उक्त जग्गाधनी प्रमाण पूर्जामा भएको फोटो म र दाई सकलानन्द महर्जनको हो। हेरी चिनी सनाखत समेत गरीदिएँ। का.जि.का.म.पा. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको उल्लेखित कित्ता जग्गा परापुर्व काल देखि नै मेरो हजुरबुवा, बुवा समेतले जोतभोग गर्दै आउनु भएको र उल्लेखित कित्ता जग्गामा मेरो बुवा जित बहादुर महर्जन मोही हुनुहुन्थ्यो। उल्लेखित कित्ता जग्गा पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी जग्गाधनी प्रमाण पुर्जा समेत पाउनको लागि गुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन दिने समयमा बुवा र आमाको मृत्यु भई सकेको र मेरा दाजु सकलानन्द महर्जन अष्ट्रेलियामा रहेकाले उक्त काम गर्नका लागि मैले राम कुमार सुबेदीलाई वारेशनामा दिएको थिएँ। नेपाल सरकार मन्त्रिपरिषदबाट स्वीकृति पाए बमोजिम गुठी संस्थानले उल्लेखित कित्ता जग्गा पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी बुवा जित बहादुर महर्जन, आमा आशामाया महर्जनको मृत्यु भई सकेकाले हामी हकदार दुई जना छोराहरु दाजु सकलानन्द महर्जन र म संजय कुमार महर्जन समेतको नाममा नयाँ नापी बमोजिमको सिट नं. १०२-१०२५-१४ को कि.नं. ४८ को क्षेत्रफल ०-३-०-० जग्गा मोही कायम भई मिति २०७०/०१/१७ गते प्राप्त भएको हो। उक्त जग्गा प्राप्त गर्ने सम्पूर्ण प्रकृया राम कुमार सुवेदीले मिलाएका थिए। के कस्ता कागजातहरुको आधारमा उक्त जग्गा प्राप्त भयो मलाई थाहा छैन। उक्त जग्गा प्राप्त भए पछि राम कुमार सुवेदीले उक्त जग्गा बिक्री गर्नेको भनी सोधेका थिए। हामीले बिक्री गर्ने सहमति जनाए पछि राम कुमार सुवेदीले प्रति रोपनी २० लाखका दरले रकम दिन्छु, जग्गा हाम्रो नाममा पास गरी दिनुहोस् भनेकोमा हामीले निज राम कुमार सुबेदीको प्रस्तावमा समर्थन जनाए पछि गरी रु.७५,०००/- (पचहत्तर हजार) बैना समेत दिएका थिए। उक्त जग्गा राम कुमार सुवेदीले भनेको मानिसको नाममा रजिष्ट्रेशन पास गरी बाकी रकम प्राप्त जम्मा रु.३,७५,०००/- (तीन लाख पच्हत्तर हजार रुपैयाँ मात्र) प्राप्त गरेका थियौं। मसँग पशुपती टिकीन्छा गुठीका कागजताहरु केहि थिएनन्। सो समयमा राम कुमार सुवेदीले तयार गरेका कीर्ते कागजातहरुमा सहिछाप गरेका थियौं। राम कुमार सुवेदी समेतले मलाई झुक्याई नक्कली कागजातहरुको आधारमा मलाई नक्कली मोही कायम गराई उक्त जग्गा मेरो नाम मिति २०७०/०१/१७ मा मोही कायम गराई मिति २०७०/०१/२७ गते अर्थात १० दिन भित्रमा राम कुमार सुवेदी समेतले मोही बिक्री भएको जग्गाधनी प्रमाण पूर्जा बनाई उक्त जग्गा हाल पनि निजै राम कुमार सुवेदी समेतको नाममा दर्ता छ। म समेतको नाममा मोही कायम भएको उक्त पशुपति टिकिन्छा गुठीको जग्गा र जग्गाधनी पुर्जा समेत मैले देखेको छैन। मेरो आमा आशामाया महर्जनको वारेस राम कुमार सुवेदीले मिति २०५९/०७/०५ गते गुठी संस्थान केन्द्रीय कार्यालय डिल्लीबजारमा गुठी जग्गा हाल साविक नामसारी गरी दर्ता गरीपाउ भनी दिएको निवेदनमा मेरो आमाको मिति २०६० साल भाद्र महिनामा मृत्यु भए पश्चात मेरो वारेश राम कुमार सुवेदी बसी निवेदन दिई का.जि. नगर २३ क्ष को कि.नं. ७३ हाल सिट नं. १०२५-१४ को कि.नं. ४८, मिति २०७०/०१/१७ गते म र सकलानन्द महर्जनको

नाममा राम कुमार सुवेदीले बनाई दिएका हुन । निवेदनमा माग गरेको कि.नं. ४८ माधवी सुवेदी र उमा कुमारी ढकालको नाममा दर्ता छन । माधवी सुवेदी र उमा कुमारी ढकाल राम कुमार सुवदी र सोभाकान्त ढकालको श्रीमती हुन भन्ने पछि आएर थाहा भएको हो । सो जग्गाहरु पनि नेपाल सरकारको नाममा रहेका जग्गा हुन्, पशुपति टिकिन्छा गुठीका जग्गाहरु होइनन भन्ने पछि आएर थाहा भयो । जग्गा प्राप्त गर्ने प्रकृयाको लागि राम कुमार सुवेदीले के कस्तो कीर्ते कागजातहरु तयार गरे मलाई थाहा भएन । सरकारी जग्गामा मोही हक प्राप्त हुन्छ हुदैन भन्ने मलाई थाहा छ । सरकारी जग्गा के कसरी पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गरेका हुन् सो कुरा मलाई थाहा छैन । सो कुरा राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीहरुलाई थाहा होला ।

सरकारी जग्गाहरु पशुपति टिकिन्छा गुठिको नाममा कायम गराई मोही मेरो नाम समेतका कागजात जग्गाको प्रमाण पूर्जी प्रतिवादी राम कुमार सुवेदी र सम्बन्धित निकायका सरकारी कर्मचारीले गरेका हुन । उक्त जग्गाको लागि मेरो तर्फबाट राम कुमार सुवेदीले निवेदन दिएका थिए । उक्त जग्गा प्राप्त भए पश्चात राम कुमार सवेदीले डिल्लीबजारमा बोलाई निजले भनेका कागजहरुमा सहीछाप गरी दिएको हुँ । उक्त कित्ता जग्गाहरुको म मोही हकदार होईन । कागजमा सहीगरी उक्त जग्गा राम कुमार सुवेदीले भनेका मानिसहरुलाई बिक्री गरे बापत जम्मा रु.३,७५,०००/- ( तीन लाख पच्हत्तर हजार मात्र) दिएका थिए । उक्त रकम म र दाई सकलानन्द महर्जनले आधा आधा लिएका थियौं । उक्त रकम मैले घरायसी प्रयोजनमा खर्च गरी सकेको छु । ललिता निवास क्याम्प भित्रको जग्गा कमाउने मोहीहरु बीच आपसी सल्लाह भई मोही भाग छुट्याउनको लागि आवश्यक कानुनी प्रकृया पुरा गर्न सबै मोहीहरुले राम कुमार सुबेदीलाई वारेश दिएका थिए भन्ने सुनेको थिएँ । निज राम कुमार सुवेदीले के कसरी के कुन आधार प्रमाणबाट को कसको योजना, मिलेमतो र संलग्नतामा मोहीयानी हक दावी गरी जग्गा प्राप्त हुने अवस्था बनाए मलाई थाहा भएन । पशुपति टिकिन्छा गुठीको नाममा कुतबाली बुझाएको कागजात केही छैन । उक्त जग्गा श्री पशुपती टिकिन्छा गुठीका नाममा दर्ता गर्ने गराउने क्रममा यो यो कर्मचारीहरुको संलग्नता थियो भनी मैले एकिन गर्न सक्दिन । सो कुरा राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीलाई थाहा होला । मैले राम कुमार सुवेदीलाई वारेश बनाई मोहीको तर्फबाट निवेदन दिएको हो । लेखापढी ब्यवसायी गर्ने प्रतिवादी राम कुमार सुवेदीले ललिता निवास क्याम्प भित्रको रहेको जग्गा प्राप्त गर्ने प्रलोभनमा पारी झुक्याई कागजातहरु खडा गरेका हुन । उक्त जग्गाहरु पशुपति टिकिन्छा गुठीका हुन भन्ने म सँग कुनै पनि प्रमाण कागज थिएनन । मेरो नागरीकताको फोटोकपी चाहिन्छ भनेर राम कुमार सुवेदीले लिएका थिए। पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी बनाईएका कागजातहरु राम कुमार सुवेदीले कीर्ते गरी बनाएका हुन । फिल्डबुक उतार, भुमिसुधार कार्यालय काठमाडौंको २ नं. अनूसुची, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानीय वडा कार्यालयको जोतभोग खुलेको सिफारिस पत्र, जग्गाधनीलाई कुतबाली वापत भूमिसुधार कार्यालय काठमाडौंमा बाली धरौटी राखेको रसिद लगायतका प्रमाण कागजातहरु कीर्ते कागज हुन । मैले मेरो नागरीकताको फोटोकपी कागज र फोटो बाहेक अरु कुनै पनि कागजात राम कुमार सुवेदीलाई दिएको छैन । मैले दिएको भनिएका नागरीकताको फोटो कपी र फोटो बाहेकका कागजातहरु राम कुमार सुवेदीले कीर्ते बनाएका हुन । यी माथीका कुराहरुको बारेमा मलाई केही पनि थाहा छैन । म मालपोत कार्यालय तथा गुठी संस्थान कार्यालयमा गएको छैन । राम कुमार सुवेदीको निजको अफिस काठमाडौं डिल्लीबजारमा मलाई बोलाई कागजमा सहीछाप गराएको थियो । हामीले प्राप्त गरेको भनिएको ०-३-०-० जग्गा निजकै नातेदारहरुलाई बिक्री गर्न लगाई राम कुमार सुवेदीले हामीलाई रु.३,७५,०००/- ( तीन लाख पच्हत्तर हजार मात्र) दिएका थिए । मलाई थाहा छैन । शुरुमा आमा आशामाया महर्जनले निवेदन दिनु भएको थियो । आमाको मृत्यु भए पछि दाई

सकलानन्द महर्जन विदेशमा भएको कारण मेरो वारेश राम कुमार सुवेदीले निवेदन दिएका थिए । राम कुमार सुवेदीले हामीहरुको नाममा पुर्जा बनिसक्यो भनी उक्त जग्गा हामीबाट खरिद गर्ने भनी जग्गाधनी प्रमाण पुर्जा निज राम कुमार सुवेदीले नै राखेका थिए । सो पश्चात के कस्तो कागजातहरु तयार गरी निजले भनेका मानिसहरुको नाममा नामसारी गरे मलाई थाहा छैन । मैले अर्काको हक जाने आफूलाई फाईदा हुने झुठा कागज कीर्ते काम केही पनि गरेको छैन । कुनै सरकारी लिखत कागजातहरुमा कही कतै बसेर गर्नु नहुने कुनै काम गरेको छैन । झुठा र कीर्ते काम गरेमा सजाय हुन्छ भने कुरा मलाई थाहा छ । कीर्ते कागजातहरु तयार गर्ने काम राम कुमार सुवेदी समेतले गरेका हुन् । १९६३ सालको लगत र १९८७ सालको लालमोहर बारेमा मलाई केहि थाहा छैन । टिकिन्छा गुठी १९६३ सालमा स्थापना भएकोमा १९८७ सालमा भिम शम्शेरले काठमाडौं बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा कानून बमोजिम एकछत्र बनाई उक्त जग्गा अधिकरण भएको हाल आएर थाहा भयो । सबै कुरा राम कुमार सुवेदीले मिलाई दिएको हुँदा यस सम्बन्धमा मलाई थाहा छैन । मिसिल संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समितिको संयोजक समक्ष मिति २०७६ साल पौष २२ गते घटना विवरण कागज पाना-४ देखाउदा देखिपाएँ । उक्त घटना विवरण कागजमा भएको मेरो नाम अगाडी भएको दस्तखत मेरो नै हो । उक्त कागजमा मैले मिति २०६७ साल पौष १६ गते मैले आफैले भने बमोजिमको ब्यहोरा कम्प्युटर टाईप गरी प्रिन्ट गरिएको ठीक साँचो हो । हेरि चिनी सनाखत गरीदिएँ । म र दाजु सकलानन्द महर्जनले राम कुमार सुवेदीबाट रु.३,७५,०००/- (तीन लाख पच्हत्तर हजार मात्र) लिएका छौं । उक्त रकम आधा आधा मैले लिएको रकम मात्र तिर्ने दायित्व मेरो हो । सो बाहेकको अन्य रकम प्रतिवादी राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीले तिर्ने दायित्व रहन्छ भन्ने व्यहोराको प्रतिवादी संजय कुमार महर्जनको बयान ।

२६. **प्रतिवादी सकलानन्द महर्जनको बयान (पशपती टिकिन्छा गुठी २०६९):**

मिसिल संलग्न जाहेरी दरखस्तमा उल्लेखित प्रतिवादी डबल सिंह ठगुन्ना समेत र प्रहरी प्रतिवेदनमा उल्लेखित प्रतिवादी चैत्य नारायण महर्जन लगायतका प्रतिवादीहरु मध्ये ललिता निवास क्याम्प भित्रको जग्गाका मोही प्रतिवादी राम कुमार सुवेदी, संजय कुमार महर्जन, साक्षी बाबुराजा महर्जनलाई चिन्दछु । सोभाकान्त ढकाल, माधवी सुवेदी, उमा कुमारी ढकाल लगायतका अन्य प्रतिवादीहरुलाई चिन्दिन । लिखितम हामी तपसिलका मानिसहरु आगे सर्वे नापीमा मेरा पति जित बहादुर महर्जनका नाउमा नाप नक्सा भएको साबीक नगर २३क्ष कि.नं. ७३ को क्षेत्रफल ०-३-०-० जग्गा निज पति परलोक भएकोले उक्त जग्गा ज.ध.मा पशुपति टिकिन्छा गुठी र मोहीमा मेरा नाउमा दर्ता नामसारी हा.सा. समेत गरीपाउँ भनी आशामाया महर्जनको वारेश राम कुमार सुवेदीको निवेदन पर्न आएकोले तपाईहरुलाई सोधनी गरीन्छ की उक्त कित्ता जग्गा कुन गुठीको हो ? साबिक देखि हाल सम्म कस्ले जोतभोग गरी आएको छ ? पछि सम्म फरक नपर्ने गरी बताई दिनुहोस् भनी सोधनी हुँदा हाम्रो चित्त बुझ्यो उक्त जग्गा सम्बन्धमा हामीलाई थाहा भए सम्मको ब्यहोरा पछि सम्म फरक नपर्ने गरी तपसिलका बुदा बुदामा लेखि लेखाई गु. सं. तहसिल शाखा कार्यालयको चलानी नं.२३८५ मिति ०६०।२।१५ गतेको पत्रबाट खटी आउने कर्मचारी मार्फत यो सर्जमिन मुचुल्का गरी गु.सं. तहसिल शाखा कार्यालय काठमाडौंमा चढायौं । तपसिल- यसमा सबिक नगर २३ ह कि.नं.७३ को क्षेत्र फल ०-३-०-० जग्गा पशुपतीनाथ टिकिन्छा गुठीको लगतमा खला नं.१० दर्तावाला मोही आशामरु ज्यापुको नाउमा भिड्ने जग्गा हो फि.बु.को जोताहमा उल्लेखित जित बहादुर महर्जन निजको पति हुन र निजको शेष पछि हालसम्म निवेदक आशामाया महर्जनले नै जोत भोग गरी आएकोले निजकै नाममा नामसारी दर्ता हा.सा. समेत गरी जग्गाधनी प्रमाण पूर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भन्ने ब्यहोरा उल्लेख भएको सर्जमिन मुचुल्का देखाउदा

देखिपाएँ । उक्त मुचुल्काको निवेदक खण्डमा उल्लेखित आशामाया महर्जन भन्ने ब्यक्ति मेरो आमा हुन् । निजको २०६० साल भाद्र महिना मृत्यु/परलोक भै सकेको छ । मिसिल संलग्न रहेको गुठी संस्थान शाखा कार्यालय काठमाडौं मिति २०७०/०१/१७ गते मा जग्गाधनीको नाम थर वतन मा श्री पशुपति टिकिन्छा गुठी, सिट नं. १०२-१०२५-१४, वडा नं. ४, कित्ता नं. ४८, मोहीको नाम, थर, वतन संजय कुमार महर्जन, सकलानन्द महर्जन समेत-२ संयुक्त उल्लेख भएको जग्गाधनी प्रमाण पुर्जा मलाई देखाउदा देखिपाएँ । उक्त जग्गाधनी प्रमाण पूर्जामा भएको फोटो म र भाई संजय कुमार महर्जनको हो । हेरी चिनी सनाखत समेत गरीदिएँ । ललिता क्याम्प भित्रको सुवर्ण शम्शेर समेतको भनिएको जग्गा मेरो बाबु बाजेको पालाले देखी बुवा आमा समेतले मोहीयानी जग्गा भोग चलन गर्दै आएको हो । मेरो आमाले शुरमा सुबर्ण शम्शेर परिवारलाई बाली बुझाउने गरेका थिए । पछि सो जग्गा सरकारले अधिग्रहण गरेपछी बाली बुझाउन भनी समरगंज कम्पनी भोटाहीटी र मालपोत कार्यालय डिल्लीबजार जाने गर्नु भएको थियो । मालपोत कार्यालय डिल्लीबजार जाँदा सो कार्यालय जाने क्रममा मेरो आमाको राम कुमार सुवेदीसँग भेटघाट भई निजसँग कुरा हुँदा निजले मोहीयानी हक छुट्याउने कामको लागी मुद्दा गर्नु पर्छ । मोहीयानी हक छुटे पछि जग्गा पाउने लोभ लालच राम कुमार सुवेदीले देखाए पछि मेरो आमा समेतका सबै मोहीहरुले निज राम कुमार सुवेदीको प्रस्तावमा समर्थन जनाई निजलाई कामको जिम्मा दिएका रहेछन । यसरी आमासँगै जाने क्रममा निज राम कुमार सुवेदीसँग भेट भई चिनजान भएको थियो । उल्लेखित कित्ता जग्गा पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी जग्गाधनी प्रमाण पुर्जा समेत पाउनको लागि गुठी संस्थान केन्द्रीय कार्यालयमा मेरो आमा आशामाया महर्जनले २०५९ सालमा राम कुमार सुवेदीलाई वारेश राखी निवेदन दिनुभएको थियो । मेरो आमाको पनि २०६० भाद्र महिना मृत्यु भएको र म अष्ट्रेलियामा रहेकाले उक्त काम गर्नका लागि मेरा भाई संजय कुमार महर्जनले राम कुमार सुबेदीलाई वारेशनामा दिएका रहेछन । नेपाल सरकार मन्त्रिपरिषदबाट स्वीकृति पाए बमोजिम गुठी संस्थानले उल्लेखित कित्ता जग्गा पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी बुवा जित बहादुर महर्जन, आमा आशामाया महर्जनको मृत्यु भई सकेकाले हामी हकदार दुई जना छोराहरु सकलानन्द महर्जन र संजय कुमार महर्जन समेतको नाममा नयाँ नापी बमोजिमको सिट नं. १०२-१०२५-१४ को कि.नं. ४८ को क्षेत्रफल ०-३-०-० जग्गा मोही कायम भई मिति २०७०/०१/१७ गते प्राप्त भएको हो । उक्त जग्गा प्राप्त गर्ने सम्पूर्ण प्रकृया राम कुमार सुवेदीले मिलाएका थिए । के कस्ता कागजातहरुको आधारमा उक्त जग्गा प्राप्त भयो मलाई थाहा छैन । उक्त जग्गा प्राप्त भए पछि राम कुमार सुवेदीले उक्त जग्गा बिक्री गर्नेको भनी सोधेका थिए । हामीले बिक्री गर्ने सहमति जनाए पछि राम कुमार सुवेदीले प्रति रोपनी २० लाखका दरले रकम दिन्छु, जग्गा हाम्रो नाममा पास गरी दिनुहोस् भनेकोमा हामीले निज राम कुमार सुबेदीको प्रस्तावमा समर्थन जनाई उक्त जग्गा राम कुमार सुवेदी र निजले भनेको मानिसको नाममा रजिष्ट्रेशन पास गरी रु.३,७५,०००/- (तीन लाख पच्हत्तर हजार रुपैयाँ मात्र) प्राप्त गरेका थियौं । मसँग पशुपती टिकीन्छा गुठीका कागजताहरु केहि थिएनन् । सो समयमा राम कुमार सुवेदीले तयार गरेका कीर्ते कागजातहरुमा सहिछाप गरेका थियौं । राम कुमार सुवेदी समेतले मलाई झुक्याई नक्कली कागजातहरुको आधारमा मलाई नक्कली मोही कायम गराई उक्त जग्गा मेरो नाम मिति २०७०/०१/१७ मा मोही कायम गराई मिति २०७०/०१/२७ गते अर्थात १० दिन भित्रमा राम कुमार सुवेदी समेतले मोही बिक्री भएको जग्गाधनी प्रमाण पूर्जा बनाई उक्त जग्गा हाल पनि निजै राम कुमार सुवेदी समेतको नाममा दर्ता छ । म समेतको नाममा मोही कायम भएको उक्त पशुपति टिकिन्छा गुठीको जग्गा र जग्गाधनी पुर्जा समेत मैले देखेको छैन ।

मेरो आमा आशामाया महर्जनको वारेस राम कुमार सुवेदीले मिति २०५९/०७/०५ गते गुठी संस्थान केन्द्रीय कार्यालय डिल्लीबजारमा गुठी जग्गा हाल साविक नामसारी गरी दर्ता गरीपाउ भनी दिएको निवेदनमा मेरो आमाको मिति २०६० साल भाद्र महिनामा मृत्यु भए पश्चात भाई संजय कुमार महर्जन मार्फत राम कुमार सुवेदीलाई नै निवेदक वारेशनामा दिन लगाई का.जि. नगर २३ क्ष को कि.नं. ७३ हाल सिट नं. १०२५-१४ को कि.नं. ४८, मिति २०७०/०१/१७ गते म र मेरो भाई संजय कुमार महर्जनको नाममा राम कुमार सुवेदीले बनाई दिएका हुन। निवेदनमा माग गरेको कि.नं. ४८ माधवी सुवेदी र उमा कुमारी ढकालको नाममा दर्ता छन। माधवी सुवेदी राम कुमार सुवेदीको श्रीमती र उमा कुमारी ढकाल सोभाकान्त ढकालको श्रीमती हुन भन्ने पछि आएर थाहा भएको हो। सो जग्गाहरु पनि नेपाल सरकारको नाममा रहेका जग्गा हुन पशुपति टिकिन्छा गुठीका जग्गाहरु होइनन भन्ने पछि आएर थाहा भयो। सो प्रकृयाको लागि राम कुमार सुवेदीले के कस्तो कीर्ते कागजातहरु तयार गरे मलाई थाहा भएन। सरकारी जग्गामा मोही हक प्राप्त हुन्छ हुदैन भन्ने मलाई थाहा छ। सरकारी जग्गा के कसरी पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गरेका हुन सो कुरा मलाई थाहा छैन। सो कुरा राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीहरुलाई थाहा होला। सरकारी जग्गाहरु पशुपति टिकिन्छा गुठिको नाममा कायम गराई मोही मेरो नाम समेतका कागजात जग्गाको प्रमाण पूर्जी प्रतिवादी राम कुमार सुवेदी र सम्बन्धित निकायका सरकारी कर्मचारीले गरेका हुन। उक्त जग्गाको लागि मेरो भाई संजय कुमार महर्जनको तर्फबाट राम कुमार सुवेदीले निवेदन दिएका थिए। उक्त जग्गा प्राप्त भए पश्चात राम कुमार सवेदीले डिल्लीबजारमा बोलाई निजले भनेका कागजहरुमा मैले सहीछाप गरी दिएको हुँ। उक्त कित्ता जग्गाहरुको म मोही हकदार होईन। कागजमा सहीगरी उक्त जग्गा राम कुमार सुवेदीले भनेका मानिसहरुलाई बिक्री गरे बापत रु.३,७५,०००/- ( तीन लाख पच्हत्तर हजार मात्र) दिएका थिए। उक्त रकम म र भाई संजय कुमार महर्जनले आधा आधा लिएका थियौं। उक्त रकम मैले घरायसी प्रयोजनमा खर्च गरी सकेको छु। ललिता निवास क्याम्प भित्रको जग्गा कमाउने मोहीहरु बीच आपसी सल्लाह भई मोही भाग छुट्याउनको लागि आवश्यक कानुनी प्रक्रिया पुरा गर्न सबै मोहीहरुले राम कुमार सुबेदीलाई वारेश दिएका थिए भन्ने सुनेको थिएँ। निज राम कुमार सुवेदीले के कसरी के कुन आधार प्रमाणबाट को कसको योजना, मिलेमतो र संलग्नतामा मोहीयानी हक दावी गरी जग्गा प्राप्त हुने अवस्था बनाए मलाई थाहा भएन। पशुपति टिकिन्छा गुठीको नाममा कुतबाली बुझाएको कागजात केही छैन। उक्त जग्गा श्री पशुपती टिकिन्छा गुठीका नाममा दर्ता गर्ने गराउने क्रममा यो यो कर्मचारीहरुको संलग्नता थियो भनी मैले एकिन गर्न सक्दिन । सो कुरा राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीलाई थाहा होला। मैले भाई संजय कुमार महर्जनले राम कुमार सुवेदीलाई वारेश बनाई मोहीको तर्फबाट निवेदन दिएको हो। लेखापढी ब्यवसायी गर्ने प्रतिवादी राम कुमार सुवेदीले ललिता निवास क्याम्प भित्रको रहेको जग्गा प्राप्त गर्ने लोभमा पारी झुक्याई कागजातहरु खडा गरेका हुन। पशुपति टिकिन्छा गुठीको नाममा कुन कुन कित्ता दर्ता भए र उक्त कित्ता जग्गा जग्गा किन पशुपति टिकिन्छा गुठीको नाममा दर्ता भएनन सो कुरा राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीहरुलाई थाहा होला। तत्कालीन श्री ५ को सरकारले गजेटमा सूचना प्राकशित गरी मिति २०२१/०८/१७ गतेको अधिग्रहणको निर्णय सम्बन्धमा मलाई थाहा छैन। नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको जग्गामा मोहीयानी हक प्राप्त हुन सक्दैन। नेपाल सरकारको जग्गामा मोही लाग्ने ब्यवस्था छैन भने सुनेको छु। उक्त जग्गाहरु पशुपति टिकिन्छा गुठीका हुन भन्ने म सँग कुनै पनि प्रमाण कागज थिएनन। मेरो नागरीकताको फोटोकपी चाहिन्छ भनेर राम कुमार सुवेदीले लिएका थिए। पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी बनाईएका कागजातहरु राम कुमार सुवेदीले कीर्ते गरी बनाएका हुन। फिल्डबुक उतार,

भुमिसुधार कार्यालय काठमाडौंको २ नं. अनूसुची, नाता प्रमाण पत्र, मृत्यू दर्ता प्रमाण पत्र, स्थानीय वडा कार्यालयको जोतभोग खुलेको सिफारिस पत्र, जग्गाधनीलाई कुतबाली वापत भूमिसुधार कार्यालय काठमाडौंमा बाली धरौटी राखेको रसिद लगायतका प्रमाण कागजातहरु कीर्ते कागज हुन। मैले मेरो नागरीकताको फोटोकपी कागज र फोटो बाहेक अरु कुनै पनि कागजात राम कुमार सुवेदीलाई दिएको छैन । मैले दिएको भनिएका नागरीकताको फोटो कपी र फोटो बाहेकका कागजातहरु राम कुमार सुवेदीले कीर्ते बनाएका हुन।

सुरुमा मेरो आमा आशामाया महर्जनले निवेदन दिनु भएको थियो । आमाको मृत्यु भए पछि म विदेश अष्ट्रेलियामा भएको कारण भाई संजय कुमार महर्जनको वारेश राम कुमार सुवेदीले निवेदन दिएका थिए। राम कुमार सुवेदीले हामीहरुको नाममा पुर्जा बनिसक्यो भनेका थिए। उक्त जग्गा हामीबाट खरिद गर्ने भनी जग्गाधनी प्रमाण पुर्जा निज राम कुमार सुवेदीले नै राखेका थिए। सो पश्चात के कस्तो कागजातहरु तयार गरी निजले भनेका मानिसहरुको नाममा नामसारी गरे मलाई थाहा छैन। मैले अर्काको हक जाने आफूलाई फाईदा हुने झुठा कागज कीर्ते काम केही पनि गरेको छैन। कुनै सरकारी लिखत कागजातहरुमा कही कतै बसेर गर्नु नहुने कुनै काम गरेको छैन। झुठा र कीर्ते काम गरेमा सजाय हुन्छ भने कुरा मलाई थाहा छ। कीर्ते कागजातहरु तयार गर्ने काम राम कुमार सुवेदी समेतले गरेका हुन्। १९६३ सालको लगत र १९८७ सालको लालमोहर बारेमा मलाई केहि थाहा छैन। टिकिन्छा गुठी १९६३ सालमा स्थापना भएकोमा १९८७ सालमा भिम शम्शेरले काठमाडौं बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा कानून बमोजिम एकछत्र बनाई उक्त जग्गा अधिकरण भएको हाल आएर थाहा भयो। सबै कुरा राम कुमार सुवेदीले मिलाई दिएको हुँदा यस सम्बन्धमा मलाई थाहा छैन। मिसिल संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समितिको संयोजक समक्ष मिति २०७६ साल पौष २२ गते घटना विवरण कागज पाना-०४ देखाउदा देखिपाएँ। उक्त घटना विवरण कागजमा भएको मेरो नाम अगाडी भएको दस्तखत मेरो नै हो। उक्त कागजमा मैले मिति २०६७ साल पौष १६ गते मैले आफैले भने बमोजिमको ब्यहोरा कम्प्युटर टाईप गरी प्रिन्ट गरिएको ठीक साँचो हो। हेरि चिनी सनाखत गरीदिएँ। म र भाई संजय कुमार महर्जनले राम कुमार सुवेदीबाट रु.३,७५,०००/- (तीन लाख पचहत्तर हजार मात्र) लिएका हौं। मैले लिएको रकम मात्र तिर्ने दायित्व मेरो हो। सो बाहेकको अन्य रकम प्रतिवादी राम कुमार सुवेदी समेतका अन्य प्रतिवादीले तिर्ने दायित्व रहन्छ भन्ने व्यहोराको प्रतिवादी सकलानन्द महर्जनको बयान।

२७. **प्रतिवादी कृष्ण राउत भन्ने कृष्ण बहादुर राउतको बयान (जग्गा सट्टापट्टा २०६७):**

यकिन मिति याद भएन २०६६ साल कार्तिक/मंसिर देखि २०६७ साल फागुन महिना सम्म करिब १७/१८ महिना भौतिक योजना तथा निर्माण मन्त्रालयको शाखा अधिकृत पदमा कार्यरत थिएँ। हाल सञ्चार तथा सूचना प्रविधी मन्त्रालयको सचिव पदमा कार्यरत छु। म भौतिक योजना तथा निर्माण मन्त्रालयको शाखा अधिकृतको रुपमा कार्यरत रहँदा आन्तरिक प्रशासन शाखाको शाखा अधिकृतको रुपमा कर्मचारीहरुको कार्य सम्पादन मुल्यांकन अभिलेख राख्ने, जिन्सी शाखा सम्बन्धी कार्य गर्ने, अख्तियार दुरुपयोग अनुसन्धान आयोग, राष्ट्रिय सतर्कता केन्द्र लगायतका बिभिन्न निकायहरुबाट प्राप्त उजुरी तथा छानविन सम्बन्धी कार्यमा सहयोग गर्ने, सेवाग्राहीहरुको गुनासो व्यवस्थापन सम्बन्धी कार्य गर्ने, बिभिन्न निकायहरुको सम्पर्क बिन्दु समेतको कार्य गर्ने जिम्मेवारी थियो। प्रचलित जग्गा प्राप्ती ऐन बमोजिम कुनै व्यक्ति वा संस्थाको जग्गा र सो मा बनेको अन्य भौतिक संरचना, (लिग लिगापात) राजपत्रमा सूचना प्रकाशित गरी जग्गा प्राप्ती ऐनले अधिकार दिएको अधिकार प्राप्त अधिकारी वा समितीले मुआवजा निर्धारण गरी सो मुआवजा सम्बन्धित व्यक्ति वा संस्थालाई उपलब्ध गराई सम्बन्धित माल अड्डाबाट व्यक्ति वा संस्थाको नामबाट लगत कट्टा गरी श्रेष्ता पुर्जा तयार भए

पछि सो जग्गा सरकारी हुन्छ । विशिष्ट ब्यक्तिहरुको सरकारी निवास भवन परिसर क्षेत्रको जग्गा विस्तार सम्वन्धी अनुसूची संशोधन गर्ने सम्वन्धमा भौतिक योजना तथा निर्माण मन्त्रालयबाट उठान भएको उल्लेखित राय टिप्पणी देखाउँदा देखि पाएँ, भौतिक योजना तथा निर्माण मन्त्रालयका तत्कालिन सचिवले श्री स.स. प्रशासन महाशाखा, राय भनी भएको तोक आदेश पश्चात तत्कालिन प्रशासन महाशाखा प्रमुखले श्री आन्तरिक प्रशासन शाखालाई तोक आदेश भएकोले टिप्पणी फायल उठाई शाखा प्रमुख समक्ष आवश्यक निर्णयार्थ पेश गरेको हुँ, उल्लेखित राय टिप्पणीमा भएको सहिछाप मेरो हो, हेरी चिन्ही सनाखत समेत गरी दिएँ । बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजनाको कार्यान्वयनका लागि बालुवाटार स्थित प्रधानमन्त्री निवास सँग जोडिएको जग्गाको सट्टापट्टा, सोधभर्ना समेतका लागि नेपाल सरकार समरजंग कम्पनीको नाममा (मोही जनिएको) ललिता निवासको क्याम्प क्षेत्रको चारकिल्ला भित्र जम्मा क्षेत्रफल २७-७-०-१ रोपनी सरकारी जग्गा मध्ये मोही भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५ जग्गा र सार्वजनिक बाटो तथा राजकुलो समेतको क्षेत्रफल ०-१५-०-२ रोपनी गरी जम्मा क्षेत्रफल १४-१०-३-२.५ रोपनी अनुसूची १ मा उल्लेख भए बमोजिमका जग्गा मिलान गरी नक्सा बमोजिम दक्षिण तर्फ (प्रधानमन्त्री निवास क्षेत्र परिसर) बिस्तार गर्ने, मोहीको हिस्सामा पर्ने क्षेत्रफल १३-११-३-०.५ रोपनी जग्गा र परिसर बिस्तार गर्दा बिस्तारित क्षेत्रमा पर्ने अनुसूची २ मा उल्लेख भए बमोजिमका जग्गा व्यक्तिको नाममा दर्ता रहेको जग्गाको सोधभर्ना तथा सट्टापट्टा गर्न भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट आवश्यक व्यवस्था मिलाउने भन्ने समेत नेपाल सरकार (मन्त्री परिषद) बाट मिति २०६६/१२/२९ मा निर्णय भएको र नेपाल सरकार (मन्त्री परिषद) को मिति २०६६/१२/२९ को निर्णय कार्यान्वयनको सिलसिलामा भूमिसुधार तथा व्यवस्था मन्त्रालयको प्रस्तावमा मालपोत कार्यालय डिल्लीबजारबाट परिसर बिस्तार क्षेत्रमा पर्ने जग्गाको दाखिल खारेज गर्ने समेतको काम गर्ने भनी मिति २०६७/१/३१ मा निर्णय भएकोमा उल्लेखित निर्णयहरु कार्यान्वयनको क्रममा मानवीय त्रुटीका कारण पुर्व निर्णयमा उल्लेखित अनुसुचीहरुमा भुल सुधारका लागि भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट तहगत रुपमा कानूनी प्रकृया पुरा गरी पेश भई आएको टिप्पणी फायलमा ऐन नियम परामर्श शाखाको राय सहित सचिवज्यू समक्ष पेश भई सचिवज्यूबाट प्रशासन महाशाखा प्रमुखलाई रायका लागि तोक आदेश भएको । प्रशासन महाशाखा प्रमुखबाट आन्तरिक प्रशासन शाखालाई तोक आदेश भए पश्चात असल नियतका साथ पदीय जिम्मेवारी निर्वाह गर्ने सिलसिलामा उक्त राय टिप्पणी लेखि शाखा प्रमुख समक्ष पेश गरेको हुँ । यसरी नेपाल सरकार (मन्त्री परिषद) को २ पटकको निर्णयहरु र साधिकार निकायहरुले दिएको विवरणका आधारमा तहगत रुपमा भवन निर्माण सम्भार डिभिजन कार्यालय देखि मन्त्रालय सम्म आई पुगेर उच्च प्राविधिक, प्रशासनिक तथा कानूनी पदाधिकारीहरुले टिप्पणी तथा राय पेश गरेकोले म निम्न स्तरको पदमा कार्यरत कर्मचारीले मन्त्री परिषदको निर्णयलाई अन्यथा लिन सक्ने अवस्था नहुने भएकोले असल नियतका साथ पदीय जिम्मेवारी निर्वाह गर्ने क्रममा यो कार्य भएको हो । कार्य क्षेत्राधिकारको सम्बन्धमा तत्कालिन अवस्थामा मलाई जानकारी थिएन । तर नेपाल सरकार मन्त्री परिषद समक्ष प्रस्ताव दर्ता गर्ने क्रममा क्षेत्राधिकार निक्यौंल गरेर मात्र प्रस्ताव दर्ता हुने व्यवस्था रहेको सम्मको जानकारी थियो । मैले संशोधित अनुसुची तयार गरेको नभई भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट तयार भई तहगत रुपमा प्राप्त हुन आएको संशोधित अनुसूची संलग्न टिप्पणी फायलमा तोक आदेश पश्चात आवश्यक निर्णयको लागि राय टिप्पणी पेश गरेको मात्र हो । यस सम्बन्धमा प्रचलित ऐन, कानून बमोजिम अधिकार प्राप्त साधिकार निकायहरु मालपोत कार्यालय डिल्लीबजार काठमाडौं लगायतका निकायहरुको पत्र साथ भवन निर्माण सम्भार डिभिजन कार्यालयले तहगतरुपमा टिप्पणी

उठाई भौतिक योजना तथा निर्माण मन्त्रालयको प्रस्तावमा नेपाल सरकार मन्त्री परिषदबाट २०६६/१२/२९ मा संलग्न अनुसूचीहरु समावेश गरी निर्णय भएको देखिएको । पुन: भुमि सुधार तथा व्यवस्था मन्त्रालयको प्रस्तावमा मिति २०६७/१/३१ को नेपाल सरकार मन्त्री परिषदको निर्णय भई उक्त निर्णयहरु कार्यान्वयनको क्रममा रहेकोमा सो क्रममा मानवीय त्रुटीका कारण भएका भुल सुधारका लागि पुन: भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट उठान भई तहगत रुपमा मन्त्रालयमा प्राप्त भएको टिप्पणी फायललाई तोक आदेश बमोजिम राय सहित आवश्यक निर्णयार्थ शाखा प्रमुख समक्ष पेश गरेको हुँ। भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट तहगतरुपमा प्राप्त हुन आएको अनुसूची हेरफेर गरी संशोधन गर्नका लागि प्राप्त हुन आएको टिप्पणी फायललाई आवश्यक निर्णयार्थ शाखा प्रमुख समक्ष पेश गर्दा नेपाल सरकार (मन्त्री परिषद) बाट भएको निर्णय र सो निर्णय साथ संलग्न अनुसूची समेतका कागजात हेरेको थिएँ ।अनुसूची हेरफेर गरी संशोधन गर्ने टिप्पणी फायलमा राय सहित शाखा प्रमुख समक्ष पेश गर्दा पुर्व निर्णय र सो निर्णय साथ संलग्न अनुसूची समेतका कागजात हेरेको थिएँ। भवन निर्माण तथा सम्भार डिभिजन कार्यालयबाट कानून बमोजिमको प्रकृया अनुसार विवरण तयार गरेर तहगत रुपमा पेश हुँदै मन्त्रालयमा प्राप्त भएको टिप्पणी फायलमा उच्च पदस्थ प्राविधीक, प्रशासनिक र कानूनी पदाधिकारीहरुको राय सहित प्रशासनको रायको लागि आएको हुँदा तोक आदेश बमोजिम फायल आवश्यक निर्णयार्थ पेश गरेको हुँ । अरु विषय थाहा छैन । नेपाल सरकार मन्त्री परिषदको पुर्व निर्णयहरु, बिभिन्न प्रचलित कानून द्वारा अधिकार प्राप्त भएका निकायहरुको पत्र समेत समावेश गरी अनुसुची तयार गरेको भनिएकोले तत्कालिन अवस्थामा मैले अविश्वाश गर्ने विषय भएन । उल्लेखित अनुसूचीहरु भवन निर्माण सम्भार डिभिजन कार्यालयले तयार गरेको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन। उल्लेखित समयको टिप्पणी फायलमा मेरो संलग्नता नभएकोले यस बारेमा मलाई जानकारी भएन। सरकारी तथा सार्वजनिक जग्गा, सम्पती समेतको संरक्षण गर्ने दायित्व बिभिन्न प्रचलित कानून द्वारा सम्बन्धित स्थानिय तह, सम्बन्धित मालपोत कार्यालय, सम्बन्धित जिल्ला प्रशासन कार्यालय र सम्बन्धित निकायहरु सबैको रहेको । मैले अनुसूची तयार पारेको होईन। कुनै बदनियत पनि छैन र तोक आदेशको आधारमा पदीय जिम्मेवारी निर्वाह गर्ने क्रममा शाखा प्रमुख समक्ष आवश्यक निर्णयार्थ टिप्पणी पेश गरेको मात्र हो। मैले कुनै किसिमको लाभ लिएको छैन र उक्त टिप्पणी उठाउने क्रममा कुनै किसिमको थाहा जानकारी पनि थिएन। मैले तोक आदेशको आधारमा असल नियतका साथ पदीय जिम्मेवारी निर्वाह गर्ने क्रममा शाखा प्रमुख समक्ष आवश्यक निर्णयार्थ टिप्पणी पेश गरेको मात्र हो। मेरो टिप्पणीलाई समावेश गरी शाखा प्रमुखले आफ्नो राय साथ निर्णयार्थ महाशाखा प्रमुख समक्ष पेश गरेको टिप्पणीमा महाशाखा प्रमुखबाट आन्तरिक प्रशासन शाखाको रायलाई निर्णयको अंगको रुपमा नलिएको देखिन आएकोले मैले पेश गरेको रायको निर्णय प्रकृयामा कुनै भूमिका रहेन। मैले तोक आदेशको आधारमा पदीय जिम्मेवारी निर्वाह गर्ने क्रममा शाखा प्रमुख समक्ष आवश्यक निर्णयार्थ टिप्पणी पेश गरेको मात्र हो। अन्य कुनै किसिमको योजना, मिलेमतो र संलग्नता समेत थिएन। मैले तोक आदेशको आधारमा असल नियतका साथ पदीय जिम्मेवारी निर्वाह गर्ने क्रममा शाखा प्रमुख समक्ष आवश्यक निर्णयार्थ टिप्पणी पेश गरेको मात्र हो, यसमा मेरो कुनै किसिमको बदनियत थिएन, कसैको मिलेमतो र संलग्नतामा योजनाबद्ध तरिकाले सँगठित अपराधको कसूर गरेको होईन भन्ने समेत व्यहोराको प्रतिवादी कृष्ण राउत भन्ने कृष्ण बहादुर राउतको बयान।

२८. **प्रतिवादी हुपेन्द्र मणी के.सी. (निरौला) को बयान (छुट जग्गा दर्ता २०६२)**:

मालपोत कार्यालय डिल्लीबजार काठमाडौंमा २०५९ चैत्र महिना देखी २०६२ सालको असार महिना सम्म मालपोत अधिकृतको रुपमा कार्यरत भई मिति २०७२ माघ २६ गते देखी उप-सचिव पदबाट अनिवार्य अवकाश प्राप्त गरी हाल घरमा नै बसी आएको छु । मालपोत अधिकृतको हैसियतले सम्पादन गर्नु पर्ने नियमित कार्यहरु रजिष्ट्रेसन फाटमा पेश भई रजिष्ट्रेसन फाटबाट लिखत पारित गर्न उपयुक्त देखि पारित हुनको लागि पेश भएको लिखत पारित गर्ने, कार्यालयबाट निर्णय हुनु पर्ने फाईल सम्बन्धित फाटवालाबाट उठान भई सो उपर तहरिर (ना.सु.)बाट चेकजाच भई उपयुक्त देखिएका फाइलहरु म मालपोत अधिकृत समक्ष पेश भए पछि प्रत्यायोजित अधिकार बमोजिमका बिषयका फाईल आफैले निर्णय गर्ने र अधिकार प्रत्यायोजन नभएका बिषयका फाइलहरु निर्णयको लागि प्रमुख मालपोत अधिकृत समक्ष पेश गर्ने र भएका निर्णय तथा लिखत बमोजिम दाखिला खारेज गरी श्रेष्ता खारेज तथा कायम गर्ने समेतका कामहरु सम्पादन गरेको थिए । छुट जग्गा दर्ता समितीमा राख्न निर्णायार्थ पेश गरेको छु जो आदेश भनी लेखिएको ब्यहोराको मिति २०६२। ०२।०२ को टिप्पणी र आदेशमा मालपोत अधिकृतकोरुपमा गरेको दस्तखत मैले गरेको मेरो हो, फरक छैन, मिति २०६२।०२।०२ को समितिको सिफारिसमा मालपोत अधिकृतको हैसियतमा गरेको दस्तखत मैले गरेको मेरो दस्तखत हो, फरक छैन । साविक नगर वडा नं.२३ स कि.नं.२६ क्षेत्रफल ०-१२-२-० को हाल नयाँ नापीको का.म.न.पा.वडा नं. ४ सिट नं.१०२५-१५ कि.नं.१११ क्षे.फ.००३९२.९९ र कि.नं.४८ क्षे.फ. ०००१४.८६ को जग्गा सुनिती राणाको नाममा कायम गर्न निर्णय पर्चामा मालपोत अधिकृतको हैसियतमा गरेको दस्तखत मैले नै गरेको मेरो दस्तखत हो फरक छैन । छुट जग्गा दर्ताको लागि माग भएको जग्गा अधिग्रहण भएको भन्ने विषयमा कार्यालयमा रहेको लगत, जग्गाधनी दर्ता श्रेष्ता, सम्बन्धित ब्यक्तीको निवेदन, स्थानिय निकायको सिफारिस, नापजाँच हुँदाको अबस्थामा तयार भएको क्षेत्रिय किताबबाट देखिएको अबस्था छैन । त्यस्तो जग्गा भोग गर्ने निबेदकले खुलाई नदिएको अबस्थामा सो सम्बन्धी ब्यहोरा मलाई जानकारी नभएको हो, सो जग्गा मध्ये ८ रोपनी जग्गा २०३६।०७।२३ मा कनक शमसेरको नाममा दर्ता हुँदाको समयमा नै उल्लेखित ०-१२-२-० जग्गा तत्कालिन सरकारको नाममा दर्ता हुनु पर्ने हो, अनुसन्धानको क्रममा मलाई देखाईएको तत्कालिन समयको कागजातहरुबाट २०३६ सालमा कनक शमसेरको नाममा कि.नं.२५ को ८-०-०-० जग्गा दर्ता हुँदाको अबस्थामा नै कि.नं.२६ को ०-१२-२-० जग्गा तत्कालिन सरकारको नाममा दर्ता गर्नु पर्ने थियो । जग्गा दर्ताको क्रममा ब्यबस्था भएको मालपोत सम्बन्धी ऐन नियम निर्देशिका बमोजिम आफ्नो पदिय दायित्व अनुरुप फाइल संलग्न कागजात समेतको आधारमा सम्पादन भएको कार्य हो । यसमा मेरो कुनै बदनियत थिएन, यस विषयमा मैले कसैबाट पनि कुनै पनि प्रकार सुविधा लाभ लिएको छैन भन्ने ब्यहोराको प्रतिवादी हुपेन्द्र मणी के.सी. (निरौला) को वयान ।

२९. **प्रतिवादी संजय कुमार साहको बयान (जग्गा सट्टापट्टा २०६७)**:

सरकारले अधिग्रहण गरेको जग्गा सरकारको हुने कुरामा दुईमत हुनै सक्दैन । मिसिल संलग्न रहेको वालुवाटारमा अवस्थित विशिष्ट ब्यक्तिहरुको सरकारी निवास भवन परिसर क्षेत्रको जग्गा विस्तार सम्वन्धी अनुसूची संशोधन गर्ने सम्वन्धमा भौतिक योजना तथा निर्माण मन्त्रालयबाट उठेको मिति ०६७/३/१७ गतेको टिप्पणी तहगत रुपमा उठी सचिव दिप बस्नेतले "मन्त्रिपरिषदबाट निर्णय भई कार्यान्वयनको चरणमा रहेको जग्गाको विवरणमा उल्लेख गरीएका अनुसूचिहरुलाई केही मानबिय भुलबाट त्रुटीहरु देखिन आएकोले सो सच्चाई कार्यान्वयन गर्न गराउन भुल सुधार गरी अनुसूची १,२ र ३ लाई नेपाल सरकार मन्त्रिपरिषदको निर्णयबाटै हुन कानून सम्मत हुने

हुँदा मन्त्रिपरिषदमा प्रस्ताब पेश गर्न माननिय उपप्रधानमन्त्री बाट निर्णय हुन पेश गरेको छु" भनी किटानी राय सहित उपप्रधानमन्त्री समक्ष निर्णयको लागी पेश गर्न भनेको हुँदा मैले सो टिप्पणीमा कुनै राय नलेखी तथा सदर बदर केही नगरी जस्ताको तस्तै "**मा.उप-प्रधानमंत्री जी समक्ष निर्णायथ पेश गरेको छु** " भनी मैले उल्लेख गरी दस्तखत गरेको हुँ ।सो दस्तखत मेरो हो । हेरी चिनी सनाखत समेत गरीदिए । तत्कालिन सचिव दिप बस्नेतले यस प्रकारले किटानी राय लेखेको थियो की सो टिप्पणीलाई मैले सदर गर्ने र बदर गर्ने अवस्थामा म रहेको थिईन । म सो समयमा भर्खर ३० वर्षको मात्र रहेको तथा नियम कानून सम्वन्धमा त्यती जानकार नरहेको हुँदा म समक्ष आउने प्राय:सबै फाईलहरुलाई तत्कालिन ऐन नियम परामर्श शाखाका कानून अधिकृतको राय लिनु हुन भनी उल्लेख गरी मैले फाईलहरु फिर्ता गर्ने गरेको थिएँ तर प्रस्तुत अनुसूची संसोधन गर्ने टिप्पणी फाईलमा म समक्ष आउनु भन्दा पहिले नै कानून अधिकृतको राय समेत लिई सकेको हुँदा मैले निर्णयको लागी मा.उप-प्रधानमंत्री जी समक्ष निर्णायथ पेश गरेको छु भनी लेखिदिएको हूँ ।सो पश्चात मन्त्रालयको प्रकृया अनुसार उप-प्रधानमन्त्री समक्ष फाईल पेश भएको हो । का.म.न.पा. ४ बालुवाटारस्थित विशिष्ट व्यक्तिहरुको सरकारी भवन परिसर क्षेत्रको जग्गा प्राप्त गरी बिस्तार गर्ने बिषयमा नेपाल सरकार, मन्त्रीपरिषदको मिति २०६६/१२/२९ र २०६७/१/३१ मा निर्णय भएका मुख्य फाईलहरु मध्ये म बहाल रहेको मन्त्रालयबाट उठी मिति २०६६/१२/२९ गते मन्त्रिपरिषदबाट निर्णय भएको फाईल म समक्ष पेश भएको थिएन । सो सुरुको विशिष्ट व्यक्तिहरुको सरकारी भवन परिसर बिस्तार गर्ने मुख्य टिप्पणी फाईलमा मेरो हस्ताक्षर रहेको छैन । सो टिप्पणीमा मेरो कही कतै संलग्नता रहेको छैन ।अनुसूची संशोधन गर्ने सम्वन्धमा भौतिक योजना तथा निर्माण मन्त्रालयबाट उठेको मिति ०६७/३/१७ गतेको टिप्पणीमा का.म.न.पा. ४ बालुवाटारस्थित विशिष्ट व्यक्तिहरुको सरकारी भवन परिसर क्षेत्रको जग्गा प्राप्त गरी बिस्तार गर्ने बिषयकोसुरुको टिप्पणीमा मानबिय गल्तीको कारण केही सामान्य त्रुटीहरु भएको भनी सोही मानबिय त्रुटिहरु सच्चाउनको लागी टिप्पणी उठाईएको हो भनी तहगत रुपमा आएको हो । भौतिक योजना तथा निर्माण मन्त्रालयले सो सम्वन्धी उठाएको पहिलेको सुरु टिप्पणी फाईल मन्त्रिपरिषदबाट समेत स्विकृत भई सकेको अवस्थामा सो सुरुको टिप्पणीमा मानबिय त्रुटिको कारण गल्ती भई कार्यान्वियन गर्न अप्ठेरो भएको भनी संसोधन गर्न उठेको टिप्पणी फाईए समेत यसै मन्त्रालयको अधिकार क्षेत्र भित्र पर्ने भनी विश्वस्त भएको थिए । मन्त्रिपरिषदबाट पहिले स्विकृत भई सकेको टिप्पणी फाईलमा मानबिय त्रुटिको कारण केही गल्ती भएको हुँदा सो निर्णय कार्यान्वयनमा अपठ्यारो परेको भनी मिति ०६७/३/१७ गते टिप्पणी तयार भई तहगत रुपमा पेश भई तत्कालिन सचिब दिप बस्नेतले निर्णयको लागी उपप्रधानमन्त्री तथा भौतिक योजना निर्माण मन्त्री समक्ष पेश गर्न भनी किटानी राय सहितपेश गरी मेरो हस्ताक्षर लिई उपप्रधानमन्त्री तथा भौतिक योजना निर्माण मन्त्री समक्ष पेश गरेको हो। सुरुको मुख्य टिप्पणी फाईल सम्वन्धमा पहिले नै नेपाल सरकारले निर्णय गरीसकेको, सो नेपाल सरकाले निर्णय गरीसकेको मुख्य टिप्पणीमा मानबिय गल्तीको कारण कही त्रुटिहरु भएको र सो त्रुटिहरु मात्र सच्चाउनको लागी हो भनी सचिब दिप बस्नेतले उपप्रधानमन्त्री तथा भौतिक योजना निर्माण मन्त्री समक्ष निर्णय हुन पेश गरेको छु भनी किटानी रुपमा राय उल्लेख गरेको साथै ऐन नियम परामर्श शाखाका कानून अधिकृतले समेत राय दिई सकेको हुँदा मानबिय त्रुटी सच्चाउनको लागी सो ०६७/३/१७ को टिप्पणी उठेको भनी उल्लेख भएको हुँदा मैले दस्तखत गरीदिएको हुँ । मैले प्रचलित ऐन कानूनमा भएको ब्यवस्था उल्लंघन गरेको होईन । सो टिप्पणी कानून बिपरित रहेको वा नरहेको मलाई कुनै जानकारी थिएन , छैन । सो टिप्पणी फाईल सम्वन्धमा कोही कसैले बदनियत पूर्वक कार्य गरेको भनी कहि कतै बाट सुईको समेत पाएको थिईनं। मैले समेत बदनियत पूर्वक कुनै काम गरेको थिईनं। म समक्ष सो संशोधन

प्रस्तावको टिप्पणी निर्णय वा रायको लागी पेश भएको भए म सो संशोधन प्रस्तावको टिप्पणीमा कुनै राय दिन वा निर्णय गर्नु नेपाल सरकार ( मन्त्री परिषद ) समक्ष पेश भएको साविक प्रस्ताव र सो उपर नेपाल सरकार (मन्त्री परिषद)बाट भएको निर्णय अध्ययन गर्ने थिएँ ।अध्ययन गरेको हो वा होईन लामो समय भएको हुँदा हाल एकिन याद छैन । सर्वप्रथम प्रश्नमा सोधे जस्तो उपप्रधानमन्त्री समक्ष मैले सो संसोधन गर्ने टिप्पणी फाईल मैले पेश गरेको नभई तत्कालिन सचिब दिप बस्नेतले पेश गरेको हो । मलाई मार्फत मात्र बनाएको हो । जसको पुष्टी तत्कालिन सचिब दिप बस्नेतको राय टिप्पणीबाट सहजै हुन्छ । सर्वोच्च अदालतको फैसला र मालपोत कार्यालय डिल्लीबजारको च.नं. ९००९, मिति २०६६/१०/१० गतेको पत्र सम्वन्धमा मलाई केही थाहा छैन । गलत विवरण पठाउने सम्वन्धित मालपोत कार्यालय जिम्मेवार हुन्छ । भौतिक योजना योजना निर्माण मन्त्रालयबाट उठेको मिति २०६६/१२/१८ गतेको टिप्पणी मार्फत सो जग्गाहरु ब्यक्तिलाई गएको हुनुपर्छ। सो टिप्पणीमा मेरो कुनै संलग्नता रहेको छैन । मेरो हस्ताक्षर समेत रहेको छैन । मैले कुनै पनि टिप्पणी प्रस्ताब निर्णयार्थ पेश गरेको छैन । तत्कालिन सचिब दिप बस्नेतले मानविय त्रुटी संसोधन गर्ने सम्वन्धी एउटा मात्र टिप्पणी फाईल मेरो हस्ताक्षर समेत गराई तत्कालिन उपप्रधानमन्त्री तथा भौतिक योजना तथा निर्माण मन्त्री समक्ष पेश गरेको हो । मैले किर्ते र झूठो व्यहोराको तथ्यांक राखी टिप्पणी निर्णयार्थ पेश गरी प्रस्ताव पारित गरे, गराएको छैन । म कुनै आपराधिक कार्यमा संलग्न रहेको छैन। सरकारी तथा सार्वजनिक जग्गा सम्पती समेतको संरक्षण गर्ने दायित्व सबै नागरीकको हो । सर्व प्रथम बयानको क्रममा देखाईएको कागजात अनुसार मात्रै पनि सवालमा सोधिएजस्तो नेपाल सरकारको नाममा रहेको जग्गा हिनामिना भएको मात्र नभई मैले हस्ताक्षर गरेको टिप्पणी फाईलबाट नेपाल सरकारको केही जग्गाहरु संरक्षित समेत भएको देखिन्छ भने केही जग्गाहरु क्षति समेत भएको देखिन्छ । जसबाट समेत बालुवाटारमा अवस्थित विशिष्ट ब्यक्तिहरुको सरकारी निवास भवन परिसर क्षेत्रको जग्गा विस्तार सम्वन्धी अनुसुची संसोधन गर्ने प्रस्ताब पेश गर्दा कुनै लाभ नलिएको बुझ्न सकिन्छ । सुरुको मुख्य टिप्पणी फाईल सम्वन्धमा पहिले नै नेपाल सरकारले निर्णय गरीसकेको थियो। सो नेपाल सरकारले निर्णय गरीसकेको मुख्य टिप्पणीमा मानबिय गल्तीको कारण केही त्रुटिहरु भएको र सो कारण मन्त्रिपरिषदको निर्णय कार्यान्वयन गर्न अप्ठेरो भएको भनी तहगत रुपमा उठी आएको फाईलमा तत्कालिन सचिब दिप बस्नेतले उपप्रधानमन्त्री तथा भौतिक योजना निर्माण मन्त्री समक्ष निर्णय हुन पेश गरेको छु भनी किटानी रुपमा राय उल्लेख गरी मेरो समेत हस्ताक्षर लिई तत्कालिन उपप्रधानमन्त्री तथा भौतिक योजना निर्माण मन्त्री समक्ष पेश गरेको हो । यस सम्बन्धमा बिचारणिय कुरा के छ भने नेपाल सरकार (मन्त्री परिषद) मा पेश हुने प्रस्तावको फाईल म समक्ष ल्याउनु पर्ने कुनै बाध्यता नरहेकोले प्रस्तुत प्रस्तावको फाईल भन्दा यसै सन्दर्भका अन्य प्रस्तावका फाईलहरु म समक्ष ल्याएका समेत थिएनन् । काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना गर्नको लागी सँगठित रुपमा योजना बनाई झुठो र कीर्ते ब्यहोराको कागजातहरु तयार गरी सोही कागजातहरुको आधारमा पिरामिड शैलिमा तहगत जिम्मेवारी बाँडफाँड गरी सरकारी जग्गा हिनामिना गरी मोही भनिएका ब्यक्ति, सट्टापट्टा र बाटोको नाममा समेत कायम गरी गराई कानूनको दुरुपयोग गरी बदनियतपूर्वक राज्यलाई हानी हुने र ब्यक्ति विशेषलाई फाईदा हुने गरी आपराधिक कार्य मैले गरेको छैन । सो समयमा म भौतिक योजना तथा निर्माण मन्त्रालयको राज्य मन्त्री भएको कारणले मात्र दोषी हुन सक्दिन । मैले हस्ताक्षर गरेको समयमा सँगठित निवारण ऐन, २०७० लागु तथा कार्यान्वयन भएको थिएन । कुनै पनि कानून भुत लक्षित रुपमा लागु हुन सक्दैन भनी नेपालको संबिधानले ब्यवस्था गरेको ब्यहोरा सर्बबिदितै रहेको छ भन्ने ब्यहोराको प्रतिवादी संजय कुमार साहको बयान ।

३०. **प्रतिवादी चन्द्रदेव जोशीको बयान (टिकिन्छा गुठी २०६९):**

"मिसिल संलग्न रहेको मिति २०६९/०४/०७ गते तहगतरुपमा तत्कालिन सचिव दिनेश हरी अधिकारीबाट म समक्ष पेश भएको टिप्पणी मैले मिति २०६९/०४/०८ गते मैले सदर गर्दा तत्कालिन सचिव दिनेश हरी अधिकारीको विश्वाशमा परी सदर गरेको हो, निज भन्दा तल्लो तहका कर्मचारीहरुले के कसरी के कुन ऐन नियमका आधारमा उक्त टिप्पणी उठाई तहगतरुपमा अगाडी बढाएका थिए, मलाई थाहा भएन, निज दिनेश हरी अधिकारीलाई नै थाहा होला, उक्त टिप्पणी सदर गरे वापत मैले कुनै लाभ लिएको छैन, मलाई कारवाही हुनु पर्ने होईन" भन्ने समेत व्यहोराको प्रतिवादी चन्द्रदेव जोशीको बयान।

३१. **प्रतिवादी बिजय कुमार गच्छदारको बयान (जग्गा सट्टापट्टा २०६७):**

म मिति २०६६/०२/११ गते देखि २०६७/१०/२२ गते सम्म उप प्रधानमन्त्री र भौतिक योजना तथा निर्माण मन्त्रीको पदमा बहाल रहेको थिएँ। मिति २०६६।१२।१९ र मिति २०६७।०३।२८ गतेको टिप्पणी आदेश देखाउँदा देखि पाएँ, सवालमा उल्लेखित टिप्पणीलाई सदर भनी मिति २०६६/१२/१९ गते समेतमा गरेको दस्तखत मेरो हो, हेरी चिन्ही सनाखत समेत गरी दिएँ। तत्कालिन भौतिक योजना मन्त्रालयका सचिवले पेश गरेको प्रस्तावलाई सैद्धान्तिक सहमतिको लागि मन्त्री परिषदमा पेश गर्ने प्रस्तावलाई मैले मन्त्री परिषदमा पठाउने सहमति दिएको हुँ। जग्गा सम्बन्धी काम कारवाही भौतिक योजना तथा निर्माण मन्त्रालयको कार्यक्षेत्र भित्र पर्ने विषय होईन। तत्कालिन सचिवले पेश गरेको प्रस्तावलाई मन्त्री परिषदमा पेश गर्नको लागि सहमति मात्र प्रदान गरेको हुँ। यस सम्बन्धमा मैले सम्मानित बिशेष अदालतमा गरेको बयानको प्रतिलिपी यसै साथ पेश गरेको छु, उक्त बयान समेतलाई आधार मानी पाउँ। जग्गा सम्बन्धी बिषय भुमिसुधार मन्त्रालय सँग सम्बन्धित बिषय हो। यो भौतिक योजना मन्त्रालयसँग सम्बन्धित बिषय होईन। मन्त्री समक्ष पेश गर्ने प्रस्तावलाई प्रचलित ऐन कानूनको परिधि भित्र रहि कानून सम्मत ढंगबाट तयार गरी ल्याउने जिम्मेवारी स्थायी सरकारको रुपमा रहेका कर्मचारीको हो, कर्मचारीहरु प्रति मेरो पुर्ण विश्वाश रहेको छ। बिभिन्न तहका कर्मचारीहरुले तहगतरुपमा उठाएको टिप्पणी र प्रस्ताव प्रचलित ऐन कानूनको परिधि भित्र रही नियमसँगत ढंगबाट प्रस्ताव तयार पारी पेश गरे भनी पुर्ण विश्वस्त भई मन्त्री परिषद समक्ष प्रस्ताव पेश गर्न स्वीकृती दिएको हुँ। उल्लेखित विषयका सम्बन्धमा टिप्पणी प्रस्ताव उठाउने कर्मचारीहरु नै पुर्ण रुपमा जिम्मेवार रहन्छन भन्ने समेत ब्यहोराको प्रतिवादी विजय कुमार गच्छदारले गरेको वयान।

३२. **बुझिएका मानिसहरुले गरेको घटना विवरण कागज:**

क) **जाहेरवाला मुकुन्द प्रसाद पन्त कागज (जग्गा फिर्ता २०४९):**

लिखितम जिल्ला काभ्रे चौरी देउराली गा.पा.वडा नं.८ घर भई काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ७ चावहिलमा बसोबास गर्ने हाल नेपाल सरकार गृह मन्त्रालय समरजंगकम्पनी कार्यालयमा कार्यरत ऐ. कार्यालयका प्रमुख मुकुन्द प्रसाद पन्त (सम्पर्क नं. ९८४१३५६७३०) आगे तपाईको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी रुक्म शमशेर राणा समेत भएको निज प्रतिवादीहरु समेतले तत्कालीन श्री ५ को सरकारबाट रितपूर्वक मुआब्जा दिई अधिग्रहण गरिएको काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरूबाटै झूठो र किर्ते समेतको फरक व्यहोराको टिप्पणी प्रस्ताव पेश गरी तथा म.प. लाई तथ्यगत भ्रममा पारी मन्त्रिपरिषदको निर्णय विपरित समेत गरी बदनियतपूर्वक राज्यलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी टिकिन्छा गुठीको नाममा ४-१४-३-२ रोपनी जग्गा दर्ता गरी सरकारी जग्गा हिनामिना

र हानीनोक्सानी गरेकोहुँदा निजहरुलाई  साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम तथा प्रस्तुत कसूरले हालको कानूनी व्यवस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम, साविकको मुलुकी ऐन किर्ते कागजको महलको १,७, ९ र १२ नं. तथा हाल प्रचलित मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद -२५,लिखत सम्बन्धी कसूरको दफा २७६ बमोजिम तथाअन्य प्रचलित कानून बमोजिम कारबाही गरी बिगो बमोजिम क्षतिपूर्ति समेत दिलाई भराई पाउँ भनी तपाईंले ठगी तथा लिखत/ किर्ते मुद्दामा दिएको जाहेरी दरखास्त दर्ता गरी अनुसन्धान कार्य अगाडि बढाउने क्रममा तपाईलाई यस व्यूरोमा बोलाई अनुसन्धान अधिकृतबाट सोधनी गरीन्छ कितपाईंले लिखत/किर्ते तथा ठगी शीर्षकमा दिएको जाहेरी दरखास्त यस व्यूरोमा प्राप्त भई मिति २०७६।११।०२ गते मु.द.नं. २५ मा दर्ताभई अनुसन्धान भई रहेकोमा तपाईंले दिएको जाहेरी अनुसार ठगी तथा किर्ते/ लिखत कसूरमा अनुसन्धान गरीपाउँ भनी उल्लेख गर्नु भएको देखिन्छ भने सोही बिषयमासम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूतमणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका बिरुद्धविशेष अदालतबबरमहल काठमाडौंमा मिति २०७६।१०।२२ गते भ्रष्टाचार मुद्दाको आरोप पत्र दर्ता भई सकेको हुँदा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क) - "भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश वर्षसम्म कैद र एकलाख रुपैयासम्म  जरिवाना ।"  भन्ने प्रावधानले भ्रष्टाचार हुनेमा ठगी तर्फ सजाय नहुने कानूनी व्यवस्था भएको सन्दर्भमा तपाईंको भन्नु के छ ? स्पष्ट रुपमा खुलाई लेखाई दिनुहोस् भनी अनुसन्धान अधिकृतबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो, यसमा मेरो भनाई यस प्रकार रहेको छ :-मिति २०७६।११।०२ गते यस व्यूरोमा दिएको जाहेरी दरखास्त मैले नै दिएको हुँ, घटना हुँदाका समयमा मुलुकी ऐन, २०२० बहाल रहेको र मैले जाहेरी दरखास्त दिंदाका बखत मुलुकी अपराध संहिता, २०७४ लागू भैसकेको हुँदा पछिल्लो कानूनी प्राबधान पनि उल्लेख गरेको हुँ, सो जाहेरी दरखास्तमा भएको रेखात्मक तथा लेखात्मक सहीछाप मेरो हो, हेरी चिन्ही सनाखत गरीदिएँ र नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममागैह्र कानूनी रुपले दर्ता कायम गरी व्यक्ति विशेषको नाममा मोही कायम गराएको सन्दर्भमा कानून बमोजिम कारबाही गरीपाउँ भनी  मैले दिएको जाहेरी दरखास्त यस व्यूरोको कसूर दर्ता किताबमा मिति २०७६।११।०२ गते मु.द.नं. २५ मा दर्ता भई अनुसन्धानरत अबस्थामै छ । उक्त जाहेरी दरखास्तमा मैले मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ बमोजिम  ठगी कसूरमा समेतमा अनुसन्धान गरीपाउँ भनी जाहेरी दरखास्तमा उल्लेख गरी दिएकोमा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क) - "भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश वर्षसम्म कैद र एकलाख रुपैयासम्म जरिवाना ।" भन्ने प्रावधान पनि रहेको, सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूतमणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका१७५ जना प्रतिवादीहरु बिरुद्ध विशेष अदालत बबरमहल काठमाडौंमा मिति २०७६।१०।२२ गतेभ्रष्टाचार सम्बन्धी आरोपपत्र ( मुद्दा ) दर्ता भएको भन्ने यसै ब्यूरो मार्फत जानकारी पाएँ,यसरी भ्रष्टाचारमा आरोपत्र ( मुद्दा) दर्ता  भएको अबस्थामा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क) मा

बर्णित कानूनी प्रावधान दृष्टिगत गरी  लिखत / किर्ते तर्फ अनुसन्धान गरीपाऊँ, साथै अनुसन्धानको क्रममा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगले मुद्दा दर्ता गरी मागदावी लिएका १७५ जना भन्दा बढी प्रतिवादी खुल्न आएमा थप खुल्न आएका प्रतिवादीहरु तथा मैले दिएको जाहेरी दरखास्तमा उल्लेख भएका भन्दा बढी प्रतिवादीहरु खुल्न आएमा थप खुल्न आउने प्रतिवादीहरुलाई समेत लिखत /किर्तेका अलावा सम्बन्धीत कसूरमा कानून बमोजिम गरी पाऊँभनी यो कागज लेखी लेखाई सहीछाप गरी श्री प्रहरी प्रधान कार्यालय केन्द्रीय अनुसन्धान व्यूरो महाराजगञ्ज काठमाडौं मार्फत नेपाल सरकारमा चढाएँ  भन्ने समेत व्यहोराको मिति २०७७।०२।०९ गतेको मुकुन्द प्रसाद पन्तले गरी दिएको कागज।

**क१) <u>जाहेरवाला मुकुन्द प्रसाद पन्त कागज (छुट जग्गा २०६२):</u>**

लिखितम जिल्ला काभ्रे चौरी देउराली गा.पा. वडा नं. ८ घर भई काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ७ चावहिलमा बसोबास गर्ने हाल नेपाल सरकार  गृह मन्त्रालय समरजंग कम्पनी कार्यालयमा कार्यरत ऐ. कार्यालयका प्रमुख मुकुन्द प्रसाद पन्त (सम्पर्क नं. ९८४१३५६७३०) आगे तपाईको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी हेमाद्री शमशेर राणा समेत भएको २०२१ सालमै अधिग्रहण भई आएको सुनीति राणाको हक नपुग्ने श्री ५ को सरकारको ललिता निवासको जग्गा २०३६।०७।२३ मा नै नेपाल सरकारको नाममा स्वत: दर्ता हुनु पर्ने कि.नं.२६ को ०-१२-२-० क्षेत्रफल जग्गा स्थानीय निकायको फरक व्यहोराको झुठो सिफारिस, व्यहोरा फरक भएको कीर्ते सर्जमिन मुचुल्का लगायत तयार पारी गैह्रकानूनीरुपमा मालपोत कार्यालय, तत्कालीन समयमा कार्यरत कर्मचारीहरु समेतको मिलेमतो र बदनियतमा आफ्नै कार्यालयमा भएको उक्त जग्गाको साविक श्रेस्ता तथा श्रोतको बिषयमा यथार्थ जानकारी हुँदा हुँदै सो विपरीत आधार प्रकृयाको आड हाली उल्लेखित ०-१२-२-० क्षेत्रफल जग्गा मिति २०६२।०२।०३ गतेको मालपोत कार्यालयको निर्णयबाट सुनीति राणाको नाममा जग्गा दर्ता गरी सरकारी सम्पत्ति हिनामिना तथा हानि नोक्सानी गरेको देखिएको हुँदा निज प्रतिवादीहरुलाई साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं. बमोजिम सजाय गर्न तथा प्रस्तुत कसूरले हालको कानूनी व्यबस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ र दफा २५१ बमोजिम र साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १, ७, ९, १२ नं. र हाल प्रचलित मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद -२५ , लिखत सम्बन्धी कसूरको दफा २७६ बमोजिम तथा अन्य प्रचलित कानून बमोजिम समेत कारबाही गरी बिगो बमोजिमको क्षतिपुर्ति समेत दिलाई भराई पाउँ भनी  तपाईंले ठगी तथा लिखत/ कीर्ते मुद्दामा दिएको जाहेरी दरखास्त दर्ता गरी अनुसन्धान कार्य अगाडि बढाउने क्रममा तपाईलाई यस व्यूरोमा बोलाई अनुसन्धान अधिकृतबाट सोधनी गरीन्छ कि तपाईंले लिखत/कीर्ते तथा ठगी शीर्षकमा दिएको जाहेरी दरखास्त यस व्यूरोमा प्राप्त भई मिति २०७६।११।०२ गते मु.द.नं. २६ मा दर्ता भई अनुसन्धान भई रहेकोमा तपाईंले दिएको जाहेरी अनुसार ठगी तथा कीर्ते/ लिखत कसूरमा अनुसन्धान गरीपाउँ भनी उल्लेख गर्नु भएको देखिन्छ भने सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूतमणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका बिरुद्ध बिशेष अदालत बबरमहल काठमाडौंमा मिति २०७६।१०।२२ गते भ्रष्टाचार मुद्दाको आरोप पत्र दर्ता भई सकेको हुँदा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क) - "भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश बर्षसम्म कैद र एकलाख रुपैयासम्म  जरिवाना।"  भन्ने

प्रावधानले भ्रष्टाचार हुनेमा ठगी तर्फ सजाय नहुने कानूनी व्यबस्था भएको सन्दर्भमा तपाईंको भन्नु के छ? स्पष्ट रुपमा खुलाई लेखाई दिनुहोस भनी अनुसन्धान अधिकृतबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो, यसमा मेरो भनाई यस प्रकार रहेको छ, मिति २०७६।११।०२ गते यस व्यूरोमा दिएको जाहेरी दरखास्त मैले नै दिएको हुँ, घटना हुँदाका समयमा मुलुकी ऐन, २०२० बहाल रहेको र मैले जाहेरी दरखास्त दिंदाका बखत मुलुकी अपराध संहिता, २०७४ लागू भैसकेको हुँदा पछिल्लो कानूनी प्राबधान पनि उल्लेख गरेको हुँ, सो जाहेरी दरखास्तमा भएको रेखात्मक तथा लेखात्मक सहीछाप मेरो हो, हेरी चिन्ही सनाखत गरीदिएँ र र २०२१ सालमै अधिग्रहण भई आएको कि.नं.२६ को ०-१२-२-० क्षेत्रफल भएको सरकारी जग्गा मिति २०६२।०२।०३ मा सुनीति राणाको नाममा नामसारी गराएको सन्दर्भमा कानून बमोजिम कारवाही गरीपाउँ भनी मैले दिएको जाहेरी दरखास्त यस व्यूरोको कसूर दर्ता किताबमा मिति २०७६।११।०२ गते मु.द.नं. २६ मा दर्ता भई अनुसन्धान भई रहेकै छ। उक्त जाहेरी दरखास्तमा मैले मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ बमोजिम ठगी कसूरमा समेतमा अनुसन्धान गरीपाउँ भनी जाहेरी दरखास्तमा उल्लेख गरी दिएकोमा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क)- "भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश बर्षसम्म कैद र एकलाख रुपैयासम्म जरिवाना।" भन्ने प्रावधान पनि रहेको, सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूतमणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका १७५ जना प्रतिवादीहरु बिरुद्ध विशेष अदालत बबरमहल काठमाडौंमा मिति २०७६।१०।२२ गते नै भ्रष्टाचार सम्बन्धी आरोपपत्र (मुद्दा) दर्ता भई सकेकोले मैले दिएको जाहेरी दरखास्त अनुसार लिखत/ किर्ते तर्फ मात्र अनुसन्धान गरी कानून बमोजिम भएमा मेरो मञ्जूर छ, साथै यस व्यूरोबाट अख्तियार दुरुपयोग अनुसन्धान आयोगले आरोपपत्रमा मागदावी लिएका १७५ जना भन्दा थप खुल्ने प्रतिवादीहरु र अनुसन्धानबाट थप खुल्न आउने प्रतिवादीहरुलाई लिखत /कीर्तेका अलावा सम्बन्धित कसूरमा कानून बमोजिम गरी पाउँ भन्ने ब्यहोराको मुकुन्द प्रसाद पन्तको कागज।

**क२) <u>जाहेरवाला मुकुन्द प्रसाद पन्त कागजको व्यहोरा (सट्टापट्टा २०६७):</u>**

लिखितम जिल्ला काभ्रेपलान्चोक चौरी देउराली गा.पा.वडा नं. ८ घर भई काठमाडौं महानगरपालिका वडा नं. ७ चावहिलमा बसोबास गर्ने हाल नेपाल सरकार गृह मत्रालय समरजंग कम्पनी कार्यालयमा कार्यरत ऐ. कार्यालयका प्रमुख मुकुन्द प्रसाद पन्त (सम्पर्क नं. ९८४१३५६७३०) आगे तपाँईको जाहेरी वादी नेपाल सरकार प्रतिवादी श्रीकृष्ण महर्जन समेत भएको निज प्रतिवादीहरु समेतले तत्कालिन श्री ५ को सरकारबाट रितपुर्वक मुआब्जा दिई अधिग्रहण गरिएको काठमाडौं जिल्ला काठमाडौं माहानगरपालिका वडा नं. ४ बालुबाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरुबाटै झुठो र किर्ते समेतको फरक व्यहोरको टिप्पणी प्रस्ताव पेश गरी तथा स.प लाई तथ्यगत भ्रममा पारी मन्त्रिपरिषदको निर्णय विपरित समेत गरी बदनियतापूर्वक राज्यलाई हानी हुने र अन्य व्यत्तिलाई फाइदा हुने गरी बालुबाटार स्थित बिशिष्ट ब्यक्तिहरुको सरकारी परिसरको बिस्तारको क्रममा ललिता निबास क्याम्प भित्रको १८-१४-३-२ रोपनी सरकारी जग्गा ब्यक्ति तथा बाटोको नाममा दर्ताको गरी र करीब १४ रोपनी जग्गा माधबीसुबेदी लगायत १३ जना र डि.एल.एफ.डेभलपर्स -१ को नाममा समेत सट्टापट्टा स्वरुप दिई जम्मा ३३-६-२-० रोपनी सरकारी जग्गा हिनामिना र हानिनोक्सानी गरेको हुँदा निजहरुलाई साविक मुलुकी ऐन,२०२० ठगीको महलको १ नं. मा परिभाषित कसुर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम तथा प्रस्तुत कसुरले हालको कानुनी व्यवस्थामा

समेत निरन्तरता पाई मुलुकी अपराध संहिता,२०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसुर अपराध संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम, साविकको मुलुकी ऐन कीर्ते कागजको महलको १,७,९ र १२ नं. तथा हाल प्रचलित मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद -२५, लिखत सम्बन्धी कसुरको दफा २७६ बमोजिम तथा अन्य प्रचलित कानुन बमोजिम कारबाही गरी बिगो बमोजिम क्षतिपूर्ति समेत दिलाई भराई पाउँ भनी तपाँईलाई ठगी तथा लिखत/ किर्ते मुद्दामा दिएको जाहेरी दरखास्त दर्ता गरी अनुसन्धान कार्य अगाडि बढाउने क्रममा तपाँईलाई यस व्युरोमा बोलाई अनुसन्धान अधिकृतबाट सोधनी गरीन्छ कितपाईले लिखत/ किर्ते ठगी शीर्षकमा दिएको जाहेरी दरखास्त यस व्युरोमा प्राप्त भई मिति २०७६/११/०२ गते मु.द.नं. २७ मा दर्ता भई अनुसन्धान भई रहेकोमा तपाँईले दिएको जाहेरी अनुसार ठगी तथा लिखत/ किर्ते कसुरमा अनुसन्धान गरीपाउँ भनी उल्लेख गर्नु भएको देखिन्छ भने सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूत मणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका बिरुद्द बिशेष अदालत बबरमहल काठमाणडौंमा मिति २०७६/१०/२२ गते भ्रष्टाचार मुद्दाको आरोप पत्र दर्ता भई सकेको हुँदा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क) “ भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश बर्षसम्म कैद र एक लाख रुपैया सम्म जरिबाना । भन्ने प्रावधानले भ्रष्टाचार हुनेमा ठगी तर्फ सजाय नहुने कानुनी व्यबस्था भएको सन्दर्भमा तपाँईको भन्नु के छ? स्पष्ट रुपमा खुलाई लेखाई दिनुहोस भनी अनुसनधान अधिकृतबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो, यसमा मेरो भनाई यस प्रकार रहेको छ , मिति २०७६/११/०२ गते यस व्युरोमा दिएको जाहेरी दरखास्त मैले नै दिएको हुँ, घटना हुँदाका समयमा मुलुकी ऐन, २०२० बहाल रहेको र मैले जाहेरी दरखास्त दिंदा बखत मुलुकी अपराध संहिता, २०७४ लागु भैसकेको हुँदा पछिल्लो कानुनी प्राबधान पनि उल्लेख गरेको हुँ, सो जाहेरी दरखास्त भएको रेखात्मक तथा लेखात्मक सहीछाप मेरो हो, हेरी चिन्ही सनाखत गरीदिएँ र नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गा ब्यत्ति तथा सस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम गराएको तथा सट्टापट्टा सोधभर्ना गरी ब्यक्ति तथा संस्थाको नाममा जग्गा दर्ता गरे गराएको सन्दर्भमा कानून बमोजिम कारबाही गरीपाउँ भनी मैले दिएको जाहेरी दरखास्त यस व्युरोको कसूर दर्ता किताबमा मिति २०७६/११/०२ गते मु.द.नं.२७ मा दर्ता भई अनुसन्धान भई रहेकै छ। उक्त जाहेरी दरखास्तमा मैले मुलुकी अपराध संहिता , २०७४ को दफा २४९ को उपदफा ३ बमोजिम ठगी कसूरमा समेतमा अनुसन्धान गरीपाउँ भनी जाहेरी दरखास्तमा उल्लेख गरी दिएकोमा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क)–“ भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश बर्षसम्म कैद र एक लाख रुपैया सम्म जरिवाना। “भन्ने प्रावधान पनि रहेको, सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्युत मणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेत १७५ जना प्रतिवादीहरु बिरुद्द सम्मानित विशेष अदालत बबरमहल काठमाडौंमा मिति २०७६/१०/०२ गते भ्रष्टाचार मुद्दाको अरोप पत्र (मुद्दा) दर्ता भएको भन्ने यसै ब्युरो मार्फत जानकारी पाएँ, यसरी भ्रष्टाचारमा आरोपपत्र (मुद्दा) दर्ता भएको अवस्थामा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३(क) मा वर्णित कानुनी प्रबाधान दृष्टिगत गरी लिखित/कीर्ते तर्फ अनुसनधान गरी पाउँ, साथै अनुसन्धानको क्रममा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगले मुद्दा दर्ता गरी मागदाबी लिएका १७५ जना भन्दा बढी

प्रतिवादीहरु खुल्न आएमा थप खुल्न आउने प्रतिवादीहरुलाई तथा मैले दिएको जाहेरी दरखास्तमा उल्लेख भएका भन्दा बढी प्रतिवादीहरु खुल्न आएमा थप खुल्न आउने प्रतिवादीहरुलाई समेत लिखित/कीर्तेका अलावा सम्बन्धित कसुरमा कानून बमोजिम गरी पाउँ भन्ने समेत व्यहोराको जाहेरवाला मुकुन्द प्रसाद पन्तको कागज।

**क३) जाहेरवाला मुकुन्द प्रसाद पन्त कागज (टिकिन्छा गुठी २०६९):**

लिखितम जिल्ला काभ्रे चौरी देउराली गा.पा.वडा नं.८ घर भई काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ७ चावहिलमा बसोबास गर्ने हाल नेपाल सरकार गृह मन्त्रालय समरजंग कम्पनी कार्यालयमा कार्यरत ऐ. कार्यालयका प्रमुख मुकुन्द प्रसाद पन्त (सम्पर्क नं. ९८४१३५६७३०) आगे तपाईको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी रुक्म शमशेर राणा समेत भएको निज प्रतिवादीहरु समेतले तत्कालीन श्री ५ को सरकारबाट रितपूर्वक मुआब्जा दिई अधिग्रहण गरिएको काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरूबाटै झूठो र कीर्ते समेतको फरक व्यहोराको टिप्पणी प्रस्ताव पेश गरी तथा म.प. लाई तथ्यगत भ्रममा पारी मन्त्रिपरिषदको निर्णय विपरित समेत गरी बदनियतपूर्वक राज्यलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी टिकिन्छा गुठीको नाममा ४-१४-३-२ रोपनी जग्गा दर्ता गरी सरकारी जग्गा हिनामिना र हानी नोक्सानी गरेको हुँदा निजहरुलाई साविकको मुलुकी ऐन, २०२० ठगीको महलको १ नं. मा परिभाषित कसूर अपराध गरेकोले सोही ऐनको ४ नं बमोजिम तथा प्रस्तुत कसूरले हालको कानूनी व्यवस्थामा समेत निरन्तरता पाई मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद २१ को दफा २४९ र २५१ बमोजिम ठगी सम्बन्धी कसूर अपराध भई सोही संहिताको दफा २४९ को उपदफा ३ र दफा २५१ को उपदफा ३ बमोजिम, साविकको मुलुकी ऐन कीर्ते कागजको महलको १, ७, ९ र १२ नं. तथा हाल प्रचलित मुलुकी अपराध संहिता, २०७४ को परिच्छेद -२५, लिखत सम्बन्धी कसूरको दफा २७६ बमोजिम तथा अन्य प्रचलित कानून बमोजिम कारबाही गरी बिगो बमोजिम क्षतिपूर्ति समेत दिलाई भराई पाउँ भनी तपाईले ठगी तथा लिखत/ कीर्ते मुद्दामा दिएको जाहेरी दरखास्त दर्ता गरी अनुसन्धान कार्य अगाडि बढाउने क्रममा तपाईलाई यस ब्यूरोमा बोलाई अनुसन्धान अधिकृतबाट सोधनी गरीन्छ कि तपाईले लिखत/कीर्ते तथा ठगी शीर्षकमा दिएको जाहेरी दरखास्त यस ब्यूरोमा प्राप्त भई मिति २०७६।११।०२ गते मु.द.नं. २५ मा दर्ता भई अनुसन्धान भई रहेकोमा तपाईले दिएको जाहेरी अनुसार ठगी तथा कीर्ते/ लिखत कसूरमा अनुसन्धान गरीपाउँ भनी उल्लेख गर्नु भएको देखिन्छ भने सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूतमणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका बिरुद्ध बिशेष अदालत बबरमहल काठमाडौंमा मिति २०७६।१०।२२ गते भ्रष्टाचार मुद्दाको आरोप पत्र दर्ता भई सकेको हुँदा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३(क)- "भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश बर्षसम्म कैद र एकलाख रुपैयासम्म जरिवाना।" भन्ने प्रावधानले भ्रष्टाचार हुनेमा ठगी तर्फ सजाय नहुने कानूनी ब्यवस्था भएको सन्दर्भमा तपाईंको भन्नु के छ? स्पष्ट रुपमा खुलाई लेखाई दिनुहोस् भनी अनुसन्धान अधिकृतबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो, यसमा मेरो भनाई यस प्रकार रहेको छ :- मिति २०७६।११।०२ गते यस ब्यूरोमा दिएको जाहेरी दरखास्त मैले नै दिएको हुँ, घटना हुँदाका समयमा मुलुकी ऐन, २०२० बहाल रहेको र मैले जाहेरी दरखास्त दिंदाका बखत मुलुकी अपराध संहिता, २०७४ लागू भैसकेको हुँदा पछिल्लो कानूनी प्राबधान पनि उल्लेख गरेको हुँ, सो जाहेरी दरखास्तमा भएको रेखात्मक तथा लेखात्मक सहीछाप मेरो हो, हेरी चिन्ही सनाखत गरीदिएँ र नेपाल

सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा गैह्र कानूनी रुपले दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम गराएको सन्दर्भमा कानून बमोजिम कारबाही गरीपाउँ भनी मैले दिएको जाहेरी दरखास्त यस ब्यूरोको कसूर दर्ता किताबमा मिति २०७६।११।०२ गते मु.द.नं. २५ मा दर्ता भई अनुसन्धानरत अबस्थामै छ । उक्त जाहेरी दरखास्तमा मैले मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ बमोजिम ठगी कसूरमा समेतमा अनुसन्धान गरीपाउँ भनी जाहेरी दरखास्तमा उल्लेख गरी दिएकोमा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३(क)- "भ्रष्टाचार हुनेमा बाहेक नेपाल सरकार वा नेपाल सरकारको पूर्ण वा अधिकांश स्वामित्व वा नियन्त्रणमा भएको कुनै संस्थालाई ठगी गरेमा दश बर्षसम्म कैद र एकलाख रुपैयासम्म जरिवाना ।" भन्ने प्रावधान पनि रहेको, सोही बिषयमा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगका अनुसन्धान अधिकृत श्री अच्यूतमणि नेउपाने समेतको प्रतिवेदनले वादी नेपाल सरकार प्रतिवादी कलाधर देउजा समेतका १७५ जना प्रतिवादीहरु बिरुद्ध विशेष अदालत बबरमहल काठमाडौंमा मिति २०७६।१०।२२ गते भ्रष्टाचार सम्बन्धी आरोपपत्र (मुद्दा) दर्ता भएको भन्ने यसै ब्यूरो मार्फत जानकारी पाएँ, यसरी भ्रष्टाचारमा आरोपत्र (मुद्दा) दर्ता भएको अबस्थामा मुलुकी अपराध संहिता, २०७४ को दफा २४९ को उपदफा ३ (क) मा बर्णित कानूनी प्रावधान दृष्टिगत गरी लिखत/कीर्ते तर्फ अनुसन्धान गरीपाऊँ, साथै अनुसन्धानको क्रममा सम्मानित अख्तियार दुरुपयोग अनुसन्धान आयोगले मुद्दा दर्ता गरी मागदावी लिएका १७५ जना भन्दा बढी प्रतिवादी खुल्न आएमा थप खुल्न आएका प्रतिवादीहरु तथा मैले दिएको जाहेरी दरखास्तमा उल्लेख भएका भन्दा बढी प्रतिवादीहरु खुल्न आएमा थप खुल्न आउने प्रतिवादीहरुलाई समेत लिखत /कीर्तेका अलावा सम्बन्धीत कसूरमा कानून बमोजिम गरी पाऊँ भनी यो कागज लेखि लेखाई सहीछाप गरी श्री प्रहरी प्रधान कार्यालय केन्द्रीय अनुसन्धान ब्यूरो महाराजगञ्ज काठमाडौं मार्फत नेपाल सरकारमा चढाएँ भन्ने समेत ब्यहोराको मिति २०७७।०२।०९ गतेको मुकुन्द प्रसाद पन्तको कागज ।

**ख) युवराज कोईरालाको कागज (जग्गा फिर्ता २०४९):**

मेरो पेशा कानुन व्यवसायी हो। मेरो शैक्षिक योग्यता बि.एल., बि.एड. हो । प्रतिवादी राम कुमार सुवेदी र शोभाकान्त ढकाललाई २०५७ साल तिर सम्मानित सर्वोच्च अदालतमा सुनिति राणा समेत बिरुद्दपंच नारायण महर्जन समेत भएको मोही लगत कट्टा मुद्दामा बहस पैरवी गर्ने क्रममा अदालतको प्राङ्गणमा भटेघाट भई चिनजान भएको हो। त्यहाँ भन्दा अगाबैशोभाकान्त ढकाल र राम कुमार सुवेदी सँग मेरो कुनै चिनजान थिएन । २०५१ साल सम्म म विभिन्न विद्यालयमा प्राध्यापन पेशामाआवद्दथिएँ। प्राध्यापन पेशाबाटराजिनामा दिए पछि मात्र ५२ साल तिर म कानून व्यवसायमा आवद्ध भएको हुँ। कानून व्यवसाय गर्ने क्रममा २०५६/०५७ साल तिर हेमाद्रीशमशेरज.ब.रा.ले मोही लगत कट्टा गरी पाँउ भन्ने मुद्दा हेरी दिनु पर्यो भनी मलाई अनुरोध गरेको हुँदा तत्कालिन श्री पुनरावेदन अदालत ललितपुर पाटनबाट भएको फैसला उपर सम्मानित सर्वोच्च अदालतमा मुद्दा दोहराईपाँउ भन्ने निवेदन मुद्दा लेखि सम्मानित सर्वोच्च अदालतमा दर्ता गराई सो मुद्दामा बहस पैरवी गर्ने कार्य मैले गरेको हुँ। त्यहाँ भन्दा अगाडिका ललिता निवास जग्गा प्रकरणमा भएका कुनै पनि कार्यको बिषयमा मलाई थाहा जानकारी थिएन । २०५६/०५७ साल भन्दा अगाडिका ललिता निवासका जग्गा दर्ता सम्बन्धि कार्यमा मेरो कुनै संलग्नता सहभागिता रहेको छैन होईन । २०६२ साल पश्चात समेत ललिता निवास सम्बन्धि मुद्दा मैले हेरेको छैन । गैर कानूनी रुपमा सरकारी जग्गामा गैर व्यक्तिलाईमालपोत कार्यालय डिल्लीबजारले मोही कायम गरेका कुरा मैले बाहिर हल्ला सुनि थाहा पाए पछि मालपोत कार्यालयमा गई कागज पत्र हेरे पछि मात्र गैर कानूनी कार्य भएको थाहा जानकारी पाए पश्चात के कसरी ललिता निवासको जग्गा अपचलन भएको रहेछ भनी

गहिरो अध्ययन गरी ललिता निवासको जग्गामा जानकार व्यक्तिहरु सँग भेटि सहि सत्य तथ्य वहाँहरुबाट प्राप्त भए पछि ललिता निवासका सरकारी जग्गा सरकारको नाउँमा कायम गर्न अभियान चलाएको हुँ। यस क्रममा अभियान अगाडि बढाउने क्रममा मलाई शोभाकान्त ढकाल समेतले जिउ ज्यान लिने समेतका धाक धम्की दिएको हुँदा त्यस उपर श्री जिल्ला प्रशासन कार्यालय काठमाडौंमा निवेदन दिएको छु, साथै श्री राष्ट्रिय मानव अधिकार आयोगमा समेत जिउ ज्यान रक्षाको लागि ए. निवेदन दिएको छु। प्रतिवादी राम कुमार सुवेदीले बयान कागजको सवाल जवाफ २१ मा खुलाए अनुसार जगत प्रसाद पुडासैनी, गेहनाथ भण्डारी समेतलाई मैले चिनजान गराएको होईन छैन। मैले जगत प्रसाद पुडासैनी, गेहनाथ भण्डारीलाई २०६६/०६७ साल पछि मात्र चिनेको हुँ। राणाजीहरुको सम्मानित सर्वोच्च अदालतमा मोही लगत कट्टा गरी पाँउ भन्ने मुद्दामा मैले निवेदन लेख्ने र वहस पैरवी गर्ने काम कार्य कानून व्यवसायीको हैसियतले गरेको हुँ। प्रतिवादीहरु राम कुमार सुवेदी र शोभाकान्त ढकाललाई राणाजीहरु सँग भेटघाट गराउने कार्य मैले गरेको छैन होईन । मेरो पेशा व्यवसाय बहस पैरवी गर्ने, निवेदन, फिरादपत्र, प्रतिउत्तर पत्र लेख्ने सम्म मात्रको हो। जग्गा खरीद बिक्रि गराउने कार्य मेरो पेशा व्यवसाय होईन । तसर्थ प्रतिवादी राम कुमार सुवेदीले गरेको वयान कागजको सवाल जवाफ २१ मा र प्रतिवादी शोभाकान्त ढकालले गरेको वयान कागजको सवाल जवाफको १४ मा लेखाए अनुसार निज प्रतिवादीहरुलाई मैले राणा परिवार सँग सम्बन्ध सम्पर्क र परिचय गराएको भन्ने व्यहोरा सहि सत्य होईन र ललिता निवास बालुवाटारको जग्गा खरिद बिक्रि गर्ने कार्यमा मेरो कुनै संलग्नता र सहभागिता रहेको छैन । ललिता निवास जग्गा प्रकरणमा संलग्न प्रतिवादी राम कुमार सुबेदी र शोभाकन्त ढकाल सँग ०५६/५७ साल तिर चिनजान भएको हो, अन्य सलग्नव्यक्तिहरु सँग चिनजान भएको छैन । ललिता निवास जग्गा प्रकरणमा संलग्न प्रतिवादीहरुलाई कानून बमोजिम गरी कारवाही गरी अपचलन भएको सो जग्गा नेपाल सरकारको नाममा कायम गरी सरकारी जग्गाको संरक्षण हुनु पर्छ भन्ने ब्यहोराको युवराज कोईरालाको कागज ।

**ख१) <u>युवराज कोईरालाको कागज (छुट जग्गा २०६२)</u>:**

मलाई यस कसूर मुद्दाको जाहेरी दरखास्त समेतका कागजातहरु देखाउदा हेरी देखी ब्यहोरा अवगत भयो । साविक नगर २३ स को कि.नं.२६ को जग्गा दर्ता गर्न निबेदन लेखि दिनुहोस् भनी सुनिती राणाले भनेको हुँदा कानुन ब्यबसायीको हैसियतले जग्गा दर्ता सम्मको लागि निबेदन लेखि दिएको हु । रुक्म शमसेर राणा समेतले दिएको मन्जुरीनामाको लिखत समेत मैले कानून ब्यबसायीको हैसियतले लेखि दिएको हुँ । सो निबेदन लेख्दाको अबस्थामा उक्त जग्गाको बास्तबिक स्थिति नेपाल सरकारक हो भन्ने ब्यहोरा मलाई थाहा जानकारी थिएन । सो जानकारी नभएको हुँदा निबेदन सम्म मैले लेखिदिएको हो । उक्त कि.नं.२०३६ साल ७ महिना २३ गतेको निर्णयले तत्कालिन श्री ५ को सरकारको नाममा दर्ता गर्ने निर्णय भएको रहेछ, सो ब्यहोरा पछि थाहा पाए पछि सरकारी सार्वजनिक एवं गुठी जग्गा संरक्षण सम्बर्दन समितिको तर्फबाट नेपाल सरकारको नाममा दर्ता कायम गरी पाउ भनी सम्बन्धित निकायमा उजुरी निबेदन दिएका छौ । सो जग्गा सरकारी जग्गा कायम हुनु पर्ने कुरा हामीले जानकारी पाए पछि सरकारको नाममा कायम गराउन समितको तर्फबाट हामीले कारवाही अगाडी बढाई अभियान समेत संचालन गरेका छौँ । राम कुमार सुबेदि र शोभाकान्त ढकाललाई ललिता निबास क्षेत्र भित्रको जग्गा बिक्रिवितरण गर्न गराउन कुनै पनि मैले पहल कदमी गरेको छैन । उक्त जग्गा सम्बन्धमा मैले २०५६/२०५७ साल पछी मात्रै सम्मानित सर्वोच्च अदालतमा राणाहरुको तर्फबाट मोही लगत मुद्दामा मुद्दा हेर्ने क्रममा निबेदन लेख्ने र कानून ब्यबसायीको हैसियतमा बहस पैरवी सम्मको कार्य मैले गरेको हो । सो जग्गा बिक्रिबितरण गर्ने जिम्मा लिएको छु भनी मैले कोहीकसैलाई भनेको छैन । जग्गा जमिन बिक्रिवितरण गर्ने गराउने

काम मेरो होईन र यस जग्गाका सम्बन्धमा रामकुमार सुवेदी समेत म भन्दा अगाडी नै जानकार थिए भन्ने कुरा मोही लगत कट्टा गरी पाउ भन्ने मुद्दामा भुमीसुधार कार्यालय काठमाडौंमा लिखत जवाफ फिराउने र मोहीहरुको तर्फबाट वारेश समेत भई तारेखमा बसी मुद्दाको पुर्पक्ष निज रामकुमार सुबेदीले नै गरेको देखिएबाट प्रष्ट हुन्छ । जग्गा किन्ने बेच्ने सम्बन्धमा मैले राम कुमार सुबेदी र शोभाकान्त ढकाललाई राणा परिवारसँग विश्वासमा पारी कुनै काम मैले गरेको छैन र हैन भन्ने ब्यहोराको युवराज कोईरालाको कागज ।

ग) **तत्कालिन निर्माण तथा यातायात मन्त्री नवराज सुवेदीले गरेको कागज:**

श्री ५ को सरकारले मिति २०२१।०८।१५ मा सार्वजनिक कामको लागि ललिता निबास, महाबीर भवन, हरीहर भवन, सिता भवन, लक्ष्मी निवास र ववरमहल समेत अधिग्रहण गर्ने निर्णय गरेको थियो । यसरी अधिग्रहण गरीएका जग्गाहरु मध्ये साविक नगर २३ हाल का.म.पा.वडा नं. ४ मा रहेको ललिता निवासको जग्गा प्रधान मन्त्री निवास, प्रधान न्यायधीस निवास र राष्ट्रीय पंचायत अधयक्ष निवास समेत बनाउनको लागि अधिग्रहण गरिएको हो । यसरी अधिग्रहण गर्दा ततकालिन अबस्थामा सरकार बिरोधी गतिबिधीमा लागेका कारण जफत गरिएको सुबर्ण शम्सेर ज.व.रा र काञ्चन शम्सेर ज.ब.रा.को भागको १४-११-०-०९ बाहेकको बांकी २८४-१४-३-० जग्गा र सो मा बनेका घरहरु समेत अधिग्रहण गरेको थियो । जग्गा अधिग्रहण गर्दा जग्गाधनीहरुलाई तत्कालिन अबस्थाको चलन चल्तीको मुल्य भन्दा २०/२५ प्रतिशत बढी रकम मुआब्जा दिई अधिग्रहण गरेको हो भन्ने ब्यहोराको नवराज सुवेदीको कागज ।

घ) **तत्कालिन प्रधानमन्त्री माधव कुमार नेपालले गरेको कागज:**

म नेपालको प्रधानमन्त्री पदमा बहाल हुनु भन्दा अघि नै प्रधानमन्त्री निवास परिसर बिस्तार गुरुयोजना तयार भईसकेको रहेछ । म प्रधानमन्त्री पदमा बहाल भए पश्चात उल्लेखित गुरुयोजनाको विषयमा सम्बन्धित मन्त्रालयबाट मन्त्री परिषदमा प्रस्ताव पेश भएकोमा मन्त्री परिषदले छलफल गरी उक्त प्रस्ताव पारित गरेको हो । प्रधानमन्त्री निवासको सुरक्षा र सौन्दर्यिकरण गर्ने तथा प्रधानमन्त्री निवास परिसर बाहिर रहेका सरकारी जग्गाहरु समेतलाई परिसर क्षेत्र भित्र पार्ने कुरा मन्त्री परिषदमा पेश भएको प्रस्तावको आधारमा मन्त्री परिषदले असल मनसायका साथ गुरुयोजना कार्यान्वयन गर्नको लागि स्वीकृती दिएको हो । उल्लेखित गुरुयोजना मेरो कार्यकाल अघि नै तयार भईसकेको हुँदा सो सम्बन्धमा विस्तृत जानकारी मलाई भएन । गुरुयोजना कार्यान्वयनको लागि प्रकृयागत रुपमानेपाल सरकार मन्त्री परिषदमा प्रस्ताव पेश भई मन्त्री परिषदबाट निर्णय भएको हो । मन्त्री परिषदमा निर्णयार्थ पेश हुने सम्बन्धित मन्त्रालयको प्रस्तावमुख्य सचिव मार्फत मन्त्री परिषदमा पेश हुने भएकोले यसरी पेश भएको प्रस्तावप्रचलित नेपाल कानून बमोजिम पेश भएको छ भन्ने विश्वासमा प्रस्ताव उपर निर्णय गर्ने गरीन्छ, मेरो प्रधानमन्त्रीत्वकालमा उल्लेखित निर्णयहरु हुँदा मुख्य सचिवको संयोजकत्वमा बिभिन्न मन्त्रालयका सचिवहरु सम्मिलित बैठकले “प्रधानमन्त्री निवास परिसरको व्यवस्थाको लागि सरकारी जग्गा र अन्य प्रकारको जग्गा कानून सम्मत ढंगले छुट्याई व्यवस्थित बनाउने कार्य भौतिक योजना तथा निर्माण मन्त्रालयले गर्ने” भन्ने निर्णय समेत भएको सन्दर्भमा सम्बंधित मन्त्रालयबाट मन्त्रीपरिषदमा पेश भएको थियो । उक्त प्रस्तावमामोही भनी विभिन्न व्यक्तिहरुको नाम रजग्गाको विवरण उल्लेख गरिएको अनुसूची समेत संलग्न गरी प्रस्ताव पेश गरिएको थियो, उल्लेखित प्रस्तावहरु उपर मन्त्री परिषदबाट निर्णय गर्दा नेपाल सरकारको हितको लागि गरिएको हो, सो बाहेक अन्य कोही कसैलाई फाईदा पुग्ने हिसाबले गरिएको होईन । सम्बन्धित मन्त्रालयको प्रस्ताव अनुसार मन्त्री परिषदले निर्णय गरेको हो । यसमा मेरो कुनै किसिमको व्यक्तिगत स्वार्थ, सरोकार वा चासोको विषय थिएन भन्ने समेत व्यहोराको माधव कुमार नेपालको कागज ।

**ङ) तत्कालिन प्रधानमन्त्री बाबुराम भट्टराईले गरेको कागज:**

यो प्रकृयागत रुपमा भूमि व्यवस्था मन्त्रालयबाट उठी आएको प्रस्ताव मन्त्री परिषदमा पेश भई मन्त्री परिषदबाट सामाजिक समितिमा पठाईएकोमा सामाजिक समितिको सुझाव अनुसार मन्त्री परिषदले प्रस्तावमा लेखिए बमोजिम गर्न स्वीकृती दिएको हो। सम्पुर्ण विधि प्रकृया पुरा गरेर विधिवत रुपमा मन्त्री परिषदमा पेश भएको प्रस्ताव उपर छलफल भई सामुहिक रुपमा गरिएको निर्णय हो। म करिब १८ महिना नेपालको प्रधानमन्त्री पदमा बहाल रहेको अवस्थामा हजार भन्दा बढी प्रस्तावहरु मन्त्री परिषदमा पेश भए होलान, सबै प्रस्तावको प्राविधिक पक्ष याद हुने कुरा भएन, मन्त्री परिषदको कार्यालयमा रहेको अभिलेखबाट अवगत हुन सक्छ। मन्त्री परिषदको निर्णय सरकारी जग्गा व्यक्ति बिशेषलाई दिने भन्ने होईन, उल्लेखित प्रस्ताव मन्त्री परिषदको सामाजिक समितिमा छलफल गरी पेश गर्न पठाएकोमा उक्त समितिको मिति २०६९।६।१४ मा बसेको बैठकले पेश गरे अनुसार "पुन: नापी बमोजिम नेपाल सरकार, समरजंग कम्पनीको नाममा दर्ता भएको जग्गाको दर्ता सच्याई साविक लगत बमोजिम श्री पशुपती टिकिन्छा गुठीको नाममा दर्ता गर्न स्वीकृती दिने" भन्ने मन्त्री परिषदबाट निर्णय भएको हो। मन्त्री परिषदमा पेश भएको प्रस्तावमा साविक लगत बमोजिम भन्ने व्यहोरा उल्लेख भएकोले सोही अनुसार निर्णय भएको हो। मन्त्री परिषदमा निर्णयार्थ पेश हुने सम्बन्धित मन्त्रालयको प्रस्ताव मुख्य सचिव मार्फत मन्त्री परिषदमा पेश हुने भएकोले यसरी पेश भएको प्रस्तावमा कुनै किसिमको कानूनी वा अन्य त्रुटी छैन भन्ने विश्वासमा प्रस्ताव उपर निर्णय गरीन्छ। यी निर्णयहरुमा मेरो व्यक्तिगत र पारिवारीक स्वार्थ, चाहना वा चासो जोडिएको विषय होईन, मेरो सार्वजनिक जीवन र नैतिक आचरण निष्कलंक रहि आएको छ, यसरी चर्चामा आएको प्रस्तुत विषयमा मेरो कुनै किसिमको बदनियत वा गलत मनशायले गरिएको निर्णय होईन भन्ने समेत व्यहोराको डा. बाबुराम भट्टराईको कागज।

**च) नेपाल सरकारको तत्कालिन मुख्य सचिव लिलामणी पौड्यालले गरेको कागज:**

नेपाल सरकारको मुख्यसचिव पदमा मिति २०६९।०४।१६ गते देखि कायम मुकायम र मिति २०६९।०४।२२ गते देखि मिति २०७२।०४।२१ गते सम्म मुख्यसचिवको रुपमा कार्यरत रहेको, यो बिषयमा २०७६।०८।२७ गते मैले केन्द्रीय अनुसन्धान ब्यूरोको छानविन समिति समक्ष आफ्नो ब्यहोरा प्रस्ट पारी सकेको छु। सो समयमा पनि मैले मुख्यसचिवको काम कर्तव्य अधिकार र दायित्वका वारेमा उल्लेख गरेको थिएँ। माथि विभिन्न सवालमा मैले के कुन आधारमा मन्त्रिपरिवदमा प्रस्ताव पेश गरेको हो भनेर कार्य सम्पादन नियमावलीका जुन ब्यहोरा उल्लेख गरिएको छ ती सबै मन्त्रालयले मन्त्रिपरिवदमा पेश गरेको प्रस्ताव दर्ता (मन्त्रिपरिषदमा पेश गर्ने) विषयसँग सम्बन्धित छन् जुन काम मैले मुख्यसचिवको कार्यभार सम्हाल्नु भन्दा पहिले नै मिति २०६९।०४।०९ गते सम्पन्न भैसकेको छ। त्यसकारण त्यस विषयमा मैले उत्तर दिने कुरा भएन। मैले त मन्त्रिपरिषदमा पेश (दर्ता) भैसकेको प्रस्तावहरु प्रधानमन्त्रीको निर्देशनमा मन्त्रिपरिषदको बैठकको कार्यसूचीमा चढाएको, प्रधानमन्त्रीले तोकेको स्थान र समय खोली बैठक बस्नुपूर्व मन्त्रीहरुलाई कार्यसूचीमा चढेका सबै प्रस्ताव शीलबन्दी गरी पठाएको, बैठक बस्ने दिन बैठकको सहजीकरण गरेको, बैठकले गरेका निर्णय टिपी ती निर्णय सम्बद्ध निकायलाई पठाएको हो। ती कामसँग सम्बन्धित मैले के गर्नु पर्ने हो र के गरें भन्ने बारेका कुनै सवाल गरिएको छैन। आज मलाई सोधिएको प्रश्नहरुमा मन्त्री परिषदको निर्णय प्रमाणिकरण गर्न वाहेक अरु बिषयहरु मसँग सम्बन्धित छैनन्। तथापि अनुसन्धानलाई सघाउ पुगोस भनेर मैले मन्त्रिपरिषद्को निर्णय प्रकृया, दायित्व, अधिकार, सीमा र भए गरेका कामको जानकारी देहाय बमोजिम प्रस्तुत गर्दछु।

मन्त्रिपरिषदमा प्रस्ताव पेश गर्नका लागि सम्बन्धित मन्त्रालयले कार्य सम्पादन नियमावली र कार्य बिभाजन नियमावली बमोजिम मन्त्रिपरिषदले निर्णय गर्नु पर्ने विषयमा आवश्यक प्रमाण कानून बुझि राय परामर्श लिनु पर्ने भए लिई एकिन गरी सम्बन्धित बिभागीय मन्त्रीले मन्त्रिपरिषदमा प्रस्ताव लैजान स्वीकृति दिएपछी सम्बन्धित सचिवले त्यसको तीन दिन भित्र तोकिएको ढाँचामा प्रस्ताव पेश गर्नु पर्नाको कारण खुलाइ के निर्णय गर्नु पर्ने हो मन्त्री परिषदको तर्फबाट सो निर्णयको ब्यहोरा नै उल्लेख गरी प्रस्ताव पठाउछन् । त्यसरी पठाएको प्रस्ताव मन्त्रिपरिषदको सचिवको नेतृत्वमा भएको बैठक महाशाखाले प्रस्तावको बिषय, कार्य सम्पादन नियमावलीले तोके बमोजिम राय परामर्श लिनु पर्ने भए लिए नलिएको, कार्य बिभाजन नियमावली बमोजिम सो प्रस्ताव उक्त मन्त्रालयबाट आउनु पर्ने हो होईन, प्रस्ताव पेश गर्नु पर्नाको कारण र मन्त्रालयको सिफारिस खण्डमा कार्य सम्पादन नियमावलीले तोके बमोजिम मन्त्रिपरिषदमा आउनु पर्ने हो होईन, निर्णय हुनुपर्ने व्यहोरा स्पष्ट छ छैन र प्रस्तावमा कही कतै केरमेट, थपघट छ छैन हेरी उपयुक्त कुराहरु जाँचेर प्रस्ताव दर्ता गरीन्छ । मुख्यसचिव प्रत्यक्ष प्रकृयामा संलग्न नहुने भएतापनि कार्य सम्पादन नियमावलीले यो जिम्मेवारी मुख्यसचिवलाई दिएको छ । मुख्यसचिवले यो दायित्व निर्वाह गर्ने कुरा प्रत्येक केशमा छुट्टा छुट्टै आदेश दिने नभई यो प्रकृयागत रुपमा सम्बन्धित महाशाखाका कर्मचारीले दर्ता गर्ने र कुनै दुविधा भएमा मुख्यसचिवलाई सोध्ने गरीन्छ । यो प्रणाली नेपालको सवै भन्दा पुरानो र स्थापीत प्रणाली हो । सामान्यतया प्रस्तावको विषयबस्तुको मेरिटमा प्रवेश गरीदैन । त्यसको जिम्मेवारी प्रस्ताव पेश गर्ने सचिव र मन्त्रीले लिन्छन । यसरी दर्ता भएका प्रस्तावलाई मन्त्रिपरिषदमा पेश भएको भनीन्छ मन्त्रिपरिषदमा प्रस्ताव तपाईले किन पेश गरेको के आधारमा पेश गरेको भन्ने जस्ता प्रश्न मलाई सोधिएको छ तर म मुख्यसचिव हुनु पूर्व नै २०६९/०४/०९ मा प्रस्ताव पेश भई सकेको हुनाले यी प्रश्न मसँग सम्बन्धित छैनन । कार्य सम्पादन नियमावलीमा मन्त्रिपरिषदको सचिवले प्रस्ताव पेश गर्ने भनेको यहि दर्ता हो । यसरी दर्ता भएको प्रस्ताव अदालतमा रजिष्ट्रारले रिट दर्ता गरेकोसँग तुलना गर्न सकिन्छ । यसरी दर्ता भएको प्रस्ताव मन्त्रिपरिषदको निर्णय बिना मन्त्रिपरिषदबाट बाहिर निस्कन सक्दैन । यसरी दर्ता भएका प्रस्तावहरुको सूची बनाई सामान्यतया हरेक हप्ता बस्ने मन्त्रिपरिषदको बैठक अगावै प्रधानमन्त्रीलाई मुख्यसचिवले उपलब्ध गराउछन् । सो सूचीबाट प्रधानमन्त्रीले तोकेको समय र स्थानमा, तोकेका सूची भित्रका प्रस्तावहरु एक एक प्रति सवै मन्त्रिपरिषदका सदस्य मन्त्रीहरुलाई बैठक बस्नु भन्दा एक दिन अगावै शिलबन्दी गरी उपलब्ध गराईन्छ । यसरी उपलब्ध गराईएका प्रस्ताव सहित मन्त्रीहरु बैठकमा उपस्थित हुन्छन । मन्त्रिपरिषदको सचिव (मुख्यसचिव) ले क्रमैसँग प्रस्तावहरुको सूची बमोजिम सिलसिलाबद्ध छलफलका लागि सहजीकरण गर्छ । आफ्नो प्रस्तावमा छलफल शुरू भएपछि सम्बन्धित मन्त्रीले आफ्नो प्रस्तावको औचित्य आधार र कारणसहित पारित गरीदिन मन्त्रिपरिषदलाई अनुरोध गर्छन् । उपस्थित मन्त्रीहरुले पूर्व बितरित प्रस्ताव अध्ययन गरेको आधारमा मन्त्रीलाई प्रश्न सोध्ने र आफ्नो अभिमत दिने काम गर्छन् । त्यहाँ बिवाद भएमा छलफल गर्छन र नटुङगिएमा मन्त्रिपरिषदका बिषयगत समितिहरु मध्ये सम्बन्धित समितिमा सम्वद्द मन्त्रालयका सचिवहरुलाई समेत बोलाई बिस्तृत छलफल गरी समिति आफैले अख्तियारी बमोजिम निर्णय गर्ने वा समितिले मन्त्रिपरिषदमा शिफारिस गर्न मन्त्रिपरिषदले निर्देशन दिन्छ । मन्त्रिपरिषदको सदस्य नभएकोले मुख्यसचिव छलफलमा सहभागि हुदैन । यसरी समितिले मन्त्रिपरिषदमा आफ्नो निर्णय शिफारिस गर्यो भने त्यो समितिको निर्णय पुन: मन्त्रिपरिषदमा पेश हुन्छ र मन्त्रिपरिषदले आफ्नो निर्णय गर्छ । यदी मन्त्रालयले प्रस्ताव गरेको भन्दा फरक निर्णय भएको छ भने प्रधानमन्त्री वा बिभागीय मन्त्रीले मुख्यसचिवलाई निर्णयको व्यहोरा टिपाउछन् । निर्णयको व्यहोरा मन्त्रालयबाटै लेखिएर आएको हुने हुनाले प्रस्तावमा लेखिए

बमोजिम मन्त्रिपरिषदले निर्णय गरेमा मुख्यसचिवले निर्णयको व्यहोरा नलेखी सम्बन्धित सचिवले प्रस्ताव पेश गरेकै पानाको पछाडिपट्टी 'प्रस्तावमा लेखिए बमोजिम गर्ने' उल्लेख गरेर निर्णय मन्त्रालयमा पठाउछन् । यो निर्णय प्रमाणिकरणको बिधि (निर्णयको ब्यहोरा मन्त्रालयले नै प्रस्ताव गर्ने र प्रस्ताव गरेको सचिवको हस्ताक्षर गरेको पानाको उल्टोपट्टि निर्णय मस्यौदा नगरी प्रस्तावमा लेखीए बमोजिम गर्ने भनी निर्णय लेख्ने) मुख्यसचिवलाई निर्णय मस्यौदा गर्ने अधिकार एकदमै सीमित गरीदिने र निर्णयप्रति प्रस्ताव पेश गर्ने सचिवलाई नै जिम्मेवार बनाउने हो । यदी कुनै मन्त्रीले निर्णयको ब्यहोरामा फरक धारणा भए २४ घण्टा भित्र मन्त्रिपरिषदको सचिवालयमा फरक मत दर्ता गराउनु पर्छ । नगराएको अवस्थामा मुख्यसचिवले मन्त्रिपरिषदको निर्णय सम्बन्धित सचिवलाई र सवै प्रस्तावको सवै निर्णयको तेरिज सबै मन्त्रीलाई पठाई निर्णय अभिलेख समेत गर्नु पर्छ । मन्त्रिपरिषदले गरेका निर्णयको कार्यान्यवनको अनुगमन गर्ने जिम्मेवारी समेत मुख्यसचिवलाई छ ।

प्रस्तुत भूमिसुधार तथा व्यबस्था मन्त्रालयको प्रस्ताव म मुख्यसचिवमा नियुक्त हुनु भन्दा पहिले कार्यसम्पादन नियमावली बमोजिम मन्त्रिपरिषदमा दर्ता (पेश) भई सकेको रहेछ । यसपछी मुख्यसचिवको सवै भूमिका सेक्रेटेरियल हुन्छ । उसले प्रस्तावको छलफलमा भाग लिने, निर्णय कस्तो हुनुपर्छ भनेर राय सल्लाह दिने, मन्त्रीले पेश गरेको प्रस्तावको आधिकारिता जाच्ने, प्रमाण बुझ्ने, लेखि पठाउने, केही गर्न सक्दैन । प्रस्ताव दर्ता (पेश) गर्नु पूर्व प्रकृया पुगे नपुगेको सम्बन्धमा हेरी प्रस्ताव फिर्ता पठाउने अधिकार समेत कार्य सम्पादन नियमावलीले मुख्यसचिवलाई दिएको छ तर त्यो अभ्यास महाशाखाको कर्मचारीले मुख्यसचिवको जानकारी बिना नै नियमित गरीरहन्छन् । जव दर्ता हुन्छ त्यसपछि त्यो मन्त्रिपरिषदको सम्पत्ति भएको हुनाले मन्त्रिपरिषदको निर्णय बिना त्यो प्रस्तावमा मुख्यसचिवले केही गर्न सक्दैन गर्दैन । प्रस्तुत प्रस्तावमा मेरो भूमिका प्रधानमन्त्रीले तोकेको मिति र समयमा दर्ता भएका प्रस्तावहरु कार्य सूचीमा चढाई बैठक बस्ने मिति र स्थान सहित सम्बन्धित मन्त्रीहरुलाई पठाउने मन्त्रिपरिषदको बैठकमा उपस्थित हुने र गरेको निर्णय टिप्ने त्यो निर्णय सम्बन्धित सचिव र सवै मन्त्रीलाई पठाउने र त्यसको अभिलेख राख्ने सम्म सिमित छ । यो प्रस्ताव पेश गर्दा सम्बन्धित मन्त्रालयले यो जग्गा लगतमा गुठीको छ, नापी हुँदा साविकमा गुठीकै नाउमा नापी भएको छ, सुवर्ण शमशेरको जग्गा जफत गर्दा यो जग्गा पनि बालुवाटार भित्र परेको हो र कामपा वडा नं चारले सर्जमिन मुचुल्का गरी गुठीका नाममा दर्ता गरीदिन सिफारीश गरेको ब्यहोरा उल्लेख गरी लगत बमोजिम दर्ता सच्याउन आवश्यक छ भनी मन्त्रिपरिषदमा पेश गरेको देखिन्छ । गुठीका नाउमा जग्गा दर्ता गर्नका लागि २०५९ सालमै दुई पटक गोरखापत्रमा सूचना निकालेको र त्यसमा कसैले हकदावी नगरेको व्यहोरा पनि प्रस्तावमा उल्लेख छ । बालुवाटारको जग्गाको अभिलेख राख्ने समरजंग कम्पनीले यी कित्ताहरु उसको लगतमा नभिडेको भनी लेखेको पनि प्रस्तावमा उल्लेख छ । मुख्यसचिवसँग भएको सूचना भनेको यही प्रस्ताव हो । यस अवस्थामा मलाई यो जग्गा सरकारकै हो र गुठी नक्कली हो भन्ने आधार, अधिकार, ज्ञान, दायित्व र भूमिका यो प्रस्तावको हकमा छैन । प्रस्तावमा जे जे लेखीएको छ त्यो प्रमाणित गर्ने दायित्व त्यो लेख्नेको हो र गलत लेखेको भए सजायको भागिदार तिनीहरु नै हुन्छन् । मैले त ति कुनै कुरा लेखेको वा लेख्न लगाएको, त्यसमा सम्लग्न भएको, त्यसका लागि कुनै निर्णय गरेको छैन । यदी मन्त्रिपरिषदले फरक निर्णय गरेको थियो र त्यो निर्णय प्रमाणिकरण गर्दा मन्त्रिपरिषदले गरेको निर्णय भन्दा फरक प्रमाणिकरण गरें भने म सजायको भागी हुनु पर्छ न कि जे निर्णय गरेको हो त्यही प्रमाणिकरण गर्दा । प्रस्तावमा उल्लेख गरीएका तमाम विषयमा सत्य पुष्टि गर्ने दायित्व मन्त्रालयको हो, मुख्यसचिव सहभागि नभएकोले मुख्यसचिवले होइन । प्रमाण मन्त्रालय वा मातहतमा हुन्छन् मन्त्रिपरिषदमा होइन । तसर्थ, प्रमाणको भार मन्त्रालयमा रहन्छ । गुठी सम्बन्धी अभिलेख राख्ने, प्रमाणिकरण गर्ने, जाँचबुझ एकिन गर्ने, मन्त्रालय नै हो,

मुख्यसचिव होइन । यो प्रस्ताव निर्णय गर्न हरतवरले योग्य छ र निर्णय गर्ने अधिकार म समक्ष नभएकोले मन्त्रिपरिषदले निर्णय गरीदेओस् भनेर गरिएको प्रस्ताव मन्त्रिपरिषदमा दर्ता भैसकेपछि मुख्यसचिवको भुमिकामा जिम्मेवारी लिएको मैले के, कुन हैसियत, आधार, अधिकार र सुचनाका आधारमा उक्त जग्गा सरकारी हो र गुठी नक्कली हो भन्न सक्छु । मेरो काम दर्ता भैकसकेको प्रस्तावको हकमा प्रधानमन्त्रीको निर्देशनमा बैठकको समय र स्थान खोलेर कार्यसूची र प्रस्ताव मन्त्रिपरिषदका सदस्यलाई वितरण गर्ने, बैठकका दिन बैटक सहजीकरण गर्ने, छलफल र निर्णय सुन्ने र टिप्ने तथा जे निर्णय भएको हो त्यही निर्णय प्रस्ताव पठाउने सचिव र सबै मन्त्रीलाई पठाउने हो । यो विषय सर्वोच्च अदालतमा दुई पटक रिटका रुपमा पुगेको र गुठी नक्कली हो भन्ने बिषय त्यहा पनि उठेको देखिदैन । यो प्रस्तावका आधारमा म मुख्यसचिवले मन्त्री र सचिवलाई यो तपाईले नक्कली गुठीलाई सक्कली भनी प्रस्ताव ल्याउनु भयो भनेर अभियोग नै लगाउने ठाउँ कानून, क्षमता, हैसियत, ज्ञान, सूचनाले कतै देखिदैन । मन्त्रिपरिषदमा आएको प्रस्ताव सक्कली हो वा नक्कली हो भनेर छानविन गर्ने गरेको मेरो जानकारीमा छैन । यो कुन गुठी हो वा होईन भनेर छुट्टयाउने मेरो कार्य क्षेत्र भित्रको बिषय होईन । मेरो क्षमताको बिषय र बिज्ञताको बिषय पनि होईन । कतै कुनै कारणबाट पनि थोरै शंका गर्ने सूचना भई दिएको भए मेरो अधिकार क्षेत्र भित्र नभएपनि म यस्तो निर्णय रोक्नको लागि मेरो सवै सामर्थ्य प्रयोग गर्ने थिएँ । किन भने मैले त्यस्तो धेरै पटक गरेको छु । मन्त्रिपरिषदमा दर्ता भएको प्रस्ताव बाहेक अरु कागजातहरु मन्त्रालयमै रहन्छन् । मन्त्रालयको सचिव र मन्त्रीले आफ्नो कार्यक्षेत्र भित्रको यो यो बिषय यसो हुनु पर्ने पर्छ भनेर किटान राय दिएको अवस्थामा मुख्यसचिवले त्यसको छानविन गर्दैन ।

आजीवन भ्रष्टाचार, अनियमितता, बेथिति सरकारी सम्पत्तिको दुरुपयोग र कामचोर प्रवृत्ति बिरुद्द कुनै लोभलालच, डरधाक वा धम्कीका सामु नझुकि ज्यानको वाजी थापेर लडेको म सरकारी कागजात कीर्ते जस्तो जघन्य अपराधमा संलग्न हुने कुरा मेरो कल्पना भन्दा बाहिरको बिषय हो । कतिपय मलाई सूचना आएकोमा आफ्नो अधिकार नहुँदा नहुदै पनि सरकारी सम्पत्ति जोगाउनका लागि मैले पहल गरेका थुप्रै उदाहरण छन् । चाहे काठमाडौ चक्रपथ स्थित नारायण गोपाल चोकको सार्वजनिक जग्गा अतिक्रमण रोक्न वा धोविखोलाको किनाराको २७ रोपनी जग्गा अतिक्रमण रोक्न, धोविखोला किनारकै घरेलु तथा साना उद्योग विकास समितिको ४ रोपनी जग्गा (सेवा निबृत भएपछि सामाजिक आन्दोलनको रुपमा) दर्ता रोक्न, बागमती किनाराका थुप्रै जग्गा हरु अतिक्रमण हटाउन, बिशाल मिलन केन्द्रको जग्गा ब्यक्तिका नाममा दर्ता गर्न रोक्न र नवलपरासीको वर्दघाट नगरपालिकाको राजमार्गबाट करिव २०० मिटरको दूरीमा भएको पिचबाटो सँग जोडिएको २ बिगाहा जग्गा अनाधिकृत ब्यक्तिले गर्न लागेको दर्ता रोक्न मैले सबै आफ्नो भएभरको सामर्थ्य लगाएर दबाब र प्रभाव झेलेर आफैले अग्रसरता लिएर काम गरेको थिएँ । यी सवै काममा मलाई स्थानीय र कतिपय बिशिष्ट ब्यक्तिहरुले त्यहाँ भैरहेको चलखेलका वारेमा कारवाही अगाडि बढाउन सकिने खालमा कागज प्रमाण र सूचनाहरु दिनु भएको थियो । यो केशमा पनि २०५९ सालमै गुठीमा दर्ताका लागि गोरखापत्रमा सूचना निकालेको व्यहोरा प्रस्ताव उल्लेख भएको अवस्थामा म पदमा बसेको त्यसपछिका १३ वर्षमा कालखण्डमा यति धेरै जग्गा सम्बन्धी अपचलनमा सूचना आउदा मलाई यस बारेमा कसैले गलत हुदैछ भनेर त्यसको सूचना दिएनन् । मन्त्रिपरिषदमा प्रस्ताव पेश भएको बिषय मात्रै होईन अरू जुनसुकै अवस्थामा पनि सरकारी सम्पत्ति अपचलन भएको वा हुने सूचना मलाई भएमा निर्भिकता पूर्वक अगाडि बढाएको छु र बढाउने थिएँ । मन्त्रिपरिषदमा पेश गरेका कतिपय प्रस्ताव कार्यसूची पढेर सुनाउने क्रममा उक्त प्रस्ताव राष्ट्रको हितमा हुदैन कि भनेर प्रश्न गरेको छु । त्यसो गर्दा मुख्यसचिवलाई मन्त्रीले लिएर आएको प्रस्तावमा आफ्नो अभिमत दिने अधिकार कुन कानूनले दिएको छ

समेत भनीन्थ्यो । मन्त्रिपरिषदको निर्णय अबरोध गरेको भनेर राजीनामा समेत मागिन्थ्यो । तर मैले यो कानूनको कुरा होईन एउटा सचेत नागरीकको हैसियतले मैले यो अभिमत दिएको हो । मैले भन्दा पनि निर्णय गर्ने तपाईहरुको अधिकार हो गर्नुस् समेत भनेको छु । धेरै लाञ्छना खपेर गलत हो भन्ने लागेको प्रस्ताव रोक्न मैले कुनै कसर बाँकी राखिनँ । कतिपय अबस्थामा मन्त्रिपरिषदले निर्णय गरेर दिएको आदेश (बिद्युत प्राधिकरणमा डिजल प्लान्ट खरिद गर्न) राष्ट्रको हितमा छैन भन्ने लागेर म अध्यक्ष भएको समितिबाट उल्टाई दिएको छु । मैले गृह सचिव हुँदा सूत्र परिचालन खर्चका नाउँमा दैनिक रु.२० हजारका दरले बील भरपाई पेश नगरी झिक्न पाउने र अघि पछिकाले झिकि रहेको, मेरो करीव छ महिनाको कार्यकालमा हुने करिव रू ३६ लाख रकम समेत लिइन । राजदूतको हैसियतमा काम गर्दा सोही अवधिमा अख्तियार दुरुपयोग अनुसन्धान आयोग, लोकसेवा आयोग, कानून आयोग जस्ता ठाउँमा कार्यरत पूर्व पदाधिकारीहरुले पेन्सन रकम लिई रहदा करिव रु.१५ लाख रुपैया मैले लिईन । म कुनै वेला सह-सचिवको हैसियतमा डेरामा बस्दा दुई जना जुनीयर अधिकृत डेरामा एउटै धरमा बस्थे । उनीहरुले घरमा कामदार राखेका र राखिएका कामदारसँग मेरो श्रीमतीले धारामा लाईन बसेर पानी बोक्ने, बजारमा तरकारी किन्न जाने, भुई पुछने गरी रहदा तल्लो पदका अधिकारीका श्रीमतीले गरेको ब्यवहारले अपमानित महसुस गरेर मेरो श्रीमतीले रुदै हामी डेरा छोडौ भन्दा मेले तिम्रो श्रीमानले कुनै अनैतिक काम गरेर तिम्रा घरमा नोकर राख्दा वा गहनाले सजाउदा के तिम्रो ईज्जत रहन्छ? तिम्रो ईज्जत र गहना मेरो ईमान्दारी र नैतिकता हो । हामीले के अपराध गरेका छौ र अपमानित महसुस गर्ने ? अपमानित त उनीहरुले महसुस गर्नुपर्छ । अर्को डेरामा सरेर तिम्रो समस्या समाधान हुदैन । तिमी सानसँग आफ्नो काम गर र उनीहरुको सँगत छोडिदेउ भन्ने गरेको मलाई जग्गा कीर्ते जस्तो अभियोग लागि रहदा उनको मनमा के भएको होला? के यो सतिले सराप गरेकै मुलुक हो ? मेरो ११ बर्षको छोरीले ६/७ के.जी.को झोला बोकेर स्कूल जादै गर्दा म त्यही बाटो ल्याण्डक्रुजरमा अफिस जाने गर्थे । एक दिन मेरो छिमेकीले म गाडिमा गईरहेको र छेउमा छोरी झोला बोकेर स्कूल गईरहेको अवस्थामा छोरीले सुन्ने गरी के तपाईलाई तपाईको छोरी प्रति अलिकति पनि दया लाग्दैन भने । तीनै छोरीले १२ कक्षामा उत्कृष्ट नम्बर ल्याएर पास गरीन् अनि उनी MBBS पढन चाहन्थिन् । केही मेडिकल कलेजले हामीलाई सेवा गर्ने अवसर दिनुहोस भने । मैले तपाईले गरीवका छोराछोरीलाई पढाउनु होस, मेरालाई म आफै पढाउछु भनें । उनलाई उनका सहपाटीले तिम्रो बुवा त ठूलो पदमा हुनुहुन्छ तिम्रो त भई नै हाल्छ हामीलाई पनि शोर्स लगाई देउ न भनेछन् । मैले तत्कालै शिक्षा सचिवलाई MBBS को प्रवेश परीक्षा लोकसेवा आयोगको शैलिमा निष्पक्ष ढंगले लिनु अन्यथा तपाई जिम्मेवार हुनु हुनेछ भनेर पत्र लेखेर नौ बुँदे निर्देशन दिएँ । कतिपय दुतावासले छोरा छोरी पढाउने बारेमा सोधखोज गरे । मैले उनीहरुलाई पनि मेडिकल कलेजलाई जस्तै उत्तर दिएँ । त्यसपछि मेरो छोरीलको MBBS मा स्कलरसिपमा नाम निस्केन । आफन्तहरु, साथीभाई र इष्टमित्रहरू आएर केही नगरे पनि छोरीको पढाईका लागि त पहल गर्नु पर्ने नि भन्दै छोरीलाई भावनात्मक दवाव दिन थाले । उनलाई राखेर आफ्नो छोरीको पढाईमा पनि सामान्य सहयोग नगर्ने, कस्तो निष्ठुरी बाबु भने । उनलाई कस्तो मानसिक दवाव परेछ भने उनी अव नपढ्ने पो भन्न थालिन् । मैले एक महिना जति मनोसामाजिक परामर्श दिनु पर्यो । सरकारी जग्गा कीर्ते गर्ने काममा तिम्रो बाबुको नाम पनि छ भन्दा आज उनको मनमा के परिरहेको होला भन्ने कुराले मलाई उद्वेलित बनाउछ । मैले आफू राजदुत पदमा रहदा ट्रावल्स एजेन्सीको ब्यवसाय गर्ने छोरालाई मेरो नाम प्रयोग नगर्न, कुनै डेलिगेसन्सको सहभागि भएर मसँग नआउन निर्देशन गरें उसले के सोचि रहेको होला ? राजदुतबाट फर्किने क्रममा आफूलाई उपलब्ध भएका उपहारहरु मध्ये केही चिनोको रुपमा आफूसंगै ल्याएर अरु बिक्रि गरी राजश्वमा जम्मा गर्न लगाए । मैले यी सव गरीरहदा सरकारी

पद राज्यको सम्पत्ति दोहन गर्नका लागि होईन यो त राष्ट्र र जनताको सेवा गर्नको लागि हो भनेर गरेको हुँ। आफ्नो अधीकार क्षेत्र नहुँदा नहुदै अध्यागमन जस्तो संबेदनशिल सेवा विदेशी कम्पनीलाई दिने प्रपञ्च बिफल बनाउन सवै प्रयत्न लगाए। नेपाली दुतावासहरुले गरीरहेको नेपाली कामदारहरुको कागजात प्रमाणिकरण गर्ने काम बिदेशी निजी कम्पनीलाई दिने निर्णय उल्टाउन आफ्नो सवै प्रयत्नहरु लगाए। के यी सवै प्रयत्न गरेको प्रतिफल स्वरुप मलाई अभियुक्त बनाउन खोजिएको हो। मेरा परिवारले भीम मल्लका परिवारले जस्तो महसुस नगरुन् भन्ने मेरो प्रार्थना छ।

यहाँ सरकारी जग्गा अपचलन भएको बिषय धेरै गहिरो अनुसन्धानबाट खुलेको हो। यस्तो बिषय मुख्यसचिवमा नियुक्त भएको भोलि पल्ट कसरी थाहा हुन्छ। उसलाई कानूनी रुपमा नै थाहा पाउनै पर्ने दायित्व भएको भए त्यो मैले जिम्मेवारी लिनै पर्छ। तर त्यसो छैन। यदि यो बिषयमा म अभियुक्त हुन्छु भने मन्त्रिपरिषदका सदस्यहरु के कारणले छानबिनको दायरामा पर्देनन्? उनीहरु त  निर्णयकर्ता हुन, निर्णय रोक्न पनि सक्छन्। चित्त नबुझे फरक मत लिखितै दर्ता गराउन सक्ने ब्यवस्था कार्य सम्पादन नियमावलीले गरेको छ। यदी वहाँहरुले निर्णयको दायित्व लिन नपर्ने हो त्यो निर्णयलाई कसरी मन्त्रिपरिषदको निर्णय भन्ने र वहाहरुलाई मन्त्रिपरिषदको सदस्य भन्नुको अर्थ के रहयो? वहाँहरुलाई मन्त्रिपरिषदको निर्णय किन पठाउनु पर्ने? वहाँहरुले प्रस्तावमा फरक मत दिन पाउने कारण के हो? यदी यो मन्त्रिपरिषदको निर्णय प्रमाणिकरण गरेको आधारमा अभियोग लाग्ने हो भने २०४७ सालको निर्णय प्रमाणिकरण गर्ने पदाधिकारीलाई किन कारवाहीको दायरामा नल्याउने? यदी सुवर्ण शम्शेरको जग्गा फिर्ता दिने निर्णयमा कित्ता नं. खोलेर जग्गाको क्षेत्रफल तोकेर निर्णय गराएको भए जग्गा अपचलन हुने सम्भावना थिएन। पटक पटकका त्रुटिपूर्ण निर्णयहरु र सरकारी कागजातको सक्कल अभिलेख राख्नेले कागजात नै सच्याई नक्कलीलाई सक्कली हो भनी सरकारी अधिकारीले नै प्रमाणिकरण गरेर दिएको अबस्थामा त्यस उपर छानबीन गर्नु पर्ने निकायले समयमै छानबीन नगरीदिंदा पटक पटक गरी सरकारी सम्पत्तिहरु अपचलन हुने स्थिति आयो।

यदी यो गुठी नक्कली हो भन्ने कुरा मैले थाहा पाउनु नै पर्ने भन्ने हो भने यही व्यहोरा सर्वोच्च अदालतको फैसला प्रमाणिकरण गर्ने ईजलास सहायकलाई लागू हुन्छ कि हुदैन? मैले अहिले गरेको काम न्यायालयले गरेको फैसला प्रमाणिकरण जस्तै हो। मेरा अग्रजको कार्यकालमा प्रस्ताव दर्ता गरेको सर्बोच्च अदालतका रजिष्ट्रारले रीट दर्ता गरे जस्तै हो। यदी प्रस्ताव दर्ता गर्ने कार्य त्रुटिपुर्ण हो भने रीट दर्तामा पनि त्यही सिद्धान्त आकर्षित हुदैन र? यदी गुठी नक्कली हो कि सक्कली हो भन्ने कुरा त्यही वेला सोधखोज गरीदिएको भए सायद यो स्थिति आउने थिएन। मलाई सोधनी हुँदा प्रस्ताव एक पटक फिर्ता भएको ब्यहोरा पनि उल्लेख छ। यो प्रस्ताव फिर्ता पठाउने वा नपठाउने निर्णय गर्ने मन्त्रिपरिषदले हो। मुख्यसचिवले होईन। यो प्रस्ताव कैफियत जनाई फिर्ता गरेको देखिदैन। बरु परिवर्तित राजनैतिक परिस्थितिमा आवश्यक भए बिभागीय मन्त्रीबाट निर्णय गराई पुन: पेश गर्ने भन्ने उल्लेख भएको देखिन्छ। यस्तो ब्यहोरा मन्त्रिपरिषद परिवर्तन हुँदा निर्णय हुन बाँकि रहेका सवै प्रस्ताव फिर्ता पठाउदा उल्लेख गर्ने गरीन्छ। जस्तो यो प्रस्ताव श्रावणको ९ गते दर्ता भएको छ र आश्वीनको १८ गते निर्णय भएको छ। यदी आश्वीन १८ भन्दा पहिले नै मन्त्रिपरिषद परिवर्तन भएको भए यो प्रस्ताव पनि त्यसरी नै फिर्ता जाने थियो।  हुन त यो प्रस्ताव मेरो कार्यकालमा मन्त्रिपरिषदमा पेश (दर्ता) भएको होईन र मलाई जवाफ दिइरहनु पर्ने पनि होइन र प्रस्ताव दर्ता को पुष्ट्याई दिन खोजेको होइन। केवल वस्तुस्थितिको जानकारी गराएको मात्र हो। बरु २०६३ सालमा नै दर्ता भई सकेको प्रस्ताव हुनाले यो प्रस्ताव रित पुगेर एक पटक दर्ता भई सकेको भन्ने अर्थ लाग्छ र पुन: दर्ता गर्नलाई  बल पुर्याउछ। यदी यो प्रस्तावमा कुनै

कैफियत देखिएको भए फिर्ता पठाउदा सोही ब्यहोरा उल्लेख हुने थियो। यो प्रस्ताव दर्ता गर्ने पदाधिकारीले के आधारमा के बुझेर दर्ता गरे त्यो उनीहरुले बताउने कुरा हो र त्यो मलाई थाहा हुने कुरा भएन। मैले कानूनले गर्न नमिल्ने कुनै काम गरेको छैन। कानूनले गर्नै पर्छ भन्ने कुनै काम छोडेको छैन। यी काम गर्दा कुनै लोभ लालच, डर धाक, धम्की वा दवाव सामु झुकेको छैन। मैले मेरो कर्तब्य पालना र दायित्व निर्वाहमा कुनै लापरबाही गरेको पनि छैन। कुनै निर्णयमा सहभागी भएको छैन। यस सम्बन्धी मन्त्रिपरिषद बाहेक सम्पूर्ण निर्णयहरु म मुख्यसचिव हुनुभन्दा पहिलै भई सकेका छन्। मन्त्रिपरिषदमा प्रस्ताव पनि पेश भई सकेको छ। मैले यो बिषयमा गरेको भनेको मन्त्रिपरिषदको निर्णय प्रमाणिकरण मात्र हो र मन्त्रिपरिषदले गरेको निर्णय मैले प्रमाणिकरण गर्नै पर्छ त्यो मेरो अपराध होईन अनिबार्य कानूनी दायित्व हो। मैले यसमा प्रकरणमा संलग्न कसैसँग कुनै लाभ लिएको छैन। असल नियतले गरेको कामको लागि राष्ट्र सेवकलाई कुनै अभियोग लाग्नबाट कानूनले समेत वचाउ गर्छ। यो प्राकृतिक न्यायको सिद्दान्त पनि हो। तसर्थ मलाई अभियोग लगाउनु पर्ने कुनै कारण देख्दिनँ भन्ने ब्यहोरा लिलामणी पौड्यालको कागज।

३३. **काठमाडौं जिल्ला का.म.पा. वडा नं. ४ वालुवाटार स्थित ललिता क्याम्प भित्र भएको सरकारी जग्गा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा भएको आधारहरु:**

➢ **बि.सं.१९८७ सालको लालमोहर:**

बि.सं.१९८७ माघ २९ गतेका दिन मेदवन्दी भए बमोजिमको चकलाबन्दी भित्रको साँधको साविक खेत २६० रोपनी १ आना १२ पैसा ३ दामको भएकोमा हालको नापजाँच गर्दा २८७ रोपनी ५ आना ८ पैसा २ दाम ८ जवा को एकै चक्ला भएको देखिएको हुँदा त्यसभित्र तेजनरसिंह महर्जन देखि जीतमान घले आदि गरी ३८ जना व्यक्तिको बिर्ताको जग्गा पनि पर्न गएको र क्याम्प भित्र परि एकछत्त भई सकेको हुनाले सोही नापी सदर गरी मुमारख वाहेक गोदधुवा चुमावन लगायत कर अकर सर्वांक माफी गरी सन्तान दरसन्तान पर्यन्त भोग गर्न पाँउ भनी श्री ३ महाराज र कमाण्डर ईन चीफ जनरलले श्री ५ मा लालमोहरको लागि बिन्ति पार्दा मेदबन्दी बमोजिम मोल रुपैया दिई खरिद भएको सदर भई लाल मोहर भएको बिस्तृत विवरण १९८७ सालको लालमोहर प्रतिलिपी पाना १४५ को कागजातमा उल्लेख भएको अध्ययनबाट देखिएको हुँदा बि.सं. १९८७ सालमै ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सम्पूर्ण जग्गा श्री ५ को लालमोहर मार्फत भिम शम्शेरले एकछत्त गराई आफ्नो भोगचलनमा लिएको भन्ने समेत व्यहोराको पुरातत्व विभागको च.नं.८८८, मिति २०७६।०९।२३ को पत्रबाट खुलि आएको छ।

➢ **सुवर्ण शमशेरले आफ्ना छोराहरु तथा श्रीमतीको नाममा मिति २०१७।०३।३२ गते रजिष्ट्रेशन पारित भएको र.नं. १५४७ को वकस पत्र:**

बिर्ता उन्मुलनऐन, २०१६ जारी भई बिर्ता उन्मुलन कार्यक्रम लागु भए पश्चात सुवर्ण शमशेरले ललिता निवास क्याम्प भित्रको सम्पूर्ण जग्गाहरु आफु समेत आफ्नो श्रीमती र तीन छोराहरुको नाममा वकस गरी दिएको पत्नी श्वेत प्रभा देवी ज.ब.रा. १, छोरा कनक शमशेर ज.ब.रा. १, काञ्चन शमशेर ज.ब.रा. १, रुक्म शमशेर ज.ब.रा. १, उक्त वकस पत्रमा श्वेत प्रभाको नाममा ५८ रोपनी, तीन जना छोराहरुको नाममा क्रमश: ५७॥/५७॥ रोपनी र बाँकी जग्गा सुवर्ण शमशेरको नाममा कायम रहने गरी मिति २०१७।०३।३२ गते रजिष्ट्रेशन अड्डाबाट पारित भएको र.नं. १५४७ को वकसको प्रमाणित प्रतिलिपी भूमि सुधार तथा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंको च.न. ८११३, मिति २०७६।११।१६ गतेको पत्रसाथ प्राप्त भएको देखिन्छ।

➢ **घर जग्गा अधिग्रहण सम्बन्धी नेपाल गजेट भाग ३ खण्ड १४ मिति ०२१/८/१७ अतिरिक्ताङ्क २३ मा प्रकाशित सूचना:**

जग्गा प्राप्ति ऐन, २०१८ को दफा ७ को उपदफा (१) बमोजिम दिएको अधिकार प्रयोग गरी श्री ५ को सरकारले निम्न लिखित जग्गा कम्पाउण्ड घरहरू समेत सार्वजनिक कामको निमित्त प्राप्त गर्ने मिति २०२१।०८।१५ मा निर्णय गरेकोले जग्गा धनिलाई सो जग्गा घर कम्पाउण्डको मोल र जग्गा लिंदाको अरु नोक्सानी बापत उक्त ऐन बमोजिम क्षतिपूर्ति दिईने हुँदा यो सूचना प्रकाशित गरिएको छ।

**निम्न:-**

१) महाविर भवन, नक्साल, काठमाडौं ( १५४–४–२–० र सो जग्गामा रहेको सबै घरहरू)

२) हरिहर भवन, ललितपुर पुल्चोकको (२४०–१–२–० जग्गा र जग्गामा रहेका सबै घरहरू)

३) सीता भवन, नक्साल काठमाडौंको ( ११९–१२–३–० जग्गा र सोमा रहेका सबै घरहरू)

४) लक्ष्मी निवास, महाराजगंजको (२५८–१४–०–० जग्गा र सोमा रहेको सबै घरहरू)

५) बबरमहल कुरिया गाउँ :- २५३–३–३–१ जग्गामध्ये भरत शम्शेरको भागको घर र जग्गा १२–१२–२–० श्री ५ को सरकार लागिसकेकाले (जफत भइसकेको) सो कट्टा गरी बाँकी रोपनी २४०–५–३–१ रोपनी जग्गा र सोमा रहेका सबै घरहरू,

६) **ललिता निवास, का.ई.** बालुवाटार पूर्व भाटभटेनीबाट महाराजगञ्ज जाने सडक,पश्चिम ध्रुव शमशेर समेतको जग्गा उत्तर गोरेटो बाटो दक्षिण गैरिधाराबाट आउने मुल सडक यति चार किल्ला भित्रको माल तिरोको रोपनी २९९॥–॥। मध्ये सुवर्ण शम्शेर कांचन शम्शेरको भागको घर र जग्गा रोपनी १४–११–०–० श्री ५ को सरकार लागि सकेकोले सो कट्टा गरी बाँकी २८४–१४–३–० (दुई सय चौरासी रोपनी चौध आना तीन पैसा) र सो जग्गा रहेको सबै घरहरूका सम्बन्धमा जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम राज्यवाट उचित क्षतिपूर्ति दिई अधीग्रहण गर्ने निर्णय गरेको मिति २०२१।०८।१७ को नेपाल गजेट भाग ३ अतिरिक्ताङ्क २३ मा प्रकाशित सूचना।

➢ **गोरखापत्र दैनिक पत्रिकामा मिति २०२१।०९।०६, ०७, ०८ र ०९ गते प्रकाशित सूचना:**

सार्वजनिक कामलाई निम्न लिखित घर, कम्पाउण्ड, जग्गा प्राप्ति ऐन २०१८ अनुसार श्री ५ को सरकारबाट प्राप्त गर्ने भएकोले जग्गा प्राप्ति ऐन, २०१८ को दफा ४ बमोजिम प्रारम्भिक कारवाईको सिलसिलामा उक्त दफाको उपदफा २ बमोजिम ०२१/०६/२४/६ मा सूचना भैसकेको र प्रारम्भिक कारबाईको रिपोर्ट पेश भै श्री ५ को सरकारको निर्णय अनुसार नेपाल गजेट भाग ३ खण्ड १४ मिति ०२१/८/१७ अतिरिक्ताङ्क २३ को गजेटमा गृह मन्त्रालयको सूचना प्रकाश भै सकेकोले लेखीए बमोजिम घर कम्पाउण्ड जग्गा प्राप्ति ऐन, २०१८ अनुसार लिने भएको हुनाले दफा १० बमोजिम यो टाँस पूर्जी भएको छ। त्यसमा हकदैया भएका र भोग चलन गरीरहेका सबै सरोकारवाला व्यक्तिहरुले टाँस भएको दिन १५ भित्र आफ्नो के-कस्तो हकदया र भोग चलन छ सो बापत के कति दाम क्षतिपूर्तिको रुपमा पाउ भन्ने दाबि जिकिर छ र दफा ४ बमोजिम नाप नक्सामा कुनै उजुरी र दाबि जिकिर लेखेका म्याद भित्र यस अफिसमा दरखास्त दिन ल्याउनुहोला, श्री ५ को सरकार लागिसकेका ६ वटा दरवार र त्यसले चर्चेको जग्गा सहित महाविर भवन, नक्साल, काठमाडौं, हरिहर भवन, ललितपुर पुल्चोक, सीताभवन, नक्साल काठमाडौं, लक्ष्मी निवास, बबरमहल कुरिया गाउँ समेत उल्लेख गरी "ललिता निवास का.ई वालुवाटार पूर्ब भाटभटेनीबाट महाराजगंज जाने सडक पश्चिम धुर्ब शमशेर समेतको जग्गा उत्तर गोरेटो

कि.नं. २६, २७ र २९ समेतको क्षे.फ. ७-१४-०-० रोपनी जग्गा दर्ता गरी दिने भनी जनाई किर्ते गरेको देखिन्छ। साथै ललिता निवासको क्याम्प भित्रको उक्त सरकारी जग्गा फिर्ता गरे, गराएको कारणले उक्त कार्यमा मात्र संलग्न भएका कर्मचारीहरु प्र.मा.अ. कलाधर देउजा समेतले आफ्नो नातेदारहरुको नाममा हालै देखिको वकसपत्र मार्फत शंकास्पद तरिकाले जग्गा लिएको देखिएकोले सरकारी जग्गा हानी नोक्सानी गरी-गराई लाभ लिएको पुष्टि हुन आउँछ, ललिता निवास क्याम्प भित्रको जग्गा तत्कालीन सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने कानूनी व्यवस्था रहेको, २०१७ सालमा सुवर्ण शमशेरले श्रीमती श्वेतप्रभा समेतलाई गरीदिएको वकसपत्रमा मोहीको सम्बन्धमा केहि उल्लेख नरहेको, २०२३ सालमा भएको नापीको फिल्ड बुकमा "यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधियाँमा कुत बुझाई कमाई आएको" भनी उल्लेख गरेको, जग्गा प्राप्ति ऐन २०३४ को दफा २३ को उपदफा २ र ३ बमोजिम "जग्गाको स्वामित्व सरेको मितिदेखी नै उक्त जग्गाको लगत कट्टा भएको मानिनेछ" भन्ने ब्यबस्था भएबाट अधिग्रहण गरी आएको जग्गाको सरकारी लगतमा जनिएका अघिल्ला वा पछिल्ला व्यहोरा सबै स्वत: कट्टा हुन जाने हुँदा उक्त जग्गामा त्यसपछि कोही मोही नहुने तथा मिति २०२३।६।२३ गते अञ्चलाधीशको अफिस बाग्मतीले समरजंग कार्यालयलाई लेखेको पत्र बमोजिम ललिता निवास क्याम्प भित्रको जग्गा र घर राष्ट्रियकरण भैसकेकोले उक्त क्याम्प भित्रको जग्गा कमाउने मोही किसानहरु जवान ५७ ले सरकारलाई आवश्यकता परी हटाउन नपरेसम्म कमाई राख्न तथा ऐन नियम बमोजिमको मुल्य तिरी कमाउन पाउँ भन्ने दिएकोले सरकारले अरुलाई कुत तोकेको सरह नै कुत लिई आवश्यकता नपरे सम्म कमाउन दिने भन्ने उल्लेख भएबाट सो जग्गामा कुनै पनि मोही नभएको पुष्टि हुंदा हुदै उक्त सरकारी जग्गामा वील बहादुर महर्जन समेत २७ जनाको नाममा मोहीयानी हक ठहर्ने गरी भूमि सुधार व्यवस्थापन विभागबाट मिति २०५५।१।६ गते निर्णय भएको देखिन्छ।

यसरी उक्त सरकारी जग्गाहरु नयाँ नापी अनुसार हाल साविक गरी पाउँ भनी मिति २०५९/०२/२१ गते निवेदन दिए पश्चात उक्त जग्गाहरुको मोठ श्रेष्ता र नयाँ नापीको श्रेष्ता अनुसार हाल साविक गरी श्रेष्ता अध्याबधिक गर्न मिति २०५९/०८/१७ गतेको हा.सा. टिप्पणी र आदेश लिखतको पाना-३ मा भएको दस्तखतलाई संकेत अ,आ,इ,ई,उ, मिति २०६०/०८/०३ गतेको हा.सा.टिप्पणी र आदेशको पाना-३ मा भएको दस्तखतलाई संकेत प,फ,ब, मिति २०६०/०९/१५ गतेको हा.सा. टिप्पणी र आदेशको लिखतको पाना-३ मा भएको दस्तखतलाई संकेत भ,म,य,र दिई पत्र मार्फत उक्त संकेतहरुमा भएका दस्तखत गर्ने कर्मचारीहरु को को हुन खुलाई पठाई दिनु हुन भनी भूमि सुधार तथा मालपोत कार्यालय डिल्ली बजारमा लेखी पठाईएकोमा संकेत र, ब मा भएको दस्तखत प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेको भएको, संकेत उ मा भएको दस्तखत प्रमुख मालपोत अधिकृत बैधनाथ चौधरीको भएको, संकेत फ मा भएको दस्तखत मालपोत अधिकृत हुपेन्द्रमणी के.सी. को भएको, संकेत "ई" मा भएको दस्तखत मालपोत अधिकृत समर बहादुर सिंह ठकुरीको भएको, संकेत "आ" मा भएको दस्तखत ना.सु. राजेन्द्र बुढाथोकीको भएको,संकेत भ,प,अ, मा भएको दस्तखत खरिदार जिवनाथ पोखरेलको भएको भनी भुमि सुधार तथा मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंको च.नं. ८४ मिति २०७७/०४/०४ गतेको पत्रबाट खुलिआएको हुँदा उल्लेखित किर्ते लिखतबाट व्यक्ति विशेषका नाममा आएको कुरा जानकारी हुँदाहुँदै तत्कालीन प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरे समेतले गलत नियतले व्यक्ति विशेषको नाममा दर्ता भएको सरकारी जग्गा नेपाल सरकारको नाममा फिर्ता दर्ता

गर्नुपर्नेमा सो नगरी हा.सा. गरी व्यक्ति विशेषलाई नै लाभ पुर्याउने उद्देश्यले हा.सा. को टिप्पणी र आदेश उठाई सदर गरी किर्तेपूर्ण निर्णय गरेको देखिन्छ।

तत्कालीन श्री ५ को सरकारले २०१८ सालमा जफत गरी समरजंग कंपनीको जिम्मामा राखेको जग्गा २०४८ सालको जफत जग्गा फिर्ता दिने तत्कालीन म.प. को निर्णय पश्चात फिर्ता भई लालपुर्जा समेत पाई सकेकाले विभिन्न व्यक्तिहरुले उक्त जग्गाको हा.सा. गरी पाउँ भनी माग गरेकोले व्यक्ति विशेषका नाममा साविकमा दर्ता प्रमाणित रहेको देखिएकोले सोही प्रमाणित श्रेष्ताका आधारमा हाल नापी अनुसार कायम भएका कि.नं.का जग्गाहरु सोही श्रेष्तालाई आधार मानी हा.सा.को श्रेष्ता मिलान गर्न बाधा नपर्ने व्यहोराको भूमि सुधार तथा व्यवस्थापन विभागको मिति २०५९।०६।२४ गतेको टिप्पणी र आदेश देखिन्छ, सो पश्चात श्री ५ को सरकार अन्तर्गतको निकायको नाममा नाप नक्सा भएको जग्गा सम्बन्धमा बिभागिय स्विकृतीले मात्र हुने वा श्री ५ को सरकार म.प.को स्वीकृती चाहिने हो भन्ने विषयमा दुविधा भई कार्य सम्पादन गर्न बाधा भएकोले पुनर्विचारको लागि उक्त मिसिल संलग्न राखी मालपोत कार्यालय, डिल्लीबजारले पुन: पत्राचार गरेको देखिन्छ, यस सम्बन्धमा विचार गर्दा प्रस्तुत हाल साविक गर्ने काम साविक श्रेष्ताका आधारमा गर्ने विषय भएको र फिल्डबुक व्यहोरालाई आधार मान्न मिल्ने वा नमिल्ने विषयमा स्पष्ट हुन आवश्यक देखिएको भनी राय पेश गरेकोमा शा.आ.बाट उल्लेख भएको व्यहोरा मनासिब देखि सोहि अनुरुप विभागको मिति २०५९।६।२४ को निर्णय र सोही अनुरुपको विभागको आदेश भइसकेको हुँदा थप निर्देशन दिइरहन नपर्ने र सोहि पूर्ब निर्णय अनुसार कारबाही गर्न लेखी पठाउने भन्ने भू.सु तथा व्यवस्थापनविभाग बबरमहल काठमाडौंको टिप्पणी र आदेश देखिन्छ । यसरी तत्कालीन श्री ५ को सरकारले २०२१ सालमा कानून बमोजिम अधीग्रहण गरेको जग्गालाई जफत गरिएको जग्गा हो भनी लिखर किर्ते मार्फत व्यक्ति विशेषको नाममा आएको जग्गा हो भन्ने तथ्य सम्बन्धित कार्यालयका कर्मचारीहरुले थाहा पाई पाई उक्त तथ्यलाई अन्देखा गरी उक्त सरकारी जग्गा हाल साविक गर्नका लागि झुठा तथा फरक व्यहोराको टिप्पणी र आदेश उठाई मालपोत तथा व्यवस्थापन विभागका तत्कालीन महानिर्देशक रुद्र कुमार समेतले किर्ते गरेको देखिन्छ।

**पक्राउ प्रतिवादी माधवी सुवेदीले अधिकार प्राप्त अधिकारी समक्ष बयान गर्दा,** ललिता निवास क्याम्प भित्रको के कति जग्गा के कति मूल्यमा खरिद गरीयो र सो वापतको मूल्य रकम के कुन श्रोतबाट के कुन माध्यमबाट को कसलाई तिरियो भन्ने सम्बन्धमा आफूलाई केहि जानकारी नभएको भनी खुलाई लेखाएको, यसै गरी अर्का प्रतिवादी राम कुमार सुवेदीले आफ्नो बयानमा ललिता निवास क्याम्प भित्रको जग्गाहरु मोही भनिएका व्यक्तिहरुको नाममा स्वामित्व कायम गराउन २०५० साल देखि नै निवेदन लेख्ने, वारेश बस्ने र बिभिन्न कार्यालयहरुमा निवेदन लगायतका कागजातहरु पेश गरी कार्यान्वयनको प्रकृयामा लैजाने कार्यमा आफ्नो संलग्नता रहेको कुरा खुलाई ललिता निवास क्याम्प भित्रको बिभिन्न कित्ता र क्षेत्रफलका जग्गाहरु आफ्नो स्व आर्जनको बचत, पैतृक अंश र आफन्तहरुबाट लिएको ऋण सापटीबाट खरिद गरेको भनी खुलाई लेखाएता पनि अंश के कति पाएको, बचत कति थियो, ऋण कति लिईयो, को सँग लिईयो सो को बारेमा आफूलाई याद नभएको र कुनै प्रमाण कागजातहरु समेत पेश गर्न नसक्ने भनी खुलाई लेखाएबाट निजले मोही भनिएका व्यक्तिहरु, बिभिन्न कार्यालयका कर्मचारीहरु समेत सँगको योजना, मिलेमतो र संलग्नतामा किर्ते र फरक व्यहोराका कागजातहरु तयार पारी ललिता निवास क्याम्प भित्रका सरकारी जग्गा मस्यौट गरी गराई उक्त जग्गाहरु मध्ये केहि जग्गा आफूले लिए खाएको पुष्टी हुन आयो।

**अर्का प्रतिवादी शोभाकान्त ढकालले अधिकार प्राप्त अधिकारी समक्ष गरेको बयान**मा समेत आफू र आफ्नो परिवारका सदस्यहरुको नाममा रेना गुरुङ, डिएलएफ डेभलपर्स प्रा.लि. समेतका बिभिन्न व्यक्ति र संस्थाहरुबाट खरिद गरेको जग्गाहरु हालसम्म आफू र आफ्नो परिवारका सदस्यहरुको नाममा दर्ता कायम रहेको, के कति क्षेत्रफलको के कुन कित्ता जग्गाहरु मेरो परिवारको के कुन सदस्यको नाममा छ हाल यकिन भन्न नसक्ने, जग्गा खरिद गर्दा साबिकका जग्गाधनी र राम कुमार सुबेदीको श्रीमती माधवी सुबेदी समेत भई सगोलमा रहने गरी खरिद गर्ने सहमती भई सोहि बमोजिम खरिद गरिएको हुँदा साँध सिमाना छुट्याउने काम नगरेको, उल्लेखित जग्गाहरुको सम्बन्धमा जानकार रहेका राम कुमार सुबेदी समेतको साझेदारीमा जग्गा खरिद गरिएको हुँदा जग्गाको साँध सिमानाको बारेमा चासो नराखेको, बिश्वाशमा कारोबार गरेको हुँदा साँध सिमानाको बारेमा थाहा नभएको जस्ता व्यहोरा खुलाई लेखाई दिए बाटनिजले मोही भनिएका व्यक्तिहरु, बिभिन्न कार्यालयका कर्मचारीहरु समेत सँगको योजना, मिलेमतो र संलग्नतामा किर्ते र फरक व्यहोराका कागजातहरु तयार पारी ललिता निवास क्याम्प भित्रका सरकारी जग्गा मस्यौट गरी गराई उक्त जग्गाहरु मध्ये केहि जग्गा आफूले लिए खाएको प्रष्ट पुष्टी हुन आएको।

यसरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को निर्णय बमोजिम बि.सं. २०१७ साल पछि प्रजातन्त्रको पुर्स्थापनाको आन्दोलनमा संलग्न भएको कारणले सरकारले जफत गरेका जग्गाहरु गृह मन्त्रालय बाट छानबिन गरी तत्कालीन अबस्थामा ७ नं. अनुसुची नभरेको भए सो को मौका समेत दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णय अनुसार गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई वास्तबिक तथ्यलाई तोडमोड गरी मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा शैलाजा राणा समेतले दिएको निवेदनलाई एक मात्र आधार मानी उक्त मन्त्रिपरिषदको निर्णयको अपव्याख्या, दुरुपयोग र विपरित समेत हुने गरी फरक व्यहोराका किर्ते कागज प्रमाण बनाई जग्गाधनीको लगत कट्टा गरी शैलजा राणा समेत व्यक्ति विशेषको नाममा दर्ता कायम गरी गराई आफ्नो हक नपुग्ने व्यक्तिलाई फाईदा हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको हकको सरकारी जग्गा दाबी गरी झुट्ठा तथा फरक व्यहोराको कागज समेत बनाई पेश गरी झुक्याई झुट्ठो कुरालाई सद्दे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो हो भनी किर्ते लिखत तयार गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गा जम्मा क्षेत्रफल ११२-४-१-० रोपनी जग्गा ना.सा.दा.खा.गरेको प्रष्ट देखिन आएको र उक्त जग्गामा कृत्रिम मोही समेत खडा गरी बिक्रि वितरण, हिनामिना तथा जग्गा मस्यौट समेत गरेको मिसिल संलग्न कागज प्रमाणहरुबाट पुष्टि हुन आउछ। साथै शारदा प्रसाद त्रितालको संयोजकत्वमा मिति २०७५।३।१५ गते गठित छानबिन समितिले मिति २०७५।८।२६ गते पेश गरेको छानविन प्रतिबेदनमा ललिता निवास क्याम्प भित्रको २८४-१४-३-० रोपनी जग्गा प्रधानमन्त्री निवास लगायतको लागी जग्गा प्राप्ति ऐन २०१८ को आधारमा अधिग्रहण गरेको देखिन आएको र अधिग्रहण गरेको जग्गाको मुवाब्जा कानून बमोजिम दिएको पनि विभिन्न सूचना र पत्राचारबाट पुष्टि भएको देखियो, ललिता निवास क्याम्प भित्रको जग्गाका सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजारका कर्मचारीहरुलाई बिभीन्न किसिमका प्रभावमा पारी सरकारी, सार्बजनिक तथा गुठी समेतका जग्गाहरु (व्यक्ति) आफू र आफ्नो परिवारका सदस्य लगायतका नाममा दाखिला खारेज गर्न सहयोग गर्ने शोभाकान्त ढकाल र राम कुमार सुबेदी

समेतको संलग्नता देखिएकोले निजहरुको सम्बन्धमा नेपाल प्रहरी केन्द्रिय अनुसन्धान ब्यूरो (सि.आई.बि.) मार्फत अनुसन्धान गर्ने तथा उक्त कार्य गर्ने विभिन्न कार्यालयका प्रमुख तथा कर्मचारीहरु लगायतका व्यक्तिहरु उपर अधिकार प्राप्त निकायले अनुसन्धान गरी कारबाही गर्नै पर्ने देखियो भन्ने समेत व्यहोराको छानबिन प्रतिबेदनमा समेत उल्लेख गरेको देखिन आएको र ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना / हानी नोक्सानी सम्बन्धमा केन्द्रिय अनुसन्धान ब्यूरोबाट मिति २०७५।१२।२७ गते गठित छानबिन समितिले मिति २०७६।९।२८ गते पेश गरेको छानबिन प्रतिबेदनमा गुठी संस्थान तहशिल शाखा कार्यालय, काठमाडौंको गुठी यकिन नभएका तर गुठी जनिएका जग्गा राजगुठीमा दर्ता गर्ने सम्बन्धी पत्रको कार्यान्वयनको क्रममा मिति २०४२।०१।१८ गते मालपोत कार्यालय, डिल्लीबजारका तत्कालीन प्रमुख धर्म प्रसाद गौतमले ललिता निवास क्याम्प भित्रको श्री ५ को सरकारको नामको ३४ कित्ता जग्गा फिल्डबुकको आधार लिई सो भन्दा जग्गाधनी दर्ता श्रेष्तामा गुठी जनाई  श्रेष्तामा किर्ते गरेको र यो किर्तेलाई "गल्ति उल्लेख भएको देखिदा" भन्ने ब्यहोरा समेतको मालपोत विभागले पत्रादेश दिई मालपोत कार्यालय, डिल्लीबजारले २०४९।९।२३ गते सुवर्ण शमशेरको हकवाला सुनिती राणा समेतको नाममा उक्त जग्गा रैकर गरी कानून विपरीत दर्ता गरीदिएको हुँदा ब्यूरोलाई प्राप्त कार्यादेश बमोजिम मालपोत विभाग र मालपोत कार्यालय, डिल्लीबजारको कर्मचारी र जग्गा प्राप्त गर्ने समेत उपर यसै प्रतिबेदनको आधारमा किर्ते मुद्दा दर्ता गरी कारवाही प्रकृया अगाडी बढाउनुपर्ने ।जफत गरीएका सम्पत्ति फिर्ता गर्ने सम्बन्धी २०४७ सालको म.प. का निर्णयहरुको अपब्याख्या र दुरुपयोग तथा विपरीत समेत गरी बदनियतपूर्बक मालपोत कार्यालय, डिल्लीबजारका कर्मचारीले  मिति २०४९।७।२५ र २०४९।९।२३ गते सुवर्ण शमशेरको हकवाला सुनिती राणा समेतको नाममा जम्मा **११२-४-१-०** रोपनी जग्गा दर्ता गरिदिएको हुँदा ब्यूरोलाई प्राप्त कार्यादेश बमोजिम मालपोत कार्यालय डिल्लीबजारका कर्मचारी र जग्गा प्राप्त गर्ने समेत उपर सरकारकोतर्फबाट सम्बन्धित प्रतिनिधी वा समरजङ्ग कम्पनीबाट जाहेरी पर्न आएमा मुद्दा दर्ता गरी कारवाही प्रकृया अगाडी बढाउनुपर्ने । ललिता निवास क्याम्प भित्रको जग्गाहरु २०६०/०६१ मा हालसाविक हुँदा केही बदमासी भएको हुन सक्ने तथा समुच्च प्रकृति हेर्दा स्थलगत रूपमा अरू फरक अवस्था रहन सक्ने देखिएको विभिन्न स्रोत र संलग्न व्यक्तिहरूको पहिचान र उपलब्धता हुन नसकेकाले माथि कारवाही खण्डमा उल्लेख भए बमोजिम मुद्दा दर्ता गरी अनुसन्धान गर्ने क्रममा थप व्यक्ति तथा तथ्य खुल्न सक्ने अवस्था रहेको व्यहोरा समेत अनुरोध गरिन्छ भन्ने ब्यहोरा उल्लेख भएको देखिएको हुँदा ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी क्षेत्रफल भएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा ना.सा. दा.खा. गरी दर्ता गर्ने कार्य तथा सोही सरकारी जग्गामा कृत्रिम मोही समेत खडा गर्ने गरी तयार पारीएका सरकारी कार्यालयबाट जारी हुने पत्र, फरक व्यहोराका टिप्पणी तथा आदेश लगायतका निर्णयहरु, फरक व्यहोराको निर्देशनहरु लगायतका कागज प्रमाणहरु किर्ते तयार गरेकोले प्रतिवादी कलाधर देउजा समेतका कर्मचारीहरु, रुक्म शमशेर ज.ब.रा. समेतका जग्गाधनीहरु, विल बहादुर महर्जन समेतका कथित मोहीहरु तथा योजनाकार राम कुमार सुबेदी, मिन बहादुर गुरुङ र शोभाकान्त ढकाल समेतका प्रतिवादीहरुले मुलुकी ऐन,२०२० अन्तर्गतको किर्ते कसूर गरेको प्रष्ट देखिन्छ।

## खण्ड (क)

**मन्त्रिपरिषदको निर्णयलाई आधार बनाई रितपूर्वक अधिग्रहण गरेको जग्गालाई जफत गरेको भनी ब्यक्ती बिशेषमा फिर्ता-२०४९ (क्षेत्रफल ११२-४-१-०):**

➢ **गुठी लगत तथा तहविल कार्यालयले मालपोत कार्यालयलाई ६४ पंचायतको नाममा जग्गाधनी पूर्जा बनाई दिने भनी लेखेको पत्र:**

मालपोत कार्यलयको मोठ श्रेस्तामा विभिन्न प्रकारका गुठी जनिएका गुठी जग्गाको पुर्जा माग गर्ने सम्बन्धमा गुठी संस्थानको मिति २०४१।१२।१९ को पत्र साथ प्राप्त कार्यपत्र विवरणको दफा १ ख अनुसार नापी श्रेस्ता फिल्डबुकमा श्री ५ सरकार गुठी, श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी, सरकारी गुठी, कालमोचन गुठी, गुठी संस्थान गुठी, आदि लेखीएका जग्गाहरु राज गुठी अन्तर्गतकै जग्गा देखिदा त्यस्ता जग्गाहरुको सम्बन्धमा दर्ता वा कसैको नाममा छ छैन मालपोत कार्यालयको श्रेस्ता भिडाउने र कसैको नाममा दर्ता नभएको तथा कसैको दाबी समेत नभएको जग्गाको जग्गाधनी प्रमाण पुर्जा उल्लेखित गुठीकै नाममा कायम गरी पुर्जा बनाई पठाई दिनुहुन भन्ने व्यहोराको मिति २०४२/०१/०५ गतेको गुठी लगत तथा तहविल कार्यालयले मालपोत कार्यालयलाई इन्द्रायणी समेत ६४ पंचायतको नाममा जग्गाधनी पूर्जा बनाईदिने भनी लेखेको पत्र।

➢ **गुठी लगत तथा तहवील कार्यालयको मिति २०४२/०१/१८ गतेको टिप्पणी तथा आदेश:**

गुठी लगत तथा तहवील कार्यालयको मिति २०४२/०१/१८ गतेको टिप्पणी तथा आदेशमा "यस टोलीको ल.फा.२१३/०४१/४२ च.नं. २४२२ मिति २०४२/१/५ को पत्रमा संशोधन गरी श्रेष्तामा श्री ५ सरकार गुठी, श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी, कालमोचन गुठी, गुठी संस्थान गुठी, त्रिपुरेश्वर गुठी आदी जनिई नापी भएतापनि ती गुठीहरु राजगुठी नै हुने हुँदा त्यस्ता गुठी जनिई श्रेष्ता कायम भएका जति गुठी जग्गाको जग्गाधनी प्रमाण पुर्जा हाल नापी कायम भएकै नाम कायम गरी जग्गाधनी प्रमाण पुर्जा बनाई पठाई दिने र पुर्जा प्राप्त भएपछि वास्तविक गुठी कायम हुन आएको गुठीको नाम मोठ श्रेष्तामा संशोधन गरी गुठीको नाम जनाउन अनुरोध गर्दै जाने" भन्ने समेत टिप्पणी उठी निर्णय भएको गुठी लगत तथा तहवील कार्यालयको मिति २०४२/०१/१८ गतेको टिप्पणी तथा आदेश।

➢ **मालपोत कार्यालयका तत्कालीन प्रमुख धर्म प्रसाद गौतमले गुठी जनाउने सम्बन्धी गरेको निर्णय:**

गुठी लगत तथा तहवील कार्यालयको च.नं. २४२२ मिति २०४२/१/५ गते को पत्रबाट श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी, सरकारी गुठी कालमोचन गुठी, गुठी समाज गुठी आदी लेखिएका जग्गाहरु राज गुठी अन्तरगत कै जग्गा देखिदा त्यस्ता जग्गाहरुको सम्बन्धमा कोही कसैको नाममा दर्ता छ छैन मालपोत कार्यालयमा भिडाई कसैको नाममा दर्ता नभएको तथा कसैको दाबी नभएको जग्गाको जग्गाधनी प्र.पुर्जा उल्लेखित गुठी कै नाममा पुर्जा बनाई पठाई दिनहुन भनी ६४ पंचायतको माग फाराम थान साथै राखी जग्गाधनी प्रमाण पुर्जा बनाई पठाई दिने भनी मालपोत कार्यालयलाई पत्राचार भएको, गुठी लगत तथा तहवील कार्यालयको मिति २०४२/०१/१८ गतेल.फा. २१३/०४१/४२ च.नं. २४२२मिति २०४२/१/५ गतेको पत्रमा संशोधन गरी श्रेष्तामा श्री ५ सरकार गुठी, श्री ३ सरकार गुठी, कालमोचन गुठी, गुठी संस्थान गुठी, त्रिपुरेश्वर गुठी आदी जनीइ नापी भएतापनि ती गुठीहरु राज गुठी नै हुने हुंदा त्यस्ता गुठी जनी श्रेष्ता कायम भएका जति गुठी जग्गाको जग्गाधनी प्रमाण पुर्जा हाललाई नापीमा कायम भएकै नाम कायम गरी ज.ध.प्र.पु. बनाई पठाईदिन पुन: अनुरोध गरी पठाईदिने र पुर्जा प्राप्त भए पछि बास्तविक गुठी कायम भएपछि कायम हुन आएको गुठीको नाम मोठ श्रेष्तामा संशोधन गरिएको गुठीको नाम जनाउन अनुरोध गर्दै जाने र राज गुठी देखिएको जग्गा जति नापी अनुसार दर्ता गरी जग्गाधनी प्रमाण पुर्जा प्राप्त गर्ने गरी सदर भनी निर्णय भए पश्चात सोही मिति २०४२।१।१८ गतेगुठी संस्थान गुठी लगत तथा तहवील कार्यालयले च.नं. २४२२, मिति २०४२/१/१८ गतेको पत्र कोड गरी मिति २०४२।१।१८ गते गुठी संस्थान गुठी लगत तथा तहवील कार्यालयको निर्णय अनुसारको राज गुठी

जग्गाहरुको पूर्ब माग गरीए अनुसार ६४ पंचायतको जग्गाधनी प्रमाण पुर्जा बनाई पठाईदिन भनी च.नं. १३८, मिति २०४२।१।१८ गते मालपोत कार्यालय काठमाडौंलाई पत्राचार भएकोमा मालपोत कार्यालयका तत्कालीन कार्यालय प्रमुख धर्म प्रसाद गौतमले मिति २०४२/०३/१६ गते गुठी लागत तथा तहवील कार्यालयको च.नं. २४२२, मिति २०४२।१।१८ को तोक आदेशले ललिता निवास क्याम्प भित्रको जग्गाधनी दर्ता श्रेष्तामा जग्गाधनी महलमा **श्री ५ लेखीएको** साविक २३ क्ष को कि.नं. **६७, ६९, ७०, ७१, ८१, ८२ र ८३ गरी जम्मा ७ कित्ता** जग्गामा श्री ५ गुठीका नाउँमा श्रेष्तामा जनाएको, त्यस्तै जग्गाधनी महलमा **श्री ५ को सरकार** लेखीएको साविक वडा नम्वर २३ क्ष को कित्ता नम्वर **९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५ र ६६ गरी जम्मा २७ कित्ता** जग्गामा श्री ५ को सरकार गुठीको नाउँमा श्रेष्तामा जनाएको देखिन्छ। यसरी ललिता निवास क्याम्प भित्रको जग्गा सरकारी हो, यसमा कुनै गुठी हुँदैन छैन भन्ने जान्दा जान्दै कुनै आधार कारण बिना कुनै कानूनी खण्ड नपारी आफुलाई पदीय अख्तियारीको दुरुपयोग गरी धनीको स्वामित्व हैसियत फरक पारी बदनियत पूर्वक जग्गाधनी दर्ता श्रेष्तामा गुठी संस्थानको अर्कै प्रयोजनको लागी लेखेको पत्रको च.नं., २४२२ मिति उल्लेख गरी मिति २०४२/०३/१६ गते मालपोत कार्यालयका तत्कालीन प्रमुख धर्म प्रसाद गौतमले गुठी जनाउने सम्बन्धी गरेको निर्णय गरी गुठी जनाई किर्ते गरेको देखिन्छ।

सरकारी जग्गाको संरक्षण गर्ने क्रममा बि.सं. २०४४/१०/२२ गते तत्कालीन वाग्मती अञ्चलाधीशको कार्यालय, काठमाडौंले मालपोत कार्यालय, डिल्लीवजारलाई ललिता निवास क्याम्प भित्रको जग्गा सरकारले अधिग्रहण गरी राष्ट्रियकरण भई सकेको हुँदा उक्त जग्गाहरु सरकारको नाममा दर्ता गर्नु भन्ने व्यहोराको पत्रमा उक्त जग्गा मालपोत कार्यालय, काठमाडौंलाई श्री ५ को सरकारको नाममा दर्ता गरी लालपूर्जाको व्यवस्था गर्न मिति २०४४/१०/२२ मा लेखी पठाई सकिएको हुँदा गुरु योजना अन्तर्गत भवन निर्माण आदि गर्न सकिने"भन्ने व्यहोरा उल्लेख भएको देखिएकोले श्री ५ को सरकारले अधिग्रहण गरेको जग्गा श्री ५ को सरकारको नाममा दर्ता गर्न निर्देशन दिएतापनि मालपोत कार्यालयका तत्कालीन कार्यालय प्रमुख धर्मप्रसाद गौतमले बागमती अञ्चलाधीशको कार्यालयबाट मिति २०४४/१०/२२ गते मालपोत कार्यालय, डिल्लीवजारलाई गृह मन्त्रालय समेतलाई बोधार्थ दिई लेखेको पत्र अनुसारका अधिग्रहण गरिएका जग्गालाई श्री ५ को सरकारको नाममा दर्ता गरेको देखिँदैन।

➢ **दोश्रो नापीको फिल्डबुकमा भएको व्यहोरा**:

- ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ तथा २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको, सरकारी जग्गामा मोही नलग्ने स्पष्ट कानूनी व्यवस्थाको जानकार हुँदा हुँदै ऐनको बर्खिलाप हुने गरी किर्ते व्यहोरा तत्कालीन समयमा नापीमा संलग्न प्र.ना.अ. शम्भु प्रसाद शर्मा समेतले मोही महलमा मोहीको नाममा उल्लेख गरेको तर किसानको व्यहोरामा कुनै कुरा उल्लेख नगरेको देखिन्छ।
- मि.नं. १०२४-२०४९/०५० मिति २०४९।०७।२५ को निर्णयले २३ क्ष कि.नं. ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८० र कि.नं. ४३, ४४,५१, ५३, ५९ र ७९ गरी जम्मा १८ कित्ता जग्गा सुनिती राणा,

शैलजा राणा र रुक्म शमसेरका नाममा श्रेष्ता पूर्जा कायम हुन आएको भन्ने व्यहोराको मालपोत कार्यालय डिल्लीबजारको दोश्रो नापी अनुसार जग्गाधनी श्रेष्तामा देखिएको।

- मि.नं. १०२४, १०२५ -२०४९/०५०मिति २०४९।०७।२५ को निर्णयले २३ क्ष कि.नं.३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४० जम्मा ८ कित्ता जग्गा सुनिती राणा, शैलजा राणा, रुक्म शमसेर ज.ब.रा.का नाउमा श्रेष्तापूर्जा कायम हुन आएको भन्ने व्यहोराको मालपोत कार्यालय डिल्लीबजारको दोश्रो नापी अनुसार जग्गाधनी श्रेष्ता देखिएको।
- मि.नं. १०२५-२०४९/०५० मिति २०४९।०७।२५ को निर्णयले वडा नं. २३ ह को कि.नं. ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४ , १६, २७, ११, र ऐ वडा २३ क्ष को कि.नं.१८, २०, २१, २२, २३, २४ समेत जम्मा २७ कित्ता जग्गा श्रीमती शैलजा राणा, हेमन शमशेर र हाटक शमशेर ज.ब.रा.का नाउमा संयुक्त पूर्जा श्रेष्ता खडा भै कायम हुन आएको भन्ने व्यहोराको मालपोत कार्यालय डिल्लीबजारको दोश्रो नापी अनुसार जग्गाधनी श्रेष्तामा देखिएको।
- मि.नं. १०२४-२०४९/०५० मिति २०४९/०९/२३ गतेको निर्णयले का.म.पा.२३ क्ष १०२४-२०४९/०५०३०, ३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३, जम्मा १९ कित्ता जग्गा श्रीमती शैलजा राणा, हेमन शमशेर र हाटक शमशेर ज.ब.रा. का नाउमा संयुक्त पूर्जा श्रेष्ता खडा भै कायम हुन आएको भन्ने व्यहोराको मालपोत कार्यालय डिल्लीबजारकोदोश्रो नापी अनुसार जग्गाधनी श्रेष्तामा देखिएको।

➢ मि.नं. १०२५-२०४९/०५० मिति २०४९/०९/२३ गतेको निर्णयले का.न.पा.२३ क्ष १०२५-२०४९/०५० २५, २६, २७, २९ जम्मा ४ कित्ता जग्गा श्रीमती शैलजा राणा, हेमन शमशेर रहाटक शमशेर ज.ब.रा.का नाउमा संयुक्त पूर्जा श्रेष्ता खडा भै कायम हुन आएको भन्ने व्यहोराको मालपोत कार्यालय डिल्लीबजारको दोश्रो नापी अनुसार जग्गाधनी श्रेष्ता देखिन्छ।

➢ **मिति २०४७/०२/१४ गतेको श्री ५ को सरकार मन्त्रिपरिषदको निर्णय:**

२०१७ सालपछि प्रजातन्त्रको पुनर्स्थापनाको लागि भएको संघर्षहरुमा संलग्न भएको कारणबाट विभिन्न व्यक्तिहरुको हरण भएको सम्पत्तिको विषयमा गृह मन्त्रालयले गर्दै आएको छानबिनको प्रक्रियालाई अझ तदारुकताका साथ गर्ने। साथै , सोही सिलसिलामा रोक्का रहेका विभिन्न व्यक्तिहरुको सम्पत्ति फुकुवा गर्ने निर्णय भएको।

➢ **मिति २०४७/०४/०८ गतेको श्री ५ को सरकार मन्त्रिपरिषद्को निर्णय :**

(क) जफत भएका घर, जग्गा तथा सम्पत्ति मध्ये श्री ५ सरकारकै अधिनमा रहेका जति जानकारीमा आउना साथ तुरुन्त फिर्ता दिने। श्री ५ को सरकारबाट अन्यत्र स्वामित्व हस्तान्तरण भैसकेका घर, जग्गा तथा सम्पतिको हकमा के कस्तो प्रकिया अपनाई के कसरी दिन सकिन्छ तत् सम्बन्धमा पेश गर्ने।

(ख) फिर्ता दिनुपर्ने यस्ता सम्पतिहरु मध्ये पत्ता लाग्न बाँकिको हकमा फिर्ता दिने कारर्बाहीको क्रमलाई गृहमन्त्रालयले छिटो गर्ने।

➢ **मिति २०४७/०५/०३ गतेको श्री ५ को सरकार मन्त्रिपरिषदको निर्णय :**

क) अंशियारको अंश छुट्टाएर मात्र सर्वस्व हुने कानूनी ब्यवस्था भएको हुँदा कुनै कारणले सो नभई सम्वन्धित व्यक्तिको नाममा भएका सबै जग्गा जफत भएको भए, उक्त मौका प्रदान गर्ने । साथै **७ नं फारम** भर्न मौका नपाएको भएमा सो को लागी पनि मौका दिने ।

ख) अंशियारको अंश छुट्याई सकेपछी पनि सम्वन्धित व्यक्तिको नाममा तराईमा २८ बिगाहा, पहाडमा ९६ रोपनी, उपत्यतकामा ५८ रोपनी भन्दा बढी जग्गा भएको देखिएमा हदबन्दी ब्यवस्था लागू हुने भएकोले सो लागु नगरी सबै जग्गा फिर्ता दिएमा भूमि सम्बन्धि ऐनको बर्खिलाप हुने हुनाले राख्न पाउने हद सम्मको जग्गा रोजी राख्न दिने र हद भन्दा बढि जग्गाको मुआब्जा मात्र दिने ।

यसरी म.प. को निर्णयहरुले प्रजातन्त्रको पुनर्स्थापनाको लागि भएका संघर्षहरुमा संलग्न भएको कारणबाट जफत भएका व्यक्तिगत सम्पत्तिहरुको गृहमन्त्रालयबाट छानविन गरी हदबन्दीको समेत टुङ्गो लगाई जफत भएको सम्पत्ति मात्र फिर्ता दिने निर्णय भएको देखिन्छ ।

➢ **जग्गा फिर्ता सम्बन्धमा मालपोत कार्यालय काठमाडौंबाट विभिन्न मितिमा उठेका टिप्पणी र आदेशहरु (शैलजा राणा, हेमन शमसेर ज.ब.रा. र हाटक ज.ब.रा. को हकमा):**

**क) का.म.पा १०२४/०४९/५० मिति २०४९/७/२५ गतेको श्री मालपोत कार्यालय डिल्लीबजारको टिप्पणी र आदेश:**

यसमा हाम्रो ससुरा मेरा बाबु स्व. सुवर्ण शमसेर ज.ब.रा काग्रेस पार्टीको अग्रपंतिको भूमिका निर्वाह गरी रहनु भएको कारणले तत्कालीन प्रजातान्त्रिक सरकारलाई अपदस्त गरी २०१७ सालमा पंचायती शासन पद्धति लागु भए पछी तत्कालीन पंचायती शासक वर्गले २०१८ फाल्गुन १९ गते नेपाल गजेट खण्ड ११ अतिरिकाङ्क ४३ मा उहाँ लगायत ७६ जना कार्यकर्ताहरुलाई २१ दिने सूचना प्रकाशित गरी नेपालमा आफ्नो घर द्वारमा आई बसोबास गर्न सूचना गरेको र उक्त सूचनाको आधारमा तत्कालीन मेजिष्ट्रेड कार्यालय मार्फत नेपाल अधिराज्यको उहाँको सम्पत्ती जयजेथा जफत गरी रोक्का राख्ने निर्णय भएको र उहालाई राजकाज अपराध ऐन लागु गरी कथित मुद्दा दायर गरिएकोले आजीवन निर्वासन जीवन बिताउन बाध्य पारेको र निर्वासित जीवनकालमा २०३४ साल एकादशी कार्तिकका दिन उहाँको देहावासन भएको र २०४६ सालको ऐतिहासिक जनआन्दोलनले प्रजातान्त्रीक ब्यबस्थाको पुन:प्रतिस्थापन गरेपछीको जन-स्थापित प्रजातन्त्रको सरकारले क्रमश: मिति ०४७/२/१४ र ०४७/४/८ मा श्री ५ को सरकारको मन्त्रीपरिषद्को बैठकले २०१७ साल पछी पुन: प्रजातन्त्र प्राप्तिको लागी संघर्ष गर्ने राजनितीक कार्यकर्ताको जफत गरिएको सम्पत्ती श्री ५ को सरकारको अधिनमा रहेको जति जानकारीमा आउन साथ तुरुन्त फिर्ता गर्ने निर्णय भएकोले उक्त निर्णयको आधारमा हामी अंशियारहरु २०१८ चैत्र १९ गते श्री ५ को सरकार मेजिष्ट्रेड कार्यालय काठमाडौंले जफत गरी रोक्का गरी राखेको स्व. सुवर्णशमसेर ज.ब.रा. को हकको साविक का.न.पा. वडा नं. २३ क्ष कि.नं. ३०,३१,३२,३३,३४,३५,३६,३७,३८,३९,४०,४१,४२,४३,४४,४५,४६,४७,४९,५०,५१,५२,५३,५४,५५,८१,८३, ५६, ५७,५८,५९,६०,६१,६२,६३,६४,६५,६६,६७,६८,६९,७०,७१,७२,७४,७५,७८, ७९, ८०,८२ जग्गाहरु हामी हकदार रुक्म शमसरे, शैलजा राणा र श्रीमती सुनीती राणाको द.नं. १३२ मिति २०४९/०४/०६ गतेको प्रमाण सहितको मागदाबी निवेदन ।

पेस रहेको अंशबण्डाको लिखतमा साविक लगत भिडाउन पठाउदा उल्लेख जग्गाहरु मौजा हाडीगाऊ हा.नं. ४५६ को क्षे.फ.२७२।।।३।।२।। मध्ये ६० रोपनी ने.रा. बैक र २१२।।।३।।२।। समरजंगका नाउमा सुवर्ण शमसेरको नाउबाट कट्टा भै रेखदेखमा रहेको भनी लगत शाखाबाट लेखी भिडी आएको । उल्लेख कित्ता जग्गा

मध्ये २३ क्ष कि.नं. ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०, ७१, ८१, ८२, र ८३ का कित्ता जग्गाहरु २०४२ सालको गुठीको पत्रानुसार श्री ५ को सरकार गुठी भै श्रेष्ताअनुशार प्रमाणित देखिन्छ भनी गुठी फाँट बाट मोठ श्रेष्ता भिडी आएको र वडा नं. २३ क्ष कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ७८, ८० का कित्ता जग्गा ज.ध. श्री ५ को सरकार उल्लेख भै दर्ता बाँकी रहेको र ऐ. वडा नं. कि.नं ६८ को कित्ता जग्गा नाम खाली दर्ता बाँकी रहेको र ऐ. वडा नं.२३ क्ष का कि.नं. ४३, ४४, ५१, ५३, ५९, ७९ का कित्ता जग्गा कित्ता श्रेष्ता नभएको र मोठ श्रेष्ता फेला नपरेको भनी मोठ फाँटबाट मोठ भिडी आएको र रोक्का सम्बन्धमा संलग्न श्री ५ को सरकारको मिति २०४७/०२/१४ र ०४७/०२/०८ को निर्णयले फुकुवा भै आएको पत्र संलग्न रहेको।

उल्लेख व्यक्ति सुवर्ण शमसेर ज.ब.रा समेतको नाउमा नेपाल गजेट भाग ३ मिति २०१८ फाल्गुन १९ गते अतिरित्तांक ४३ मा श्री ५ को सरकार गृह मन्त्रालयको सूचना प्रकाशित गरी सम्पत्ती रोक्का एवं जफत रहेको सम्पत्ति श्री ५ को सरकार मन्त्रीपरिषद् सचिवालयको मिति २०४७/४/८ र ०४७/२/१७ एवंम् ०४७/२/१४ को निर्णय पत्रादेशले हरण भएको सम्पत्ति फुकुवा गर्ने र प्रचलित कानूनले दिएको हदसम्म मात्र फिर्ता दिने भनी निर्णय भएको फोटोकपी प्रमाणित पत्र संलग्न रहेको।

उल्लेख जग्गाहरु फिर्ता दिने सन्दर्भमा सो कित्ता जग्गाहरुको मोठ श्रेष्ता भिडाउँदा फिल्डबुकमा मोहीको महलमा विभिन्न व्यक्ति मोही कायम भैज.ध. खाली र किसानको व्यहोरामा यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई आएको छु भन्ने व्यहोरा उल्लेख रही दर्ता बाँकी समेत देखीएकोले दर्ता गरी फिर्ता दिनु पर्ने देखिन आयो।

अत: संलग्न प्रमाण हेर्दा कारवाहीको सिलसिलामा आदेश बमोजिम जिल्ला प्रशासन कार्यालय काठमाडौं र समरजंग कम्पनी कार्यालयलाई उल्लेखित कित्ता जग्गाहरु निज निवेदकको जफत भएको हो की होईन खुलाई पठाई दिनुहुन भनी लेखी पठाउदाँ जिल्ला प्रशासन कार्यालय काठमाडौंको च.नं. २२६१ मिति २०४९/५/२३ को पत्रबाट मिति २०१८/१२/१९ र २०१९/१/१८ मा सबै मेजिष्ट्रेड कार्यालयमा पठाएको आदेशमा सुबर्ण शमसेर ज.ब.रा. र कंचन शमसेर ज.ब.रा.को नामको सम्पत्ति जफत गरी राख्नु भन्ने उल्लेख भएको तर के कती सम्पत्ति जफत भएको हो सो रेकर्ड सबै नभएको भनी लेखी आएको समरजंग कम्पनी कार्यालयको च.नं. ४२, (०४९/५०) मिति २०४९/५/२ को पत्रले साविक अञ्चलाधिशको कार्यालय बागमती अञ्चलको मिति २०४४/१०/२२ को जानकारी अनुसार ललिता निबास क्याम्प भित्रको जग्गा **२९९-९-३-०**रोपनी जग्गा **मध्ये** १३५-७-३ -० रोपनी जग्गा मात्र यस कार्यालयको रेखदेखमा रहेको र सो जग्गा कमाउने मोही जवान ४७ बाट बाली असुल गर्ने कार्य गरी रहेको र साथै यस कार्यालयलाई साविक अंचलाधिशको कार्यालयबाट मिति २०२३/६/२३ मा प्राप्त जानकारी अनुसार मोहीसँग भएको सम्झौता बमोजिम हाल सम्म के कती कारणले मोहीको नाउ फिल्डबुक तथा लगतबाट कट्टा नभएको हो सो लगत कट्टा गरी पुरै नक्सा श्री ५ को सरकारको नाउमा कायम गरीनु पर्ने र यस कार्यालयको रेखदेखमा रहेको जग्गा कुन कुन ईकाईलाई के कती दिईएको छ र उक्त जग्गा कसरी प्राप्त भएको हो सो को अभिलेख यस कार्यालयमा नभएको व्यहोरा भनी लेखी आएको र सो पत्रसाथ त्यस कार्यालयको रेखदेखमा रहेको जग्गाको विवरण पाना ३ मा उल्लेख गरी प्राप्त हुन आएको र प्राप्त विवरण र निवेदकको माग बमोजिमको कित्ता भिडाउदा वडा नं. २३ क्ष कि.नं. ७८ र ६८ कित्ता जग्गा प्राप्त समरजंग कम्पनीको विवरणमा उल्लेख नभएको।

अत: उपरोक्त प्रमाणहरु समेतका मिसिल अध्ययन गरी हेर्दा उल्लेखित जग्गाहरु श्री ५ को सरकारले रोक्का जफत गरेको देखीने र सो जफत भएको जग्गाहरु प्रजात्रान्त्रिक सरकार स्थापना भए पछि फुकुवा गरी जफत भएको जग्गा मात्र फिर्ता दिने गरी निर्णय भएका गजेट एवं आदेश निर्णयहरु मागदाबीको मिसिल संलग्न रहेको देखिने  र यसरी जफत भएको जग्गा फिर्ता दिने मोठ श्रेष्ता भिडाउँदा दर्ता बाँकी रहेकोले दर्ता गरी उल्लेख जफत भएका जग्गाहरु फिर्ता दिने क्रममा मोठ श्रेस्ता भिडाउदा दर्ता बाँकि रहेकोले दर्ता गरी उल्लेख जफत भएका जग्गाहरु फिर्ता दिनु पर्ने देखीदा माग बमोजिमको जग्गा जफत भएको हो होईन भन्ने सम्बन्धमा समरजंग कम्पनीको कार्यालयबाट आएको विवरण र मागदावी भिडाउँदा मागदावीका कि.नं. ६८ र ७८ र श्री ५ को सरकार गुठीमा रहेको दर्तामा रहेको का.न.पा. २३ क्ष कि.नं. ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०,७१, ८१, ८२, र ८३ का कित्ता जग्गाहरु पछि कानून बमोजिम कारवाही गर्ने गरी बाँकी रहेका कित्ताहरुका.न.पा. २३ क्ष कि.नं. ३३, ३४, ३५,३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३ ,  ४४, ५१, ५३, ५९, र ७९ का कित्ता जग्गाहरु पेश अंशबण्डा र नाता प्रमाणमा उल्लेखित हकदारको आधारले निवेदक श्री रुक्म सम्शेर ज.ब.रा. श्रीमती शैलजा राणा र श्रीमती सुनीता राणाको नाउमा संयुक्त ना.सा. दा.खा. दर्ता गरी सोही व्यहोराको जानकारी मे.ना.सा. लगत शाखा समरजंग कम्पनी र सम्बन्धित कित्ताका दाबी वाला मोहीहरुलाई मात्र दिई मिसिल पुर्जा श्रेष्ता तयार गर्नको लागी सम्बन्धित मोठ फाँटमा बुझाउनु पर्ने देखी सो सम्बन्धमा आबश्यक निर्णायार्थ पेश गरेको छु भनी मिति २०४९।०७।२५ गते टिप्पणी उठाई उक्त कार्यालयका अधिकृतले उक्त व्यहोरालाई व्यहोरा मनासिव देखि निर्णायार्थ पेश गरेपश्चात उक्त कित्ता जग्गाहरु फिर्ता दिने गरी गरेको टिप्पणी आदेश।

**ख) <u>१०२५/०४९/५०/का.न.पा.२०४९/०७/२५गते मालपोत कार्यालय डिल्लीबजार काठमाडौंको टिप्पणी र आदेश:</u>**

यसमा हाम्रो पिता र मेरो पति स्व: कञ्चन शम्शेर ज.व.रा.काँग्रेस पार्टिको नेतृत्वमा सक्रिय भुमिका निर्वाह गरी आएकोले तत्कालीन पञ्चायती शासक वर्गले उहाँलाई देशद्रोही, राजकाज सम्वन्धी कथित मुद्धा बनाई निर्वासित जिवन बाध्य बनाएको र २०१८ सालको चैत्र १० गतेको नेपाल गजेट खण्ड ११ अतिरिक्ताङ्क ४५ मा सूचना प्रकासित भई २०१९ सालमा तत्कालीन मेजिष्ट्रेट कार्यालयले उहाँको अंश जफत गरी रोक्का गरी राखेको र उहाँ निर्वासित जिवन कै समयमा विदेशमा १९७३/११/०३ मा निधन हुनु भएको हुँदा २०४६ सालको जन-आन्दोलन पछि श्री ५ को सरकार मन्त्रिपरिषद्को वैठकले क्रमश: मिति २०४७/०२/१४, २०४७/०२/०८ को निर्णय अनुसार जफत भएको जग्गा फिर्ता दिने निर्णय भएकोले स्व: कञ्चन शम्शेर ज.व.रा.को हक खाने हामी निवेदक तीन जना बाहेक अरु कोही नभएकोले २३ ह ८,९, ११, १२, १३, १४, १६, १७, १८, १९, २०, ३६, ३८ र २३क्ष१५, १८, २३, २४, २५, २६, २७, २१, २२, २३, २७, २८, २९, ३०, ३२, ३३, ३४, ३५, ३७, ३९, १६, १९, २०, २१, २२, २८, २९  जग्गा श्री ५ को सरकारको स्वामित्वबाट दा.खा. गरी हामी तीन जनाका नाउँमा पुर्जा पाउँ भनी स्व: कञ्चन शमशेरको श्रीमती शैलजा राणा, हेमन शम्शेर ज.व.रा., हाटक शम्शेर ज.व.रा. को द.नं.१३३ मिति २०४९/०४/०६ को निवेदन माग दावी।

पेश गरेको अंशबण्डाको लिखत साविक लगत भिडाउन पठाउँदा उल्लेख जग्गाहरु मौजा हाँडिगाउँ नं.४५६ को क्षेत्रफल २७२।।।३।।२।। मध्ये ६० रोपनी ने.रा.वैंक र २१२।।।३।।२।। समरजंग कम्पनीको नाउँमा सुवर्ण शम्शेरको नाउँ कट्टा रही रेखदेखमा रहेको भनी लेखी भिडि आएको।

उल्लेखित कित्ता जग्गा मध्ये वडा नं.२३ क्ष कि.नं.१५,१६,२५,२६, २७,२८,२९ का कित्ता २०४२ सालको गुठीको पत्रानुसार श्री ५ को सरकार गुठी भै श्रेष्ता अनुसार प्रमाणित देखिन्छ भनी गुठी शाखाबाट मोठ श्रेष्ता भिडि आएको र वडा नं. २३ क्ष कि.नं. १८, १९, २०, २१, २२, २३, २४, को र वडा नं. २३ ह कि.नं. ३३, ३८, ३९, ३७, २८, २९, ३०, ३२, ३४, ३५, ३६, १७, २०, १८, १९, २१, २२, २३, ८, १३, १४, १६ का कित्ता जग्गाहरु ज.ध. श्री ५ को सरकार भै दर्ता बाँकी र ऐ. २३ ह कि.नं.१२,२७ कित्ता श्रेष्ता नभएको र मोठ नभएको ऐ.२३ ह कि.नं.९ र ११ ज.ध. नाम खाली रही दर्ता बाँकी रहेको भनी मोठ फाँटबाट मोठ श्रेष्ता भिडी आएको र रोक्का सम्बन्धमा संलग्न श्री ५ को सरकारको मिति २०४७/२/१४ र २०४७/२/८ को निर्णयले फुकुवा भै आएको पत्र संलग्न रहेको।

उल्लेख व्यक्ति काञ्चन शमशेर ज.व.रा. समेतको नाउँमा २०१८ चैत १० गते नेपाल गजेटमा अतिरिक्ताङ्क ४५ खण्ड **११** मा श्री ५ को सरकार गृह मन्त्रालयको सूचना प्रकाशित गरी सम्पत्ती रोक्का एवं जफत गरेको व्यहोरा उल्लेख र यसरी रोक्का एवं जफत रहेको सम्पत्ती श्री ५ को सरकार मन्त्री परिषद सचिवालयको मिति २०४७/०२/१४, २०४७/०२/१७ र २०४७/०४/०८ को निर्णय पत्रादेशले हरण भएको सम्पत्ती फुकुवा गर्ने र प्रचलित कानूनले दिएको हकसम्म मात्र फिर्ता दिने भनी निर्णय भएको फोटोकपि प्रमाणित पत्र संलग्न रहेको।

उल्लेख जग्गाहरु फिर्ता दिने सन्दर्भमा सो कित्ता जग्गाहरुको मोठ श्रेस्ता भिडाउँदा फिल्ड बुकमा मोहीको महलमा विभिन्न व्यक्ती मोही कायम भई ज.ध. खालि र किसानको व्यहोरामा श्री ५ को सरकार तहविलमा अधियाँ तिरी खाएको छु भन्ने व्यहोरा उल्लेख रही दर्ता बाँकी समेत देखिएकोले दर्ता गरी फिर्ता दिनुपर्ने देखिन आयो।

अत: संलग्न प्रमाण हेर्दा कारबाहीको सिलसिलामा आदेश बमोजिम जिल्ला प्रशासन कार्यालय काठमाडौं र समरजंग कम्पनी कार्यालयलाई उल्लेखित कित्ता जग्गाहरु निज निवेदकको जफत भएको हो कि होईन खुलाई पठाईदिन हुन भनी लेखी पठाउँदा जिल्ला प्रशासन कार्यालय काठमाडौंको च.नं.२२६१ मिति २०४९/०५/२३ को पत्रबाट मिति २०१८/१२/१९ को र २०१९/०१/१८ मा सवै मेजेष्ट्रिट कार्यालयमा पठाएको आदेशमा सुवर्ण शम्शेर ज.व.रा. र कंचन शम्शेर ज.व.रा.को नामको सम्पत्ती जफत गरी राख्नु भन्ने उल्लेख भएको तर के-कति सम्पत्ती जफत भएको हो सो रेकर्ड यहाँ नभएको भनी लेखी आएको । समरजंगकम्पनी कार्यालयको च.नं. ४२ ०४९/५० मिति २०४९/०५/०२ को पत्रले साविअंचलाधिशको कार्यालय बाग्मती अंचलको मिति २०४४/१०/२२ को जानकारी अनुसार ललिता निवास क्याम्प भित्रको जम्मा जग्गा २९९-९-३-० मध्य जम्मा रोपनी १३५-७-३-० रोपनी जग्गा मात्र यस कार्यालयको रेख देखमा रहेको र सो जग्गा कमाउने मोही जवान ४७ बाट बालि असुलि गर्ने कार्य गरीरहेको र साथै यस कार्यालयलाई साविक अञ्चलाधिश कार्यालयबाट मिति २०२३।६।२३ मा प्राप्त जानकारी अनुसार मोही सँग भएको सम्झौता अनुसार हालसम्म के कति कारणले मोहीको नाउ फिल्डबुकबाट तथा लगतबाट कट्टा नभएको हो ,सो कट्टा गरी पुरै जग्गा श्री ५ को सरकारको नाउमा कायम गरीनुपर्ने र यस कार्यालयको रेखदेखमा रहेको बाहेक जग्गा कुन कुन इकाइलाई के कति दिएको छ, उक्त जग्गा कसरी प्राप्त भएको हो, सो को अभिलेख यस कार्यालयमा नभएको व्यहोरा भनी लेखी आएको र सो पत्र साथ प्राप्त त्यस कार्यालयको रेखदेखमा रहेको जग्गाको विवरण पाना २ मा उल्लेख गरी प्राप्त हुन आएको र प्राप्त विवरण र निवेदकको माग बमोजिमको कित्ता भिडाउदा वडा नं २३ ह

कि.नं ३७ ,३५, २२, १२ र ९ र वडा नं २३ क्ष कित्ता नं. १९ को कित्ता जग्गाहरु प्राप्त समरजंग कम्पनी कार्यालयको विवरणमा उल्लेख नभएको।

अत :उपरोक्त प्रमाणहरु समेतका मिसिल अध्ययन गरी हेर्दा उल्लेख जग्गाहरु श्री ५ को सरकारले रोक्का जफत गरेको देखिने र सो जफत भएका जग्गाहरु प्रजातान्त्रिक सरकार स्थापना भएपछि फुकुवा गरी जफत भएको जग्गा फिर्ता दिने निर्णय भएका गजेट एबं आदेश निर्णयहरु मिसिल संलग्न रहेको र यसरी जफत भएको जग्गा फिर्ता दिने क्रममा मोठ श्रेस्ता भिडाउदा दर्ता बाँकी रहेकोले दर्ता गरी उल्लेख जफत भएका जग्गाहरु फिर्ता दिनुपर्ने देखिदा माग बमोजिमको जग्गा जफत भएको हो होइन भन्ने सम्बन्धमा समरजंग कम्पनी कार्यालयबाट आएको विवरण र मागदाबी भिडाउदा माग दाबीका कित्ताहरु  का.न.पा. वडा नं २३ ह कि.नं ३७,३५,२२,१२ र ९ र वडा नं २३ क्ष कित्ता नं. १९ को कित्ता जग्गा बाहेक अरु दर्ता गर्नुपर्ने जग्गाहरु मिल्न भिड्न आएको समेतको आधारले सो कि.नं. २३ ह कि.नं. ३७,३५,२२,१२ र ९ वडा नं. २३ क्ष कि नं. १९ र श्री ५ को सरकार गुठीमा दर्ता रहेका का.न.पा वडा नं २३ क्ष कि.नं. १५,१६,२५, २६,२७,२८,२९ का कित्ता जग्गाहरू पछीकानून बमोजिम कारबाही गर्ने गरी बाँकी रहेका कित्ताहरुका.न.पा वडा नं २३ ह कित्ता नं. ३३,३८,३९, २८,२९,३०,३२,३४,३६,१७,२०,१८,१९,२१, २३,८,१३,१४,१६,२७,११ र का.न.पा वडा नं२३ क्ष का कि.नं. १८,२०, २१,२२,२३,२४ का जग्गाहरु पेश अंशबण्डा र नाता प्रमाणमा उल्लेखित हकदारको आधारले निवेदन श्रीमती शैलजा राणा, श्री हेमनशमसेर ज.ब.रा र हाटकशमसेर ज.ब.रा का नाउमा संयुक्त ना.सा.दा.खा दर्ता गरी सोही व्यहोराको जानकारी मा.ना.सा लगत शाखा, समरजंगकम्पनी र सम्बन्धित कित्ताका दावीवालाहरू, मोहीलाई मात्र दिने मिसिल पुर्जा श्रेस्ता तयार गर्नको लागी सम्बन्धित मोठ फाँटमा बुझाउनु पर्ने देखि सो सम्बन्धमा आवश्यक निर्णयार्थ मिति २०४९/०७/२५ गते टिप्पणी उठाई उपरोक्त व्यहोरा मनासिब देखि निर्णयार्थ पेश गरेको छु भनी अधिकृतले किटानी राय पेश गरे पश्चार सोही मितिमा जग्गा फिर्ता गर्ने टिप्पणी र आदेश सदर भएको देखिन्छ।

**ग) <u>१०२४/०४९/५० मिति ०४९/८/३० गतेको जफत भएको जग्गा रोक्का फुकुवा समेत गरी फिर्ता दिने सम्बन्धीको मालपोत कार्यलय डिल्लीबजार काठमाडौंको टिप्पणी आदेश:</u>**

यसमा निवेदक रुक्म शम्सेर ज.ब.रा. श्रीमती शैलजा राणा र श्रीमती सुनिति राणाको द.नं. १३२ मिति २०४९/०४/०६ को निवेदन मागदाबी बमोजिम का.म.न.पा. वडा नं. २३ क्ष कि.नं. ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०, ७१, ८१, ८२ र ८३ का कित्ता जग्गाहरु श्री ५ को सरकारको गुठीमा दर्ता रहेको र समरजंग कम्पनी कार्यालयको प्राप्त विवरणमा समेत उल्लेख नभएको कारणले उल्लेख जग्गा कित्ताहरु पछि कानून बमोजिम कारवाही गर्ने गरी अन्य माग दाबिका कित्ताहरु का.न.पा.वडा नं २३ क्ष कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४, ५१, ५३, ५९, ७९ का कित्ता क्षे.फ.२६-६-१ जग्गाहरू मिसिल संलग्न कागज प्रमाणहरुको आधारले मिति ०४९।७।२५।३ को निर्णयानुसार निवेदक श्री रुक्म शमसेरज.ब.रा,श्रीमती शैलजा राणा र श्रीमती सुनीती राणाका नाउमा संयुक्त ना.सा दर्ता भै पुर्जा श्रेस्ता समेत तयार भै गएको।

उल्लेख दर्ता गर्ने निर्णय भएको बाहेक बाँकी कित्ता जग्गाहरु श्री ५ को सरकारको गुठीमा दर्ता प्रमाणीत समेत भएको कारणले दा.खा गरी जफत सम्पती फिर्ता दिन बाँकी रहेकोमा निवेदकहरुकाद.नं ३५३४ मिति ०४९।८।२८ को निवेदनबाटका.न.पा. वडा नं २३ क्ष कि.नं. ३०, ३२, ३१, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६, ६७, ६९, ७०, ७१, ८१, ८२, ८३ र ६८ एवं ७८ का कित्ता जग्गा मागदाबी अनुसार

पाउनुपर्ने हद भित्रका उल्लेख कित्ता जग्गा फिर्ता हाल सम्म पनि नभएकोले अवीलम्ब फिर्ता गरी पाउ भन्ने मागदाबी रहेको र सो मागदाबीमा उल्लेख कित्ता मध्ये कि.नं ४२,६३,६९ एवं ६८ र ७८ का कित्ता जग्गा ५ समरजंग कम्पनी कार्यलयको विवरणमा उल्लेख नभएको हुँदा सो बाहेक अन्य कित्ता जम्मा १९ को जम्मा क्षे.फ .२८-१५-३ जग्गा मिसिल संलग्न श्री ५ को सरकारको निर्णय समेतको आधारले मागदाबी भएको देखिएको हुँदा उल्लेख जग्गा पनि जफतवाला निवेदकहरुलाई माग बमोजिम फिर्ता दिनेतर्फ कारबाही गरीदिनु पर्ने देखियो।

अत: उल्लेख मागदाबीका कित्ताहरु पनि श्री ५ को सरकारको गुठीमा दर्ता रहेको भनी श्रेस्ता रहेको भएता पनि सो जग्गा प्राप्त समरजंग कम्पनी कार्यालयको विवरणमा निजको रेखदेखमा नै रहेको भन्ने पत्रमा उल्लेख रहेको,पारित बण्डापत्र, साविक लगत एवं मिसिल संलग्न श्री ५ को सरकारको निर्णय,गजेट एवं रोक्का फुकुवा गरी जफत सम्पत्ति फिर्ता दिने गरी  भएका निर्णयहरु समेतको आधारले निवेदकहरुका नाउमा जफत सम्पत्ति रोक्का फुकुवा समेत गरी फिर्ता दिनुपर्ने देखिन आउछ। तर उल्लेख मागदाबीको १९ कित्ता जग्गा नै श्री ५ को सरकारको गुठीमा दर्ता प्रमाणीत रहेको श्रेस्ता भिडी आएको देखिएको हुँदा माग बमोजिम फिर्ता दिन आवश्यक निकासको लागी पेश गरेको छु भनी  मिति ०४९/८/२९ गते टिप्पणी उठाई पेश गरे पश्चात सोही मितिमा उल्लेखित कित्ता जग्गा श्री ५ को सरकारको गुठीमा दर्ता भएता पनि निवेदकहरुलाई श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता दिन मनासिव देखिदा आवश्यक निर्णयार्थ पेश गरेको छु भनी उक्त कार्यालयका अधिकृतले किटानी राय पेश गरे पछि  यसमा जफत भएका जग्गाहरु रोक्का फुकुवा समेत गरी निवेदकहरुलाई फिर्ता दिने मिसिल संलग्न श्री ५ को सरकारको निर्णय गजेट एवं समरजंग कम्पनीको कार्यलयबाट प्राप्त विवरणको आधारले उल्लेखित जग्गाहरु माग बमोजिम निवेदकहरुलाई फिर्ता दिनुपर्ने देखिएको तर सो कित्ता जग्गाहरु श्री ५ को सरकारको गुठीमा दर्ता प्रमाणित श्रेष्ता देखिदा मालपोत विभागको मिति २०४७।११।०५ को परिपत्र अनुसार विभागको सहमति लिई मालपोत कार्यालयले दर्ता यस्तो दर्ता प्रमाणित जग्गा मालपोत ऐन नियम बमोजिम दर्ता सच्चाउन सक्नेछ भन्ने उल्लेख हुँदा प्रस्तुत माग दाबीको कारवाहीको मिसिल आवश्यक सहमतिको निकासाको लागी मालपोत विभागमा पठाउनु पर्ने देखि पेश गरेको छु भनी मिति २०४९।०८।३० गतेमा मालपोत अधिकृत समेतले पुन: किटानी राय दिए पछि माथी उल्लेख गरे बमोजिमको राय साथ निवेदनहरुको माग बमोजिम जग्गा फिर्ता दिनको लागी सहमतिको निमित्त श्री मालपोत विभागमा पेश गर्ने गरी सदर गरेको मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजाले गरेको मिति ०४९/८/३० गतेको टिप्पणी र सदर आदेश।

२०४२/४३ सालमा श्रेष्ताबाट गुठी जनिएको जग्गाको पूर्जा तयार गर्ने सिलसिलामा निजी गुठी तथा रैकर जग्गा गुठीमा दर्ता हुन आएमा गुठीको लगत कट्टा गर्ने गुठी संस्थानको मिति २०४२।३।२०। को निर्णय मै रहेको र पारित लिखत फिल्डबुक अनुसार यो जग्गा राज गुठीको नभई मिति २०१७।३।३१को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखिएकोमा नापीले श्रेष्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नुपर्नेमा केही कित्तामा श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिदा गुठीको ०४२।३।२०। को निर्णय, मिति २०१७।३।३१को लिखत, फिल्डबुक बमोजिम गरी श्री ५को सरकार गुठी जनिएकोलाई संसोधन गर्ने अधिकार मालपोत ऐन २०३४ को दफा ७(३) बमोजिम मालपोत कार्यालय मै भएकोले सोही ऐन बमोजिम संसोधन गर्न र २०१७ साल पछि प्रजातन्त्रको पुनर्स्थापनाको लागी भएका संघर्षहरुमा संलग्न भएका कारणबाट रोक्का तथा जफत भएको सम्पती फिर्ता दिने सम्बन्धमा श्री ५ को सरकार म.प. को निर्णय बमोजिम मन्त्रिपरिषद सचिवालयको पत्र र भूमि सुधार तथा व्यवस्था मन्त्रालयको पत्रानुसार मालपोत विभागको २०४७।०६।०७ को

पत्र बमोजिम त्यस्ता रोक्का तथा जफत भएका जग्गाहरु फिर्ता कति भयो ? कति बाकी छन् साथै उल्लेखित श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता दिन बाँकी जग्गाहरु फिर्ता गरी सोको जानकारी गराउन तहाँ कार्यालयको ईलाका सवै माल तथा मालपोत कार्यालयलाई समेत निर्देशन दिने भनी मिति २०४९।९।२०मा निर्णय भएकोले निर्णयानुसार गर्नु गराउन हुन शैलजा राणा समेतको मिशिल फिर्ता पठाईएको भन्ने व्यहोराको मिति २०४९।०९।२३ मा मालपोत विभागले मालपोत कार्यालयलाई लेखेको पत्रबाट देखिन्छ।

**घ) <u>०४९।५०।१०२५ २०४९।०९।२३। गते मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंको जफत सम्पत्ति फिर्ता गर्ने सम्बन्धी टिप्पणी र आदेश:</u>**

यसमा मिति०४९।८।३० को निर्णयानुसार मिति ०४९।७।२५ को निर्णयमा नपरेका का.न.पा. वडा नं. २३ क्ष कि.नं. २७,२६ र २९ का ३ कित्ताको क्षे.फ. ७-२-० जग्गा श्री ५ को सरकारको गुठीमा दर्ता भएको कारणले दा.खा. दर्ता गरी फिर्ता दिन बांकी रहेकोले निबेदकहरुको माग बमोजिम फिर्ता दिनको लागी सहमतिको निमित्त मालपोत विभागमा पेश गर्ने र गु.ल.त.का. भद्रकालीलाई जानकारी समेत दिने गरी निर्णय भएको र सोही निर्णय बमोजिम यस कार्यालयको प.सं.०४९।५०।१०२४/१०२५ च.नं.२७५२ मिति ०४९।९।१ को पत्रले प्रस्तुत कारबाहीको (मागदाबीको) मिसिल मालपोत विभागमा पेश गरिएको र बोधार्थ गुठी संस्थान के.का. र गु.ल.त.का. भद्रकालीमा दिईएको।

उपरोक्त निर्णय बमोजिम मागदाबीको मिसिल मालपोत विभागमा पेश गरिएको र मालपोत विभागको प.सं.नं.५/२८/ का.टि.३०४/०४९/५०/ ९९१ च.नं. ३९२४ मिति ०४९।९।२३ को पत्रमा काठमाडौं जिल्लामा ०४२/४३ सालमा श्रेष्ताबाट गुठी जनिएको जग्गाको पुर्जा तयार गर्ने सिलसिलामा निजि गुठी तथा रैकर जग्गा गुठीमा दर्ता हुन आएमा गुठीको लगत कट्टा गर्ने गुठी संस्थानको मिति ०४२।३।२० को निर्णय भै रहेको र पारित लिखत फिल्डबुक अनुसार यो जग्गा राज गुठीको नभै मिति ०१७।३।३१ को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखिएकोमा नापीले श्रेष्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केही कित्तामा श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिदा गुठीको ०४२।३।२० को निर्णय मिति ०१७।३।३१को लिखत फिल्डबुक बमोजिम गरी श्री ५ को सरकार गुठी जनिएकोलाई संसोधन गर्न अधिकार मालपोत ऐन २०३४ को दफा ७ (३) बमोजिम मालपोत कार्यालयलाई नै भएकोले सोही ऐन बमोजिम संशोधन गर्न र ०१७ साल पछी, प्रजातन्त्रको पुनर्स्थापनाको लागी भएका संघर्षहरुमा संलग्न भएको रोक्का तथा जफत भएको सम्पत्ति फिर्ता दिने सम्बन्धमा श्री ५ को सरकार म.प. को निर्णय बमोजिम मन्त्री परिषद सचिवालयको मिति ०४७।२।१४, ०४७।४।९,०४७।५।३ र भूमिसुधार तथा ब्यबस्था मन्त्रालयको मिति ०४७।६।२को पत्रानुसार मालपोत विभागको मिति ०४७।६।७ को पत्र बमोजिम त्यस्ता रोक्का तथा जफत भएका जग्गा हरु फिर्ता कति भयो ? कति बांकी छन साथै उल्लेखित श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता दिन बाँकी जग्गाहरु फिर्ता गरी सो को जानकारी गराउन तहाँ कार्यालयको ईलाका एबं माल तथा मालपोत कार्यालयहरुलाई समेत निर्देशन दिने भनी निति २०४९।९।२० मा निर्णय भएकोले निर्णयानुसार गर्न गराउन हुन भनी मागदाबीको कारबाही शैलजा राणा समेतको थान २ मिसिल फिर्ता प्राप्त हुन आएकोले उल्लेखित बिभागीय निर्णय निर्देशन बमोजिम निबेदक श्रीमती शैलजा राणा, हेमन शमशेर र हाटक शमशेर ज.ब.रा.समेतका नाममा उल्लेखीत कित्ता जग्गा ३ दा.खा. दर्ता गरी गुठी संस्थान समेत समरजंग कम्पनी कार्यालय र नापी शाखा समेतलाई जानकारी दिन र सो निर्णय बमोजिम श्रेष्ता पुर्जा तयारको लागी प्रस्तुत कारबाहीको मिसिल मोठ शाखामा बुझाउन मनासिब हुने देखि सो सम्बन्धमा आबश्यक निर्णायार्थ मिति२०४९।९।२३ गते टिप्पणी उठान भए पश्चात उपरोक्त अनुसार दा.खा.

दर्ता गरिदिनु पर्ने देखी पेश गरेको छु भनी अधिकृत समेतले राय पेस गरी यसमा मिति २०४९।०९।०१ को निर्णय र मा.पो. विभागको २०४९।०९।२० को निर्णय र मिति २०४९।०९।२३ को पत्रानुसार उल्लेखित कित्ता जग्गा श्री ५ को गुठी जग्गा श्रेष्ता खारेज गरी सोही व्यहोरा गुठी संस्थान समेत र विभागलाई पनि जानकारी दिई निवेदक शैलजा राणा, हेमन शमशेर जबरा र हाटक शमशेर ज.ब.रा.का नाउमा संयुक्त दा.खा दर्ता गरीदिने भन्ने मिति२०४९।०९।२३ गते निर्णय गरेको टिप्पणी र आदेशमा देखिन्छ।

➢ **मालपोत कार्यलय डिल्लीबजारबाट मि.नं. १०२४ र १०२५ बाट जग्गा दर्ता गर्ने सम्बन्धमा तयार पारिएको राय किताब:**

**१)** का.न.पा. २३ क्षकि.नं.३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४,५१, ५३, ५९ र ७९ जम्मा २६ कित्ता जग्गा श्री ५ को सरकार मन्त्रिपरिषद सचिवालयको मिति २०४७।२।१४, २०४७।०४।०८।, २०४७।०५।३ को रोक्का फुकुवा र जफत जग्गा फिर्ता दिने निर्णय, समरजंगकम्पनी कार्यालयको प्राप्त पत्र र जग्गाको विवरण, नाता प्रमाण,अंशबण्डा र साविक लगत समेतको आधारले श्री शैलजा राणा समेत जवान ३ निबेदकको नाममा दा.खा. ना.सा दर्ता गरी दिई दाबीवाला मोहीहरुलाई मात्र र समरजंगकम्पनीमो. ना.सा. समेतलाई जानकारी दिने भन्ने व्यहोराको मिति २०४९।०७।२५ गतेको मि.नं.१०२४ -२०४९/०५० को राय।

**२)** का.न.पा. २३ ह कि.नं. ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, १६, २७, ११ र का.न.पा. २३-क्ष १०२५-२०४९/०५० १८, २०, २१, २२, २३, २४ जम्मा २७ कित्ताजग्गा श्री ५ को सरकार मन्त्रिपरिषद सचिवालयको मिति २०४७/२/१४ र २०४७/४/८ र ०४७/०५/०३ को रोक्का फुकुवा र जफत जग्गा फिर्ता दिने निर्णय, समरजंग कम्पनी कार्यालयको प्राप्त पत्र र जग्गाको विवरण, नाता प्रमाण, अंशबण्डा र साविक लगत समेतको आधारले श्री हेमन शमशेर राणा समेत निबेदक श्रीमती शैलजा राणा, श्री हेमन शम्शेर ज.ब.रा., श्री हाटक शमशेर ज.ब.रा जवान ३ का नाउमा दा.खा. ना.सा. दर्ता गरी दिई दाबीवाला मोहीहरुलाई मात्र र मो.ना.सा. समरजंग कम्पनी कार्यालय समेतलाई जानकारी दिने दिने भन्ने व्यहोराको मालपोत कार्यलयबाट जग्गा दर्ता गर्ने भन्ने मिति २०४९ /०७ /२५ गते मि.नं. १०२४ र १०२५ -२०४९/०५० को राय।

**३)** का.म.पा.२३ क्षकित्ता नं.३०, ३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३, जम्मा १९ कित्ता जग्गा मालपोत विभागको मिति ०४९/०९/०१ र मिति ०४९/०९/२० को निर्णय अनुसार श्री ५ को गुठीको श्रेष्ता खारेज गरी गुठी संस्थान समेतलाई र विभागलाई पनि जानकारी दिई निवेदकहरु शैलजा, सुनिती र रुक्म शमशेर ज.ब.रा.को नाउमा संयुक्त दा.खा. दर्ता गरीदिने भन्ने व्यहोराको मालपोत कार्यलयबाट मिति २०४९।०९।२३ मि.नं. १०२४ र १०२५ -२०४९/०५० को राय।

**४)** का.न.पा.२३क्ष कि.नं. २५, २६, २७, २९ जम्मा ४ कित्ता जग्गा मालपोत विभागको मिति ०४९ /०९/०१ र मिति ०४९/०९/२० को निर्णय अनुसार श्री ५ को गूठीश्रेष्ता खारेज गरी सोही व्यहोरा गूठी संस्थान समेत र विभागलाई पनि जानकारी दिइ निवेदक शैलेजा, हेमन र हाटक शम्सेर ज.ब.रा. को नाउमा संयुक्त दा.खा.दर्ता गरी दिने भन्ने व्यहोराको मालपोत कार्यलयबाट मिति २०४९।०९।२३ गते मि.नं.१०२४ र १०२५-२०४९/०५० को राय।

## खण्ड (ख)

## सरकारी जग्गालाई आफ्नो नाममा नापजाँच भई दर्ता हुन बांकी रहेको भनी ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता भएको-२०६२ (क्षेत्रफल ०-१२-२-०)

- जग्गा प्राप्ती ऐन २०१८ अनुसार श्री ५ सरकारले प्राप्त गरेको ललिता निबास घर कम्पाउण्ड क्याम्पमा बनेको गोठ तबेला सहितको ८ रोपनी जग्गा मे.क. कनक शमसेरलाई खरिद गरेको मोलमा बिक्री गरी दिने श्री ५ को सरकारको २०२२।०४।१० को निर्णय गृह मन्त्रालयबाट लेखी आए अनुसार उल्लेखित गोठ तबेला सहितको पश्चिम दक्षिण श्री ५को सरकारले प्राप्त गरेको जग्गा र पुर्ब मुल बाट दक्षिण क्याम्प पर्खालबाट उत्तर तर्फ ३० फिट जग्गा छाडी यति चारकिल्ला भित्रको ८ रोपनी जग्गा निज कनक शमसेरलाई दिईएकोले उक्त जग्गामा घर बनाउन नक्सा पास गर्न ल्याएमा पास गरी दिनु हुन भनी सूचना गरिएको छ भनी मिति **२०२२।१२।११ मा अञ्चलाधीशको अफिस बाग्मती अञ्चलले** कनक शमसेरलाई बोधार्थ दिई काठमाडौं नगर पंचायतलाई पत्राचार गरेको देखिन्छ।
- जग्गा प्राप्ती ऐन २०१८ अनुसार श्री ५ को सरकारले प्राप्त गरेको ललिता निबासको घर जग्गामा मे.क. कनक शमसेर शाही सेनामा बहाल हुनु भएको र आफ्नै क्याममा भएको गोठ तबेला र ८ रोपनी जग्गा बसोबास गर्नको लागी निबेदन दिनु भएकोले ने.रा. बैकलाई दिएको बाहेक उक्त गोठ तबेला सहितको ८ रोपनी जग्गा श्री ५ को सरकारले खरिद गरेको मोलमा निजलाई बिक्री गरी दिन भनी श्री ५ को सरकारको २०२२।०४।१० को निर्णय भएको भन्ने गृह मन्त्रालयबाट २०२२।४।१४ मा लेखि आए अनुसार जग्गा छुटयाउने कारबाही भईरहेको भनी **मिति २०२३।०४।२० मा मजिष्ट्रेड अफिस काठमाडौंले** कनक शमसेर ज.व.रा.लाई पत्रचार गरी जानकारी गराएको देखिन्छ।
- जग्गा प्राप्ती ऐन २०१८ अनुसार श्री ५ को सरकारले प्राप्त गरी लिएको ललिता निबास बालुवाटार कम्पाउण्ड घर जग्गामा मे.क. कनक शमसेर शाही सेनामा बहाल हुनु भएको र आफ्नै क्याम्पमा भएको गोठ तबेला र ८ रोपनी जग्गा बसोबास गर्नको लागि निबेदन गर्नु भएकोले उक्त गोठ तबेला सहितको ८ आठ रोपनी जग्गा श्री ५ को सरकारले खरिद गरेको मोलमा निजलाई बिक्रि गरी दिने श्री ५ को सरकारबाट निर्णय भएको गृह मन्त्रालयबाट लेखि आएकोले सूचना गरिएको छ भनी **मिति २०२३।५।१३ मा मालपोत कार्यालय काठमाडौंले** मे.क.कनक शमसेरलाई जानकारी गराएको पत्रमा उल्लेख गरिएको देखिन्छ।

माथि उल्लेखित तथ्यहरुको आधारवाट जग्गा प्राप्ती ऐन २०१८ अनुसार तत्कालिन श्री ५ सरकारले रितपुर्बक प्राप्त गरेको बालुवाटार स्थित ललिता निवास क्याम्पको जग्गा मध्येबाट ८ रोपनि जग्गा वसोबासको लागि कनक शमसेरले तत्कालिन सरकारमा निवेदन गरे पश्चात तत्कालिन सरकारले अधिग्रहण गर्दा खरिद गरेको मोलमा नै निज कनक शमशेरलाई ८ रोपनी बिक्री गरी फिर्ता दिने **मिति २०२२।०४।१० मा** तत्कालिन सरकारको निर्णय भएको पुष्टी गर्छ।

- तत्कालिन श्री ५ को सरकारबाट कनक समशेरले ८ रोपनी जग्गा प्राप्त गर्दा "श्री ५ को सरकारबाट प्राप्त गरिएको बालुवाटार ललिता निबास घर बास घर कम्पाउण्ड जग्गा मध्ये बसोबासको निमित तपाईलाई छुट्याई दिएको गोठ तबेला सहित रोपनी ८ जग्गा समेत को मोल एक मुष्ट कट्टा गरी दिई बाँकी हुन आउने क्षतिपूर्तीको रुपैया अघिकै निर्णय बमोजिम किस्ता बन्दीमा दिलाउने निर्णय भएको श्री गृह पंचायत मन्त्रालयबाट लेखि आईरहेको र उक्त छुटाई दिएको गोठ तवेला सहित जग्गा रु ४५,८८२।६९ पैतालिस हजार आठसय बयासी रुपैया उनान्नसतरी पैसा मूल्य कायम गरी पाउने मुल्यमा कट्टा गरी दिने उक्त छुट्याईएको जग्गामा रहेको दक्षिण पटिको

घर सर्जिमिनबाटै फुट १२.६ को घर छुटयाईएको रोपनी ८ भित्र नपरी बाहिर परेको सो घरको मुल्य उक्त अवधि भित्र परि सकेको हुँदा उक्त घर भत्काउन लगाई खालि गराउने मुल्याङकन कमिटीबाट निर्णय भए बमोजिम कटाईने भएकोले दक्षिण पटिको घर जग्गा रोपनी ८ भित्र नपरी बाहिर परेको १२.६ को घर भत्काई खालि गरी दिनु हुन र उक्त तपाईलाई छुटाई दिएको गोठ तबेला सहित रोपनी ८ जग्गा तपाईको नाउमा दर्ता गरी नसकेको भए भुमि प्रशासन कार्यालय काठमाडौंमा दर्ता गरी पोत तिर्नु हुन पनि सुचित गरीन्छ" भनी **मिति २०२६।१।२९ मा** अञ्चलाधीशको कार्यालय बाग्मती अञ्चलले गृह पंचायत मन्त्रालय समेतलाई बोधार्थ दिई मे.क.कनक शमसेर ज.ब.रा.लाई पत्रचार गरेको देखिदा यस पत्रबाट निज कनक समशेरले उक्त जग्गाको मोल चुक्ता गरीसकेको देखिन्छ

- "श्री ५ को सरकारको निर्णयानुसार मौजा हाडीगाउ हा.नं.४५६ को जग्गा क्षेत्रफल २७२॥।३॥२॥ मध्ये ने.रा.बैकका नाउमा जम्मा ६०-×-× साठी रोपनी कायम गरी बाँकी २१२॥।३॥२॥ जग्गा समरजंग कम्पनीको रेखदेखमा रहेकोले बसोबास गर्नको लागि सुवर्ण शमसेरको छोरा कनक शमसेरले निबेदन गरेकोमा मुल्याङकन कमिटीको ०२६।१।२६।२ मा दक्षिणको गोठ तबेला सहितको ८-×-× आठ रोपनी जग्गा दिने निर्णय भई च.नं.१२३४ मिति ०२२।५।१३ मा श्री ५ को सरकारले खरिद गरेकै मोलमा दिने निर्णय भएको उक्त सूचना पत्रको नक्कल पनि यसै साथ पेश गरेको छ। सो अनुसार मिति ०२६।१।२९ मा मोलचुक्ता भैसकेकोले आफ्ना नाममा दर्ता गरी नसकेको भए दर्ता गरी पोत तिर्नु भन्ने लेखि दिएको सूचना पत्र हामीसँग महजुत छ। यसमा समरजंग कम्पनीको रेखदेखमा रहेको साबिक रोपनी २१२॥।३॥२॥ मध्ये साबिक ८-×-× आठ रोपनी मलाई श्री ५ को सरकारले दिएको जग्गा नाप नक्सा हुँदा का.न.प.वडा नं.२३ (स) कि.नं.१६ को क्षेत्रफल ८-१२-२ कायम भै नाप नक्सा भएको छ। नियमानुसार समरजंग कम्पनीको रेखदेखमा रहेको उक्त जग्गा मध्येबाट नापजाच हुँदा साबिक ८-×-× बाट हाल ८-१२-२ हुन आएको मेरो घर कम्पाउण्ड जग्गाको लालपुर्जा पाउन निबेदन गरेको छु" भनी **मिति २०३५।०६।११ मा** कनक शमसेर ज.ब.रा.को वारेश कर्ण बहादुर गुरूङले मालपोत कार्यालयलाई लेखेको निबेदनमा उल्लेख भए अनुसार बाँकी रहेको ०-१२-२-० क्षेत्रफल जग्गा समेत गरी जम्मा ८-१२-२-० जग्गा निज कनक शमसेरको नाममा नामसारी दर्ताको लागि निवेदन दिएको देखिन्छ।
- अञ्चलाधीशको कार्यालय बाग्मती अञ्चलको **नं.प्र. १४९६** मिति २०२६।१।२९ को पत्र अनुसार "मलाई साबिक मौजे हाडिगाउ हा.नं.४५६ को बालुवाटार कम्पाउण्ड २७२॥।३॥२॥ मध्येको दक्षिण पट्टिको रोपनी ८ आठ जग्गा र गोठ तबेला समेत मेरा नाउमा दर्ता गरी नसकेको भए भू.प्र.का.का.मा दर्ता गरीपोत समेत तिर्नु भन्ने मैले सूचना पाए अनुसार सो निर्णय बमोजिमको जग्गा हाल सम्म मैले दर्ता गर्न बाँकी रहेकोले निबेदन गर्न आएको छु। उल्लेखित निर्णय अनुसार मेरा नाउमा दर्ता गरी पाउ। ब्यहोरा ठिक साचो छ झुठो ठहरे कानुन बमोजिम सहुला बुझौला। उक्त निर्णयको नक्कल समेत यसै साथ छ" भनी **मिति २०३५।९।९** मा कनक शमसेर ज.ब.रा.को वारेश कर्ण बहादुर गुरुङले मालपोत कार्यालय काठमाडौंमा निबेदन दिएको देखिन्छ।
- त्यसै गरी "मेरो निबेदन यो छ कि नापजाँच हुँदा का.नं.प.वडा नं.२३(स) कि.नं.१६ को जग्गा मैले श्री ५ को सरकारबाट पाएको जम्मा क्षेत्रफल ८-×-× मैले गोठ तबेला सहितको आठ रोपनी पाएकोमा नापी हुँदा ८-१२-२ लेखिएकोले बढि देखिएको जग्गा ×-१२-२ नकटाई पुर्जा दिन मिल्दैन भनी श्रीमान हार्कि ज्यूको मौखिक भनाई हुन गएकोले बढि देखिई फिल्ड बुक समेतमा लेखिन गएको ×-१२-२ जग्गा पश्चिम तर्फ घर परेकोले उत्तर तर्फबाट छुटाई पाउन निबेदन दिन आएको छु, कटाई मैले पाएको जग्गाको ज.ध.दर्ता प्रमाण पुर्जा पाउ" भनी

**मिति २०३५।१२।२१ मा कनक शमसेर ज.ब.रा. स्वयंले** मालपोत कार्यालय डिल्लीबजारमा निबेदन दिएको र सोही निवेदन अनुसार नै मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंबाट "मिति ०३६।७।२३ को सदर टिप्पणी बमोजिम वडा नं.२३ स कि.नं.१६ को ८-१२-२ बाट कि.फो.भै कायमी कि.नं.२५ को ८×०×० कनक शमसेर ज.व.रा., र कि.नं. कि.नं.२६ को ×-१२-२ बांकी, जग्गाधनीको महल खाली र मोहीको महलमा कनक शमसेर ज.ब.रा. उल्लेख भएको" मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंको मिति **२०७६।११।१४ को च.नं.८०३८** को पत्रमार्फत प्राप्त जग्गाधनी दर्ता श्रेष्तामा देखिन्छ।

- उक्त जग्गा दर्ता भएको मिति ०३६।७।२३ मा कार्यालय प्रमुख को रहेका थिए भन्ने सम्वन्धमा २०३६ सालको हाजिरी रजिष्ट्ररको आधारमा प्रमुख मालपोत अधिकृत कृष्ण बहादुर प्रधान मिति २०३६।८।१२ देखि हाजिर भएको, उप-सचिव रामजी प्रसाद कोईराला मिति २०३६।०७।०७ मा सरुवा रमाना भई उदयपुरमा गएको र मिति २०३६।०७।२३ मा शाखा अधिकृत मुरलीकृष्ण श्रेष्ठ हाजिर भएको, उक्त निर्णय भएको दिनको हाजिरी रजिष्ट्रर हेर्दा अन्य प्र.मा.अ. उप सचिव र शाखा अधिकृत कार्यरत रहेको नदेखिएको भन्ने ब्यहोराको मिति २०७७।०२।३० मा भूमिसुधार तथा मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंको च.नं. ९११२ को पत्रबाट खुलि आएको हुंदा मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंमा मिति २०३६।०७।२३ मा कार्यालय प्रमुखको रुपमा मुरली कृष्ण श्रेष्ठ नै भएको स्पष्ट हुन्छ।
- साबिक नगर २३ (स) को तत्कालिन नापी अनुसार कि.नं. १ देखि कि.नं. २० सम्म जम्मा २० वटा कित्ताहरु भएको नापी कार्यालय काठमाडौंको मिति २०७६।०१।२३ को च.नं.१४४३ को पत्रसाथ प्राप्त फिल्डबुक र प्लट रजिष्टरमा खुली आएको देखिन्छ।

यसरी मिसिल संलग्न रहेको माथि उल्लेखित तथ्य प्रमाणहरुको अध्ययन गर्दा तत्कालिन श्री ५ को सरकारबाट रितपुर्बक अधिग्रहण भई समरजंग कम्पनीको जिम्मामा रहेको जग्गाबाट कनक शमसेर ज.ब.रा. ले घर बसोबासको लागि जग्गा पाउ भनी तत्कालिन सरकारमा निबेदन दिएको आधारमा अधिग्रहण गर्दा खरिद गरेको मोलमा नै ८ रोपनी जग्गा कनक शमसेर ज.ब.रा.लाई बिक्री गर्ने तत्कालिन सरकारको मिति २०२२।०४।१० को निर्णय भए बमोजिम का.जि. साबिक का.न.प.२३ "स" को कित्ता नं. १६ को ८-१२-२-० क्षेत्रफल भएको जग्गा कित्ताफोड भई कित्ता नं. २५ र कि.नं. २६ कायम गरी कित्ता नं. २५ को ८-०-०-० आठ रोपनी जग्गा मिति २०३६।०७।२३ मा कनक समशेर ज.ब.रा.को नाममा दर्ता कायम गरी बाँकी रहेको कित्ता नं. २६ को ०-१२-२-० क्षेत्रफल जग्गा श्रेष्ता समेतमा श्री ५ को सरकारको नाममा स्वत: लेखिनु पर्नेमा सो नलेखी नजनाई मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंमा कार्यरत तत्कालिन शाखा अधिकृत मुरलीकृष्ण श्रेष्ठ समेतका कर्मचारीहरुले बदनियतपुर्वक जग्गाधनी श्रेष्ता अभिलेखमा जग्गाधनीको महलमा खाली, मोहीको हकमा कनक शमसेर ज.ब.रा. र कि.नं. २६ को ×-१२-२ "बाँकी" उल्लेख गरी लेखि सरकारको हक मेटाई सरकारी तथ्य र अभिलेख विपरित फरक तथा झुठो ब्यहोरा उल्लेख गरी सरकारी कागजात किर्ते गरेको पुष्टी हुन्छ।

- यसै गरी उक्त साबिक का.न.प.वडा नं.२३ "स" को कि.नं.२६ को ०-१२-२-० जग्गा (हालको नयाँ नापीमा कायम का.म.न.पा. वडा नं.४ को सिट नं.१०२५-२० को कि.नं. ४८ को क्षेत्रफल ०००१४.८६ ब.मि. र सिट नं. १०२५-१५ को कि.नं.१११ को क्षेत्रफल ००३९२.९९ ब.मि.) सरकारी जग्गा को कसको संलग्नता र मिलेमतोमा मिति २०६२।०२।०३ मा सुनिती राणाको नाममा के कसरी नामसारी दर्ता कायम भएको हो ? भन्ने

सम्वन्धमा मिति २०७६।११।१८ मा सम्मानित विशेष अदालत बबरमहल, काठमाडौंबाट प्राप्त प्रमाणित प्रतिलिपी कागजातहरु अध्ययन गर्दा “साबिक का.जि.का.न.प. वडा नं.२३ “स” हालको का.जि.का.म.न.पा.वडा नं.४ को कित्ता नं. २६ को क्षेत्रफल ०-१२-२-० जग्गा नयाँ नापी हुँदाको बखत म निबेदकको नाममा नापजाँच भएता पनि जग्गा धनि प्रमाणपुर्जा उपरोक्त कित्ताको प्राप्त नभएको र साबिकको उपरोक्त कित्ताको जग्गा हाल का.जि.का.म.न.पा.वडा नं.४ सिट नं.१०२-१०२०-१५ को कित्ता नं. १११ ऐ. सि.नं.१०२-१०२५-२० को कित्ता नं. ४८ कायम भएको हुँदा उपरोक्त जग्गा मौजा हाडीगाउ हा.नं.४५६ को २७२।।।३।।२ मा बालुवाटार कम्पाउण्ड खलाबाट भिडी दर्ता हुन आएकोले उपरोक्त जग्गा भिडाई दर्ता गरी जग्गा धनि दर्ता प्रमाण पुर्जा पाउ, जग्गा नाप जाच ऐन २०१९ संसोधित दफा बमोजिम पुर्जा बितरण भएको ६० दिन भित्रै यो निबेदन लिई उपस्थित भएको छु” भनी **मिति २०५८।२।८ मा** सुनिती राणाले ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको निबेदन दिएको देखिन्छ।

- “का.जि.का.म.न.पा. वडा नं.२३ स साबिक कित्ता नं.१६ कित्ता काट भई कायम हुन आएको कित्ता नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा कित्ता १ दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा लिन बाँकी रहेकोमा हामी समेतको नाममा रहेको साबिक लगत मौजा हाडीगाउ हा.नं.४५६ को २७२।।।३।।२।। बाट भिडी दर्ता हुने जग्गा सुबर्ण शमसेरको बुहारी कनक शमसेरको श्रीमती का.जि.का.म.न.पा.वडा नं. ४ बस्ने सुनिती राणाको नाममा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा दिएमा हामीहरुको पुर्ण मन्जुरी छ पछि मन्जुर छैन भनी कुनै अड्डा अदालतमा कुनै प्रकारको उजुर बाजुर गर्ने छैनौ गरेमा यसै मन्जुरीनामाको कागजले बद्दर गरी दिएमा हाम्रो मन्जुरी छ हामीले अड्डा अदालतबाट लागेको दण्ड जरिवाना दसौद आदेशले बाँकी रहेको कोर्ट फि सरकारी बिगो समेत तिर्न बुझाउन बाँकी छैन। किनाराका साक्षीहरुका रोहबरमा हाम्रो राजीखुसी मन्जुरीले यो मन्जुरीनामा कागज लेखि लेखाई सहिछाप गरी मालपोत कार्यालय काठमाडौंमा चढायौ” भनी **मिति २०६०।०३।२३ मा रुक्म शमसेर ज.ब.रा., शैलजा राणा, हाटक शम्सेर राणा, हेमन शमसेर ज.व.रा.** समेतले **राम कुमार सुवेदी र शोभाकान्त ढकाल** समेत साक्षीहरु राखी गलत तथा झुठो ब्यहोराको मन्जुरिनामा कागज गरी दिएको देखिन्छ।
- “का.म.न.पा.वडा नं.४ बस्ने हेमाद्री शमसेर ज.व.रा.ले मेरो पिता कनक शम्सेर ज.व.रा.को नाममा दर्ता प्रमाणित हुन बाँकी रहेको का.जि.का.न.पा.वडा नं.२३ स को कित्ता नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा हाल नयाँ नापीमा कायम भएको वडा नं. ४ सिट नं.१०२५-१५ को कित्ता नं.१११ को क्षेत्रफल ३९२.९९ हे.ब.मि.र ऐ वडामा सिट नं.१०२५-२० को कित्ता नं.४८ को क्षेत्रफल १४.८६ हे.ब.मि.जग्गामा पिता कनक शमसेर ज.ब.रा.को आफ्नो कालगतिले २०४३।०९।०६ मा परलोक हुनु भएको हुँदा निज परलोकवालाको हकदार निजका म निबेदक छोरा हेमाद्री शमसेर ज.व.रा. र श्रीमती सुनीती राणाको नाममा दर्ता नामसारी गरी जग्गा धनि प्रमाण पत्र पुर्जा लिन यस कार्यालयको नाममा सिफारिस पाउ भनी दिनु भएको निबेदन सम्बन्धमा निबेदकको पिता कनक शमसेर जवराको नाममा दर्ता हुने उक्त उल्लेखित कित्ताहरु भएको र परलोकवालाको हकदार निबेदक हेमाद्री शमसेर जवरा छोरा एक र श्रीमती सुनिती राणा समेत जवान २ हकदार भएको र दर्ता समयमा दर्ता छुट भई दर्ता हुन बाँकी भएको निबेदकको माग अनुसार दर्ता हुने निबेदक समेतको हकभोकमा हाल भोगचलन भईरहेको जग्गा भएको हुँदा तहाको नियम अनुसार दर्ता नामसारी जग्गा धनि प्रमाण पुर्जा उपलब्ध गराईदिनु हुन सिफारिस गर्दछु” भनी **मिति २०६०।५।१२ मा** तत्कालिन वडा सचिव **शिवजि भट्टराईले** मालपोत कार्यालय डिल्लीबजारलाई झुठो ब्यहोराको सरकारी कागज किर्ते गरी सिफारीस गरेको र उक्त

सिफारीस **मिति २०६०।५।१५ मा** सुनिती राणा र निजको छोरा हेमाद्री शमसेर ज.व.रा.ले मालपोत कार्यालय डिल्लीबजारमा निबेदन साथ पेश गरेको देखिन्छ

- का.म.न.पा.वडा नं.४ बस्ने सुनिती राणाको ३५ दिने सार्वजनिक सूचना यसै पत्रसाथ संलग्न राखी पठाईएको छ। प्राप्त भए पछी लाग्ने दस्तुर पत्र बाहक मार्फत बुझि लिई गो.प.मा प्रकाशित गरी दिनु हुन अनुरोध छ भनी मिति २०६०।५।३१ मा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंले गोरखापत्र संस्थान धर्मपथ काठमाडौंलाई पत्राचार गरे अनुसार **मिति २०६०।६।३ गतेको गोरखापत्रमा** "का.जि.का.म.नं.पा.२३ स कित्ता १६ हाल नगर ४ कित्ता नं.२६ को ०-१२-२-० जग्गा नापी हुँदाको बखत म निबेदकको नाममा नापजाँच भएता पनि उक्त कित्ताको जग्गा धनि प्रमाण-पुर्जा उपलब्ध नभएको हुँदा सो जग्गाको साबिक मौजा हाडिगाउको हा.नं.४५६ को क्षेत्रफल २७२।।।३।।२।। दर्ता रहेको मध्येबाट कनक शमसेर समेत ६ जनाको नाममा दर्ता रहेको जग्गा भिडाई छुट जग्गा दर्ता गरी पाउ भनी का.म.न.पा.वडा नं.४ बस्ने सुनिती राणाले मिति २०५८।२।८ मा मालपोत कार्यालय काठमाडौंमा निबेदन माग गर्नु भएको हुँदा उक्त कित्ता जग्गा निबेदक बाहेक अरु कसैको नाममा दर्ता हुने भएमा यो सूचना भएको मितिबाट ३५ दिन भित्र आफु सँग भएको सक्कलै सबुत प्रमाण लिई उपस्थित हुनु होला अन्यथा कानुन बमोजिम भई जाने ब्यहोरा समेत सर्वसाधरणको जानकारीको लागी सूचना प्रकाशित गरिएको छ" भन्ने ब्यहोराको सूचना प्रकाशित भएको देखिन्छ । **सो** समयमा मिति २०५६।७।१७ गते देखी २०६४।११।१८ गते सम्म अर्जुन प्रसाद भण्डारी समरजंग कम्पनीको कार्यालय प्रमुखको रुपमा कार्यरत रहेको भनी समरजंग कम्पनीको कार्यालयको **च.नं.१७२ मिति २०७७।२।२६** गतेको पत्र प्राप्त भएको हुँदा समरजंग कम्पनीको रेखदेखमा भएको साविकको का.न.प.२३"स" को कित्ता नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा हाल नयाँ नापीमा कायम भएको का.म.न.पा.वडा नं. ४ सिट नं.१०२५-१५ को कित्ता नं.१११ को क्षेत्रफल ००३९२.९९ व.मि.र सिट नं.१०२५-२० को कित्ता नं.४८ को क्षेत्रफल ०००१४.८६ व.मि. सरकारी जग्गाको सम्बन्धमा ३५ दिने सूचना प्रकाशित हुँदा समेत सरकारी जग्गाको संरक्षण गर्ने, तथ्य र सुचनाको अभिलेख राख्ने तथा रेखदेख गर्ने जस्ता जिम्मेवारी र दायित्व भएको समरजंग कम्पनीका तर्फबाट तत्कालिन कार्यालय प्रमुख **अर्जुन प्रसाद भण्डारीले** गलत नियत राखी संरक्षण गर्ने दायित्व निर्वाह नगरी उक्त जग्गा सरकारी स्वामित्वको जग्गा हो भनी सरकारको तर्फबाट दाबी गर्न गएको देखिदैन।
- "का.जि.का.न.पा.वडा नं.२३ स कित्ता नं.२६ क्षेत्रफल ०-१२-२-० को छुट जग्गा दर्ता गरी पाउ भनी का.म.नं.पा. ४ बस्ने सुनिती राणाले यस कार्यालयमा निबेदन दिन आएका निबेदकले कारबाहीको लागी माग गरेको कर बिर्ता के हो ? कुन साल लगत भिडी ना.सा. हुने जग्गा हो उक्त जग्गा को कसको नाममा रहि आएको छ, कुनै सरकारी, ऐलानी, प्रति, सार्बजनिक वा कानुनले दर्ता भएको जग्गामा घर बनाएको छ छैन ? निबेदकको नाममा रै.प.ना.सा समेतको जग्गा हो होईन र दर्ता गरीदिन फरक पर्छ कि पर्दैन ? आठा जोडिएको साध सधियार भए मोही समेत राखी फिल्डमा नै गई २०५८....गते रितपुर्वक सर्जमिन मुचुल्का गराई पेश गर्नु" भनी **मिति २०६२।०१।०७ मा** मालपोत कार्यलाय डिल्लीबजार काठमाडौंले श्याम कुमार क्षेत्रीको नाममा पत्र लेखेको र त्यस पछि मिति **२०६२।०१।११ मा** "का.जि. का.म.न.पा.वडा नं. ४ बस्ने सुनिती राणाले साबिक मौजा हाडिगाउ हा.नं.४५६ मध्ये भिडी दर्ता हुने नापीको समयमा नाप नक्सा हुँदा पति कनक शमसेर ज.ब.रा.को नाममा नाप नक्सा भएको साबिक नगर २३ "स" कित्ता नं.२६ क्षेत्रफल ०-१२-२-० को हाल नयाँ नापिमा का.म.नं.पा. वडा नं.४ सिट नं.१०२५-२० कि.नं.४८ क्षेत्रफल १४०.८६ र ऐ.ऐ. कि.नं.१११ क्षेत्रफल ३९२.९९ को जग्गा निज दर्तावालाको शेष पछि हकखाने हकदारमा निजको श्रीमती सुनिती राणा र छोरा होमाद्री शमसेर

ज.ब.रा.जना २ मात्र भएको, दर्तावाला कनक शमसेरको मिति ०४३।०९।०६ मा मृत्यु भईसकेको र हाल उक्त नयाँ नापी अनुसारको जग्गा समेत निबेदकले नै परापुर्वक कालदेखी कम्पाउण्ड लगाई निर्बिबादरुपमा भोगचलन गरी आउनु भएको छ, उक्त जग्गा निबेदककै पृतिक जग्गा हो निबेदकका माग बमोजिम दर्ता गरीदिएमा फरक पर्दैन कुनै सरकारी तथा सार्वजनिक र ब्यक्ती बिशेषको जग्गा समेत पर्दैन" भनी निबेदक सुनिती राणा, साक्षीहरु रामकृष्ण ठकुरी समेत ७ जना र ४ नं. वडाका तत्कालिन वडा सचिव कृष्णराज बिष्टको रोहवरमा खरिदार श्याम कुमार क्षेत्रीले तथ्य विपरित गलत तथा झुठो ब्यहोराको किर्ते सर्जमिन मुचुल्का तयार गरी पेश गरेको देखिन्छ।

- "मेरो पिता कनक शमसेर ज.व.रा.को नाममा नाप नक्सा भई दर्ता हुन छुट भएको का.जि.का.म.न.पा.वडा नं.२३/स कि.नं.२६ क्षेत्रफल ०-१२-२-० जग्गाको हाल नयाँ नापीमा कायम का.म.न.पा. वडा नं.४ सिट नं.१०२५-२० कि.नं.४८ क्षेत्रफल १४०.८६ र ऐ.ऐ.कि.नं.१११ क्षेत्रफल ३९२.९९ जग्गाको हकदारहरुमा म र मेरो आमा सुनिती राणा मात्र भएको, अन्य हक खाने हकदारहरु कोही नभएको र पिता कनक शमसेरको मिति ०४३।९।६ मा मृत्यु भैसकेकोले उक्त कित्ता जग्गा आमा सुनिती राणाको नाम मात्र एकलौटी ना.सा. दर्ता भएमा मेरो मन्जुरी छ। मेरो मनोमान राजीखुसी सँग यो हकदाबी छाडी दिएको छु, पछि कहि दाबी गरेमा यसै निबेदनले बदर गरी दिए हुन्छ" भनी **मिति २०६२।१।११ मा हेमाद्री शमसेर ज.ब.रा.ले** मालपोत कार्यालय डिल्लीबजारमा तथ्य बिपरित झुठो ब्यहोराको हकदावी छाडी दिएको किर्ते निवेदन पेश गरेको देखिन्छ।
- "साबिक मौजा हाडिगाउ हा.नं.४५६ बालुवाटार कम्पाउण्ड २७२॥३॥२॥ श्वेत प्रभा राणा, कनक शमसेर, रुक्म शमसेर, शैलजा, हेमन्त शमसेर, हाटक शमसेर समेत जना छ जनाको नाममा लगत कायम भएको लगतमा उल्लेख भएका ब्यक्ती तथा निजका हकदारहरुले उक्त कि.नं.२६ को जग्गा निबेदिकाका नाममा दर्ता गर्न मन्जुर गरेको का.म.न.पा. ४ नं. वडा कार्यालयको च.नं.३७९ मिति ०६०।५।१२ को सिफारिस प्राप्त भएको, मिति ०६०।६।३ मा हकदाबी सम्बन्धी ३५ दिने सूचना गोरखापत्रमा प्रकाशित भएको, उक्त समयमा मिति २०५६।७।१७ गते देखी २०६४।११।१८ गते सम्म अर्जुन प्रसाद भण्डारी कार्यरत रहेको भन्ने समरजंग कम्पनीको कार्यालयको च.नं.१७२ मिति २०७७।२।२६ गतेको पत्र प्राप्त भएको, मिति ०६२।१।११ मा वडा प्रतिनिधिको रोहवरमा सर्जमिन भई आएको, साबिक उक्त कित्ता नयाँ नापीमा का.म.न.पा.वडा नं. ४ सिट नं.१०२५-१५कि.नं.१११ क्षे.फ. ००३९२.९९ र ऐ.ऐ.कि.नं.४८ को क्षेत्रफल ०००१४.८६ भिडने भनी नापी शाखाबाट लेखी आएकोले प्रस्तुत प्रमाणको आधारमा उल्लेखित कित्ता जग्गा निबेदिका सुनिती राणाको नाममा ना.सा. दर्ताको लागी छुट जग्गा दर्ता समितीमा राख्न निर्णायार्थ पेश गरेको छु, जो आदेश" भन्ने ब्यहोराको मालपोत कार्यालय डिल्लीबजार काठमाडौंको मिति २०६२।२।२ मा टिप्पणी र आदेश तयार भएको देखिन्छ। सो टिप्पणी आदेशमा भएको दस्तखत को कसको हो ? भन्ने सम्बन्धमा मिति २०६२ सालको हाजिरी रेकर्ड भिडाउदा उक्त टिप्पणी उठाउने खरिदार श्याम कुमार क्षेत्री, रुजु गर्ने ना.सु. श्रीहरी पुडासैनी, पेश गर्ने मालपोत अधिकृत हुपेन्द्र मणी के.सी., र सदर गर्ने प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेको मिल्दो जुल्दो देखिएको भनी **मिति २०७७।०२।३०मा** भूमिसुधार तथा मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंको च.नं. ९१०९ को पत्रबाट खुलि आएको छ।
- "पेश भएको लगत, नाता प्रमाण,फिल्ड बुक उतार, सिफारिस, नागरीकता, हकदारहरुको मन्जुरी निबेदन, सार्बजनिक सूचना, सर्जमिन मुचुल्का समेत प्रमाणको आधारमा नगर वडा नं.२३/स कि.नं.२६ क्षे.फ.०-१२-२-० को हाल नयाँ नापीको का.म.न.पा.वडा नं.४ सिट नं.१०२५-१५ कि.नं.१११ क्षे.फ.००३९२.९९ र कि.नं.४८

क्षे.फ.०००१४.८६ को जग्गा निबेदीका सुनिती राणाको नाममा ना.सा. दर्ताको लागी सिफारीस गरीयो" भन्ने व्यहोरा उल्लेख गरी **मिति २०६२।२।२ मा** सिफारिस समितिले गरेको सिफारिस र सोही सिफारीसको बुदा नं. २१ मा "पेश भएको मितिले संरक्षण कागजात सवुत प्रमाण तथा कार्यालयले श्रेष्ता समेत भिडेको उपयुक्त विवरण भरेको फरक छैन" भन्ने तथ्य विपरितको झुठो ब्यहोरा उल्लेख गरेको देखिन्छ। सो छुट जग्गा दर्ता सिफारिस समितिमा र बुदा नं.२१ मा भएको दस्तखतहरु को कसको हो ? भन्ने सम्बन्धमा छुट जग्गा दर्ता समितिले मिति २०६२।२।२ मा तयार गरेको सिफारिसमा भएको दस्तखत मिति २०६१।१२।३० र मिति २०६२।०२।१० मा जग्गा दर्ता समितिको बैठक पुस्तिका भिडाउदा मिल्दो जुल्दो भएको दस्तखत नापी अधिकृत मोहम्मद साविर हुसेन, मालपोत अधिकृत हुपेन्द्रमणी के.सी., प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरे र **बुदा नं.२१** मा भएको दस्तखत हाजिरी रेकर्ड भिडाउदा खरिदार श्याम कुमार क्षेत्रीको मिल्दो जुल्दो देखिएको र सो जग्गा दर्ता गर्न जग्गा दर्ता समितिको मिति २०६२।०२।०२ मा बैठक बसेको बैठक पुस्तिकामा समेत नदेखिएको भनी भूमिसुधार तथा मालपोत कार्यालय डिल्लीबजारको **मिति २०७७।२।३० को** च.नं. ९१०८ को पत्रबाट खुलि आएको छ।

- "मालपोत अधिकृत समेतको राय र जग्गा दर्ता समितिको सिफारिसलाई ध्यानमा राखी निबेदकको माग बमोजिम साबिक नगर २३ "स" कि.नं.२६ को ०-१२-२-० क्षेत्रफल जग्गा हाल नापीको का.म.न.पा. वडा नं.४ को सिट नं.१०२५-१५ को कि.नं.१११ क्षेत्रफल ००३९२.९९ र सिट नं.१०२५-२० कि.नं.४८ को क्षेत्रफल ०००१४.८६ जग्गा निबेदक सुनिती राणाको नाममा मालपोत ऐन २०३४ दफा ७(२)८(१) अनुसार दर्ता/नामसारी/दा.खा.हुने ठहर्छ" भन्ने व्यहोरा उल्लेख गरी **मिति २०६२।२।३ मा** मालपोत कार्यालय डिल्लीबजार बाट टिप्पणी र आदेशको निर्णय पर्चा तयार भएको देखिन्छ। सो टिप्पणी र आदेश निर्णय पर्चामा भएको दस्तखतहरु को कसको हो ? भन्ने सम्बन्धमा २०६२ सालको हाजिरी रेकर्ड भिडाउदा मिल्दो जुल्दो भएका टिप्पणी उठाउने खरिदार श्याम कुमार क्षेत्री, रुजु गर्ने ना.सु. श्रीहरी पुडासैनी, पेश गर्ने मालपोत अधिकृत हुपेन्द्र मणी के.सी. र सदर गर्ने प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेको भएको **मिति २०७७।०२।३० मा** भूमिसुधार तथा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंको च.नं.९१०६ को पत्रमा खुलि आएको छ।
- **नापी कार्यालय मैतिदेवी काठमाडौंको मिति २०७६।११।२०** को चलानी नं.१४१७ को पत्र साथ संलग्न प्रमाणित नक्शामा मिति २०४७।७।११ देखि २०४७।७।३० सम्म ब्लक नापी भएको देखिन्छ।
- **नापी कार्यालय मैतिदेवी काठमाडौंको मिति २०७६।११।२३ गतेको** चलानी नं.१४४५ को पत्र साथ प्राप्त प्रमाणित फिल्डबुक र प्लट रजिष्टरमा काठमाडौं जिल्ला का.न.प. वडा नं.२३ "स" को कित्ता नं. २६ को ०-१२-२-० क्षेत्रफल जग्गा मध्ये १४.८६ व.कि. क्षेत्रफल जग्गा ब्लक नापी हुँदाको कित्ता नं. १५ मा र ३९२.९९ ब.कि. क्षेत्रफल जग्गा कित्ता नं. १०७ मा नापजाँच भएको र मिति २०५७।१२।२७ र २०५८।१।७ गते प्रमुख नापी अधिकृत बाट भएको सदर टिप्पणी अनुसार उक्त कित्ता नं.१५ को ४९५९.२० क्षेत्रफल जग्गा बदर गरी कि.नं. ४५, ४६, ४७ र ४८ मा र कित्ता नं.१०७ को १०१५.०० क्षेत्रफल जग्गा बदर गरी कित्ता नं. १०९, ११० र १११ कायम भएको प्लट रजिष्टरमा देखिएको, कित्ता नं. १५ बदर भई कायमी सिट नं.१०२-१०२५-२० कित्ता नं.४८ मा १४.८६ व.कि. क्षेत्रफल जग्गा र कित्ता नं.१०७ बदर भई कायमी सिट नं.१०२-१०२५-१५ को कित्ता नं.१११ मा ३९९.९९ व.कि. क्षेत्रफल जग्गा कायम भएको र जग्गाहरु दिने ब्यक्तीको महलमा केही नलेखि लिने ब्यक्तीको महलमा बाँकी उल्लेख भएको छ।

➢ "बालुवाटार बस्ने मे.क.कनक शमसेर ज.ब.रा.ले अञ्चलाधीश कार्यालय बाग्मती अञ्चलको १४९६ मिति ०२६।१।२९ को पत्रानुसार मलाई साबिक मौजे हाडी गाउ हा.नं.४५६ को बालुवाटार कम्पाउण्ड २७२।।३।२।। मध्ये दक्षिण पटिको ८ रोपनी जग्गाको पुर्जा पाउ भनी र.नं.२४५२ मिति ०३५।६।५ मा निबेदन परेको। यसमा कार्यालयबाट मिसिल छानबिन गरी हेरी मिति २०३५।९।११ मा श्री अञ्चलाधीशको कार्यालयमा सोधनी गर्दा मिति ०३५।९।१६ मा रोपनी ८-×-× जम्मा कनक शमसेर ज.ब.रा.ले घर बसोबास निमित पाएको भनी लेखि आएको र मिति ०३५।१२।२१ मा का.नं.प.वडा नं.२३ स कि.नं.१६ को क्षेत्रफल ८-१२-२ कट्टा गरी पुर्जा पाउ भन्ने माग र माग अनुसार रोपनी ८-×-× कनक शमसेर ज.ब.रा.को नाउमा बाँकी ×-१२-२ श्री ५ को सरकारले प्राप्त गर्ने गरी साबिक कि.नं.१६ बाट कित्ता फोड भै कि.नं.२५ कनक शमसेर कि.नं.२६ श्री ५ को सरकार कायम गरी दिनु पर्ने देखि आदेशको लागि श्रीमान समक्ष पेश गरेको छु" भन्ने ब्यहोराको टिप्पणी र आदेश समेत पाना-१४ को फोटो कपिहरु **मिति २०५७।३।२१ मा हेमाद्री शमसेरले** भर्पाई गरी बुझी लिई गएको उक्त टिप्पणी र आदेशमा उल्लेख भएको छ। सो बाट निज हेमाद्री शमसेर ज.व.राणालाई उक्त जग्गा सरकारी जग्गा भएको स्पष्ट थाहा हुँदा हुदै पनि झुठो ब्यहोरा उल्लेख गरी किर्ते हकदावी छोडेको निबेदन पेश गरेक प्रष्टसँग देखिन्छ।

➢ मिति २०५७।३।२१ मा मा.पो.का.का.बाट हेमाद्री शमसेर ज.व.रा.ले बुझि लगेको टिप्पणी आदेशको छाँया कपि, ८ रोपनी जग्गा श्री ५ को सरकारले खरिद मोलमा कनक शमसेर ज.व.रा.लाई बिक्रि गरी दिने श्री ५ को सरकारबाट निर्णय भएको भनी गृह मन्त्रालयबाट लेखि आएकोले सुचना गरिएको भनी मिति २०२२।५।१३ मा कनक शमसेर ज.ब.रा. लाई लेखेको पत्रको छाँया कपि पाना-१, छुटाई दिएको मोल कट्टा भएको सम्बन्धमा अंचलाधीशको कार्यालय बाग्मती अञ्चलले मिति०२६।१।२९ मा कनक शमसेर ज.ब.रा. लाई लेखेको च.नं.१४९६ को पत्रको छाँया कपि पाना-१, पोता रसिद पेश गरेको सम्बन्धमा कनक शमसेर ज.व.रा.को वारिस कर्ण बहादुर गुरुङले मिति २०३५।६।११ मा मालपोत कार्यालय काठमाडौंमा पेश गरेको निबेदनको छाँया कपि पाना-१, साविक लगत कायम गरी पाउँ भनी कनक शमसेर ज.व.रा.को वारिस कर्ण बहादुर गुरुङले मिति २०३५।९।९ मा मालपोत कार्यालय काठमाडौंमा लेखेको निबेदनको छाँया कपि पाना-, कनक शमसेर ज.ब.रा.ले पाएको ८ रोपनी जग्गा समरजंग कम्पनीको रेखदेखमा रहेको २१२।।३।।२।। जग्गा मध्येबाट दिईएको भनी अञ्चलाधीशको कार्यालय बाग्मती अञ्चलले मिति २०३५।९।१६ मा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंलाई लेखेको पत्रको छाँया कपि पाना-१ र बढी जग्गा कटाई पाउँ भनी मिति २०३५।१२।२१ मा मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंमा कनक शमसेर ज.व.रा.ले दिएको निबेदनको छाँया कपि पाना-१ समेत पाना-७ मिसिल संलग्न कागजातहरु मालपोत कार्यालय डिल्लीबजारमा भएकोले उल्लेखित कागजातहरुको कपि प्रमाणित गरी हेमाद्री शमसेर ज.व.राणालाई दिएको हो भन्ने ब्यहोराको रमेश कुमार पोखरेल र लक्ष्मी प्रसाद काफ्लेले खुलाई लेखाई दिएको कागज।

➢ का.न.प. वडा नं. २३ "स" को कि.नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा हालको नयाँ नापीमा कायम का.म.न.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल जग्गाको हालको चलनचल्तीको मुल्य प्रति आना रु.६०,००,०००।–(साठी लाख) पर्ने भन्ने ब्यहोरा काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको च.नं.४/१९४० मिति २०७८।०८।२३ को पत्रमा उल्लेख भइ आएको।

- आफ्नो हक नपुग्ने साबिक का.न.प.२३"स" को कित्ता नं. २६ को ०-१२-२-० क्षेत्रफलको सरकारी जग्गा आफ्नो हक लाग्ने भनी रुक्म शमसेर ज.व.रा.ले गरको झुठो ब्यहोराको मिति २०६०।०३।२३ को मन्जुरीनामा कागजमा साक्षीको रुपमा दस्तखत गरेको हो भन्ने ब्यहोराको पक्राउ प्रतिवादी राम कुमार सुवेदी र शोभाकान्त ढकालले गरेको बयान कागज
- प्रतिवादी टीकाराम घिमिरे, हुपेन्द्र मणी के.सी., श्रीहरी पुडासैनी, श्याम कुमार क्षेत्री र मो.साविर हुसेन समेतले सुनिती राणाको नाममा जग्गा दर्ता गर्दाको समयमा गरेको टिप्पणी आदेशमा भएको दस्तखत र निजहरु तत्कालिन समयमा कार्यरत रहदा निजहरुले गरेको दस्तखत परिक्षण गर्दा In short there is no divergence between both the questioned and standard signature, both the signature are free written and have natural variation among them. The aforesaid similarities are significant and sufficient and will not accidentally coincide in the writing habits of two different persons and when considered collectively they lead me to the conclusion of their **common authorship** भएको ब्यहोरा केन्द्रीय प्रहरी बिधि विज्ञान प्रयोगशालाको चलानी नं.४३४, मिति २०७९।०४।१६ गतेको पत्रसाथ प्राप्त प्रतिवेदनमा उल्लेख भई आएको छ।
- प्रतिवादी शिवजी भट्टराईले गरेको सिफारिस कागजमा भएको दस्तखत र निज तत्कालिन समयमा कार्यरत रहदा निजले गरेको दस्तखत परिक्षण गर्दा In short there is no divergence between both the questioned and standard signature, both the signature are free written and have natural variation among them. The aforesaid similarities are significant and sufficient and will not accidentally coincide in the writing habits of two different persons and when considered collectively they lead me to the conclusion of their **common authorship** भएको ब्यहोरा केन्द्रीय प्रहरी बिधि विज्ञान प्रयोगशालाको चलानी नं.८७५, मिति २०७९।०४।३० गतेको पत्रसाथ प्राप्त प्रतिवेदनमा उल्लेख भई आएको छ।
- का.न.प. वडा नं. २३ "स" को कि.नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा हालको नयाँ नापीमा कायम का.म.न.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल जग्गाको हालको चलनचल्तीको मुल्य प्रति आना रु.५०,००,०००।– पचास लाख देखी ८०,००,००,०००।– असी लाख) पर्ने भन्ने ब्यहोरा काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको च.नं.४/५६६२ मिति २०८०।०३।२९ को पत्रमा उल्लेख भइ आएको छ।
- नाता प्रमाणितको आधारबाट मृतक कनक शमसेरको हकदार श्रीमती सुनिती राणा र छोरा हेमाद्री शमसेर ज.ब.रा. देखिएको, निजहरुले पेश गरेको निबेदन समेतको संलग्न फिल्ड बुक, नागरीकता प्रमाण पत्र र उल्लेखित जग्गा निजहरुको घर कम्पाउण्ड भित्र रही निजहरुले नै भोगचलन गरी आएको देखिएकोले कानून बमोजिम छुट जग्गा निबेदकको नाममा दर्ता गरी जग्गाधनी प्रमाण पुर्जा उपलब्ध गराई दिनु भनी म तत्कालिन वडा सचिवको हैसियतमा दस्तखत गरी मालपोत कार्यालयलाई सिफारिस गरी दिएको हो भन्ने ब्यहोराको शिवजी भट्टराईको बयान।

➢ सुनिती राणाको नाममा ना.सा. दर्ताको लागी छुट जग्गा दर्ता समितीमा राख्न निर्णायार्थ पेश गरेको छु भन्ने ब्यहोराको मिति २०६२।०२।०२ को टिप्पणी र आदेशमा, निबेदिका सुनिती राणाको ना.सा. दर्ताको लागी सिफारीस गरीयो भन्ने ब्यहोराको जग्गा दर्ताको लागि सिफारिस गर्दा भर्नु पर्ने फारामको मिति २०६२।०२।०२ को समितिको सिफारिस कागजमा र हाल नयाँ नापीको का.म.पा.वडा नं. ४ सिट नं.१०२५-१५ कि.नं.१११ क्षे.फ. ००३९२.९ ९ र कि.नं. ४८ क्षे.फ. ०००१४.८६ को जग्गा सुनिती राणाको नाममा नामसारी गर्ने निर्णय गरीयो भनी लेखिएको मिति २०६२।२।३ को निर्णय पर्चामा समेत मैले मालपोत अधिकृतको हैसियतमा दस्तखत गरेको हो भन्ने ब्यहोराको हुपेन्द्रमणि के.सी.को बयान।

यसरी यस खण्डमा उल्लेखित तथ्य प्रमाणहरुको आधारमा तत्कालिन श्री ५ को सरकारबाट रितपूर्बक अधिग्रहण भई श्री ५ को सरकार, समरजंग कम्पनीको जिम्मामा रहेको जग्गा मध्ये ललिता निबास भित्र आफ्नै क्याममा भएको गोठ तबेला सहितको ८ रोपनी जग्गा घर बसोबासको लागि पाउ भनी कनक शमसेर ज.ब.रा.ले तत्कालिन श्री ५ को सरकारमा दिएको निबेदनको आधारमा तत्कालिन सरकारको मिति २०२२।०४।१० मा ८ रोपनी जग्गा कनक शमसेरलाई दिने निर्णय बमोजिम साबिक का.न.प.२३"स" को कित्ता नं. १६ को ८-१२-२-० क्षेत्रफल भएको जग्गा कित्ताफोड भई कित्ता नं. २५ को ८-०-०-० आठ रोपनी जग्गा मिति २०३६।०७।२३ मा कनक समशेर ज.ब.रा.को नाममा दर्ता गरी कित्ता नं. २६ को ०-१२-२-० क्षेत्रफल जग्गा स्वत: तत्कालिन श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम गर्नु पर्नेमा सो नगरी तत्कालिन मालपोत कार्यालयका शाखा अधिकृत मुरली कृष्ण श्रेष्ठ समेतको मिलेमतोमा बदिनयत राखी सरकारको हक मेटाई सरकारी तथ्य र अभिलेख विपरित जग्गाधनी श्रेष्तामा जग्गाधनीको महल खाली, मोही कनक शमसेर ज.व.रा.र कि.नं.२६ ×-१२-२ "बाँकी" लेखी झुठो ब्यहोरा उल्लेख गरी सरकारी कागजात किर्ते गरेको र साबिकको उक्त कि.नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल भएको आफ्नो हक नपुग्ने सरकारी जग्गा आफ्नो नाममा दर्ता गरी पाउ भनी मिति २०५८।०२।०८ मा सुनिती राणाले ६ नं. नापी गोश्वारा महाराजगञ्जमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि रुक्म शम्सेर समेतको झुठो ब्यहोराको मन्जुरीनामा, काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको झुठो ब्यहोराको किर्ते सिफारिस, श्याम कुमार क्षेत्रीले तयार गरेको झुठो व्यहोराको किर्ते सर्जमिन मुचुल्का, हेमाद्री शमसेर ज.ब.राणाले मालपोत कार्यालय डिल्लीबजारमा पेश गरेको झुठो ब्यहोराको हकदावी छोडेको किर्ते निबेदन समेतका सरकारी अभिलेख र तथ्य विपरितको किर्ते गरेका कागजातहरुको आड हाली मिति २०६२।०२।०२ उक्त जग्गा सुनिती राणाको नाममा नामसारी दर्ताको लागि छुट जग्गा दर्ता समितीमा राख्न निर्णायार्थ पेश गरेको भन्ने तथ्य विपरितका झुठो ब्यहोरा उल्लेख भएको प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेले हुन्छ भनी टिप्पणी र आदेश सदर गरी मिति २०६२।०२।०२ मा उक्त जग्गा निबेदीका सुनिती राणाको नाममा ना.सा. दर्ताको लागी सिफारीस गरीयो भनी नापी अधिकृत मोहमद साबिर हुसेन, मालपोत अधिकृत हुपेन्द्र मणी के.सी.ले सिफारिस समितिको सदस्यको हैसियतमा र प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेले प्रमुखको हैसियतमा सरकारी अभिलेख तथा तथ्य विपरित झुठो ब्यहोराको किर्ते सिफारिस गरी का.म.पा.वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं. ४८ को १४.८६ व.मि. क्षेत्रफल र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ व.मि. क्षेत्रफल जग्गा सुनिती राणाको नाममा मालपोत ऐन २०३४ दफा ७ (२),८ (१) अनुसार दर्ता/नामसारी/दा.खा.हुने ठहर्छ" भनी प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेले मिति **२०६२।०२।०३** मा

निर्णयमा सदर गरी उक्त सरकारी जग्गा ब्यक्ति बिशेष सुनिती राणाको नाममा नामसारी दर्ता कायम गरी सरकारको हक मेटाई सरकारी जग्गाको हिनामिना तथा हानी नोक्सानी पुऱ्याई मुलूकी ऐन, २०२० अन्तर्गतको **किर्ते कसूर** र **सँगठीत अपराध निवारण ऐन,२०७० अन्तर्गतको** कसूर अपराध गरेको स्पष्ट देखिन्छ।

**खण्ड (ग)**

**प्रधानमन्त्री निवास बिस्तार तथा जग्गा सट्टापट्टा सोधभर्ना -२०६७ (क्षेत्रफल २५-७-१-१)**

"२०४४ मा प्राप्त भई आएकोमा माग भएको बिबरण सम्बन्धमा ललिता निबासको घर कम्पाउण्ड २९९-९-३-० जग्गा मध्येबाट श्री ५ सरकारको हु.प्र. र श्री ५ को सरकारको मिति २०३६।०२।२७ गतेको निर्णय समेतबाट पपिता देविलाई वार्ड नं. २३ क्षबाट १ रोपनी, दामोदर प्रसाद उपाध्यायलाई वडा नं. २३ स को कि.नं. ८५ बाट १ रोपनी र कुमार बस्नेतलाई २३ स को कि.नं. २२ बाट २ रोपनी ७ आना २ पैसा पुरै र .....देखि बाहिरको कि.नं. १८ बाटोको पश्चिम तर्फ ०-३-२ गरी दुई रोपनी ल्याई ...साथै श्री ५ को सरकारको निर्णय अनुसार ललिता निबासको घर कम्पाउण्डबाट मे.क. कनक शमसेर लाई तवेला र ८ रोपनी जग्गा छुट्याई दिई सकेको हुँदा बाँकी जग्गामा बनेको.....राष्ट्र बैंक रहेको, प्रधानमन्त्रि क्वाटर, प्रधान न्यायाधिस क्वाटर समेत बनेको यस देखि बाँकी जग्गा समरजंग कम्पनीको जिम्मा रहेको नेपाल गजेट भाग ३ मा श्री ५ को सरकार गृह मन्त्रालयको २०२१।८।१७ गतेको सुचना अनुसार सम्बन्धित ब्यक्तिहरुले क्षतिपुर्ति लिईसकेको साथै चाहिएको बखत छोड्ने गरी मोहीहरुलाई कमाउन दिई किसिम बमोजिमको आएको आयस्ताको कुत समरजंगबाटै राजस्वमा जम्मा समेत गरेको देखिन आएको हुँदा उक्त जग्गा मालपोत कार्यालय काठमाडौंलाई श्री ५ को सरकारको नाउमा दर्ता गरी लाल पुर्जाको व्यबस्था गर्न २०४४।१०।२२।६ मा लेखि पठाई सकिएको हुँदा गुरु योजना अन्तरगत भवन निर्माण आदि गर्न सकिने" भनी बाग्मती अञ्चलाधीशको कार्यालयले बि.सं. २०४४।१०।२२ गते मा मालपोत कार्यालय, डिल्लीवजारलाई लेखेको पत्रमा गृह मन्त्रालयलाई बोधार्थ समेत दिई भौतिक योजना तथा निर्माण मन्त्रालयको च.नं. १०७५ मिति २०४४।११।२३ को पत्रको जवाफ दिएको । उल्लेखित अर्धकट्टी पत्र व्यहोराबाट समेत ललिता निवास क्याम्प भित्रको जग्गा तत्कालिन श्री ५ को सरकारले मुआव्जा दिई प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गा रहेको र उक्त जग्गामा नेपाल सरकार बाहेक कोही कसैको कुनै किसिमको हकदैया नरहेको भन्ने स्पष्ट देखिन आएको।

केन्द्रीय अनुसन्धान व्यूरोको छानबीन समिति समक्ष मोही भनिएका व्यक्तिहरुले गरेको कागजमा यी हामीले भोगचलन गरेका जग्गाहरु सरकारी जग्गा हुन, जोतभोग गरेवापत हामीले मोहीयानीहक प्राप्त गर्न सक्दैनौंतर हामीले सरकारी दर अनुसारको तिरो, वाली र कुत समरजंग कम्पनीलाई बुझाउदै आएका छौं भनी हाम्रा बाबु बाजेहरुले भनेको कथन हामीले सुन्दै आएका हौं,पछि राम कुमार सुवेदीसँग भेट भएपश्चात निजले तपाईहरुलाई मोही छुट्याउन सहयोग गर्छु भनी के कुन कागजमा हामीलाई सहीछाप र हस्ताक्षर गर्न लगाए हामीलाई थाहा भएन, निज राम कुमार सुवेदीले हामीलाई मोही कायम गराए वापत रोपनीको रु. १३/१४ लाख मुल्याङ्कन गरी हामीलाई रकम दिएका हुन र निजको नाममा जग्गा कायम गरेका रहेछन् भन्ने समेत व्यहोराको मोही भनिएका व्यक्तिहरुले गरीदिएको कागजले समेत उक्त जग्गा मोहीयानी हक नलाग्ने नेपाल सरकार समरजंग कम्पनीको स्वामित्वको जग्गा हो भन्ने पुष्टी हुन आएको,

साविक नापी अनुसारको फिल्डबुकमा काठमाडौं नगर ४ साविक २३ क्ष को कि.नं. २८ र ४२ समेतका कित्ता जग्गाहरुको किसानको महलमा '**व्यक्तिको नाम**', जग्गावालाको महलमा '**महल खाली**', किसानको व्यहोराको महलमा '**यी जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु**', कैफियत महलमा '**महल खाली**' उल्लेख भएको, नयाँ नापी बमोजिम फिल्डबुकमा २३ क्ष को कि.नं. २८ र ४२ हाल काठमाडौं नगर ४ सिट नं. १०२-१०२५-१५ को कि.नं. ९१,७२, ७३, २०५, १४५ समेतका बिभिन्न कित्ता जग्गाहरुको मोहीको महलमा '**व्यक्तिको नाम**',जग्गावालाको महलमा '**श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय**'भन्ने लगायतका व्यहोराहरु उल्लेख भएको उक्त जग्गा श्री ५ को सरकार समरजंग कम्पनीको कार्यालयको नाममा दर्ता कायम रहेको सरकारी जग्गा हो भन्ने स- प्रमाण पुष्टी भएको,पहिलो नापी बमोजिमको जग्गाधनी श्रेस्ताको पहिलो पानाको दाहिने शिरमा '**श्री ५ सरकार**' र दोश्रो पानाको दाहिने शिरमा '**श्री ५**' मात्र लेखिएको, दोश्रो नापी अनुसार जग्गाधनी दर्ता श्रेस्ताको दाहिने शिरमा जग्गाधनीको नामथर भन्ने स्थानमा '**श्री ५ को सरकार समरजंग कम्पनी**'उल्लेख गरेको अबस्था बिद्यमान रहेको र मिति २०५२।०५।३०गतेको गुठी संस्थान संचालक समितिको निर्णय बमोजिम बाँकी वक्यौता कुत असुल गरी लगत अध्यावधिक गर्न कार्यालयलाई निर्देशन दिने निर्णय भएकोमा निवेदक पंच नारायण महर्जन समेतका वारेस राम कुमार सुवेदीले उक्त निर्णयको गलत व्याख्या गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गालाई गुठीको जग्गा हो भनीजग्गा दर्ता गरी ज.ध. प्र.पुर्जा पाउ भन्ने श्री का.गु.त. कार्यालय कालमोचन काठमाडौंमा मिति २०५८।०१।१४ गते **झुट्टो तथा फरक व्यहोराको निवेदन** पेश गरेको देखिएको।

श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको जग्गालाई नापीका समयमा नाप नक्सा कायम हुँदा मोहीयामा दर्ता भई जोत भोग गरी आएको साविक गुठी संस्थान अन्तरगतको गुठी टिकिन्छा गुठी मौजे हाँडिगाँउ मलिकुली खेतका मोही आशामरु ज्यापुका नाममा रहेको खेत रोपनी १० मध्ये बाट भिडने काठमाडौं नगर २३ क्ष को कि.नं. २८ समेतका कित्ता जग्गाहरु ज.ध.प्र.पुर्जा लिन वाँकि रही रहेको र सोही जग्गा नयाँ नापी बमोजिम नाप नक्सा समेत भै सकेकोले दर्ता प्रमाणित गरी हाल साविक समेत गरी ज.ध. प्र.पुर्जा पाउँ भनी मिति २०५९।०७।०५ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा **झुट्टा र फरक व्यहोराको निवेदन** दिएको देखिएको,

जग्गाधनी दर्ता श्रेस्ताको दाहिने शिरमा जग्गाधनीको नामथर भन्ने स्थानमा '**श्री ५ को सरकार समरजंग कम्पनी**' उल्लेख गरेको अबस्थामा समेत काठमाडौं जिल्ला नगर वडा नं.२३क्ष कि.नं. १२ (०-५-०-०),२३ ह कि.नं. २५ (१-३-२-०),२३ ह कि.नं. १५ (२-३-०-०), २३ ह कि.नं.२४ (०-९-०-०),२३ क्षकि.नं. ७८ (२-९-०-०),२३ क्ष कि.नं. ४८ (०-१४-०-०-),कि.नं. २३ क्ष ७६ (२-१२-१-०),२३ क्ष कि.नं.६८ (१-८-०-०-), २३ क्ष कि.नं. ६९ (०-६-२-०),२३ ह कि.नं. ४० (०-१३-२-०),२३ क्ष कि.नं. ७३ (०-३-०-०),२३ ह कि.नं. २२ (१-८-०-०) कित्ता जग्गाहरु पशुपतिनाथ टिकिन्छा गुठीको लगतमा खला नं.१० सँग भिड्ने जग्गा हो, फिल्डबुकको जोताहामा निवेदकहरुका पुर्खाको नाम उल्लेख भएको भई उक्त जग्गा निवेदकहरुले नै जोतभोग गरी आएकोले निजहरुको माग बमोजिम दर्ता हा.सा. गरी ज.ध.प्र. पुर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन भन्ने समेत व्यहोराको डवल सिंह ठगुन्ना र रामेश्वर बिडारी समेतका गुठी संस्थानका कर्मचारीहरुले मिति २०६०।०२।२० मा **झुट्टा तथा फरक व्यहोराको र बेरितको सर्जमिन मुचुल्का** खडा गरेको देखिएको,

"उपरोक्त सम्बन्धमा का.म.पा.१७ वडा बस्ने तुईई भाई महर्जन भन्ने पञ्च नारायण महर्जनले आफ्नो नाममा मोही कायम भएको साविक २३ क्ष को कि.नं. २८ र ऐ. को कि.नं. ४२ क्रमश: क्षे.फ. ३-१५-० र ०-५-० जग्गाधनी गुठी रहेको सो जग्गा आफैले जोतभोत गरी आईरहेको हुँदा मेरो नाउँमा दर्ता प्रमाणित गरी पुर्जा दिनको लागि सिफारिश पाउँ भनी यस वडामा निवेदन गर्नु भएकोले त्यस कार्यालयको नियमानुसार निवेदकको नाममा मोही दर्ताको लागि सिफारिस गर्दछु" भन्ने व्यहोराको मिति २०५८।०५।११ मा च.नं. २०९ बाट काठमाडौं महानगरपालिका वडा ४ का अध्यक्ष रत्न प्रसाद जोशीद्वारा **गुठीनै कायम नभएको जग्गालाई स्थलगत सर्जमिन समेत नगरी कानूनी रित समेत नपुऱ्याई निवेदकले मागेकै आधारमा मोही दर्ताको लागि सिफारिस गरी** का.गु.त.का. पठाएको,

"उपरोक्त सम्वन्धमा तपशिलमा लेखिएका जोताहा मोहीहरूले तपशिलमा उल्लेख भएका जग्गाहरू गुठीको लगतमा साबिक हाडीगाँउ मौजाबाट भिड्ने गुठीको जग्गा हामीले साबिक देखीनै जोत कमोद गर्दै आईरहेकोले उक्त जग्गा हामीले जोत कमोद गरेको व्यहोरा जनाई सिफारीस पाउँ भनी कान्छा महर्जन समेत र वा.रामकुमार सुवेदीको निवेदन माग अनुसार व्यहोरा बुझ्दा नगर २३ ह कि.न.१२, कान्छा महर्जन, ऐ.ऐ. कि.न. ४० रामकृष्ण महर्जन, ऐ.ऐ कि.न १५ र २४,रेना गुरुङ, ऐ.ऐ. कि.न. २२, श्रीमती मोहनमाया महर्जन, ऐ.ऐ. कि.न. २५, ग्वाराभाई महर्जन, नगर २३ क्ष कि.न. ४८ र ७६ देव नारायण महर्जन, ऐ.ऐ. कि.न. ६८ र ६९ मचानानी महर्जन, ऐ.ऐ. कि.न. ७३ आशामाया महर्जन, ऐ.ऐ. कि.न. ७८ लक्ष्मी नारायण महर्जन समेतका निवेदक मोहीहरुले नै जोत भोग गरी आएको बुझिएकोले उक्त जग्गा गुठीको हो होईन त्यस कार्यालयको नियमानुसार छानबिन गरी आवश्यक कारबाही गरीदिनु हुन सिफारिस साथ अनुरोध गरिन्छ " भनी च.न. १९८२ मिति २०५९/३/३२ मा का.म.पा ४ नं.वडा का अध्यक्ष रत्नप्रसाद जोशीले**आफ्नो वडा भित्रको सरकारी जग्गा तथा मोहीनै कायम नभएको, कोही कसैले जोत कमोद नगरेको सरकारी जग्गालाई स्थलगत सर्जमिन समेत नगरी सरकारी जग्गालाई निवेदकहरुको माग अनुसार निवेदकहरुले नै जोत कमोद गरी आएका भनी झुठा व्यहोराको सिफारिस गरी** का.गु.त.का. पठाएको,

"उपरोक्त सम्बन्धमा यस का.म.पा. ४ वडा कार्यालयमा मोही जोताहा देव नारायण महर्जन साविक नगर २३ क्ष कि.नं. ३५ र ३७, द्वारीकामान महर्जन ऐ. ऐ. कि. नं. ३१ र ऐ.ऐ. क्ष को कि.नं. ७७ , चन्द्रमाया महर्जन ऐ.ऐ. २४ क कि.नं. २१३ का वारेस राम कुमार सुवेदीले संयुक्त निवेदन लेखि उल्लेखित कित्ता जग्गाहरु जोताहा मोहीहरुले साविक गुठी संस्थान अन्तरगतको टिकिन्छा गुठी मौजे हाडीगाउँ मलिकुली खेतका मोही आशामरु ज्यापुका नाममा रहेको खेत रोपनी १० मध्येबाट भिड्ने जग्गा हामीहरुले साविक देखिनै जोत कमोद गरी आएकोले उक्त जग्गा जोत कमोद गरी आएको व्यहोरा खुलाई यस कार्यालयको नाममा सिफारिस पाउँ भनी दिनुभएको निवेदन सम्बन्धमा उक्त कित्ता जग्गाहरु उल्लेखित जोताहा मोहीहरुले साविक देखि हाल सम्म निरन्तर जोत कमोद गरी आउनु भएको व्यहोरा सिफारिस गरीन्छ" भनी च.नं. ३८० मिति २०६०।०५।१२ मा का.म.पा. ४ नं. वडा सचिव शिवजी भट्टराईले **गुठीनै कायम नभएको जग्गालाई स्थलगत सर्जमिन समेत नगरी कानूनी रित समेत नपुऱ्याई निवेदकले माग गरेकै आधारमा मोही दर्ताको लागि सिफारीस गरी** का.गु.त.का. पठाएको,

का.जि. का.म.न.पा. वडा नं. २३ क्ष कि.नं. १४,२५,२८,४२,६३ समेतका कित्ता जग्गा हामी मोहीहरुका नाममा गुठीमा दर्ता गरीपाउँ भन्ने व्यहोराको तुईई भाई भन्ने पंच नारायण महर्जन र तीर्थमाया महर्जनको निवेदन परि कारवाही गर्ने क्रममा केही कुरा बुझ्नु पर्ने भई ७ दिनको म्याद जारी हुँदा उक्त म्याद बुझि

उपस्थित भई गु.सं.के.का.बाट उक्त कित्ता जग्गाको सम्बन्धमा बिभिन्न कुरा सोधनी भएकोमा हाम्रा पिता स्व.श्री सुवर्ण शम्शेर ज.व.रा. देशमा प्रजातन्त्र वहालीको लागि राजनीतिमा लाग्नु भएका कारण तत्कालिन शासकले हाम्रो श्रीसम्पत्ति सर्वस्वहरण गरेकोले हामीबाट हरण भएको सम्पत्ति अञ्चालधिश कार्यालयलाई जिम्मा दिएको कारणले श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाधिश कार्यालयको नाममा नापीको समयमा मोहीहरुले लेखाएका हुन यस्तो लेखाई गुठी जग्गामा मात्र नभई यसै सँगका हाम्रा रैकर जग्गामा पनि सोही प्रकारको लेखाई फिल्डबुकमा लेखिएको थियो । देशमा प्रजातन्त्रको पुनर्बहाली पश्चात २०४७ सालमा हाम्रो जग्गा फुकुवा भएपछी रैकर तर्फका सम्पूर्ण जग्गाहरु हामीले आफ्नो नाममा दर्ता गरायौ । गुठी जग्गाको सम्बन्धमा गुठी संस्थान ऐनले दर्तावाला मोहीको हक समाप्त गरी जोत्ने जोताहाको मोहीको नाममा जग्गा दर्ता गरीदिने अबस्था गरेकोले साविक खला नं.१० को श्री ५ को सरकार टिकिन्छा गुठी जग्गा समेत हामीहरुले गुठी जग्गा दर्ता नगराएका हौं । हाम्रो साविकमा जग्गा जमिनको कुत समेत असूल गर्न ललिता निवास गोश्वारा तहसिल अड्डा नै राखेको थियो । निवेदक मोहीले पेश गरेको भरपाई हाम्रो तहसिल अड्डाको हो । माथि उल्लेखित कारणबाट मागदावीका जग्गा श्री ५ को सरकार समरजंग कम्पनी वा अञ्चालधिश कार्यालयको नभई राजगुठी अन्तर्गत हामी साबिक देखि दर्तावाला मोही भई जोताहा मार्फत जोत भोग हुँदै आएका, गुठी जग्गा हुँदै गुठी संस्थानको बिद्यमान ऐन, बिनियम अनुसार निवेदक जोताहा मोहीका नाममा गुठी जग्गा दर्ता गरी ज.ध.प्र. पु. दिएमा समेत हाम्रो मञ्जुरी छ, यस कुरालाई लिएर पछी खिचलो गर्ने छैनौ, गरेमा यसै कागजबाट बदर गरीदिनु भनी गुठीको जग्गा होईन भन्ने थाहा हुँदा हुँदै सम्बन्धित निकायमा गर्नु पर्ने कागज व्यक्ति बिशेषको घरमा बसी सुनीति राणा, शैलजा राणा र रुक्म शम्शेर राणाले **झुट्ठा तथा फरक व्यहोराको मञ्जुरीनामा कागज तयार गरेर व्यहोरा कीर्ते समेत गरी** मिति २०६०।०८।११ मा गुठी संस्थान के.का.मा मञ्जुरीनामा दिएको ।

यसरी तत्कालिन श्री ५ को सरकारले जग्गा प्राप्ती ऐन २०१८ बमोजिम रित पुर्वक अधिग्रहण गरेको का.म.पा. वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये निम्न कित्ता र क्षेत्रफलका जग्गाहरु श्री पशुपति टिकिन्छा गुठीको जग्गा हो र हामी दर्तावाल मोही भएको हुँदा उक्त जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता श्रेष्ता सच्च्याई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी हामीलाई मोही कायम गरी पाउँ भनी श्रीकृष्ण महर्जन समेतका मोही भनिएका व्यक्तिहरुको वारेश राम कुमार सुवेदीले गुठी संस्थानमा निवेदन दिएको ।

**२०५८/०५९ र ०६० सालमा गुठी सस्थानको केन्द्रिय कार्यालय र शाखा कार्यालयहरुमा मोही भनिएका व्यक्तिहरुले दिएको निबेदनहरुमा उल्लेखित जग्गाको बिबरण :**

| सि.न. | साबिक कित्ता नं. | साबिक क्षेत्रफल |
|---|---|---|
| १ | नगर २३ ह २५ | १-३-२-० |
| २ | नगर २३ ७८ | २-९-०-० |
| ३ | नगर २३ह १२ | ०-५-०-० |
| ४ | नगर २३ ह १५<br>नगर २३ ह २४ | २-३-०-०<br>०-९-०-० |
| ५ | नगर २३ क्ष ४८<br>नगर २३ क्ष ७६ | ०-१४-०-०<br>२-१२-०-० |

| | | |
|---|---|---|
| ६ | नगर २३ ह ४० | ०-१३-२-० |
| ७ | नगर २३ क्ष १५<br>नगर २३ क्ष ६३ | ८-५-०-०<br>०-४-०-० |
| ८ | नगर २३ क्ष २५ | ०-१२-०-० |
| ९ | नगर २३ क्ष ३८<br>नगर २३ क्ष ४२ | ३-१५-०-०<br>०-५-०-० |
| १० | नगर २३ क्ष ६८<br>नगर २३ क्ष ६९ | १-८-०-०<br>०-६-२-० |
| ११ | नगर २३ ह ३५<br>नगर २३ ह ३७ | ०-१४-३-०<br>१-१५-०-० |
| १२ | नगर २३ क्ष ७३ | ०-३-०-० |
| १३ | नगर २३ ह २२ | १-८-०-० |
| १४ | नगर २३ ह ३१<br>नगर २३ क्ष ७७ | १-३-०-०<br>०-१०-०-० |
| | **जम्मा जग्गा : - २१ कित्ता** | **जम्मा :- ३४-२-१-०** |

उल्लेखित जग्गा मध्ये साविक २३ 'क्ष' को कि.नं. ७८ समेतको जम्मा क्षेत्रफल **२९-५-२-०** जग्गा नेपाल सरकार (म.प.) को मिति २०६६/१२/२९ को निर्णय अनुसार बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार क्षेत्रमा पर्ने भनी मालपोत कार्यालयमा श्रीकृष्ण महर्जन समेतका मोही भनिएका व्यक्तिहरुले निवेदन दिई १३-१५-१-१ जग्गा आफ्नो नाममा दा.खा. नामसारी गरी लिएको र साविक कित्ता न. २२, ३१, ३५, ७३ गरी जम्मा क्षेत्रफल ४-१४-३-२ जग्गा मिति २०७०/१/१२ गते पशुपति टिकिन्छा गुठीमा कायम भएको देखिएको।

यसरी साबिक नगर २३ क्ष कि.नं. २८ र ४२ समेतका श्री ५ को सरकार समरजंग कम्पनी समेतको नाममा दर्ता कायम रहेको बिभिन्न कित्ता सरकारी जग्गाहरु मस्यौट गरी लिई खाई सरकारलाई हानी नोक्सानी पुऱ्याउन योजनाबद्धढंगबाट परिपंच गरी गुठीको जग्गा हो र आफूहरु जोतभोग गर्ने मोही भएको भनी फरक व्यहोराका किर्ते कागजातहरु तयार पारी गुठी संस्थानमा निवेदन पारी प्रकृयामा रहँदा कै अवस्थामा बालुवाटार स्थित सम्माननिय प्रधानमन्त्रीज्यू लगायत विशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गर्ने गुरुयोजना तयार भएको।

गुरुयोजना तयार गर्ने क्रममा भवन निर्माण सम्भार डिभिजन कार्यालयले गुठी संस्थान,मालपोत कार्यालय, नापी कार्यालय, भुमिसुधार कार्यालय काठमाडौं समेतलाई निवास परिसर बिस्तार क्षेत्र ( ललिता निवास क्याम्प ) मा सरकारी तथा गुठीको जग्गा रहे नरहेको बारेमा सोधी पत्राचार गरेको,

नापी कार्यालय डिल्लिबजारका तत्कालिन कर्मचारीहरु समेतले सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी प्रतिवादी राम कुमार सुवेदी तथा मालपोत कार्यालयको कर्मचारीहरुको मिलेमतोमा बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना बनाउने क्रममा बालुवाटारस्थित

ललिता निबास क्याम्पभित्रको सरकारी जग्गा व्यक्ति विशेषको नाममा जाने गरी कित्ताकाट गरी कित्ताकाटको विवरण मालपोत कार्यालय डिल्लिबजारलाई च. नं. ६९८, मिति २०६६/०७/१२ को पत्र पठाएको।

भवन निर्माण सम्भार डिभिजन कार्यालय अनामनगरको च.नं. ७२४, मिति २०६६/१०/१० गतेको पत्रको जवाफ दिने क्रममा मालपोत कार्यालय डिल्लिबजारका तत्कालिन कर्मचारीहरु समेतले सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी प्रतिवादी राम कुमार सुवेदी समेतको मिलेमत्तोमा सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० गतेको फैसलाले कोही कसैलाई मोही कायम नगरेकोमा सम्मानित सर्वोच्च अदालतको उल्लेखित फैसला समेतलाई अपव्याख्या गरी मोही नहुने सरकारी जग्गा समेतमा साविक नापी बमोजिम हाल नापीमा भिडी सर्वोच्च अदालतको मिति २०६४/११/३० गतेको फैसला मुताबिक मोही कायम रहेका जग्गाको विवरण भनी विभिन्न कित्ता नं., क्षेत्रफल र मोहीको नाम समेत उल्लेख गरी फरक व्यहोराको च.नं. ९००९, मिति २०६६/१०/१० गते पत्राचार गरेको।

सरकारी जग्गा हडप्ने उदेश्यले योजना र परिपञ्च गरी सरकारी जग्गामा मोही भएको भनी भूमी सुधार कार्यालयले च.नं. ४७१८, मिति २०६६/१०/३ को पत्रबाट २ नं. अनूसुची अनुसार कायम रहेको मोहीको विवरण भनी भवन निर्माण सम्भार डिभिजन कार्यालयलाई पत्र पठाएको।

उल्लेखित स्थानमा रहेको सरकारी जग्गामा मोही भएको,नेपाल सरकारको नाममा श्रेष्ता कायम रहेको जग्गाहरुको साविक२ नं. अनूसुची अनुसार कायम रहेको मोहीको विवरण यसै साथ पठाईएको र यसै सम्बन्धमा सम्मानित सर्वोच्च अदालतबाट भएको फैसला कार्यान्वयन गरी पाउँ भनी १४ जना मोही तथा तिनका हकदारहरुले निवेदन माग गरी कारवाही चलिरहेको भनी भूमी सुधार कार्यालयको च.नं. ५१४०, मिति २०६६।१०।१५ को पत्रमा मोहीको नामावली समेत कार्यालयको अभिलेख भन्दा फरक पारी (किर्ते गरी) सरकारी जग्गा हडप्ने उदेश्यले कीर्ते पत्र तयार पारी भवन निर्माण सम्भार डिभिजन कार्यालयलाई पत्र पठाएको।

नापी कार्यालय डिल्लीबजारका कर्मचारीहरुले जग्गा कारोबारी राम कुमार सुवेदी तथा मालपोत कार्यालयको कर्मचारीहरुको मिलेमत्तोमा बालुवाटारस्थित ललिता निबास क्याम्पभित्रको सरकारी जग्गामा प्र.म. निवासको दक्षिण तर्फको विस्तारको लागि र त्यसको दक्षिण तर्फको ८ मि. बाटो विस्तारको लागि रेखाङ्कन गरी मोही भएको सरकारी जग्गाको कुल क्षे.फ. २७-७-२-१, मोही भएको जग्गाको आधा क्षे.फ. १३-११-३-१/२ भन्ने समेत व्यहोरा राखी सरकारी सार्वजिनक जग्गामा मोही रहेको उल्लेख गरी भवन निर्माण संभार डिभिजन कार्यालय, अनामनगरलाई च.नं. २६४८, मिति २०६६/११/२५ को पत्र पठाएको।

उल्लेखित मालपोत कार्यालय डिल्लिबजार, नापी कार्यालय, भूमि सुधार कार्यालय समेतका बिभिन्न कार्यालयका बिभिन्न च.नं. र मितिका पत्रहरुलाई आड हाली तत्कालिन श्री ५ को सरकारले नेपाल गजेटमा सूचना प्रकाशित गरी सरोकारवालाहरुलाई मुआव्जा समेत दिई रितपूर्वक अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा सट्टापट्टा, सोधभर्ना र मोहीका नाममा व्यक्ति विशेषको स्वामित्वमा जाने गरी भवन निर्माण सम्भार डिभिजन कार्यालय अनामनगरले बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना तयार पारी सोही बमोजिम नेपाल सरकार ( मन्त्रीपरिषद ) मा पेश गर्ने प्रस्ताव तयार पारी भौतिक योजना तथा निर्माण मन्त्रालयमा पेश गरेको।

**<u>मन्त्रीपरिषदबाट निर्णय हुनुपर्ने व्यहोरा :</u>**

१) नेपाल सरकार, समरजंग कम्पनीको नाममा (मोही जनिएको) ललिता निवासको क्याम्पा क्षेत्रको चारकिल्ला भित्र जम्मा क्षेत्रफल २७-७-२-१ रोपनी सरकारी जग्गा मध्ये मोही भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५

जग्गा र साबिक बाटो तथा राजकुलो समेतको क्षेत्रफल ०-१५-०-२ रोपनी गरी जम्मा क्षेत्रफल १४-१०-३-२.५ रोपनी अनुसूची १ मा उल्लेख भए बमोजिमका जग्गा मिलान गरी नक्सा बमोजिम दक्षिणतर्फ (प्रधानमन्त्री निवास क्षेत्र परिसर) विस्तार गर्ने।

२) मोहीको हिस्सामा पर्ने क्षेत्रफल १३-११-३-०.५ रोपनी जग्गा र परिसर बिस्तार गर्दा विस्तारित क्षेत्रमा पर्ने अनुसूची २ मा उल्लेख भए बमोजिमका व्यक्तिका नाममा दर्ता रहेको जग्गाको सोधभर्ना तथा सट्टापट्टा गर्न भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट आवश्यक व्यवस्था मिलाउने।

३) सम्माननीय प्रधानन्यायाधीश ज्यू निवासको पश्चिम तर्फदेखि सम्माननीय प्रधानमन्त्री ज्यूको निवासको प्रस्तावित विस्तारित क्षेत्रको दक्षिणतर्फ भै सभाध्यक्षज्यूको निवासबाट निस्की सुवर्ण शमसेर मार्गमा जोड्ने गरी करिब ५७० मीटर लामो ८ मीटर चौडाई बाटो निर्माण गर्ने।

४) उक्त बाटो निर्माण गर्न आवश्यक अनुसूची ३ मा उल्लेख भए बमोजिम क्षेत्रफल ८-१४-३-० रोपनी जग्गा मध्ये नेपाल सरकारको नाममा रहेको क्षेत्रफल १-११-२-० रोपनी र व्यक्तिको नाममा दर्ता रहेको क्षेत्रफल ७-३-१-१ रोपनी (सट्टाभर्ना नपाउने गरी) सहमति बमोजिम प्राप्त गर्ने।

५) सम्माननीय प्रधानमन्त्री निवास, सम्माननीय प्रधानन्यायाधीश निवास तथा सम्माननीय सभाध्यक्ष निवास परिसरको जग्गाको श्रेष्ता हालसम्म एकिन नभएकोले भोगचलन अनुसार फिल्ड नापी गरी भूमिसुधार तथा व्यवस्था मन्त्रालयले श्रेस्ता कायम गर्ने

६) विशिष्ट ब्यक्तिहरुको निवास भवनको वरिपरि निजि क्षेत्रबाट निर्माण हुने भवनहरुको उचाई, सुरक्षा, खुल्ला जग्गाहरुमा निर्माण हुने भवनहरुको बनोट, वास्तुकला र सो वरिपरी बसोबास गर्न आउने मानिसहरुको लगत (Inventory) समेत आउने गरी काठमाडौं उपत्यका नगर विकास समिति मार्फत विशेष भवन मापदण्ड तयार गरी कार्यान्वयन गर्ने।

७) भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट प्राविधिक खटाई फिल्डमा बाटोको रेखाङ्कन गर्ने, रेखाङ्कन गर्ने कार्य समाप्त भएपछि पर्खाल तथा बाटो निर्माण गर्ने कार्य बजेट व्यवस्था गरी भवन निर्माण सम्भार डिभिजन कार्यालयले गर्ने भन्ने समेतको व्यहोरा राखी भौतिक योजना तथा निर्माण मन्त्रालयले बिशिष्ट व्यक्तिको निवास परिसर बिस्तार सम्बन्धी टिप्पणी प्रस्ताव उठाई मिति २०६६/१२/१९ गते तत्कालिन माननिय उप प्रधानमन्त्री तथा भौतिक योजना तथा निर्माण मन्त्री विजय कुमार गच्छदारबाट सदर भएको।

यसरी उक्त प्रस्ताव तत्कालिन माननिय उप प्रधानमन्त्री तथा भौतिक योजना तथा निर्माण मन्त्री विजय कुमार गच्छदारबाट सदर भए पश्चात सोही व्यहोराको प्रस्ताव नेपाल सरकार मन्त्री परिषदमा पेश भई नेपाल सरकार मन्त्री परिषदको बैठकबाट सैद्धान्तिक स्वीकृती दिने निर्णय भएको।

नेपाल सरकारका (मं.प.) बाट मिति २०६६।१२।२९ मा निर्णय भएपश्चात भूमिसुधार तथा व्यवस्था मन्त्रालय सँग सम्बन्धित बिषयमा देहाय बमोजिमको निर्णय भएकोले उल्लेखित निर्णय कार्यान्वयनका निमित्त देहाय बमोजिम हुनका लागि भनी भूमिसुधार तथा व्यवस्था मन्त्रालय बाट प्रस्ताव उठेको,

१. नेपाल सरकार, समरजंग कम्पनीको नाममा (मोही जनिएको) ललिता निवासको क्याम्प क्षेत्रको चारकिल्ला भित्र जम्मा क्षेत्रफल २७-७-२-१ रोपनी सरकारी जग्गामध्ये मोही भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५ जग्गा र साविक बाटो तथा राज कुलो समेतको क्षेत्रफल ०-१५-०-२ रोपनी गरी जम्मा क्षेत्रफल १४-१०-३-२.५

रोपनी अनुसूची-१ मा उल्लेख भए बमोजिमका जग्गा मिलान गरी नक्सा बमोजिम दक्षिणतर्फ ( प्रधानमन्त्री निवास क्षेत्र परिसर) विस्तार गर्ने।

२. मोहीको हिस्सामा पर्ने क्षेत्रफल १३-११-३-०.५ रोपनी जग्गा र परिसर विस्तार गर्दा विस्तारित क्षेत्रमा पर्ने अनुसूची- २ मा उल्लेख भए बमोजिमको व्यक्तिको नाममा दर्ता रहेको जग्गाको सोध भर्ना तथा सट्टापट्टा गर्न भूमि सुधार तथा व्यवस्था मन्त्रालयबाट आवश्यक व्यवस्था मिलाउने।

३. सम्माननीय प्रधानन्यायाधिश ज्यू निवासको पश्चिमतर्फ देखि सम्माननीय प्रधानमन्त्री ज्यूको निवासको प्रस्तावित विस्तारित क्षेत्रको दक्षिणतर्फ भई सम्माननीय सभामुख ज्यूको निवासबाट निस्की सुवर्ण शमशेर मार्गमा जोड्ने गरी करिब ५७० मिटर लामो ८ मिटर चौडाई बाटो निर्माण गर्ने।

४. उक्त बाटो निर्माण गर्न आवश्यक अनसुची -३ मा उल्लेख भए बमोजिम क्षेत्रफल ८-१४-३-० रोपनी जग्गा मध्ये नेपाल सरकारको नाममा रहेको क्षेत्रफल १-११-२-० रोपनी र व्यक्तिको नाममा दर्ता रहेको क्षेत्रफल ७-३-१-१ रोपनी ( सट्टाभर्ना नपाउने गरी) सहमति बमोजिम प्राप्त गर्ने।

५. सम्माननीय प्रधानमन्त्री निवास, सम्माननीय प्रधानन्यायाधिश निवास तथा सम्माननीय सभाध्यक्ष निवास परिसरको जग्गाको श्रेस्ता हालसम्म एकिन नभएकोले भोग चलन अनुसार फिल्ड नापी गरी भूमिसुधार तथा व्यवस्था मन्त्रालयले श्रेस्ता कायम गर्ने।

६. भूमिसुधार तथा व्यवस्था मन्त्रालयलबाट प्राविधिक खटाई फिल्डमा बाटोको रेखाङ्कन गर्दै रेखाङ्कन गर्ने कार्य समाप्त भएपछि पर्खाल तथा बाटो निर्माण गर्ने कार्य बजेट व्यवस्था गरी भवन निर्माण संभार डिभिजन कार्यालयले गर्ने।

उल्लेखित निर्णय कार्यान्वयनका निमित्त देहाय बमोजिम हुनका लागि निर्णयार्थ प्रस्तुत गरेको छु।

१. भवन निर्माण संभार डिभिजन कार्यालय, काठमाडौंसँग समन्वय गरी उक्त निर्णयको निर्णय नं. २ मा उल्लेख भएको अनुसुची-२ बमोजिमको सम्माननीय प्रधानमन्त्री ज्यूको निवास परिसर विस्तार हुने जग्गा र निर्णय ४ मा उल्लेख भएको अनुसुची-३ बमोजिम बाटो निर्माण हुने जग्गाको रेखाङ्कन गर्नका निमित्त उक्त अनुसुचीहरु संलग्न गरी नापी विभागलाई पत्र लेखि सो को बोधार्थ उक्त भवन निर्माण सडक डिभिजन कार्यालयलाई दिनु पर्ने।

२. निर्णय नं. ५ मा उल्लेख भए बमोजिम सम्माननीय प्रधानमन्त्री निवास, सम्माननीय प्रधानन्यायाधिश निवास र सम्माननीय सभाध्यक्ष निवास परिसरको जग्गाको भोग चलन अनुसार फिल्ड नापी गरी सो अनुसार श्रेस्ता कायम गर्नुका निमित्त नापी विभाग लेखी पठाउनु पर्ने।

३. नेपाल सरकार (म.प.) को उक्त निर्णयमा " जग्गा मिलान गरी विस्तार गर्ने", "सोध भर्ना तथा सट्टापट्टा गर्न आवश्यक व्यवस्था मिलाउने" र " जग्गा प्राप्त गर्ने" भन्ने उल्लेख भई के कसरी ती कार्य गर्ने भन्ने विषयमा स्पष्ट भएको नदेखिएको हुँदा उक्त निर्णय कार्यान्वयनको सन्दर्भमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट निम्न बमोजिम गर्न स्वीकृतिका लागि नेपाल सरकार (म.प.) समक्ष प्रस्ताव पेश हुन पर्ने :-

(क) नेपाल सरकार (म.प.) को मिति २०६६।१२।२९ को निर्णयको अनुसुची-२ (सम्माननीय प्रधानमन्त्री निवासको दक्षिणतर्फ (नक्सामा देखाए बमोजिम) परिसर विस्तार गर्न प्राप्त गर्ने जग्गाको विवरण) मा उल्लेख भएको जग्गामध्ये नेपाल सरकार (समरजंग कम्पनी वा बाटो) को नाममा दर्ता भएको जग्गाको हकमा दर्ता श्रेस्ता सच्याई नेपाल सरकार (सम्माननीय प्रधानमन्त्री ज्यूको निवास) कायम गर्ने र व्यक्तिको नाममा दर्ता भएको

जग्गाको हकमा तत् तत् व्यक्तिको नामबाट नेपाल सरकार ( सम्माननीय प्रधानमन्त्री ज्यूको निवास) को नाममा दाखिल खारेज गर्ने ।

(ख) नेपाल सरकार (म.प.) को मिति २०६६।१२।२९ को निर्णयको अनुसुची-३ (सम्माननीय प्रधानमन्त्री ज्यूको निवास क्षेत्र विस्तार गरेपछि ८ मिटर चौडा बाटोमा पर्ने जग्गाको विवरण) मा उल्लेख भएको जग्गा मध्ये नेपाल सरकार (समरजंग कम्पनी वा प्रधानमन्त्री निवास वा प्रधान न्यायाधिश निवास वा सभाध्यक्ष वा राजकुलो) को नाममा दर्ता भएको जग्गाको हकमा दर्ता श्रेस्ता सच्याई नेपाल सरकार (बाटो) कायम गर्ने र व्यक्तिको नाममा दर्ता भएको जग्गाको हकमा तत् तत् व्यक्तिको नामबाट नेपाल सरकार (बाटो) को नाममा दाखिल खारेज गर्ने ।

(ग) नेपाल सरकार (म.प.) को मिति २०६६।१२।२९ को निर्णयको अनुसुची-१ (प्र.म.निवासको दक्षिणतर्फको परिसर विस्तार गर्ने सरकारी जग्गाको विवरण) मा उल्लेख भएको मोही मध्ये सम्माननीय प्रधानमन्त्री निवासको दक्षिणतर्फ परिसर विस्तार क्षेत्र बाहिर परेका जग्गाको मोहीको हकमा तत् तत् जग्गा (कित्ता) मध्ये आधा जग्गा मोहीले रोजे अनुसारको तर्फको जग्गाको नेपाल सरकार ( समरजंग कम्पनी वा राजकुलो वा बाटो) को नामबाट सम्बन्धित मोहीको नाममा दाखिल खारेज गर्ने । सम्माननीय प्रधानमन्त्री निवासको दक्षिणतर्फ परिसर विस्तार क्षेत्रभित्र परेका जग्गाको मोहीको हकमा निजले मोही बापत पाउने आधा क्षेत्रफल बराबरको जग्गा, परिसर विस्तार क्षेत्र बाहिरका जग्गाको हकमा जग्गाको मोहीका नाममा दाखिल खारेज गरी बाँकी रहेको जग्गा मध्ये नेपाल सरकार (समरजंग कम्पनी, राजकुलो, बाटो) को नामबाट त्यस्ता मोहीको नाममा दाखिल खारेज गर्ने ।

(घ) नेपाल सरकार (म.प.) को मिति २०६६।१२।२९ को निर्णयको अनुसुची-२ (सम्माननीय प्रधानमन्त्रीको निवासको दक्षिणतर्फ नक्सामा देखाए बमोजिम) परिसर विस्तार गर्न प्राप्त गर्ने जग्गाको विवरण) मा जग्गा परेका जग्गावाला व्यक्तिको हकमा परिसर विस्तार क्षेत्र बाहिरको जग्गामा मोहीको नाम उल्लेख गरी नेपाल सरकार ( समरजंग कम्पनी वा राजकुलो वा बाटो) को नाममा दर्ता भएको र ती जग्गामध्ये आधा जग्गा मोहीको नाममा दाखिल खारेज गरी बाँकी रहेको जग्गा मध्येबाट बिस्तार क्षेत्रमा परेको क्षेत्रफल बराबरको जग्गा सोधभर्ना बापत सम्बन्धित जग्गाधनी (व्यक्ति) को नाममा दाखिल खारेज गर्ने।

उल्लेखित व्यहोराको प्रस्ताव भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट उठी मिति २०६७/१/२७ गते सोही व्यहोराको प्रस्ताव नेपाल सरकार मन्त्रीपरिषदमा पेश भई नेपाल सरकार मन्त्रीपरिषदको मिति २०६७/१/३१ गतेको बैठकबाट प्रस्तावमा लेखिए बमोजिम गर्ने निर्णय भएको ।

मिति २०६६/१२/२९ मा नेपाल सरकार मन्त्रीपरिषद बाट काठमाडौं जिल्ला का.न.पा. वडा नं. ४ बालुवाटारमा अवस्थित विशिष्ट व्यक्तिहरुको सरकारी निवास भवन परिसर क्षेत्रको दक्षिण तिरको जग्गा प्राप्त गरी विस्तार गर्ने बिषयमा भौ.यो. तथा नि. मन्त्रालयको नं. १०/५-०६६/१२/२२ को प्रस्तावमा म.प.वै.स. ५९/०६६ ले "सो प्रस्तावमा लेखिए बमोजिम गर्ने" भनी निर्णय भएको र सोहि निर्णय कार्यान्वयन सम्बन्धमा भुमिसुधार तथा व्यवस्था मन्त्रालयबाट प्रस्ताव भएको मन्त्रीपरिषद बैठकको मिति २०६७/१/२१ मा निर्णय भई सोही दुवै निर्णय अनुसार कार्यान्वयन गर्न मिति २०६६/१२/२९ को म.प.वै.स. ५९/०६६ को निर्णयले प्रस्तावनामा संलग्न भएका अनुसूची १,२, र ३ मा सामान्य त्रुटीहरु रहेको कार्य गर्दै जाँदा अवगत देखिन आएको छ । उक्त विशिष्ट व्यक्तिको सरकारी निवास भवन परिसर क्षेत्र बिस्तार गर्ने जम्मा १४-१०-३-२.५ रोपनी क्षेत्रफलमा उक्त त्रुटीको फेरबदलबाट कुनै फरक नपर्ने तथा व्यक्तिको नाममा दर्ता भएको क्षेत्रफल, व्यक्तिको नाम एउटा हुनु पर्नेमा अर्को भएको साथै केहि विवरण छुट भएको हुँदा उक्त अनुसूची १,२, र ३ मा तपसिल बमोजिमको अनुसुची १,२ र तिनमा संलग्न विवरणको कागजात अनुसार त्रुटीहरु सच्याई मन्त्रिपरिषदको निर्णयहरु कार्यान्वयन गर्न

आवश्यक निर्णय हुन भनी प्र.म. निवासको दक्षिणतर्फको जग्गा र परिसर विस्तार तथा बाटोमा पर्ने जग्गाहरुको अनुसूची १, २ र ३ मा संशोधन हुनु पर्नेको विवरण समेत संलग्न राखी भौतिक योजना तथा निर्माण मन्त्रालयबाट प्रस्ताव उठी सोही व्यहोराको प्रस्ताव नेपाल सरकार मन्त्री परिषदमा पेश भई नेपाल सरकार मन्त्री परिषदको बैठकबाट सैद्धान्तिक स्वीकृती दिने निर्णय भएको।

बालुवाटार स्थित सम्माननिय प्रधानमन्त्रीज्यू लगायत बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार सम्बन्धमा तत्कालिन भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट गुरुयोजना तयार भई सोहि मुताबिक भौतिक योजना तथा निर्माण मन्त्रालय र भूमिसुधार तथा व्यवस्था मन्त्रालय समेतबाट बिभिन्न मितिमा टिप्पणी उठी प्रस्ताव सदर भए बमोजिम नेपाल सरकार ( मन्त्री परिषद ) बाट समेत बिभिन्न मितिमा यिनै ३ वटा प्रस्ताव उपर सैद्धान्तिक स्वीकृति दिने निर्णय भएको।

नेपाल सरकार ( मन्त्रीपरिषद ) बाट बालुवाटार स्थित सम्माननिय प्रधानमन्त्रीज्यू लगायत बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार सम्बन्धमा तत्कालिन भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट तयार पारिएको गुरुयोजना बमोजिम कार्य अघि बढाउन सैद्धान्तिक स्वीकृती दिने निर्णय भए पश्चात भूमिसुधार तथा व्यवस्था मन्त्रालयको चलानी नं. १९५१ मिति २०६७/२/६ को पत्रबाट का.म.न.पा. वडा नं. ४ बालुवाटार स्थित विशिष्ट व्यक्तिहरुको सरकारी भवन परिसर क्षेत्रको जग्गा प्राप्त गरी बिस्तार गर्ने बिषयमा "नेपाल सरकार मन्त्रीपरिषदको मिति २०६७/१२/२९ को निर्णयमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंले देहाय बमोजिम गर्ने" भनी नेपाल सरकार (मन्त्रीपरिषद) बाट मिति २०६७/१/३१ मा निर्णय भै आएको हुँदा २०६६/१२/२९ को निर्णय र सो साथ संलग्न अनुसूचीहरुको फोटोकपी पठाईएको, आदेश अनुसार गर्नुहुन भनी अनुसूची सहित विवरण मालपोत कार्यालय डिल्लीबजारमा पठाएको।

साविक नापीका समयमा मेरा बाबु, पति समेतका नाममा नाप नक्सा भै जोतभोग गरी आएको तपसिल बमोजिमका जग्गा कित्तामा मेरा बाबु, पतिको परलोक भै सकेको र मृतक बाबु, पतिको हक खाने हकदार म समेत भएकोमा उक्त जग्गा कित्ता दर्तावाला बाबु, पतिको मृत्यु पश्चात मैले नै एकलौटी जोतभोग गरी आएको र नयाँ नापी बमोजिम नाप नक्सा हुँदा पनि निज बाबु, पति कै नाममा नाप नक्सा कायम भै जोतभोग गरी आएको छु। उक्त जग्गा सम्बन्धमा पटक पटक विवाद पर्दा पनि दर्तावाला बाबु, पति जीवितै रहँदाको अवस्थामा निज स्वयं उपस्थित भै वाद प्रतिवाद गरी कारवाही गरी आएको साथै उक्त जग्गा सम्बन्धमा सम्मानित सर्वोच्च अदालतमा मुद्दा पर्दा पनि जोताहा मोहीको हैसियतले सम्मानित सर्वोच्च अदालतमा समेत उपस्थित भै पुर्पक्षमा बसी सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसला समेतबाट निज मेरा बाबु, पति लाई मोही ठहऱ्याई निज बाबु, पति कै पक्षमा फैसला भएकोमा सो फैसला विरुद्ध पुन: पुनरावलोकन हुँदा सम्मानित सर्वोच्च अदालतबाट मिति २०६५/८/२० मा निज बाबु, पति कै पक्षमा अन्तिम फैसला भएको अवस्था रहेको र उल्लेखित जग्गामा हाल सम्माननिय प्रधानमन्त्रीज्यूको निवास परिसरको क्षेत्रफल बिस्तार गर्ने क्रममा श्री भवन निर्माण सम्भार डिभिजन कार्यालय अनामनगरको योजना अनुरुप बिस्तारित योजना भित्र पर्ने जग्गा मध्ये मेरा बाबु, पतिको नामको जग्गा समेत पर्न गै उक्त बिस्तारित योजना भित्र पर्ने जग्गा कित्ताहरुलाई तपसिल बमोजिमका जग्गा कित्ताहरुबाट मोही भाग वापत मैले पाउने आधा जग्गा मैले रोजे बमोजिम पाउने गरी बाँकी आधा जग्गा बिस्तारित एरिया भित्र परेको जग्गालाई सट्टाभर्ना दिने भन्ने नेपाल सरकार मन्त्री परिषदको मिति २०६६/१२/२९ मा भएको निर्णय बमोजिम पनि मेरो बाबु, पति मोही कायम रहेको अवस्था भएको र यसै मा.पो.का. को मिति २०६६/१०/१० को च.नं. ९००९ को पत्रबाट समेत निज बाबु, पति मोही भएको स्पष्ट

गरेकोले निज बाबु, पतिका छोरा, पत्नीका हैसियतले म मोहीले पाउने आधा जग्गा सोही निर्णय अनुसार ना.सा.दा.खा. जो गर्नु पर्ने गरी मेरा नाममा ज.ध.प्र.पुर्जा पाउँ भन्ने समेत व्यहोराको श्रीकृष्ण महर्जन समेतका १२ जना मोही भनिएका व्यक्तिहरुले मालपोत कार्यालय डिल्लिबजारमा दिएको छुट्टाछुट्टै निवेदन मिति २०६७/३/८ समेतका बिभिन्न मितिमा उक्त कार्यालयमा दर्ता भएको, उक्त निवेदनहरुमा उल्लेख भए जस्तो सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलामा कोही कसैलाई मोही ठहर नगरेको, निवेदकहरुले निवेदन साथ पेश गरेको **का.म.पा. ४ नं वडा कार्यालयको च.नं. १९८२ मिति २०५९/३/३२ गतेको जोतभोग सिफारिश पत्रको पहिलो पानाको अन्तिम हरफमा नगर २३ ह कि.नं. ३७ क्षे.फ. १-१५-० जोताहा देव नारायण महर्जन र दोश्रो पानाको अन्तिम हरफमा कि.नं. ७७ क्षे.फ. ०-१०-० जोताहा द्वारिका महर्जन थप गरी** सरकारी अड्डाको पत्रमा व्यहोरा किर्ते समेत गरी पेश गरेको तथा सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० गतेको फैसलामा मोही भन्ने शब्द उल्लेख नै नभएको अवस्थामा सम्मानित सर्वोच्च अदालतको फैसलालाई अपव्याख्या समेत गरी झुठो र फरक व्यहोरा उल्लेख गरी निवेदन दिएको देखिएको।

भूमिसुधार तथा व्यवस्था मन्त्रालयको चलानी नं. १९५१ मिति २०६७/२/६ को पत्र प्राप्त भए पश्चात पत्रको व्यहोरा र नेपाल सरकार मन्त्रीपरिषदको मिति २०६६/१२/२९ गतेको निर्णय बमोजिम आफूले पाउने का.म.न.पा. वडा नं. ४ बाट आफूले पाउने र आफ्नो नामको जग्गा अन्य व्यक्तिले पाउने भए बमोजिम तपसिलमा उल्लेख भएका व्यक्तिहरुले भिन्ना भिन्नै फायल खडा गरी भिन्ना भिन्नै निवेदन पेश गरेता पनि मन्त्रीपरिषदको निर्णय एकमुष्ट भएकोले सम्पूर्ण व्यहोरा एकै टिप्पणीमा उल्लेख गरेको भनी श्रीकृष्ण महर्जन समेतका बिभिन्न व्यक्तिहरुले मोहीयानी हक वापत पाउने जग्गा, चमेली श्रेष्ठ, बाबा कार्की समेतका जग्गाधनीहरुले सट्टापट्टा सोधभर्ना वापत पाउने जग्गा र नापी कार्यालयको च.नं. ६९७ मिति २०६७/५/२८ को पत्रमा कि.का. भै आएको प्रधानमन्त्री निवास र बाटो कायम हुने हालको कि.नं. र क्षे.फ., तथा **त्यसभन्दा बाँकी कतिपय कित्तामा मोही पक्षले माग गरेको जग्गामा निवेदक सित कायम भएको मोहीको नाता नमिल्ने तथा श्रेष्ता कायम गर्नुपर्ने विवरण समेत उल्लेख गरी मालपोत कार्यालय डिल्लीबजारबाट मि.नं. ५५ उठान भई मिति २०६७/८/१६ गते पेश भए अनुसार संलग्न मन्त्री परिषदको निर्णय, मन्त्रालयको पत्र र प्राप्त अनुसूची बमोजिम हुने गरी मन्त्रिपरिषदको निर्णय कार्यान्वयन गर्ने गरी सदर भएको**। यसरी उल्लेखित मिसिल सदर हुँदा मोही पक्षले माग गरेको जग्गामा निवेदक सित कायम भएको मोहीको नाता नमिल्ने अवस्थालाई समेत नजर अन्दाज गरी सरकारी जग्गा मस्यौट गरी हानी नोक्सानी गर्ने मनसायबाट अभिप्रेरित भई योजनाबद्ध ढंगबाट कार्य गरेको देखिएको।

यसरी तयार भएको मिसिल नं. ५५ मा त्रुटी देखिएको भनी २०६७/९/१२ र २०६७/१२/१४ समेतमा बिभिन्न कित्ता जग्गा र विवरण समेत संशोधन गर्ने निर्णय भएको।तत्पश्चात उक्त मिसिल नं. ५५ समेतको आधारमा २५-७-१-१ रोपनी सरकारी जग्गा व्यक्ति तथा संस्था र बाटोको नाममा गई हानी नोक्सानी हिनामिना भएको देखिएको।

मु.द.नं. २७ च. नं. ७५२९ मिति २०७७/०३/१० गतेको पत्रको जवाफमा नापी कार्यलय, मैतिदेवी को च. नं. १६५८ मिति २०७७/०३/१० गते प्राप्त भएको पत्रानुसार तत्कालिन श्री ५ को सरकारले २०२१ सालमा अधिग्रहण गरेको बालुवाटार स्थित ललिता निवास कम्पाउण्ड भित्रको २८४-१४-०३-० जग्गाको २०२३ सालमा शुरु नापी हुँदा कायम भएका साबिक २३ स, २३ ह र २३ क्ष का साबिक कित्ता सहित को विवरण प्राप्त

भएकोमा तत्कालिन सरकारबाट कानूनी रुपमा अधिग्रहण भइसकेको बालुवाटार स्थित ललिता निवास कम्पाउण्ड भित्रको सोही २८४-१४-०३-० रोपनी जग्गा मध्येबाट नै १२ जना मोही भनिएका व्यक्तिहरुले सम्माननिय प्रधानमन्त्री लगायत विशिष्ठ व्यक्तिहरुको निबास परिसर विस्तारको क्रममा फरक व्यहोराका कीर्ते कागजातहरु समेत पेश गरी निम्नानुसारका कित्ता जग्गाहरु मोहीयानि हक कायम गरी गराई पाउँ भनी निवेदन दिई गैहकानूनी रुपमा मोही बापत १३-१५-१-१ रोपनी जग्गा प्राप्त गरेको देखिएको ।

| **सि. नं.** | **मोही भनिएका व्यक्ति** | **साबिक वडा** | **साबिक कित्ता** | **क्षेत्रफल** | **मोहीले पाएको** |
|---|---|---|---|---|---|
| १ | श्रीकृष्ण महर्जन | २३ क्ष | ७८ | २-९-०-० | ६०८.५५ |
| २ | द्वारिका महर्जन | २३ क्ष | ७७ | ०-१०-०-० | २२९.४७ |
| ३ | ग्वाराभाई महर्जन | २३ ह | २५ | १-३-२-० | ६००.६५ |
| ४ | मचानानी महर्जन | २३ क्ष | ६८ | १-८-०-० | ४९५.८३ |
| | | २३ क्ष | ६९ | ०-६-२-० | |
| ५ | बाबुराजा महर्जन | २३ क्ष | ४२ | ०-५-०-० | १०९४.३३ |
| | | २३ क्ष | २८ | ३-१५-०-० | |
| ६ | रेना गुरुङ | २३ ह | १५ | २-३-०-० | ७१८.९५ |
| | | २३ ह | २४ | ०-९-०-० | |
| ७ | तीर्थमाया महर्जन (पति आश नारायण महर्जन) | २३ क्ष | १५ | ८-५-०-० | १३४३.४१ |
| | | २३ क्ष | ६३ | ०-४-०-० | |
| ८ | तीर्थमायामहर्जन(पति नाती महर्जन) | २३ क्ष | २५ | ०-१२-०-० | २१६.६३ |
| ९ | देवनारायण महर्जन(बाबु-नाती महर्जन) | २३ ह | ३७ | १-१५-०-० | ५४९.७ |
| १० | देवनारायण महर्जन (बाजे ड्राइभर भाइचा) | २३ क्ष | ४८ | ०-१४-०-० | ९४७.५८ |
| | | २३ क्ष | ७६ | २-१२-०-० | |
| ११ | कान्छा महर्जन | २३ ह | १२ | ०-५-०-० | १६६.९३ |
| १२ | हर्क नारायण डंगोल भन्ने हर्ष महर्जन | २३ ह | ४० | ०-१३-२-० | १२९.१८ |
| | | **जम्मा क्षेत्रफल** | | **२९-५-२-०** | **१३-१५-१-१ रोपनी (७१०१.२१ व.मि.)** |

| **मोहीको नाममा कायम भएको जग्गा र निजहरुबाट भएको हक हस्तान्तरणको विवरण** | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| **सि.नं.** | **साबिक कि.नं.** | **साबिक ज.ध.** | **हाल सिट नं.** | **कि. नं.** | **कि.का. भै कायम कित्ता** | **क्षे.फ./ब.मि.** | **हाल कायम कि.नं.** | **मोही/ज. ध.को नाम** | **दोश्रो हक हस्तान्तरण** | **तेश्रो हक हस्तान्तरण** | **चौथो हक हस्तान्तरण** |
| १ | ७८ | श्री ५ को सरकार | १०२५-१९ | ५ | ५ | १९४.७५ | | श्रीकृष्ण महर्जन | माधवी सुवेदी, | | |
| | | | | ६ | ३६ | ४१२.३५ | | | | | |

| | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | उमा कुमारी ढकाल | | |
| २ | ७७ | श्री ५ को सरकार | १०२५-१९ | १२ | १२ | ४९.६८ | | द्वारिका मान महर्जन | शोभा कान्त ढकाल | | |
| | | | | ३ | ३७ | १४६.०१ | | | | | |
| | | | | १ | ४० | ३३.७९ | | | | | |
| ३ | २५ | श्री ५ को सरकार | १०२५-१५ | १०६ | ५७९ | ६००.६५ | ७५२ | ग्वाराभाई महर्जन | NRN | | |
| | | | | | | | ७५३ | | माधवी सुवेदी, उमा कुमारी ढकाल | | |
| ४ | ६८ र ६९ | श्री ५ को सरकार | १०२५-१५ | ३१२ | ३१२ | ८३.४६ | ६४१ | मचानानी महर्जन | शोभा कान्त ढकाल, राम कुमार सुवेदी | निकिता तुलाधर | |
| | | | | | | | ६४२ | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| | | | | १९३ | ६२७ | १८.९ | | | | कल्पना तुलाधर | |
| | | | | ६४ | ६२५ | ३९३.४८ | ६३९ | | | निकिता तुलाधर | |
| | | | | | | | ६४० | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| ५ | २८ र ४२ | श्री ५ को सरकार | १०२५-१५ | ९१ | ६१५ | ७९.४९ | ६३७ | बाबुराजा महर्जन | शोभा कान्त ढकाल, राम कुमार सुवेदी | मनोज कुमार केडिया | |
| | | | | | | | ६३८ | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| | | | | ७२ | ७२ | ९१९.१ | ६३४ | | | मनोज कुमार केडिया | |
| | | | | | | | ६३६ | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| | | | | | | | ६८३ | | | कामना गुरुङ | |
| | | | | | | | ६८५ | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| | | | | २०५ | ६२९ | १०.५५ | ६८६ | | | कामना गुरुङ | |
| | | | | १४५ | ६२१ | ७९.४९ | ७३८ मा मर्ज | | | खिमलाल खरेल | कल्याण गुरुङ |
| ६ | २४ र १५ | श्री ५ को सरकार | १०२५-१५ | १४५ | ६२० | ७९.४९ | ७२१ | रेणा गुरुङ | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | खिमलाल खरेल | कल्याण गुरुङ |
| | | | | | | | ७२२ | | | | सरला गुरुङ घले |
| | | | | १०४ | ५४४ | ४६६.६१ | | | | निर्मला देवी गोयल | |
| | | | | २५० | ५४० | १३.९ | | | | निर्मला देवी गोयल | |
| | | | | २५७ | २५७ | ११५.२६ | | | | निर्मला देवी गोयल | |

| | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | २१ | १३८ | ४३.७२ | | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| ७ | १५ र ६३ | श्री ५ को सरकार | १०२५-१५ | ७४ | ६१८ | १७८.८५ | ७३८ मा मर्ज | तिर्थमाया महर्जन (पति आश नारायण) | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | कल्याण गुरुङ | |
| | | | | ७३ | ६१६ | ७६.५१ | ६७८ | | | कल्याण गुरुङ | |
| | | | | | | | ६७९ | | | कामना गुरुङ | |
| | | | | ९१ | ६१४ | | | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| | | | १०२५-१४ | १२ | १४३ | ९३.४ | | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| | | | १०२५-१५ | २१२ | २१२ | ८७.४३ | | | | निर्मला देवी गोयल | |
| | | | | ७६ | ५८६ | २३८.४७ | ६७३ | | | कल्याण गुरुङ | |
| | | | | २३६ | ५७८ | १३.९३ | | | | निर्मला देवी गोयल | |
| | | | | ४७ | ६२३ | ६६.५८ | | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |
| ८ | २५ | श्री ५ को सरकार | १०२५-१५ | ७४ | ६१९ | १७८.८५ | | तिर्थमाया महर्जन (पति नाती महर्जन ) | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | कल्याण गुरुङ | |
| | | | | २११ | ५९२ | ३७.७७ | | | | कल्याण गुरुङ | |
| ९ | ३७ | श्री ५ को सरकार | १०२५-१५ | ५४ | ५४ | ३५.७७ | | देव नारायण महर्जन (पिता नाती महर्जन) | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | | |
| | | | १०२५-२० | ९ | १२९ | ५१३.५ | | | | | |
| १० | ७६ र ४८ | श्री ५ को सरकार | १०२५-१४ | ११ | ११ | ६९५.५३ | | देव नारायण महर्जन ( पिता नारायण महर्जन ) | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | | |
| | | | | २६ | २६ | ८७.४३ | | | | | |
| | | | | ३८ | ३८ | १३१.१५ | | | | | |
| | | | | १२ | १४४ | २९.८५ | | | | | |
| ११ | १२ | श्री ५ को सरकार | १०२५-१४ | २१ | १३६ | १६६.९३ | | कान्छा महर्जन | माधवी सुबेदी, उमा कुमारी | | |

| | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | ढकाल | | |
| १२ | ४० | श्री ५ को सरकार | १०२५-१५ | २५३ | ५५८ | ३.९८ | | हर्क नारायण महर्जन | शोभा कान्त ढकाल, राम कुमार सुवेदी | निर्मला देवी गोयल | |
| | | | १०२५-१४ | २१ | १३७ | ११५.२६ | | | | शोभाकान्त ढकाल, राम कुमार सुवेदी | |

| मि.नं. ५५ मिति २०६७/८/१६ गतेको निर्णयले प्र.म. निवास बिस्तार आयोजना अन्तर्गत सट्टापट्टाको क्रममा नेपाल सरकारको नामबाट व्यक्ति तथा संस्थाको नाममा गएको जग्गाको बिबरण | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| सि.नं. | नयाँ नापी हुँदाको विवरण | | | | हालको विवरण | | | पहिलो हक हस्तान्तरण | दोश्रो हक हस्तान्तरण | तेश्रो हक हस्तान्तरण | चौथो हक हस्तान्तरण | हाल कायम जग्गाधनी | कैफियत |
| | वडा | सिट नं. | कि.नं. | क्षेत्रफल ब.मि. | जग्गा धनी | कि.नं. | क्षेत्रफल | चमेली श्रेष्ठ, बाबा कार्की, अगम ढुंगाना, खेमलाल खरेल, लक्ष्मी ढकाल समेत ५ जनाका नाममा मि.नं. ५५ मिति २०६७/८/१६ को निर्णयले कायम | | | | चमेली श्रेष्ठ, बाबा कार्की, अगम ढुंगाना, खेमलाल खरेल, लक्ष्मी ढकाल समेत ५ जना | |
| १ | ४ | १०२५-१५ | ६६ | २८५.४० | श्री ५ को सरकार समर जंग कम्पनी | २१९ | ४७.६९ | | | | | | |
| | | १०२५-१९ | ७ | ३५०.६० | | १४ | २७.८० | | | | | | |
| | | | ६ | ९९४.०० | | ३४ | ६७.५७ | | | | | | |
| | | १०२५-२० | ९ | १०६१.०० | | १२८ | ५४७.५० | | | | | | |
| | | १०२५-१५ | ७३ | ४१२.८० | | ६१७ | ३३३.८६ | | | | | | |
| | | | ७० | १०२६.८० | | २१७ | ४७.६९ | | | | | | कि.नं. २१७ प्लट रजिष्टर अनुसार कि.का. भई कि.नं. ६१३ कायम। |
| | | | | | | ६१३ | २७.८६ | | | | | | |
| | | | ६५ | १३८५.४० | | २३१ | ९३.३६ | DLF डेभलपर्स प्रा.लि. का नाममा मि.नं. ५५ मिति २०६७/८/१६ को निर्णयले | शोभा कान्त ढकाल र राम कुमार सुबेदी | कल्पना तुलाधर | | | |

| | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | कायम | | | | | |
| २ | | | | | | ६४३ | ४५.०० | | | | | कल्पना तुलाधर | कि.नं. २३१ कि.का. भई कि.नं. ६४३ र ६४४ कायम भएको। |
| | ४ | १०२५-१५ | | | श्री ५ को सरकार समर जंग कम्पनी | ६४४ | ४८.३६ | | | शोभाकान्त ढकाल र राम कुमार सुबेदीका नाममा बाँकी | | शोभाकान्त ढकाल र राम कुमार सुबेदी | |
| | | | ९२ | ६३८.०० | | २९६ | १५८.९५ | | | | | DLF डेभलपर्स प्रा.लि. | |
| | | | १०१ | ४५३.६० | | २७३ | ११.९१ | DLF डेभलपर्स प्रा.लि. का नाममा मि.नं. ५५ मिति २०६७/८/१६ को निर्णयले कायम | | | | | |
| | | | ९६ | १३५३.४० | | २६८ | १५.९० | | | | | | |
| | | | ७० | १०२६.८० | | २१७ | ४७.६९ | | | | | | कि.नं. २१७ कि.का. भई कि.नं. ६१२ कायम |
| | | | | | | ६१२ | १९.९० | | | | | | |
| | | | ४७ | १३३.६० | | ६२२ | ६६.५८ | | | | | | |
| | | | ६४ | ७७७.४० | | ६२४ | ३८३.५४ | | शोभाकान्त ढकाल र राम कुमार सुबेदी | | | | कि.नं. ६२४ कि.का. भई कि.नं. ६४५ र ६४६ कायम भएको। |
| | | | | | | ६४५ | १८४.०० | | | कल्पना तुलाधर | | कल्पना तुलाधर | |
| | | | | | | ६४६ | १९९.५४ | | | शोभाकान्त ढकाल र राम कुमार सुबेदी | | शोभाकान्त ढकाल र राम कुमार सुबेदी | |
| | | | ५० | ७१९.६० | | १९३ | ३७.७३ | | | | | | |
| | | | | | | ६२६ | १८.९० | | | कल्पना तुलाधर | | कल्पना तुलाधर | |
| | | | ७१ | ७८४.६० | | २०५ | २१.८३ | | | | | | कि.नं. २०५ कि. का. भई कि.नं. ६२८ कायम। |

| | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | ६२८ | १०.९० | | | | | | |
| | | १०२५-१४ | २१ | ५२३.६० | | १३९ | १७८.८५ | DLF डेभलपर्स प्रा.लि. का नाममा मि.नं. ५५ मिति २०६७/८/१६ को निर्णयले कायम | | | | DLF डेभलपर्स प्रा.लि. | |
| | | | | | | १४० | ७.९६ | | | | | | |
| | | | १२ | ४५.१६ | | १४१ | १५३.०२ | | | | | | |
| | | १०२५-१९ | ६ | ९९४.०० | | ३५ | ५१४.७१ | | | | | | |
| | | | ३ | ३०४.४० | | ३८ | ५५.६४ | | | | | | |
| | | | १ | १०६.२० | | ४१ | २१.८९ | | | | | | |
| | | | | | | ४३ | २४.८७ | | | | | | |
| ३ | ४ | १०२५-१५ | १०६ | १२००.८० | श्री ५ को सरकार समरजंग कम्पनी | ५४८ | १८८.७९ | उमा कुमारी ढकाल, माधवी सुबेदीका नाममा मि.नं. ५५ मिति २०६७/८/१६ को निर्णयले कायम | | | | उमा कुमारी ढकाल, माधवी सुबेदी | |
| | | १०२५-१४ | १२ | ४५१.६० | | १४२ | १७४.८८ | | | | | | |
| ४ | ४ | १०२५-१५ | ७५ | ५९५.८० | | २११ | ९९.३५ | भाटभटेनी डेभलपमेन्ट कं.प्रा.लि.का नाममा मि.नं. ५५ मिति २०६७/८/१६ को निर्णयले कायम | कल्याण गुरुङ | कल्याण गुरुङका नाममा मुद्दा फाँट नं. १ मि.नं. १६३ मिति २०७१/५/२६ को निर्णयले कि.नं. ५९१ समेतका कित्ताहरु कि.नं. ७३८ मा एकिकृत भई कल्याण गुरुङकै नाममा कायम | | | |
| | | | | | | ५९१ | ३३.७९ | | | | | | |

| | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ५ | ४ | १०२५-१९ | ३ | ३०४.४० | | ३९ | १०२.३५ | नयाँ नापी श्री ५ को सरकार समरजंग कम्पनी | निर्मला देवी गोयल मि.नं. ५५, मिति २०६७/८/१६ को निर्णयले कायम | | | निर्मला देवी गोयल | कि.नं. ३९ र ४२ को श्रेष्ता प्रमाणित भएको देखिँदैन तर कैफियतमा उक्त कित्ता जग्गाहरु निर्मला देवी गोयलका नाममा भनी उल्लेख छ। |
| | | | १ | १०६.२० | | ४२ | २४.८७ | | | | | | |

मोही भनिएका १२ जना व्यक्तिहरुले १३-१५-१-१ रोपनी प्राप्त गरे संगै विशिष्ट व्यक्तिहरुको निबास परिसर विस्तारको क्रममा तत्कालिन श्री ५ को सरकारले रितपुर्वक अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये बिभिन्न व्यक्ति तथा संस्था समेतले तत्कालिन सरकारी कर्मचारी र पदाधिकारी समेत सँगको मिलेमतो र संलग्नतामा झुठा र किर्ते व्यहोराको कागज पेश गरी गराई आफ्नो नाममा दर्ता कायम गराई तत्कालिन अवस्थामा निजहरुकै नाममा रहेको व्यक्ति तथा संस्थाहरुको जग्गा सरकारले प्राप्त गरी प्राप्त गरेको जग्गाको सट्टापट्टा सोधभर्ना बापत ६-८-१-० रोपनी तत्कालिन श्री ५ को सरकारले रितपुर्वक अधिग्रहण गरेको बालुवाटार स्थित ललिता निवास कम्पाउण्ड भित्रको २८४-१४-३-० जग्गा मध्येबाट नै व्यक्ति तथा संस्थाहरुको नाममा दा. खा. गरेको। यसरी सरकारले कानूनसम्मत ढंगबाट अधिग्रहण गरेको जग्गा मोही भनिएका १२ जना र सट्टापट्टा सोधभर्ना स्वरुप जग्गाधनी भनिएका व्यक्ति तथा संस्थाहरुको नाममा कायम भइसके पश्चात विशिष्ट व्यक्तिहरुको निबाससुरक्षाको आडमा उक्त जग्गाहरुमा पहुँच मार्ग खोल्ने नियतले सम्माननिय सभामुखज्यूको निवासबाट निस्की सुवर्ण शमसेर मार्गमा जोडिएको बाटो कायम गरी व्यक्तिगत हितको लागि नेपाल सरकार (म.प.) को निर्णय अनुसार१-११-२-० रोपनी सरकारी जग्गा बाटोमा पर्नु पर्नेमा **४-१५-३-० रोपनी** जग्गा सो बाटोमा कायम गरेको।

परिसर बिस्तार गर्दा बिस्तारित क्षेत्रमा पर्ने अनुसूची २ मा उल्लेख भए बमोजिमका ब्यक्तिका नाममा दर्ता रहेको जग्गाको सोधभर्ना तथा सट्टापट्टा गर्न आवश्यक ब्यवस्था मिलाउने उल्लेख गरी प्रस्ताव पेश भई नेपाल सरकार(मन्त्रिपरिषद) बाट निर्णय हुँदा परेको उल्लेखित बुँदालाई आड हाली साबिक देखिनै प्रधानमन्त्री निवास परिसर भित्र रहेको साबिक वडा नं. २३ क्ष को कि.नं. १८ र २३ ह को कि.नं. ८ हालको सिट नं. १०२५-१५ कि.नं. ५६२, २४४, ८०, २४६ समेतका जग्गाहरु बिस्तारित क्षेत्रमा परेको भनी सोको सोधभर्ना बापत भनी चमेली श्रेष्ठ समेतका ५ जना र डिएलएफ डेभलपर्स प्रा.लि. समेतले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा प्राप्त गरी सरकारी जग्गा हिनामिना हानी नोक्सानी भएको र निवास परिसरको दक्षिण तर्फ निजी ब्यक्तिको नाममा दर्ता रहेका जग्गाहरु रहेको हुँदा विशिष्ट ब्यक्तिहरुको सुरक्षामा आँच आउन सक्ने गरी कुनै पनि समयमा कुनै पनि गतिबिधी संचालन हुन सक्ने हुँदा सुरक्षाको संबेदनशिलतालाई ध्यानमा राख्दै तथा सो क्षेत्रको भौतिक पुर्वाधारहरु (जस्तै पानीको ढल निकास, सडक आदि) लाई ब्यवस्थित गर्न परिसर क्षेत्रको पुन:संरचना तथा विस्तार गर्न वान्छनिय देखिएको छ भनी DLF डेभलपर्स र भाटभटेनी डेभलपमेण्ट कम्पनी समेतले चर्चेको जग्गामा जान सहज हुने गरी सुरक्षाको व्यवस्थाको नाममा पहुँच मार्ग निर्माण गरेको देखिँदा सरकारी

जग्गा हिनामिना गरी व्यक्ति विशेषको नाममा दर्ता कायम गरी व्यक्ति विशेषलाई लाभ पुऱ्याउने दुषित मनसाय राखि राम कुमार सुवेदी, शोभाकान्त ढकाल, शिवजी भट्टराई, मिन बहादुर गुरुङ, कैलाश कुमार गोयल, शिव रतन शारडा समेतका प्रतिवादीहरुको योजना र मिलेमतोमा सरकारी कर्मचारीहरु र पदाधिकारी समेतलाई संलग्न गराई झुठा र किर्ते व्यहोराका कागजातहरुलाई आड हाली तत्कालिन श्री ५ को सरकारले जग्गा प्राप्ती ऐन, २०१८ बमोजिम सूचना प्रकाशित गरी सरोकारवालाहरुलाई मुआव्जा दिई रितपूर्वक अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना गरी व्यक्ति विशेषको नाममा दर्ता कायम गरी सरकारी छाप दस्तखत किर्ते र सँगठित अपराधको कसूर गरेको प्रष्ट पुष्टी हुन आउँछ।

पक्राउ प्रतिवादी माधवी सुवेदीले अधिकार प्राप्त अधिकारी समक्ष बयान गर्दा ललिता निवास क्याम्प भित्रको के कति जग्गा के कति मूल्यमा खरिद गरीयो र सो वापतको मूल्य रकम के कुन श्रोतबाट के कुन माध्यमबाट को कसलाई तिरियो भन्ने सम्बन्धमा आफूलाई केहि जानकारी नभएको भनी खुलाई लेखाएको, यसै गरी अर्का प्रतिवादी राम कुमार सुवेदीले आफ्नो बयानमा ललिता निवास क्याम्प भित्रको जग्गाहरु मोही भनिएका व्यक्तिहरुको नाममा स्वामित्व कायम गराउन २०५० साल देखि नै निवेदन लेख्ने, वारेश बस्ने र बिभिन्न कार्यालयहरुमा निवेदन लगायतका कागजातहरु पेश गरी कार्यान्वयनको प्रकृयामा लैजाने कार्यमा आफ्नो संलग्नता रहेको कुरा खुलाई ललिता निवास क्याम्प भित्रको बिभिन्न कित्ता र क्षेत्रफलका जग्गाहरु आफ्नो स्व आर्जनको बचत, पैतृक अंश र आफन्तहरुबाट लिएको ऋण सापटीबाट खरिद गरेको भनी खुलाई लेखाएता पनि अंश के कति पाएको, बचत कति थियो, ऋण कति लिईयो, को सँग लिईयो सो को बारेमा आफूलाई याद नभएको र कुनै प्रमाण कागजातहरु समेत पेश गर्न नसक्ने भनी खुलाई लेखाएबाट निजले मोही भनिएका व्यक्तिहरु, बिभिन्न कार्यालयका कर्मचारीहरु समेत सँगको योजना, मिलेमतो र संलग्नतामा किर्ते र फरक व्यहोराका कागजातहरु तयार पारी ललिता निवास क्याम्प भित्रका सरकारी जग्गा मस्यौट गरी गराई उक्त जग्गाहरु मध्ये केहि जग्गा आफूले लिए खाएको प्रष्ट पुष्टी हुन आएको।

**अर्का प्रतिवादी शोभाकान्त ढकालले अधिकार प्राप्त अधिकारी समक्ष गरेको बयानमा** समेत आफू र आफ्नो परिवारका सदस्यहरुको नाममा रेना गुरुङ, डिएलएफ डेभलपर्स प्रा.लि. समेतका बिभिन्न व्यक्ति र संस्थाहरुबाट खरिद गरेको जग्गाहरु हालसम्म आफू र आफ्नो परिवारका सदस्यहरुको नाममा दर्ता कायम रहेको, के कति क्षेत्रफलको के कुन कित्ता जग्गाहरु मेरो परिवारको के कुन सदस्यको नाममा छ हाल यकिन भन्न नसक्ने, जग्गा खरिद गर्दा साबिकका जग्गाधनी र राम कुमार सुबेदीको श्रीमती माधवी सुबेदी समेत भई सगोलमा रहने गरी खरिद गर्ने सहमती भई सोहि बमोजिम खरिद गरिएको हुँदा साँध सिमाना छुट्याउने काम नगरेको, उल्लेखित जग्गाहरुको सम्बन्धमा जानकार रहेका राम कुमार सुबेदी समेतको साझेदारीमा जग्गा खरिद गरिएको हुँदा जग्गाको साँध सिमानाको बारेमा चासो नराखेको, बिश्वाशमा कारोबार गरेको हुँदा साँध सिमानाको बारेमा थाहा नभएको जस्ता व्यहोरा खुलाई लेखाई दिए बाट निजले मोही भनिएका व्यक्तिहरु, बिभिन्न कार्यालयका कर्मचारीहरुसँगको योजना, मिलेमतो र संलग्नतामा किर्ते र फरक व्यहोराका कागजातहरु तयार पारी ललिता निवास क्याम्प भित्रका सरकारी जग्गा मस्यौट गरी गराई उक्त जग्गाहरु **मध्ये केहि जग्गा आफूले लिए खाएको प्रष्ट पुष्टी हुन आएको।**

**प्रतिवादी मिन बहादुर गुरुङले अधिकार प्राप्त अधिकारी समक्ष गरेको बयानमा** म, मेरो परिवारका सदस्य र म संलग्न कम्पनी समेतले ललिता निवास क्याम्प भित्रको जग्गा खरिद गर्दा नेपाल सरकारबाट जारी भएको जग्गाधनी दर्ता प्रमाण पुर्जा समेत हेरी तत्कालिन जग्गाधनीलाई मोल चुक्ता गरी

नियमानुसारको राजश्व दाखिला गरी रजिष्ट्रेशन पास गरी खरिद गरेका हौं । सो बाहेक अन्य कुराहरुमा हामीहरुको कुनै संलग्नता , योजना र मिलेमतो छैन भनी खुलाई लेखाई दिएबाट ललिता निवास क्याम्प भित्रको जग्गाहरु मोही भनिएका ब्यक्तिहरुको नाममा नामसारी हालसाबिक हुनासाथ तत्कालै प्रतिवादी मिन बहादुर गुरुङ र निजको परिवारको अन्य सदस्यहरुको नाममा गएको देखिएबाट प्रतिवादी मिन बहादुर गुरुङले सम्बद्ध कर्मचारीहरु र मोही भनिएका ब्यक्तिहरु समेतलाई प्रलोभनमा पारी झुठा ब्यहोरा उल्लेख गरी गराई जग्गा सट्टापट्टा समेतको नाममा सरकारी जग्गा आफु र आफ्ना परिवार समेतका नाममा नामसारी गराई सरकारी जग्गा हिनामिना गरेको प्रष्ट देखिएको ।

**प्रतिवादी बाबुराजा महर्जन र देवनारायण महर्जनले अधिकार प्राप्त अधिकारी समक्षको बयानमा** आफुहरुले सरकारी जग्गा हिनामिना तथा कीर्ते गरेको छैन प्रतिवादी रामकुमार सुवेदीले तयार गरेको कागजातहरुमा दस्तखत गरेको मात्र हो, जग्गाधनी प्रमाण पुर्जा देख्न समेत नपाएको भनी खुलाई लेखाई दिएबाट प्रतिवादी रमाकुमार सुवेदी समेतले सम्बद्द विभिन्न कार्यालयका कर्मचारीहरु समेतको मिलेमतोमा सरकारी जग्गालाई मोही जनिएको जग्गा हो भनी कीर्ते कागजातहरु तयार निवेदन दिई सरकारी जग्गा मोही भनिएका ब्यक्तिहरुको नाममा दर्ता कायम हुने बित्तिकै मोहीहरुको नामको जग्गा प्रतिवादी रामकुमार सुवेदी समेतका प्रतिवादीहरुको नाममा गएबाट सरकारी जग्गा मोही भनिएका ब्यक्तिहरुको नाममा कायम गरी हिनामिना गरेको प्रष्ट देखिएको ।

बालुवाटार स्थित विशिष्ट व्यक्तीको निवास परिसर बिस्तार सम्बन्धमा नेपाल सरकार, मन्त्रीपरिषदबाट मिति २०६६/१२/१९ मा भएको निर्णय कार्यान्वयनको क्रममा भूमि सुधार तथा व्यवस्था मन्त्रालयबाट मिति २०६७/१/२६ मा टिप्पणी उठाउने तत्कालिन उप सचिब हुपेन्द्रमणी के.सी., परिमार्जन गर्ने तत्कालिन सह सचिब जीत बहादुर थापा र निर्णयको लागी पेश गर्ने तत्कालिन सचिब छबिराज पन्तको टिप्पणी आदेशमा भएको दस्तखत, सो टिप्पणीमा भएको हस्तलिपी र निजहरु तत्कालिन समयमा कार्यरत रहँदा निजहरुले गरेको दस्तखत तथा हस्तलिपी परिक्षण गर्दा There is no divergence among all the questioned writings. All the writings have been wriiten freely with natural variation between them.The aforesaid similarities are significant and sufficient and will not accidentally coincide in the writing habits of two different persons and when considered collectively they lead me to the conclusion of their **COMMON AUTHORSHIP** भन्ने उल्लेख भएको ।

In short there is no divergence between both the questioned and standard signature, both the signature are free written and have natural variation among them. The aforesaid similarities are significant and sufficient and will not accidentally coincide in the writing habits of two different persons and when considered collectively they lead me to the conclusion of their **COMMON AUTHORSHIP** भएको भन्ने व्यहोराको केन्द्रीय प्रहरी बिधि विज्ञान प्रयोगशालाको चलानी नं.४३१, मिति २०७९।०४।१६ गतेको पत्रसाथ प्राप्त प्रतिवेदनमा उल्लेख भएको ।

तत्कालीन भवन निर्माण संभार डिभिजन कार्यालय, अनामनगरलाई तत्कालीन मालपोत कार्यालय, काठमाडौंले लेखेको च नं ९००९ मिति २०६६/१०/१० गतेको सक्कल पत्रमा भएको प्रमुख मालपोत अधिकृत प्रेम बहादुर खापुङ र तत्कालीन खरिदार अर्जुन खतिवडाले गरेको दस्तखत र निजहरु तत्कालीन समयमा

कार्यरत रहँदा निजहरुले गरेको दस्तखत परीक्षण गर्दा In short there is no divergence between both the questioned and standard signature, both the signature are free written and have natural variation among them. The aforesaid similarities are significant and sufficient and will not accidentally coincide in the writing habits of two different persons and when considered collectively they lead me to the conclusion of their **COMMON AUTHORSHIP** भन्ने उल्लेख भएको।

तत्कालीन भूमि सुधार कार्यालय, काठमाडौंको च नं ५१४०, मिति २०६६/१०/१५ गतेको सक्कल पत्रमा भएको तत्कालीन भूमि सुधार अधिकृत शंकर प्रसाद सुवेदी र तत्कालीन नायव सुब्बा अंगुर कुमार सिग्देलको दस्तखत र निजहरु तत्कालीन समयमा कार्यरत रहँदा निजहरुले गरेको दस्तखत परिक्षण गर्दा In short there is no divergence between both the questioned and standard signature, both the signature are free written and have natural variation among them. The aforesaid similarities are significant and sufficient and will not accidentally coincide in the writing habits of two different persons and when considered collectively they lead me to the conclusion of their COMMON AUTHORSHIP भएको भन्ने व्यहोराको केन्द्रीय प्रहरी बिधि विज्ञान प्रयोगशालाको चलानी नं.४३२, मिति २०७९।०४।१६ गतेको परीक्षण प्रतिवेदनमा उल्लेख भएको।

श्री ५ को सरकारले मिति २०२१।०८।१५ मा सार्वजनिक कामको लागि ललिता निबास, महाबीर भवन, हरीहर भवन, सिता भवन, लक्ष्मी निवास र ववरमहल समेत अधिग्रहण गर्ने निर्णय गरेको थियो। यसरी अधिग्रहण गरीएका जग्गाहरु मध्ये साविक नगर २३ हाल का.म.पा.वडा नं. ४ मा रहेको ललिता निवासको जग्गा प्रधान मन्त्री निवास, प्रधान न्यायाधीस निवास र राष्ट्रिय पंचायत अधयक्ष निवास समेत बनाउनको लागि अधिग्रहण गरिएको हो। यसरी अधिग्रहण गर्दा तत्कालिन अबस्थामा सरकार बिरोधी गतिबिधीमा लागेका कारण जफत गरिएको सुबर्ण शम्सेर ज.व.रा र काञ्चन शम्सेर ज.ब.रा.को भागको १४-११-०-०९ बाहेकको बांकी २८४-१४-३-० जग्गा र सो मा बनेका घरहरु समेत अधिग्रहण गरेको थियो। जग्गा अधिग्रहण गर्दा जग्गाधनीहरुलाई तत्कालिन अबस्थाको चलन चल्तीको मुल्य भन्दा २०/२५ प्रतिशत बढी रकम मुआब्जा दिई अधिग्रहण गरेको हो भनी  नवराज सुवेदीले खुलाई लेखाई दिएबाट ललिता निवास क्याम्प भित्रको जग्गा तत्कालिन समयमा अधिग्रहण गरेको सरकारी जग्गा भएको पुष्टी हुन्छ।

अत: यी माथि बिबेचित तथ्यहरुको आधार प्रमाण, मालपोत कार्यालय समेतको विभिन्न कार्यालयहरुबाट बिभिन्न मितिका निर्णयहरुबाट साविक श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेका जग्गाहरुको  दर्ता श्रेस्ता खारेज गरी मोही भनिएका व्यक्तिहरु श्रीकृष्ण महर्जन समेत १२ जनाको नाममा मोहीयानी हक वापत र जग्गाधनी भनिएका बाबा कार्की समेतको नाममा सरकारी जग्गा गएको देखिए समेतबाट प्रतिवादीहरुले नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गाको जग्गाधनीको लगत कट्टा गरी व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गराई आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल फरक व्यहोरा समेतको कीर्ते कागज बनाई पेश गरी झुक्याई झुट्टो कुरालाई सद्दे हो भनी धोका दिई गफलतमा पारी आफ्नो हक नपुग्ने अर्काको हकको चल अचल धनमाल आफ्नो हो भनी लिखत गरी बिक्रि व्यवहार गरी मुलुकी ऐन, २०२० किर्तेको महलमा निषेधित परिभाषित सरकारी छाप दस्तखत किर्ते कसूर गरेको भन्ने खुल्न आएकोले प्रतिवादीहरु श्रीकृष्ण महर्जन समेतले नेपाल सरकार समरजंग कम्पनीको नाममा

दर्ता कायम रहेको सरकारी जग्गा जम्मा क्षेत्रफल २५-७-१-१ जग्गाको लगत कट्टा गरी व्यक्ति तथा संस्था र बाटो समेतको नाममा दर्ता कायम गरी कुल बिगो रु.३,२५,८५,००,०००।- ( अक्षेरेपी तिन अर्ब पच्चिस करोड पचासी लाख )बराबरको नेपाल सरकार समरजंग कम्पनीको नामको जग्गा हिनामिना हानी नोक्सानी गरेको र सो क्रममा सँगठित रुपमा योजना बनाई तहगत रुपमा जिम्मेवारी बाडफाड गरी  सरकारी कार्यालयबाट जारी हुने पत्रमा फरक व्यहोरा पारी, व्यहोरा थप समेत गरी पत्र कीर्ते गरी मुलूकी ऐन, २०२० अन्तर्गतको कीर्ते कसूर र सँगठित अपराध निबारण ऐन, २०७० बमोजिमको कसूर गरेको प्रष्ट देखिन्छ।

**खण्ड (घ)**

**सरकारी जग्गालाई अनधिकृतरुपमा पशुपती टिकिन्छा गुठीमा कायम गरेको (२०६९)**
**(क्षेत्रफल-४-१४-३-२)**

- **भूमि सुधार मन्त्रालय जग्गाधनी दर्ता श्रेस्ता (छानविन प्र. अनुसूची १३७ ) :**

  "गुठी लगत तथा तहविल कार्यालयको च.नं. २४२२ को मिति २०४२।०१।१८ को पत्रवाट तोक आदेशले वडा नं.२३ क्ष.नं.९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६ को जग्गा श्री ५ सरकार गुठीका नाउमा गएको र कि.नं. ६७,६९,७०,७१,८१,८२ र ८३ को जग्गा श्री ५ गुठीका नाउमा गएको" भन्ने मिति २०४२।०३।१६ गते तत्कालीन कार्यालय प्रमुख धर्म प्रसाद गौतमले तोक निर्णय गरेको । उक्त तोक निर्णयमा २०७० सालमा टिकिन्छा गुठीमा दर्ता भई मोही कायम भएका कि.नं. २२,३१,३५ र ७३ का जग्गाहरु नभएको तर मिति २०५८।०१।१४ गते वारेश राम कुमार सुवेदीले गुठी तहसिल शाखा कार्यालयमा कि.नं. १५, २५, २८, ४२ र ६३ का जग्गाहरु गुठीको नाममा दर्ता एवं हाल साविक गरी जग्गाधनी प्रमाण पूर्जा पाउँ भनी दिएको उक्त निवेदनमा उक्त ५ कित्ता जग्गा मध्ये कि.नं.१५, २५, ४२, ६३, ६९ मात्र तोक निर्णय भएको देखिएको बाँकि कि.नं.२८ को सम्बन्धमा तोक निर्णय भएको नदेखिएको अवस्थामा पनि वारेस राम कुमार सुवेदीले निवेदन मार्फत माग गरेको देखिएको।

- **गुठी लगत तथा तहाविल कार्यालयले मालपोत कार्यालयलाई ६४ पंचायतको नाममा जग्गाधनी पूर्जा बनाईदिने भनी लेखेको पत्र (च.नं. २४२२ मिति २०४२/०१/१८ गते) (त्रिताल आयोग प्रतिवेदन अ.४०):**

  मालपोत कार्यालयको मोठ श्रेस्तामा बिभिन्न प्रकारका गुठी जनिएका गुठी जग्गाको पुर्जा माग गर्ने सम्बन्धमा गुठी संस्थानको च.नं ७३५५ मिति २०४१।१२।९ को पत्र साथ कार्यपत्र विवरणको दफा १ ख अनुसार नापी श्रेस्ता फिल्डबुकमा श्री ५ सरकार गुठी, श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी, सरकारी गुठी, कालमोचन गुठी, गुठी संस्थान गुठी, आदि लेखिएका जग्गाहरु राज गुठी अन्तर्गतकै जग्गा देखिदा त्यस्ता जग्गाहरुको सम्बन्धमा दर्ताको वा कसैको नाममा छ छैन मालपोत कार्यालयको श्रेस्ता भिडाउने र कसैको नाममा दर्ता नभएको तथा कसैको दाबि समेत नभएको जग्गाको ज.ध.प्र.पु उल्लेखित गुठीकै नाममा कायम गरी पुर्जा बनाई पठाई दिनुहुन निम्न बमोजिमको पंचायतहरुको माग फारम थान साथै राखि पठाएको ब्यहोरा अनुरोध छ।

**तपसिल**

| सि.नं. | पञ्चायत | पाना थान |
|---|---|---|
| १. | इन्द्रायणी | ६ थान |
| २. | सतुङगल | ६ |
| ३. | साँखुभुतखेल | ४ |
| ४. | साँखु | -- |
| ५. | कपन | ४ |
| ६. | कि.पु. बाहिरी | १६ |
| ७. | तीनथाना | १७ |
| ८. | सरस्वति | ६ |
| ९. | फुटुङ | १ |
| १०. | बिष्णु | १० |
| ११. | स्वयम्भु | २ |
| १२. | बानेश्वरमाहादेस्थान | १८ |
| १३. | स्युचाटार | ६ |
| १४. | चण्डेश्वरी | ९ |
| १५. | नँया नैकाप | २ |
| १६. | साखु पुखुलाछी | २ |
| १७. | झोर | २ |
| १८. | आलापोट | ३ |
| १९. | सिनामंगल | १२ |
| २०. | स्वयम्भु डल्लु | १ |
| २१. | गोल ढुङगा | १९ |
| २२. | साङला | ३ |
| २३. | बिङ बिहार | ४ |
| २४. | थानकोटमहादेबस्थान | १ |
| २५. | बालाजु | ९ |
| २६. | काभ्रेस्थली | १९ |
| २७. | कालिकास्थान | ९ |
| २८. | नया पाटी | ५ |
| २९. | बाड भञ्ज्याङ | १ |
| ३०. | धर्मस्थली | १० |
| ३१. | गोठाटार | २१ |
| ३२. | धापासी | ५ |
| ३३. | कालिमाटी | २ |
| ३४. | गागल फेदी | ३७ |
| ३५. | बौद्द | २० |

| | | |
|---|---|---|
| ३६. | डाछी | ६ |
| ३७. | चाबहिल | ७ |
| ३८. | वालुवा सुन्ताखान | १३ |
| ३९. | चोभार भुतखेल | ३ |
| ४०. | ताहाचल | १० |
| ४१. | कि.पु.लायकु | ११ |
| ४२. | पशुपति | १७ |
| ४३. | पचली भद्रकाली | ६ |
| ४४. | थानकोट | १४ |
| ४५. | सितापाईला | २८ |
| ४६. | कोटेश्वर | ९ |
| ४७. | मच्छेगाउ | ५ |
| ४८. | चाल्नाखेल | २ |
| ४९. | बलम्बु चुनखेल | ३ |
| ५०. | खडका भद्रकाली | १० |
| ५१. | बत्तिस पुतली | २२ |
| ५२. | जितपुर फेदी | ५ |
| ५३. | भद्रावास | ७ |
| ५४. | भिमसेनगोला | १० |
| ५५. | भगवानस्थान | ८ |
| ५६. | गोकर्ण | - |
| ५७. | डाडापौवा | ९ थान |
| ५८. | जोरपाटी | १३ |
| ५९. | गोगंबु | ५ |
| ६०. | का.न.प. | २० |
| ६१. | चुनिखेल | ५ |
| ६२. | मनमैजु | १८ |
| ६३. | सौखेल | ३ |
| ६४. | पालिफल | ८ |

भन्ने समेत ब्यहोराको गुठी लगत तथा तहाविल कार्यालयले मालपोत कार्यालयलाई ६४ पंचायतको नाममा जग्गाधनी पूर्जा बनाई दिने भनी लेखेको च.नं. २४२२ मिति २०४२।०१।१८। गतेको पत्र।


**दोश्रो नापीको फिल्डबुक २०४७।०७।११,१२,१३,१३,१४,१५,१६,१८,१९,२०,२१,२५,२६,२७,२८,२९,३०।२०४७।०८।०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७। २०४८।१२।२१, २२( छानबिन प्र. अनुसूची १३९ )।**

- जग्गाधनीको हकमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको।
- मोहीको नाममा मोहीको नाम उल्लेख गरेको।
- गुठीका नाममा कुनै जग्गा उल्लेख नगरेको।
- किसानको व्यहोरामा कुनै कुरा उल्लेख नगरेको।

➢ **दोश्रो नापी अनुसार जग्गाधनी दर्ता स्रेस्ता (भूमिसुधार तथा मालपोत कार्यालयको के.अ.ब्यूरोलाई लेखेको च.नं. ८६४६ मिति २०७६।११।३० को पत्र) श्रेस्ता फाईलिङ रजिष्टर:-** श्रेस्ताको दाहिने शिरमा जग्गाधनीको नाम थर भन्ने स्थानमा "श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गेरको"।

➢ **मन्त्रिपरिषद् सचिवालय सिंहदरवारको मिति २०४७।०२।१४ को पत्र (छानविन प्र. अनुसूची १४०):**सुवर्ण शम्शेर ज.व.रा-ललिता निवास काठमाडौं समेतका ३० जना व्यक्तिहरुका नाउमा मिति २०१८।१२।१९ गतेको सबै वडाहाकिम तथा मेजिष्ट्रेडहरुलाई गृह मन्त्रालयबाट परिपत्र भएकोमा "२०१७ सालपछि प्रजातन्त्रको पुनस्थापनाको लागि भएका संघर्षहरुमा संलग्न भएका कारणबाट बिभिन्न व्यक्तिहरुको हरण भएको सम्पत्तिको बिषयमा गृह मन्त्रालयले गर्दै आएको छानविनको प्रकृयालाई अझै तदारुकताकासाथ गर्ने। साथै, सोही सिलसिलामा रोक्का रहेका बिभिन्न व्यक्तिहरुको सम्पत्ति फुकुवा गर्ने" भन्ने व्यहोराको मन्त्रिपरिषद् सचिवालय सिंहदरवारको मिति २०४७।०२।१४ को पत्र।

➢ **मन्त्रिपरिषद् सचिवालय सिंहदरवारको मिति २०४७।४।०८ को पत्र (छानविन प्र. अनुसूची १४१) :** विभिन्न व्यक्तिहरुको हरण भएको सम्पत्तिको छानविन गर्ने बिषय म.प.नं. २७/२०४७ को मन्त्रिपरिषद बैठकमा पेश हुँदा त्यसमा श्री ५ को सरकार (कार्यसम्पादन) नियमावली, २०४७ को नियम २५ को उप-नियम (२) अनुसार श्री ५ को सरकारले देहायमा लेखिए बमोजिम गर्ने निर्णय गरेकोले सो बमोजिम गर्नु गराउनु हुन सूचना गरेको छ। २०१७ सालपछि प्रजातन्त्रको पुनर्स्थापनाको लागि भएका संघर्षहरुमा संलग्न रहेको कारणबाट विभिन्न व्यक्तिहरुको हरण भएको सम्पत्तिको विषयमा गृह मन्त्रालयले छानबिन गर्ने गरी श्री ५ को सरकार म.प.बाट मिती २०४७।०२।१४ मा निर्णय भैरहेकोमा त्यसरी छानबिनबाट फिर्ता दिनु पर्ने सम्पत्ति देहाय बमोजिम फिर्ता दिने।

क) जफत भएको घर जग्गा तथा अन्य सम्पति मध्ये जग्गाको हकमा प्रचलित कानूनले दिएको हदसम्मको मात्र फिर्ता गर्ने।

जफत भएका घर, जग्गा तथा सम्पत्ति मध्ये श्री ५ सरकार कै अधिनमा रहेका जति जानकारीमा आउना साथ तुरुन्त फिर्ता दिने। श्री ५ को सरकारबाट अन्यत्र स्वामित्व हस्तान्तरण भैसकेका घर, जग्गा तथा सम्पत्तिको हकमा के कस्तो प्रकिया अपनाई के कसरी दिन सकिन्छ तत् सम्वन्धमा पेश गर्ने। फिर्ता दिनुपर्ने यस्ता सम्पतिहरु मध्ये पत्ता लाग्न बाँकिको हकमा फिर्ता दिने कारर्बाहीको क्रमलाई गृहमन्त्रालयले छिटो गर्ने भन्ने व्यहोराको मिति २०४७।०४।०८ गतेको मन्त्रिपरिषद् सचिवालय सिंहदरवारवाट श्री सचिव गृह मन्त्रालयलाई लेखेको मिति २०४७।४।०८ को पत्र ।

➢ **मिति २०४९।०९।२२ गते च.नं. ३९२५ बाट मालपोत बिभागले मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्र (छानबिन प्र. अनुसूची १३८):**

मालपोत कार्यालयले मिति २०४२।०३।१६ मा गुठी लगत तथा तहबिल कार्यालयको च.नं. २४२२ मिति २०४२।०१।१८ को पत्रानुसार श्री ५ को सरकार गुठीको नाममा गएको भनी तोक निर्णय गरेका ३४ कित्ता जग्गाको सम्बन्धमा मालपोत बिभागले मिति २०४९।०९।२२ मा च.नं. ३९२५ बाट मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्रमा उक्त ३४ कित्ता जग्गाहरु राज गुठीको नभै मिति २०१७।०३।३१ को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखिएकोमा नापीले श्रेस्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केही कित्तामा श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिएको हुँदा गुठीको २०४२।०३।२० को निर्णय मिति २०१७।०३।३१को लिखत फिल्डबुक बमोजिम गरी श्री ५ को सरकार गुठी जनिएकोलाई संशोधन गर्ने अधिकार पनि मालपोत ऐन,२०३४ को दफा ७ (३) बमोजिम मालपोत कार्यालयलाई नै भएकोले सोही बमोजिम संशोधन गर्नु र २०१७ साल पछि प्रजातन्त्रको लागि संघर्षमा संलग्न भएको कारणबाट रोक्का तथा जफत भएको सम्पत्ति फिर्ता दिने सम्बन्धमा श्री ५ को सरकार म.प.को मिति २०४७।०२।१४, २०४७।०४।०८,२०४७।०५।०३ र भूमि सुधारव्य. मन्त्रालय हुदै मालपोत बिभागको मिति २०४७।०६।०७ को पत्र बमोजिम त्यस्ता रोक्का तथा जफत भएका जग्गाहरु फिर्ता कति भयो र बाँकि कति छन ? श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता दिन वाँकि जग्गाहरु फिर्ता गरी सो को जानकारी गराई लगत समेत राख्न मालपोत कार्यालयलाई निर्देशन दिने भन्ने व्यहोराको मिति २०४९।०९।२२ गते च.नं. ३९२५ बाट मालपोत बिभागले मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्र।

- **<u>मिति २०४९।०९।२३ मा मालपोत कार्यालय डिल्लीबजारले श्रेस्ता खारेज गर्न खडा गरेको टिप्पणी निर्णय ( छानबिन प्र. अनुसूची १३१):</u>**

  मिति २०४९।९।२३ गते मालपोत कार्यालय डिल्लीबजारले उल्लेखित कित्ता जग्गा ३ दा.खा. दर्ता गरी गुठी संस्थान समेत समरजंग कम्पनी कार्यालय र नापी शाखा समेतलाई जानकारी दिन र सो निर्णय बमोजिम श्रेष्ता पूर्जा तयार गर्ने निर्णय टिप्पणी निर्णय गरी श्री ५ को सरकार गुठी र श्री ५ गुठी को नामको श्रेस्ता खारेज गरी ३६ रोपनी १३ आना १ पैसा मालपोत कार्यालय डिल्लीबजारले सुवर्ण शमशेरको हकवाला सुनीति राणा, शैलजा राणा, रुक्म शमशेर राणा, हेमन शमशेर र हाटक शमशेरको नाममा दर्ता गर्ने निर्णय गरेको भन्ने मिति २०४९।०९।२३ गतेको मालपोत कार्यालयले गरेको टिप्पणी निर्णय।

- **<u>मिति २०५२।०५।३० को गुठी संस्थान संञ्चालक समितिको निर्णय ( छानबिन प्र. अनुसूची १८३) निर्णयहरु :</u>**

**क)** राजगुठीमा भिड्ने तर गुठीको नाम एकिन नभएका जग्गाहरुको हकमा – गुठी जग्गामा प्राप्त भएका जग्गाधनी प्रमाण पूर्जाहरु मध्ये कतिपय पुर्जाहरुमा श्री ५ को सरकार, श्री ३ सरकार कालमोचन गुठी र त्यस्तै अन्य बिभिन्न गुठी एकिन नभएकोले मोहीहरुबाट वाली असुल हुन नसकि बक्यौता रहन गएको र लगत श्रेस्ता अध्यावधिक हुन नसकेकोले लगत ब्यवस्था गरी तदारुकताका साथ बक्यौता कुत समेत असूल गरी लगत अध्यावधिक गर्नका लागि निम्न बमोजिम निर्णय भयो। राजगुठीको लगतमा दर्ता भएका गुठीको र सम्बन्धीत गुठीको नामका हु बहुँ नभिड्ने तर आंशिक नाम भने भिड्ने जस्तो राजगुठीको लगतमा पशुपति महास्नान भनी दर्ता भएका तर नापीका समयमा उक्त लगतमा भिड्ने जग्गा पशुपति गुठी वा महास्नान गुठी भनी नापी भएका, त्यस्तै शेष नारायण गुठी, फर्पिंङ भनी राजगुठीको लगतमा कायम भएकोमा नापीमा फर्पिङ, नारायण गुठी, फर्पिङ शेष गुठी, फर्पिंङ गुठी आदि नाउँ कायम भएको अबस्थामा जग्गाको फिल्डबुक र मोहीसँग भएका

प्रमाण समेत हेरी एकिन गरी त्यस्तो सम्बन्धीत गुठीको लगतमा दर्ता गरी मोहीहरुबाट बक्यौता कुत समेत बुझि लगत अध्यावधिक गर्ने।

**ख)** नापीका समयमा मोहीलाई गुठीको नाम एकिन हुन नसकि अज्ञानताबस श्री ५ गुठी, श्री ३ गुठी, श्री ५ सरकार गुठी, श्री ३ सरकार गुठी, कालमोचन गुठी जस्ता कुतवाली असुल उपर गर्ने कार्यालयका नाममा नापी भएका र सोही आधारमा श्रेस्ता कायम भएकोमा, त्यस्ता जग्गाहरु फिल्डबुकमा लेखिएको व्यहोरा मोहीसँग भएको प्रमाणबाट गुठी एकिन गरी बक्यौता समेत असुल गर्ने, मोहीसँग भएको प्रमाणबाट समेत उक्त गुठी कुन हो ? भनी एकिन नभएमा माथि उल्लेखित नाम लेखि नापी भएका जग्गाहरुलाई "गुठी संस्थानको नाममा जग्गाको लगत कायम गरी बक्यौता समेत असुल उपर गर्ने।गुठी उल्लेख भई ज.ध. पूर्जा प्राप्त भएका तर पूर्जामा किटान भई गुठी नखुलेको जग्गाहरुको हकमा निजि गुठी भनी दावी बिरोध भएमा अदालतबाट हक कायम गराई ल्याएको अबस्थामा अदालतको फैसला बमोजिम गर्ने। निजी गुठी भनी दावी बिरोध नपरेमा गुठी संस्थानको नाममा लगत कायम गरी कैफियतमा "गुठीको नाम एकिन गर्न बाँकी" भन्ने व्यहोरा जनाई पूर्जामा उल्लेखित मोहीहरुबाट बक्यौता असुल उपर गरी लगत अध्यावधिक गर्ने।

**ग)** गुठीको नाममा दर्ता भै पुर्जा प्राप्त भएका र सो बिषयमा अदालतमा मुद्दा परी फैसला, मिलापत्र वा डिसमिस भएका हकमा फैसला -मिलापत्र भए बमोजिम गर्ने, फैसला वा मिलापत्रमा राजगुठीकै ठहर्ने तर गुठीको लगतमा दर्ता नभएको अबस्थामा गुठी संस्थानको नाम लगत कायम गरी वक्यौता समेत असुल उपर गरी लगत अध्यावधिक गर्ने, साथै निजी गुठी भनी दावी परकोमा राजगुठी नै भनी फैसला भएको वा पक्षले तारिख गुजारी डिसमिस भएको अबस्थामा यस्तो गुठीको जग्गा गुठी संस्थानको नाममा लगत कायम गरी सम्बन्धीत मोहीहरुवाट बक्यौता असुल उपर गरी लगत अध्यावधिक गर्ने। भन्ने समेत ब्यहोराको मिति २०५२।०५।३० मा संचालक समितिका अध्यक्ष राम बहादुर रावलको अध्यक्षतामा बसेको बैठकको निर्णय।

➢ **वारेस राम कुमार सुवेदीको गुठी तहसिल शाखा कार्यालयमा ५ कित्ता साविक २३ क्ष (१५,२५,२८,४२,६३) को सम्बन्धमा (३ वटा) दिएको निवेदन (सक्कल कागजात):**

निवेदक तिर्थमाया महर्जन ( पति- आशनारायण महर्जन ) साविक काठमाडौं नगर २३ क्ष को कि.नं. १५,६३, तीर्थमाया महर्जन (पति- नाती महर्जन) साविक काठमाडौं नगर २३ क्ष को कि.नं. २५ र तुईई भाई भन्ने पंच नारायण महर्जन साविक काठमाडौं नगर २३ क्ष को कि.नं.२८,४२ कित्ता जग्गाहरुको लागि ३ जना निवेदकहरुका वारेस राम कुमार सुवेदीले मिति २०५८।०१।१४ गते काठमाडौं गुठी तहसिल कार्यालय कालमोचनमा "जग्गा दर्ता गरी जग्गाधनी प्रमाण पुर्जा पाउँ" भनी दिएको निवेदन।

➢ **वारेस राम कुमार सुवेदीको गुठी तहसिल शाखा कार्यालयमा १६ कित्ता साविक २३ ह र क्ष (४८,७६,६८, ६९,४०, ७८,१२,२५,१५,२४,२२,७३,३५,३७,३१,७७) को सम्बन्धमा (१० वटा) दिएको निवेदन (सक्कल कागजात ):**

निवेदक देव नारायण महर्जन, (साविक काठमाडौं नगर २३ क्ष को कि.नं. ४८,७६), मचानानी महर्जन (साविक काठमाडौं नगर २३ क्ष को कि.नं. ६८,६९), रामकृष्ण महर्जन (साविक काठमाडौं नगर २३ क्ष को कि.नं. ४०),लक्ष्मी नारायण महर्जन (साविक काठमाडौं नगर २३क्ष को कि.नं. ७८), कान्छा महर्जन (साविक काठमाडौं नगर २३ ह को कि.नं. १२), ग्वाराभाई महर्जन (साविक काठमाडौं नगर २३ ह को कि.नं. २५), रेना गुरुङ (साविक काठमाडौं नगर २३ ह को कि.नं. १५,२४), श्रीमती मोहन महर्जन (साविक काठमाडौं नगर २३

ह को कि.नं. २२), आशामाया महर्जन (साविक काठमाडौं नगर २३ क्ष को कि.नं. ७३), देव नारायण महर्जन (साविक काठमाडौं नगर २३ ह को कि.नं. ३५,३७), जग्गाहरुको लागि १० जना निवेदकहरुका वारेस राम कुमार सुवेदीले मिति २०५९।०७।०५ गते काठमाडौं गुठी संस्थान केन्द्रीय कार्यालय त्रिपुरेश्वरमा " गुठी जग्गा हाल साविक नामसारी गरी दर्ता गरी पाउँ" भनी दिएको निवेदन।

➢ **मिति २०६०।०८।११ गते गुठी संस्थान केन्द्रीय कार्यालयमा उपस्थित भई रुक्म शम्शेर राणा लगायतका व्यक्तिले दिएको मञ्जुरीनामा ( छानबिन प्र. अनुसूची १७४) :**

का.जि. का.म.न.पा. वडा नं. २३ क्ष कि.नं. १४,२५,२८,४२,६३ समेतका कित्ता जग्गा हामी मोहीहरुका नाममा गुठीमा दर्ता गरीपाउँ भन्ने व्यहोराको तुईई भाई भन्ने पंच नारायण महर्जन र तीर्थमाया महर्जनको निवेदन परि कारवाही गर्ने क्रममा केही कुरा बुझ्नु पर्ने भई ७ दिनको म्याद जारी हुँदा उक्त म्याद बुझि उपस्थित भई गु.सं.केन्द्रीय कार्यालयबाट उक्त कित्ता जग्गाको सम्बन्धमा बिभिन्न कुरा सोधनी भएकोमा हाम्रा पिता स्व. श्री सुवर्ण शम्शेर ज.व.रा. देशमा प्रजातन्त्र वहालीको लागि राजनीतिमा लाग्नु भएका कारण तत्कालीन शासकले हाम्रो श्रीसम्पत्ति सर्वस्वहरण गरेकोले हामीबाट हरण भएको सम्पत्ति अञ्चालधिश कार्यालयलाई जिम्मा दिएको कारणले श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाशिश कार्यालयको नाममा नापीको समयमा मोहीहरुले लेखाएका हुन यस्तो लेखाई गुठी जग्गामा मात्र नभई यसै सँगका हाम्रा रैकर जग्गामा पनि सोही प्रकारको लेखाई फिल्डबुकमा लेखिएको थियो। देशमा प्रजातन्त्रको पुनरबहाली पश्चात २०४७ सालमा हाम्रो जग्गा फुकुवा भएपछी रैकर तर्फका सम्पूर्ण जग्गाहरु हामीले आफ्नो नाममा दर्ता गरायौ। गुठी जग्गाको सम्बन्धमा गुठी संस्थान ऐनले दर्तावाला मोहीको हक समाप्त गरी जोत्ने जोताहाको मोहीको नाममा जग्गा दर्ता गरीदिने अबस्था गरेकोले साविक खला नं.१० को श्री ५ को सरकार टिकिन्छा गुठी जग्गा समेत हामीहरुले गुठी जग्गा दर्ता नगराएका हौं। हाम्रो साविकमा जग्गा जमिनको कुत समेत असूल गर्न ललिता निवास गोश्वार तहसिल अड्डा नै राखेको थियो। निवेदक मोहीले पेश गरेको भरपाई हाम्रो तहसिल अड्डाको हो। माथि उल्लेखित कारणबाट मागदावीका जग्गा श्री ५ को सरकार समरजंग कम्पनी वा अञ्चालधिस कार्यालयको नभई राजगुठी अन्तरगत हामी साबिक देखि दर्तावाला मोही भई जोताहा मार्फत जोत भोग हुदै आएका, गुठी जग्गा हुदै गुठी संस्थानको बिद्यमान ऐन, बिनियम अनुसार निवेदक जोताहा मोहीका नाममा गुठी जग्गा दर्ता गरी ज.ध.प्र. पु. दिएमा समेत हाम्रो मञ्जुरी छ, यस कुरालाई लिएर पछी खिचलो गर्ने छैनौ, गरेमा यसै कागजबाट बदर गरीदिनु भन्ने व्यहोराको सुनीति राणा, , शैजला राणा र रुक्म शम्शेर राणाले गुठी संस्थान केन्द्रीय कार्यालयमा गरेको मञ्जुरीनामा कागज।

➢ **रुक्म शम्शेर ज.व.रा.को कागज (छानविन प्र. अनुसूची ९७):**

का.जि. का.म.न.पा. वडा नं. २३ क्ष कि.नं. १४,२५,२८,४२,६३ समेतका कित्ता जग्गाका सम्बन्धमा ललिता निवास क्याम्प भित्र कुनै गुठी रहेको प्रमाण छैन, राम कुमार सुवेदी सहित गुठीको जग्गा हो, हामी गुठीयार हौ भन्दै ४/५ मानिसहरु मेरो घरमै आएर कागज गरीदिनु पर्यो भनेको र गुठीयार भन्ने मानिसहरु आएर तपाईहरुले गुठीको जग्गा हो भनी दियो भने गुठी हुन्छ भनेकाले मञ्जुरीनामा कागज गरी हस्ताक्षर गरेका हौं। त्यस्तै, उक्त मञ्जुरीनामा कागज म समेतका व्यक्तिहरु गुठी संस्थान केन्द्रीय कार्यालयमा उपस्थित भएका होईनौं, उक्त कागज वत्तिसपुतली स्थित भाउजू शैलजा राणाको घरमा गरिएको हो भन्ने व्यहोराको मिति २०७६।०९।२३ गते छानबिन समिति समक्ष रुक्म शम्शेर ज.व.रा.ले गरीदिएको कागज।

➢ **<u>मिति २०४९/०५/०२ गते च.नं. ४२ (प.स.०४९/०५०) श्री समरजंग कम्पनी कार्यालय भोटाहिटी काठमाडौंले मालपोत कार्यालय काठमाडौंलाई लेखेको पत्र ( छानबिन प्र. अनुसूची १२७)</u>:**

उपरोक्त सम्बन्धमा प.स. २०४९/०५०/१०२४ च.नं.५६३ र प.स. २०४९/०५०/१०२५ च.नं. ५६२ मिति २०४९/४/२८ को पत्रबाट प्राप्त भै ब्यहोरा अनगत भयो । तत् सम्बन्धमा साबिक अञ्चलाधिशको कार्यालय बागमती कार्यालयको मिति ०४४/१०/२२ को जानकारी अनुसार ललिता निवास क्याम्प भित्रको जग्गा २९९-९-३-० मध्ये जम्मा रोपनी १३५-७-३-० जग्गा मात्र यस कार्यालयको रेखदेखमा रहेको र सो जग्गा कमाउने मोही जवान ४७ बाट वाली असुली गर्ने कार्य गरी नै आएको छ साथै यस कार्यालयलाई साबिक अञ्चलाधिशको कार्यालयबाट मिति २०२३/०६/२३ मा प्राप्त जानकारी अनुसार मोही सँग भए गरेको सम्झौता अनुसार हाल सम्म के कति कारणले मोहीहरुको नाम फिल्डबुक तथा लगतबाट कट्टा नभएको हो सो लगत कट्टा गरी पुरै जग्गा श्री ५ को सरकारको नाममा कायम गरीनु पर्ने र यस कार्यालयको रेखदेखमा रहेको बाहेक जग्गा कुन कुन इलाकालाई के कति दिईएको छ र उक्त जग्गा कसरी प्राप्त भएको हो सो को अभिलेख यस कार्यालयमा नरहेको ब्यहोरा अनुरोध भन्ने पत्र ।

➢ **<u>२०५८।०१।१४। गते राजगुठीको जग्गाको लालपूर्जा भन्ने गुठीमा दिएको निवेदन (सक्कल कागजातको मिसिल)</u>** मिति २०५८।०१।१४ गते श्री काठमाडौं गुठी तहसिल कार्यालय कालमोचन काठमाडौंमा निम्न ब्यक्तिहरुको वारेस राम कुमार सुवेदीले जग्गा दर्ता ना.सा.गरी ज.ध. प्र.पुर्जा पाउ भनी निवेदन दिएको ।

**<u>निम्नः</u>**

| सि.नं | जिल्ला | क्षेत्र | वडा नं. | कि.नं. | क्षेत्रफल | निवेदक /वारेस |
|---|---|---|---|---|---|---|
| १ | काठमाडौं | नगर | २३क्ष | १५ | ८-५-०-० | तीर्थमाया महर्जन (पति- आशानारायण महर्जन) को वा. राम कुमार सुवेदी |
| २ | काठमाडौं | नगर | २३क्ष | ६३ | ०-४-०-० | ऐ.ऐ. |
| ३ | काठमाडौं | नगर | २३क्ष | २५ | ०-१२-०-० | तीर्थमाया महर्जन (पति- नाति महर्जन ) को वा. राम कुमार सुवेदी |
| ४ | काठमाडौं | नगर | २३क्ष | २८ | ३-१५-० | पंच नारायण महर्जन को वा. राम कुमार सुवेदी |
| ५ | काठमाडौं | नगर | २३क्ष | ४२ | ०-५-०-० | ऐ.ऐ. |

➢ **<u>मिति २०५८।०५।०६ मा तयार भएको ५ कित्ता जग्गा सम्बन्धि सर्जमिन मुचुल्का(सक्कल कागजात संलग्न फायल</u> ):**

श्री ५ सरकार गुठी अन्तर्गत दर्ता भएका नगर वडा नं. २३क्ष कि.नं. २८ (३-१५-०-०), कि.नं. ४२ (०-५-०-०), कि.नं. १५(८-५-०-०), कि.नं. ६३ (०-४-०-० ), कि.नं. २५ (०-१२-०-०) का जग्गाहरु श्री ५ सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलबाट श्री ५ सरकार मात्र लेखिएको गुठी जग्गा हो । गुठीमा दर्ता हुने भै उक्त जग्गा गुठी कायम हुनु पर्ने हो । उल्लेखित कि.नं.का जग्गाहरु निवेदकहरु बाट नै भोगचलन गरी रहेको जग्गा हुन निवेदकको जग्गा दर्ता गरी ज.ध. प्रमाणपूर्जा पाउँ भन्ने माग अनुसार गरी दिएमा फरक पर्ने छैन भन्ने समेत व्यहोराको मिति २०५८।०५।०६ गतेको सर्जमिन मुचुल्का ।

➢ **<u>मिति २०५९।०५।१८ गते सदर गरी गुठी संस्थान शाखा कार्यालयले (५ कित्ता) जग्गा सम्बन्धमा तयार गरी केन्द्रीय कार्यालयमा पठाएको टिप्पणी श्रृङखला (गुठी केन्द्रीय कार्यालय तथा तहशिल कार्यालयको टिप्पणी फाईल</u> ):**

**क)** (शाखा ): उक्त ५ कित्ता जग्गाको सम्बन्धमा मिति २०५८।०१।१४ मा कार्यालय प्रमुखको तोक आदेश भई व्यहोरा - यी जग्गाहरू अन्चलादेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई आएको छु भनी उल्लेख भएको हुँदा उक्त जग्गा निवेदकको माग अनुसार ना. सा. गरी पूर्जा उपलब्ध गराईदिने निर्देशन हुन गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गर्ने मिति २०५८।०५।२५ बाट टिप्पणी उठान सुरू भई २०५९।०५।१८ गते सदर गरी च.नं. ३९२ मिति २०५९।०५।१९ को पत्रद्वारा गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको।

**ख)** (केन्द्र): सोही टिप्पणीका बारेमा माग भएको कित्ता नं. जग्गाका सम्बन्धमा अन्य निकायबाट कुनै कारबाही भएको छ छैन ? यस्तै प्रकृतिका अन्य जग्गाका सम्बन्धमा कुनै कारबाही भएको छ कि ? भए के-कति कारबाही भएको छ ? खुलाई पेश गर्न शाखा कार्यालयलाई निर्देशन दिने भनी गुठी संस्थान केन्द्रीय कार्यालयबाट पुन: निर्देशन सहित तहसिल शाखा कार्यालयमा नै टिप्पणी सहित मिति २०५९।०६।२३ मा मिसिल फिर्ता पठाएको।

**ग)** (शाखा) : सोही ५ कित्ता जग्गाको बारेमा यस्तै प्रकृतिको जग्गाको सम्बन्धमा मालपोत कार्यालयबाट कुनै निर्णय भएको भएमा सो निर्णय फाईल समेत पठाई दिन मालपोत कार्यालयमा माग भएकोमा उल्लेखित मिसिल फेला नपरेको भनी मालपोत कार्यालयबाट लेखि आएको हुँदा उचित निर्देशनको लागि गुठी संस्थान केन्द्रीय कार्यालयमा नै अनुरोध गर्ने भनी मिति २०५९।०८।२६ मा टिप्पणी सदर गरी गुठी संस्थान केन्द्रीय कार्यालयमा पुन: टिप्पणी फायल पेश गरेको।

**घ)** (केन्द्र): सोही ५ कित्ता जग्गाको सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयले पुन: शाखा कार्यालयलाई एकिन राय ठहर गरी पेश गर्ने भनी मिति २०६०। ०१।१६ मा टिप्पणी सहित फिर्ता पठाएको।

**ङ)** शाखा: सोही ५ कित्ता जग्गाको सम्बन्धमा जग्गा दर्ता सम्बन्धी कारवाही अगाडी बढाउन द्विविधा हुन गएकोले सो सम्बन्धमा आबश्यक निर्देशनको लागि गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरेको भनी मिति २०६०।६।८ मा टिप्पणी सदर गरेको।

**च)** (केन्द्र): उक्त ५ कित्ता जग्गाको सम्बन्धमा सम्बन्धित ब्यक्तिहरुसँग बुझ्दा उपयुक्त नै हुने हो, निजहरुलाई बुझी प्रतिकृया माग गर्ने र फिल्ड बुकको जग्गाधनी ब्यहोरामा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देखिएकोले समरजंग कम्पनीको प्रतिक्रिया समेत माग गरी पेश गर्ने, माग भएका कित्ता नं. जग्गाहरुको मोठ श्रेस्ताको प्रतिलिपी माग गर्ने भनी मिति २०६०।०८।०४ मा गुठी संस्थान केन्द्रीय कार्यालयले टिप्पणी निर्णय गरेको।

**छ)** (केन्द्र): सवुद प्रमाणको आधारमा कारवाहिमा आएका कित्ता जग्गाहरू गुठीको होईन भनी अन्यथा हुने गरी कार्वाही गर्न सक्ने अवस्था नदेखिएको, मोहीको सम्बन्धमा सम्मानित अदालतको फैसला पेश भएको देखिएको, गुठीका जग्गा संरक्षण गर्ने सम्बन्धमा अ.दु.अ.आ को मिति २०६०/१२/३ को पत्रमा गुठीको धर्मलोप हुन नपाउने व्यवस्था मिलाउन तथा गुठीको जग्गाहरुको अद्यावधिक श्रेस्ता लगत राखी ब्यक्तिले आफ्नो नाउमा दर्ता गर्न नसक्ने र गुठीले आफ्नो जग्गाको सुरक्षा गर्ने व्यवस्था मिलाउन निर्देशन भएको, शाखा प्रमुख एवम् मुख्य कानून अधिकृतबाट समेत गुठीकै जग्गा भएको र लगत यकिन हुन आएको अवस्थामा

२०५२।०५।३० को परिपत्र बमोजिम लगत अद्यावधिक गर्नु पर्ने भन्ने राय प्राप्त भएकोले मिति २०५२।०५।३०को संचालक समितिको निर्णय बमोजिम बाँकी वक्यौता कुत असुल गरी लगत अध्यावधिक गर्न कार्यालयलाई निर्देशन दिने भनी मिति २०६०।१२।२७ मा केन्द्रीय कार्यालयबाट टिप्पणी निर्णय भएको।(लगत यकिन गरेको नदेखिने, २०५२।१२।२३ को पत्रबाट समेत ललिता निवास क्याम्प भित्रको जग्गासँग गुठीको जग्गा नभिड्ने देखिएको)।

**ज)** (शाखा) : गुठी संस्थान शाका कार्यालयबाट उक्त ५ कित्ता जग्गाको सम्बन्धमा श्री ५ को सरकार समरजंग कम्पनीको नामको मोठ श्रेस्ता कट्टा गरी गुठी कायम गर्ने गुठी संस्थान केन्द्रीय कार्यालयको आदेश अनुसारको कारवाही गर्न कार्यालयलाई दुविधा पर्न गएको हुँदा उल्लेखित कारवाही फायल सम्बन्धमा आवश्यक निर्देशन भई आउन कारवाही फायल मिति २०६१।०२।१८ टिप्पणी सदर गरी गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरेको,

**कित्ता जग्गाको शुरु:**

➢ **२०५९।०७।०५। गते गुठी संस्थान केन्द्रीय कार्यालयमा जग्गा दर्ता ना.सा.गरी ज.ध. प्र.पुर्जा पाउ भनी दिएको निवेदन ( सक्कल कागजातको मिसिल):**

मिति २०५९।०७।०५ गते गुठी संस्थान केन्द्रीय कार्यालय काठमाडौंमा निम्न ब्यक्तिहरुको वारेस राम कुमार सुवेदीले जग्गा दर्ता ना.सा.गरी ज.ध. प्र.पुर्जा पाउ भनी निवेदन दिएको।

**निम्न:**

| सि.न | जिल्ला | क्षेत्र | वडा नं. | कि.नं. | क्षेत्रफल | निवेदक /वारेस |
|---|---|---|---|---|---|---|
| १. | काठमाडौं | नगर | २३क्ष | ४८ | ०-१४-० | देव नारायण महर्जनको वा. राम कुमार सुवेदी |
| २. | काठमाडौं | नगर | २३क्ष | ७६ | २-१२-० | ऐ.ऐ. |
| ३. | काठमाडौं | नगर | २३क्ष | ६९ | ०-६-२-० | मचानानी महर्जनको वा. राम कुमार सुवेदी |
| ४. | काठमाडौं | नगर | २३क्ष | ६८ | १-८-० | ऐ.ऐ. |
| ५. | काठमाडौं | नगर | २३ ह | ४० | ०-१३-२-० | राम कृष्ण महर्जनको वा. राम कुमार सुवेदी |
| ६. | काठमाडौं | नगर | २३क्ष | ७८ | २-९-०-० | लक्ष्मीनारायणमहर्जनको वा.राम कुमार सुवेदी |
| ७. | काठमाडौं | नगर | २३ ह | १२ | ०-५-१ | कान्छा महर्जनको वा. राम कुमार सुवेदी |
| ८. | काठमाडौं | नगर | २३ ह | २५ | १-३-२-० | ग्वारा भाई महर्जनको वा. राम कुमार सुवेदी |
| ९. | काठमाडौं | नगर | २३ ह | १५ | २-३-० | रेना गुरुङको वा. राम कुमार सुवेदी |
| १०. | काठमाडौं | नगर | २३ ह | २४ | ०-९-० | ऐ.ऐ. |
| ११. | काठमाडौं | नगर | २३ ह | २२ | १-८-० | मोहन महर्जनको वा.राम कुमार सुवेदी |
| १२. | काठमाडौं | नगर | २३क्ष | ७३ | ०-३-०-० | आशामाया महर्जनको वा. राम कुमार सुवेदी |
| १३. | काठमाडौं | नगर | २३क्ष | ७७ | | निवेदन प्राप्त हुन वाँकि |
| १४. | काठमाडौं | नगर | २३ ह | ३१ | | निवेदन प्राप्त हुन वाँकि |

➢ **मिति २०६०।०२।२० मा तयार भएको १४ कित्ता जग्गा सम्बन्धि सर्जमिन मुचुल्का (सक्कल कागजात संलग्न फायल ):**

काठमाडौं जिल्ला नगर वडा नं.२३क्ष कि.नं. १२ (०-५-०-०),२३ ह कि.नं. २५ (१-३-२-०),२३ ह कि.नं.१५(२-३-०-०), २३ ह कि.नं. २४ (०-९-०-०),२३ क्ष कि.नं. ७८ (२-९-०-०) ,२३ क्ष कि.नं. ४८ (०-१४-०-०-) ,कि.नं. २३ क्ष ७६ (२-१२-१-०) ,२३ क्ष कि.नं. ६८ (१-८-०-०-), २३ क्ष कि.नं. ६९ (०-६-२-०),२३ ह कि.नं. ४० (०-१३-२-०),२३ क्ष कि.नं. ७३ (०-३-०-०),२३ ह कि.नं. २२ (१-८-०-०) कित्ता जग्गाहरु पशुपतिनाथ टिकिन्छा गुठीको लगतमा खला नं.१० सँग भिड्ने जग्गा हो, फिल्डबुकको जोताहामा निवेदकहरुका पुर्खाको नाम उल्लेख भएको भई उक्त जग्गा निवेदकहरुले नै जोतभोग गरी आएकोले निजहरुको माग बमोजिम दर्ता हा.सा. गरी ज.ध.प्र.पुर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन भन्ने समेत व्यहोराको मिति २०६०।०२।२० सर्जमिन मुचुल्का।

- **२०६०।०५।१९ गते का.गु.त.का.मा जग्गा दर्ता ना.सा. गरी ज.ध.प्र. पुर्जा पाउँ भनी दिएको निवेदन (१ नं. मिसिल):**
  मिति २०६०।०५।१९ गते काठमाडौं गुठी तहसिल कार्यालय कालमोचन काठमाडौंमा निम्न ब्यक्तिहरुको वारेस राम कुमार सुवेदीले जग्गा दर्ता ना.सा.गरी ज.ध. प्र.पुर्जा पाउ भनी निवेदन दिएको।

| सि.नं | जिल्ला | क्षेत्र | वडा नं. | कि.नं. | क्षेत्रफल | निवेदक /वारेस |
|---|---|---|---|---|---|---|
| १ | काठमाडौं | नगर | २३ ह | ३५ | ०-१४-३-० | देव नारायण महर्जनको वा. राम कुमार सुवेदी |
| २ | काठमाडौं | नगर | २३ ह | ३७ | १-१५-०-० | ऐ.ऐ. |

- **मिति नै नभएको साविक नगर २३ ह को कि.नं. ३५,३७ को सर्जमिन मुचुल्का (ईन्डेक्स फायल):-** काठमाडौं नगर वडा नं. २३ ह ३५ (०-१४-३-०) र कि.नं. ३७ (१-१५-०-० ) कित्ता जग्गाहरु पशुपतिनाथ टिकिन्छा गुठीको जग्गा हो र साविक देखि हाल सम्म निवेदक देव नारायण महर्जनले जोतभोग गरी आएका छन, निवेदकको माग बमोजिम दर्ता हा.सा. गरी ज.ध.प्र.पुर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन भन्ने समेत व्यहोराको मिति उल्लेख नभएको सर्जमिन मुचुल्का।
- **२१ कित्ता जग्गा सम्बन्धमा तयार गरिएको टिप्पणी श्रृङखला (गुठी केन्द्रीय कार्यालय तथा तहशिल कार्यालयको टिप्पणी फाईल):-**(केन्द्र) मिति २०५८।०१।१४ र मिति २०६०।०५।१९ मा गुठी संस्थान शाखा कार्यालयमा दिएको निवेदन र मिति २०५९।०७।०५ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा दिएको निवेदनका सम्बन्धमा मिति २०५९।७।०८ गते च.नं. ७९८ को पत्रद्वारा गुठी संस्थान केन्द्रीय कार्यालयबाट जग्गा दर्ता सम्बन्धी कार्यविधी पुरा गरी पेश गर्न निर्देशन दिएको।
  (शाखा) : मिति २०६०।७।१९ मा तहसिल शाखा कार्यालयबाट विभिन्न १२ जना मोहीहरू (सुनिती राणा समेत) को १४ कित्ता (२३ क्ष का ४८,६८,६९, ७३,७६, ७८ र २३ ह का १२,१५,२२, २४,२५, २६, ४० (४० डबल)) जग्गाहरूको गुठी संस्थान केन्द्रीय कार्यालयवाट नै आवश्यक निर्देशन भइ आउनको लागि कारबाही फाइल गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरेको ।
  (केन्द्र) : गुठी संस्थान केन्द्रीय कार्यालयले च.नं १६१७ मिति २०६०।०७।२५ को पत्रद्वारा गुठी संस्थान तहशिल शाखा कार्यालयलाई "च नं ७९८ मिति २०५९।०७।०८ (पत्रमा १८ लेखिएको) को पत्रमा जग्गा दर्ता

सम्बन्धमा कार्यविधी पुरा गरी पेश गर्न आदेश भएकोमा आदेशानुसार गरी पठाएको नदेखिएकोले सोही अनुसार गरी पठाउनु" भनी फाइल पुन: गुठी संस्थान शाखा कार्यालयमा फिर्ता पठाएको,

**क)** (शाखा) : गुठी संस्थान केन्द्रीय कार्यालयबाट उक्त १४ कित्ता जग्गा सम्बन्धी फाइल गुठी तहसिल कार्यालयमा फिर्ता भइसके पश्चात गुठी तहसिल कार्यालयको च.नं.९७५ मिति २०६०/०८/०२ गतेको पत्रद्वारा गोरखापत्र संस्थानलाई सूचना प्रकाशित गरीदिन अनुरोध गरे बमोजिम जग्गाको हकदावी सम्बन्धी ३५ दिने सूचना गोरखापत्रमा प्रकाशित भएको। (मिसिल नं.२ मा फाईलिङ),

**ख)** (शाखा) श्री ५ को सरकारको सहमति लिई मात्र आवश्यक कारबाही हुनु पर्ने हुँदा सो कि.नं.का जग्गा सम्बन्धमा श्री ५ को सरकारबाट समेत निर्णय भई आएपछि आवश्यक कारबाही हुनु पर्ने देखिएको भनी मिति २०६१।०५।०७ मा गुठी संस्थान शाखा कार्यालयले सो सम्बन्धी कारबाही फायल गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरेको, (२१ कित्ता जग्गा सम्बन्धमा फाईल पेश गरेको देखिएको, (केन्द्र ): उल्लेखित जग्गा हा.सा. भएको छ छैन् , छैन भने लगत बमोजिम कायम हुनु पर्ने हो होईन अन्य प्रमाण भए सम्बन्धित मोहीसँग समेत बुझी यथार्थ व्यहोरा तहसिल शाखाबाट खोली आएपछी निर्णयमा पुग्नु पर्ने भएकोले सो बमोजिम विवरण र राय माग गर्ने भनी गुठी संस्थान केन्द्रीय कार्यालयबाट मिति २०६१।६।२० मा पुन: गुठी संस्थान शाखा कार्यालय मै कारवाही फाइल फिर्ता पठाएको,

**ग)** (शाखा): कारबाहीमा आएका उक्त २१ कित्ता जग्गाहरूको फायल संलग्न प्रमाणको आधारमा श्री ५ को सरकारको नाममा रहेको लगत कट्टा गरी गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकारबाट निर्णय भई आउनु पर्ने देखिंदा तत् सम्बन्धी कारबाही फायल संलग्न गरी पेश गरेको भनी मिति २०६१।०६।२६ मा टिप्पणी सदर गरी गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरेको,

**घ)** (केन्द्र) : गुठी संस्थान केन्द्रीय कार्यालयबाट उक्त २१ कित्ता जग्गा सम्बन्धमा श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको लगत अनुसार पशुपती टिकिन्छा गुठीको नाममा हाल साविक भिडाई दर्ता गर्ने स्विकृतीका लागी श्री ५ को सरकारमा पेश गर्नको लागी भूमि सुधार तथा व्यवस्था मन्त्रालयमा पेश गरेको भनी मिति २०६१।०८।०८ मा कार्यालय प्रमुख दिलिप कुमार भट्टले टिप्पणी निर्णय गरी मिति २०६९।०८।०९ गते भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा पठाएको,

**ङ)** (केन्द्र) : विभिन्न १३ जना निवेदक (साविक मोही १४ जना मोही) को २१ कित्ता जग्गा दर्ता नामसारी गरी ज. ध. प्र. पूर्जा पाउँ भन्ने व्यहोराको निवेदन प्राप्त भएकोले मिति २०६१।०८।०८ मा निर्णय आदेश भए बमोजिम मिति २०६१/०८/०९ मा गुठी संस्थान केन्द्रीय कार्यालयले भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा उक्त सक्कल टिप्पणी सहितको फायल थान १८ राखी पत्राचार गरेको,

**च)** (मन्त्रालय) : मिति २०६१।०८।०९ च. नं. ११८१ प.सं. १(२२२)२०६१।०६२ को पत्र साथ गुठी संस्थान केन्द्रीय कार्यालयबाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा प्राप्त भएको फायल सम्बन्धमा केही कुराहरू अस्पष्ट एवं अपुग भएको भनी १९ वटा प्रश्न सोधी मन्त्रालयको च.नं. ९४० मिति २०६२।६।३ को पत्र द्वारा १८ थान फाईल गुठी संस्थान केन्द्रीय कार्यालयमा फिर्ता पठाएको,

**छ)** (केन्द्र) : मिति २०६२।०६।११ को च.नं. ८१७ क.शा. १०५-२०६२/०६३ को पत्रबाट केन्द्रीय कार्यालयले उक्त मिसिल र प्रश्न सम्बन्धमा प्रष्ट पारी खुलाई पठाउन भनी गुठी संस्थान तहसिल शाखा कार्यालयलाई निर्देशन दिएको।

**ज)** (शाखा): च.नं. १०२८ मिति २०६२।०६।२० गते गुठी संस्थान शाखा कार्यालयले उक्त मिसिल र प्रश्न सम्बन्धमा १५ वटा जवाफ प्रष्ट पारी खुलाई गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको । ( छानबिन प्र. अनुसूची १८२ )

**झ)** (केन्द्र): मिति २०६२।०७।११ च.नं. जशा.७/२०६२/०६३ को पत्रद्वारा गुठी संस्थान केन्द्रीय कार्यालयले भूमिसुधार तथा ब्यवस्था मन्त्रालयलाई सोधनी भएका १९ मध्ये १५ वटा प्रश्नहरूको दफावार रूपमै जवाफ तयार गरी आवश्यक निकाशाको लागि सक्कल टिप्पणी सहितका फाईल थान १८ समेत भूमिसुधार तथा मन्त्रालयमा पठाएको ।

**ञ)** (मन्त्रालय): गुठी संस्थान केन्द्रीय कार्यालयको फाइल प्राप्त भएपछि भूमिसुधार तथा ब्यवस्था मन्त्रालयले मिति २०६२।०९।२१ मा भएको टिप्पणी निर्णय अनुसार ३ बटा प्रश्न सोधी उल्लेखित जग्गाहरू गुठी कायम हुनु पर्ने औचित्य, आधार र एकिन राय साथ प्राप्त भएपछि कारबाही टुंगो लगाउने भनी मन्त्रालयको च.नं. १९९८ मिति २०६२।०९।२४ मा फायल पुन: गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको ।

**ट)** (केन्द्र): भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट प्राप्त भएको पत्रको सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयमा टिप्पणी उठी सबै कुरा मन्त्रालयले दिएको निर्देशन अनुसार बुझी पठाउन मिसिल गुठी संस्थान शाखा कार्यालयमा पठाउनु भनी गुठी संस्थान केन्द्रीय कार्यालयवाट मिति ०६२।११।२१ मा टिप्पणी आदेश भई शाखा कार्यालयमा पठाएको ।

**ठ)** (शाखा): मिति २०६२।१२।०३ गते च.नं. २६९४ बाट गुठी संस्थान शाखा कार्यालय कालमोचनले ३ वटा प्रश्नको जवाफ खुलाई गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको ।

**ड)** (केन्द्र): मिति २०६२।०९।२४ गते च.नं. १९९८ बाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयले ३ वटा प्रश्न सोधी गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएकोमा उक्त प्रश्नहरूको जवाफ मिति २०६३।०६।०६ गते ज.शा. ७/९७/०६३/६४ को पत्रबाट गुठी संस्थान केन्द्रीय कार्यालयवाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा पठाएको ।

**ढ)** (मन्त्रालय): भूमिसुधार तथा ब्यवस्था मन्त्रालयको मिति २०६३।७।१९ गते च.नं. १९९८ को पत्र अनुसारको जवाफ गुठी संस्थान केन्द्रीय कार्यालयको मिति २०६३।०६।०६ गते च.नं. ७४१ को पत्रबाट प्राप्त भएकोमा जवाफ अपुरो भएकोले पूर्व पत्र अनुसारको सम्पूर्ण विवरण सहित उक्त संस्थानको राय पुरा गरी पठाउनु हुन भनी च.नं. ८२२ मिति २०६३।७।१९ गते भूमिसुधार तथा ब्यवस्था मन्त्रालयबाट उक्त फाइल पुन: गुठी संस्थान केन्द्रीय कार्यालयमा नै फिर्ता पठाएको,

**ण)** (केन्द्र): मिति २०६३।७।१९ गते च.नं. ८२२ को पत्रसाथ "भूमि सुधार तथा व्यवस्था मन्त्रालयबाट लेखि आएको बिषयमा खुलाई राय साथ पठाउन तहसिल शाखा कार्यालयमा लेखि पठाई तहसिल शाखा कार्यालयबाट खुलाई राय साथ पेश हुन आएपछि गुठी संस्थान केन्द्रीय कार्यालयवाट मन्त्रालयमा राय पठाउने" भन्ने व्यहोराको मिति ०६३।०७।२१ को टिप्पणी निर्णय भई केन्द्रीय कार्यालयबाट शाखा कार्यालयलाई लेखि पठाएको,

**त)** (शाखा): मिति २०६३।०७।२१ मा गुठी संस्थान केन्द्रीय कार्यालयको टिप्पणी निर्णय अनुसार "जहाँसम्म गुठी संस्थानको धारणा प्रस्तुत गर्नु पर्ने विषय छ, गुठी संस्थानको धारणा केन्द्रीय कार्यालय बाटै प्रस्तुत हुन उपयुक्त हुने" व्यहोरा उल्लेख गरी तहसिल शाखा कार्यालयको च.नं. ७४६ मिति ०६३।०७।२४ को पत्रद्वारा केन्द्रीय कार्यालयमा फाईल पठाएको ।

**थ)** (केन्द्र): मिति ०६३।०७।२४ मा गुठी संस्थान शाखा कार्यालयवाट फाईल प्राप्त भए पश्चात "सुवर्ण समसेरको जग्गा जफत हुँदाका बखत राजपत्रमा प्रकाशित सूचनामा उल्लेखित चारकिल्ला भित्र कारवाहीमा आएका कित्ता जग्गा पर्छन वा पर्दैनन भन्ने सम्बन्धमा नापी शाखा बुझी आएपछि राय साथ पेश गर्ने" भन्ने व्यहोराको गुठी संस्थान केन्द्रीय कार्यालयमा मिति २०६३।०७।२८ मा टिप्पणी निर्णय भई नापी कार्यालय डिल्लीबजारमा पत्राचार भएको,

**द)** (नापी): नापी कार्यालय डिल्लीबजार काठमाडौंले गुठी संस्थान केन्द्रीय कार्यालयको मिति २०६३।०७।२८ को टिप्पणी निर्णय अनुसारको "कारवाहीमा आएका कित्ता जगगाहरु मिति २०२१।०८।१७ गते नेपाल गजेटमा प्रकाशित सूचनाको ४ किल्ला भित्र पर्ने व्यहोरा अनुरोध गरीन्छ" भन्ने व्यहोराको नापी कार्यालयको च.नं. १६५२ मिति २०६३।०७।२८ को पत्रबाट गुठी संस्थान केन्द्रीय कार्यालयलाई लेखि पठाएको देखिएको,

**ध)** (केन्द्र): गुठी संस्थान केन्द्रीय कार्यालयबाट सम्पूर्ण विवरण र गुठी संस्थान शाखा कार्यालयको कारबाहीमा आएका २१ कित्ता जग्गा सम्बन्धमा राय सहित भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा अनुरोध गरी पठाउने भन्ने व्यहोराको मिति २०६३।०७।३० मा टिप्पणी निर्णय गरी "श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको लगत अनुसार पशुपती टिकिन्छा गुठीको नाममा हाल साविक भिडाई दर्ता गर्न स्वीकृतिका लागि मिति २०६१।०८।०८ मा निर्णय भई त्यहाँ (मन्त्रालय) अनुरोध गरी गुठी संस्थानको धारणा व्यक्त भई सकेको" भनी गुठी संस्थान केन्द्रीय कार्यालयवाट मिति २०६३।८।१ को पत्रसाथ १९ फाइलहरू भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा पठाएको ,

**न)** (मन्त्रालय ): मिति २०६३।८।१ गते गुठी संस्थान केन्द्रीय कार्यालयको पत्रसाथ मन्त्रालयमा प्राप्त भएको कारबाहीमा आएका २१ कित्ता जग्गा सम्बन्धमा पुन : नापीमा समरजंग कम्पनीको नाममा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा बिनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि म.प. प्रस्ताव पेश गर्नु पर्ने भनी मिति २०६३।०९।२५ मा मा. मन्त्री प्रभुनारायण चौधरीबाट टिप्पणी सदर भएको, (तर मन्त्रिपरिषदबाट निर्णय भएको नदेखिएको )

**ऩ)** (मन्त्रालय): २०६३ सालको टिप्पणी र आदेशको श्रृङखला सकिए पश्चात सोहि टिप्पणी निर्णयलाई आधार मानेर साविक नापीका २३ क्ष ७३ र २३ ह को २२,३१,३५ सँग भिड्ने नयाँ नापीमा का.जि. का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. २६२,२६७,२९५,२७८,२८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६, ८० का जग्गाहरुको साबिक गुठीको लगतका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता सच्याई प्रचलित कानून बमोजिम पशुपती टिकिन्छा गुठीका नाममा दर्ता भई गुठी संस्थानलाई स्वीकृति दिनका निमित्त नेपाल सरकार मन्त्रीपरिषदमा पेश हुन भन्ने व्यहोराको मिति २०६९/०४/०८ गते भूमिसुधार तथा ब्यवस्था मन्त्री मा. चन्द्रदेव जोशीबाट टिप्पणी सदर भएको,

**प)** (मन्त्रालय): भूमिसुधार तथा ब्यवस्था मन्त्रालयको उक्त प्रस्ताव मन्त्रिपरिषदमा पेश हुँदा मन्त्रिपरिषदबाट "मन्त्रिपरिषद सामाजिक समितिमा छलफल गरी पेश गर्ने" भनी मिति २०६९।०४।१७ गते म.प. बाट निर्णय आदेश भएको,

**फ)** (मन्त्रालय ): मिति २०६९।०६।१४ मा उक्त प्रस्ताव सामाजिक समितिको बैठकमा पेश भएको,

**ब)** (मन्त्रालय): दर्ता सच्याउने विषय म. प. बै. स. ३८।६९ मिति २०६९।०६।१८ को मन्त्रिपरिषदको बैठकले समाजिक समितिको मिति २०६९।०६।१४ मा बसेको बैठकले पेश गरेअनुसार उक्त प्रस्ताव "प्रस्तावमा लेखिएबमोजिम गर्ने" भनी निर्णय भएको,

**भ)** (मन्त्रीपरिषद): मिति २०६९।०६।१८ मा नै मन्त्रीपरिषदको निर्णय कार्यान्वयन गर्न भनी भूमि सुधार तथा ब्यवस्था मन्त्रालयका सचिव ज्यूलाई संबोधन गरी मुख्य सचिवद्वारा निर्देशन दिईएको,

**म)** (मन्त्रालय): भूमि सुधार तथा ब्यबस्था मन्त्रालय ( जग्गा प्रशासन शाखा) को ज.टि. १६०५/०६९/०७०/३/१ नं. २२९, च.नं. ७५७ मिति २०६९।०७।२६ को पत्रबाट गुठी संस्थान केन्द्रीय कार्यालयमा निर्णय कार्यान्वयनको लागि लेखि पठाएको,

**य)** (केन्द्र): उल्लेखित कित्ता जग्गाहरुको नेपाल सरकार मन्त्रिपरिषदको सहमति तथा स्वीकृतिको आधारमा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको ज.ध.को लगत कट्टा गरी श्री पशुपतीनाथ टिकिंछा गुठीको नाममा दर्ता कायम हुने ठहर्छ भनी गुठी संस्थानका प्रशासक बलिराम प्रसाद साह तेलीले मिति २०६९/१०/५ गते निर्णय गरी गुठी संस्थान शाखा कार्यालयमा पठाएको ,

**र)** (शाखा): गुठी संस्थान शाखा कार्यालयले साविक नगर २३ ह कि.नं. २२,३१,३५ र नगर २३ क्ष कि.नं. ७३ को जग्गाहरु नयाँ नापीको कुन कुन कित्ता सँग भिड्छ भनी मिति २०६९।११।१४ मा च.नं. १४८५ बाट नापी कार्यालय काठमाडौं डिल्लीबजारलाई पत्राचार गरेको।

**ल)** (नापी): (छानबिन प्र. अनुसूची १७९) मिति २०६९।११।१४ मा च.नं. १४८५ बाट गुठी संस्थान शाखा कार्यालयले नापी कार्यालयलाई लेखेको पत्रका सम्बन्धमा "साविक नगर २३ ह कि.नं. २२,३१,३५ र नगर २३ क्ष कि.नं. ७३ मध्ये साविक कि.नं. २२ को हाल नगर ४ को सिट नं. १०२-१०२५-१५ कि.नं. २६२,२६७,२९५,२५९ र ऐ.ऐ. वडाको कि.नं. ३१ को हाल नगर ४ सिट नं. १०२५-१५ कि.नं. २३२,२८०,२८४,३१४,२७८ र साविक २३ ह कै कि.नं. ३५ को सिट नं. १०२-१०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२-१०२५-२० कि.नं. ८० भिड्ने र साथै साविक २३ क्ष कि.नं. ७३ को हाल नगर ४ सिट नं. १०२-१०२५-१४ कि.नं. ४८ पुरै भिड्ने देखिएको" भनी नापी कार्यालयबाट गुठी संस्थान शाखा कार्यालयलाई च.नं. ३३५० को मिति २०६९।११।१७ को पत्रद्वारा जवाफ लेखि पठाएको। (राम कुमार सुवेदीले माग गरेका कित्ता जग्गाहरु नै भिड्ने भनी पत्रको जवाफ पठाएको)

**व)** (शाखा): मिति २०६९ साल फाल्गुण महिनामा साविक कि.नं. ७३ (हाल कि.नं. ४८), कि.नं. २२ (हाल कि.नं. २६७,२६२,२९५,२५९ ), कि.नं. ३१ (हाल कि.नं. २७८,२८४,२३२,२८०,३१४) र साविक कि.नं. ३५ (हाल कि.नं. ५६,८०) का जग्गाहरु उल्लेख गरी सरकारले निर्णय गरी सकेको हुँदा जग्गाधनी प्रमाणपत्र पाउँ भनी निवेदकहरुका वारेस राम कुमार सुवेदीले गुठी संस्थान शाखा कार्यालयमा निवेदन दिएको।

**श)** (शाखा): निर्णयमा चित्त नबुझे कानूनी प्रकृयाका लागि सम्बन्धित निकायमा हक कायम गर्न जान सक्ने नै हुँदा जग्गा दर्ता निर्देशिका,२०५८ बमोजिम रैकर लगत कट्टा गरी गुठी कायम जग्गा दर्ता नामसारी एवं हाल साविक समेत गरी ज.ध.प्र.पूर्जा बनाई पठाइ दिने मालपोत कार्यालय काठमाडौं डिल्लीबजारमा सिफारिस भई जान निर्णयार्थ पेश गरेको भन्ने टिप्पणी व्यहोरा सदर गरी गुठी संस्थान शाखा कार्यालयबाट टिप्पणी उठाई आवश्यक कार्यान्वयनको लागि मिति २०६९।११।२० मा टिप्पणी निर्णय गरी मिति २०६९।११।३०को च.नं. ९८२ को पत्र मार्फत मालपोत कार्यालय डिल्लीबजारमा फाईल पठाएको ।

**ष)** (मालपोत): मालपोत कार्यालयले सावि‍क नगर २३ ह कि.नं. २२,३१,३५ र नगर २३ क्ष कि.नं. ७३ को जग्गाहरु नयाँ नापीको कुन कुन कित्ता सँग भिड्छ भनी च.नं. १०६१८ मिति २०६९।१२।०४ मा नापी कार्यालय काठमाडौं डिल्लीबजारलाई पत्राचार गरेको।

**स)** (नापी): (छानबिन प्र. अनुसूची १८१) "नगर २३ क्ष को कि.नं. ७३ र नगर २३ ह को कि.न. २२,३१, ३५ समेतका जग्गा बिभिन्न मिति र च.नं.का पत्रहरुमा उल्लेख गरी पठाएको भएपनि हाल उल्लेखित कि.नं. का जग्गा छुट्टा छुट्टै जग्गाहरु भएको र उक्त कि.नं. का चारै तर्फका सधियारहरुले हाल साविक गरी सकेको र उक्त साविक २३ क्ष कि.नं. ७३ को हाल नगर सिट नं. १०२-१०२५-१४ कि.नं. ४८ पुरै र साविक २३ ह को कि.नं. २२ को हाल नगर ४ को सिट नं. १०२-१०२५-१५ कि.नं. २६२,२६७,२९५,२५९ भिड्ने र साथै नगर २३ ह को कि.नं.३१ को हाल नगर ४ सिट नं. १०२-१०२५-१५ कि.नं. २३२,२८४,३१४,२७८ मा भिड्ने र साविक नगर २३ ह को कि.नं. ३५ को हाल नगर ४ सिट नं. १०२-१०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२-१०२५-२० कि.नं.८० मा भिड्ने" भनी नापी कार्यालयले मिति २०६९।१२।०८ मा च.नं. ३६७२ बाट मालपोत कार्यालयलाई जवाफ लेखि पठाएको। ( शाखालाई लेखेको भन्दा कि.नं. २८० कम गरी जवाफ पठाएको )

**ह)** (मालपोत): साविक २३ क्ष कि.नं. ७३ को हाल नगर सिट नं. १०२-१०२५-१४ कि.नं. ४८ पुरै र साविक २३ ह को कि.नं. २२ को हाल नगर ४ को सिट नं. १०२-१०२५-१५ कि.नं. २६२,२६७,२९५,२५९ भिड्ने र साथै नगर २३ ह को कि.नं.३१ को हाल नगर ४ सिट नं. १०२-१०२५-१५ कि.नं. २३२,२८४,२७८ मा भिड्ने र साविक नगर २३ ह को कि.नं. ३५ को हाल नगर ४ सिट नं. १०२-१०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२-१०२५-२० कि.नं.८० गरी हाल नापीका जम्मा १० कित्ता जग्गा दर्ता गर्ने मिति २०७०।०१।१२ मा मालपोत कार्यालय डिल्लीबजारले निर्णय गरेको। ( कि.नं.३१४ निर्णयमा नपरेको, बाटो भन्ने उल्लेख) (भूमि सुधारका.) : भूमिसुधार कार्यालयमा मोहीहक नामसारी गरी पाउँ भनी निवेदन दिएकोमा उक्त कार्यालयमा मिति २०७०।०१।०३ र मिति २०७०।०१।०५ मा निर्णय पर्चा खडा भएको :-

**क्ष)** साविक नगर २३(ह) कि.नं. ३५ हाल का.न.पा. ४ सि.नं. १०२५-१५ कि.नं. ५६ र ऐ सि.नं. १०२५-२० कि.नं. ८० जग्गाको हकमा देव नारायण महर्जनका, नगर ४ सि.नं. १०२-१०२५-१५ कि.नं. २७८, २८४, २३२ र ३१४ को जग्गाको हकमा निवेदक द्वारिकामान महर्जन, नगर वडा नं. ४ सि.नं. १०२-१०२५-१५ कि.नं. २६२, २६७, २९५, २५९ को जग्गाको हकमा श्रीमती मोहन महर्जनले हाम्रा पिता पूर्खा मोही बनी जोती कमाई गरी आएको हुँदा उक्त जग्गाको मोही हाम्रा नाममा नामसारी गरी पाँऊ भनी निवेदकहरुका वारेसले भूमिसुधार कार्यालयमा दिएको निवेदनका सम्बन्धमा, भू.स. ऐन, २०२१ को दफा २६(१) बमोजिम निवेदकहरुको मागदावी अनुसार निजहरुकै नाममा मोही हक नामसारी हुने ठहर्छ भन्ने मिति २०७०।०१।०३ र मिति २०७०।०१।०५ गतेको भूमिसुधार कार्यालयको निर्णय पर्चा।

**त्र)** मिति २०७०।०१।१२ मा मालपोत कार्यालय डिल्लीबजारले गरेको निर्णय बमोजिम गुठी संस्थान शाखा कार्यालयले टिप्पणी उठाई उक्त कित्ता जग्गाको मालपोत कार्यालयबाट जग्गाधनी प्रमाण पूर्जा प्राप्त गरी पशुपती टिकिन्छा गुठीमा जनाएको अभिलेख राखी सम्बन्धीत मोहीहरुलाई मिति २०७०।०१।१७ मा जग्गाको पूर्जा बितरण गरेको ।

**ज्ञ)** १० दिनपछि , मिति २०७०।०१।२७ गते हालको कि.नं. ४८,२६२,२६७,२९५,२५९ का जग्गाहरु माधवी सुवेदी र उमा कुमारी ढकालका नाममा संयुक्त रुपमा र कि.नं. २३२,२८४,२७८,५६,८० का जग्गाहरु राम कुमार

सुवेदी र सोभा कान्त ढकालका नाउँमा संयुक्त रुपमा मोहीका नामबाट नामसारी भई भोगचलनमा गर्दै आई रहेको।

- **<u>मोही भनिएका व्यक्तिहरुले बिभिन्न मितिहरुमा विभिन्न कार्यालयहरुमा एउटै जग्गा माथि दिएको फरक फरक व्यहोराको जग्गा मागदावी सहितको निवेदन ( छानबिन प्र. अनुसूची १६५,१६६ र १६७ ):</u>**-पञ्च नारायण महर्जन समेतका १३ जना मोही भनिएका व्यक्तिहरूले गुठी संस्थान केन्द्रीय कार्यालयमा मिति २०५९।०७।०५ र सो पछिका विभिन्न मितिमा निजहरुले आफूहरुले कमाई आएको जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी मागदावी गरी निवेदन दिएको देखिन्छ। यिनै व्यक्तिहरुले सोही जग्गाका लागि नै मिति २०६६।९।१३ मा सर्वोच्च अदालतको फैसलाको सन्दर्भ जोडेर भूमि सुधार कार्यालयमा मोही कायम गरी पाउँ भनी निवेदन दिएको देखिन्छ। मिति २०६७।१।३१ गतेको मन्त्रिपरिषदको निर्णय पछि यिनै व्यक्तिहरु सोही जग्गाका लागि जग्गाधनी पुर्जा पाउँ भनी मालपोत कार्यालय, डिल्लीबजारमा निवेदन दिएको देखिन्छ। मिति २०६७।८।१६ मा मालपोत कार्यालय काठमाडौंबाट निर्णय भई १३-१५०-१ रोपनी जग्गा यिनै व्यक्ति मध्यका १२ जनाले प्राप्त गरी सकेपछि बाँकी जमिन ३-१२-३-० रोपनी जग्गा पशुपती टिकिन्छा गुठीको नाममा मोही कायम गरी पाउन गुठी तहसिल कार्यालय कालमोचनमा निवेदन दिई ४-१४-३-२ रोपनी जग्गा प्राप्त गरेको देखिन्छ। यसरी एकै जमीनका लागि एकै व्यक्तिहरुले बिभिन्न मितिमा बिभिन्न कार्यालयहरुमा फरक फरक व्यहोराको मागदावी सहित निवेदन दिन गएको र सोही बमोजिम उक्त जमीन यिनै व्यक्तिहरुले नेपाल सरकार समरजंग कम्पनी समेतको नामको ललिता निवास क्याम्पको जग्गा प्राप्त गरी सरकारलाई हानीनोक्सानी हुने गरी कहिले पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी र कहिले होइन भनी आफूलाई जसरी अनुकुल हुन्छ त्यसरी नै हत्याउन खोजेको र हत्याएको समेत देखिन्छ। यस कार्यमा मोही भनिएका व्यक्तिहरु र यिनको वारेश बनि निवेदन दिने राम कुमार सुवेदी र मालपोत कार्यालय, गुठी संस्थान कार्यालय, भूमि सुधार कार्यालय र नापी कार्यालयमा कार्यरत कार्यालय प्रमुख तथा कर्मचारीहरु समेतको योजना, प्रपञ्च, मिलेमतो एवं संलग्नता रहेको पुष्टि हुन्छ।
- **<u>गुठी संस्थान प्रधान कार्यालयको च.नं. १४५९ मिति २०७६।१२।०५ गतेको पत्र (१ नं. मिसिल)</u>**:-गुठी संस्थान प्रधान कार्यालयको च.नं. १४५९ मिति २०७६।१२।०५ गतेको पत्र ( १ नं. मिसिल ):-

**<u>तपसिल-:</u>**

**क)** बुँदा नं. १ को सम्बन्धमा गुठी अन्तर्गत दर्ता हुनुपर्ने जग्गा श्रेस्तामा अन्य नाम जनिएको तर दर्ता प्रमाणित भई नसकेको अबस्थामा गुठी जग्गा दर्ता गर्दा साविक गुठीको नाउँ खुलाई जुन किसिमको गुठी जग्गा हो दर्ता श्रेस्तामा सोही बिषयको गुठी जग्गा जनाउनु पर्नेछ भन्ने गुठी संस्थान कार्य ब्यवस्था बिनियम, २०४९ को बिनियम १० मा ब्यवस्था रहेको छ। जुन ब्यवस्था छुट जग्गा दर्ता कै प्रकृया अवलम्बन गरी जग्गा दर्ता हुने गर्दछ।

**ख)** वुँदा नं. २ को सम्बन्धमा गुठीको जग्गा कसैको नाउँमा दर्ता प्रमाणित भएमा साविक लगत बमोजिमको गुठी जग्गा दर्ता गर्न सक्ने अधिकार गुठी संस्थान ऐन,२०३३ को दफा ३९ (१) बमोजिम गुठी संस्थानका प्रशासकलाई रहेको छ तर जग्गा दर्ता वाँकीको हकमा गुठी संस्थान कार्य ब्यवस्था बिनियम,२०४९ को बिनियम १० बमोजिम जग्गा दर्ता सोही बिनियमको बिनियम ८ को देहाय खण्ड (ग) मा गुठी जग्गा नाप जाँच गराई नापी अनुसार दर्ता गराई गुठी जग्गा अध्यावधिक गर्ने कार्य गुठी कार्यालयको काम रहेको देखिन्छ। यस्तो

अबस्थामा गुठी जग्गा दर्ता गुठी संस्थान केन्द्रीय कार्यालयको सहमति लिनुपर्ने भन्ने उक्त विनियममा रहेको देखिएन।

**ग)** बुँदा नं. ३ को सम्बन्धमा गुठी जग्गा कसैको नाउँमा दर्ता भएको प्रमाणित भएमा साविक लगत बमोजिमको गुठी जग्गा दर्ता गर्न सक्ने अधिकार गुठी संस्थान ऐन,२०३३ को दफा ३९ (१) ले प्रशासकलाई प्रदान गरेको छ र सो बिषयमा चित्त नबुझेमा पुनरावेदन गर्न सक्ने समेत सोही दफा ३९ को उपदफा २ मा ब्यवस्था छ। यस विशेष ब्यवस्था बमोजिम भएको निर्णय उपर कानून बमोजिम पुनरावेदन परि निर्णय उल्टी भएको अबस्थामा प्रशासकको निर्णय कार्यान्वयन नगर्न वा जग्गा दर्ता नगर्ने हुन्छ तर मालपोत कार्यालयले जग्गा दर्ताको क्रममा थप प्रमाण भने बुझ्न सक्ने हुन्छ।

**घ)** वुँदा नं. ४ को हकमा मोही कायम गर्ने वा मोहीयानी हकमा तेरो मेरो सम्बन्धी प्रश्नको निरुपण गर्ने अधिकार भूमि सम्बन्धी ऐन २०२१ को दफा ३१ (क) ले भूमि सुधार अधिकारीलाई प्रदान गरेको छ मोही के कस्तो अवस्थामा गर्न मिल्ने भन्ने भूमि सम्बन्धी ऐन विनियम बमोजिम हुने बिषय भएको देखिन्छ।

➢ **भूमि ब्यवस्था सहकारी तथा गरीबी निवारण मन्त्रालयको च.नं. १७२२ मिति २०७७।०२।३२ को पत्र (१ नं. मिसिल):**

पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गर्ने क्रममा उठेको टिप्पणी र आदेशको प्रतिलिपी साथै राखी संकेत नं. दिई उक्त स्थानमा भएका दस्तखत गर्ने कर्मचारी तथा पदाधिकारीको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं. "ख" दिईएको स्थानको टिप्पणी र आदेशमा सही गर्ने सह- सचिव तेजराज पाण्डे, संकेत नं. "ग" दिईएको स्थानमा सही गर्ने सचिब दिनेशहरि अधिकारी,संकेत नं. "ट" दिईएको स्थानमा सहीगर्ने शाखा अधिकृत हुपेन्द्रमणी के.सी., संकेत नं. "ठ" दिईएको स्थानमा सही गर्ने उप- सचिव रघुनाथ अधिकारी, संकेत नं. "ड" दिईएको स्थानमा सही गर्ने सह- सचिव रुद्र कुमार श्रेष्ठ, संकेत नं. "ढ" दिईएको स्थानमा सहीगर्ने सचिव युवराज भुसाल हुन भनी निजहरुको हाजिरी अभिलेखको छाँयाप्रति यसैसाथ संलग्न राखी पठाईएको भन्ने समेत व्यहोराको भूमि ब्यवस्था सहकारी तथा गरीवी निवारण मन्त्रालयको मिति २०७६।११।१८ गतेको पत्र।

➢ **गुठी संस्थान तहसिल शाखा कार्यालय काठमाडौंको ज.ध.प्र. पु. बारे शीर्षकमा उठेको टिप्पणी र निर्णय (माथि सि.नं. ३९ क सँग सम्बन्धित) (सक्कल कागजात संलग्न फाईल कि.नं. क्ष २५) :**

**टिप्पणी र आदेश, विषय :- ज.ध. प्र.पु. बारे :**

श्रीमान का.न.पा. वडा नं. २३ क्ष कि.नं. २५ को ०-१२-० को जग्गाको मोही नाती महर्जन परलोक भएवाट मेरा नाममा दर्ता नामसारी गरी पुर्जा पाउ भनी तिर्थमाया महर्जनको निवेदन परेको।

पेश भएको नाता प्रमाणित फोटोकपीमा तिर्थमाया १, त्रिरत्न १, नविन -१, कृष्ण -१, मनिषा महर्जन समेत ५ जनाको नाम उल्लेख भएको देखिन्छ।

उल्लेखित कि.नं. २५ को फि.वु.को जोताहाको नामथर महलमा नाती महर्जन का.क्षे. पानी पोखरी र किसान व्यहोरा महलमा यो जग्गा कि.नं. १८ ब्यहोरा सदर भनी उल्लेख भएकोमा सिट नं. १८ मा यो जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु भनी उल्लेख भएको, उक्त जग्गाको मोठ श्रेस्ता माग गर्दा श्री ५ को गुठीका नाममा भएको भनी पत्रसाथ मोठ फोटोकपी प्राप्त भएको र अनुसूचीमा समेत कि.नं.१८ को व्यहोरा सदर भनी जनिएको भनी पत्र प्राप्त भएको।

सो जग्गाको नियम अनुसार मोही नामसारी गरी पूर्जा दिने भनी वडा कार्यालयवाट प्राप्त सिफारिसमा देखिन्छ । सरजमिन गर्दा उक्त जग्गा निवेदकले भोगचलन गरी जोति भोगी आएको गुठी कायम हुनुपर्ने जग्गा हो भनी उल्लेख भएको, उक्त जग्गाको गुठी संस्थानको परिपत्र समेतलाई आधारमानी पूर्जा पाउ भनी निवेदनमा उल्लेख भएको सो जग्गाको फि.वु.मा यो जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई आएको छु भनी उल्लेख भएको हुँदा उक्त जग्गा निवेदकको माग अनुसार नामसारी गरी पुर्जा दिने सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयमा निर्देशनका लागि पेश गर्न उचित देखि पेश गर्दछु । जो आदेश । २०५८।०५।२५

माथि उल्लेखित जग्गाको सम्बन्धमा मिति २०५९।०४।१७ मा पेश भएको टिप्पणी अनुसार हुन पेश गर्दछु। जो आदेश।

मिति २०५९।०४।१७।

यस्तै प्रकृतिका जग्गा सम्बन्धमा तुई भाइ भन्ने पंच नारायण महर्जनको फायलमा राय व्यक्त गरी सकेको हुँदा सोही अनुसार हुनको लागि पेश गरेको छु। २०५९।०५।१२

माथि उल्लेख भए बमोजिम उपर्युक्त निर्देशनको लागि गु.सं. केन्द्रीय कार्यालयमा. पेश गर्ने गरी सदर। मिति २०५९।०५।१८

- **गुठी संस्थान प्रधान कार्यालयको च.नं. १४३० मिति २०७६।११।२८ को पत्र (१ नं. मिसिल):** टिकिन्छा गुठीको कारवाही भएको फायलमा मिति २०६९।१०।०४ टिप्पणी संलग्न कर्मचारीको विवरण माग भै आएको सन्दर्भमा प्राप्त पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गर्ने क्रममा उठेको टिप्पणी र आदेशको प्रतिलिपी साथै राखी संकेत नं. दिई उक्त स्थानमा भएका दस्तखत गर्ने कर्मचारी तथा पदाधिकारीको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं. **"क"** दिईएको स्थानमा दस्तखत गर्ने कानून अधिकृत तुलसी पोखरेल, संकेत **"ख"** दिईएको स्थानमा सही गर्ने उप प्रशासक हरि प्रसाद जोशी, संकेत **"ग"** दिईएको स्थानमा दस्तखत गर्ने मुख्य कानून अधिकृत हेमराज सुवेदी, संकेत **"घ"** दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक बलिराम तेली, संकेत **"ङ"** दिईएको स्थानमा दस्तखत गर्ने बरिष्ठ सहायक मिना भट्टराई हुन हाजिर रजिष्ट्रको प्रमाणित प्रतिलिपी यसैसाथ पठाईएको भन्ने समेत व्यहोराको गुठी संस्थान प्रधान कार्यालयको मिति २०७६।११।२८ गतेको पत्र।
- **२१ कित्ता जग्गाको सम्पूर्ण टिप्पणी सहितको विवरण (५ कित्ता र १६ कित्ता गरी दुई चरणमा) (टिप्पणी संकलन फाईल):** उल्लेखित प्रतिवादीहरुले नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई कीर्ते तथा फरक व्यहोराको कागजातको आधारमा कथित मोही कायम गर्ने गरी बिभिन्न समयमा टिप्पणीहरु उठाउने, पेश गर्ने, सदर गर्ने भूमिकामा रहेको टिप्पणीबाट देखिएको।
- **गुठी संस्थान तसहिल शाखा कार्यालयले २ नं. अनुसूची उतार गरी पठाई दिने भनी भूमिसुधार कार्यालय कठमाण्डौलाई लेखेको पत्र (१ नं. मिसिल) :** उपरोक्त बिषयमा तपसिलमा उल्लेखित कि.नं. जग्गाको २ नं. अनुसूची आवश्यक परेकोले उतार पठाई दिनु अनुरोध गर्दछु भन्न समेत ब्यहोराको गुठी संस्थान तहसिल शाखा कार्यालयको च.नं. ८५९ मिति २०५९।०७।२८ को पत्र।

**तपसिल :**

| सि .नं. | क्षेत्र | वार्ड | कि.नं. | क्षे.फ. | मोहीको नाम |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १. | नगर ४ | २३ क्ष | ७३ | ००-३- | जीत बहादुर महर्जन |
| २. | नगर ४ | २३ क्ष | ७८ | २०-९- | लक्ष्मी नारायण महर्जन |
| ३. | नगर ४ | २३ क्ष | ६८ | १०-८- | न्हुच्छे महर्जन |
| ४. | नगर ४ | २३ क्ष | ६९ | ००-२-६- | - |
| ५. | नगर ४ | २३ क्ष | ४८ | ००-१४- | - |
| ६. | नगर ४ | २३ क्ष | ७६ | २०-१२- | - |
| ७. | नगर ४ | २३ ह | १२ | ००-५- | - |
| ८. | नगर ४ | २३ ह | २२ | १०-८- | कृष्ण महर्जन |
| ९. | नगर ४ | २३ ह | ४० | ०२-१३- | हर्क नारायण डंगोल |
| १०. | नगर ४ | २३ ह | २५ | १०-२-३- | नाराञ्चा महर्जन |
| ११. | नगर | २३ ह | १५ | २०-३- | कर्ण बहादुर गुरुङ |
| १२. | नगर | २३ ह | २४ | ००-९- | कर्ण बहादुर गुरुङ |

- **गुठी संस्थान शाखा कार्यालय काठमाडौंको च.नं. १८०० मिति २०७६।११।१९ गतेको पत्र (१ नं. मिसिल) :** गुठी संस्थान केन्द्रीय कार्यालयको मिति २०६९।११।२८ गतेको टिप्पणी र आदेशको प्रतिलिपी साथै राखी टिप्पणी र आदेशमा दस्तखत गर्ने कर्मचारी तथा पदाधिकारीको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं. ‘‘क’’ दिईएको स्थानमा दस्तखत गर्ने कर्मचारी मालपोत कर्मचारी, संकेत नं. ‘‘ख’’ दिईएको स्थानमा दस्तखत गर्ने मालपोत कर्मचारी, संकेत नं. ‘‘ग’’ दिईएको स्थानमा दस्तखत गर्ने उप-प्रशासक (कार्यालय प्रमुख) जय प्रसाद रेग्मी, संकेत नं. ‘‘घ’’ दिईएको स्थानमा दस्तखत गर्ने वरिष्ठ सहायक नवराज पौडेल र संकेत नं. ‘‘ ङ’’ दिईएको स्थानमा दस्तखत गर्ने उप-प्रशासक ( कार्यालय प्रमुख) जय प्रसाद रेग्मी भन्ने समेत ब्यहोराको गुठी संस्थान शाखा कार्यालयको च.नं. १८०० मिति २०७६।११।१९ को पत्र।
- **नापी कार्यालय काठमाडौंको च.नं. १४२४ मिति २०७६।११।२० गतेको पत्र (१ नं. मिसिल) :** नापी कार्यालय काठमाडौंको च.नं.१४०४० मिति २०६१।०३।११ गते,च.नं. ३३५० मिति २०६९।११।१७ गतेको पत्र,च.नं.३६७२ मिति २०५९।१२।०५ गतेको पत्र र च.नं. ३५४३ मिति २०६९।१२।०१ गतेको पत्रमा दस्तखत गर्ने कर्मचारीहरुको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं. ‘‘क’’ दिईएको स्थानमा दस्तखत गर्ने कर्मचारी अमिन कर्ण बहादुर चन्द, संकेत नं. ‘‘ख’’ दिईएको स्थानमा दस्तखत गर्ने एकिन हुन नसकेको,संकेत नं. ‘‘ग’’ दिईएको स्थानमा दस्तखत गर्ने सर्भेक्षक घमन कुमार कार्की, संकेत नं. ‘‘घ’’ दिईएको स्थानमा दस्तखत गर्ने सर्भेक्षक राजेन्द्र प्रसाद मण्डल, संकेत नं. (ङ) दिईएको स्थानमा दस्तखत गर्ने नापी अधिकृत दुर्गादास महर्जन, संकेत नं. ‘‘च’’ दिईएको स्थानमा दस्तखत गर्ने सर्भेक्षक घमन कुमार कार्की, संकेत नं. ‘‘छ’’ दिईएको स्थानमा दस्तखत गर्ने सर्भेक्षक राजेन्द्र प्रसाद मण्डल, संकेत नं. ‘‘ज’’ दिईएको स्थानमा दस्तखत गर्ने नापी अधिकृत मग्नु दत्त,संकेत नं. ‘‘झ’’ दिईएको स्थानमा दस्तखत गर्ने सर्भेक्षक घमन कुमार कार्की, संकेत नं. ‘‘ञ’’ दिईएको स्थानमा दस्तखत गर्ने सर्भेक्षक बेचन यादव, संकेत नं. ‘‘ट’’ दिईएको स्थानमा दस्तखत गर्ने नापी

अधिकृत मग्नु दत्त भएको भनी खुलाई पठाएको नापी कार्यालय काठमाडौंको च.नं. १४२४ मिति २०७६।११।२० को पत्र।

- **भूमि सुधार तथा मालपोत कार्यालय काठमाडौंको च.नं. ९१४३ मिति २०७७।०३।०२ गतेको पत्र (१नं. मिसिल):** श्री पशुपति टिकिन्छा गुठीको जग्गा दर्ता गर्ने क्रममा मिति २०७०।०१।०८ गतेको निर्णय पर्चामा दस्तखत गर्ने कर्मचारीहरुको पद नामथर वतन माग भई निर्णय पर्चाको प्रतिलिपीहरुमा संकेत नं. दिई दस्तखत गर्ने कर्मचारीहरुको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं. "घ", "ढ" दिईएको स्थानमा दस्तखत गर्ने भूमि सुधार अधिकारी सुशिल बैद्य, संकेत नं. "क", "ग","ज", "ट" , "ठ" दिईएको स्थानमा दस्तखत गर्ने उप- सचिव भेष बहादुर कार्की, संकेत नं. "ख", "ङ","झ", "ड" दिईएको स्थानमा दस्तखत गर्ने ना.सु. कृष्ण प्रसाद रेग्मी र संकेत नं. "च", "छ" , "ञ","ण" दिईएको स्थानमा दस्तखत गर्ने ना.सु. (विशेष ) अंगुर कुमार सिग्देल रहेको भन्ने समेत ब्यहोराको भूमि सुधार तथा मालपोत कार्यालय काठमाडौंको च.नं. ९१४३ मिति २०७७।०३।०२ गतेको पत्र ।
- **गुठी संस्थान तसहिल शाखा कार्यालयले २ नं. अनुसूची उतार गरी पठाई दिने भनी भूमिसुधार कार्यालय कठमाण्डौलाई लेखेको पत्र (१ नं. मिसिल) :** केन्द्रीय अनुसन्धान ब्यूरोको प.सं.२०७६।०७७ मु.द.नं.२५ च.नं. ५९५७ मिति २०७६।११।१४ को पत्र प्राप्त भई व्यहोरा अवगत भयो । सो सम्बन्धमा अनुसन्धानको क्रममा श्री पशुपति टिकिन्छा गुठीको जग्गा दर्ता सम्बन्धी मिति २०७०।०१।१२ गतेको टिप्पी र आदेशको प्रतिलिपी पाना ८ ( आठ) यसै पत्रसाथ संलग्न राखी पठाईएको छ। उक्त टिप्पणी र आदेशमा संकेत नं. क, ख,ग,घ,ङ,च दिएको स्थानमा भएका दस्तखत गर्ने कर्चमारीको तत्कालीन पद नाम/थर वतन समेतको विबरण यथाशिघ्र खुलाई पठाई दिई अनुसन्धान कार्यमा सहयोग सहयोग गरिएको छ भन्ने लेखि आएको सम्बन्धमा माग भएको विवरण तपसिल अनुसार तयार गरी यसै पत्रसाथ संलग्न राखी पठाईएको व्यहोरा अनुरोध छ।

**तपसिल:**

१. मिति २०७०।०१।१२ गतेको टिप्पणी र आदेश सँग सम्बन्धीत कागजातहरु यस कार्यालयको मि.नं.२२६ मिति २०७०।०१।१२ को मिसिल संलग्न भएको र उक्त मिसिल श्री काठमाडौं जिल्ला अदालतको च.नं. ४२७ मिति २०७१।०२।२१ मा चलान भै फाँट नं. १२ मु.नं. ०७०।CP-0६९२।०६९२ मा गएको भनी मिसिल दर्ता डायरीमा उल्लेख छ। सो को प्रमाणित प्रतिलिपी यसैसाथ संलग्न छ।

२. ताँहाको पत्रसाथ संलग्न टिप्पणी र आदेश तथा पत्रको छाँयाकपीमा भएको दस्तखतलाई २०७० सालको हाजिरी रजिष्ट्ररमा भिडाउदा मिल्दो जुल्दो दस्तखतका आधारमा संकेत नं. "क" को दस्तखत भूमिसुधार कार्यालय काठमाडौंका उप-सचिव भेष बहादुर कार्की (तम्घास -१ , गुल्मी/ मो.नं.९८४१३४३४०५), संकेत नं. "ख" को दस्तखत मालपोत कार्यालय डिल्लीबजारका ना.सु. मणी कुमार राणा (बरहथवा-४, सर्लाही), संकेत नं. "ग" को दस्तखत मालपोत कार्यालय डिल्लीबजारका ना.सु. फणिन्द्र प्रसाद दाहाल (कटारी -८ उदयपुर), संकेत नं. "घ" को दस्तखत मालपोत कार्यालय डिल्लीबजारका मालपोत अधिकृत बद्री बहादुर कार्की(बाहुनीडाँडा- ३ खोटाङ), संकेत नं. "ङ" को दस्तखत मालपोत कार्यालय डिल्लीबजारका उप- सचिव लक्ष्मी नारायण उप्रेती (मेचीनगर-४, झापा) र संकेत नं. "च" को दस्तखतको सम्बन्धमा तत्कालीन समयमा प्रमुख मालपोत अधिकृत दिनेश प्रसाद शर्मा (विराटनगर-५ , मोरङ) कार्यरत रहेको देखिन्छ र हाजिर रेकर्डको

दस्तखत र टिप्पणी र आदेशको दस्तखत फरक फरक किसिमको देखिन्छ र उल्लेखित कर्मचारीहरुको २०७० सालको हाजिरी फारामको प्रमाणित प्रतिलिपी ६ (छ) यसै साथ संलग्न छ भन्ने समेत व्यहोराको भूमिसुधार तथा मालपोत कार्यालय काठमाडौंको च.नं. ९१११ मिति २०७७।०२।३० गतेको पत्र।

- **पुरातत्व विभाग रामशाहपथ काठमाडौंको च.नं.१४८५मिति २०७७।०३।०८ गतेको पत्र (१ नं. मिसिल) :** वि.सं. १९८७ सालको लालमोहर, बि.सं.१९४४ सालको टिकिन्छा गुठीको लालमोहर, बि.सं. १९३८ सालको लालमोहर, बि.सं. १९६३ सालको लालमोहरको लिप्यन्तर र भाषान्तर गरी पठाईदिनु भन्ने केन्द्रीय अनुसन्धान ब्यूरोको च.नं.५९५८ मिति २०७६।११।१४ गतेको पत्र प्राप्त भएको पत्रसाथ पठाईएको कागजातहरुको लिपि बिशेषज्ञबाट नेपालील लिपि र भाषामा लिप्यान्तर र भाषान्तर गरिएको प्रतिवेदनका साथ ताँहाबाट प्राप्त सम्पूर्ण कागजातहरु यसै पत्रसाथ संलग्न राखी पठाईएको छ भन्ने समेत व्यहोराको पुरातत्व विभागको च.न. १४८५ मिति २०७७।०३।०८ गतेको पत्र।
- **गुठी संस्थान प्रधान कार्यालयको च.नं.१४१३ मिति २०७६।११।२२ गतेको पत्र (नं. मिसिल ) :** श्री पशुपति टिकिन्छा गुठीको जग्गा दर्ता सम्बन्धी मिति २०५९।०५।०८ गते देखि मिति २०६१।०८।०८ गते सम्म उठाईएको टिप्पणीको प्रतिलिपी पाना १२ (वाह्र) को प्रतिलिपि संलग्न राखी प्रतिलिपीहरुमा संकेत नं. दिई दस्तखत गर्ने कर्मचारीहरुको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं.“क” दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक दिलिप कुमार भट्ट, संकेत नं. “ख” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य, संकेत नं. “ग” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य कानून अधिकृत हेमराज सुवेदी, संकेत नं. “घ” दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक दिलिप कुमार भट्ट, संकेत नं. ङ दिईएको स्थानमा दस्तखत गर्ने सहायक वासुदेव पौडेल, संकेत नं. “च” दिईएको स्थानमा दस्तखत गर्ने शाखा अधिकृत पुण्डरी के.सी., सकेत नं. “छ” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य, संकेत नं. “ज” दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक सेमन्त राज चापागाई, संकेत नं. “झ” दिईएको स्थानमा दस्तखत गर्ने सहायक बासुदेव पौडेल, संकेत नं. “ञ” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य, संकेत नं. “ट” दिईएको स्थानमा दस्तखत गर्ने सहायक वासुदेव पौडेल, संकेत नं.“ठ” दिईएको स्थानमा दस्तखत गर्ने शाखा अधिकृत पुण्डरी के.सी., संकेत नं. “ड” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य, संकेत नं. “ढ” दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक सेमन्तराज चापागाई, संकेत नं. “ण” दिईएको स्थानमा दस्तखत गर्ने सहायक वासुदेव पौडेल, संकेत नं.“त” दिईएको स्थानमा दस्तखत गर्ने सहायक वासुदेव पौडेल, संकेत नं. “थ” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य, संकेत नं. “द” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य, संकेत नं. “ध” दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक सेमन्तराज चापागाई, संकेत नं. “न” दिईएको स्थानमा दस्तखत गर्ने सहायक वासुदेव पौडेल भन्ने समेत ब्यहोराको गुठी संस्थान प्रधान कार्यालयको च.नं. १४१३ मिति २०७६।११। १२ गतेको पत्र।
- **गुठी संस्थान शाखा कार्यालय काठमाडौंको च.नं. १८०२ मिति २०७६।११।१९ गतेको पत्र (१ नं.मिसिल):** श्री पशुपति टिकिन्छा गुठीको जग्गा दर्ता सम्बन्धी मिति २०६०।०७।१९ गते देखि मिति २०६१।०६।२६ गते सम्मको टिप्पणी र आदेशको प्रतिलिपी पाना १०(दश) को प्रतिलिपि संलग्न राखी प्रतिलिपीहरुमा संकेत नं.दिई दस्तखत गर्ने कर्मचारीहरुको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं.“क” दिईएको स्थानमा दस्तखत गर्ने वरिष्ठ सहायक राम कुमार घिमिरे, संकेत नं.“ख” दिईएको स्थानमा

दस्तखत गर्ने का.मु.का.प्र.(सहायक प्रशासक) अच्युतानन्द पोखरेल, संकेत नं.“ग” दिईएको स्थानमा दस्तखत गर्ने का.मु. का.प्र. (सहायक प्रशासक) अच्युतानन्द पोखरेल,संकेत नं. “घ” दिईएको स्थानमा दस्तखत गर्ने सहायक द्वितीय कृष्णराज अर्याल, संकेत नं.“ङ” दिईएको स्थानमा दस्तखत गर्ने सहायक द्वितीय कृष्णराज अर्याल,संकेत नं.“च” दिईएको स्थानमा दस्तखत गर्ने राम कुमार घिमिरे, संकेत नं. “छ” दिईएको स्थानमा दस्तखत गर्ने रामेश्वर विडारी, संकेत नं. “ज” दिईएको स्थानमा दस्तखत गर्ने सहायक द्वितीय डबल सिंह ठगुन्ना, संकेत नं.“झ” दिईएको स्थानमा दस्तखत गर्ने सहायक द्वितीय रामेश्वर बिडारी , संकेत नं.ञ दिईएको स्थानमा दस्तखत गर्ने सहायक प्रशासक (का.मु.का.प्र.) अच्युतानन्द पोखरेल भन्ने समेत व्यहोराको च.नं. १८०२ मिति २०७६।११।१९ गतेको गुठी संस्थान शाखा कार्यालय काठमाडौंको पत्र।

- **गुठी संस्थान शाखा कार्यालय काठमाडौं को च.नं. १८०१ मिति २०७६।११।१९ गतेको पत्र (१ नं. मिसिल):** श्री पशुपति टिकिन्छा गुठीको जग्गा दर्ता सम्बन्धी मिति २०६९।०८।२२ को टिप्पणी र आदेशको प्रतिलिपी संलग्न राखी प्रतिलिपीहरुमा संकेत नं.दिई दस्तखत गर्ने कर्मचारीहरुको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं.“क” दिईएको स्थानमा दस्तखत गर्ने बरिष्ठ सहायक नवराज पौडेल, संकेत नं. ‘ख” दिईएको स्थानमा दस्तखत गर्ने वरिष्ठ लेखा सहायक वैकुण्ठ आचार्य, संकेत नं. “ग” दिईएको स्थानमा दस्तखत गर्ने सहायक प्रशासक राम कुमार घिमिरे, संकेत नं. “घ” दिईएको स्थानमा दस्तखत गर्ने उप- प्रशासक (कार्यालय प्रमुख) जय प्रसाद रेग्मी, संकेत नं. “ङ” दिईएको स्थानमा दस्तखत गर्ने सहायक प्रशासक ( का.मु. कार्यालय प्रमुख ) बैकुण्ठ प्रसाद रेग्मी भन्ने समेत व्यहोराको च.नं. १८०१ मिति २०७६।११।१९ गतेको गुठी संस्थान शाखा कार्यालय काठमाडौंको पत्र।
- **गुठी संस्थान प्रधान कार्यालयको च.नं. १५७० मिति २०७७।०३।२१ गतेको पत्र (१ नं. मिसिल):** श्री पशुपति टिकिन्छा गुठीको जग्गा दर्ता गर्ने क्रममा मिति २०६१।०६।१९ गते देखि मिति २०६१।०८।०८ गते सम्मको टिप्पणी र आदेशको प्रतिलिपी संलग्न राखी प्रतिलिपीहरुमा संकेत नं.दिई दस्तखत गर्ने कर्मचारीहरुको साविकको पद तथा नामथर माग भएकोमा संकेत नं.“क” दिईएको स्थानमा दस्तखत गर्ने प्रशासक दिलिप कुमार भट्ट, संकेत नं. “ख” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य अधिकृत हरिवोल आचार्य संकेत नं. “ग” दिईएको स्थानमा दस्तखत गर्ने मुख्य कानून अधिकृत हेमराज सुवेदी, संकेत नं. “घ” दिईएको स्थानमा दस्तखत गर्ने शाखा अधिकृत पुण्डरी के.सी., संकेत नं. “ङ” लिईएको स्थानमा दस्तखत गर्ने सहायक बासुदेव पौडेल भन्ने समेत व्यहोराको च.नं. १५७० मिति २०७७।०३।२१ गतेको गुठी संस्थान प्रधान कार्यालय काठमाडौंको पत्र।
- **गुठी संस्थान प्रधान कार्यालयको च.नं. ९०४ मिति २०७६।०६।२९ गतेको पत्र ( १ नं. मिसिल):** यस संस्थानको च.नं. २२२ मिति २०६१।०८।०९ को पत्रमा नाम उल्लेख भएका व्यक्ति समेतका कारबाही फायलको प्रतिलिपी माग भई आएको बिषयमा यस प्रधान कार्यालय अन्तरगत शाखा कार्यालयको अभिलेख लगायतमा उक्त फायलहरु खोज तलास गर्दा फेला पार्न सकिएन। टकिन्छा गुठीको उक्त जग्गा सम्बन्धी चलेको कारवाही विवरण अध्ययन गर्दा पछिल्लो पटक संस्थानको च.नं. ज.शा.७।१४७।०६३।०६४ मिति २०६३।०९।०१ को पत्रसाथ १९ ( उन्नाईस ) थान फायल भूमिसुधार तथा ब्यवस्थापन कार्यालयका लागि चलानी भएको देखिन्छ। नेपाल सरकार मन्त्री परिषदको निर्णय पश्चात मन्त्रालयको च.नं. ७५७ मिति २०६९।०७।२६ को पत्रबाट जम्मा ८ ( आठ) थान मात्र फायल फिर्ता भएको देखिएवाट यस संस्थानमा फायल

फेला पार्न सकिएन खोजी कार्य जारी भएकोले उक्त पत्रहरुको प्रतिलिपी पाना ५ यसैसाथ राखी पठाईएको भन्ने व्यहोराको च.नं. ९०४ मिति २०७६।०६।२९ गतेको पत्र।

- **पशुपति गोश्वारा शाखा कार्यालय पशुपति काठमाडौंको च.नं. ७५ मिति २०७७।०३।०४ को पत्र (१ नं मिसिल )** केन्द्रीय अनुसन्धान ब्यूरो को च.नं. ६०८७ मिति २०७६।११।१८ को पत्र र गुठी संस्थान प्रधान कार्यालयको प.सं. ०७६।०७७ /२१६ च.नं. १५१० मिति २०७७।०२।२७ को पत्रमा उपलब्ध गराई यस संस्थानलाई जानकारी गराउन हुन भनी लेखि आएको हुँदा उक्त पूजा संचालन गर्ने बिशेट र भट्टहरुको नाम थर वतन निम्नानुसार भएको व्यहोरा अनुरोध छ भन्ने समेत व्यहोराको च.नं.७५ मिति २०७७।०३।०४ गतेको पशुपति गोश्वरा शाखा कार्यालय पशुपति काठमाडौंको पत्र।
- **नापी कार्यालय काठमाडौंको च.नं.१४२२ मिति २०७६।११।२० गतेको पत्र (२ नं.मिसिल):** केन्द्रीय अनुसन्धान ब्यूरोको च.नं. ६१६६ मिति २०७६।११।२० गतेको पत्रबाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयबाट मन्त्रीपरिषदमा पेश भई मिति २०६९।०६।१८ गते म.प.बाट निर्णय भएको प्रस्ताव पाना ४ (चार) उपलब्ध गराई उक्त पत्रमा उल्लेखित कित्ता नं.हरुको साविक र नयाँ नापीको फिल्डबुक र नापी हुँदाको बखत देखिएको प्लट रजिष्टर समेतका कागजातहरु माग भएकोमा ललिता निवास क्याम्प भित्रको २०२१ सालको पत्रमा उल्लेखित साविक नगर २३ ह , २३ क्ष र ऐ. वडा नं. २४ क को फिल्डबुकको प्रतिलिपी संलग्न राखी पठाईएको भन्ने नापी कार्यालय काठमाडौंको च.नं. १४२२ मिति २०७६।११।२० गतेको पत्र।
- **नापी कार्यालय काठमाडौंको च.नं. १४४४ मिति २०७६।११।२३ गतेको पत्र (२ नं. मिसिल) :** ललिता निवास क्याम्प भित्रको हालका कित्ताहरुको फिल्डबुक, प्लटरजिष्टर यसै साथ संलग्न राखी पठाईएको छ भन्ने समेत व्यहोराको नापी कार्यालय काठमाडौंको च.नं. १४४४ मिति २०७६।११।२३ गतेको पत्र ।
- **निवेदकहरुको विवरण :**

मिति २०५८।०१।१४ मा गुठी संस्थान तहसिल कार्यालयमा निवेदन दिने निवेदकहरु (वारेस राम कुमार सुवेदी) : का.जि. का.म.पा. वडा नं.०४ बस्ने **तीर्थमाया महर्जन** (कि.नं. २३ क्ष १५,६३ ),ऐ. वडा नं. ३ बस्ने **तीर्थमाया महर्जन** (कि.नं. २३ क्ष २५), ऐ. वडा नं. १७ बस्ने **तुईइ भाई भन्ने पंच नारायण महर्जन** (कि.नं. २३ क्ष २८, ४२) ।

मिति २०५९।०७।०५ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन दिने निवेदकहरु (वारेस राम कुमार सुवेदी): का.जि. का.म.न.पा. वडा नं. २५ बस्ने **कान्छा महर्जन** (कि.नं. २३ ह १२), ऐ वडा नं. २ बस्ने **रेना गुरुङ** (कि.नं. २३ ह को १५, २४) ऐ. वडा नं. ५ बस्ने **ग्वाराभाई महर्जन** (कि.नं. २३ ह २५), ऐ. वडा नं. १९ बस्ने **श्रीमती मोहन महर्जन** (कि.नं. २३ ह २२), ऐ. वडा नं. १३ बस्ने **राम कृष्ण महर्जन** (कि.नं. २३ ह ४०), ऐ. वडा नं. २ बस्ने **देव नारायण महर्जन** ( कि.नं. २३ क्ष ४८,७६ ),ऐ.वडा नं.१३ बस्ने **मचानानी महर्जन** (कि.नं. २३ क्ष ६८,६९), ऐ. वडा नं. १२ बस्ने **आशामाया महर्जन** (कि.नं. २३क्ष ७३),ऐ. वडा नं.३०बस्ने **लक्ष्मी नारायण महर्जन** (कि.नं. २३ क्ष ७८)।

मिति २०६०।०५।१९ मा गुठी संस्थान तहसिल कार्यालयमा निवेदन दिने निवेदकहरु (वारेस राम कुमार सुवेदी): का.जि. का.म.न.पा. वडा नं. ३२ बस्ने **देव नारायण महर्जन** (कि.नं. २३ ह ३५, ३७)।

मिति एकिन नभएको मिति २०६०।६। २६ मा गुठी संस्थान शाखा कार्यालयमा तोक लागेको सो निवेदन दिने निवेदकहरु: का.जि. का.म.न.पा. वडा नं. २ बस्ने **द्वारीकामान महर्जन** (कि.नं. २३ क्ष को ७७ र २३ ह को ३)।

➢ **पशुपति टिकिन्छा गुठीको मोही कायम गरी जग्गा धनी प्रमाणपूर्जा पाउँ भनी मिति २०५८, २०५९ र २०६० सालमा गुठी संस्थान केन्द्रीय कार्यालय र गुठी संस्थान तहसिल कार्यालयमा दिएको निवेदनहरुमा माग गरेका कित्ता जग्गाहरुको विवरण :**

| सि.नं. | निवेदकको नाम | क्षेत्र/ कि.नं. | क्षेत्रफल |
|---|---|---|---|
| १. | ग्वारा भाई महर्जन | नगर २३ ह २५ | १-३-२-० |
| २. | लक्ष्मी नारायण महर्जन | नगर २३ क्ष ७८ | २-९-०-० |
| ३. | कान्छा महर्जन | नगर २३ ह १२ | ०-५-०-० |
| ४. | रेना गुरुङ | नगर २३ ह १५ | २-३-०-० |
| | | नगर २३ ह २४ | ०-९-०-० |
| ५. | देव नारायण महर्जन | नगर २३ क्ष ४८ | ०-१४-०-० |
| | | नगर २३ क्ष ७६ | २-१२-०-० |
| ६. | राम कृष्ण महर्जन | नगर २३ ह ४० | ०-१३-२-० |
| ७. | तीर्थमाया महर्जन | नगर २३ क्ष १५ | ८-५-०-० |
| | | नगर २३ क्ष ६३ | ०-४-०-० |
| ८. | तीर्थमाया महर्जन | नगर २३ क्ष २५ | ०-१२-०-० |
| ९. | तुईई भाई भन्ने पंच नारायण महर्जन | नगर २३ क्ष २८ | ३-१५-०-० |
| | | नगर २३ क्ष ४२ | ०-५-०-० |
| १०. | मचानानी महर्जन | नगर २३ क्ष ६८ | १-८-०-० |
| | | नगर २३ क्ष ६९ | ०-६-२-० |
| ११. | देव नारायण महर्जन | नगर २३ ह ३५ | ०-१४-३-० |
| | | नगर २३ ह ३७ | १-१५-०-० |
| १२. | आसामाया महर्जन | नगर २३ क्ष ७३ | ०-३-०-० |
| १३. | श्रीमती मोहन महर्जन | नगर २३ ह २२ | १-८-०-० |
| १४. | द्वारीकामान महर्जन | नगर २३ ह ३१ | १-३-०-० |
| | | नगर २३ क्ष ७७ | ०-१०-०-० |
| | | | जम्मा क्षेत्रफल = ३३ -२-१-० |

माथि उल्लेखित कि.नं. का जग्गाहरुको जम्मा क्षेत्रफल = ३३ -२-१-० माग गरी जग्गाधनी पशुपति टिकिन्छा गुठी कायम गरी मोही कायम गरी पाउँ भन्ने निवेदन दिएकोमा निम्न कित्ता र क्षेत्रफल भएका जग्गाहरु मिति

२०६९।०१।१७ गते  जग्गाधनी पशुपति टिकिन्छा गुठी कायम भई मोही समेत जनिई जग्गाधनी प्रमाणपूर्जा बितरण भएको देखिएको।

| सि.नं. | निवेदकको नाम | क्षेत्र/ कि.नं. | क्षेत्रफल |
|---|---|---|---|
| १. | श्रीमती मोहन महर्जन | नगर २३ ह २२ | १-८-०-० |
| २. | द्वारीकामान महर्जन | नगर २३ ह ३१ | १-३-०-० |
| ३. | देव नारायण महर्जन | नगर २३ ह ३५ | ०-१४-३-० |
| ४. | आसामाया महर्जन | नगर २३ क्ष ७३ | ०-३-०-० |
| | **जम्मा क्षेत्रफल = ४ -१४-३-२** | | |

- **जग्गा प्राप्ती ऐन, २०१८ को प्रस्तावना तथा दफा ३:** जग्गा लिने सम्बन्धमा भई रहेको नेपाल कानूनमा संशोधन तथा एकिकरण गर्न र सार्वजनिक हित हुन जुनसुकै कामको निमित्त चाहिने जग्गा मनासिव माफिकको क्षतिपूर्तिमा दिलाई दिने अधिकारको र तत् सम्बन्धी अरु ब्यवस्था गर्न वाञ्छनिय भएकोले भन्ने व्यहोरा प्रस्तावनामा उल्लेख गरी, ऐनको दफा ३ मा कुनै कामको लागि आवश्यक भए श्री ५ को सरकारले यस ऐनको दफाहरुमा लेखिएको अधिनमा रहि जुनसुकै ठाउको जुनसुकै जग्गा प्राप्त गर्न वा गराई दिन सक्नेछ भनी  जग्गा प्राप्ती ऐन, २०१८ मा ब्यवस्था भएको।
- **भूमि सम्बन्धी ऐन, २०२१, परिच्छेद -३ जग्गाको हदबन्दी (ऐनहरुको संगालो ):** बि.सं. २०२१/०८/०१ गते भूमि सुधार ऐन, २०२१ जारी भएपछि नेपालमा पहिलो पटक भूमिसुधार कार्यक्रम लागू भई तराईमा खेतीको लागि २५ बिगाहा र घरबारीको लागि ३ बिगाहा गरी जम्मा २८ बिगाहा, पहाडमा खेतीको लागि ८० रोपनी र घरबारीको लागि १६ रोपनी गरी जम्मा ९६ रोपनी  र उपत्यकामा खेतीको लागि ५० रोपनी र घरबारीको लागि ८ रोपनी गरी जम्मा  ५८ रोपनी हुने गरी भूमि सुधार ऐन, २०२१ को परिच्छेद ३ को दफा ७ मा जग्गाको हदवन्दीको ब्यवस्था भएको।
- **२०२४ सालमा मोहीले पेश गरेको जोताहाको अस्थायी निस्सा (छानबिन प्र.मा ज्ञाननारा महर्जनको कागजमा उल्लेख भएको):** जिल्ला काठमाडौं नगरपञ्चायत का.न.पं.,उक्त पञ्चायत क्षेत्रको वडा नं. २३ क्ष को का.ई. तलाछी गाउमा बस्ने हेरामान महर्जनले तल लेखिएको कित्ता (कि.नं. ४६,४९)जोति रहेको देखिएकोले पछि कानून बमोजिम प्रमाणपत्र पाउने गरी हाल जोताहाको अस्थायी निस्सा दिने काम भएको छ भन्ने व्यहोरा उल्लेख गरी अरुको भए जग्गावालाको नामथर महलमा “अञ्चलआदेश श्री ५ सरकारलाई अधिया कुत बुझाएको” कि.नं.४९ को हकमा “कि.नं. ४६को व्यहोरा सदर” भनी मिति २०२४।०२।०२ गतेको ४ नं. अनुसूची बमोजिम जोताहाको अस्थायी निस्सा, साथै कि.नं. २३ ह को २९ को हकमा अरुको भए जग्गावालाको नामथर महलमा “श्री ५ सरकारको तहविल” उल्लेख गरी मिति २०२४।०२।१५ मा माया प्रजापतिलाई जारी भएको ४ नं. अनुसूची बमोजिमको जोताहाको अस्थायी निस्सा छानबिन समितिमा मजाबाबु प्रजापतिले पेश गरेको।
- **साविक नापीको फिल्डबुक विवरण (छानबिन प्र. अनुसूची १३३):**

क) साविकको फिल्डबुकमा मिति २०२३।०३।३० गते सर्भे नापी हुँदा नगर २३ ह को कि.नं. २२ को किसानको नामथर वतनमा कृष्ण महर्जन का.ई. दमैटोल, जग्गावालाको महलमा "खाली", किसानको व्यहोरामा "श्री ५ सरकारको तहविलमा अधियातिरी खाएको छु" र कैफियतमा महल "खाली" रहेको।

ख) साविकको फिल्डबुकमा मिति २०२३।०३।३० गते सर्भे नापी हुँदा नगर २३ ह को कि.नं. ३१ को किसानको नामथर वतनमा जोगमान महर्जन भन्ने न्हुच्छे बहादुर महर्जन का.ई. लाजिम्पाट, जग्गावालाको महलमा "खाली", किसानको व्यहोरामा "श्री ५ सरकारको तहविलमा तिरी खाएको छु" र कैफियतमा महल "खाली" रहेको।

ग) साविकको फिल्डबुकमा मिति २०२३।०३।३० गते सर्भे नापी हुँदा नगर २३ ह को कि.नं. ३५ को किसानको नामथर वतनमा नाति डंगोल का.ई. बटुटोल, जग्गावालाको महलमा "खाली", किसानको व्यहोरामा "श्री ५ सरकारको तहविलमा अधियातिरी खाएको छु" र कैफियतमा महल "खाली" रहेको।

घ) साविकको फिल्डबुकमा मिति २०२३।०३।३१ गते सर्भे नापी हुँदा नगर २३ क्ष को कि.नं. ७३ को किसानको नामथर वतनमा जीत बहादुर महर्जन का.ई., जग्गावालाको महलमा "खाली", किसानको व्यहोरामा " यी जग्गा कि.नं. ३ को ब्यहोरा सदर" र कैफियतमा महल "खाली" रहेको। (कि.नं. ३ मा "यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु"। भन्ने समेत व्यहोरा साविकको फिल्डबुकमा उल्लेख भएको।

➢ **पहिलो नापी अनुसार जग्गाधनी दर्ता श्रेष्ता (भूमिसुधार तथा मालपोत कार्यालयको के.अ.ब्यूरोलाई लेखेको च.नं. ८६४६ मिति २०७६।११।३० को पत्र) श्रेस्ता फाईलिङ रजिष्टर):**

गुठी लगत तथा तहविल कार्यालयको च.नं. २४२२ मिती २०४२।०१।१८ को पत्रानुसार तोक आदेशले वार्ड नं. २३ क्ष का ९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५, ६६ को जग्गा श्री ५ सरकार गुठीका नाउमा गएको। २०४२।०३।१६। गते (धर्मप्रसाद गौतम हस्ताक्षर), गुठी लगत तथा तहाविल कार्यालयको च.नं. २४२२ मिती २०४२।०१।१८।को पत्रानुसार तोक आदेशले वार्ड नं. २३ क्ष का ६७, ६९, ७०, ७१, ८१, ८२, ८३, को जग्गा श्री ५ गुठीका नाउमा गएको। २०४२।०३।१६। गते (धर्मप्रसाद गौतम हस्ताक्षर), ललिता निवास क्याम्प भित्रको वडा नं. २३ क्ष को ३४ कित्ताको ५३ रोपनी गुठी संस्थान गुठी लगत तथा तहविल कार्यालयको २०४२।०१।१८। गतेको पत्रादेशले गुठी कायम गरेको।

➢ **मिति २०४४।१०।२२ गते वाग्मती अञ्चल कार्यालयले सरकारले ललिता निवास क्याम्प भित्रको जग्गा राष्ट्रियकरण गरेकोले श्री ५ को सरकारको नाममा जग्गा दर्ता गर्नु भन्ने मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्रादेश (छानबिन प्र. अनुसूची १२४):**

२०४४ मा प्राप्त भई आएकोमा माग भएको विवरण सम्बन्धमा ललिता निबासको घर कम्पाउण्ड २९९-९-३-० जग्गा मध्येबाट श्री ५ को सरकारको हु.प्र. र श्री ५ को सरकारको मिति २०३६।०२।२७ गतेको निर्णय समेतबाट ललिता देविलाई वार्ड नं. २३ क्षबाट १ रोपनी, दामोदर प्रसाद उपाध्यायलाई वडा नं. २३ स को कि.नं. ८५ बाट १ रोपनी र कुमार बस्नेतलाई २३ स को कि.नं. २२ बाट २ रोपनी ७ आना २ पैसा पुरै र देखि बाहिरको कि.नं. १८ बाटोको पश्चिम तर्फ ०-३-२ गरी दुई रोपनी ल्याई साथै श्री ५ को सरकारको निर्णय अनुसार ललिता निबासको घर कम्पाउण्डबाट मे.क. कनक शमसेर लाई तवेला र ८ रोपनी जग्गा छुट्याई दिई सकेको हुँदा बाँकी

जग्गामा बनेको राष्ट्र बैंक रहेको, प्रधान मन्त्रि क्वाटर, प्रधान न्यायाधिस क्वाटर समेत बनेको यस देखि बाँकी जग्गा समरजंग कम्पनीको जिम्मा रहेको नेपाल गजेट भाग ३ मा श्री ५ को सरकार गृह मन्त्रालयको २०२१।८।१७ गतेको सुचना अनुसार सम्बन्धित ब्यक्तिहरुले क्षतिपुर्ति लिईसकेको साथै चाहिएको बखत छोड्ने गरी मोहीहरुलाई कमाउन दिई किसिम बमोजिमको आएको आयस्ताको कुत समरजंगबाटै राजस्वमा जम्मा समेत गरेको देखिन आएको हुँदा उक्त जग्गा मालपोत कार्यालय काठमाडौंलाई श्री ५ को सरकारको नाउमा दर्ता गरी लाल पुर्जाको ब्यवस्था गर्न २०४४।१०।२२।६ मा लेखि पठाईसकिएको हुँदा गुरु योजना अन्तरगत भवन निर्माण आदि गर्न सकिने" भनी बाग्मती अञ्चलाधीशको कार्यालयले बि.सं. २०४४।१०।२२ गते मा मालपोत कार्यालय, डिल्लीवजारलाई लेखेको पत्रमा गृह मन्त्रालयलाई बोधार्थ समेत दिई भौतिक योजना तथा निर्माण मन्त्रालयको च.नं. १०७५ मिति २०४४।११।२३ को पत्रको जवाफ दिएको।

➢ **मिति २०२४।१२।३० को श्री ५ को सरकारको जग्गा समरजंग कम्पनीलाई संरक्षणको जिम्मा दिएको अञ्चलाधिश कार्यालयको पत्र (२०२१ सालको लगतमा उल्लेख (का.फौ.त):**

जग्गा प्राप्ती ऐन, २०१८ बमोजिम अधिग्रहण गरिएको ललिता निवास क्याम्प भित्रको २१२ -१५-२-२.५ रोपनी जग्गा संरक्षण गर्ने गरी मिति २०२४।१२।३० को पत्रद्वारा बाग्मती अञ्चलाधिशको कार्यालयले समरजंग कम्पनीलाई संरक्षण गर्न जिम्मा दिएको पत्र। (जि.प्रशा.काठमाडौंमा पत्राचार गरिएको)

➢ **भूमि सुधार मन्त्रालय जग्गाधनी दर्ता श्रेस्ता (छानविन प्र. अनुसूची १३७) :** "गुठी लगत तथा तहविल कार्यालयको च.नं. २४२२ को मिति २०४२।०१।१८ को पत्रवाट तोक आदेशले वडा नं.२३ क्ष कि.नं.९,१०,११,१२,१३,१४,१५,१६,२५,२६,२७,२९,३०,३१,३२,४१,४२,४५,४६,४७,४९,५०,५२,६३,६४,६५,६६ को जग्गा श्री ५ सरकार गुठीका नाउमा गएको र कि.नं. ६७,६९,७०,७१,८१,८२ र ८३ को जग्गा श्री ५ गुठीका नाउमा गएको" भन्ने मिति २०४२।०३।१६ गते तत्कालीन कार्यालय प्रमुख धर्म प्रसाद गौतमले तोक निर्णय गरेको। उक्त तोक निर्णयमा २०७० सालमा टिकिन्छा गुठीमा दर्ता भई मोही कायम भएका कि.नं. २२,३१,३५ र ७३ का जग्गाहरु नभएको तर मिति २०५८।०१।१४ गते वारेश राम कुमार सुवेदीले गुठी तहसिल शाखा कार्यालयमा कि.नं. १५,२५,२८,४२ र ६३ का जग्गाहरु गुठीको नाममा दर्ता एवं हाल साविक गरी जग्गाधनी प्रमाण पूर्जा पाउँ भनी दिएको उक्त निवेदनमा उक्त ५ कित्ता जग्गा मध्ये कि.नं.१५,२५,४२,६३ मात्र तोक निर्णय भएको देखिएको बाँकि कि.नं.२८ को सम्बन्धमा तोक निर्णय भएको नदेखिएको अवस्थामा पनि वारेस राम कुमार सुवेदीले निवेदन मार्फत माग गरेको देखिएको।

➢ **भूमी सुधार तथा व्यवस्था मन्त्रालय मालपोत विभागले मालपोत कार्यालय डिल्लीबजार काठमाडौंलाई मिसिल पठाएको मिति २०४९।०९।२२ गतेको पत्र (छानबिन प्र. अनुसूची १३८):**

उपयुक्त बिषयको प.स.म ०४९/५०/१०२४,१०२५ जग्गा दर्ता च.नं २७५२ मिति २०४९।०९।०१ को पत्र साथ संलग्न फायल पेश हुँदा काठमाडौं जिल्लामा २०४२/०४३ सालमा श्रेस्ताबाट गुठी जनिएको जग्गाको पुर्जा तयार गर्ने सिलसिलामा निजी गुठी तथा रैकर जग्गा गुठीमा दर्ता हुन आएमा गुठीको लगत कट्टा गर्ने गुठी संस्थानको मिति २०४२।०३।२० को निर्णय रहेको र पारित लिखत फिल्डबुक अनुसारको जग्गा राज गुठीको नभै मिति २०१७।०३।३१को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखिएकोमा नापीले श्रेस्ता गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केहि कित्ताम श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिदा गुठीको मिति २०४२।०३।२०को निर्णय मिति २०१७।०३।३१को लिखत फिल्डबुक बमोजिम गरी श्री ५ सरकार गुठू

जनिएकोलाई संसोधन गर्ने अधिकार मालपोत ऐन २०३४ को दफा ७ (३) बमोजिम मालपोत कार्यालयलाई नै भएकोले सोहि ऐन बमोजिम संसोधन गर्न २०१७ साल पछि प्रजातन्त्रको पुन: स्थापनाको लागि भएका संघर्षहरुमा संलग्न भएको कारणबाट रोक्का तथा जफत भएको सम्पत्ती फर्ता दिने सम्बन्धमा श्री ५ को सरकार मन्त्री परिषदको निर्णय बमोजिम मन्त्री परिष्द सचिवालयको मिति २०४७।०२।१४, २०४७।०४।०८, २०४७।०५।०३ र भूमिसुधार तथा व्यवस्था मन्त्रालयको मिति २०४७।०६।०२ को पत्र अनुसार मालपोत विभागको मिति २०४७।०६।०९ को पत्र बमोजिम त्यस्ता रोक्का तथा जफत भएका जग्गाहरु फिर्ता कति भयो ? कति बाँकी छन साथै उल्लेखित श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता दिन बाँकी जग्गाहरु फिर्ता गरी सोको जानकारी गराउन ताहाँ कार्यालयको अलावा सबै मालपोत कार्यालयलाई समेत निर्देशन दिने भनी मिति २०४९।०९।२० मा निर्णय भएकोले निर्णय अनुसार गर्न गराउन हुन ताहाँ कार्यालयबाट प्राप्त शैलजा राणा समेतको मिसिल थान २ (दुई) पंजिका बमोजिम यसै साथ फिर्ता पठाईएको व्यहोरा अनुरोध गरीन्छ भन्ने व्यहोराको मिति २०४९।०९।२२ गतेको मालपोत विभागले मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्र।

➢ **कित्ता जग्गाको सम्पूर्ण टिप्पणी सहितको विवरण (५ कित्ता र १६ कित्ता गरी दुई चरणमा) (टिप्पणी संकलन फाईल) :**

**मिति २०५८।०१।१४ गते साविक कि.नं. १५,२५,२८,४२,६३ का जग्गा सम्बन्धमा गुं.सं.त.का.मा निवेदन परि कारवाही गर्ने क्रममा तयार भएको टिप्पणी श्रृंङ्खला:-**

१. तहसिल: श्रीमान का.न.पा. वडा नं. २३ क्ष कि.नं. २५ को ०-१२-० को जग्गाको मोही नाती महर्जन परलोक भएवाट मेरा नाममा दर्ता नामसारी गरी पुर्जा पाउ भनी तिर्थमाया महर्जनको निवेदन परेको।

२. पेश भएको नाता प्रमाणित फोटोकपीमा तिर्थमाया १, त्रिरत्न १ , नविन -१, कृष्ण -१ , मनिषा महर्जन समेत ५ जनाको नाम उल्लेख भएको देखिन्छ। उल्लेखित कि.नं. २५ को फि.वु.को जोताहाको नामथर महलमा नाती महर्जन का.क्षे. पानी पोखरी र किसान व्यहोरा महलमा यो जग्गा कि.नं. १८ ब्यहोरा सदर भनी उल्लेख भएकोमा सिट नं. १८ मा यो जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु भनी उल्लेख भएको, उक्त जग्गाको मोठ श्रेस्ता माग गर्दा श्री ५ को गुठीका नाममा भएको भनी पत्रसाथ मोठ फोटोकपी प्राप्त भएको र अनुसूचीमा समेत कि.नं. १८ को व्यहोरा सदर भनी जनिएको भनी पत्र प्राप्त भएको।

सो जग्गाको नियम अनुसार मोही नामसारी गरी पूर्जा दिने भनी वडा कार्यालयवाट प्राप्त सिफारिसमा देखिन्छ । सरजमिन गर्दा उक्त जग्गा निवेदकले भोगचलन गरी जोति भोगी आएको गुठी कायम हुनुपर्ने जग्गा हो भनी उल्लेख भएको, उक्त जग्गाको गुठी संस्थानको परिपत्र समेतलाई आधारमानी पूर्जा पाउ भनी निवेदनमा उल्लेख भएको सो जग्गाको फि.वु.मा यो जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई आएको छु भनी उल्लेख भएको हुँदा उक्त जग्गा निवेदकको माग अनुसार नामसारी गरी पुर्जा दिने सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयमा निर्देशनका लागि पेश गर्न उचित देखि पेश गर्दछु। जो आदेश । २०५८।०५।२५

माथि उल्लेखित जग्गाको सम्बन्धमा मिति २०५९।०४।१७ मा पेश भएको टिप्पणी अनुसार हुन पेश गर्दछु। जो आदेश। मिति २०५९।०४।१७।

यस्तै प्रकृतिका जग्गा सम्बन्धमा तुई भाइ भन्ने पंच नारायण महर्जनको फायलमा राय व्यक्त गरी सकेको हुँदा सोही अनुसार हुनको लागि पेश गरेको छु। २०५९।०५।१२

माथि उल्लेख भए बमोजिम उपर्युक्त निर्देशनको लागि गु.सं. केन्द्रीय कार्यालयमा. पेश गर्ने गरी सदर । मिति २०५९।०५।१८

२. (केन्द्र) :- श्रीमान, श्री ५ को सरकार गुठीको नगर २३(क्ष) कि.नं. २८ को ३-१५-, कि.नं. ४२ को ०-५-०, कि.नं. १५ को ८-५-०, कि.नं. ६३ को ०-४-०, कि.नं. २ को ०-१२-० जग्गाको दुईभाई भन्ने पञ्च नारायण महर्जन र तिर्थमाया महर्जन समेतको वा राम कुमार सुवेदीले जग्गा दर्ता गरी नामसारी गरी जग्गाधनी प्रमाण पुर्जा पाँउ भनी कारबाही चलेको निवेदन मिसिलको सम्बन्धमा कारबाही हुँदा उल्लेखित कित्ता नं. का जग्गाहरुको फिल्डबुकको कित्ता नं. को ब्यहोरामा यो जग्गा अञ्चलादेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई छु भन्ने उल्लेख हुनाका साथै २ नं. अनुसुचीमा समेत सोही ब्यहोरा उल्लेख भएको मोहीबाट गुठी जग्गा हो भन्ने सम्बन्धमा कुनै प्रमाण पेश मोठ श्रेस्तामा श्री ५ को सरकार गुठी लेखिएको कारण गुठी संस्थानको मिति २०५२।०५।३० को निर्णय अनुसार गुठी कायम गरी कुत बुझाई पाँउ भन्ने माग दावी भएको देखिदा यस्तै प्रकृतिका जग्गाको गुठी लगत सम्बन्धमा २०५२।१२।२२ मा कार्यालयबाट केन्द्रीय कार्यालय मा पत्राचार भएको समेत देखिदा यस्तो प्रकृतीको लगत निवेदकको माग दावी अनुसार गुठी कायम गर्न मिल्ने नमिल्ने सम्बन्धमा उपर्युक्त निर्देशन भै आउन त्याहाँ अनुरोध गर्ने गरी मिति २०५९। ०५।१८ मा निर्णय भएकोले उपर्युक्त निर्देशनको लागि अनुरोध गर्दछु भनी तहसिल शाखा कार्यालयको च.नं. ३९२ मिति २०५९।०५।१९ को पत्र साथ मिसिल प्राप्त हुन आएकोले पेश गरेको छु। श्रीमानको जो आदेश। मिति २०५९।०५।२४ गते

यसमा साविक का.न.पा. वडा नं. २३ कि.न. २८, ४९, १५, २५, ६३ समेतका जग्गामा विभन्न ब्यक्ति मोही कायम भै नाप नक्सा भएको र र गुठी लगत तथा तहसिल कार्यालयको मिति २०४२।०१।१८ च.नं. २४२२ को पत्र द्वारा श्री ५ को सरकार गुठीका नाँउमा दर्ता प्रमाणित भई भएको मोठ श्रेस्तालाई गुठी संस्थानमा जग्गाधनी प्रमाण पुर्जा प्राप्त भएको उल्लेखित कि.नं. का जग्गाहरुको हाल साविक गरी ना.सा. समेत गरी जग्गा धनि प्रमाण पुर्जा पाँउ भनी समेत विभिन्न ब्यक्तिहरुको माग दावी देखिदा यस्ता प्रकृतीको जग्गा सम्बन्धमा के गर्ने भनी कार्यालयबाट लेखी आएको।

२०२१ सालको नापीमा गुठी संस्थान आफु उपस्थित नहुँदा नियम जग्गामा श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी कालमोचन गुठी, श्री ३ गुठी, श्री ५ गुठी जस्ताका नाउमा नापी भएका र यसरी नापी हुँदा कि यकिन नभै वालि नलिदा धेरै रकम वाकी रहने कुरालाई समेत ध्यानमा राखी यस सम्बन्धमा के गर्दा उपयुक्त हुन्छ भनी स.स. मा पेश गर्दा पुर्जामा किटान भई गुठी नखुलेको हकमा निजी गुठी भनी दावी विरोध नपरेकोमा गुठी संस्थानको नाममा लगत कायम गरी कैफियतमा गुठीको नाम यकिन गर्न वाँकी भन्ने ब्यहोरा बनाई पुर्जामा उल्लेखित मोही हकबाट वक्यौता असुल उपर गरी लगत कायम गर्ने भन्ने समेत २०५२।०५।३० को स.स. बाट निर्णय भएको र सोहीलाई आधारमानी श्री ३ सरकार, श्री ५ को सरकार लेखिएका गुठीहरुको लगत कायम गरी वाली बुझ्दै आएको छ। यस उसले निवेदकहरुले मागदावी लिएको जग्गा साविक लगत नभिड्दैमा गुठीको होईन भन्न सक्ने अवस्था रहेन अत: माथी उल्लेखित कि.नं. का जग्गाहरु हाल साविक भिडाई हाल कायम मोहीहरुको नाम मोही कायम गरी नियमानुसार वालि लिई र नामसारी दा.खा. गर्ने कार्य शाखा कार्यालयकै क्षेत्राधिकार भएकोले ब्यक्तिबाट गर्न भनी निर्देशन दिनु पर्ने देखी निर्णयार्थ पेश गरेको छु।मिति २०५९।०६।१४
(हरिवोल आचार्य )

यसमा माग भएको कित्ता नं. जग्गाका सम्बन्धमा अन्य निकायबाट कुनै कारबाही भएको छ छैन ? यस्तै प्रकृती अन्य जग्गाका सम्बन्धमा कुनै कारबाही भएको छ की भए के-कति कारबाही भएको छ खुलाई पेश गर्न शाखा कार्यालयलाई निर्देशन दिने । मिति २०५९।०६।२३ ।

३. **(तहसिल)**: श्रीमान मिति २०५९।०५।१८ को आदेश अनुसार गु.सं. केन्द्रीय कार्यालयमा पेश गर्दा गु.सं. केन्द्रीय कार्यालयवाट यसमा माग भएका कि.नं. जग्गा सम्बन्धमा अन्य निकायबाट कुनै कारवाही भएको छैन यस्तै प्रकृतिका अन्य जग्गाका सम्बन्धमा कुनै कारवाही भएको छ कि ? भए के कस्तो कारवाही भएको छ खुलाई पेश गर्ने भनी मिति २०५९।०७।०५ च.नं. ७३३ को गु. सं. केन्द्रीय कार्यालय को पत्र साथ मिसिल प्राप्त भएकोले उचित आदेशको लागि पेश गर्दछु ।२०५९।०७।१४ ( हस्ताक्षर भएको ) ।

यस्तै प्रकृतिका फायल संलग्न मोठ श्रेस्ताको प्रतिलिपीमा उल्लेखित अन्य कि.नं. जग्गाहरु के कसरी को कसको नामा ज.ध. र मोही कायम भई दर्ता भएका छन ? फायल संलग्न फोटोकपीबाट मिति ०४९।०९।१ को निर्णय र बिभागको मिति २०४९।०९।०५ को निर्णय र मिति २०४९।०९।२३ को पत्रानुसार उल्लेखित कित्ता जग्गाहरुको श्री ५ को गुठीको श्रेस्ता खारेज गरी गुठी र बिभागलाई जानकारी दिई संयुक्त दा.खा. गरीदिने गरी ०४९।०९।२३ मा सहीछाप गरेको फोटोकपी देखिदा उक्त मितिमा यस्तै प्रकृतिका जग्गा सम्बन्धमा मालपोत कार्यालय बाट कुनै निर्णय भएको भएमा सो निर्णय फायल समेत माग गरी आएपछि छानबिन गरी आवश्यक कारबाही हुन पर्ने देखि पेश गरेको छु । २०५९।०७।१४ ( हस्ताक्षर भएको ) ।

श्रीमान ,मिति २०५९।०७।१४ को आदेशानुसार मा.पो. का.मा लेखि पठाउदा उल्लेखित मिसिल फेला नपरेको भनी २०५९।०८।१० को पत्रमा लेखि आएकोले उचित आदेशका लागि पेश गर्दछु ।२०५९।०८।११( हस्ताक्षर भएको ) ।

मालपोत कार्यालयमा मिति ०५९।०७।१४ को आदेशानुसार सोधनी गरी पठाउमा उपरोक्त व्यहोरा खुली आएको हुँदा मिति २०५९।०५।१२ को राय अनुसार हुन पेश गरेको छु । २०५९।०८।११ ( हस्ताक्षर भएको ) ।

उपरोक्त उल्लेख भए बमोजिम उचित निर्देशनको लागि गु.सं. केन्द्रीय कार्यालयमा अनुरोध गर्ने गरी सदर । २०५९।०८।२६ । ( हस्ताक्षर भएको ) ।

४. (केन्द्र): श्रीमान, यसमा माग भएका कि.नं. जग्गाका सम्बन्धमा अन्य निर्णयबाट कुनै कारबाही भएको छ छैन ? त्यस्तै प्रकृतीका अन्य जग्गाका कुनै कारबाही भएको छ की भए कस्तो कारबाही भएको छ खुलाई पेश गर्न मिति २०५९।०६।२३ का आदेशानुसार तहसिल शाखा कार्यालयमा लेखिएकोमा माग भएको मिसिल तामेली किताबमा हेर्दा दर्ता नभएको साथै ल.क. गुठीमा कारबाही चलेको छ छेन भनी सोधनी गर्दा उक्त फाटबाट कारबाही नभएको भनी लेखि आएको भन्ने ब्यहोराको च.नं. ४४ मिति २०५९।०५।०३ तथा च.नं. ३५ मिति २०५९।०८।१० को मालपोतको पत्र संलग्न गरी मिति २०५९।०५।१२ को पत्र अनुसार छन उचित निर्देशनका लागी भनी मिति २०५९।०८।२६ गतेको टिप्पणी राय उक्त तहसिल शाखाबाट मिसिल प्राप्त हुन आएकोले पेश गरेको छु । श्रीमानको जो आज्ञा । यसमा मिति २०५२।०५।३० को गुठी संस्था संचालक समितिको निर्णय हेर्दा नापीको समयमा मोहीहरु वनाई गुठीको नाम एकिन हुन नसकेको अज्ञानताबस श्री ५ को गुठी श्री ५ को सरकार गुठीको नाउमा नापी भएको र सोही आधारमा कित्ता कायम भएकोमा कित्ता जग्गाहरु फिल्ड बुकमा लेखिएको ब्यहोरा मोहीसँग भएको प्रमाण बुझ्ने सोबाट पनि नभए जुन गुठीको नाममा दर्ता प्रमाणित भएको छ सोहीमा कायम गर्ने भन्ने लेखिएको पाईयो श्री ५ को सरकारका नाममा दर्ता प्रमाणित भईसकेको देखिएकाले अन्याय

गर्न नसकेपनि संलग्न फिल्डबुक हेर्दा यो जग्गा अञ्चलाधेश मार्फत श्री ५ को सरकार लाई अधिया तिरेको भनेको र केहीमा श्री ५को सरकार र समरजंग कम्पनी भनी उल्लेख भएको पाईयो। के आधार ले त्यस्तो भएको हो र उक्त जग्गाको वाली बुझाएको छ छैन। यो श्री ५ को सरकारको नाउमा दर्ता हुने होईन गुठी भनेकोले गुठीलाई नापी अनुसारको छ छैन सो सम्पुर्ण ब्यहोरा नापीसँग खुलाई पेश गर्नु र यस सम्बन्धमा कुनै कागज प्रमाण भए सो समेत राख्न लगाउने । मिति २०५९।०९।०५ ।

श्रीमान, आदेशानुसार निवेदक वा राम कुमार सुवेदीलाई यस कार्यालयबाट बुझ्दा मागदाविका उल्लेखित कित्ता जग्गा साविक देखी कै गुठीका जग्गा हुन सोही अनुसार साविक नापीमा गुठी जनिई जग्गा धनि दर्ता श्रेस्ता तयार भएको हो। उक्त जग्गा श्री ५ को सरकारले अधिग्रहण गरेको भन्ने हल्लाका भरमा हाम्रो अज्ञानताबस श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चालिधिस कार्यालय भनी लेखिन गएको हो। जग्गा गुठी हो गुठी बाहेक अन्यत्र वाली बुझाएको छैन। भन्ने समेत ब्यहोराको निज वारेशले मिति २०५९।०९।१६ मा कागज गरीदिएकाले पेश गरेको छु। श्रीमानको जो आदेश। मिति २०५९।०९।१६ गते ।

यसमा मिति २०५२।०५।३० को स.स. को निर्णय हेर्दा नापीको समयमा मोहीहरुलाई अज्ञानताबस श्री ५ गुठी श्री ३ गुठी श्री ५ को सरकार गुठीका नाममा नापी भएको र सोही आधारमा श्रेस्ता कायम भएको सम्बन्धमा फिल्ड बुकमा लिखितको ब्यहोरा मोहीसँग भएको प्रमाणबाट गुठी एकिन गरी बक्यौता समेत असुल गर्ने मोही सँग भएको प्रमाणबाट गुठी एकिन नभएमा जुन गुठीका नाममा नापी भएको छ सोहीमा लगत कायम गरी वक्यौता असुल गर्ने भन्ने समेत रहेछ।

यसमा माग देखिएको साविक कित्ता नं. १५, २८, २५, ४२, ६३, गरी लगत तथा भद्रकालीको मिति २०४२।०१।१८ गते च.नं. २४२२ को पत्रानुसार तोक आदेशले ०४२।०३।१६ मा दर्ता प्रमाणित भएको रहेछ। यसरी गुठीकै नाऊमा दर्ता प्रमाणित भईसकेको अवस्थामा गुठी संस्थानले अन्यथा भन्न सक्ने अवस्था देखिएन । तापनी उक्त संचालक समितिको आदेशानुसार फिल्ड बुकमा रहेको ब्यहोरा मोहीका प्रमाण पनि बुझ्ने भन्ने भएकोले फिल्डबुकको किसानको ब्यहोरामा अञ्चलादेश मार्फत सरकारलाई अधिया तिरेको भन्ने उल्लेख भएको र यस सम्बन्धमा मोहीसँग सोधनी गर्दा उक्त जग्गाहरु श्री ५ को सरकारले अधिकरण गरेको भन्ने हल्लाको भरमा हाम्रो अज्ञानताबस श्री ५ को सरकार समरजंग कम्पनी अञ्चलाधिस ब्यहोरा मात्रै लेखिन गएको हो। यसको कही कतै वाली बुझाएको छैन। गुठी मै बुझाउनु पर्ने हो र गुठी मै बुझाएका छौ भन्ने बयान गरेको र नापी(नया) मा श्री ५ को सरकार समरजंग कम्पनी लेखिएकोमा समरजंग सँग बुझ्दा उक्त कार्यालयको मिति २०५९।०४।१० गते प.स. ०५९/०६० च.नं. ५ को पत्रबाट गुठीको जग्गा हो होईन यस कार्यालयबाट भन्न नसकिने के हो तहाँको लगत हेरी गर्नु भनी लेखि आएको यसबाट उक्त कार्यालयको जग्गा नभएको प्रष्ट हुन आउछ । यस उसले फिल्ड बुकको घर वा जग्गा धनि को महलमा लेखिएको ब्यक्ति वा संस्थाले पनि आफ्नो नभएको भनेको र उक्त जग्गा धनि महल लेखिएको मोहीहरुले पनि उक्त जग्गा गुठीको भनेको र स्थलगत सर्जमिन तथा सम्बन्धित वडाले पनि गुठीको हो भनी सिफारिस गरेकोबाट उक्त जग्गा गुठीको होईन भन्न सक्ने अवस्था देखिएन अत: साविक नापीको कित्ता नं. २८, ४२ को हाल नापीमा कित्ता नं. ७२, ७३, ९१ ,१८र साविक कित्ता नं. १५, ६३, २५, हाल कित्ता नं. ७६, ७८, ७४, ४७ कायम भएको जग्गाहरु मध्ये कित्ता नं. ७८ जग्गा मोही तथा जग्गाधनी महल खाली भएकोले गुठी तैनाथी कायम गर्ने र अन्य कित्ताको सम्बन्धमा हाल साविक भिडाई साविक जुन गुठीको नाममा दर्ता प्रमाणित भएको छ सोही गुठीका नाँउमा लगत कायम गरी

वक्यौता कुत समेत असुल उपर गर्न भनी शाखा कार्यालय तहसिललाई आदेश हुनुपर्ने देखी निर्णयार्थ पेश गर्दछु। मिति २०५९।१०।१३ ।

यसमा कार्यालयवाट समस्या देखिएको तर समस्याको समाधान गर्ने बाटो सम्बन्धमा कुनै राय प्राप्त भएको फायलबाट देखिएन । यसर्थ यसमा साविक लगत भिड्ने नभिड्ने के हो ? यसमा स.स. को मिति २०५२।०५।३० गते को परिपत्र लागु हुने नहुने के हो ? कार्यालयवाट यकिन राय टहर प्राप्त भएको नदेखिएकोले कार्यालयबाट यकिन राय ठहर साथ पेश गर्न निर्देशन । मिति २०६०। ०१।१६ गते ।

५. (तहसिल): श्रीमान यसमा उपरोक्तानुसार श्री गु.सं. केन्द्रीय कार्यालयमा अनुरोध गरिएकोमा ताँहा बाट समस्या देखिएको तर समस्या समाधान गर्ने वाटो सम्बन्धमा राय नदेखिएको साविक लगत भिड्ने नभिड्ने के हो ? स.स.को ०५२।०५।३० को परिपत्र लागु हुने नहुने के हो ? राय ठहर साथ पेश गर्ने निर्देशन दिने भनी २०६०।१।१६ मा निर्णय भै च.नं. २४०२ मिति २०६०।०१।२३ को पत्रसाथ फायल फिर्ता हुन आएकोमा फायल संलग्न कागजात हेर्दा फि.वु.मा केवल श्री ५ को सरकार कुत बुझाएको भन्ने माग उल्लेख भएको कुत बुझाएको भरपाई वा रसिद पेश भएको नदेखिएको हुँदा यही गुठीको जग्गा हो भन्ने दुविधा परेकोले आवश्यक निर्देशनका निमित्त पेश गरेको छु । जो आदेश । २०६०।०६।०५ (हस्ताक्षर भएको) ।

६. श्रीमान यसमा उपरोक्तानुसारको जग्गा नापीका समयमा फिल्डबुकको किसानको व्यहोरा महलमा श्री ५ को सरकारलाई कुत बुझाई आएको भन्ने व्यहोरा उल्लेख भएको मोठ श्रेस्ता खडा हुँदा ज.ध. मा श्री ५ को सरकार गुठी भन्ने उल्लेख भएको मोठ श्रेस्ता खडा हुँदाको फायल मालपोत कार्यालयवाट प्राप्त हुन नसकेको अबस्था छ । गुठी संस्थानको आदेश अनुसार साविक लगत भिड्ने नभिड्ने के हो ? स.स.कको मिति २०५२।०५।३० को परिपत्र लागु हुने नहुने के हो ? भन्ने भएकोमा फायल संलग्न कागजातहरुबाट हाल सम्म कहि कतै कुतबाली बुझाएको फायल संलग्न कागजातबाट हाल सम्म कहि कतै कुतवाली बुझाएको भर्पाई वा रसिद संलग्न छैन तसर्थ के कुन लगत भिड्छ भन्ने अप्ठारो परेको र मिति २०५२।०५।३०को परिपत्र अनुसार नापीको समयमा मोहीलाई गुठीको एकिन नाप प्राप्त हुन नसकि अज्ञानतावस श्री ५ गुठी , श्री ३ गुठी , श्री ५ सरकार गुठी, श्री ३ सरकार गुठी , कालमोचन गुठी जस्ता कुत वाली असुल उपर गर्ने कार्यालयका नाममा नापी भएका र सोही आधारमा श्रेस्ता कायम भएकोमा यस्ता जग्गाहरु फिल्डबुकमा लेखिएको व्यहोरा मोहीसँग भएको प्रमाण समेत उक्त गुठी कुन हो भनी एकिन नभएमा माथि उल्लेखित नाम लेखि नापी भएका जग्गाहरुलाई गुठी संस्थानको नाममा जग्गाको लगत कायम गरी बक्यौता समेत असुल उपर गर्ने भन्ने भएकोमा यसरी नापीका बखत गुठी उल्लेख नभएवाट कार्यालयलाई दुविधा भएकोले आवश्यक निर्देशनका लागि सो सम्बन्धी फायल नै श्री गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गर्नु पर्ने देखि पेश गर्दछु । जो आदेश । २०६०।०६।०७ ( हस्ताक्षर भएको ) ।

उल्लेखित कि.नं. का जग्गाहरुको सम्बन्धमा मैले मिति २०५९।१२।१२ र २०५९।०७।१४ मा भएको व्यहोरा उल्लेख गरी सकेको । साविक फिल्डबुकको कैफियत व्यहोरामा यो जग्गा अंचल आदेश मार्फत श्री ५ को सरकारलाई अधीया गरी कुत बुझाई आएको भन्ने व्यहोरा उल्लेख हुनको साथै नयाँ नापीको फिल्डबुकको ज.ध. महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको । यस्तै प्रकृतिको जग्गा सम्बन्धमा मिति २०५२।१२। २३ मा भएको व्यहोरा उल्लेख गरी गुठी संस्थानमा पठाएको पत्रको फोटोकपी समेत फायल संलग्न रहेको । निवेदकहरुवाट के कुन गुठीको के कुन लगतबाट भिड्ने जग्गा हो के कति साल सम्मको बाली बुझाई आएको छ भन्ने कुनै आधार प्रमाण पेश नगरेको अबस्थामा यो गुठीको यही लगतबाट भिड्ने जग्गा हो

भनी एकिन हुन नसकेको साथै २०५२।०५।३० को परिपत्र लागु हुने नहुने सम्बन्धमा समेत उपरोक्त कुराहरुवाट दुविधा हुन गएकोले सो सम्बन्धमा आवश्यक निर्देशनको लागि गु.सं. केन्द्रीय कार्यालयमा पेश गरेको छु । २०६०।०६।८ ( हस्ताक्षर भएको )।

७. (केन्द्र): श्रीमान, यसमा मिति २०६०।०१।१६ को आदेशानुसार तहसिल शाखा कार्यालयमा लेखि पठाउदा साविक फिल्डहरुको कैफियत ब्यहोरामा यो जग्गा अञ्चालेदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई आएको भन्ने ब्यहोरा उल्लेख हुनाका साथै नया नापिको फिल्डहरुको जग्गाधनी महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको । यस्तै प्रकृतीका जग्गा सम्बन्धमा मिति २०५१।१२।२३ मा भएको ब्यहोरा उल्लेख गरी गुठी संस्थामा पठाएको पत्रको फोटोकपी समेत फायल संलग्न रहेको । निवेदकहरुबाट के-कुन गुठी को के-कुन लगतबाट भिड्ने जग्गा हो ? के-कति साल सम्मको वाली बुझाई आएको छ भन्ने कुनै आधार प्रमाण पेश नगरेको अवस्थामा यो गुठीको यही लगतबाट भिड्ने जग्गा हो भनी यकिन हुन नसकेको साथै २०५२।०५।३० गतेको परिपत्र लागु हुने नहुने सन्बन्धमा समेत उपरोक्त कुरा द्विविधा हुन आएकोले सो सम्बन्धमा आबश्यक निर्देशनको लागी भनी २०६०।०६।०८ गतेको पत्र साथ प्राप्त हुन आएकोले पेश गरेको छु श्री ५ को जो आदेश । मिति २०६०।०६।२८ ।

८. यसमा उपरोक्त उल्लेखित सम्बन्धमा उपयुक्त निर्देशनको लागी पेश गर्दछु ।मिति २०६०।०६।२८ । आदेशानुसार शाखा कार्यालय तहसिलमा लेखि पठाउदा नयाँ नापीको फिल्डबुकको महलमा अञ्चलादेश मार्फत श्री ५ को सरकार अधियामा बुझाई आएको समरजंग कम्पनी उल्लेख गरिएको छ गुठीमा के-कुन लगतवाट भिड्ने हो यकिन छ छैन । कति बुझिएको पनि देखिदैन । ०५२।०५।३० परिपत्र लागु हुने नहुने द्विविधा परेको भनी लेखि आएको रहेछ ।

यसमा अञ्चल कार्यालय मार्फत श्री ५ को सरकारलाई कुत बुझाई आएको भनिएकोमा उल्लेखित जग्गाको उक्त ठाँउमा वाली नबुझाईएको भन्ने भनाई मोहीहरुको देखिन्छ भने समरजंग कम्पनी भनी उल्लेख गरेकोमा उक्त कार्यालयमा बुझ्दा उक्त कार्यालयले दावी नलिई गुठीको भए नियमानुसार गर्न गुठीलाई पत्राचार गरेको देखियो । यिनै जग्गाको सम्बन्धमा मा.पो. का. काठमाडौं लाई पत्राचार गर्दा गुठी लगायत तहसिल कार्यालयको मिति २०४२।०१।१८ को पत्र अनुसार श्री ५ को सरकार गुठीमा गएको र नापीको समयमा मोहीलाई गुठीको नाम एकिन हुन नसकी अज्ञानता बस श्री ५ गुठी, श्री ३ गुठी, श्री ५ सरकार गुठी लेखिएकोमा मोहीसँग भएको प्रमाणबाट समेत उक्त गुठी कुन हो ? भनी एकिन नभएमा गुठी संस्थानको नाममा लगत कायम गरी वक्यौता समेत असुल उपर गर्ने भन्ने २०५२।०५।३० मा बसेको संचालक समितिको निर्णय भन्ने समेतको डिल्लीबजारलाई मिति २०५३।०१।२० मा पत्राचार गरेको देखिन्छ यसमा सम्बन्धित पक्षले गुठी जग्गा भनेको र गुठी यकिन नभएपनी गुठीको लगतमा लगत कसी वाली असुल गर्न भनी स.स. को निर्णय हुँदा गुठीको जग्गा होईन भन्न सक्ने अवस्था देखिएन । तर उक्त ठाँउमा सुवर्ण शमसेरको जग्गा भएको र सो जग्गा अपहर गरी श्री ५ को सरकारले जिम्मा लिन समरजंग कम्पनीलाई रेखदेख गर्न दिएको र यि जग्गाहरुको सम्बन्धमा पनि निजहरुको हक लाग्ने अथवा यस सम्बन्धमा निजका सन्तानसँग यथार्थ जानकारी लिने निर्णयार्थ पुग्दा अझ राम्रो हुने देखी पेश गरेको छु ।

यसमा पेश भए बमोजिम सम्बन्धित ब्यक्तिहरु बुझ्दा उपयुक्त नै हुने हो निजहरुलाई बुझी प्रतिकृया माग गर्ने र फिल्ड बुकको जग्गा धनि ब्यहोरामा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देखिएकोले

समरजंग कम्पनीको प्रतिक्रिया समेत समेत माग गरी पेश गर्ने माग भएका कित्ता नं. जग्गाहरुको मोठ श्रेस्ताको प्रतिलिपी माग गर्ने। मिति २०६०।०८।०४ गते।

श्रीमान, यसका आदेशानुसार रुक्म शमशेर ज.ब.रा. समेतलाई म्याद बुझी झिकाई बुझ्दा माग दावीको जग्गा निजहरु दर्तावाला र निवेदन जोताहा भएको टिकिन्छा गुठी(राज गुठी) को जग्गा हो। हाम्रो पिताको सम्पुर्ण जग्गा जमिन सर्वोस्व हरण भए पश्चात सर्मे वादीमा श्री ५ को सरकार अञ्चलाधिश कार्यालय र समरजंग कम्पनी लेखिन गएको हो। देशमा प्रजातन्त्र पुन: स्थापना भए पछी हाम्रो सम्पुर्ण श्री सम्पती फिर्ता भई रैंकर तर्फका जग्गा हाम्रा नाममा दर्ता नामसारी गराई सकिएको र यो जग्गा राज गुठीको भई राज गुठी जग्गामा सम्पुर्ण दर्तावालाको हक समयमै जोताहाका नाममा कायम हुने कारणले हामिले दर्ता माग नगरेका हौ। जोताहाका नाममा दर्ता गरीदिए फरक नपर्ने भनी कागज गरीदिएका समरजंग कम्पनीले गुठी जग्गा हो होईन यस कार्यालयबाट भन्न नसकिने त्यहाँको लगत हेरी गर्नुहुन भनी च.नं. ५ मिति २०५९।०४।१० मा पत्र लेखेको र मागदावीका जग्गाको श्रेस्ता उतार मिसिल संलग्न भैरहेकोले पेश गरेको छु श्रीमानको जो आदेश। मिति २०६०।०८।२९ गते।

यसमा आदेशानुसार बुझ्दा माथी उल्लेखित ब्यहोरा बुझिन आएको र उक्त जग्गा टिकिन्छा गुठी भनेको र टिकिन्छा गुठी राज गुठीको लगतमा देखिन्छ। साविकमा खला मौजा सँग भिड्छ भन्ने कुरा मोहीले नभने सम्म कार्यलयले यही खला भिड्छ भन्न नसकिने कतिपय मोहीले त गुठीको नामसम्म भन्न नसकी श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी भनेको र सो भनेकै आधारमा श्रेस्ता प्रमाणणित भएको देखियो वास्तवमा उल्लेखित जग्गा गुठी कै हो तर के नामको गुठी भन्न नसकेकै आधारमा गुठीमा लगत कायम गर्ने हो भने गुठीको जग्गा नै लोप हुने स्थिती सिर्जना हुने भएकोले २०५२।०५।३० को स.स. को निर्णयले सम्बन्धित ब्यक्तिहरुको प्रमाणहरु उल्लेख गर्ने सो प्रमाणबाट पनि गुठी नछुटिए जुन गुठीको नाउमा दर्ता श्रेस्ता कायम छ सोहीमा लगत कायम गरी वाली असुल गर्ने पछी गुठी देखिन आएमा जुन गुठी देखिन्छ सोहीमा कायम गर्ने भन्ने समेतको निर्णय भएमा पनि हाललाई जुन गुठीका नाममा श्रेस्ता कायम छ सोहीमा लगत कसी वाली असुल गर्ने टिकिन्छा गुठीको जग्गा भन्ने हुँदा उक्त गुठीमा लगत भिडाउने तर्फ पनि कारबाही गर्न मेरो तहसिल शाखा आदेश हुनुपर्ने आदेश हुनुपर्व कानूनी रायको पनि परामर्श लिई कारबाही टुङ्गोमा पुग्न उपयुक्त देखी पेश गरेको छु। मिति २०६०/०९/०१।

हेम जी, यसमा मोठ श्रेस्तामा श्री ५ को सरकार गुठी जनाएको र मोहीहरुलाई गुठी कायम गर्न माग गरेको जग्गा सम्बन्धमा कसैको दावी समेत रहे भएको नदेखिदा २०५२।०५।३० को स.स. को निर्णय बमोजिम गर्ने सम्बन्धमा राय दिनहुन। २०६०।०९।०१ ।

श्रीमान, मोठ श्रेस्तामा श्री ५ को सरकार गुठी जनिएको र मोहीहरुले गुठी कायम गर्न माग गरेको अन्य कसैको दावी नदेखिए २०५२।०५।३० को स.स. को निर्णय बमोजिम गर्न मिल्ने नमिल्ने भन्ने नै मुख्य प्रश्न रहेको पाईयो। सञ्चालक समितिको २०५२।०५।३० को निर्णय सबै गुठी जग्गाको लगत भिडाई गुठीको लगत श्रेस्ता अध्यावधिक गर्ने सम्बन्धी मार्गदर्शन भएको हुँदा प्रस्तुत केशका हकमा पनि लागु नहुने भन्न मिल्दैन। मात्र सार्वजनिक जग्गा दर्ता गर्न नहुने जग्गा दर्ता भई सार्वजनिक सम्पती हिनामिना हुने तर्फ भने बिशेष सजग रहनु पर्ने हुन्छ।

गुठी संस्थान ऐन, २०३३ को दफा १७ को देहाय(६ ग) मा गुठीको लागी सकभर सोही गुठीको आयस्तरबाट खर्च गर्ने भन्ने र गुठी संस्थान कार्य ब्यवस्था विनियम, २०५९ को विनियम १० को देहाय ( घ) र

(ङ) मा क्रमश गुठी अधिनस्थ  जग्गा गुठी संस्थानको नाउमा सम्बन्धित गुठीको नाउ जनाई दर्ता गरीने छ र गुठीको जग्गा दर्ता गर्दा साविक गुठीको नाउ खुलाई जुन किसिमको गुठी जग्गा हो दर्ता श्रेस्तामा सोही किसिमको गुठी जग्गा जनाउन पर्ने छ भन्ने ब्यवस्था छ । सो ब्यवस्था समितिले मनन गरी समितिले २०५२।०५।३० मा मार्ग दर्शन (  Guide Line)  दिने निर्णय गरेको हो । सो निर्णयले तह तह (Step by Step) गई जग्गाको लगत यकिन गर्न सजिलो हुने ब्याख्या गरेको छ । त्यस्तो निर्णय प्रस्तुत केसको हकमा पनि लागु गर्न द्धिविधा हुनुपर्ने म देख्दिन । निर्णय लागु गर्ने नाउमा एकचोटी अन्तिम बिकल्प रोज्नु भने कदापी हुदैन।

तहसिल शाखा कार्यलयको मिति २०५९।०५।२९ को पत्रमा यस्तै प्रकृतीका जग्गा सम्बन्धमा मिति २०५२।१२।१३ मा केन्द्रीय कार्यालयमा पत्राचार भएको भन्ने उल्लेख छ । तर सो मा के निर्णय आदेश भयो भन्ने कही कतैबाट खुल्दैन तसर्थ सो हेरी दोहोरो नहुने गरी उक्त पत्र समेत हेरी निष्कर्षमा पुग्नु पर्ने हुन्छ ।

बिलबुकमा अञ्चलादेश मार्फत श्री ५ को सरकारमा अधिया कुत बुझाई खाई आएको भनी लेखिएकोमा पछी गुठीको नाममा श्रेस्ता प्रमाणित भएको देखिदा सो सम्बन्धमा निर्णय हुँदाको मिसिल समेत हेरी गुठी यकिन गर्नु पनि राम्रो हुन्छ ।

सुवर्ण शमशेर ज.ब.रा. बुझ्न केन्द्रीय कार्यालयबाट म्याद पत्र पठाएकोमा सुनुती राणाले  बुझिलिई सुनिती राणा,  शैलजा राणा र रुक्म शमशेर ज.ब.रा. ले श्री ५ सरकार को सरकार टिकिन्छा गुठीको खला नं. १० को जग्गा भनी कागज गरेको छ । फायल संलगन रहेको १९९४ सालको रसिदको फोटोकपीमा पनि श्री ५ को सरकार टिकिन्छा गुठीको असौगाल खेत ३।।।  भन्ने  लेखिएको छ । त्यसतर्फ हेरी यकिन भएको छैन । समितिको २०५२।०५।३० को निर्णयमा नापीको समयमा मोहीलाई गुठीको नाम यकिन हुन नसकी अज्ञानतावस श्री ५ गुठी, श्री ३ गुठी, श्री ५ सरकार गुठी, श्री ३ सरकार गुठी जस्ता कुत असुल उपर गर्ने कार्यालयका नाममा नापी भएको र सोही आधारमा श्रेस्ता कायम भएकोमा यस्ता जग्गाहरुको फिल्डबुकमा लेखिएको ब्यहोरा मोहीसँग भएको प्रमाणबाट गुठी यकिन गरी वक्यौता असुल गर्ने भन्ने समेत उल्लेख भएको हुँदा  र यो फायलबाट दर्तावाला तथा जोताहा हुँ भन्नेले टिकिन्छा गुठीको जग्गा भनेको र सो हेरी लगत यकिन गर्ने कार्य ने बाँकी रहेको देखिन्छ  तसर्थ माथी उल्लेखित ऐन, विनियमको मर्म तथा समितिको २०५२।०५।३० को पत्रको मनसाय मुताविक सवुद प्रमाण समेत बुझी लगत यकिन गरी कार्य गर्नु पर्ने हुन्छ ।

यसै फायलमा रहेको फोटोकपी कागजबाट का.न.पा. वडा नं. २३ क्ष कि.नं. २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ८१र ८२ को जग्गा मिति २०४९।०९।०१ को निर्णय र विभागको २०४९।०९।२० को निर्णय र २०४९।०९।२३ को पत्राअनुसार श्री ५ को गुठीको श्रेस्ता खारेज गरी गुठी संस्थान समेतलाई र विभागलाई जानकारी दिने सुनिती राणा, शैलजा राणा र रुक्म शमशेर ज.ब.रा.  का नाममा संयुक्त दा.खा. गर्ने मिति २०४९।०९।२३ मा निर्णय भएको भन्ने समेत लेखिएको छ । यो कारबाहीमा आएका र उल्लेखित कित्ता जग्गा समेत एकै निर्णयले श्री ५ सरकार गुठीका नाममा प्रमाणित भएकोमा कही कित्ताको भने गुठीको नामबाट ब्यक्तिको नाममा जाने केही कित्ता मात्र गुठी हुने भन्ने के आधारबाट प्रमाणिबाट देखियो  भन्ने पनि खुलेन तसर्थ दुवै कारबाहीका जग्गा एकै प्रकृतीका र गुठीका लगतका भएका अवस्थामा साविक लगत बमोजिम गुठी नै कायम गर्ने तर्फ गुठी संस्थान ऐन, २०३३ को दफा ३९ बमोजिम कारबाही गर्नु पर्ने समेत हुन्छ । तसर्थ यो कारबाहीमा आएका समेत उल्लेखित कित्ता जग्गाहरुको वर्तमानको मोठ श्रेस्ताको अवस्था समेत बुझी सोधी लेखिए बमोजिम लगत यकिन गरी कार्य टुङ्गो लागाउनु पर्ने लागेको राय पेश गरेको छु ।  मिति २०६०/१०/७ गते । हेम सुवेदी ।

यसमा प्रस्तुत कारवही फाईल अध्ययन गर्दा मागदावीका कित्ता जग्गाहरु मोठ श्रेशतामा श्री ५ को सरकार गुठी जनाई दर्ता वाँकी अवस्थामा रहेको मा.पो का.को रेकर्डमा देखीएको र फिल्डवुकमा समरजङ्ग कम्पनी उल्लेख भई नाप जंच भएको र कैफियत महलमा श्री ५ को सरकारको हो अध्यायमा कूत वुझाइ खाई आएको भन्ने उल्लेख भएको गुठीको जग्गा भएकोले २०५२/०५/३० को निर्णय बमोजिम गुठीमा कूत वुझाई दर्ता गरी पाउं भन्ने माग दावी देखियो। फिल्ड वुकमा उल्लेख भएका मोहीहरु वुझ्दा उक्त जग्गा श्री ५ को सरकारले जफत गरेको भन्ने हल्लाको भरमा हाम्रो अज्ञानतावश श्री ५ को सरकार समरजंग कम्पनी लेखिन गएको हो। हामीले कतै कुत वाली वुझाएको छैनौ। गुठीमै वुझाउनु पर्ने गुठीकै जग्गा हो भन्ने वयान गरेको र समरजङ्ग कम्पनी वुझ्दा गुठी को जग्गा हो होइन भन्न नसकिने के हो तहँको लगत हेरी गर्नु भन्ने जवाफ प्रप्त भएक र समरजङ्ग कम्पनीले केही जग्गा रेखदेख गरेको भन्ने उल्लेखित गरेवाट यी कार्वाही मा आएका कित्ताजग्गा श्री ५ को सरकार वा सार्वजनिक हुन भन्न सकिने आधार देखिएन। साथै नापीका वखत समरजङ्ग कम्पनी उल्लेख भै नपनक्सा भएका अधिकांश जग्गा व्यक्ति विशेषको नाउंमा दर्ता भएको मा.पो का.को रेकर्डवाट देखिन्छ। कार्वाहीमा आएक जग्गाको समेत व्यक्ति विशेषले रैकर तर्फ दर्ताको लागि मागदावी गरेमा मा.प.का.वाट गुठी संख्याको मिति २०५२/५/३० को निर्णय बमोजिम गुठीको हुने भन्ने निर्णय गरेको फाईल संलग्न कागजातहरुवाट देखिन्छ। रैकरतर्फ जग्गा दर्ता माग गर्ने व्यक्तिसँग वुझ्दा यि जग्गहरु गुठी अन्तर्गत जग्गा हुन् भनी साविक गुठीको लगत समेत उल्लेख गरी वयान कागज गरेको देखिन्छ। साथै साविकमा टिकिन्छा गुठीमा कुत वुझाएको भर्पाई समेत संलग्न भएको देखिन्छ ।

यसरी माथि उल्लेखित सवुद प्रमाणको आधारमा कारवाहिमा आएका कित्ता जग्गाहरू गुठीको होईन भनी अन्यथा हुने गरी कार्वाही गर्न सक्ने अवस्था देखिएन। मोहीको संवन्धमा संमानित अदालतको फैसला पेश भएको देखिन्छ । यस्तै गुठीका जग्गा संरक्षण गर्ने संवन्धमा अ.दु.अ.आ को मिति २०६०/१२/३ को पत्रमा गुठीको धर्मलोप हुन नपाउने व्यवस्था मिलाउन तथा गुठीको जग्गाहरुको अध्यावधीक श्रेस्ता लगत राखी ब्यक्तिले आफ्नो नाउमा दर्ता गर्न नसक्ने र गुठीले आफ्नो जग्गाको सुरक्षा गर्ने व्यवस्था मिलाउन निर्देशन भएको र शाखा प्रमुख एवम् मुख्य कारन अधिकृतबाट समेत गुठीकै जग्गा भएको र लगत यकिन आएको अवस्थामा २०५२।०५।३० को परिपत्र बमोजिम लगत अध्यावधिक गर्नु पर्ने भन्ने राय प्राप्त भएकोले २०५२।०५।३० को स.स. को निर्णय बमोजिम बाँकी वक्यौता कुत असुल गरी लगत अध्यावधिक गर्न कार्यालयलाई निर्देशन दिने। (मिति २०६०।१२।२७)।

श्रीमान, आदेशानुसार तहसिल शाखा कार्यालयमा लेखि पठाउदा हाल कायम कि.नं. ७४, ७६ को जग्गाहरुको फायल संलग्न मोठ श्रेस्ताको फोटोकपी हेर्दा ज.ध. श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित मोठ श्रेस्ता रहेको अवस्थामा साविक मोठ श्रेस्तामा श्री ५ को सरकार गुठी उल्लेख भएको बाहेक अन्य गुठीको जग्गा हो भन्ने फिल्डबुक २ नं. अनुसुची र अन्य प्रमाणबाट समेत पुष्टी नहुँदाको अवस्थामा ज.ध. श्री ५ को सरकार समरजंग कम्पनी नामको मोठ श्रेस्ता कट्टा गरी गुठी कायम गर्ने गु.स.को. का. को. आदेशानुसारको कारवाही गर्न कार्यालयलाई द्विविधा पर्न गएको हुँदा उल्लेखित कारबाही फायलको सम्बन्धमा आबश्यक निर्देशन भई आउन भनी मिति २०६१।०२।१८ को टिप्पणी राय भएको कारबाही मिसिल तहसिल शाखाको प.स. ०६०/०६१ च.नं. २५२९ मिति २०६१।०२।१९ को पत्रसाथ प्राप्त हुन आएकोले पेश गरेको छु। श्रीमानको जो आदेश। ( मिति २०६१।०५।०८।)

उपरोक्त उल्लेखित सम्बन्धमा कानून नियमअनुसार उपयुक्त निर्देशन दिनको लागी पेश गर्दछु । (मिति २०६१।०५।०८ । पुण्डरी के.सी. )

यस साविक कित्ता नं. २८, ४२ वाट हाल कायम कि.नं. ७२,७३, १८, ९१, कायम भएको र त्यस्तै साविक कित्ता नं. १५, ६३, २५ को हाल ७६, ७८, ७४, ४७, ३४ कायम भएको त्यसमध्ये कि.नं. ४७, ७६, आयोगको रोक्का भनिएको जग्गा हाल यथावत राखी पछी नियमानुसार नै हुने हुँदा सोही अनुसार र वाकी कि.नं. ३४, ७८ को घुस्न गएको भनिएकोले पछी नियमानुसार कित्ताकाट हुने नै हुँदा सोही अनुसार गुठीको नाममा कायम गर्ने २०६०।१२।२७ निर्णय गरी कार्यान्वयनको लागी शाखा कार्यालयमा लेखी पठाउदा उक्त सम्पुर्ण जग्गा समरजंग कम्पनीको नाउमा द्रता प्रमाणित भईसकेकोले द्विविधा पर्यो भनी लेखि आएको रहेछ अत: उल्लेखित जग्गा गुठी कायम गर्न द्विविधा पर्यो भनी लेखि आएको रहेछ अत: उल्लेखित जग्गा गुठी कायम गर्न संलग्न फायल समेतम भु.सु. मन्त्रालयमा पठाउनु पर्ने देखी पेश गरेको छु ।

कानून शाखा , भएको प्रमाण सवै हेरी के गर्न पर्ने हुन्छ राय सहित पेश गर्ने । ( मिति २०६१।०६।१८ । हरिवोल अर्याल ।)

श्रीमान, आजै यस लगाउको फायल यही कारवाहीमा आएका साविक नापी बमोजिमको कि.न. ४८,७६,७७,७८,१५,२८,२५,४२,६३,६९,६८,३१,३५,२२,१२,४०,१५,२४,२५,३७ समेतका जग्गा नयाँ नापीमा श्री ५ को समयमा समरजंग कम्पनीका नाममा दर्ता भएका फायलमा आजै राय लेखी सकेको हुँदा यसमा पनि सोहि बमोजिम हुनुपर्ने राय पेस गरेको छु। मिति २०६१/८/८। हेमराज सुवेदी (मु.का.अ) ।
सोही वमोजि मन्त्रालयमा स्विकृतीका पठाउने गरी पठाउने ।( मिति २०६१/८/८ । दिलिप भट्ट ।)p

- **<u>मिति २०५९।०७।०५ गते साविक कि.नं. १२,१५,२२,२४,२५,४०,४८,६८,६९,७३, ७६,७८ का जग्गा सम्बन्धमा गुं.सं.केन्द्रीय कार्यालयमा निवेदन परि कारवाही गर्ने क्रममा तयार भएको टिप्पणी श्रृंङ्खला :</u>**

१. (केन्द्र): मिति २०५९।७।०८ गते च.नं. ७९८ को पत्रद्वारा गुठी संस्थान केन्द्रीय कार्यालयबाट जग्गा दर्ता सम्बन्धी कार्यविधी पुरा गरी पेश गर्न निर्देशन दिंदै प्राप्त ९(नौ) थान निवेदनहरू गुठी तहसिल शाखा कार्यालयमा पठाएको (९ वटा निवेदन मार्फत १२ कित्ता (कि.नं. ४८,७६,६८,६९,४०,७८,१२,२५,१५,२४,२२ र ७३) जग्गा माग गरिएको (१६ कित्ता मध्ये कि.नं. ३५ र ३७ को निवेदन नै मिति २०६०।०५।१९ मा परेको , कि.नं. ३१ र ७७ को निवेदन फेला नपरेको/ मुचुल्का मात्र प्राप्त भएको)

२. (तहसिल): श्रीमान, प्रस्तुत विषयमा तपसिल बमोजिमका मोहीहरुको नाम बमोजिमका कित्ता जग्गा ज.ध मा पशुपति टिकिन्छा गुठी र मोहीमा हाम्रा नाउँमा दर्ता, नाम सारी गरी ज.ध.प्र.पु. पाउँ भनी गुठी संस्थान केन्द्रीय कार्यालयमा दिएको निवेदनमा जग्गा दर्ता सम्बन्धी कार्यविधि पुरा गरी पेश गरी प्राप्त निवेदनहरु तहसिल शाखा कार्यालयमा पठाईदिन भनी आदेश भई मिसिल थान-११ यस कार्यालयमा प्राप्त हुन आएको ।

यसमा उपरोक्त मिसिल प्राप्त हुन आई जग्गा दर्ता गर्ने क्रममा सोको मोठ श्रेस्ता माग गर्दा ज.ध. मा श्री ५ को सरकार उल्लेख भएको श्रेस्ता प्राप्त हुन आएको फिल्डबुक हेर्दा मोहीमा निवेदकहरु उल्लेख भै किसानको ब्यहोरा राखी यो जग्गा अञ्चलादेश मार्फत श्री ५को सरकारलाई यकिन गरी कुत बुझाई खाई आएको छ भन्ने ब्यहोरा उल्लेख भएको नया नापीको फिल्डबुकमा समेत मोहीमा विभिन्न ब्यक्तिहरु कायम भई ज.ध. मा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भई सोही अनुसार नयाँ नापीको ज.ध. श्रेस्ता समेत कायम देखिएको जग्गा

दर्ता गर्ने क्रमश कार्यालयको तर्फबाट स्तलगत सर्जमिन हुँदा तपसिल बमोजिमका जग्गा हाल सम्म भोग गरी आएको ब्यहोराको सर्जमिन भई आएको केही कित्ता जग्गाहरु समेतको फिल्डबुकमा उल्लेखित केही मोही हरुले जोत भोग गरी अन्य ब्यक्तिले जोत भोग गरी हाल नामसारी गरी पाँउ भन्ने निवेदन पर्न आएको देखिदा फिल्डबुकमा उल्लेखित मोहीहरु राम बहादुर, मिन बहादुर आले मगर, हरि नारायण डंगोल समेतलाई उपस्थित हुने बारेको म्याद जारी गरी ४ नं.. वडाको सर्जमिन मार्फत तामेल गर्न, यसमा उक्त मानिसहरु खोजतलास गर्दा फेला नपरेको भनी उक्त सूचना मिति २०६०।०६।०८ यस वडा कार्यालयको सुचना टास गरी सो को मुचुल्का प्राप्त हुन आएको उक्त महलमा उल्लेखित ज.ध. श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय सम्बन्धी आबश्यक कारबाही हुन र केही पत्रहरु मा.पो. ले फुकुवा गरी सकेकोले कुन कुन जग्गा फुकुवा गर्ने हो मा.पो. सचिवको निर्णय हेरी गुठी सम्बन्धी आबश्यक कारबाही हुन भनी पुन: अर्को पत्र लेखी आएको र आदेशानुसार र जग्गा दर्ता गर्ने क्रममा गो.प.मा हकदावी सम्बन्धी सुचना प्रकाशित गराउन बाँकी नै रहेको देखिंदा अन्य कारबाही अगाडि बढाउन उचित आदेश हुन पेश गर्दछु।

**तपसिल:**

| गा.बि.स | वडा | कित्ता नं. | क्षेत्रफल | मोहीको नाम | किसानको ब्यहोरा |
|---|---|---|---|---|---|
| नगर | २३क्ष | ७३ | ०-३-० | जित ब.महर्जन | यो जग्गा कि नं ३ को ब्यहोरा सदर |
| नगर | २३ह | २२ | ०-८-० | कृष्ण महर्जन | श्री ५ को सरकार तहविलमा अधिया तिरी आएको छु |
| नगर | २३ह | २५ | ७-३-२ | नारायण महर्जन | ऐ-ऐ |
| नगर | २३ह | १५ | २-३-० | कर्ण बहादुर गुरुङ | ऐ-ऐ |
| | ,, | २४ | ०-९-० | कर्ण बहादुर गुरुङ | |
| नगर | २३क्ष | ४८ | ०-१४-० | ड्राईभर भाईचा | कि.नं. ४७ को ब्यहोरा सदर |
| | ,, | ७६ | २-१२-० | ड्राईभर भाईचा | ,, |
| नगर | २३क्ष | ६८ | ०-८-० | न्हुक्षे महर्जन | अञ्चल आदेश मार्फत अधिया तिरी खाएको |
| | ,, | ६९ | ०-६-२ | मिन बहादुर आले | ,, |
| नगर | २३क्ष | ७८ | २-९-० | लक्ष्मी नारायण महर्जन | ,, |
| नगर | २३ह | ४० | ०-१३-२ | हर्क नारायण डंगोल | श्री ५ सरकारको तहविलमा तिरो तिरी खाएको छु |
| नगर | २३ह | १२ | ०-५-० | सुबेदार राम बहादुर | श्री ५ सरकारको तहविलमा तिरो तिरी आएको छु |
| नगर | २३ह | ४० | ०-१३-२ | हर्क नारायण डंगोल | श्री ५ सरकारको तहविलमा तिरो तिरी खाएको छु |
| | ,, | २६ | ३-६-० | सुनिती राणा समेत | श्री ५ सरकारको तहविलमा तिरो तिरी खाएको छु |

मिती २०६०।७।१९ उल्लेखित कि.नं का जग्गाहरु सम्वन्धमा उपरोक्तनुसारको काम कारवाही भएको हुँदा सो कि.नंका जग्गाहरुको संवन्धमा के .का वाट नै आवश्यक निर्देशन भई आउनको लागी कार्यबाही फायलहरु साथै राखि गु.सं. के कार्यालयमा पेश गरेको छु। मिती २०६०।७।१९।

१. (केन्द्र): गुठी संस्थान केन्द्रीय कार्यालयले च.नं १६१७ मिति २०६०।०७।२५ को पत्रद्वारा गुठी संस्थान तहशिल शाखा कार्यालयलाई "च नं ७९८ मिति २०५९।०७।०८ (पत्रमा १८ लेखिएको) को पत्रमा जग्गा दर्ता सम्बन्धमा कार्यविधी पुरा गरी पेश गर्न आदेश भएकोमा आदेशानुसार गरी पठाएको नदेखिएकोले सोही अनुसार गरी पठाउनु" भनी फाइल पुन: गुठी संस्थान शाखा कार्यालयमा फिर्ता पठाएको,

२. (शाखा): गुठी संस्थान केन्द्रीय कार्यालयबाट उक्त १४ कित्ता जग्गा सम्बन्धी फाइल गुठी तहसिल कार्यालयमा फिर्ता भइसके पश्चात गुठी तहसिल कार्यालयको च.नं.९७५ मिति २०६०/०८/०२ गतेको पत्रद्वारा गोरखापत्र संस्थानलाई सूचना प्रकाशित गरीदिन अनुरोध गरे बमोजिम गु.सं. तहसिल शाखा कार्यालय कालमोचनको ३५ दिने हकदावी सम्बन्धी सूचना: पशुपति टिकिन्छा गुठीको लगत खला नं. १० मा भिडाई तपसिलमा उल्लेखित मोहीहरुले तपसिल कि.नं. का जग्गा दर्ता नामसारी एवं हा.सा.को लागि निवेदन दिएकोमा सो कि.नं.का जग्गाहरुको फिल्ड बुक र मोठ श्रेस्ता मागगर्दा नापीको फिल्डको मोही महलमा बिभिन्न व्यक्तिहरुको नाम उल्लेख भई ज.ध. महलमा श्री ५ को सरकार , समरजंग कम्पनी जनिई दर्ता बाँकि मोठ श्रेस्ता रहेको, श्री ५ को सरकार समरजंग कार्यालयमा बुझ्दा उक्त कार्यालयवाट म.प.ले फुकुवा गरी सकेकोले कुन कुन जग्गा फुकुवा गरेको हो, म.प. सचिवालयको निर्णय हेरी गुठी सम्बन्धी आ.का. हुन लेखि आएको। जोतभोग सम्बन्धी स्थलगत सर्जमिन गर्दा निवेदकहरुले नै साविक देखि हाल सम्म भोग चलन गरी आएको सर्जमिन मुचुल्का प्राप्त भएको हुँदा तपसिलमा उल्लेखित कि.नं. का जग्गाहरु निवेदकहरुको नाममा मागदावी अनुसार गुठी जनिई दर्ता नामसारी नहुनु पर्ने कुनै कारण भए यो सूचना प्रकाशित भएको मितिले ३५ दिन भित्र आफूसँग भएका स- प्रमाण लिई दावी उजूरी गर्न आउनुहोला अन्यथा मागदावीको आधारमा नियमानुसार कारवाही भई जाने व्यहोरा समेत यसै सूचनाद्वारा जानकारी गराईन्छ।

**तपसिल: पहिलो सूचना**

| सि.नं | निवेदकको नाम | मोहीको नाम | क्षेत्र | वडा नं. | कि.नं | क्षे.फ. | ज.ध.को नाम | किसानको व्यहोरा |
|---|---|---|---|---|---|---|---|---|
| १ | आशामाया महर्जन | जीत बहादुर महर्जन | नगर | २३ क्ष | ७३ | ०-३-०-० | - | कि.नं. ३ को ब्यहोरा सदर |
| २ | श्रीमती मोहन महर्जन | कृष्ण महर्जन | नगर | २३ ह | २२ | १-८-०-० | - | श्री ५ को सरकारको तहविलमा अधियातिरी खाएको छु। |
| ३ | ग्वाराभाई महर्जन | नारन्चा महर्जन | नगर | २३ह | २५ | १-३-२-० | - | ऐ. ऐ. |
| ४ | रेना गुरुङ | कर्ण बहादुर | नगर | २३ह | १५,२ | २-३-०-० | - | ऐ. ऐ. |

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| | | गुरुङ | | | ४ | ०-९-०-० | | |
| ५ | देव नारायण महर्जन | ड्राईभर भाईचा | नगर | २३ क्ष | ४८,७६ | ०-१४-०-०<br>२-१२-०-० | - | कि.नं. ४७ को व्यहोरा सदर |

**<u>तपसिल -दोश्रो सूचना :</u>**

| **सि.नं** | **निवेदकको नाम** | **मोहीको नाम** | **क्षेत्र** | **वडा नं.** | **कि** | **क्षे.फ.** | **ज.ध.को नाम** | **किसानको व्यहोरा** |
|---|---|---|---|---|---|---|---|---|
| १ | मचानानी महर्जन | न्हुच्छे महर्जन | नगर | २३ क्ष | ६ | १-८-०-० | - | - |
| २ | मचानानी महर्जन | मीन बहादुर आले | नगर | २३ क्ष | ६ | ०-६-२-० | - | अञ्चल आदेश मार्फत अधियातिरी खाएको छ। |
| ३ | लक्ष्मी नारायण महर्जन | लक्ष्मी नारायण महर्जन | नगर | २३ क्ष | ७ | २-९-०-० | - | ऐ. ऐ. |
| ४ | रामकृष्ण महर्जन | हर्क नारायण डंगोल | नगर | २३ ह | ४ | ०-१३-२-० | - | ऐ. ऐ. |
| ५ | रामकृष्ण महर्जन | सुवेदार रामबहादुर | नगर | २३ ह | १ | ०-५-०-० | - | ऐ.ऐ. |

**३.** (शाखा): श्रीमान, यसमा मिति २०६०।०८।०४ को आदेशानुसार गो.प. मा हकदावी सम्बन्धी सार्वजनिक सुचना प्रकाशित भै सकेको मा.के का. बाट साविकमा नापी भई माग भएका कित्ता जग्गा पुन: नाप नक्सा भै लागु भएको सन्दर्भमा मोठ उतार माग गर्दा कार्वाहीका कित्ता जग्गाहरु श्री ५ को सरकारका नाममा गएको देखिन्छ र नापी शाखा काठमाडौंको च.नं. १४०४४ को पत्रबाट साविक नगर २३ क्ष र ह हाल नगर ४ सि.नं. १०२५-१४ , कि.नं. ११, १२, २०, २१, सि.नं. १०२५-१९ कि.नं. ३, ५, ६, १ र सि.नं. १०२५-१५ कि.नं. ७४, १६, ४७, ६४, ६०, ५६, ९४, ९५, ८१, ८३, १०४, १०६, ५४ र सि.नं. १०२५-२० कि.नं. ९, ११ समेत साविकका तपसिल बमोजिम कित्तामा भिड्ने भनी खुली आएको।

**४. <u>तपसिल:</u>**

| साविक | नक्सा | सा.कि. | हाल | वडा | सि.नं. | हाल कित्ता |
|---|---|---|---|---|---|---|
| नगर | २३ क्ष | ४८ | नगर | ४ | १०२५-१४ | २६ र ११ मध्ये कि.का. हुने |
| नगर | ,, | ७६ | ,, | ,, | ,, | ११,१२,३८ र २१ मा भिड्ने |
| नगर | ,, | ७३ | ,, | ,, | ,, | ४८ मा भिड्ने |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| नगर | ,, | ७७ | ,, | ,, | १०२५-१९ | १२ र १३ मा भिड्ने |
| नगर | ,, | ७८ | ,, | ,, | ,, | ६५ मा भिड्ने ५,६,१४ भिड्ने |
| नगर | ,, | १५ | ,, | ,, | १०२५-१५ | ७६ मा भिड्ने |
| नगर | ,, | २८ | ,, | ,, | ,, | ७३,७२,२०५, ९१ मा भिड्ने, कि.नं. ७१ आयोग रोक्का पर्छ |
| नगर | ,, | २५ | ,, | ,, | ,, | ७४, २११ मा भिड्ने |
| नगर | ,, | ४२ | ,, | ,, | ,, | १४५ मा भिड्ने र कि.नं. १६ बाट आएको |
| नगर | ,, | ६३ | ,, | ,, | ,, | ४७ मा भिड्ने |
| नगर | ,, | ६८ | ,, | ,, | ,, | १९३, २३१, ६४ मध्ये भिड्ने |
| नगर | २३ह | ३१ | ,, | ,, | ,, | २७८ र २८४ मध्ये भिड्ने |
| नगर | ,, | ३५ | ,, | ,, | ,, | ५६ मा भिड्ने |
| नगर | ,, | ३५ | ,, | ,, | १०२५-२० | ८० मा भिड्ने (साविक कि.नं. ३५ दुई सिटमा परेको) |
| नगर | ,, | २२ | ,, | ,, | १०२५-१५ | २६२,२६७, २९५ मा भिड्ने |
| नगर | ,, | १२ | ,, | ,, | ,, | २४५ पुरै र २४७ मध्ये भिड्ने |
| नगर | ,, | ४० | ,, | ,, | ,, | २५३ पुरै र २४७ मध्ये भिड्ने |
| नगर | ,, | १५ | ,, | ,, | ,, | १०४,२५०,२५७ मा भिडने |
| नगर | ,, | २४ | ,, | ,, | ,, | १०४ कित्ताकाट हुने, १०४ मध्ये भिड्ने कित्ताकाट हुने |
| नगर | ,, | २५ | ,, | ,, | ,, | १०६ मा भिड्ने |
| नगर | ,, | ३७ | ,, | ,, | ,, | ५४ मा भिड्ने |
| नगर | ,, | ३७ | ,, | ,, | १०२५-२० | ९ मा भिड्ने (दुई सिटमा परेको) |

यस्तै निवेदकको साविक पशुपती टिकिन्छा गुठीको हाँडिगाँउ मौउजे मलिकुली खेत मोही आशामरु ज्यापुको नाउको खेत दश मध्ये मात्र दाविका कित्ता जग्गा भिडी दर्ता हुनु पर्ने माग गरेको र सो को साविक लगत उतार गरी पठाईदिन गुठी लगत तथा अभिलेख शाखा भद्रकाली पत्राचार गरिएकोमा उक्त कार्यालयको च.नं. १७ मिति २०६१।०५।०३ को पत्रवाट गुठी लगत काम बाँकी मिसिल अन्तर्गतको श्री पशुपती टिकिन्छा गुठीको १९६३ साल बैशाख १२ गतेको साविक लगत उतार प्राप्त हुन आएको र सो लगत अध्ययन गर्दा मलिकुली खेत मोही आशामरु ज्यापू १० दश उल्लेख भएको देखिदा पेश गरेको छु । जो आदेश । मिति २०६१।०५।०७ (ना.सु.) ।

श्रीमान, निवेदकहरुको माग दावी अनुसार २०६०।०९।२७ गते गो.प.मा सुचना प्रकाशित हुँदा सो को दावी परेको संलग्न फायलबाट देखिन आएन साविक नापीमा श्री ५ को सरकारका नाममा मोठ श्रेस्तामा उल्लेख भएको र हाल नापीमा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देखिएको र प्राप्त हुन

आएको लगतमा उपरोक्तानुसार लगतको ब्यहोरा उल्लेख भैरेहेको देखीन्छ। श्रीमान समक्ष पेश गर्दछु जो आदेश ।( मिति २०६१।०५।०७ गते । रामकृष्ण)

उल्लेखित मागदावी कि.नं. का जग्गाहरु ज.ध. पशुपती टिकिन्छा गुठी र मोहीमा फिल्डबुकमा लेखिएका ब्यक्ति वा निजका हकदारहरुको नाममा कायम गरी पाउन मागदावी गरेकोमा सो कि.नं. को जग्गाका सम्बन्धमा स्थलगत सर्जमिन गो.प. मा हकदावी सम्बन्धी ३५ दिने सार्वजनिक सुचना समेत प्रकाशित भई म्याद भित्र कसैको दावी पर्न नआएको। सो कि.नं. का जग्गाहरुको फिल्डबुकको जोताहा महलमा ब्यक्तिहरुको नाम उल्लेखित भई कैफियत महलमा यो जग्गा अञ्चलादेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई आएको भन्ने उल्लेख भएको। साबिक मोठ श्रेस्ता माग गरी हेर्दा गुठी लगत तथा तहसिल कार्यालयको च.नं. २४२२ मिति २०४२।०१।१८ को पत्रानुसार तोक आदेशले मागदाबी कि.नं. का जग्गा श्री ५ को सरकार गुठीको नाममा गएको भन्ने उल्लेख भएको। नया नापीमा सो कित्ता नं. को जग्गाको फिल्डबुकको जोताहा महलमा ब्यक्तिको नाम र ज.ध. महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भई नापजाँच भएको। मोठ श्रेस्ता हेर्दा सो कि.नं. का जग्गाहरु श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित भई सो को प्रतिलिपी प्राप्त हुन आएको देखिन्छ।

यस कार्यालयबाट यो यस्तै प्रकृतिका जग्गा सम्बन्धी दर्ता सम्बन्धमा यसै कार्यालयबाट कारबाही चली कार्यालयबाट मिति ०५९।०५।१८ , ०५९।०७।१४ र ०६०।०६।०८ मा भएको ब्यहोरा उल्लेख गरी पठाईएकोमा गु. सं. केन्द्रीय का. को ज.शा १/०६०/०६१ ४०६ च.नं. ४११० मिति २०६१।०१।२१ गतेको पत्रबाट ०५२।०५।३० को स.स.को निर्णय अनुसार बाँकि बक्यौता कुत असुल गरी लगत अध्यावधिक गर्नको लागि लेखि आएकोमा नया नापीको मोठ श्रेस्तामा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित श्रेस्ता रहेकोले गुठी संस्थान केन्द्रीय कार्यालयको निर्णय कार्यान्यवन गर्न दुविधा भएको भनी गु.स.केन्द्रीय कार्यालयमा यस कार्यालयको च.नं.२५२९ मिति २०६१।०२।१९ को पत्रबाट फायल गु.सं.केन्द्रीय कार्यालयमा पठाएको रेकर्डबाट देखिन्छ। यी कि.नं. का जग्गा पनि सोही प्रकृतिका भएकोले यी कि. नं. को कारवाही समेत सो फायलमा समाबेश हुनुपर्ने देखिन्छ।

५. यसरी माग दाबी कि.नं का जग्गाहरुको मोही हरुले गुठीको जग्गा भनी मागदावी गरेता पनि साबिक र हालको फिल्ड बुक मोड श्रेस्ता बाट समेत यो गुठीको जग्गा भनी यकिन हुन सकेको देखिदैन। यी नै प्रकृतिका जग्गा सम्बन्धीमा कारबाहीमा कार्यालयबाट मिति २०५९।०५।१८, ०५९।०७।१४ र ०६०।०६।०८मा समेत भएको ब्यहोरा उल्लेख गरी कार्बाही फायल गु.स. केन्द्रीय कार्यालयमा पेश भई के.का बाट समेत लगत अध्यावधिक गर्नको लागि लेखि आएको देखिएता पनि समरजंग कम्पनीको नाममा मोठ श्रेस्ता दर्ता प्रमाणित रहेकोले सो सम्बन्धमा के गर्ने भनी पुन: फायल गु.सं. केन्द्रीय कार्यालयमा पेश भएता पनि हाल सम्म निर्णय भएर आएको देखिदैन।

६. यसरी माथि उल्लेखित विवरणबाट माग दावी कि.नं.का जग्गाहरुको मोठ श्रेस्ता र फिल्डबुक उतारमा गुठी उल्लेख नभएतापनि साविक मा.पो. का.को मोठ श्रेस्ताको कैफियत ब्यहोरामा श्री ५ को सरकारको श्री ५ को सरकार गुठीको नाममा भएको भन्ने उल्लेख सम्म भएको देखिएको र मोहीहरुबाट पशुपति टिकिन्छा गुठीको जग्गाहरु भनी मागदावी गरेता पनि कार्यालयबाट यस्तै प्रकृतिको जग्गा सम्बन्धमा प्रस्तुत गरेको राय साबिक फिल्डबुक मोठ श्रेस्तामा उल्लेखित ब्यहोरा नया नापीमा सो कि.नं. जग्गा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित श्रेस्ता समेत रहेको अबस्थामा श्री ५ को सरकारको सहमति लिई मात्र

आवस्यक कारबाही हुनु पर्ने हुँदा सो कि.नं.का जग्गा सम्बन्धमा श्री ५ को सरकारवाट समेत  निर्णय भई आएपछि आवस्यक कारबाही हुनु पर्ने देखिदा सो सम्बन्धी कारबाही फायल गु.सं. केन्द्रीय कार्यालयमा पेश गरेको छु ।( मिति २०६१।०५।०७ गते । अच्युतानन्द ।)

७. (केन्द्र): श्रीमान, टिकिन्छा गुठीका नाममा जग्गा दर्ता गरी मोही कायम गरी पाँउ भनी रेना गुरुङ, ग्वाराबाई महर्जन, रामकृष्ण महर्जन, श्रीमती मोहन महर्जन, कान्छा महर्जन, देव नारायण महर्जन, मच्चानानी महर्जन, चन्द्रमाया महर्जन, कान्छा महर्जन,  द्वारिका महर्जन समेतको निवेदन परी कारबाही भै नयाँ नापीमा सो जग्गाहरु श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित श्रेस्ता समेत रहेको अवस्थामा श्री ५ को सरकारको सहमती लिई मात्र आबश्यक  कारबाही हुनुपर्ने भनी मिति २०६३।०५। ०७ को टिप्पणी राय सहितको मिसिल प.स. ०६१/०६२ च.नं. २८९ मिति २०६१।०५। ०७ गतेको पत्रसाथ तहशिल शाखा कार्यालयबाट प्राप्त हुन आएको हुँदा निर्देशनार्थ पेश गरेको छु । श्रीमानको जो आदेश । (मिति ०६१।०६।१९ ) ।

८. यसमा सम्बन्धित मोहीहरुबाट टिकिन्छा गुठीको भनी मागदावी गरेको र उक्त गुठीको साबिक लगतको माग गर्दा गुठी लगत तथा अभिलेख शाखाबाट गुठी लगत दर्ता किताब खडा हुन काम तोकी मिसिलको पशुपती टिकिन्छा गुठीको १९६३ सालमा खडा भएको लगतको फोटोकपी पाना-४ को भनी उल्लेख भएको र उक्त लगतको फोटोकपी हेर्दा मौजे हाडीगाँउ लगायत मुडखु भैमाल टोखा हाडिगाँउ मौजाको जग्गाको लगत देखिन्छ । ती ठाउँ आदिको जग्गाको असुली लगत कायम भएको छ, छैन छन भने कुन मौजाका छन् नापी अनुसार कायम भएको देखिन्छ देखिदैन मिसिल संलग्न १९९४ सालको भर्पाईको फोटोकपी हेर्दा ललिता निवास गोश्वरा तहसिल अड्डा कास्य पत्रमा ललिता निवास क्याम्प भित्र श्री ५ को सरकार टिकिन्छा गुठीको असौगाल खेत ३।।। १९९४ सालको वालि बुझ्नेको भर्पाईबाट देखिन्छ, सो लगतमा असौगाल खेत देखिन्छ, यस उसले उक्त साबिक लगत अनुसार असुली लगत देखिन्छ देखिदैन, देखिन्छ भने माथी उल्लेखित जग्गा हा.सा. भएको छ छैन् , छैन भने लगत बमोजिम कायम हुनु पर्ने हो होईन अन्य प्रमाण भए सम्बन्धित मोहीसँग समेत बुझी यथार्थ ब्यहोरा तहसिल शाखाबाट खोली आएपछी निर्णयमा पुग्नु पर्ने देखी पेश गरेको छु ।( मिति २०६१।०६।१९ गते । हरीवोल  आचार्य (प्र.अ.)) ।

उपरोक्त बमोजिम बिवरण र राय माग गर्ने । (मिति २०६१।०६।२० गते । दिलिप भट्ट ।)

९ (शाखा): श्रीमान, यसमा उपरोक्तानुसार मिति २०६१।०५।७ को राय बमोजिम गु.सं. केन्द्रीय कार्यालय पेश हुँदा टिकिन्छा गुठीको रेता गुरुङ समेतको कारबाही मिसिल पेश हुँदा काम बाँकि लगतको  टिकिन्छा गुठीमा मौजे हाडिगाउ लगाएत गुडखु मैगाल टोखा आदिको देखिन्छ । ती ठाउको जग्गा  को असुली लगत कायम भएको छ छैन ?  छ भन्ने  कुन मौजा को छ ? नापी अनार कायम भएको देखिन्छ देखिदैन ? मिसिल संलग्न  १९९४ सालको भरपाईमा ललिता निवास गोश्वारा तहसिलको लतिता निवास  क्याम्प भित्र श्री ५ को सरकार टिकिन्छा गुठीको असौगल खेत ३।।। को १९९४ को बाली बुझेको  देखिन्छ भन्ने उल्लेखित काम बाँकी लागतमा पनि असौगाल खेत देखिदा सो अनुसार  असुली लगत रहेको देखिन्छ  देखिदैन भन्ने माग गुठीका जग्गा साल साविक भएको छ छैन ?  लगत बमोजिम कायम हुनु पर्ने हो होईन अन्य प्रमाण भए  सम्बन्धीत मोही समेत बुझि यथार्थ ब्योहरा लाई राय साथ पेश गर्न ताहा लेखि पठाउने मिति २०६१।०६।२० मा आदेश भएकोले पेश गर्दछु ।( मिति २०६१।०६।२६ , पुरुषोत्तम पौडेल) ।

१० श्रीमान, टिकिन्छा गुठीको मौजे हाडिगाउ लगायतका असुलीलगत हरु हेर्दा उक्त लगतमा  गोलढुङगा , चाहबिल, जोरपाटी गोठाटार ,बत्तीसपुतली,सिनामंगल, कपन, बौद्द ,कलंकी ,गोगंबु ,धापासी,खड्का भद्रकाली

हाडीगाउ अन्तरगतका जग्गाहरु हा.सा.भै लगत कायम भएको देखिन्छ। निवेदकहरुले मागदावी गरेको उक्त गुठीको मनिकुली खेत मोही आशा मरु ज्यापूको नामको खेत १० मध्येबाट भिड्ने भनेकोमा सो गुठीको साबिक लगत भद्रकालीबाट माग गर्दा १९६३ साल बैशाख १२ गतेको साबिक लगतको फोटो कपीमा मलिकुली खेत १० मोही आशामरु ज्यापु उल्लेख भएको लगत प्राप्त हुन आएको।

सो लगतबाट अन्य कित्ता जग्गा भिडे नभिडेको सम्बन्धमा कार्यालयमा रहेको हाल साबिकको लगत हेर्दा हाल सम्म भिडे गरेको नदेखिएको र सोही लगतमा असौगालको खेतको मोही नित्यानन्द श्रेष्ठ छुश्याबहाल ५ रोपनी खेत उल्लेखित लगत उल्लेख भएको तर कार्यालयमा भएको साबिक र हाल कायम भएको रेकर्डबाट नदेखिएको ।उल्लेखित लगत भित्रको जग्गा हाल सम्म लगत अध्यावधिक भएको नदेखिएको कारण साबिक बमोजिमको जग्गा प्रमाणको मुल्याङकन गरी हाल साबिक गर्नु गराउनु पर्ने कार्य कार्यालयकै भएकोले हाल साबिक गराउनु पर्ने नै देखिन्छ।

निवेदकहरुले पेश गरेको प्रमाण कार्यालयमा रहेको लगत प्रमाणको आधारमा निवेदकहरुको मागदावी बमोजिम गुठी सम्बन्धी कारबाही गर्नु पर्ने देखिएता पनि ती जग्गाको फिल्डबुकको कैफियत ब्यहोरामा यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु भन्ने साबिक नापीको किसानको ब्यहोरा र हाल आएर नया नापीमा ज.ध. समरजंग कम्पनी उल्लेख भई मोही महलमा साबिक र हाल बिभिन्न ब्यक्ति भएको कारण श्री ५ को सरकारको सहमति लिनु पर्ने देखिन्छ यिनै कि.नं. का जग्गा सम्बन्धमा गु.सं. केन्द्रीय कार्यालयको ज.शा. १ च.नं. ४११० मिति ०६१।०१।२१ को पत्रानुसार बिभिन्न कुरा उल्लेख गरी ०५२।०५।३० को संचालक समितको निर्णय बमोजिम बाँकि बक्यौता कुत असुल गरी लगत अध्याबधिक गर्ने कार्यालयलाई निर्देशन दिने भनी मिति २०६१।०१। २ १ को पत्रद्वारा लेखि आएको देखिन्छ।

यसरी माथि उल्लेखित विवरणबाट साबिक मोठ श्रेस्तामा गुठी लगत तथा तहबिल कार्यालयको प.सं. २४२२ मिति ०४२।०१।१८ को पत्र बमोजिम उल्लेखित कि.नं. का जग्गाहरु श्री ५ को सरकार गुठीका नाममा गएको भन्ने कुरा उल्लेख भएको निवेदकहरुले पशुपति टिकिन्छा गुठीको खेत मलिकुली खेतको जग्गा भनी दाबी गरेको यस कार्यालयबाट पटक पटक लेखि गु.सं. मा लेखापढी हुँदा समेत गु.सं. बाट यिनै कि.नं. का जग्गा सम्बन्धमा बिभिन्न कुरा उल्लेख गरी ०५२ ।०५। ३० को स.स.को निर्णय बमोजिम बाँकी बक्यौता कुत वाली असुल गरी लगत अध्यावधिक गर्ने कायालयलाई निर्देशन दिने भनी निर्णय भई सकेको अबस्थामा यी माग दाबीका कि.नं. का जग्गाहरु गुठी जग्गा होईनन भन्ने अबस्था रहेन।

अत: निवेदकले पेश गरेको तिरो बुझाएको भरपाई र गुठी लगत बाट प्राप्त लगतका जग्गाहरु लगत बमोजिम हाल साविक हुन बाँकि नै रहेको भएतापनी साविक कि.नं. का जग्गाहरुको मोठ श्रेस्तामा श्री ५ को सरकार गुठी उल्लेख भएको र हाल समरजंग कम्पनीको नाममा दर्ता भईसकेको देखिनुको साथै पहिले नै गु. स.केन्द्रीय कार्यालय को ०६१।०१।२१ को पत्रानुसार यिनै कि.नं. का जग्गाहरुको स.स. को ०५२।०५।३० को निर्णय अनुसार बाँकी वक्यौता कुत असुल गरी लगत अध्यावधिक गर्न कार्यालयलाई निर्देशन दिने भनी गु.स.केन्द्रीय कार्यालय बाट आदेश भइरहेको अवस्थामा यस कार्यालयबाट अन्यथा भन्ने अवस्था रहेन । तसर्थ फायल संलग्न आधार प्रमाणको आधारमा श्री ५ को सरकारको नाममा रहेको लगत कट्टा गरी गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकार बाट निर्णय भई आउनु पर्ने देखिंदा तत्सम्बन्धी कारबाही फायल संलग्न गरी पेश गर्दछु। जो आदेश।( मिति २०६१।०६। २६, अ . राम कुमार घिमिरे )।

उपरोक्तानुसार हुनको लागी कारबाही फायल गु.स.केन्द्रीय कार्यालयमा पेश गरेको छु । (मिति २०६१।०६।२६, उप-सचिव अच्युतान्नद)।

११. (केन्द्र): श्रीमान, आदेशानुसार तहसिल शाखा कार्यालयमा लेखी पठाउदा निवेदकहरुले मागदावी गरेको पशुपती टिकिन्छा गुठीको मनिकुलो खेत मोही आशामरु ज्यापुको नाममा खेत १० को साविक लगत कायम गर्ने हाल साविक भिडेको नदेखिएको र सोही लगतको असौगाल खेतको मोही मित्यानन्द श्रेष्ठ छुमान हाल ५ रोपनी खेत उल्लेख भै हा.सा. नभएको ले हा.सा. गरी लगत अध्यावधिक गर्नु पर्ने अवस्था हालपनि उक्त जग्गाहरु साविकमा अन्चलादेश मार्फत श्री ५ को सरकारलाई अधिया बुझाई खाई आएको भनी फिल्डबुकमा लेखिएको र हाल नया नापी बमोजिमका कित्ता समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित भएको देखिन्छ।

१२. साविक मोठ श्रेस्तामा गुठी लगत तथा तहसिल कार्यालयको प.स. २४२२ मिति २०४२।०१।१८ को पत्र बमोजिम उल्लेखित कित्ता नं. का जग्गा श्री ५ को सरकार गुठीका नाममा गएको भन्ने कुरा उल्लेख हुँदा निवेदकले पेश गरेको तिरो बुझाएको भरपाई गुठी लगतबाट प्राप्त ती जग्गाको लगत समेतका आधारमा गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकारबाट निर्णय भई आउनु पर्ने भन्ने ब्यहोराको तहसिल शाखाको मिति २०६१।०६।२६ को टिप्पणी राय सहित को मिसिल प्राप्त हुन आएकोले पेश गरेको छु श्रीमानको आदेश।( मिति २०६१।०७।०२ , पुण्डरी के.सी. शाखा अधिकृत )।

यसमा कारबाहीमा आएका साविक काठमाडौं नगरपलिका वडा नं. २३ अ. कित्ता नं. ६८, ६२, ७८, ७३, ४८, ७६, ८ ऐ वडा नं. २३ ह कित्ता नं. ४०, १२, २२, २५, १५, २४ कित्ताका जग्गाका टिकिन्छा गुठीको साविक मलि कुल खेत १० र असौगाल खेत ५ वाट भिडि हेर्दा हुने भन्ने समेतको निवेदन परि कारबाही अगाडी बढेको र कारबाहीको सिलसिलामा सार्वजनिक सुचना प्रकाशित गर्दा कुनै उजुर नपरेको, कार्यालयको राय र उक्त जग्गाको हाल साविक गराउनु पर्ने र दर्ता गराउनु पर्ने कार्यालयको दायित्व तर फि.वु. को कित्ता नं. को ब्यहोरामा श्री ५ को सरकार अधिया तिरी खाई आएको भन्ने उल्लेख भएको र नया नापीमा सरमजंग कम्पनीको नाउमा दर्ता भएकोमा दर्ता गर्न नसकिने भनी साविकको उल्लेखित जग्गा समरजंग कमपनिको हो होईन भन्ने सम्बन्धमा सार्वजनिक सुचना प्रकाशित गर्दा देखी बिरोध नपरेको र समरजंग कम्पनी कार्यालय बुझ्दा गुठीको जग्गा हो होईन यस कार्यालयबाट भन्न नसकिने त्याहाको लगत हेरी गर्नु भन्नेबाट उल्लेखित जग्गा उक्त कार्यालयको होईन भन्ने प्रष्ट हुन्छ र अर्को तर्फ यही ब्यहोरा उल्लेख भएका जग्गा ब्यक्ती बिशेषले दर्ता गरी लगेको र त्यस सम्बन्धमा समरजंग कम्पनी मौन देखिएकोले निजको होईन भन्ने प्रष्ट हुन आउछ , जग्गा रोक्का गर्दा चार किल्ला तोकी रोक्का भएको र फुकुवा भएपछी ब्यक्ति बिशेषको जग्गा ब्यक्ति बिशेषले जग्गा दर्ता गरी लगे जग्गा फुकुवा भई सकेपछी गुठीले साविक लगत बमोजिम हाल साविक गरी जग्गा दर्ता गराउनु पर्ने हो तर सम्बन्धित जग्गा कमाउने मोहीले साविकको गुठीको जग्गा हो यो खलासँग भिड्ने नभको जग्गा पत्ता लगाउन ज्यादे गाहारो पर्न आउछ तर हाल आएर जग्गा कामाउने मोहीहरुले साविकको लगत सँग भिड्ने हाल यो जग्गा भनी दावि लिएको र साविक गुठीको लगतमा परी सो जग्गा देखिएको र सो जग्गा हाल सम्म हाल साविक भिडी दर्ता भएको नदेखिएकोले सो गुठीको नाउमा दर्ता गराउनु पर्ने हुन्छ तर उल्लेखित जग्गा समरजंग कम्पनीमा दर्ता भईसकेकोले सो दर्ता कट्टा गरी गुठीको नाउमा दर्ता गराउन सम्बन्धित फाईल नै भु.सु. मन्त्रालयमा पठाउनु पर्ने देखि पेश गरेको छु । (हरिवोल आचार्य (मु.अ.) । मिति २०६१।०७।११ , कानूनी राय दिने। मिति २०६१।०७।२४ )।

श्रीमान, यही कारबाहीमा आएका साविक कित्ता नं. २८, ४१, १५, २५, ६३ समेतका जग्गा सम्बन्धमा समेरत कारबाही चलेको फाईलमा मैले जग्गा हाल साविक भिडाउने सम्बन्धमा भएका निती निर्देशन समेत बारे बिस्तृत रुपमा खुलाई मिति २०६०।१०।१७ मा राय ब्यक्त गरी सकेको छु । त्यसमा समेत बिचार गरी मिति २०६०।१२।२७ मा श्रीमान प्रशासक ज्यू बाट निर्णय भईसकेको छ । यसमा ब्यक्त मेरो रायको मनसाय लगत यकिन हुँदा वा नहुँदा दुबे अवस्थामा र लगत अध्याबधिक गर्न अक्षरंश रुपमा समितिको २०५२।०५।३० को मार्गदर्शन step by step पालना गर्नु पर्छ भन्ने हो भन्ने स्पष्ट गर्न चाहन्छु । सो रायमा पुनरविचारको आबश्यकता मैले महशुस गरेको छैन । उक्त निर्णय पश्चात तहसिल शाखा कार्यालयले साविक कित्ता नं. ४८,७६, ७३, ७७, ७८, १५, २८, २५, ४२, ६३, ६८, ३१, ३५, २२, १२, ४०, १५, २४, २५, ३७ समेतका हाल साबिक भिडाउन मालपोत कार्यालयमा लेखी उक्त कार्यालयबाट नापी शाखा काठमाडौंले हाल साविक भिडाएको पत्र समेत प्राप्त गरी गुठी लगत तथा तहसिल कार्यालयबाट साविक लगत मगाई भिडाई मिति २०६१।०६।२६ गते को राय टिप्पणीबाट फायल पेश हुन एको रहेछ । लगत भिडाउने निती निर्देशनको ब्याख्या वा त्यसलाई स्पष्ट राख्न मैले गर्न सक्ने कुरा हो । भिडाउने प्रकृयाबारे मैले मेरो ज्ञानको कमिको कारणले गर्दा कार्यालयले लगतमा भिड्ने हो भन्ने सम्बन्धमा मैले अन्यथा लेख्न सक्ने भएन । कार्यालयको लेखाईलाई जग्गा शाखाका प्रमुख मु.अ. श्री हरिवोल आचार्य ज्यूले पनि हेरी विवेचना गरीसकेको हुँदा त्यसतर्फ मैले बिचार गरीरहन आबश्यक ठानिन ।

तहसिल शाखा कार्यालयको टिप्पणीमा गुठी लगतबाट प्राप्त लगतका जग्गाहरु लगत बमोजिम हाल साविक हुन बाँकी नै रहेको भएतापनि साविक कित्ता नं. का जग्गाहरुको मोठ श्रेष्तामा श्री ५ को सरकार गुठी उल्लेख भएको र हाल समरजंग कम्पनीका नाउमा दर्ता भईसकेको देखिएको भन्दै श्री ५ को सरकारको नामको लगत कट्टा गरी गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकारबाट निर्णय भई आउनु पर्ने भन्ने उल्लेख छ । गुठी संस्थान ऐन, २०३३ को दफा ३९ मा गुठीको जग्गा रैकरमा दर्ता भएको प्रमाणित हुन आएमा प्रशासकले त्यस्तो गुठीको जग्गा साविक लगत बमोजिमको गुठी जग्गामा नै दर्ता गर्न सक्नेछ भन्ने ब्यवस्था छ । साविक गुठी जग्गा पछी श्री ५ को सरकारको नाउमा दर्ता हुन गएको देखिएमा गुठी संस्थानले गुठी संस्थान ऐन, २०३३ को दफा ३९ अनुसार पहिले नै निर्णय नगरी गुठी कायम हुनु पर्ने औचित्य आधार किटानी राय समेत उल्लेख गरी गुठी कायम गर्ने बिषयमा श्री ५ को सरकारको स्विकृतिका लागी यस मन्त्रालयमा पेश गर्ने गर्नु हुन गुठी संस्थान ऐन,२०३३ को दफा ५२ अनुसार त्यस संस्थानलाई निर्देशन गरिएको भन्ने समेत भु.सु.तथा ब्यवस्था मन्त्रालयको च.नं. ५०४५ मिति २०५५।०३।०८ को पत्रबाट निर्देशन भएको रहेछ । दफा ५२ बमोजिम भएको निर्देशन संस्थानले पालना गर्नु पर्छ भन्ने कानूनी ब्यवस्था छ ।

साविकमा श्री ५ को सरकार गुठीका नाममा दर्ता भएका जग्गा नया नापीमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित भएका रहेछन । ती जग्गाहरु श्री पशुपती टिकिन्छा गुठीको लगतबाट भिड्ने हुन भन्ने कार्यालयको लेखाई रहेको छ । त्यस्तो गुठीको लगतबाट भिड्ने जग्गा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको अवस्थामा उल्लेखित निर्देशन अनुसार गुठी कायम गर्ने बिषयमा श्री ५ को सरकारको स्विकृतीको लागी भुमि सुधार तथा ब्यवस्था मन्त्रालयमा पेश गर्नु पर्ने देखिएको राय पेश गरेको छु । (मिति २०६१।०८।०८ , हेमराज सुवेदी (मु.क. अ.) ।

उपरोक्त अनुसार श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको लगत अनुसार पशुपती टिकिन्छा गुठीको नाममा हाल साविक भिडाई दर्ता गर्ने स्विकृतीका लागी श्री ५ को सरकारको लागी भुमी सुधार तथा ब्यवस्था मन्त्रालयमा पेश गरेको छु। मिति २०६१।०८।०८ गते । दिलिप कुमार भट्ट( प्रशासक)

१३. (केन्द्र): विभिन्न १३ जना निवेदक (साविक मोही १४ जना मोही) को २१ कित्ता जग्गा दर्ता नामसारी गरी ज. ध. प्र. पूर्जा पाउँ भन्ने व्यहोराको निवेदन प्राप्त भएकोले मिति २०६१।०८।०८ मा निर्णय आदेश भए बमोजिम च.नं.११८१ मिति २०६१/०८/०९ मा गुठी संस्थान केन्द्रीय कार्यालयले भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा उक्त सक्कल टिप्पणी सहितको फायल थान १८ राखी पत्राचार गरेको,

१४. (मन्त्रालय):-मिति २०६१।०८।०९ च. नं. ११८१ प.सं. १(२२२)२०६१।०६२ को पत्र साथ गुठी संस्थान केन्द्रीय कार्यालयबाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा प्राप्त भएको फायल सम्बन्धमा केही कुराहरू अस्पष्ट एवं अपुग भएको भनी १९ वटा प्रश्न सोधी मन्त्रालयको च.नं. ९४० मिति २०६२।६।३ को पत्र द्वारा १८ थान फाईल गुठी संस्थान केन्द्रीय कार्यालयमा फिर्ता पठाएको । प्रश्नहरु निम्न बमोजिम छन् :--देशको धार्मिक सांस्कृतिक एवं लोकोपकारी कार्यहरुको संरक्षण एवं सम्वर्द्दनमा सहयोग पुर्याउने उत्कृष्ठ ईच्छाले गुठी राख्ने परम्परा अनुसार पशुपति टिकिन्छा गुठी, के उदेश्यले कसले, कहिले देखि राखेको हो ? सो को लिखत, सनद, लालमोहर, आदिको विवरण।

- पशुपति टिकिन्छा गुठीको दर्ता भएको साविक लगत , लगत अनुसार कति क्षेत्रफल उल्लेख छ ? सो को विवरण।
- पशुपति टिकिन्छा गुठी कस्तो प्रकारको गुठी जग्गा हो ? गुठी तैनाथी , खान्पी गुठी, अधिनस्थ गुठी , रैतानी आदि। जुन प्रकारको गुठी जग्गा हो त्यसलाई पुष्ट्याई हुने प्रमाण समेतको बिस्तृत विवरण।
- गुठीको लगत एवं चार किल्ला भएको सो को आधारमा माग गरिएको जग्गा हाल कहाँ पर्छ ? साविक शुरु नापीमा कुन कुन कित्ता कति क्षेत्रफल कायम भएको छ र फिल्डमा के व्यहोरा जनिएको छ ? ती जग्गाहरु कुन निकाय अथवा व्यक्ति बिशेषका नाममा दर्ता भएका छन छैनन ? त्यसको विवरण।
- जग्गा गुठीको हो भन्ने साविक दर्ताको आधार।
- माग भएका गुठी जग्गा हाल पुन: नापीमा के कुन कित्ता नं. र क्षेत्रफल कायम भएका छन ? फिल्ड बुकमा के व्यहोरा जनिएको छ ? कुन निकाय अथवा व्यक्ति बिशेषका नाममा दर्ता भएका छन छैनन ? त्यसको विवरण।
- जग्गा दर्ता माग गरिएको गुठी जग्गामा महन्त , पूजारी , खान्पीदार , गुठीयारलाई जोताहाले जग्गाधनी देखाएको, भए निज खान्पीदार गुठीयार महन्त पूजारी हो भन्ने आधार प्रमाणहरु।
- गुठीको जग्गामा जोताहाले दावी गरेकोमा जोताहाले दर्तावालालाई वाली बुझाएको प्रमाण र दर्तावाला समेत बुझेको कारवाही।
- दर्तावाला आफै जोताहा भएकोमा गुठीमा वाली बुझाएको प्रमाण।
- पशुपति गुठी अन्तरगतका गुठी जग्गा भए पशुपति गुठी अन्तरगतका कार्यालयबाट दर्ता गरी दिने शिफारिस पत्र।
- गुठीजग्गा दर्ता माग भएको केशमा भोग सार्वजनिक सूचना र स्थलगत सर्जमिन समेतको विवरण।
- कार्यालयमा रहेको साविक दर्ता लगत भिडाउने र यस अघि सोही लगतबाट अरु जग्गा दर्ता भएको छ छैन ? एकिन गर्ने।
- दोहोरो दर्ता माग दावी छ छैन ? हेर्ने।

- आवश्यकतानुसार सम्भव भए सम्म निवेदकको भूमिसुधार सम्बन्धी अनुसूची १, १ (क), २,३, ४, ६र ७ भरेको विवरण
- गुठीमा दर्ता माग भएको जग्गा सरकारी, सार्वजनिक पर्छ पर्दैन ? एकिन राय।
- सुवर्ण शम्शेरको जफत भएको जग्गाको चारकिल्ला भित्र गुठी जग्गा माग भएको भन्ने बिषयमा गुठी संस्थानको धारणा।
- माग भएको जग्गा गुठी के हो ? भन्ने अन्य स्पष्ट आधारहरु।
- समस्याको बिषयबस्तु : देखिएको समस्या , समस्या समाधानका बैकल्पिक उपाया, गुठी संस्थानले मन्त्रालय मार्फत अपेक्षा गरेको बिषय।
- पशुपति टिकिन्छा गुठीको साविक लगतबाट के कति जग्गा दर्ता भयो र कति बांकि छ ? त्यसको विवरण।

१५. (केन्द्र): मिति २०६२।०६।११ को च.नं. ८१७ क.शा. १०५-२०६२/०६३ को पत्रबाट केन्द्रीय कार्यालयले उक्त मिसिल र प्रश्न सम्बन्धमा प्रष्ट पारी खुलाई पठाउन भनी गुठी संस्थान तहसिल शाखा कार्यालयलाई निर्देशन दिएको।

१६. (तहसिल) :- च.नं. १०२८ मिति २०६२।०६।२० गते गुठी संस्थान शाखा कार्यालयले उक्त मिसिल र प्रश्न सम्बन्धमा १५ वटा जवाफ प्रष्ट पारी खुलाई गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको । ( छानबिन प्र. अनुसूची १८२ )

सो सम्बन्धमा पशुपति टिकिन्छा गुठीको १९६३ साल बैशाख १२ गतेको लगत उतार पाना ४ गुठी लगतबाट प्राप्त हुन आएको, सो लगतमा जग्गाको विवरण उल्लेख भएको देखिन्छ। उक्त लगतबाट स्थापनाको उदेश्य र क कसले राखेको हो ? भन्ने वारे लगतमा स्पष्ट रुपमा उल्लेख भएको देखिएन।

- उक्त गुठीको साविक लगत अनुसार खेत १६६-५-०-० उल्लेख भएको देखिन्छ।
- उक्त गुठी राजगुठी अन्तरगतको अमानतबाट संचालनहुदै आएको गुठी हो, साविक लगतमा यीनै उल्लेख भई सकेको छ।
- माग भएको जग्गा का.म.पा. वडा नं. ४ मा पर्ने देखिन्छ। साविक फिल्डबुक उतारमा फायल संलग्न रहेको।
- मागदावी भएका जग्गाहरु पशुपति टिकिन्छा गुठीको मलिकुली खेत र असौगल खेतबाट साविक भिड्ने भनी उल्लेख गरे अनुसारको विवरण फायल संलग्न छ।
- जग्गा दर्ता सम्बन्धमा श्री ५ को सरकार समरजंग कम्पनीका नाममा दर्ता भएको दर्ता श्रेस्ता उतार फायल संलग्न छ।
- जोताहाले खान्पीदार ,गुठीयार , महन्त, पूजारीको जग्गा हो भनी फिल्डबुकमा लेखाईएको देखिदैन।
- गुठी जग्गाका खास जोताहा व्यक्तिले मोहीयानी हक प्राप्त गर्ने र दर्तावाला मोहीले क्षतिपुर्ति पाउने ब्यवस्था छ।
- कारवाही माग गर्ने व्यक्तिहरुले जोताहा मोही हुँ भनी प्रमाण पेश गरेको देखिन्छ।
- पशुपति टिकिन्छा गुठी गुठी संस्थान अन्तर्गत राजगुठीको भएको र यस कार्यालयवाट अमानतमा संचालन भई रहेको छ
- सार्वजनिक सूचना प्रकाशित भएको गोरखापत्र फायल संलग्न छ। फायल संलग्न सर्जमिन मुचुल्काबाट उक्त जग्गा पशुपति टिकिन्छा गुठीको भई निवेदकहरुले भोगचलन गरी आएको व्यहोरा उल्लेख गर्दै कोही कसैको दावी उजूरी परेको छैन।

- निवेदकहरुले उक्त गुठीको मलिकुली खेत समेतको मोही आशामरु ज्यापु समेत नामको खेत १० मध्येबाट भिड्ने भनी दावी गरेको , सो लगतबाट अन्य जग्गा भिडी कायम भएको साविक लगतमा देखिन्छ।
- दोहोरो दर्ता सम्बन्धमा मालपोत कार्यालयबाट दावी छैन भनी लेखि आएको पत्र संलग्न छ।
- भूमिसुधार कार्यालय काठमाडौंबाट प्राप्त हुन आएको २ नं. अनुसूचीको व्यहोरा फायल संलग्न देखिन्छ। सो पत्रमा जग्गाधनी श्री ५ को सरकार उल्लेख भई मोहीमा बिभिन्न व्यक्तिको नाम उल्लेख भएको।
- उक्त जग्गा साविकमा श्री ५ को सरकारका नाममा दर्ता भई यीनै निवेदकहरुले भोगचलन गरी आएको संलग्न कागजातवाट देखिन्छ। पेश हुन आएको सर्जमिन मुचुल्का हेर्दा हाल सम्म निवेदकहरुले नै भोगचलन गरी आएको भन्ने व्यहोरा उल्लेख भएको व्यहोरा अनुरोध गर्दछु।

१७ (केन्द्र): मिति २०६२।०७।११ च७.जशा .नं./२०६२/०६३ को पत्रद्वारा गुठी संस्थान केन्द्रीय कार्यालयले भूमिसुधार तथा ब्यवस्था मन्त्रालयलाई सोधनी भएका १९ मध्ये **१५ वटा** प्रश्नहरूको दफावार रूपमै जवाफ तयार गरी आवश्यक निकाशाको लागि सक्कल टिप्पणी सहितका फाईल थान १८ समेत भूमिसुधार तथा मन्त्रालयमा पठाएको।

यसमा यस संस्थानको ज.शा. १०५-२०६२।०६३ च.नं. ८१७ मिति २०६२।०६।११ गतेको पत्रबाट तहसिल शाखा कार्यालय काठमाडौंमा लेखि गएकोमा उक्त कार्यालयको च.नं. १०२८ मिति २०६१।०६।२० को पत्रबाट यस जग्गा प्रशासन शाखालाई संबोधन गरी फायल समेत संलग्न गरी खुलाई आएकोमा आवश्यक निकाशाको लागि सक्कल टिप्पणी सहितका फाईल थान १८ समेत भूमिसुधार तथा मन्त्रालयमा पठाएको। सो पत्रमा निम्न अनुसार खुलाई पठाईएको देखिएको,

क) पशुपति टिकिन्छा गुठीको १९६३ साल बैशाख १२ गतेको लगत उतार पाना ४ गुठी लगत वाट प्राप्त हुन आएको। सो लगत मा जग्गाको विवरण उल्लेख भएको देखिन्छ। उक्त लगत वाट स्थापनाको उदेश्य र क-कसले राखेको हो भन्ने बारे स्पष्ट रुपमा उल्लेख भएको देखिएन।

ख) सो गुठीको साविक लगत अनुसार खेत १६६-५-०० उल्लेख भएको देखिन्छ।

ग) उक्त गुठी राज गुठी अन्तर्गतको अमानतबाट संचालन हुदै आएको गुठी हो साविक लगत माथिनै उल्लेख भै सकेकोछ।

घ) माग भएको जग्गा काठमाडौं महानगरपालिका वडा नं. २३ हाल वडा नं. ४ मा पर्ने देखिन्छ साबिक फिल्ड बुक उतार फाईल संलग्न रहेको।

ङ) मागदावी भएका जग्गाहरु पशुपति टिकिन्छा गुठीको मनिकुली खेत र सैगाल खेतबाट साबिक भिडने भनी उल्लेख गरे अनुसारको लगत फाईल संलग्न छ।

च) हाल नयाँ नापी अनुसारको फिल्ड बुक उतार फाईल संलग्न देखिन्छ।

छ) जोताहा ले जग्गावाला गुठीका महन्त पुजारी कै जग्गा हो भनी फिल्ड बुकमा लेखाएको देखिदैन।

ज) गुठी जग्गाको खास जोताहा व्यक्तिले मोहीयानी हक प्राप्त गर्ने र दर्ता वाल मोहीले क्षतिपूर्ति पाउने व्यवस्था छ।

झ) कारवाही माग गर्ने व्यक्तिहरुले जोताहा मोही हुँ भनी प्रमाण पेश गरेको देखिन्छ।

ञ) पशुपति टिकिन्छा गुठी गुठी संस्थान अन्तर्गत राजगुठीको भएको,यस कार्यालयबाट अमानतमा संचालन भई रहेकोछ।

ट) सार्वजनिक सूचना प्रकाशन भएको गो.प. फाईल संलग्न छ ।

ठ) फाईल संलग्न सर्जमिन मुचुल्काबाट उक्त जग्गा पशुपति टिकिन्छा गुठीको भई निवेदकहरुले भोग चलन गरी आएको व्यहोरा उल्लेख गर्दै कोही कसैको दावी उजूरी परेको छैन।

ड) निवेदकहरु ले उक्त गुठीको मलिकुली खेत समेतको मोही आशामरू ज्यापु समेत नामको खेत १० मध्ये भिड्ने भनी दावी गरेको सो लगतबाट अन्य जग्गा भिडि कायम भएको साविक लगतबाट देखिदैन।

ढ) दोहोरो दावी सम्बन्धमा मालपोत कार्यालयमा रेकर्ड छैन भनी लेखि आएको पत्र संलग्न छ।

ण) भुमि सुधार कार्यालय काठमाडौंबाट प्राप्त हुन आएको ६ नं. अनुसूचीको व्यहोरा फाईल संलग्न देखिन्छ सो पत्रमा जग्गाधनी श्री ५ को सरकार उल्लेख भई मोहीको नाम उल्लेख भएको।

१८. (मन्त्रालय) :

**टिप्पणी:-** श्रीमान् का.जि.का.म.न.पा. वडा नं. २३ क्ष र २३ ह कि.नं. ९,१०,११,१२ १३,१४,१५ ,१६ ,२२, २४,२५, २६,२७, २८,२५,३१, ३५,३७,४०,४१,४१, १५,४६,४७, ४८,४९,५०,५२,६३,६४,६८,६९,७३,७६,७७,७८ जग्गाहरु श्री ५ को सरकार गुठीका नाउमा दर्ता प्रमाणित भई रहेका जग्गा हुन्। उल्लेखित जग्गाहरु साविकमा सुवर्ण शम्शेरको जफत भएको ललिता निवासको भोग चलनमा भएकोले जफत भई समरजंग कम्पनीको रेखदेखमा रहेका र जग्गा जोत्ने हरुले त्यही वाली बुझाई आएका रहेछन। जफत भएको सम्पत्ति फिर्ता गर्ने सम्बन्धमा रुक्म शम्शेर ज.व.रा.को निवेदन अनुसार कारवाही हुँदा गुठी सम्बन्धमा गुठी संस्थान बुझि पेश गर्ने आदेश भएकोले र सो सम्बन्धमा मालपोत कार्यालयले संस्थानको मिति २०५३।०१।२० को पत्र समेत राखी मालपोत बिभागमा २०५३।०२।०८ मा पेश गरेको देखिन आयो। जग्गा जोतभोग गर्ने निम्न लिखित ब्यक्तिले निम्न लिखित कित्ता जग्गा दर्ता नामसारी गरी ज.ध.पुर्जा पाउँ भन्ने निवेदन गरेका छन।

**निम्न**

**साविक हाल विवरण : का.म.न.पा. २३ क्ष**

| सि.नं. | साविक मोही | हाल निवेदक | साविक कि.नं. | क्षे.फ. | हाल नयाँ नापी कि.नं. | क्षे.फ. |
|---|---|---|---|---|---|---|
| | पंचनारायण महर्जन | पंच नारायण ( क्ष २३नगर ) | २८ | ३०-१५- | ७२ | ११-०-१३- |
| | | | | | ७३ | १३-३-१२- |
| | | | | | ९१ | १०-०-५- |
| | | | ४२ | ००-५- | १८ | ०२-१-५- |
| | आशा नारायण | तीर्थमाया महर्जन (क्ष २३नगर ) | १५ | ८०-५- | ७६ | ०३-१-५- |
| | | | ६३ | ००-४- | | |
| | | | | | ७८ | ८०-०-०- |
| | | | २५ | ००-१२- | ७४ | ००-१-११- |
| | | | | | ४७ | ०३-०-४- |
| | | | | | ३४ | २२१-३-९- |
| | न्हुच्छे महर्जन | मचानानी महर्जन (क्ष २३नगर ) | ६८ | १०-८- | १९३ | - |
| | | | ६९ | ०२-६- | २३१ | - |
| | | | | | ६४ | १३-१-८- |
| | लक्ष्मी नारायण महर्जन | लक्ष्मी नारायण महर्जन | ७८ | २०-९- | ५ | - |
| | | | | | ६ | - |

| | | | | | | |
|---|---|---|---|---|---|---|
| | | ( क्ष २३नगर ) | | | १४ | - |
| | हर्ष नारायण डंगोल | रामकृष्ण महर्जन ( क्ष २३नगर ) | ४० | ०२-१३- | २५३ | - |
| | | | | | २४७ | |
| | सुराम बहादुर . गुरुङ | कान्छा महर्जन ( क्ष २३नगर ) | १२ | ० ०-५- -१०२५) १५ | २४५ | - |
| | | | | | २४७ | |
| | जीत बहादुर | आशामाया महर्जन ( क्ष २३नगर ) | ७३ | १०२५१४- | ४८ | - |
| | कृष्ण महर्जन | श्रीमती मोहन महर्जन ( ह२३नगर ) | २२ | १०-८- | २६२ | - |
| | | | | | २६७ | |
| | | | | | २९५ | |
| | नारायण महर्जन | ग्वाराभाई महर्जन ( ह२३नगर ) | २५ | १२-३- -१०२५) (१५ | १०६ | - |
| १०. | कर्ण बहादुर गुरुङ | रेना गुरुङ ( ह२३नगर ) | १५ | २०-३- | २५० | - |
| | | | २४ | ००-८- | २५७ र १०४ | |
| ११. | भाईचा महर्जन | देव नारायण महर्जन ( क्ष२३नगर ) | ४८ | ००-१४- | २६१२,११, | - |
| | | | ७६ | २०-१२- | ३८२१, | |
| १२. | नाती डंगोल | देव नारायण महर्जन ( ह२३नगर ) | ३५ | ०३-१४- | ५६९,५४,८०, | - |
| १३. | | | ३७ | १०-१५- | - | |
| १४. | जोगमान महर्जन | द्वारिकामान महर्जन ( ह २३नगर ) | ३१ | १०-३- | २७८२८४, | - |
| | | | ७७ | ००-१०- | १२१३, | |

उल्लेखित कित्ता जग्गा साबिक नापीको कित्ता श्री ५ को सरकार गुठीका नाममा र अन्यका  नाममा दर्ता प्रमाणित भएकमा सो दर्ता बदर नहुदै नयाँ नापीमा जग्गा रेखदेख गर्न समरजंग कम्पनीका नाममा नापी दर्ता भएको देखियो । यी जग्गा श्री पशुपति टिकिन्छा गुठी को १९६३ सालको  लगत मलिकुली खेत समेतको लगतसँग भिडने हुन भन्ने तहसिल शाखा कार्यालयको लेखाई रहेको छ शुवर्ण शम्शेरका हकवाला यस संस्थानमा उपस्थित भई उक्त जग्गा पशुपति टिकिन्छा गुठीका हुन भनी कागज गरी दिएका छन । गुठीको उक्त लगत भिडि अन्य जग्गा दर्ता भएका छैनन भन्ने गुठी जग्गाको लगत राख्ने कार्यालयको लेखाई भएको समेतबाट यी जग्गा गुठीका हुन भन्ने देखिएको छ ।

साबिक गुठी जग्गा श्री ५ को सरकारको नाउमा दर्ता हुन गएको देखिएमा गुठी संस्थान ऐन, २०३३ को दफा ३९ अनुसार पहिले नै निर्णय नगरी गुठी कायम हुनु पर्ने औचित्य आधार र किटानी राय समेत उल्लेख गरी गुठी कायम गर्ने बिषयमा श्री ५ को सरकारको स्वीकृतिको लागि यस मन्त्रायमा पेश गर्नु भन्ने ऐनको दफा ५२ बमोजिम च.नं. ५०४५ मिति २०५५।०३।०८ को पत्रबाट निर्णय भई आएको रहेछ।

माथि उल्लेखित जग्गा पुरानो नापी बमोजिका कित्ता श्री ५ को सरकार गुठीका र अन्यको नाममा दर्ता भएकोमा नयाँ नापीमा श्री ५ को सरकार समरजंग कम्पनीका नापी दर्ता भएको र ती जग्गा पशुपति टिकिन्छा गुठीको लगत भित्रको हुँदा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा भएको दर्ता कट्टा गरी श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गर्ने स्वीकृतिको लागि भु.सु. मन्त्रालयमा पठाउने भनी ०६१।०८।०८ मा आदेश भएकोले आदेशानुसार सक्कल टिप्पणी सहितको प.वं. फायल थान १८ साथ राखि अनुरोध गर्दछु भनी गुठी संस्थान केन्द्रीय कार्यालय को च.नं. ११८१ मिति ०६१।०८।१४ को पत्रबाट लेखि आएकोले पेश गरेको छु। मिति २०६२।०९।१२।

श्रीमान्, गुठी संस्थान केन्द्रीय कार्यालयका उक्त पत्रबाट यस मंत्रालयको च.नं. ५०४५ मिति २०५५।०३।०८ को पत्रबाट भएका निर्देशन अनुसार स्वीकृतिको लागि फाइल प्राप्त हुन आएको र सो २०५५।०३।०८ को यस मन्त्रालयको पत्रमा "सविक गुठी जग्गा पछी श्री ५ को सरकारको नाउमा दर्ता हुन गएको देखिएकोमा गुठी संस्थानले गुठी संस्थान ऐन, २०३३ क दफा ३९ अनुसार पहिले नै निर्णय नगरी गुठी कायम हुनु पर्ने औचित्य आधार र किटानी राय समेत उल्लेख गरी गुठी कायम गर्ने बिषयमा श्री ५ को सरकारको स्वीकृतिका लागि मन्त्रालयमा पेश गर्ने" भन्ने उल्लेख भएको देखिएकोमा फाईल अध्ययन गर्दा निम्न बिषयहरुमा निम्न अबस्था रहेका कारण निम्न बमोजिम गुठी संस्थानबाट एकिन गरी गुठी कायम हुनु पर्ने औचित्य आधार र किटानी राय माग गरी प्राप्त हुन आएपछि कारबाही अगाडि बढाउन उपयुक्त हुने देखिं प्रस्तुत गरेको छु।

गुठी संस्थानबाट श्री ५ को सरकारको स्वीकृति माग भएको उक्त पत्रमा साविक नापीको कित्ता श्री ५ को सरकार, गुठीको नाममा र अन्यको नाममा दर्ता प्रमाणित भएकोमा सो बदर नहुदै नयाँ नापीमा जग्गा रेखदेख गर्ने समरजंग कम्पनीको नाममा नापी भएको देखियो भनी उल्लेख भएकोमा मालपोल कार्यालय काठमाडौंको च.नं.३७ मिति २०६२।०५।०६ को पत्रसाथ रहेको जग्गाधनी दर्ता श्रेस्ताको प्रतिलिपीबाट केही जग्गाहरु जग्गाधनी महल खाली, केही जग्गाहरुको जग्गाधनी महलमा श्री ५ को सरकार गुठी र केही जग्गाहरुको जग्गाधनी महलमा श्री ५ को सरकार उल्लेख भई दर्ता बाँकी भन्ने ब्यहोरा जनिएको देखिएकोले उल्लेखित जग्गाहरु गुठी संस्थान ऐन, २०३३ को दफा ३९ बमोजिम वा छुट जग्गा दर्ता अन्तरगत कारबाही गर्ने मध्ये कुन बिषय को हो ?

१) साविक देखि गुठीको जग्गामा के कसरी साविक र पुन ? नापीमा अन्यका नाममा नाप नक्सा भएको हो :

२) यस मन्त्रालयको च.नं. ९४० मिति २०६२।०६।०३ गतेको पत्रबाट सोधनी भएको नं. १६ र १९ नं. उल्लेख भएको बिषयमा के भएको हो ? (शा.अ. हुपेन्द्र मणी के.सी. मिति २०६२।०९।१२), (उ.स. रघुनाथ अधिकारी मिति २०६२।०९।१२)।

३) श्रीमान्, उपर्युक्तानुसार गुठी संस्थानले उल्लेखित कित्ता जग्गाहरु गुठी कायम गर्नु पर्ने आधार औचित्य वारे एकिन राय लिनुपर्ने देखिदा उक्त संस्थानबाट राय प्राप्त भएपछि यस बारे कारबाही टुङगो लगाउन उपर्युक्त हुने

देख्दछु । (सह सचिव रुद्र कुमार श्रेष्ठ, मिति २०६२।०९।१२ ) "हुन्छ" । सचिव युवराज भुषाल , मिति २०६२।०९।२१

१७. (केन्द्र) श्रीमान, यसमा मिति २०६२।०७।११ को निर्णयानुसार फायल भु.सु. तथा ब्यबस्था मन्त्रालयमा पेश भएकोमा उक्त मन्त्रालयको प.सं. ६।१।०६२/०६३ ज.टि. १६०५। ०६१।०६२ ।४२२ च.नं. १९९८ मिति २०६२।०९।२५ पत्रबाट उल्लेखित जग्गाहरु गुठी कायम हुनु पर्ने औचित्य आधार र यकिन राय साथ प्राप्त भए पछी कारबाही टुङगो लगाउने भनी मिति ०६२।०९।२१ मा भएको निर्णय अनुसार औचित्य आधार र किटानी राय साथ पठाउन प्राप्त फाईल साथै फिर्ता पठाईएको छ भनी लेखि आएको ।

१) गुठी संस्थानबाट श्री ५ को सरकारको स्वीकृती माग भएको उक्त पत्रमा साविक नापीको कित्ता श्री ५ को सरकार गुठीक नाममा र अन्यका नाममा दर्ता प्रमाणित भएकोमा सो वदर नहुदै नया नापीमा जग्गा रेखदेख गर्न समरजंग कम्पनीका नाममा नापी दर्ता भएको देखियो भनी उल्लेख भएकोमा मालपोत कार्यालय काठमाडौंको च.नं.३७ मिति ०६२।०५।०६ को पत्रसाथ रहेको ज.ध.दर्ता श्रेस्ताको प्रतिलिपीबाट केही जग्गाहरु जग्गाधनी महल खाली केही जग्गाहरुको ज.ध. महलमा श्री ५ को सरकार उल्लेख भै दर्ता बांकि भन्ने ब्यहोरा जनिएको देखिएकोले उल्लेखित जग्गाहरु गुठी संस्थान ऐन, २०३३ को दफा ३९ बमोजिम वा छुट जग्गा दर्ता अन्तरगत कारवाही गर्ने भन्दा कुन बिषय को हो ?

२) साबिक देखि गुठी को जग्गा के कसरी साविक र पुन नापीमा अन्यका नाममा नाप नक्सा भएको हो ?

३) यस मन्त्रालयको च.नं. ९४० मिति २०६२।०६।०३ को पत्रबाट सोधनी भएको नं. १६ र १९ मा उल्लेख भएको बिषय के भएको हो ?

यसमा उल्लेखित बिषयमा खुलाई पेशगर्न फायल समेत फिर्ता प्राप्त भएको देखिएकोले सोही ब्यहोरा पेश गर्दछु । जो आदेश

मिति २०६२।११।१८ । (स.बद्री सुवेदी ), २०६२।११।१२ । (पुण्डरी के.सी. शा.अ.) ।

श्रीमान, यसमा भूमिसुधार तथा व्यवस्था मन्त्रालयवाट निर्देशन भै आएको उल्लेखित बिषयमा खुलाई पठाउन तहसिल शाखा कार्यालयमा प्रस्तुत कारबाही फायल समेत संलग्न गरी पठाउन पेश गरेको छु । ( २०६२।११।१९ । (प्रेम हरी ढकाल भु.अ. ) ।

सवै कुरा मन्त्रालयले दिएको निर्देशन अनुसार बुझि पठाउन मिसिल कार्यालयमा पठाउनु । दिलिप २०६२।११।२१ ।

१८. (शाखा): *के. का. को ०६२।११।२१ को आदेशानुसार गुठी संस्थान तहसिल शाखा कार्यालय कालमोचनमा लेखि पठाएकोमा उक्त कार्यालयको च.नं. २६९४ मिति ०६२।१२।३ को पत्रबाट निम्नानुसार खुलाई पठाईएको देखिएको*

१) पत्रमा उल्लेख भएका जग्गाहरुको मालपोत कार्यालयबाट श्रेस्ता माग गर्दा उक्त कित्ता जग्गाहरु साविकमा दर्ता बाँकी हाल नापी नक्सा अनुसार श्रेस्ता कायम नदेखिएको भनी मा. पो. का. डिल्लीबजारको च.नं. १०८६३ मिति ०६२।११।२९ को पत्रबाट लेखि आएकोले प्राप्त पत्र साथै संलग्न

१) साविक देखि गुठीको जग्गा के कसरी साविक र पुन नापी अनुसारके जग्गा नाप नक्सा भएको हो भन्ने बिषयमा यस कार्यालयबाट यकिन गर्न नसकिने ।

२) भु.सु. तथा व्यवस्था मन्त्रालयको च.नं. ९४० मिति २०६२।०६।०३ को पत्रबाट सोधनी भएको सि.नं. १६ को विषयमा गु.सं.केन्द्रीय कार्यालय बाटै यकिन हुनु पर्ने र सि.नं. १९ को बारेमा यस कार्यालयको च.नं. ११४५ मिति २०६२।०६।२८ को पत्रबाट लेखि पठाई सकिएको देखिन्छ ।

३)	यसमा तहसिल शाखाको सि.नं. ३ मा उल्लेख भए अनुसार  च.नं. १२४७ मिति २०६२।७।२८ को पत्रबाट निम्न बमोजिम खुलाई आएको देखिन्छ :-

मन्त्रालयबाट सोधनी भएको १ देखि १४ सम्मको जवाफ  पूर्व पत्रमा उल्लेख भई सकेको सि.नं. १४ देखि १९ सम्मको प्रश्नको सम्बन्धमा सि.नं. १५ मा दर्ता मात्र भएको जग्गा सम्बन्धमा हाल संलग्न निवेदन वडाको सिफारिस, सर्जमिन मुचुल्का आदि प्रमाणहरु बाट व्यक्तिकै भोग भित्रको भन्ने व्यहोरा कार्यालयबाट उल्लेख भएको देखिन्छ । नक्सा भिडाई प्राविधिकबाट निरीक्षण भएमा स्थलगत अवस्था प्रष्ट हुने व्यहोरा उल्लेख गर्दछु । सि.नं. १५ देखि १८ सम्मको  जवाफ गु.सं. केन्द्रीय कार्यालयबाटै यकिन हुनु पर्ने ।

सि.नं. १९ को दफामा पशुपति टिकिन्छा गुठीको साविक लगत अनुसार १६६-५-० जग्गा देखिने र  हाल ९३-११-० जग्गा दर्ता भै अधिनस्थ लगत कायम भएको र हाल ६०-१-० जग्गा गुठी रैतानी नम्बरी परिणत भै सकेको, अन्य जग्गाहाल साविक भिडि दर्ता हुन बाँकी रहेको ।

१९.	(केन्द्र): मिति २०६२।०९।२४ गते च.नं. १९९८ बाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयले ३ वटा प्रश्न सोधी गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएकोमा उक्त प्रश्नहरूको जवाफ मिति २०६३।०६।०६ गते ज.शा. ७/९७/०६३/६४ को पत्रबाट गुठी संस्थान केन्द्रीय कार्यालयवाट भूमिसुधार तथा ब्यवस्था मन्त्रालयमा पठाएको।

२०.	(मन्त्रालय): गु.सं. केन्द्रीय कार्यालयको जवाफ अपुरो भएकोले पूर्व पत्र अनुसारको सम्पूर्ण विवरण सहित उक्त संस्थानको राय पुरा गरी पठाउनु हुन भनी च.नं. ८२२ मिति २०६३।७।१९ गते भूमिसुधार तथा ब्यवस्था मन्त्रालयबाट उक्त  फाइल पुन: गुठी संस्थान केन्द्रीय कार्यालयमा नै फिर्ता पठाएको, ।

२१.	(केन्द्र): मिति ०६३।०७।२१ को  टिप्पणी निर्णय भई केन्द्रीय कार्यालयबाट शाखा कार्यालयलाई लेखि पठाएको,

श्रीमान, यसमा मिति २०६३।०६।०४ को आदेशानुसार  भुमि सुधार तथा ब्यवस्था मन्त्रालयको चं. ८२२ मिति २०६३।०७।१९ को पत्रको सम्बन्धमा यस मन्त्रालयको प.सं. ६/१/५/०६२/०६३ ज.टि. १६०५ /०६१/०६२ नं. ४२२ च.नं. १९९८ मिति २०६३।०९।२४ मा गुठी कायम हुनु पर्ने औचित्य आधार र एकिन राय पठाउनका लागि पत्र लेखि पठाईएकोमा सो को जवाफमा ताहावाट प्राप्त च.नं. ७४१ मिति २०६३।०६।०६ को पत्रमा संस्थानको कुनै राय उल्लेख नभएको सि.नं. १  र  ४ नं. उल्लेख भएको साविक दर्ता सम्बन्धी व्यहोरा एक आपसमा बाझिएको र यस मन्त्रालयको प.सं. ६।१।०५। ०६२।०६३।१६०५।२०८जा।९४० मिति २०६२।०६।०३ को पत्रको वुँदा नं. १६ मा सुवर्ण शम्सेरको  जफत भएको जग्गाको चारकिल्ला भित्र गुठी जग्गा कायम भएको भन्ने बिषयमा गुठी संस्थानको धारणा उल्लेख गरी पठाउनु पर्नेमा सो समेत भई आएको नदेखिएकोले यस मन्त्रालयको पूर्व पत्र अनुसारको सम्पूर्ण विवरण सहित संस्थानको राय पुरा गरी पठाउनु हुनका लागि प्राप्त फायलहरु यसैसाथ संलग्न राखी पठाईएको भनी लेखि आएकोले श्रीमान समक्ष पेश गरेको छु । जो आदेश । मिति २०६३।०७।२१ ।( स.प्रशान्त पौडेल ) ।

श्रीमान, श्री भूमि सुधार तथा व्यवस्था मन्त्रालयको मिति २०६३।०७।१९ को पत्रमा यस संस्थानबाट मिति ०६३।०६।०६ च.नं. ज.शा.७।९७।७४१ को पत्रमा उल्लेख भएको सि.नं. १ मा यी कारवाहीमा आएका कित्ता जग्गाहरुको  मालपोल कार्यालयबाट मोठ श्रेस्ता उतार माग गर्दा उक्त कित्ता जग्गाहरु साबिकमा दर्ता बाँकि र हाल नया नापी अनुसार श्रेस्ता कायम नदेखिएको भनी मालपोत कार्यालय डिल्लीबजारवाट च.नं. १०८६३ मिति ०६२।११।२९को पत्रबाट लेखि आएको छ । मा.पो. का.को ०६२।११।१९ को पत्रसाथ प्राप्त

श्रेस्ताको फोटोकपीबाट श्री ५ को सरकार गुठी तथा नाम खाली भन्ने समेत ज.ध.को नाम थर वतन महलमा देखिदा गुठी संस्थान ऐन, २०३३को दफा ३९ अन्तरगत कारवाही हुनुपर्ने नभई छुट जग्गा दर्ता सम्बन्धी कारवाही हुने सो पत्र र पत्रसाथ प्राप्त मोठ उतार साथै संलग्न छ भनी उल्लेख भएको छ।

सि.नं. ४ मा साविक नापीको कित्ता श्री ५ को सरकार गुठीको नाममा अन्यको नाममा दर्ता प्रमाणित भएकोमा सो दर्ता बदर नहुदै नया नापीमा जग्गा रेख देख गर्ने समरजंग कम्पनीका नाममा नापी दर्ता भएको देखियो। यी जग्गा श्री पशुपति टिकिन्छा गुठीको १९६३ सालको लगतमा मलिकुली खेत समेतको लगत सँग भिड्ने हुन भन्ने तहसिल शाखा कार्यालयको लेखाई रहेको छ। सुवर्ण शम्शेरका हकवाला यस संस्थानमा उपस्थित भई उक्त पशुपति टिकिन्छा गुठीको हुन भनी कागज गरी दिएका छन। गुठीको उक्त लगत भिडि अन्य जग्गा दर्ता भएका छैनन भन्ने गुठी जग्गाको लगत राख्ने कार्यालयको लेखाई भएको समेतबाट यी जग्गा गुठीको हुन भन्ने देखिएको छ भनी उल्लेख भएको देखिएको र भु.सु. व्य. मन्त्रालयको मिति २०६३।०७।१९ को पत्रमा संस्थानको कुनै राय उल्लेख नभएको साथै सि.नं. १ र ४ नं.दर्ता व्यहोरा वाँझिएको भनी उल्लेख भएकोले उचित आदेशको लागि पेश गर्दछु। मिति ०६३।०७।२१।

श्रीमान् ,यसमा भूमिसुधार तथा ब्यवस्था मन्त्रालयबाट लेखि आएको बिषयमा खुलाई राय साथ पठाउन तहसिल शाखा कार्यालयमा लेखि पठाई तहसिल शाखा कार्यालयबाट खुलाई राय साथ पेश हुन आएपछि संस्थानबाट मन्त्रालयमा राय पठाउन उपयुक्त हुने व्यहोरा पेश गरेको छु। ०६३।०७।२१। ( प्रेमहरि ढकाल मु.अ.)।

तहसिल शाखा कार्यालयको राय लिई पेश गरौ। ०६३।०७।२१ ( हस्ताक्षर मात्र ) हेम

२२. (शाखा): गुठी संस्थान तहसिल शाखा कार्यालयको च.नं. ७४६ मिति ०६३।०७।२४ को पत्रद्वारा केन्द्रीय कार्यालयमा टिप्पणी फाईल पठाएको,

२३. (केन्द्र) श्रीमान ,यसमा मिति २०६३।०७।२१ को आदेशानुसार तहसिल शाखा कार्यालयको च.नं. ७४६ मिति ०६३।०७।२४ को पत्रबाट सुवर्ण शम्शेरको जफत भएको जग्गा को चारकिल्ला गुठी जग्गा कायम भएको भन्ने बिषयमा गुठी संस्थानको धारणा उल्लेख गरी पठाउनु पर्नेमा सो समेत भई आएको नदेखिएकोले यस मन्त्रालयको पूर्व पत्र अनुसारको सम्पूर्ण बिवरण सहित संस्थानको राय पुरा गरी पठाउन भु.सु. तथा व्य. मन्त्रालयबाट ताहा फायल प्राप्त भएको अवस्था देखिन्छ। यस कार्यालयबाट प्रष्ट भनिएका बिषयहरु मध्ये कारवाहीमा आएको उक्त कित्ता जग्गाहरु हाल सम्म दर्ता वाकी छ भनी नापी शाखाक च.नं. १११४ मिति ०६२। ०५।९ को भुमि सुधार तथा ब्यवस्था मन्त्रालयलाई लेखेको पत्रको फायल संलग्न फोटोकपी र मा.पो. का. डिल्लीबजारक च.नं. १० र ६३ मिति २०६२।११।१९ को पत्रबाट समेत दर्ता वाँकि भन्ने देखिन्छ दर्ताको प्रमाणित गर्ने निकायबाट प्रमाणित भै आएका पत्रहरुलाई नै आधार मान्नु पर्ने हुन्छ । साविक लगत सम्बन्धमा यस कार्यालयको मिति ०६२।०६।२० को पत्रबाट साविक पशुपति टिकिन्छा गुठीको मलीकुली खेत र औ सगल खेत मध्येवाट हा.सा. हुनुपर्ने व्यहोरा गरी साविकै छ। फायल संलग्न ऐ.ऐ. स्थानको अन्य जग्गाको दर्ताको व्यवस्था अध्ययन गर्दा सुवर्ण समसेरका हकदार रुकम समसेर ज.व.रा. समेतका नाउको मालपोत कार्यालयको मि.नं.१०२४।०४९।५० मिति ०४९।९।२ र मि.नं. १०२४।०४९।०५० मिति ०४९।७।२५ हुने निर्णयले दा.खा भएको अन्य कित्ताहरु हाल कारवाहीमा रहेका कित्ताको नजिक रहेको व्यहोरा नापी नक्साबाट देखिन आउछ जहा सम्म गुठी संस्थानक धारणा प्रस्तुत गर्नु पर्ने बिषय छ। गुठी संस्थानको धारणा के .का. वाटै प्रस्तुत हुन उपयुक्त हुने देखि फायल थान १७ ( सत्र ) साथै राखी पठाएको छु। भनी शाखा कार्यालयबाट

लेखि आएकोले पेश गर्दछु । जो आदेश । २०६३।०७।२६ ( स.प्रशान्त पौडेल र मिति २०६३।०७।२६ ब.स. विश्व बिनय पन्त ) ।

मिति २०६३।०७।२१ को आदेशानुसार उपरोक्त लेखिए बमोजिम तहसिल शाखाबाट लेखि आएकोले पेश गर्दछु । (२०६३-७।२६ पुण्डरी के.सी. र मिति २०६३।०७।२६ प्रेमहरी ढकाल मु.अ. ) ।

श्रीमान, श्री सुवर्ण समसेरको जग्गा जफत हुँदाका बखत राजपत्रमा प्रकाशित सूचनामा उल्लेखित चारकिल्ला भित्र यो कारवाहीमा आएका कित्ता जग्गा पर्छन वा पर्दैनन भन्ने सम्बन्धमा नापी शाखा बुझि आएपछि राय साथ पेश गर्न निर्देशन हुन पेश गरेको छु । मिति २०६३।०७।२८ ।

हेम जी, यसमा माथि पेश भए बमोजिम नापी शाखा बुझि आएपछि राय साथ पेश गरौ ।

जग्गा शाखा,आदेशानुसार गरी पेश गर्ने ।

यसमा मिति ०६३।०७।२८ को आदेशानुसार नापी शाखा डिल्लीबजारमा पत्राचार गर्दा उक्त कार्यालयको च.नं. १६५२ मिति ०६२।०७।२८ को पत्रबाट कारवाहीमा आएको कित्ता जग्गाहरु २०२१ साल मार्ग गतेको नेपाल गजेटमा प्रकाशित सूचनाको चारकिल्ला भित्र पर्ने व्यहोरा अनुरोध गरीन्छ भनी लेखि आएकोले सो पत्र यसै साथ संलग्न गरी पेश गर्दछु जो आदेश । (मिति २०६३।०७।२८ गते व.स. बिश्व बिनय पन्त र मिति ०६३।०७।२८ स. बद्री सुवेदी, २०६३।०७।२८ पुण्डरी के.सी. र मिति २०६३।०७।२८ प्रेम हरि ढकाल ) ।

श्रीमान उपरोक्तानुसार खुली आएको ब्यहोरा र श्रेस्ताको प्रतिलिपी को व्यहोरा सहित भूमि सुधार तथा ब्यबस्था मन्त्रालयमा पठाउन उपयुक्त देख्दछु । मिति २०६३।०७।२९ ( हेम सुवेदी ) ।

यसमा पेश भए बमोजिम सम्पूर्ण विवरण र संस्थानको सो जग्गा सम्बन्धमा मिति २०६१।०८।०८ मा भएको निर्णयको व्यहोराको राय सहित भु.सु. मन्त्रालयमा अनुरोध गरी पठाउने । मिति २०६३।०७।३० सेमन्त राज चापागाई ) ।

२४. (केन्द्र): गुठी संस्थान केन्द्रीय कार्यालयको पत्रसंख्या: ज.शा.७/१४७/०६३/०६४ मिति २०६३।०८।०१ गतेको पत्रद्वारा भूमि सुधार तथा ब्यवस्था मन्त्रालयमा फायल पठाएको ,

ताँहाको प.सं. ६।१।५।०६३।०६४ (ज.टि. १६०५) नं. ३२४ च.नं. ८२२ मिति २०६३।०७।१९ को पत्रसाथ कारवाही फायलहरु समेत प्राप्त भयो । उक्त सम्बन्धमा निम्नानुसार खुलाई अनुरोध गर्दछु ।

१) कारबाहीमा आएका जग्गा मध्ये का.नं. पा. वडा नं. २३ क्ष कि.नं. १५,२५,२८,४२ र ६३ का जग्गाहरु गुठी लगत तथा तहबिल कार्यालय भद्रकालीको च.नं. २४२२ मिति ०४२।०१।१८ को पत्रानुसार तोक आदेशले श्री ५ सरकार गुठीका नाउमा गएको भन्ने मालपोत कार्यालय काठमाडौंमा मिति ०५८।०२।१० को पत्रसाथ प्राप्त श्रेस्ता उतार बाट देखिन्छ । यसमा अन्य कारवाहीमा आएका कित्ताहरु हालसम्म दर्ता बाँकि छ भन्ने मालपोत कार्यालयको बिभिन्न पत्र तथा गुठी संस्थान तहसिल शाखा कार्यालयको च.नं. ७४६ मिति २०६३।०७।२३ को पत्रसमेतबाट खुलाई आएको । यी जग्गाहरु पशुपति टिकिन्छा गुठीको साविक मलिकुली खेत र आसगल खेतको जग्गा मध्येबाट हाल साविक भिड्ने जग्गा हो भन्ने पनि तहसिल शाखाको च.नं. ७४६ मिति २०६३ ।०७।२३ को पत्रबाट स्पष्ट गरी आएको देखिन्छ ।

२) शुवर्ण शम्शेरको नामको जग्गा जफत गर्न प्रकाशित २०२१।०८।१७ को नेपाल गजेटमा उल्लेख भएको ४ किल्ला भित्र यी जग्गा पर्छ पर्दैन भनी नापी शाखा डिल्ली बजारमा पत्राचार गर्दा सो चारकिल्ला भित्र मागदावीका जग्गाहरु पर्ने हो भनी च.नं. १६५२ मिति २०६३।०७।२८ को पत्रबाट खुलाई आएको ।

३)	श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको लगत अनुसार पशुपति टिकिन्छा गुठीको नाममा हाल साविक भिडाई दर्ता गर्न स्वीकृतिको लागि मिति २०६१।०८।८ मा निर्णय भई त्यहा अनुरोध गरी गुठी संस्थानको धारणा व्यक्त भई सकेको छ। सोही बमोजिम भई आउने मिति २०६३।०७।३० को निर्णय सहितको फायल थान १९ यसैसाथ संलग्न गरी पठाईएको व्यहोरा अनुरोध गर्दछु। ( सेमन्तराज चापागाई प्रशासक )

२५.	(मन्त्रालय): मिति २०६३।८।१ गते गुठी संस्थान केन्द्रीय कार्यालयको पत्रसाथ मन्त्रालयमा प्राप्त भएको कारबाहीमा आएका २१ कित्ता जग्गा सम्बन्धमा पुन : नापीमा समरजंग कम्पनीको नाममा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा बिनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि म.प. प्रस्ताव पेश गर्नु पर्ने भनी मिति २०६३।०९।२५ मा मा. मन्त्री प्रभु नारायण चौधरीबाट टिप्पणी सदर भएको,

**<u>मन्त्रालयको टिप्पणी ब्यहोरा :</u>**

श्रीमान, मिति २०६२।०९।२१ को निर्णय अनुसार गुठी संस्थानको धारणा र एकिन राय पठाउनु भनी गुठी संस्थानलाई मिति २०६२।०९।२१ मा लेखि पठाईएकोमा सो संस्थानको मिति २०६३।०६।०६ को पत्र प्राप्त भई व्यहोरा अपूर्ण भएकोले पुन: स्पष्ट गरी पठाउनु भनी प.सं. ६/१/५/०६३/६४ ज.टि.१६०५ नं. ३२४ मिति २०६३।०७।१९ मा पत्र पठाईएकोमा देहायको उल्लेख,

१.	कार्यालयमा प्राप्त पत्रमा का.न.पा. वडा नं. २३ का कि.नं. १५,२५,२८, ४२ र ६३ का जग्गाहरु गुठी लगत तथा तहविल कार्यालय भद्रकालीको च.नं. २४२८ मिति २०४२।०१।१८ को पत्रानुसार तोक आदेशले श्री ५ सरकार गुठीको नाउमा गएको भन्ने मालपोत कार्यालयकाठमाडौंको मिति २०५८।०२।१० को पत्र साथ प्राप्त श्रेस्ता उतारवाट देखिने,

२.	यसरी दर्ता वाँकि छ भन्ने मालपोत कार्यालयको बिभिन्न पत्र तथा गुठी संस्थान तहसिल शाखा कार्यालयको च.नं. ७४६ मिति २०६३।०७।२३ को पत्र समेतबाट खुलाई आएको।

३.	यी जग्गाहरु पशुपति टिकिन्छा गुठीको साबिक मलिकुली खेत र असौगाल खेतको जग्गा मध्येवाट हाल साविक भिड्ने जग्गा हो भन्ने पनि तहसिल शाखाको च.नं. ७४६ मिति ०६३।०७। २३ को पत्रबाट स्पष्ट गरी आएको देखिन्छ।

४.	सुवर्ण शम्शेरको नामको जग्गा जफत गर्न प्रकाशित २०२१।०८।१७ को नेपाल गजेटमा उल्लेख भएको ४ किल्ला भित्र यी जग्गाहरु पर्छ पर्दैन भनी नापी शाखा डिल्लीबजारमा पत्राचार गर्दा सो चार किल्ला मागदावीका जग्गाहरु पर्ने हो भन्ने च.नं. १६५२ मिति ०६३।०७।२८ को पत्रबाट खुलाई आएको।

५.	श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टी गरी गुठीको लगत अनुसार पशुपति टिकिन्छा गुठीको नाममा हाल साविक भिडाई दर्ता गर्न स्वीकृतिका लागि मिति २०६१। ०८।०८ मा निर्णय भई त्यहा अनुरोध गरी गुठी संस्थानको धारणा व्यक्त भई सकेको र सोही बमोजिम भै आउन मिति ०६३।०७।३० को निर्णय सहितको फायल थान १९ साथ यसैसाथ संलग्न गरी पठाईएको ब्यहोरा अनुरोध गर्दछु, भनी गुठी संस्थान केन्द्रीय कार्यालयको प.सं.ज.शा. ७।४४३।०६३।०६४ च.नं. १०४४ मिति २०६३।०८।०१ को पत्रसाथ फाईल प्राप्त हुन आएको,यस मन्त्रालयको संस्थानको धारणा व्यक्त भई सकेको तथा तिनै पत्रहरु मध्ये संस्थानको प.सं. ज.शा. ७ /९७/०६३/०६४ च.नं. ७४१ मिति २०६३।०६।०६ को पत्रको दफा ४ मा साविक नापीका कित्ता श्री ५ को सरकार र गुठीका नाममा र अन्यका नाममा दर्ता प्रमाणित भएकोमा सो दर्ता बदर नहुदै नयाँ नापीमा जग्गा रेखदेख गर्न समरजंग कम्पनीको नाममा नापी दर्ता भएको देखियो। यी जग्गा श्री पशुपति टिकिन्छा गुठीको

१९६३ सालको लगतमा मलिकुलि खेत समेतको लागतसँग भिड्ने हुन भन्ने तहसिल शाखा कार्यालयको लेखाई रहेको र सुवर्ण शमशेरको हकबाला यस संस्थानमा उपस्थित भई उक्त जग्गा पशुपति टिकिन्छा गुठीका हुन भनी कागज गरी दिएका छन् । गुठीको उक्त लगत भिडि अन्य जग्गा दर्ता भएका छैनन भन्ने गुठी जग्गाको लगत राख्ने कार्यालयको लेखाई भए समेतबाट यी जगा गुठीका हुन भन्ने समेत ब्यहोरा खुली आएको र प्रस्तुत कित्ता जग्गाहरुको मालपोत कार्यालय डिल्लीबजारवाट जग्गाधनी दर्ता श्रेस्ता समेत उतार माग गरी हेर्दा श्री ५ को सरकार समरजंग कम्पनीको नाउमा दर्ता भएको फिल्डबुक तथा श्रेस्ता उतार प्राप्त भएको हुँदा अव बाँकी काम प्रचलित कानून बमोजिम गर्न प्राप्त फाईल गुठी संस्थानमा फिर्ता पठाउन निर्णयको लागि पेश गरेको छु । ना.सु. बासुदेव हुमागाई । २०६३।०९।१९ ।

श्रीमान्, गुठी संस्थान के का.को च.नं. ११८१ मिति २०६१।०८।०९ को पत्रबाट साविक नापीको कित्ता श्री ५ को सरकार गुठीका र अन्यका नाममा दर्ता भएमा नयाँ नापीमा जग्गा रेखदेख गर्ने श्री ५ को सरकार समरजंग कम्पनीका नाममा दर्ता भएको र ती जग्गा पशुपति टिकिन्छा गुठीको लगत भित्रको हुँदा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा भएको दर्ता बदर गरी पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गर्न स्वीकृतिको माग भै आएको, सो सन्दर्भमा,

१. मालपोत कार्यालय डिल्लीबजारको च.नं. १११४ मिति २०६२।०५।९, च.नं. ४८४ मिति २०६३।०८।२५ र च.नं. ५७६२ मिति २०६३।०९।१७ को पत्रबाट साविक नापीको कित्ता हा.सा. दर्ता बाँकी र हाल नापीमा श्री ५ को सरकार समरजंग कम्पनी र अन्य ब्यक्तिका नाममा दर्ता भएको भन्ने उल्लेख भएको र श्रेस्ताको प्रतिलिपी बाट साविक नापीमा मोहीको नाम उल्लेख गरी श्रेस्ता कायम भै दर्ता वाँकि रहेको र हालको नापीमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको देखिएको ,

२. गुठी संस्थान केन्द्रीय कार्यालयको च.नं. १०४४ मिति २०६३।०८।०१ को पत्रको बुँदा नं. ४ मा सुवर्ण शम्शेरको नामको जग्गा जफत गर्न प्रकाशित २०२१।०८।१७ को नेपाल गजेटमा उल्लेख भएको चारकिल्ला भित्र सो जग्गा पर्छ पर्दैन भनी नापी शाखा डिल्लीबजारमा पत्राचार गर्दा सो चारकिल्ला भित्र मागदावीका जग्गाहरु पर्ने हो भनी च.नं. १६५२ मिति २०६३।०७।२८ को पत्रबाट खुलाई आएको भन्ने उल्लेख भएको ।

३. समरजंग कम्पनीको गुठी संस्थान तहसिल शाखा कार्यालय काठमाडौंमा पठाईएको च.नं. ५ मिति २०५९।०४।१० को पत्रमा “ गुठीको जग्गा हो होईन, यस कार्यालयबाट भन्न नसकिने के हो ? तँहाको लगत हेरी गर्नु हुन भनी” उल्लेख भएको ।

४. मिति २०६०।०८।११।०५ मा सुवर्ण समशेरको हकदार (सुनिता राणा, शैलजा राणा र रुक्म शमशेर ज.व.रा.ले, सुवर्ण शमशेर ज.व.रा. ) ले गरी दिएको कागजमा “ हाम्रो पीता स्व. श्री सुवर्णशम्शेर ज.व.रा. देशमा प्रजातन्त्र वहालीको लागि राजनीतिमा लाग्नु भएको कारण तत्कालीन शासकहरुले हाम्रा जग्गा जमिनको श्री सम्पत्ति सर्वस्व हरण गरेकोले हामीबाट हरण भएको सम्पत्ति अंचलाधिश कार्यालयलाई जिम्मा दिएको कारणले श्री ५ को सरकार समरजंग कम्पनी र अंचलाधिस कार्यलयको नाम नापीको समयमा मोही हरुले लेखाएका हुन् , यस्तो लेखाई गुठी जग्गामा मात्र नभई यसै सँगको रैकर जग्गामा पनि सोही प्रकारको लेखाई फिल्डबुकमा लेखिएको थियो । देशमा प्रजातन्त्रको पुनरबहाली पछी २०४७ सालमा हाम्रो जग्गा फूकुवा भएपछि रैकर तर्फका सम्पूर्ण जग्गाहरु हामीले आफ्नो नाममा दर्ता गरीयो । गुठी जग्गाका सम्बन्धमा गुठी संस्थान ऐनले दर्तावाला मोहीको हक कायम गरी जोताह मोहीको नाममा जग्गा दर्ता गरी दिने ब्यबस्था मोहीले साबिक कित्ता

नं. १० को श्री ५ को सरकार टिकिन्छा गुठीको जग्गा समेत हामीहरुले दर्ता नगराएका हौं । बिद्यमान ऐन बिनियम, अनुसार जोताहा मोहीको नाममा दर्ता गरी दिएमा मञ्जूर छ" भन्ने व्यहोराको कागज गरेको,

यस अबस्थामा गुठी संस्थान केन्द्रीय कार्यालयबाट पुन नापी हुँदा भएको श्री ५ को सरकार समरजंग कम्पनीको नामको दर्ता वदर गरी गुठीका नाममा दर्ता गर्न स्वीकृतिका लागि भै आएका अनुरोध अनुसार नेपाल सरकार म.प.को स्वीकृति आवश्यक पर्ने हुँदा पुन: नापी हुँदा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको गुठी लगत भित्रको जग्गाको नेपाल सरकार समरजंग कम्पनीको नाम कट्टा गरी सम्बन्धीत गुठीको नाममा दर्ता गर्ने गुठी संस्थानलाई स्वीकृति दिने गरी नेपाल सरकार म.प.मा. प्रस्ताव प्रस्तुत हुन पर्ने देखि पेश गरेको छ । शा.अ. हुपेन्द्र मणी के.सी. । मिति २०६२।०९।१२ ।

श्रीमान, यसमा माथि पेश भए अनुसार पुन : नापीमा समरजंग कम्पनीको नाममा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा बिनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि म.प. मा प्रस्ताव पेश गर्नु पर्ने देख्दछु । ईन्द्र प्रसाद ढुंगाना (उप–सचिव) । मिति २०६३।०९।२१ ।

सह- सचिव नारायण गोपाल मलेगो । मिति २०६३।०९।२४ ।

माननीय मन्त्री ज्यू, सचिव- रबिन्द्र मान जोशी । मिति २०६३।०९।२५ ।

"सदर" मन्त्री प्रभु नारायण चौधरी । मिति २०६३।०९।२५ ।

२६ (मन्त्रालय): श्रीमान, सर्वोच्च अदालत फैसला कार्यान्वयन निर्देशनालयको च.नं. ६४२ मिति २०६९।०२।२८ को पत्रवाट " निवेदक द्वारीकामान महर्जन बिरुद्द अख्तियार दुरुपयोग अनुसन्धान आयोग समेत भएको सम्वत् २०६४ सालको रिट नं १६३ को उत्प्रेषण परमादेश रिट निवेदनमा सम्मानित सर्वोच्च अदालतबाट मिति २०६४।११।३० मा जारी भएको आदेशमा जग्गा दर्ता सम्बन्धमा साधिकार निकायमा निवेदन परी आवश्यक कारवाही चली रहेको अबस्थामा अधिकार क्षेत्र नै नभएको जग्गा सम्बन्धी बिषयको उजूरी सुनी जग्गा दर्ता सम्बन्धमा निवेदन दिई कारवाही चलिरहेको निवेदक समेतलाई कुनै थाहा जानकारी समेत नदिई बुझ्दै नबुझि प्राकृतिक न्यायको सिद्दान्त बिपरित साधिकार निकायमा जग्गा दर्ता सम्बन्धमा चलिरहेको काम कारबाहीलाई नै निस्तेज पार्ने गरी बिपक्षी आयोगबाट भएको मिति २०६४।०२।२० को निर्णयलाई कानून सम्मत मान्न मिल्ने नदेखिदा बिपक्षी आयोगको उक्त निर्णय उत्प्रेषणको आदेशद्दारा बदर गरीदिएको छ । निवेदकले जग्गा दर्ता सम्बन्धमा गुठी संस्थानमा दिएको निवेदन उपर कारबाही गरी रहेको स्थिति देखिंदा अव जे जुन कारबाही गर्नु पर्छ गर्नु भनी बिपक्षी गुठी संस्थानको नाउमा परमादेश समेत जारी गरी दिईएको छ भन्ने उल्लेख छ । उक्त आदेश यथाशिघ्र कार्यान्यवन गरी कार्यान्वयन सम्पन्न भएको जानकारी यस निर्देशनालयलाई दिनु हुन भनी च.नं. ३२२ मिति २०६८।०३।०५ मा पत्र पठाउदा समेत हाल सम्म कार्यान्यवन गरी जानकारी पठाएको नदेखिंदा प्रस्तुत ताकेता लेख्ने काम भएको छ । पत्र प्राप्त भएपछि यथाशिघ्र कार्यान्वयन गरी सो को जानकारी यस निर्देशनालयलाई दिनु हुन" भनी लेखि आएको सन्दर्भ समेतमा ,

- "का.जि.का.म.न.पा. वडा नं. २३ क्ष कि.नं. २८,४२,१५,६३,२५,६८,६९,७८,७३,४८,७६,३१,७७, ऐ.२३ ह कि.नं. ४०,१२,२२,२५,१५,२४,३५,३७ का जग्गा साविक नापीको कित्ता श्री ५ को सरकार गुठीको नाममा र अन्यका नाममा दर्ता प्रमाणित भएकोमा सो बदर नहुदै नयाँ नापीमा जग्गा रेखदेख गर्ने समरजंग कम्पनीको नाममा नापी दर्ता भएको देखियो । यो जग्गा पशुपति टिकिन्छा गुठीको १९६३ सालको लगतमा मलिकुली खेत

समेतको लगतमा भिड्ने हुन भन्ने तहसिल शाखा कार्यालयको लेखाई रहेको छ। सुवर्ण संमशेरका हकवाला यस संस्थानमा उपस्थित भई उक्त जग्गा पशुपति टिकिन्छा गुठीका हुन भनी कागज गरी दिएका छन। गुठीको उक्त लगत भिडी अन्य जग्गा दर्ता भएका छैनन भन्ने गुठी जग्गाको लगत राख्ने कार्यालयको लेखाई समेतबाट यी जग्गा गुठीका हुन भन्ने देखिएको छ। साविक गुठी जग्गा श्री ५ को सरकारको नाउँमा दर्ता हुन गएका देखिएमा गुठी संस्थानले गुठी संस्थान ऐन, २०३३ को दफा ३९ अनुसार पहिले नै निर्णय गरी गुठी कायम हुनु पर्ने औचित्य र आधार किटानी राय समेत उल्लेख गरी गुठी कायम गर्ने बिषयमा श्री ५ को सरकारको स्वीकृतिको लागि यस कार्यालयमा पेश गर्नु भन्ने ऐनको दफा ५२ बमोजिम च.नं. ५०४५ मति २०५५।०३।०८ को पत्रबाट निर्देशन भई आएको रहेछ। उल्लेखित पुरानो नापी बमोजिमका कित्ता श्री ५ को सरकार गुठीका र अन्यको नाममा दर्ता भएकोमा नयाँ नापीमा श्री ५ को सरकार समरजंग कम्पनीको नापी दर्ता भएको र ती जग्गा पनि टिकिन्छा गुठीको लगत भित्रको हुँदा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको कट्टा गरी श्री पशुपति टिकिन्छा गुठीका नाउमा दर्ता गर्ने स्वीकृतिको लागि भु.सु. तथा ब्यबस्था मन्त्रालयमा पठाउने भनी २०६१।०८।०८ मा आदेश भएकोले आदेश अनुसार सक्कल टिप्पणी सहितको फाईल थान १८ साथै राखी अनुरोध गर्दछु" भनी गुठी संस्थान केन्द्रीय कार्यालयको च.नं. ११८१ मिति २०६१।०८।९ को पत्रबाट लेखि आएको,

- उल्लेखित जग्गाको दर्ता सम्बन्धमा मालपोत कार्यालय डिल्ली बजारबाट दर्ता र रोक्काको बिषयमा तथा नापी कार्यालय डिल्लीबजारवाट हाल साबिक बिषयको जानकारी माग गरिएकोमा मालपोत कार्यालय डिल्लीबजारको च.नं.३७ मिति २०६२।०५।०६ को पत्रबाट" जग्गाको दर्ता बाँकि रहेको, रोक्का नदेखिएको" भन्ने ब्यहोरा र नापी कार्यालय डिल्ली बजारको च.नं. १११४ मिति २०६२।०५।०८ को पत्रबाट "हाल साबिक विवरण" प्राप्त हुन आएको,- यस मन्त्रालयको च.नं.९४० मिति २०६२।०६।०३ को पत्रबाट उक्त जग्गा सम्बन्धी विवरण गुठी संस्थान केन्द्रीय कार्यालयबाट माग गरिएकोमा उक्त कार्यालयको च.नं. १००७ मिति २०६२।७।११ को पत्रसाथ प्राप्त मिति २०६२।०७।११ को टिप्पणीबाट विवरण प्राप्त हुन ,
- यस मन्त्रालयको च.नं. १९९८ मिति २०६२।०९।२४ को पत्रबाट उल्लेखित जग्गाहरु गुठी संस्थान ऐन, २०३३ को दफा ३९ बमोजिम वा छुट जग्गा दर्ता अन्तरगत कारवाही गर्ने मध्ये कुन बिषयको हो ? साविक देखि गुठीको जग्गामा के कसरी साविक र पुन: नापीमा अन्यका नाममा नाप नक्सा भएको हो ? भनी पत्राचार भएकोमा गुठी संस्थान केन्द्रीय कार्यालयको च.नं. ७४१ मिति २०६३।०६।०६ को पत्रबाट "कारबाहीमा आएका कित्ता जग्गाको मालपोत कार्यालयबाट मोठ श्रेस्ता उतार माग गर्दा साविकका दर्ता वाँकि र हाल नयाँ नापी अनुसार श्रेस्ता कायम नदेखिएको भनी लेखि आएकोले दफा ३९ अन्तरगत कारबाही हुनु पर्ने नभई छुट जग्गा दर्ता सम्बन्धी कारवाहि हुने, नाप नक्साको कार्य हुने समय गुठीका प्रतिनिधि फिल्डमा उपस्थित हुन नसकेको र मोहीहरुको अज्ञानताले अन्य ब्यक्तिको नाममा नाप नक्सा हुन सक्ने, यी जग्गा श्री पशुपति टिकिन्छा गुठीको १९६३ सालको लगतमा मलिकुली खेत समेतको लगत सँग भिड्ने हुन भन्ने तहसिल शाखा कार्यालयको लेखाई रहेको समेतबाट गुठीको जग्गा हुन् भन्ने देखिएको, पशुपति टिकिन्छा गुठीको साबिक लगत अनुसार १६६-५-० जग्गा देखिने र हाल ९३-११-० जग्गा दर्ता भई अधिनस्थ लगत कायम भएको र ६०-१-० जग्गा जुठी रैतानी नम्बरी परिणत भै अन्य जग्गा हाल साबिक भिडि दर्ता हुन वाँकी रहेको भनी लेखि आएको,
- यस मन्त्रालयको मिति २०६३।०७।१९ को पत्रबाट उल्लेखित जग्गाको सम्बन्धमा संस्थानको धारणा माग गर्दा गुठी संस्थान केन्द्रीय कार्यालयको च.नं. १०४४ मिति २०६३।...।१ को पत्रबाट "का.म.न.पा. वडा नं. २३ को

कि.नं. १५,२५,२८,४२,र ६३ का जग्गा भई अन्य जग्गाहरु हाल सम्म दर्ता बाँकी छ भन्ने मालपोत कार्यालयको बिभिन्न पत्र तथा गुठी संस्थान , तहसिल शाखा कार्यालयबाट खुलाई आएको,। यी जग्गाहरु पशुपति टिकिन्छा गुठीको साबिक मलिकुली खेत र असैगाल खेतको जग्गा मध्येवाट भिडने हो भनी तहसिल शाखाको पत्रबाट स्पष्ट गरी आएको, सुबर्ण शम्शेरको नामको जग्गा जफत गर्न प्रकाशित २०२१।०८।१७ को नेपाल गजेटमा उल्लेख भएको ४ किल्ला भित्र पर्ने भनी नापी शाखाबाट लेखि आएको, श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको लगत अनुसार टिकिन्छा गुठीको नामको हाल साबिक भिडाई दर्ता गर्न स्वीकृतिको लागि" भनी लेखि आएको,

- नेपाल सरकार (बिभागीय मन्त्री स्तर) को मिति २०६३।०९।२५ को निर्णय अनुसार "गुठी संस्थानबाट माग भए अनुसार गुठी लगत भित्रका पुन: नापीमा समरजंग कम्पनीका नाममा दर्ता हुन गएका जग्गाहरुको नेपाल सरकार समरजंग कम्पनीका नामको दर्ता श्रेस्ता कट्टा गरी प्रचलित, नियम तथा विनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता अध्याबधिक समेत गर्न गुठी संस्थानलाई स्वीकृति दिन" का लागि मिति २०६३।०९।२६ मा प्रस्ताव पेश भएकोमा प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालयको प.सं. बै.शा.११६३/०६३ मिति २०६३।१२।२५ को प्रस्तावमा "परिवर्तित सन्दर्भमा नेपाल सरकार मन्त्रीपरिषदबाट निर्णय दिन आवश्यक भएकोले बिभागीय मन्त्रीज्यूको स्वीकृति लिई पेश गर्ने ब्यबस्थाको लागि" भनी प्रस्ताव दर्ता हुन आएको,
- दुरुपयोग अनुसन्धान आयोगको च.नं. ७२५ मिति २०६३।१२।०९ को पत्रबाट "साबिकमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा रहेको बिभिन्न कित्ता जग्गा गैर कानूनी तरीकाले ब्यक्तिको नाममा दर्ता लागेकोले छानबीन गरी पाउँ भन्ने उजूरीका सम्बन्धमा आयोगबाट कारबाही अगाडि बढिरहेको छ । त्यहाँबाट प्राप्त विवरण अनुसारका सम्पूर्ण कित्ता जग्गा अर्को आदेश नभए सम्मका लागि कुनै किसिमले दर्ता, नाम सारी, खरिद बिक्रि हुन नपाउने गरी रोक्का राखी जानकारी पठाउनका लागि मालपोत कार्यालय डिल्ली बजारलाई लेखि यस मन्त्रालयलाई बोधार्थ दिएको र सो अनुसार उक्त गुठी संस्थानबाट दर्ताको लागि लेखि आएका कित्ता मध्ये का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५, १४ को कि.नं. ११,१२, ऐ सिट नं. १०२५-१५ को कि.नं. १८,७२,७३,९१,७४,७६,(६) ९१,६४,४७,७ , १०४,१०६ ऐ सिट नं. १०२५,-१९ कि.नं. ५ , ६ र ऐ सिट नं. १०२५-२० को कि.नं. ९ का जग्गाहरु रोक्कामा परेको,
- अख्तियार दुरुपयोग अनुसन्धान आयोगको मिति २०६४।०२।२० को बैठकको निर्णय मिति २०६३।१२।०९ को पत्रबाट रोक्का राख्न पठाएका जग्गा मध्ये का.म.न.पा. वडा . ४ को सिट नं. १०२५-२० को कि.नं. ९,१६,१८,२९,४१ सिट नं. १०२५-१५ को कि.नं. १०४,१०६,७४,७६,७७,८२,९१,५६,६३,६४,७२,७३,४७,४८,५३,५४,१८,३२ सिट नं. १०२५-१९ को कि.नं. १,२,३,५,६, सिट नं. १०२५-१४ कि.नं. २१,१,११,१२ का जग्गाहरु नेपाल सरकारका नाममा दर्ता गरी जग्गाधनी प्रमाण पुर्जा जिल्ला प्रशासन कार्यालय काठमाडौंमा पठाई आयोगलाई जानकारी दिनुहुन भनी निर्णय भएको,
- अख्तियार दुरुपयोग अनुसन्धान आयोगको उक्त मिति २०६४।०२।२० को निर्णय उत्प्रेषणको आदेश जारी गरी पाउँ भनी उक्त आयोग समेतलाई बिपक्षी बनाई कृष्ण महर्जन, मचानानी महर्जन, द्वारीकामान महर्जन, तिर्थ माया महर्जन, रेना गुरुङ महर्जन, देव नारायण महर्जन, तिर्थमाया महर्जन, देव नारायण महर्जन, पंच नारायण महर्जन , ग्वारा भाई महर्जन समेत जना १० ले छुट्टा छुट्टै दिएका निवेदनमा सम्मानित सर्वोच्च अदालतबाट

मिति २०६४।११।३०। ५ मा ‘‘जग्गा दर्ता सम्बन्धमा साधिकार निकायमा निवेदन परि आवश्यक कारबाही चली रहेको अबस्थामा अधिकार क्षेत्र नै नभएको जग्गा सम्बन्धी बिषयको उजूरी सुनी जग्गा दर्ता सम्बन्धमा निवेदन दिई कारवाही चलाई रहेका निवेदन समेतलाई कुनै थाहा जानकारी सम्म नदिई बुझ्दै नबुझि प्राकृतिक न्याय सिद्दान्तको बिपरित साधिकार निकायमा जग्गा दर्ता सम्बन्धमा चलिरहेको काम कारबाहीलाई नै निस्तेज पार्ने गरी बिपक्षी आयोगको मिति २०६४।०२।२० को निर्णयलाई कानून सम्मत मान्न मिल्ने नदेखिदा बिपक्षी आयोगको उक्त निर्णय उत्प्रेषणको आदेशद्दारा बदर गरी दिईएको छ। निवेदनको जग्गा दर्ता सम्बन्धमा गुठी संस्थानमा दिएको निवेदन उपर कारबाही गरी रहेको स्थिति देखिदा अव जे जो कारबाही गर्नुपर्छ गर्नु भनी बिपक्षी गुठी संस्थानको नाममा परमादेशको आदेश जारी गरिएको छ’’ भनी उत्प्रेषण सहितको परमादेश जारी भएको ,

- गुठी संस्थानबाट लेखि आएको जग्गा मध्ये हाल नापीको नगर वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. ७२,७३,९१,७६,७४,४७,३४,१९३,२३१,६४,२५३,२४७,२४५,१०६,१०४,२५०,२५७ सिट नं. १०२५-१४ को कि.नं. २६,११,१२,३८,२१ सिट नं. १०२५-१९ को कि.नं. ५,६,१४,१,३,१२,र सिट नं. १०२५-२० को कि.नं. ९,५४ का जग्गाहरु सम्मानीय प्रधानमन्त्री निवासको दक्षीण तर्फ परिसर बिस्तार तथा निवास क्षेत्र बिस्तार गरेपछि ८ मिटर चौडा बाटो निर्माणका लागि प्राप्त गर्ने र मोहीको हिस्सामा पर्ने जग्गा सोध भर्ना दिने गरी भौतिक योजना तथा निर्माण मन्त्रालयको प्रस्ताव (मिति २०६६।१२।१९) मा नेपाल सरकार मन्त्रीपरिषदबाट मिति २०६६।१२।२९ मा निर्णय भै सो निर्णय कार्यान्वयनको निमित्त यस मन्त्रालयको मिति २०६७।१।२७ को प्रस्तावमा नेपाल सरकार मन्त्रीपरिषदबाट मिति २०६७।१।३१ मा निर्णय भै सो निर्णय कार्यान्वयनका लागि मालपोत कार्यालय डिल्लीबजारमा यस मन्त्रालयबाट मिति २०६७।२।०६ मा पत्राचार भएको,
- गुठी संस्थानको उक्त मिति २०६१।०८।०९ च.नं. ११८१ को पत्रबाट लेखि आए बमोजिम नया नापीको का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. १८,७८, २६२, २६७,२९५, २७८, २८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६ र ८० को जग्गा मात्र दर्ता हुन बाँकी रहेको तथा उल्लेखित जग्गाहरु पशुपति टिकिन्छा गुठीको हो भनी गुठी संस्थानको मिति २०६२।१।११ को टिप्पणी च.नं. ७४१ मिति २०६३।०६।०६ पत्र,मिति २०६३।०८।१ को पत्रबाट लेखि आएको र यस मन्त्रालयबाट मिति २०६३।०९।२६ मा पुन: नापीमा समरजंग कम्पनीका नाममा दर्ता हुन गएको जग्गाहरुको नेपाल सरकार समरजंग कम्पनीको नामको लगत कट्टा गरी प्रचलित ऐन, नियम तथा विनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक गर्न गुठी संस्थानलाई निर्देशनको निमित्त प्रस्ताव पेश भएको र सो प्रस्ताव सरकार परिवर्तन भएको कारणले दर्ता भएको तथा प्रस्तुत बिषयमा सम्मानित सर्वोच्च अदालतबाट प्रमाणको मुल्याङकन गरी कारवाही गर्नका लागि परमादेशको आदेश समेत जारी भएको,

जग्गा (नापजाँच) ऐन, २०१९ बमोजिम साविकमा नाप नक्सा हुँदा काठमाडौं जिल्ला काठमाडौं नगरपालिका वडा नं. २३ क्ष कि.नं. ७३,३१ ऐ. वडा नं. २३ ह कि.नं.२२,३५ जनिई नाप नक्सा भई दर्ता प्रमाणित हुन बाँकी रहेका जग्गाहरु पुन : नापी हुँदा तत्कालीन समयमा जग्गाको रेखदेख गर्ने समरजंग कम्पनीको नाममा दर्ता भएको पुन: नापी बमोजिम का.जि. का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. २६२,२६७,२९५,२७८,२८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६ , ८० का जग्गाहरुको साबिक गुठीको लगतका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता

सच्याई प्रचलित कानून बमोजिम पशुपति टिकिन्छा गुठीका नाममा दर्ता गर्न गुठी संस्थानलाई स्वीकृति दिनका निमित्त नेपाल सरकार मन्त्रीपरिषद प्रस्ताव पेश हुने देखि प्रस्तुत गरेको छु।

उप- सचिव - हुपेन्द्रमणी के.सी. ( २०६९।०४।०२ )

श्रीमान सचिव ज्यू, पेश भए अनुसारको निर्णयका लागि नेपाल सरकार म.प.मा प्रस्तुत गर्न मनासिव देख्दछु। सह सचिव

तेजराज पाण्डे ( २०६९।०४।०५ गते )

माननीय मन्त्री ज्यू , पेश भए अनुसार हुनका लागि पेश गरेको छु । सचिव दिनेश हरि अधिकारी, मिति २०६९।०४।०७ गते

"सदर" मन्त्री चन्द्रदेव जोशी। ( २०६९।०४।०८ )

२७. (सामाजिक समिति): मिति २०६९।०६।१४ मा उक्त प्रस्ताव सामाजिक समितिको बैठकमा पेश भएको

२८. (मन्त्रीपरिषद्) : दर्ता सच्याउने विषय म. प. बै. स. ३८।६९ मिति २०६९।०६।१८ को मन्त्रिपरिषदको बैठकले समाजिक समितिको मिति २०६९।०६।१४ मा बसेको बैठकले पेश गरेअनुसार उक्त प्रस्ताव प्रस्तावमा लेखिएबमोजिम गर्ने भनी निर्णय भएको,

२९. (मन्त्रालय) : भूमि सुधार तथा ब्यबस्था मन्त्रालय ( जग्गा प्रशासन शाखा) को ज.टि. १६०५/०६९/०७०/३/१ नं. २२९, च.नं. ७५७ मिति २०६९।०७।२६ को पत्रबाट गुठी संस्थान केन्द्रीय कार्यालयमा निर्णय कार्यान्वयनको लागि लेखि पठाएको,

३०. (केन्द्र): मिति २०६९।१०।०४ को गुठी संस्थान केन्द्रीय कार्यालयका प्रशासक बलीराम प्रसाद साह तेलीको टिप्पणी ।

**बिषय:- दर्ता स्वीकृति सम्बन्धमा।**

श्रीमान,यस संस्थानको प.स.ज.स. १/२२२/०६१/०६२ च.नं. ११८१ मिति २०६१।०८।०९ को पत्रबाट माग भई आएको स्वीकृती सम्बन्धमा साविक नापीमा काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. २३ क्ष कि.नं. ७३ ऐ वडा नं. २३ ह कि.नं. २२,३१ र ३५ कायम भई फिल्ड बुकको किसानको महलमा मोहीको नाम जनिई नाप नक्सा भई दर्ता बाँकी रहेका र सोही जग्गाको पुन नापी हुँदा काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ सिट नं. १०२५-१४ कि.नं. ४८ सिट नं. १०२५-१५ कि.नं. ५६,२७८,२८४,२६२, २६७ ,२९५ सिट नं. १०२५-२० कि.नं. ८० जनिई नाप नक्सा भई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएका जग्गाको श्री पशुपति टिकिन्छा गुठीको लगतको आधारमा प्रचलित कानून बमोजिम नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको दर्ता सच्याई श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गर्ने स्वीकृती दिने। नेपाल सरकार मन्त्रीपरिषदबाट निर्णय भएको हुँदा सो अनुसार गर्न गराउन हुन सम्बन्धीत फायल थान ८ (आठ) यसै साथ संलग्न राखी पठाईएको ब्यहोरा र ताहाको उक्त पत्रबाट स्वीकृति माग भई आएको अन्य जग्गाको हकमा नेपाल सरकार मन्त्रीपरिषदबाट प्रधान मन्त्री निवासको परिसर बिस्तार तथा ८ मिटर चौडा बाटो निर्माण गर्ने भनी निर्णय भएको ब्यहोरा समेत जानकारीको लागि अनुरोध छ भनी भुमि सुधार तथा ब्यबस्था मन्त्रालय (जग्गा प्रशासन शाखा) को ज.टि. १६०५/०६९/०७०/३/१ नं. २२९, च.नं. ७५७ मिति २०६९।०७।२६ को पत्रबाट लेखि आएकोले प्राप्त फायल साथै राखी पेश गर्दछु। मिति २०६९।०८।१७ (मीना भट्टराई)

श्रीमान, यसमा नेपाल सरकार समरजंग कम्पनीको नाम कट्टा गरी श्री पशुपति टिकिन्छा गुठी कायम गर्न यस संस्थाको उक्त पत्र द्वारा स्वीकृती तथा सहमतिको लागि भुमि सुधार तथा ब्यबस्था मन्त्रालय अनुरोध गरी

पठाउदा साबिक नापीमा काठमाडौं जिल्ला का.म.पा. वडा नं. २३ क्ष कि.नं. ७३, ऐ.ऐ. वडा नं. २३ ह कि.नं. २२,३१ तथा ३५ कायम भई हाल नया नापीमा  का.जि. का.म.पा. वडा नं. ४ सिट नं. १०२५-१४ कि.नं. ४८ सिट  नं. १०२५-१५ कि.नं. ५६,२७८,२८४,२६२, २६७ ,२९५ सिट नं. १०२५-२० कि.नं. ८० जनिई नापी भएका जग्गाहरुको नेपाल सरकार समरजंग कम्पनीको जग्गा कट्टा गरी सच्याई श्री पशुपति टिकिन्छा गुठीको नाम दर्ता गर्न स्वीकृति दिने भनी नेपाल सरकार मन्त्रीपरिषदबाट  निर्णय भई भु.स.तथा ब्यबस्था मन्त्रालयको पत्रद्वारा  लेखि आएको हुँदा उकत निर्णयअनुसार गुठी कायम गर्न  निर्णय पर्चा पेश गरेको छु। तुल्सी पोखरेल ( २०६९।०९।२२ )।

श्रीमान, उल्लेखित  ब्यहोराका साथै स्वीकृति माग गरेका अन्य जग्गा प्रधान मन्त्री निवासको परिसर बिस्तार तथा ८ मिटर बाटो निर्माण गर्ने भन्ने निर्णय भएको भन्ने भुमि सुधार तथा ब्यबस्था मन्त्रालयको पत्रबाट देखिदा सो को जग्गा नै सट्टा भर्ना दिन वा कानून बमोजिम हुने मुआब्जा नेपाल सरकारसँग माग गर्ने ( ऐनको दफा समेत उल्लेख गरी ) समेत निकासाका लागि पेश गरेको छु। हेमराज सुवेदी ( २०६९।१०।०२ )

“यसमा उपरोक्त अनुसार गुठी कायम गर्न पर्चा खडा गर्ने समेत गरी सदर”। बलीराम प्रसाद साह तेली।
मिति  २०६९।१०।०५।

३१ (शाखा): गुठी संस्थान शाखा कार्यालयले  साविक नगर २३ ह कि.नं. २२,३१,३५ र नगर २३ क्ष कि.नं. ७३ को जग्गाहरु नयाँ नापीको कुन कुन कित्ता सँग भिड्छ भनी मिति २०६९।११।१४ मा च.नं. १४८५ बाट नापी कार्यालय काठमाडौं डिल्लीबजारलाई पत्राचार गरेको।

३२. (नापी): मिति २०६९।११।१४  मा च.नं. १४८५ बाट गुठी संस्थान शाखा कार्यालयले नापी कार्यालयलाई लेखेको पत्रका सम्बन्धमा “साविक नगर २३ ह कि.नं. २२,३१,३५ र नगर २३ क्ष कि.नं. ७३ मध्ये साविक कि.नं. २२ को हाल नगर ४ को सिट नं. १०२-१०२५-१५ कि.नं. २६२,२६७,२९५,२५९ र ऐ.ऐ. वडाको कि.नं. ३१ को हाल नगर ४ सिट नं. १०२५-१५ कि.नं. २३२,२८०,२८४,३१४,२७८ र साविक २३ ह कै कि.नं. ३५ को सिट नं. १०२-१०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२-१०२५-२० कि.नं. ८० भिड्ने र साथै साविक २३ क्ष कि.नं. ७३ को हाल नगर ४ सिट नं. १०२-१०२५-१४ कि.नं. ४८ पुरै भिड्ने देखिएको” भनी नापी कार्यालयबाट गुठी संस्थान शाखा कार्यालयलाई च.नं. ३३५० को मिति २०६९।११।१७ को पत्रद्वारा जवाफ लेखि पठाएको ।

३३. (शाखा):   गुठी संस्थान शाखा कार्यालयको म.प. निर्णय पछाडिको टिप्पणी :
बिषय:- रैकर लगत कट्टा गुठीकायम दर्ता नामसारी एवं हाल साबिक सम्बन्धमा।

श्रीमान,  श्री पशुपति टिकिन्छा गुठीको साबिक लगतमा उल्लेखित मलिकुली खेत आशामरुको नाममा रहेको खेत रोपनी १०९ बाट भिडि दर्ता कायम हुने का.जि. नगर वार्ड नं. २३ (क्ष) कि.नं. ७३,७६,६८,६९,७८,र ४८ एवं ऐ. वार्ड नं. २३ (ह) कित्ता नं. २२ , २५,१५,२४,४०,१२,२६,३१ र ३५ का कित्ताहरु सो लगतमा साबिक हाल भिडाई दर्ता नामसारी हाल साबिक गरीपाउँ भनी जोताहा मोही तथा मृतकहरुका हकमा छोराहरुबाट समेत निवेदन माग भई कार्यालयबाट जग्गा दर्ता नामसारी हाल साबिक गर्ने कार्यमा आबस्यक कुरा फि.बु., मोठ, गो.प.मा ३५ दिने सार्वजनिक सूचना, स्थलगत सर्जमिन, कार्यालयको साविक लगत समेतका कुराहरु बुझी नापीका बखत गुठी उल्लेख नभई श्री ५ को सरकार श्री ५ को सरकार समरजंग कम्पनीका समेतका नाममा नाप जाँच भएका जग्गाहरु गुठीका नाममा दर्ता कायम हाल साबिक गर्न प्रचलित गुठी संस्थान ऐन, संसोधन सहित २०३३ को दफा ३९ बमोजिम रैकर तर्फको लगत कट्टा गरी श्रेस्ता अध्यावधिक गर्नमा

नेपाल सरकारको सहमति समेत लिनुपर्ने भै सहमति एवं निर्देशनका लागि यस कार्यालयको मिति २०६१।०६।२६ को टिप्पणी राय समेतबाट गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश भई गएकोमा पशुपति टिकिन्छा गुठीको जग्गा सम्बन्धमा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको ज.ध. को लगत कट्टा गरी श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा दर्ता कायम हुने ठहर्छ भनी यस संस्थानबाट मिति २०६९।१०।०५ गते निर्णय पर्चा भएको हुँदा सो निर्णय पर्चाको प्रमाणित प्रतिलिपी र त्यहा कार्यालयको प.सं. ०६३/०६४ च.नं. ७४६ मिति २०६३।०७।२३ मा प्राप्त फायल यसै पत्रसाथ संलग्न गरी फिर्ता पठाईएको छ, पर्चा अनुसार श्रेस्ता अध्याबधिक गर्नु हुन निर्देशानुसार अनुरोध गरीन्छ भनी प.सं.का.शा/९९,०६९/०७० मिति २०६९।११।०१ को पत्रसाथ कारबाही मिसिल समेत फिर्ता प्राप्त हुन आएको।

फायल संलग्न गुठी संस्थानका प्रशासक बलीराम प्रसाद शाह तेली ज्यूबाट मिति २०६९।१०।०५ मा खडा भएको निर्णय पर्चा हेर्दा साबिक नापीमा काठमाडौं जिल्ला का.म.न.पा. वडा नं. २३ (क्ष) कित्ता नं. ७३ , ऐ. ऐ. २३ (ह) कि.नं. २२,३१ र ३५ कायम भै फिल्ड बुकको किसानको महलमा मोहीको नाम जनिई नाप नक्सा भै दर्ता बाँकी रहेका र सोही जग्गा पुन: नापी हुँदा का.जि.का.म.न.पा. ४ सिट नं. १०२५-१४ कि.नं. ४८ सिट नं. १०२५-१५ कि.नं. ५६ , २७८,२८४,२६२,२६७,२९५ र सिट नं. १०२५-२० कि.नं. ८० समेतको कित्ता जग्गाहरु पूर्व कारबाही मिसिलबाट कारबाही हुँदा यी जग्गाहरुको साबिक श्रोत थाहा हुन आउने जग्गाधनी तथा मोहीहरु बुझ्दा मोहीहरुले निवेदन माग दावी भै यी जग्गाहरु श्री पशुपतिनाथ टिकिन्छा गुठीको जग्गा हो भनी निवेदन माग भई साबिक ज.ध. सुवर्ण समसेर ज.व.रा. का हकदार हरुलाई बुझ्दा गुठी संस्थान केन्द्रीय कार्यालयबाट निजका नाममा म्यादपत्र जारी हुँदा निजको हकमा सुनिति राणाले म्याद पत्र बुझिलिई सुनिति राणा , शैलजा राणा र रुक्म शमसेर ज.व.रा समेतले यी कारबाहीमा आएका जग्गाहरु तत्कालीन श्री ५ को सरकार टिकिन्छा गुठी खला नं. १० को जग्गा भनी स्वीकार गरेको , १०९४ साल को रसिद फोटोकपीमा श्री ५ को सरकार टिकिन्छा गुठीको असौगाल खेत ३।।। उल्लेख भएको हालको ज.ध. नेपाल सरकार समरजंग कम्पनीको प्रतिकृया बुझ्दा जग्गाको रेकर्ड नदेखिएको हुँदा रेकर्ड हेरी कारबाही हुन भनी लेखि आएको भै ज.ध. समेत ले ती कित्ताहरु आफ्नो नाममा दर्ता हुने भनी दाब लिन तथा गर्न सकेको अबस्था छैन। जग्गा दर्ता गर्ने सन्दर्भमा कार्यालयबाट स्थलगत सर्जमिन हुँदा यी जग्गाहरु पशुपतिनाथ टिकिन्छा गुठीका जग्गा हुन, निवेदन मोहीहरुले नै जोतभोग गरी आएका छन भनी स्थलगत सर्जमिन मुचुल्का, गो.प. मा ३५ दिने सार्वजनिक सूचना प्रकाशित हुँदा म्याद भित्र कोही कसैको दाबी नपरेको मोठ श्रेस्ताको कैफियत ब्यहोरामा गुठी लगत तथा तहबिल कार्यालयको च.नं. २४२२ मिति २०४१।०१।१८ को पत्र अनुसार को तोक आदेशले तत्कालीन श्री ५ को सरकार गुठीको नाममा गएको भन्ने स्पष्ट उल्लेख भएको देखिदा उपरोक्त आधार प्रमाणहरुका आधारमा यी कारबाहीमा आएका कित्ता जग्गाहरु श्री पशुपतिनाथ टिकिन्छा गुठीको जग्गा हुन भन्ने प्रमाणित भयो , तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद सचिवालयको मिति २०४७।०२।१४ र ०४७।०४।०८ र २०४७।०५०३ र भु.सु. तथा ब्यबस्था मन्त्रालयको मिति २०४७।०६।०८ मा.पो. कार्यालयको २०४९।०९।२३ को निर्णयबाट स्वर्गीय सुबर्ण शमसेर ज.व.रा.का. हकदारहरुले २०१७ सालको राजनैतिक परिवर्तन पश्चात तत्काल रोक्का जफत रहेको सुवर्ण समशेरका नाउको दर्ता जग्गा निजका हकदारहरुले उल्लेखित तत्कालीन श्री ५ को सरकारको बिभिन्न मितिका निर्णय समेतका आधारमा साबिक लगत अनुसार फिर्ता पाएको कुरा मालपोत कार्यालय काठमाडौंले जग्गा फिर्ता पाएको पत्र सं. २०४९/५० /१०२४, १०२५ च.नं. ३२२४ मिति २०४९।९।२४ को पत्रबाट गुठी लगत तथा तहबिल कार्यालयलाई जानकारी गराईएको देखिन्छ, साथै यसै

आधारमा स्व. सुवर्ण समशेरका हकदारहरुले २०६० मार्ग ११ गते रोज ५ मा यसै केन्द्रीय कार्यालयमा समेत आएर बयान गरेको देखिन्छ।

ऐन कानूनमा भएको ब्यबस्था हेर्दा गुठी संस्थान ऐन , २०३३को दफा ३९ मा गुठी तैनाथि जग्गा अधिनस्थ जग्गामा गुठी अधिनस्थ जग्गा गुठी रैतान नम्बरी जग्गामा वा गुठीको घर वा जग्गा रैकरमा दर्ता हुन गएमा साबिक लगत अनुसार गुठी तैनाथी , अधिनस्थ वा रैकरको लगत कट्टा गरी गुठी कायम गर्न सक्ने क्षेत्राधिकार गुठी संस्थानका प्रशासक वा प्रशासकको काम गर्ने प्रशासकिय प्रमुखलाई स्पष्ट रुपमा तोकिएको देखिन्छ।

प्रस्तुत बिषयमा उपरोक्तमा लेखिएका का.म.न.पा. २३ (क्ष) कि.नं. ७३ ऐ. २३ ( ह) कि.नं. २२, ३१ र ३५ का साबिक कित्ता जग्गा सँग भिडने जग्गा क्रमश:हाल नापी हुँदा कायम हुन आएको का.म.न.पा. ४ सिट नं. १०२५-१५ कि.नं. ४८ सिट नं. १०२५-१५ कि.नं. २६७ , २६२,२९५, २७८, २८४ ऐ. कि.नं. ५६ ऐ. सिट नं. १०२५-२० कि.नं. ८० को समेत जग्गाहरु साबिक नापीमा मोही जनिएका मोहीका हकदार हरुले मोही ना.सा. तथा हा.सा.का.लागि माग दावी लिएको समेत देखिदा सो सम्बन्धमा शाखा कार्यालय काठमाडौंबाट कानून बमोजिम साबिक कि.नं हरु भिडाई कारबाही हुने नै हुँदा उल्लेखित कित्ता जग्गाहरुको नेपाल सरकार मन्त्रीपरिषदको सहमति तथा स्वीकृतिका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको जग्गाधनीको लगत कट्टा गरी श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा दर्ता कायम हुने ठहर्छ। सो ठहर्नाले अन्य कलममा तपसिल बमोजिम गरी गुठी संस्थान ऐन, २०३३ को दफा ३९ को उपदफा १ अनुसार आजै यो निर्णय पुर्जा गरीदिएँ।

**तपसिल**

१) प्रस्तुत बिषयमा गुठी संस्थान ऐनअनुसार पुनरावलोकनको म्याद दिनु पर्छ २को उपदफा ३९को दफा २०३३ कि भन्नलाई समरजंग कम्पनीका नाममा दर्ता भएको लगत सच्याई श्री पशुपतिनाथ टिकिन्छाा गुठीका परिषद बाट निर्णय भई भूमि सुधार तथा ब्यबनाममा कायम गर्न नेपाल सरकार मन्त्रीस्था मंन्त्रालय मार्फत गुठी कायम गर्न स्वीकृती तथा सहमति प्राप्त भएको अबस्था हुँदा पुनरावेदनको म्याद दिई रहनु परेन।

२) उक्त निर्णय पर्चा कार्यान्वियन गरी तुरुन्त लगत अध्याबधिक गर्नु भनी शाखा कार्यालय काठमाडौंमा निर्णय पर्चा समेत राखी मिसिल पठाई दिनु भनी निर्णय पर्चा समेत संलग्न रहेको देखिन्छ।

३) यस्तै उपरोक्त कारबाहीका कित्ता जग्गा मध्ये का३.नं.कि (ह) २३ .वार्ड नं .पा.न.म.५ को ० .र ऐ ३-१४-कित्ता नं. ३७ को १-१५-० जग्गा हाम्रा शसुरा, बाबु मिति २०५२।०२।१७ मा आफ्ना कालगतिले परलोक भई हकखाने हकदारमा छोरा २ जना भई छोरा पंचनारायण को मिति २०६०।०४।३० मा आफ्ना काल गतिले परलोक भई हक खाने हकदारमा म श्रीमती लक्ष्मी महर्जन नाता समेत देवर २ जना मात्र भएको हुँदा उक्त कित्ता जग्गा हाम्रा नाममा संयुक्त दर्ता नामसारी समेत गरी ज.ध. प्र.पुर्जा पाउ भनी का.म.न.पा. वडा नं. २४ बस्ने बर्ष ५३ कि लक्ष्मी महर्जनको निवेदन माग भएको।

४) यसै गरी साबिक नापीका कि.नं. हरुसँग भिडाई नया नापी बमोजिम जग्गा दर्ता नामसारी र हाल साबिक समेत गरी ज.ध. प्र.पुर्जा पाउ साथै देव नारायण महर्जनको निवेदन मागका जग्गा कित्तामा नाता प्रमाणित बाट देखिने हकदार दाजु पंच नारायण महर्जनले उक्त कि.नं. ३५ र ३७ का कित्ता जग्गा सम्बन्धमा भूमिसुधार कार्यालय काठमाडौंमा स्वयं उपस्थित भई मिति २०५९।१०।२८ गते हकदावी छाडि दिएको ब्यहोरा उल्लेख निवेदन पेश गरी हक छाडेको निवेदनको प्रमाणित फोटोकपी साथै संलग्न गरेको छ। माग निवेदन बमोजिम जग्गा हाल

साबिक समेत गरी ज.ध.प्र.पुर्जा पाउ भनी श्रीमती मोहन महर्जन -१ , देव नारायण महर्जन -१, संजय कुमार महर्जन -१ र द्वारीकामान महर्जन समेत ४ (चार) को वा. राम कुमार सुवेदीको दर्ता नं. १४७५ मिति २०६९।११।१४ मा निवेदन पर्न आएको। उल्लेखित निवेदन साथ संलग्न भु.सु.का. काठमाडौंमा का.म.न.पा. २४ बदुटोल बस्ने बर्ष ४७ को पंच नारायण महर्जनले उपरोक्त कित्ता जग्गामा आफ्नो हक भाई देव नारायण महर्जनको नाममा छाडि पिता नाती डंगोल बाट एकलौटि नामसारी गर्न मंजुरी जनाई निवेदनमा सनाखत समेत गरी दिएको देखिन आएको।

यस्मा उपरोक्त फायल संलग्न प्रमाण कागजातबाट माथि उल्लेख कित्ता जग्गा मध्ये श्रीमान गुठी संस्थानका प्रशासक ज्यूबाट मिति २०६९।१०।०५ मा खडा भएको निर्णय पर्जा बमोजिम कि.नं. ७३,२२, ३१र ३५ का कित्ता जग्गा गुठी कायम दर्ता नामसारी तथा हाल साबिक समेत गरी ज.ध. प्र. पुर्जा माग गर्नु पर्ने देखिन आएकोले ज.ध.मा लगत बमोजिम श्री पशुपतिनाथ टिकिन्छा गुठी कि.नं. ७३ कित्ता जग्गामा कायम जोताहा जित बहादुर तथा श्रीमती आशामाया महर्जन समेतको मृत्यु भई हकदार देखिएका छोरा संजय महर्जन र सकला नन्द महर्जनका नाममा संयुक्त नामसारी एवं हाल का.जि. का.म.न.पा.वडा नं. ४ सिट नं. १०२५-१४ कि.नं. ४८ पुरै सा.कि. २२ हाल नापी का.म.न.पा वडा नम. ४ सिट नं. १०२-१०२५-१५ कि.नं। २६२,२६७,२९५,२५९ कायम कित्ता साबिक तोहाता कृष्ण महर्जनको मृत्यु भई सकेको देखिदा नजिकको हकदार श्रीमती मोहन महर्जनका नाममा सो कि.नं. २१ हाल नापीमा नगर ४ सिट नं. १०२-१०२५-१५ कि.नङ. २३२, २८४,३१४२ ,२७८ साबिक मोही जोगमान भन्ने न्हुच्छे बहादुर महर्जनको मृत्यु भै पेश नाता प्रमाणित बाट १ मात्र हकदार भनी देखिएका द्वारीका महर्जनका नाममा, त्यस्तै साबिक कि.नं. ३५ हाल नापीमा नगर ४ सिट नं. १०२-१०२५-१५ कि.नं. ५६ ऐ. सिट २० कि.नं. ८०को जग्गा नापी वाला जोताहा नाती डंगोलको मृत्यु भई सकेको , फायल संलग्न कागजातबाट छोराहरु पंञ्च नारायण र देव नारायण महर्जन २ (दुई ) भाई रहेको मा पंच नारायण महर्जन जिवितै रहदाको अबस्थामा मिति २०५९।१०।२८ मा भु. सु.का. काठमाडौंमा स्वयं उपस्थित भई कि.नं. ३५ र ३७ का कित्ता जग्गा बाबु नाति महर्जनका नामबाट भाई देव नारायण महर्जनको नाममा एक्लौटि नामसारी गर्न हक छोडपत्रको मंजुरी निवेदन पेश गरी सनाखत गरी प्रमाणित समेत भई रहेको कागजको प्रमाणित प्रतिलिपीको फोटोकपी पेश हुन आएको।

यस्तै आजै दर्ता नंम्बर १५०७ मिति २०६९।११।२० को निवेदन पेश गरी लक्ष्मी महर्जनले उक्त कित्ता जग्गा सम्बन्धमा भु.सु.का. काठमाडौंमा पति पंच नारायण महर्जनले हक छोडपत्र गरेको कागजबाट मोही हक सम्बन्धमा निर्णय भै नसकेको हुँदा प्रमाण लाग्न नसक्ने भनी दावी लिएको समेत देखिन्छ।

यसै कित्ता जग्गा सम्बन्धमा सम्मानित सर्वोच्च अदालतबाट २०६४ सालमा फैसला हुँदा मोही देवनारायण महर्जन भनी उल्लेख भएको पाईन्छ।

अत: उपरोक्त कागजातबाट कि.नं. ३५ कित्ता जग्गामा मोही हक दावी लिने पंच नारायण महर्जनको श्रीमती लक्ष्मी महर्जनको दावी सम्बन्धमा अधिकार प्राप्त सरकारी कार्यालयमा निवेदन पेश गरी सनाखत प्रमाणित समेत भै सकेको अबस्थामा त्यसकुरालाई अन्यथा भन्न सक्ने अबस्था देखिन आएन, तसर्थ निर्णयमा चित्त नबुझे कानुनी प्रकृयाका लागि सम्बन्धीत निकायमा हक कायम गर्न जान सक्ने नै हुँदा जग्गा दर्ता निर्देशिका , २०५८ बमोजिम रैकर लगत कट्टा गरी गुठी कायम जग्गा दर्ता नामसारी एवं हाल साबिक समेत गरी ज.ध.प्र.पुर्जा बनाई पठाइ दिने मालपोत कार्यालय काठमाडौं डिल्लीबजारमा सिफारिस भई जान निर्णयार्थ पेश गरेको भन्ने टिप्पणी व्यहोरा सदर गरी गुठी संस्थान शाखा कार्यालयबाट टिप्पणी उठाई आवश्यक

कार्यान्वयनको लागि मिति २०६७।११।२० मा टिप्पणी निर्णय गरी मिति २०६९।११।३०को च.नं. ९८२ को पत्र मार्फत मालपोत कार्यालय डिल्लीबजारमा फाईल पठाएको ।

३४. (मालपोत) : **मोठ + रोक्का शाखा**

साविक नगर २३ क्ष कि.नं. ७३ र सो को हाल नगर ४ सिट १०२५-१४ कि.नं. ४८ साबिक २३ ह कि.नं. २२ र सो को हाल नगर ४ स्थित ११२५-१५ को कि.नं. २६७,२६२,२९५ र २५९ ऐ . साविक कि.नं ३१ को र हाल नगर ४ स्थित सिट नं. १०२५-१५ कि.नं. २७८,२८४,२३२,२८० र ३१४ ऐ साबिक कि.नं. ३५ र सो को हाल नगर ४ स्थित सिट नं. १०२५-१५ कि.नं. ५६ र सिट १०२५-२० को कि.नं. ८४ को मोठ रोक्का भिडाई पठाई दिनु हुन ।(मिति०६९।११।२४ ) ।

श्री मोठ १/१ /४/४१/३५ नगर २३८ कि.नं. २२, ३१, (२३ क्ष) कि.नं. ७३ (२३ ह ) कि.नं. ३५ श्री ५ को सरकार दर्ता बांकी भै मि.नं. ९६१ मिति २०५१।०५ रुक्म शमशेर समेत मिसिल भिडि गएको देखिन्छ । मिति २०६९। ११ ।२८ ।

३५. (मालपोत): मालपोत कार्यालयले साविक नगर २३ ह कि.नं. २२,३१,३५ र नगर २३ क्ष कि.नं. ७३ को जग्गाहरु नयाँ नापीको कुन कुन कित्ता सँग भिड्छ भनी च.नं. १०६१८ मिति २०६९।१२।०४ मा नापी कार्यालय काठमाडौं डिल्लीबजारलाई पत्राचार गरेको ।

३६. (नापी): "नगर २३ क्ष को कि.नं. ७३ र नगर २३ ह को कि.न. २२,३१, ३५ समेतका जग्गा बिभिन्न मिति र च.नं.का पत्रहरुमा उल्लेख गरी पठाएको भएपनि हाल उल्लेखित कि.नं. का जग्गा छुट्टा छुट्टै जग्गाहरु भएको र उक्त कि.नं. का चारै तर्फका सधियारहरुले हाल साविक गरी सकेको र उक्त साविक २३ क्ष कि.नं. ७३ को हाल नगर सिट नं. १०२-१०२५-१४ कि.नं. ४८ पुरै र साविक २३ ह को कि.नं. २२ को हाल नगर ४ को सिट नं. १०२-१०२५-१५ कि.नं. २६२,२६७,२९५,२५९ भिड्ने र साथै नगर २३ ह को कि.नं.३१ को हाल नगर ४ सिट नं. १०२-१०२५-१५ कि.नं. २३२,२८४,३१४,२७८ मा भिड्ने र साविक नगर २३ ह को कि.नं. ३५ को हाल नगर ४ सिट नं. १०२-१०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२-१०२५-२० कि.नं.८० मा भिड्ने" भनी नापी कार्यालयले मिति २०६९।१२।०८ मा च.नं. ३६७२ बाट मालपोत कार्यालयलाई जवाफ लेखि पठाएको ।

➢ **गुठी संस्थान प्रधान कार्यालय त्रिपुरेश्वर, काठमाडौंको "जग्गाधनी दर्ता प्रमाण पुर्जाको प्रतिलिपि" पठाएको पत्र (१ नं. मिसिलमा):** त्यहाँको च.नं. ७०१७ मिति २०७५।१२।२८ को पत्रबाट माग भई आएका जग्गा दर्ता प्रकृयामा कारवाहीमा आएको शाखा कार्यालय काठमाडौंको कारवाही फायल थान ८ (आठ) र प्रधान कार्यालयको (सक्कल फायल सम्मानित उच्च आदालत पाटनमा मुद्दाका क्रममा गएकोले उक्त फायलको फोटोकपि भएको) फायल थान एक समेत जम्मा ९ नौ थानको प्रतिलिपि, गुठी संस्थान प्रधान कार्यालय त्रिपुरेश्वर, काठमाडौंको च.नं.१४२५ मिति २०७६/११/१७ गतेको पत्रसाथ प्राप्त भएको देखिन्छ ।

➢ **भूमिसुधार तथा मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंको "साबिक नापी श्रेष्ता र हाल नापीको श्रेष्ताको प्रमाणित प्रतिलिपि" पठाएको पत्र (फिल्डबुक, श्रेष्ता, प्लट रजिष्टर फायलमा)**: तहाँ ब्यूरो प.सं. २०७६/७७ मु.द.नं.२५ च.नं. ६३२७ मिति २०७६/११/२८ गतेको पत्र प्राप्त भई व्यहोरा अवगत भयो । सो सम्बन्धमा तहाँ बाट माग भएको साबिक नापीको नगर २३ ह, २३ स, २३ क्ष मा साबिक नापीको श्रेष्ता र हालको नापीको श्रेष्ताको प्रमाणित प्रतिलिपि थान २१, भूमिसुधार तथा मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंको च.नं.८६४६ मिति २०७६/११/३० गतेको पत्रबाट प्राप्त भएको देखिन्छ ।

**मालपोत कार्यालय डिल्ली बजारको टिप्पणी र आदेश:-** श्रीमान्, श्री पशुपति टिकिन्छा गुठी अन्तरगतको वडा नं. १० मलिकुली खेत अन्तर्गत मोही आसामरु ज्यापु अन्तरगत भिडि दर्ता हुने साबिक नापीमा र हाल नया नापीमा देहायअनुसार कायम रहेको जग्गा टिकिन्छा गुठीमा दर्ता हाल साबिक मोही नामसारी समेत गराई पठाई दिन भनी गुठी शाखा कार्यालय कालमोचनको मिति २०६९।०८।२२ र मिति ०६९।११।२० को निर्णय सहित ऐ.को च.नं. ९८२ मिति २०६९।११।३० को पत्रबाट सक्कल निर्णय सहितको मिसिल प्राप्त भएको।

**साविक**

| क्षेत्र | वाड नं. | कि.नं. | क्षे.फ. | जोताहा | किसानको ब्यहोरा |
|---|---|---|---|---|---|
| नगर | २३ क्ष | ७३ | ०-३-० | जीत बहादुर महर्जन | अञ्चलाधिसको आदेश मार्फत श्री ५ को सरकार लाई अधिया बुझाएको |
| नगर | २३ ह | २२ | २-८-० | कृष्ण महर्जन | श्री ५ को सरकार तहबिलमा अधिया तिरि आएको |
| नगर | २३ ह | ३१ | १-३-० | गोपाल मान भन्ने न्हुछे ब. महर्जन | श्री ५ को सरकार तहबिलमा अधिया तिरि आएको |
| नगर | २३ ह | ३५ | ०-१४-३ | नाति महर्जन | श्री ५ को सरकार तहबिलमा अधिया तिरि आएको |
| नगर | २३ क | २१३ | ०-४-३ | लक्ष्मी माया महर्जन | श्री ५ को सरकार तहबिलमा अधिया तिरि आएको |

| क्षेत्र | साबिक कि.नं. | हाल कि.नं. | सिट नं. | क्षे.फ. | दर्ता स्थिति |
|---|---|---|---|---|---|
| नगर | ७३ | ४८ | १०२५-१४ | ०-३-०- | बांकी |
| नगर | २२ | २६८ | १०२४-१५ | ०-१३-३-३ | बांकी |
| नगर | २२ | २६२ | १०२४-१५ | ०-१०-३-० | बांकी |
| नगर | २२ | २९५ | १०२४-१५ | ०-२-१-० | बांकी |
| नगर | ३१ | २५९ | १०२४-१५ | ०-२-१-१ | बांकी |
| नगर | ३१ | २७८ | १०२४-१५ | १-११-२-२ | बांकी |
| नगर | ३१ | २८४ | १०२४-१५ | ०-२-३-० | बांकी |
| नगर | ३१ | २३२ | १०२४-१५ | ०-१-१-० | बांकी |
| नगर | ३१ | २८० | १०२५-१५ | ०-१-१-३ | बांकी |
| नगर | ३१ | ३१४ | १०२५-१५ | ०-२-१-२ | बांकी |
| नगर | ३५ | ५६ | १०२५-१५ | ३६२-८० व.मी. | बांकी |
| नगर | ३५ | ८० | १०२५-५० | ०-३-२-० | बांकी |
| नगर | २१३ | १२९ | १०२५-५० | १-११-१-२ मध्ये | बांकी |

**मोठ श्रेस्ता :**

मोठ १/३४, ३५,४१ मा नगर २३ह कि.नं. २२,३१र ३५ रो २३ क्षे. कि.नं. ७३ नेपाल सरकार (श्री ५ को सरकार) को नाममा दर्ता बांकी भै मि. नं. ९६१ /०५१/५२ रुकुम शमशेर समेतको मिसिल भिडेको।

रोक्का:- गुठीबाट निर्णय भै आएका जग्गा मध्ये साबिक कि.नं. ३५ र हाल किनं. ५६ लगायतका कित्ता अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट रोक्का छन।

गुठी कार्यालयबाट निर्णयमा मुल्याङ्कन गरीएका आधार प्रमाण

१) पशुपति टिकिन्छा गुठीमा दर्ता कायम लगत

२) फिल्डबुक र भूमि सुधार २ नं. अनुसूची

३) सम्मानित सर्वोच्च अदालतको ०६४।१६१ उत्प्रेषण परमादेश रिटमा ०६४।११।३० को निर्णय आदेश।

४) नेपाल सरकार (म.प.) को ०६६।१२।२९ को निर्णय

५) नेपाल सरकार (म.प. ) निर्णय कार्यान्वयन गर्ने भूमिसूधार तथा ब्यबस्था मन्त्रालयको प.स. ज टि. १६०५।०६९।७०।३।१ नं. २२९ च.नं. ७५७ मिति २०६९।०७।२६ को दर्ता स्वीकृती सम्बन्धी पत्र।

६) गुठी संस्थानका प्रशासकको २०६९।१०।०५ को निर्णय पर्चा।

७) नापी कार्यालय काठमाडौंको च.नं. ३३५० मिति २०६९।११।१७ र च.नं. १२८९ मिति २०६०।१२।९ को हाल साविक पत्र।

८) स्थानीय निकायबाट भएका सिफारिस नाता प्रमाणित

९) पूर्ण ब्यहोरा खुलाई गोरखपत्र समेतमा जारी सार्वजनिक सूचना।

१०) सुवर्ण शमशेरका हकदारको मंजुरी।

गुठी संस्थान ऐन , २०३३ को दफा ३९ बमोजिम गुठीको रोक्का प्रकृतिको जग्गा अन्य प्रकृतिका वा गुठीको जग्गा रैकरमा दर्ता भए गुठीको साबिक कै अबस्थामा कायम गर्न सक्ने कानूनी ब्यबस्था रहेको र गुठी संस्थान (कार्य ब्यबस्था) बिनियम, २०४९ को नं. १९ (३) बमोजिम गुठीले निर्णय गरी रैकर तर्फको लगत कट्टा गरी गुठी तर्फ कायम गर्ने लेखि आएमा मालपोत कार्यालयले रैकर लगत कट्टा गरी रैकरमा लगत कायम गरी दिनु पर्ने गरी मालपोत कार्यालयबाट स्पष्ट रुपमा कानूनी कर्तब्य दिएको मात्र देखिन्छ।

जग्गा प्रशासन निर्देशिका २०५८ को परिच्छेद ५ को गुठी जग्गा सम्बन्धि कार्यबिधि अन्तरगत नं. १०४ ख ३,६घ, १०७ बमोजिम पशुपति टिकिन्छा गुठीको लगत भिड्ने भनी लगत समेत समाबेश गरी गुठीबाट निर्णय भै आएको ब्यक्तिको नाममा दर्ता बाँकी जग्गा सम्बन्धां सो जग्गाका जग्गाधनी बुझी गुठीमा दर्ता को लागि त्यस्ता जग्गाधनीको मंजुरी मिसिल समाबेश भएको पशुपति गुठी अन्तरगतको सवै जग्गा गुठी अधिनस्थ सरह हुने र यस्तो जग्गाको नामसारी गुठी बाटै हुने ब्यवस्था देखिएकोमा उल्लेखित कार्यबिधी पुरा गरी आएको देखिन्छ।

अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट उल्लेखित गुठीबाट निर्णय भई आएका जग्गा रोक्का देखिएकोमा द्वारीकामान महर्जन बिरुद्ध अ.दु.अ.आ. गुठी संस्थान समेत भएको २०६४ सालको उत्प्रेषण निवेदन र देव नारायण महर्जन बिरुद्द यिनै निकाय समेत भएको २०६४ सालको रिट नं. १६१ को उत्प्रेषण परमादेश निवेदनमा सम्मानित सर्वोच्च अदालतबाट २०६४। ११।३०मा अ.दु.अ.आ.को २०६४।०२।२० को निर्णय उल्लेखित जग्गा नेपाल सरकारमा दर्ता गरी पुर्जा जिल्ला प्रशासन कार्यालयमा पठाउने , बदर भएको देखिन्छ। अख्तियारको उक्त निर्णयको प्रकृयामा २०६३।१२।०९ मा उक्त जग्गा रहेको सोही अदालतमा परेको निवेदन जिकीरबाट देखियो। अदालतको उक्त आदेशमा अ.दु.अ.आ.बाट पुनरावलोकन माग गर्दा अनुमति समेत

आयोगले प्राप्त नगरी आदेशको जानकारी महान्यायाधिबक्ताको कार्यालयको च.नं. ५४८२ मिति २०६६।१०।०६ मा यस कार्यालयलाई प्राप्त भएको देखिन्छ।

यसरी गुठी शाखा कार्यालय बाट निर्णय भई आएको जग्गाको हकमा अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट भईरहेको रोक्काको प्रयोजन समाप्त भएको र सो को आदेश सहितको जानकारी महान्यायाधिबक्ताको कार्यालयबाट यस कार्यालयलाई जानकारी गराएको हुँदा सो जानकारी पत्र सम्मानित अदालतको आदेश पश्चात भएको गुठी प्रशासकको निर्णय नेपाल सरकार ( म.प.) को निर्णय कार्यान्वयन प्रयोजनको लागि आयोगको रोक्का फुक्का गर्न र जग्गा प्रशासन निर्देशिका, २०५८ ले तोकेका गुठी जग्गा दर्ता गर्ने कार्यबिधि पुरा गरी निर्णय भई आएको र सो निर्णय कार्यान्वयन सम्म गर्ने कानूनी दायित्व गुठी संस्थान ( कार्य ब्यबस्था ) बिनियम, २०४९ को १९(३) ले यस कार्यालयमा रहेको हुँदा गुठी शाखा कार्यालयका उल्लेखित निर्णय सोही निर्णयमा लेखिए बमोजिम जग्गाधनीमा पशुपति टिकिन्छा गुठी कायम गरी साबिक दर्ता बाँकी श्रेस्ता खारेज गरी देहाय अनुसार हाल साबिक सहित निर्णय कार्यान्यिवन हुन सक्कल मिसिल गुठीमा फिर्ता पठाउन मनासिब देखि निर्णयार्थ पेश गर्दछु।

गुठी संस्थान ऐन, २०३३ को दफा ३९ बमोजिम गुठीको रोक्का प्रकृतिको जग्गा अन्य प्रकृतिका वा गुठीको जग्गा रैकरमा दर्ता भए गुठीको साबिक कै अबस्थामा कायम गर्न सक्ने कानूनी ब्यबस्था रहेको र गुठी संस्थान (कार्य ब्यबस्था) बिनियम, २०४९ को नं. १९ (३) बमोजिम गुठीले निर्णय गरी रैकर तर्फको लगत कट्टा गरी गुठी तर्फ कायम गर्ने लेखि आएमा मालपोत कार्यालयले रैकर लगत कट्टा गरी रैकरमा लगत कायम गरी दिनु पर्ने गरी मालपोत कार्यालयबाट स्पष्ट रुपमा कानूनी कर्तब्य दिएको मात्र देखिन्छ।

जग्गा प्रशासन निर्देशिका २०५८ को परिच्छेद ५ को गुठी जग्गा सम्बन्धि कार्यबिधि अन्तरगत नं. १०४ ख ३,६घ, १०७ बमोजिम पशुपति टिकिन्छा गुठीको लगत भिड्ने भनी लगत समेत समाबेश गरी गुठीबाट निर्णय भै आएको ब्यक्तिको नाममा दर्ता बाँकी जग्गा सम्बन्धां सो जग्गाका जग्गाधनी बुझी गुठीमा दर्ता को लागि त्यस्ता जग्गाधनीको मंजुरी मिसिल समाबेश भएको पशुपति गुठी अन्तरगतको सवै जग्गा गुठी अधिनस्थ सरह हुने र यस्तो जग्गाको नामसारी गुठी बाटै हुने ब्यवस्था देखिएकोमा उल्लेखित कार्यबिधी पुरा गरी आएको देखिन्छ।

अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट उल्लेखित गुठीबाट निर्णय भई आएका जग्गा रोक्का देखिएकोमा द्वारीकामान महर्जन बिरुद्द अ.दु.अ.आ. गुठी संस्थान समेत भएको २०६४ सालको उत्प्रेषण निवेदन र देव नारायण महर्जन बिरुद्द यिनै निकाय समेत भएको २०६४ सालको रिट नं. १६१ को उत्प्रेषण परमादेश निवेदनमा सम्मानित सर्वोच्च अदालतबाट २०६४। ११।३०मा अ.दु.अ.आ.को २०६४।०२।२० को निर्णय उल्लेखित जग्गा नेपाल सरकारमा दर्ता गरी पुर्जा जिल्ला प्रशासन कार्यालयमा पठाउने, बदर भएको देखिन्छ। अख्तियारको उक्त निर्णयको प्रकृयामा २०६३।१२।०९ मा उक्त जग्गा रहेको सोही अदालतमा परेको निवेदन जिकीरबाट देखियो । अदालतको उक्त आदेशमा अ.दु.अ.आ.बाट पुनरावलोकन माग गर्दा अनुमति समेत आयोगले प्राप्त नगरी आदेशको जानकारी महान्यायाधिबक्ताको कार्यालयको च.नं. ५४८२ मिति २०६६।१०।०६ मा यस कार्यालयलाई प्राप्त भएको देखिन्छ।

यसरी गुठी शाखा कार्यालय बाट निर्णय भई आएको जग्गाको हकमा अख्तियार दुरुपयोग अनुसन्धान आयोगबाट भईरहेको रोक्काको प्रयोजन समाप्त भएको र सो को आदेश सहितको जानकारी महान्यायाधिबक्ताको कार्यालयबाट यस कार्यालयलाई जानकारी गराएको हुँदा सो जानकारी पत्र सम्मानित

अदालतको आदेश पश्चात भएको गुठी प्रशासकको निर्णय नेपाल सरकार (म.प.) को निर्णय कार्यान्वयन प्रयोजनको लागि आयोगको रोक्का फुक्का गर्न र जग्गा प्रशासन निर्देशिका, २०५८ ले तोकेका गुठी जग्गा दर्ता गर्ने कार्यबिधि पुरा गरी निर्णय भई आएको र सो निर्णय कार्यान्वयन सम्म गर्ने कानूनी दायित्व गुठी संस्थान (कार्य ब्यवस्था) बिनियम, २०४९ को १९(३) ले यस कार्यालयमा रहेको हुँदा गुठी शाखा कार्यालयका उल्लेखित निर्णय सोही निर्णयमा लेखिए बमोजिम जग्गाधनीमा पशुपति टिकिन्छा गुठी कायम गरी साबिक दर्ता बाँकी श्रेस्ता खारेज गरी देहाय अनुसार हाल साबिक सहित निर्णय कार्यान्यवन हुन सक्कल मिसिल गुठीमा फिर्ता पठाउन मनासिब देखि निर्णयार्थ पेश गर्दछु ।

**तपसिल:-**

**खारेज हुने साविक श्रेस्ता :-**

| | | |
|---|---|---|
| नगर | २३ क्ष | कि.न. ७३ |
| ऐ. | २३ ह | ऐ २२ |
| ऐ. | ऐ | ऐ ३१ |
| ऐ. | ऐ | ऐ. ३५ |
| ऐ. | २४ क | ऐ२१३ |

**हाल कायम हुने :**

| क्षेत्र | वाड नं. | सिट नं. | कि.नं. | क्षे.फ. | जोताहा |
|---|---|---|---|---|---|
| नगर | ४ | १०२५-१४ | ४८ | ०-३-०-० | संजय महर्जन र सकुन्तला महर्जन |
| ऐ. | ऐ. | १०२५-१५ | २६७ | ०-१३-३-३ | गायत्री मोहन महर्जन |
| ऐ. | ऐ. | १०२५-१५ | २६२ | ०-१०-३-० | ऐ.ऐ. ऐ. |
| ऐ. | ऐ. | १०२५-१५ | २९५ | ०-२-१-० | ऐ.ऐ. ऐ. |
| ऐ. | ऐ. | १०२५-१५ | २५९ | ०-२-१-१ | ऐ.ऐ. ऐ. |
| ऐ. | ऐ. | १०२५-१५ | २७८ | ०-११-२-२ | द्वारीका महर्जन |
| ऐ. | ऐ. | १०२५-१५ | २८४ | ०-२-३-० | ऐ.ऐ. |
| ऐ. | ऐ. | १०२५-१५ | २३२ | ०-१-१-० | ऐ.ऐ. |
| ऐ. | ऐ. | १०२५-१५ | ५६ | ३६२-८० ब.मी. | नाती महर्जन |
| ऐ. | ऐ. | १०२५-२० | ८० | ०-३-२-० | ऐ.ऐ. |
| ऐ. | ऐ. | ऐ. | १७१ | १५०.५१ ब.मी. | चन्द्रमाया महर्जन |

ना.सु. फणिन्द्र प्रसाद दाहाल ना.सु. मणी कुमार राना

श्रीमान, यसमा मिसल संलग्न कागज प्रमाण माथि पेश भएको ब्यहोरा नेपाल सरकार (म.प.) को निर्णय अख्तियार दुरुपयोग अनुसन्धान आयोगको जग्गा रोक्का राख्ने आदेशमा सम्मानित सर्वोच्च अदातलको पुनरावलोकनको अनुमति प्राप्त नभएको आदेश र फैसला गुठी प्रशासको निर्णय गुठी शाखा कार्यालय कालमोचनको निर्णय समेतका आधार र गुठी संस्थान ऐन, २०३३ क दफा ३९(१) बमोजिमको निर्णयका साथै

गुठी संस्थान (कार्य ब्यबस्था) बिनियम ,२०४९ को नं. १९(२)को प्रकृया पुरा गरी ऐ. १९ (३) बमोजिम निर्णय कार्यान्वयन का लागि लेखि आएको हुँदा यिनै प्रमाण आधारमा आयोगबाट भैरहेको रोक्का समेत फुकुवा गरी पेश भए बमोजिम साबिकका दर्ता प्रमाणित र दर्ता अ-प्रमाणित श्रेस्ता समेत खारेज गरी जग्गाधनी पशुपति टिकिन्छा गुठी जोताहा पेश भए बमोजिम कायम गर्नका लागि हाल कि.नं. ५६ र ८० को हकमा जोताहा नाति महर्जनको बुहारी लक्ष्मी महर्जनले मेरो समेत नाममा नामसारी नामसारी हुनु पर्ने भनी निवेदन गरेको तर उक्त जग्गा को जोताहा सम्बन्धमा भूमि सुधार कार्यालयबाट ०७०।०१।०३ को निर्णयले छोरा देवनारायण महर्जनको नाममा मोही नामसारी हुने निर्णय प्राप्त भएको जनाउ पत्र प्राप्त नभएको हुँदा सोही ब्यहोरा श्रेस्तामा कैफियत जनाउनका साथै पूर्जा र प्राप्त सक्कल मिसिल समेत गुठीमा फिर्ता पठाउन मनासिव देखि निर्णयार्थ पेश गरेको गर्दछु। शा.अ. बद्री बहादुर कार्की ।

श्रीमान्, पेश भएको विवरण कार्यान्वयन हुन मनासिव देखिएकोले निर्णयार्थ पेश गरेको छु । उ.स. लक्ष्मी नारायण उप्रेती।

पेश भए बमोजिम रोक्का फुकुवा गरी साबिकको दर्ता प्रमाणित र अप्रमाणित श्रेस्ता समेत खारेजी गरी नेपाल सरकार मन्त्री परिषदको निर्णयको आधारमा नेपाल सरकारको दर्ता समेत सच्याई उपरोक्त एघार कित्ता जग्गाहरु टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी मोहीका नाम समेत संम्बन्धीत कित्ता जग्गाको महलमा माथि टिप्पणीमा उल्लेख भए बमोजिम कायम गरी गुठीको कार्यालयमा निर्णयको जानकारी समेत दिई सक्कल फायल फिर्ता पठाई दिनु। मिति २०७०।०१।१२।

- (भूमि सुधार का.): निवेदकहरुको मागदावी अनुसार निजहरुकै नाममा मोहीहक नामसारी हुने ठहर्छ भन्ने मिति २०७०।०१।०३ गते र ऐ. ०५ गतेको भूमि सुधार कार्यालयको निर्णय पर्चा :-

**<u>भूमी सुधार कार्यालय काठमाडौं( निर्णय पर्चा):-</u>**

वादी:- देव नारायण महर्जन

प्रतिवादी:- पशुपती नाथ टिकिन्छा गुठी

मुद्दा:- मोही नामसारी

मिति २०७०।०१।०३ गते

यसमा साविक सुवर्ण शमशेरकोको नाममा दर्ता कायम सरकारको नाममा दर्ता भई हाल पशुपती नाथ टिकिन्छा गुठीको नाममा दर्ता हुने साविक नगर २३(ह) कि.नं. ३५ हाल का.न.पा. ४ सि.नं. १०२५-१५ कि.नं. ५६ र ऐ सि.नं. १०२५-२० कि.नं. ८० जग्गाको मोही स्व पिता नाती महर्जन भएको उक्त जग्गा पिताको जिवनकालमा पिताले र पिताको मृत्यू पश्चात हकदार म देव नारायण महर्जनले उक्त जग्गा जोती कमाई गरी आएको हुँदा उक्त जग्गाको मोही मेरो नाममा नामसारी गरी पाँऊ भन्ने निवेदन माग।

दावी जग्गाको मोही स्व पिताको नामबाट देव नारायण महर्जनको नाममा मोही हक नामसारी भएमा मन्जुर छु भनी हकदार छोरा पंच नारायण महर्जनको मन्जुरी निवेदन।

मिसिल संलग्न प्रमाणहरु मोहीको नागरीकताको प्रतिलिपी, नाता प्रमाणको प्रतिलिपी, मोहीको हकदारको मन्जुरी निवेदन, फिल्डबुक उतार तथा २ नं. अनुसुची भिडाउदा देखी जग्गाको मोही नाती महर्जन भएको र मोही नामसारी सम्बन्धमा ताहाँ बुझ्नु पर्ने हुँदा उक्त जग्गा दरता बाँकी भै जग्गा दर्ता सम्बन्धमा गुठी संस्थानमा कारबाही चलिरेहकोमा उक्त् जग्गा मिति २०६७।०६।२० मा जग्गा दर्ता भई आएका बखत कारबाही

हुने गरी मुलतवी रहेकोमा उक्त जग्गा हाल नेपाल सरकार मन्त्री परिषदले २०६६।१०।२९ र गुठी प्रशासकको २०६९।१०।०५ को निर्णय समेतका आधारमा पशुपतीनाथ टिकिन्छा

गुठीका नाममा दर्ता गर्ने निर्णय भएको र गुठी संस्थानले समेत मोही देव नारायण महर्जनलाई मोही कायम गर्ने निर्णय समेत गरेको देखिदा भुमि सम्बन्धी ऐन, २०२१ को दफा २६(१) मा मोहीका हकदारहरु मध्ये मोही रोज्ने अधिकार जग्गा धनिलाई प्रदान गरेको र यसमा जग्गाधनी गुठी आफै भएको र गुठीले समेत मोही आफै मोही कायम गरी सकेको र मोहीका उक्त हकदार यसै कार्यालयमा उपस्थित भई देच नारायणको नाममा नामसारी गर्न मन्जुर समेत गरेको देखिदा भु.स. ऐन, २०२१ को दफा २६(१) बमोजिम साविक नगर २३(ह) कि.नं. ३५ हाल नया नापी भै नगर ४ सि.नं. १०२५-१५, कि.नं. ५६ र ऐ सि.नं. १०२५-२० , कि.नं. ८० को जग्गाको स्व मोही नाती महर्जनको नामबाट छोरा देव नारायण महर्जनको नाममा मोही हक नामसारी हुने ठहर्दा अरुमा कानून बमोजिम गर्ने।

मिति २०७०।०१।०३।

भेष ब. कार्की (उप-सचिव) भु.स.का. काठमाडौं २०७०।०१।०८

यसमा सरोकारवाला वारेस राममणी सिग्देलको माग बमोजिम अ.ब. २११ नं. बमोजिम पानाको रु तिनका दरले हुने रु ६(छ) को टिकट रद्द गरी यो नक्कल दिईएको छ।

मिति २०७०।०१।०८

**<u>भूमी सुधार कार्यालय काठमाडौं( निर्णय पर्चा):</u>**

वादी:- मोहन महर्जन

प्रतिवादी:- पशुपती नाथ टिकिन्छा गुठी

मुद्दा:- मोही नामसारी

मिति २०७०।०१।०५ गते

यसमा साविकमा सुवर्ण शमशेर ज.ब.रा. को नाममा जफत भई नेपाल सरकारको नाममा दर्ता हुन गएको साविक नगर २३(ह) कि.नं. २२ को क्षे.फ. १-८-०-० भिडी हाल पशुपतीनाथ टिकिन्छा गुठीको नाममा दर्ता हुने वा नगर वडा नं. ४ सि.नं. १०२-१०२५-१५ कि.नं. २६२, २६७, २९५, २५९ को क्षे.फ. ०-१०-३-०, ०-१३-३-३, ०-२-१-० र ०-२-१-१ जग्गाको मोही मेरो एकाघरको पति कृष्ण महर्जन भएकोमा पतिको जीवनकालमा पतिले र पतिको मृत्यू पश्चात हकदार म पत्नीले उक्त जग्गा जोती कमाई गरी आएकोमा उक्त जग्गाको नामसारी गरी पाऊ भन्ने निवेदन माग भएकोमा उक्त जग्गा दर्ता बाँकी रहेको हुँदा गुठी संस्थानबाट दर्ता भई आएका बापत कारबाहू हुने गरी मुलतवी रहेकोमा हाल उक्त जग्गा पशुपतीनाथ टिकिन्छा गुठीको नाममा दर्ता हुने निर्णय भएको हुँदा उक्त मुलतवी जगाई मोहीहक नामसारी गरी पाउ भन्ने निवेदन माग।

दावी जग्गाको मोही हामिहरुको सासु तथा आमाको नाममा मोही हक नामसारी भएमा मन्जुर छु भन्ने मोहीका अन्य हकदारहरुको मन्जुरी निवेदन ।

मिसिल संलग्न प्रमाणहरु मोहीको नागरीकताको प्रतिलिपी, नाता प्रमाण पत्रको प्रतिलिपी, फिल्डबुक उतार तथा २ नं. अनुसुची भिडाउदा देखी जग्गाको मोही कृष्ण महर्जन भएको र निजको शेषपछी हकदार पत्नीले मोही हक नामसारी मात्र गरेकाले मोहीका हकदारहरुले नामसारी गर्न मन्जुर गरेको र उक्त जग्गा दर्ता बाँकी रहेको हुँदा जग्गा दर्ता भै आएका बखत कारबाही हुने गरी मुलतवी रहेकोमा उक्त जग्गा गुठी संस्थान केन्द्रीय

कार्यालयबाट २०६९।११।२० मा पशुपतीनाथ टिकिन्छा गुठीको नाममा दर्ता हुने गरी निर्णय भएको र भु.स. ऐन, २०२१ को दफा २६(१) मा मोहीको मृत्यू पश्चात हकदारहरु मध्ये मोही राख्ने अधिकार जग्गा धनिलाई भएको र यसमा जग्गा धनि गुठी संस्थान नै भएको र गुठी संस्थानले कृष्ण महर्जनको मृत्यू पश्चात हकदार पनि मोहन महर्जनलाई मोही स्विकार गरी निर्णय समेत गरेको देखिदा भु.स. ऐन , २०२१ को दफा २६(१) बमोजिम साविक नगर २३(ह) कि.नं. २२ को क्षे.फ. १-८-०-० भिडी नया नापी बमोजिम नगर ४ सि.नं. १०२-१०२५-१५, कि.नं. २६२, २६७, २९५, २५९ को क्षे.फ. ०-१०-३-०, ०-१३-३-३, ०-२-१-० र ०-२-१-१ जग्गाको मोही स्व कृष्ण महर्जनको नामबाट निजको पत्नी मोहन महर्जनको नाममा मोही हक नामसारी हुने ठहर्छ अरुमा कानून बमोजिम गर्ने।

मिति २०७०।०१।०५

**भु.स.का. काठमाडौं**

यसमा सरोकारवाला वारेस राममणी सिग्देलले माग गरेको हुँदा अ.ब. २११ नं. बमोजिम पानाको रु तिनका दरले हुने रु ६(छ) को टिकट रद्द गरी यो नक्कल दिईएको छ।

मिति २०७०।०१।०८

**भूमी सुधार कार्यालय काठमाडौं( निर्णय पर्चा):-**

वादी:- द्वारिकामान महर्जन

प्रतिवादी:- पशुपती नाथ टिकिन्छा गुठी

मुद्दा:- मोही नामसारी

मिति २०७०।०१।०५ गते

यसमा साविकमा सुवर्ण शमशेर ज.ब.रा. को नाममा दर्ता भई नेपाल सरकारको नाममा दर्ता भएको साविक नगर २३(ह) कि..नं. ३१ को क्षेत्रफल १-३-०० जग्गा हाल गुठी संस्थानको निर्णय बमोजिम पशुपतीनाथ टिकिन्छा गुठीको नाममा दर्ता हुने नया नापी बमोजिम नगर ४ सि.नं. १०२-१०२५-१५ कि.नं. २७८, २८४, २३२ र ३१४ को क्षे.फ. १-११-२-२, ०-२-३-०, ०-१-१-० र ०-२-१-२ जग्गाको मोही स्व पिता वोध सुकु महर्जन, जोगमान भन्ने न्हुछे बहादुर महर्जन, भएको उक्त जग्गा निज मोहीको मृत्यू पश्चात हकदार म एकमात्र नातीले उक्त जग्गा जाने कमाई गरी आएको हुँदा उक्त जग्गा नामसारी गरी पाऊ भनी निवेदन माग गरेकोमा उक्त जग्गा गुठीबाट दर्ता भई आएको बखत कारबाही हुने गरी मुलतवी रहेको हुँदा उक्त मुद्दा मुलतवी कर लगाई काराबाही गरी पाऊ भनी निवेदन माग ।

मिसिल संलग्न प्रमाणहरु मोहीको नागरीकता प्रतिलिपी, नाता प्रमाणितको प्रतिलिपी, सर्वोच्च अधालतको निर्णय प्रतिलिपी, फिल्डबुक उतार तथा २ नं. अनुसुची भिडाउदा दावी जग्गाको मोही जोगमान भन्ने न्हुछे बहादुर महर्जन भएका र दावी जग्गा नेपाल सरकारको नाममा दर्ता गर्ने गरी अख्तियार दुरुपयोग अनुसन्धानबाट भएको निर्णयको बिरुद्दमा निवेदकले सम्मानित सर्वोच्च अदालतमा उत्प्रेषण, परमाधेश गरेको सम्मानित अदालतबाट अख्तियार दुरुपयोग अनुसन्धान आयोगको निर्णय बदर गरी जग्गा दर्ताको काम सम्बन्धीत निकायको भनेको र सम्बन्धित निकायमा कारबाही चलिरहेको हुँदा उक्त निकायबाट निर्णय हुने भनी फैसला भएको र उक्त फैसला समेतलाई आधार मानी गुठी संस्थानले पशुपतीनाथ टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गर्ने गरी निर्णय भएको देखिन्छ साथै मोही नामसारीको बिषयमा ज.ध. बुझ्नु पर्ने ब्यवस्था भएपनी यसमा जग्गाधनी गुठी संस्थान पशुपतीनाथ टिकिन्छा गुठी भएको र गुठीले मोही जोगमान भन्ने न्हुछे महर्जनको

मृत्यू पश्चात हकदार एक मात्र नापी द्वारिकामान महर्जनलाई मोही कायम गरी सकेको देखिदा भूमी सम्बन्धी ऐन, २०२१ को दफा २६(१) हकदार मध्ये मोही रोज्ने अधिकार जग्गा धनिलाई भएको र जग्गाधनी गुठीले मोही द्वारिकामान महर्जनलाई पत्याई सकेको देखिदा भु.स. ऐन, २०३१ को दफा २६(१) बमोजिम साविक नगर २३(ह) कि.नं. ३१ हाल नया नापी बमोजिमको नगर ४ सि.नं.१०२-१०२५-१५ कि.नं. २७८, २८४, २३२, र ३१४ को क्षे.फ. १-११-२-२, ०-२-३-०, ०-१-१-० र ०-२-१-२ जग्गाको मोही जोगमान भन्ने न्हुछे महर्जनको नामबाट नाती द्वारिकामान महर्जनको नाममा मोही हक नामसारी हुने ठहर्छ अरुमा कानून बमोजिम गर्ने। भु. स.का. काठमाडौं । मिति २०७०।०१।०८ ।

यसमा सरोकारवाला वारेस राममणी सिग्देलले नक्कल माग गरेको देखिदा अ. २११ बमोजिम पानाको रु तिनका दरले हुने रु ६ (छ) को जिकिर रद्द गरी नक्कल दिईएको छ । मिति २०७०।०१।०८ (सिग्देल) ।

(शाखा) : मिति २०७०।०१।१२ मा मालपोत कार्यालय डिल्लीबजारले गरेको निर्णय बमोजिम गुठी संस्थान शाखा कार्यालयले टिप्पणी उठाई उक्त कित्ता जग्गाको मालपोत कार्यालयबाट जग्गाधनी प्रमाण पूर्जा प्राप्त गरी पशुपती टिकिन्छा गुठीमा जनाएको अभिलेख राखी सम्बन्धीत मोहीहरुलाई मिति २०७०।०१।१७ मा जग्गाको पूर्जा बितरण गरेको ।

➢ <u>साविक देखि हाल सम्मको विवरण - (२०६९) टिकिन्छा गुठी :-</u>

| पहिलो तह (साविक नापी ) | | | | | नयाँ नापीको प्लट रजिष्टर / फि.वु. (नयाँ नापी) | | | दोश्रो तह (२०७०।१।१७ गते) | | | | | तेश्रो तह ( २०७०।१।२७) | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| सि.नं | जग्गाधनी | मोही | कि.न. | क्षे.फ. | ज.ध | मोही | नयाँ कि.नं. | क्षे.फ | जग्गाधनी | मोही | कि.नं. | क्षे.फ. | जग्गाधनी | मोही | कि.नं. | क्षे.फ. |
| १ | श्री ५ को सरकार | जीत बहादुर महर्जन | ७३ | ०-३-०-० | फि.वु. नभएको | छैन | ४८ | ०-३-०-० | श्री प.टि. गु. | संजय कुमार महर्जन र सकलानन्द महर्जन | २३ क्षको कि.नं. ७ | ०-३-०-० | श्री प. टि. गु. | माधवी सुवेदी र उमा कुमारी ढकाल | ४८२५९२६२२६७२९५ | २-०-१-० |

| | | | | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | | | ३ हाल सि.नं. १०२५-१४ कि.नं. ४८ | | | | | |
| २ | श्री ५ को सरकार | कृष्ण महर्जन | २२ | १-८-०-० | खाली (प्लट रजिष्टर को रेकर्ड अनुसार) | छैन | २ | ०-१०-३-० | श्री प.टि.गु. | श्रीमती मोहन महर्जन | २३ ह कि.नं. २२ हाल सि. | १-१३-१-० | श्री प.टि.गु. | | | |
| | | | | | | | २ | ०-१३-३-३ | | | | | | | | |
| | | | | | | | २ | ०-२-१-० | | | | | | | | |
| | | | | | | | २ | ०-२-१-१ | | | | | | | | |

| | | | | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | | | नं. १०२५-१५५ कि.नं. २६२, २६७, २९५, २५९ | | | | | |
| ३ | श्री ५ को सरकार | न्हुन्छेमान महर्जन | ३१ | १-३-०-० | खाली (प्लट रजिष्टर को रेकर्ड अनुसार) | छैन | २<br>२<br>२ | ०-१-१-०<br>०-२-३-०<br>-११-२-२ | श्री प.टि.गु. | द्वारीका महर्जन | २३ह को कि.नं | १-१५-२-३ | श्री प.टि.गु. | रामकुमार सुवेदी र सोभाका | २३२ २७८ २८४ ५६८० | २-१४-२-१. |

| | | | | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | | | ३१हाल सि.नं.१०२५-१५ कि.नं. २७८, २८४, २३२ | | | न्त ढकाल | | ५ |
| ४ | श्री ५ को सरकार | नाति डंगोल | ३५ | ०-१४-३-० | श्री ५ को सरकार समरजंग कं. | नाति महर्जन | ५ | ०-११-२-२ | श्री प.टि. | देव नारायण महर्जन | २३ ह | ०-१४- | श्री प.टि. गु. | | | |

| | | | | | | | | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | | | २०को कि.नं.८० | | | | | |

प्रस्तुत मुद्दामा अनुसन्धानको क्रममा मिसिल संम्लग्न हुन आएको समरजंग कम्पनीमा कार्यरत ऐ. कार्यालयका प्रमुख मुकुन्द प्रसाद पन्तको जाहेरी दरखास्त, प्रहरी प्रधान कार्यालय केन्द्रीय अनुसन्धान ब्यूरो महाराजगञ्ज काठमाडौंबाट नेपाल सरकार गृह मन्त्रालयमा पेश भएको छानवीन प्रतिवेदन, त्रिताल समितिको प्रतिवेदन, नेपाल सरकार समरजंग कम्पनीबाट प्राप्त पत्रहरु, गुठी संस्थान तहसिल शाखा कार्यालयवाट प्राप्त पत्रहरु, गुठी संस्थान प्रधान कार्यालयबाट प्राप्त पत्रहरु, भूमिसुधार तथा मालपोत कार्यालयवाट प्राप्त पत्रहरु, नापी कार्यालयबाट प्राप्त पत्रहरु, भूमि सुधार तथा ब्यवस्था मन्त्रालय समेतका बिभिन्न कार्यालयहरुबाट प्राप्त पत्रहरु, बुझिन आएका व्यक्तिहरुले गरेको घटना विवरण कागज, पक्राउ परेका राम कुमार सुवेदी समेतका प्रतिवादीहरुले गरेको बयान समेत अध्ययन गरी बिश्लेषण गर्दा उक्त आधार प्रमाणहरु समेतबाट ललिता निवास क्याम्प भित्रको जग्गा भीम शमशेरले लालमोहरबाट प्राप्त गर्दा वि.सं. १९८७ माघ २९ गतेका दिन मेदवन्दी भए बमोजिमको बालुवाटारको चकलावन्दी भित्रको साँधको साविक खेत २६० रोपनी १ आना १२ पैसा ३ दामको भएकोमा हालको नापजाँच गर्दा २८७ रोपनी ५ आना ८ पैसा २ दाम ८ जनाको एकै चक्ला भएको देखिएको हुँदा यस भित्र तेज नरसिंह महर्जन देखि जितमान घले आदी गरी ३८ जना व्यक्तिको बिर्ताको जग्गा र तलेज्यू गुठी, देवाली गुठी, ईन्द्रजात्रा गुठी, सानु गुठीको जग्गाहरु पनि पर्न गएको र क्याम्प भित्र परी एकछत्त भईसकेको" उल्लेख भएकोले उक्त जग्गामा गुठी तथा मोही नभएको, साथै उक्त लालमोहरमा टिकिन्छा गुठी समेत उल्लेख भएको नदेखिएको।

बिर्ता उन्मूलन ऐन,२०१६ जारी भई बिर्ता उन्मुलन कार्यक्रम लागु भए पश्चात बि.सं.२०१७/०३/३२ मा भिम शम्शेरका नाति र हिरण्य शम्शेरका छोरा सुवर्ण शम्शेरले ललिता निवास क्याम्प भित्रको जग्गा तीन भाग ५७ रोपनीका दरले र २ भाग ५८ रोपनीका दरले उक्त जग्गा ५ भाग लगाई सुवर्ण शम्शेर र निजको श्रीमती श्वेतप्रभा राणाले ५८ रोपनीका दरले राखी तीन भाई छोराहरुलाई ५७ रोपनीका दरले बकस गरी उक्त जग्गाको बण्डा गरेको भन्ने समेत व्यहोराको भूमि प्रशासन कार्यालय काठमाडौंबाट पारित भएको अंशबण्डा बकसपत्र सम्बन्धको मिति २०१७।०३।२९ को बकसपत्र कागज।

मिति २०२५/२/७/२ भूमि बिभाग का.प.स.आ.यो. ३०(११३) ०२४/२५ च.न.२८७६/०२४ मिति ०२४/१२/३० को पत्र मुताबिक जम्मा ६ जना दर्ता वालाको पोत रु.३११।२२ लागेको २७२।३।२। जम्मा मध्ये रोपनी ६० ने.रा.बैकको नाउमा दर्ता भै सकी बाँकी रोपनी २१२।।।३।।२।। समरजंग कम्पनीको रेखदेखमा रहेको जग्गाको २०२२

साल देखिको पोत र जग्गाको लगत कट्टा भो जग्गा समरजंग कम्पनीको रेखदेखमा रहेको छ भन्ने २०२१ सालको साविकको लगत (का.फौ.त.)।

जग्गा प्राप्ती ऐन २०१८ अनुसार श्री ५ को सरकारवाट सार्वजनिक कामलाई घर कम्पाउण्ड जग्गा प्राप्त गर्ने भएकोले जग्गा प्राप्ती ऐन, २०१८ को दफा १४ बमोजिम प्रारम्भिक कारबाहीको शिलसिलामा उक्त दफा १४ को उपदफा २ बमोजिम २०२१।०६।२४।०६ मा सूचना भई सकेको र प्रारम्भिक कारबाहीको रिपोर्ट पेश भई श्री ५ को सरकारको निर्णय अनुसार नेपाल गजेट भाग ३, २०२१ साल मार्ग १७ गते अतिरिक्ताङ्क २३ को गजेटमा गृह मन्त्रालयको सूचना भई सकेकोले लेखिए बमोजिमको जग्गा प्राप्ती ऐन,२०१८ अनुसार लिने भएको हुनाले दफा १० बमोजिम यो टाँस पुर्जि जारी भएको छ। त्यसमा हकदैया भएका र भोगचलन गरीरहेका सवै सरोकारवाला व्यक्तिहरुले टाँस भएको दिन १५ भित्र आफ्नो के कस्तो हक दैया र भोग चलन छ सो वापत के कति क्षतिपूर्तिको रुपमा पाउँ भन्ने दावी जिकिर छ र दफा ४ बमोजिम गरिएको नाप नक्सामा कुनै उजूरी र दावी लिई लेखेको म्यादभित्र यस अफिसमा दरखास्त दिन ल्याउनु होला भन्ने समेत ब्यहोराको नेपाल गजेट भाग ३, २०२१ साल मार्ग १७ गते अतिरिक्ताङ्क २३ मा महाविर भवन, नक्साल, काठमाडौं हरिहर भवन, ललितपुर पुल्चोक, सीता भवन नक्साल काठमाडौंको लक्ष्मी निवास, महाराजगंजको बबरमहल कुरिया गाउँ, ललिता निवास, का.ई. बालुवाटार लगायतका जग्गा र त्यसमा रहेका संरचना सार्वजनिक कार्यको लागि अधिग्रहण गर्ने सरकारको निर्णय बमोजिम नेपाल गजेटमा मिति २०२१।०८।१७ मा सूचना प्रकाशित भए पश्चात मिति २०२१।०९।०६ गते समेतका बिभिन्न मितिहरुमा गोरखापत्रमा सूचना प्रकाशित भएको।

मालपोत कार्यालयको मोठ श्रेस्तामा बिभिन्न प्रकारका गुठी जनिएका गुठी जग्गाको पूर्जा माग गर्ने सम्बन्धमा गुठी संस्थानको च.नं. ७३५५ मिति २०४१।१२।९ को पत्र साथ कार्यपत्र विवरणको दफा १ (ख) अनुसार नापी श्रेस्ता फिल्डबुकमा श्री ५ सरकार गुठी, श्री ५ को सरकार गुठी, श्री ३ सरकार गुठी, सरकारी गुठी, कालमोचन गुठी, गुठी संस्थान गुठी, आदि लेखिएका जग्गाहरु राज गुठी अन्तर्गतकै जग्गा देखिंदा त्यस्ता जग्गाहरुको सम्बन्धमा दर्ताको वा कसैको नाममा छ छैन मालपोत कार्यालयको श्रेस्ता भिडाउने र कसैको नाममा दर्ता नभएको तथा कसैको दाबि समेत नभएको जग्गाको ज.ध.प्र.पु उल्लेखित गुठीकै नाममा कायम गरी पुर्जा बनाई पठाई दिनुहुन भन्ने ईन्द्रायणी पञ्चायत समेतका ६४ पञ्चायत गुठीको माग फारम थान साथै राखि गुठी लगत तथा तहाविल कार्यालयले मालपोत कार्यालयलाई ६४ पंचायतको नाममा जग्गाधनी पूर्जा बनाईदिने भनी लेखेको च.नं. २४२२ मिति २०४२ ।०१।१८ गतेको पत्रबाट समेत पशुपति टिकिन्छा गुठी उल्लेख भएको नदेखिएको।

काठमाडौं नगर पञ्चायत वार्ड नं.२३ मा पर्ने सुवर्ण शमशेरको क्याम्प भित्रको जग्गा र घर राष्ट्रियकरण भईसकेको तर उक्त क्याम्प भित्रको जग्गा कमाउने मोही किसानहरु जवान ५७ ले उक्त जग्गाहरुमा मोहीयानी हक नमागेता पनि हाल कमाई रहेको हुँदा सरकारलाई अरु आवश्यक्ता परी हटाउन नपरे सम्म कमाई राख्न तथा ऐन नियम बमोजिमको मूल्य तिरी कमाउन पाऊँ भन्ने समेत व्यहोराको निवेदन दिई निज निवेदकहरुवाट अरुलाई तोकेसरहकै कुत लिई उक्त जग्गा सरकारलाई आवश्यकता नपरेसम्म कमाउन दिने भनी मिति २०२३।०६।२३ गते अञ्चालाधिश अफिस वागमती अञ्चलले समरजंग कम्पनीलाई लेखेबाट समेत उक्त जग्गा पशुपति टिकिन्छा गुठीको हो भन्ने पुष्टि नभएको। साविक नापी अनुसारको फिल्डबुकमा काठमाडौं नगर ४ साविक २३ क्ष को कि.नं. ७३ समेतका कित्ता जग्गाहरुको किसानको महलमा 'ब्यक्तिको नाम', जग्गावालाको महलमा 'महल खाली', किसानको व्यहोराको महलमा 'यी जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु', कैफियत महलमा 'महल खाली' उल्लेख भएको देखिंदा उक्त कित्ता जग्गाहरु पशुपति टिकिन्छा गुठीको हो भन्ने स-प्रमाण नदेखिएको।

नयाँ नापी बमोजिम फिल्डबुकमा २३ क्ष को कि.नं. ७३ हाल सि.नं.१०२-१०२५-१४ , सि.नं. १०२-१०२५-१५, सि.नं. १०२-१०२५-२० समेतका बिभिन्न कित्ता जग्गाहरुको मोहीको महलमा 'व्यक्तिको नाम',जग्गावालाको महलमा 'श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय' भन्ने लगायतका व्यहोराहरु उल्लेख भएको देखिंदा उक्त कागजातमा गुठी भन्ने शब्द कतै उल्लेख भएको समेत नदेखिंदा उक्त कित्ता जग्गाहरु पशुपति टिकिन्छा गुठीको जग्गा नभई श्री ५ को सरकार समरजंग कम्पनीको कार्यालयको सरकारी जग्गा हो भन्ने स- प्रमाण पुष्टी भएको देखिन आएको। श्री ५ को सरकारको पहिलो नापी बमोजिम तयार भई मिति २०४२।०३।१६ मा तत्कालीन कार्यालय प्रमुख धर्म प्रसाद गौतमले गुठी कायम गर्न तोक आदेश गरेको जग्गाधनी श्रेस्ताको पहिलो पानाको दाहिने शिरमा 'श्री ५ सरकार' र दोश्रो पानाको दाहिने शिरमा 'श्री ५' मात्र लेखिएको देखिंदा निजले सरकारको जग्गालाई गुठी कायम गर्न प्रयास गरेता पनि दोश्रो नापी अनुसार जग्गाधनी दर्ता श्रेस्ताको दाहिने शिरमा जग्गाधनीको नामथर भन्ने स्थानमा 'श्री ५ को सरकार समरजंग कम्पनी' उल्लेख गेरको देखिंदा उक्त कित्ता जग्गाहरु पशुपति टिकिन्छा गुठीको नाममा दर्ता नभएको स-प्रमाण पुष्टी हुन आएको।

बि.सं.१९८७, बि.सं. १९९२, बि.सं.१९९४, बि.सं. १९९५, बि.सं. २००९ सालमा किसानहरुले राणाहरुलाई कुत बुझाए बापत प्राप्त भर्पाई रसिदहरु केन्द्रीय अनुसन्धान ब्यूरोको छानबीन समिति समक्ष मोही द्वारीकामान महर्जनले पेश गरेकोमा उक्त रसिदहरुमा टिकिन्छा गुठीको बाली बुझाएको भन्ने व्यहोरा उल्लेख गरेको तर ललिता निवास क्याम्प भित्रको टिकिन्छा गुठी भन्ने शव्दावली उल्लेख भएको नदेखिंदा ललिता निवास क्याम्प भित्र पशुपति टिकिन्छा गुठीको जग्गा नरहेको भन्ने थप पुष्टि हुन आएको।

केन्द्रीय अनुसन्धान ब्यूरोको छानबीन समिति समक्ष मोही भनिएका व्यक्तिहरुले गरेको कागजमा यी हामीले भोगचलन गरेका जग्गाहरु गुठीका होईनन, जोतभोग गरेवापत हामीले मोहीयानीहक प्राप्त गर्न सक्दैनौं,तर हामीले सरकारी दर अनुसारको तिरो, वाली र कुत समरजंग कम्पनीलाई बुझाउदै आएका छौं भनी हाम्रा बाबु बाजेहरुले भनेको कथन हामीले सुन्दै आएका हौं, पशुपति टिकिन्छा गुठी भन्ने शव्दावली हामीले सुनेका पनि छैनौं, पछि राम कुमार सुवेदीसँग भेट भएपश्चात निजले तपाईहरुलाई मोही छुट्याउन सहयोग गर्छु भनी के कुन कागजमा हामीलाई सहीछाप र हस्ताक्षर गर्न लगाए हामीलाई थाहा भएन, निज राम कुमार सुवेदीले हामीलाई मोही कायम गराए वापत रोपनीको रु.१३/१४ लाख मुल्याङकन गरी हामीलाई रकम दिएका हुन र निजको नाममा जग्गा कायम गरेका रहेछन भन्ने समेत व्यहोराको मोही भनिएका व्यक्तिहरुले गरीदिएको कागजले समेत उक्त जग्गा पशुपति टिकिन्छा गुठीको नभई समरजंग कम्पनीको हो भन्ने पुष्टी हुन आएको।

सिद्दार्थ क्यापिटल लिमिटेडको मिति २०७८।०९।१६ गतेको पत्र तथा मिसिल संलग्न कागजातहरुको बिश्लेषण टिपोट:-

शोभकान्त ढकालको नाममा सिद्धार्थ बैक लि.मा २००० कित्ता शेयर लगानी रहेको देखिएको, राम कुमार सुवेदी र शोभाकान्त ढकालको परिवारको नाममा १३४४३/९७ व.मी. जग्गा रहेको, शोभाकान्त ढकाल र अन्य व्यक्तिको संयुक्त नाममा ५९०९/४० व.मी. जग्गा रहेको, यसैगरी शोभाकान्त ढकाल, राम कुमार सुवेदीको परिवार र अन्य व्यक्तिको नाममा ८४२८/५६ व.मी. जग्गा जमिन रहेको, शोभाकान्त ढकाल/ रामकुमार सुवेदी परिवार र अन्य व्यक्तिको संयुक्त नाममा ७११८/४५ व.मी. जग्गा जमिन रहेको, शोभाकान्त ढकाल परिवार र अन्य व्यक्तिका संयुक्त नाममा ६३४४/७६ व.मी. जग्गा जमिन रहेको, शोभाकान्त ढकाल परिवार र अन्य व्यक्तिका संयुक्त नाममा ११६६६/०३ व.मी. जग्गा जमिन रहेको, शोभाकान्त ढकाल, रामकुमार सुवेदी परिवार र अन्य व्यक्तिका संयुक्त नाममा रहेका जग्गा जमिनको ३२७।८८ व.मी. जग्गा रहेको, शोभाकान्त ढकाल, रामकुमार सुवेदी परिवार र अन्य ब्यक्तिका संयुक्त नाममा ३२४७/३७

व.मी. जग्गा जमिन रहेको, शोभाकान्त ढकाल, रामकुमार सुवेदी र मिन बहादुर गुरुङको नाममा १२५२/४१ व.मी. जग्गा जमिन रहेको,शोभाकान्त ढकाल र अन्य व्यक्तिका संयुक्त नाममा ३९/७४ व.मी., शान्ति ढकाल र अन्य व्यक्तिको संयुक्त नाममा २५४/३२ जग्गा जमिन रहेको, शोभाकान्त ढकाल परिवार र अन्य व्यक्तिका संयुक्त नाममा ६३४४/७६ व.मी. जग्गा जमिन रहेको, लक्ष्मी ढकाल र अन्य व्यक्तिका संयुक्त नाममा २६८६/४६ व.मी. जग्गा जमिन रहेको, लक्ष्मी ढकाल र अन्य व्यक्तिको संयुक्त नाममा १६३२/८९ व.मी. जग्गा जमिन रहेको।

शख्र शिखर विकास कम्पनी प्रा.लि.मा राम कुमार सुवेदीको नाममा शेयर संख्या २००००० कित्ता र लगानी रु. २,००,००,०००/- र सोही कम्पनीमा माधवी सुवेदीको नाममा शेयर संख्या २००००० कित्ता र लगानी रु. २,००,००,०००/- गरी निज प्रतिवादीहरु राम कुमार सुवेदी र माधवी सुवेदीको नाममा कुल लगानी रु.४ करोड लगानी रहेको मिसिल संलग्न कागजातबाट देखिएको।

कीर्ते गरी बनाईएका प्रमाणहरु (कीर्ते हुनु आदि) :-

ललिता निवास क्याम्प भित्रको वडा नं.२३ क्ष को ३४ कित्ताको ५३ रोपनी गुठी संस्थान गुठी लगत तथा तहविल कार्यालयको (६४ पञ्चायत सम्बन्धी) मिति २०४२।०१।१८ गतेको पत्रअनुसार कुनै पनि गुठीमा कायम भएका जग्गाहरु दर्ता गरी अभिलेख राख्ने भन्ने व्यहोराको पत्र बमोजिम तत्कालीन मालपोत कार्यालय डिल्लीबजार काठमाडौंमा कार्यालय प्रमुख धर्म प्रसाद गौतमले गुठी नै नभएको ३४ कित्ता जग्गालाई मिति २०४२।०३।१६ मा गुठी कायम गरेको, सोही ३४ कित्ता जग्गा मध्ये पछि ४ वटा कित्ता पशुपति टिकिन्छा गुठीमा कायम गर्न उद्योग गरेको।

मालपोत कार्यालयले मिति २०४२।०३।१६ मा गुठी लगत तथा तहबिल कार्यालयको च.नं. २४२२ मिति २०४२।०१।१८ को पत्रानुसार श्री ५ को सरकार गुठीको नाममा गएको भनी तोक निर्णय गरेका ३४ कित्ता जग्गाको सम्बन्धमा मालपोत बिभागले मिति २०४९।०९।२२ मा च.नं. ३९२५ बाट मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्रमा उक्त ३४ कित्ता जग्गाहरु राज गुठीको नभै मिति २०१७।०३।३१ को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखिएकोमा नापीले श्रेस्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केही कित्तामा श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिएको हुँदा गुठीको २०४२।०३।२० को निर्णय मिति २०१७।०३।३१को लिखत फिल्डबुक बमोजिम गरी श्री ५ को सरकार गुठी जनिएकोलाई संशोधन गर्ने अधिकार पनि मालपोत ऐन,२०३४ को दफा ७ (३) बमोजिम मालपोत कार्यालयलाई नै भएकोले सोही बमोजिम संशोधन गर्नु र २०१७ साल पछि प्रजातन्त्रको लागि संघर्षमा संलग्न भएको कारणबाट रोक्का तथा जफत भएको सम्पत्ति फिर्ता दिने सम्बन्धमा श्री ५ को सरकार म.प.को मिति २०४७।०२।१४, २०४७।०४।०८, २०४७।०५।०३ र भूमि सुधार व्य.मन्त्रालय हुदै मालपोत बिभागको मिति २०४७।०६।०७ को पत्र बमोजिम त्यस्ता रोक्का तथा जफत भएका जग्गाहरु फिर्ता कति भयो र बाँकि कति छन ? श्री ५ को सरकारको निर्णय बमोजिम फिर्ता दिन बाँकी जग्गाहरु फिर्ता गरी सो को जानकारी गराई लगत समेत राख्न मालपोत कार्यालयलाई निर्देशन दिने भन्ने व्यहोराको मिति २०४९।०९।२२ गते च.नं. ३९२५ बाट मालपोत बिभागले मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्रबाट देखिएको, (आदेश दिने क्रममा एउटा गुठीको मात्र व्याख्या गरेको, फिल्ड बुकको व्यहोरा)।

साविक नापी अनुसारको फिल्डबुकमा काठमाडौं नगर ४ साविक २३ क्ष को कि.नं. ७३ समेतका कित्ता जग्गाहरुको किसानको महलमा ‘ब्यक्तिको नाम’, जग्गावालाको महलमा ‘महल खाली’, किसानको व्यहोराको महलमा ‘यी जग्गा अञ्चलआदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको छु’, कैफियत महलमा ‘महल खाली’ उल्लेख भएको, नयाँ नापी बमोजिम फिल्डबुकमा २३ क्ष को कि.नं. ७३ हाल सि.नं. १०२-१०२५-१४, सि.नं. १०२-१०२५-१५, सि.नं. १०२-१०२५-२० समेतका बिभिन्न कित्ता जग्गाहरुको मोहीको महलमा ‘व्यक्तिको

नाम',जग्गावालाको महलमा 'श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय' भन्ने लगायतका व्यहोराहरु उल्लेख भएको उक्त जग्गा श्री ५ को सरकार समरजंग कम्पनीको कार्यालयको सरकारी जग्गा हो भन्ने स- प्रमाण पुष्टी भएको, पहिलो नापी बमोजिमको जग्गाधनी श्रेस्ताको पहिलो पानाको दाहिने शिरमा 'श्री ५ सरकार' र दोश्रो पानाको दाहिने शिरमा 'श्री ५' मात्र लेखिएको, दोश्रो नापी अनुसार जग्गाधनी दर्ता श्रेस्ताको दाहिने शिरमा जग्गाधनीको नामथर भन्ने स्थानमा 'श्री ५ को सरकार समरजंग कम्पनी'उल्लेख गेरको अबस्थामा निवेदक पंच नारायण महर्जन समेतका वारेस राम कुमार सुवेदीले मिति २०५२।०५।३० को संचालक समितिको निर्णय बमोजिम बाँकी वक्यौता कुत असुल गरी लगत अध्यावधिक गर्न कार्यालयलाई निर्देशन दिने निर्णय भएकोमा उक्त निर्णयको गलत व्याख्या गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गालाई गुठीको जग्गा हो भनी जग्गा दर्ता गरी ज.ध. प्र.पुर्जा पाउ भन्ने श्री का.गु.त. कार्यालय कालमोचन काठमाडौंमा मिति २०५८।०१।१४ गते झुट्टो तथा फरक व्यहोराको निवेदन पेश गरेको देखिएको ।

श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको जग्गालाई नापीका समयमा नाप नक्सा कायम हुँदा मोहीयामा दर्ता भई जोत भोग गरी आएको साविक गुठी संस्थान अन्तरगतको गुठी टिकिन्छा गुठी मौजे हाडिगाऊ मलिकुली खेतका मोही आशामरु ज्यापुका नाममा रहेको खेत रोपनी १० मध्ये बाट भिडने काठमाडौं नगर २३ क्ष को कि.नं. ७८ समेतका कित्ता जग्गाहरु ज.ध. प्र.पुर्जा लिन वाँकि रहेको र सोही जग्गा नयाँ नापी बमोजिम नाप नक्सा समेत भै सकेकोले दर्ता प्रमाणित गरी हाल साविक समेत गरी ज.ध. प्र.पुर्जा पाउ भनी मिति २०५९।०७।०५ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा झुट्टा र फरक व्यहोराको निवेदन दिएको देखिएको ।

वडा कार्यालयबाट पहिला गुठी थाहा नभएको भन्ने पछि गर्दा डबल सिंह ठगुन्नाले खडा गरेको सर्जमिन मुचल्कामा रोहवरमा बसेको र सोही सर्जमिन मुचुल्काको आडहाली सिफारिस गरेको हुँदा वडा कार्यालयका कर्मचारी तथा पदाधिकारीको बदनियत देखिएको ।

श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको साविकको कि.नं. ३१ र ७७ का जग्गालाई मिति २०६०।०५।१९ गते काठमाडौं गुठी तहसिल कार्यालय कालमोचन काठमाडौंमा निवेदकका वारेस राम कुमार सुवेदीले जग्गा दर्ता ना.सा.गरी ज.ध. प्र.पुर्जा पाउ भनी निवेदन दिएको देखिएको ।

जग्गाधनी दर्ता श्रेस्ताको दाहिने शिरमा जग्गाधनीको नामथर भन्ने स्थानमा 'श्री ५ को सरकार समरजंग कम्पनी'उल्लेख गेरको अबस्थामा समेत काठमाडौं जिल्ला नगर वडा नं.२३क्ष कि.नं. १२ (०-५-०-०),२३ ह कि.नं. २५ (१-३-२-०),२३ ह कि.नं. १५ (२-३-०-०), २३ ह कि.नं.२४ (०-९-०-०),२३ क्ष कि.नं. ७८ (२-९-०-०),२३ क्ष कि.नं. ४८ (०-१४-०-०-) ,कि.नं. २३ क्ष ७६ (२-१२-१-०) ,२३ क्ष कि.नं.६८ (१-८-०-०-), २३ क्ष कि.नं. ६९ (०-६-२-०),२३ ह कि.नं. ४० (०-१३-२-०),२३ क्ष कि.नं. ७३ (०-३-०-०),२३ ह कि.नं. २२ (१-८-०-०) कित्ता जग्गाहरु पशुपतिनाथ टिकिन्छा गुठीको लगतमा खला नं.१० सँग भिड्ने जग्गा हो, फिल्ड बुकको जोताहामा निवेदकहरुका पुर्खाको नाम उल्लेख भएको भई उक्त जग्गा निवेदकहरुले नै जोतभोग गरी आएकोले निजहरुको माग बमोजिम दर्ता हा.सा.गरी ज.ध.प्र.पुर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन भन्ने समेत व्यहोराको डवल सिंह ठगुन्ना र विश्व विनय पन्तले मिति २०६०।०२।२० मा झुट्टा तथा फरक व्यहोराको र बेरितको सर्जमिन मुचुल्का खडा गरेको देखिएको ।

"उपरोक्त सम्बन्धमा का.म.पा.१७ वडा बस्ने तुईई भाई महर्जन भन्ने पञ्च नारायण महर्जनले आफ्नो नाममा मोही कायम भएको साविक २३ क्ष को कि.नं. २८ र ऐ. को कि.नं. ४२ क्रमश: क्षे.फ. ३-१५-० र ०-५-० जग्गाधनी गुठी रहेको सो जग्गा आफैले जोतभोत गरी आई रहेको हुँदा मेरो नाउँमा दर्ता प्रमाणित गरी पुर्जा दिनको लागि सिफारिश पाउँ भनी यस वडामा निवेदन गर्नु भएकोले त्यस कार्यालयको नियमानुसार निवेदकको नाममा मोही दर्ताको लागि शिफारिस गर्दछु"

भन्ने व्यहोराको मिति २०५०।०५।११ मा च.नं. २०९ बाट काठमाडौं महानगरपालिका वडा ४ का अध्यक्ष रत्न प्रसाद जोशीद्वारा गुठीनै कायम नभएको जग्गालाई स्थलगत सर्जमिन समेत नगरी कानूनी रित समेत नपुऱ्याई निवेदकले मागेकै आधारमा मोही दर्ताको लागि शिफारिस गरी का.गु.त.का. पठाएको।

"उपरोक्त सम्बन्धमा यस का.म.पा. ४ वडा कार्यालयमा मोही जोताहा देव नारायण महर्जन साविक नगर २३ क्ष कि.नं. ३५ र ३७, द्वारीकामान महर्जन ऐ. ऐ. कि. नं. ३१ र ऐ.ऐ. क्ष को कि.नं. ७७ , चन्द्रमाया महर्जन ऐ.ऐ. २४ क कि.नं. २१३ का वारेस राम कुमार सुवेदीले संयुक्त निवेदन लेखि उल्लेखित कित्ता जग्गाहरु जोताहा मोहीहरुले साविक गुठी संस्थान अन्तरगतको टिकिन्छा गुठी मौजे हाडीगाउँ मलिकुली खेतका मोही आशामरु ज्यापुका नाममा रहेको खेत रोपनी १० मध्येबाट भिड्ने जग्गा हामीहरुले साविक देखिनै जोत कमोद गरी आएकोले उक्त जग्गा जोत कमोद गरी आएको व्यहोरा खुलाई यस कार्यालयको नाममा शिफारिस पाउँ भनी दिनुभएको निवेदन सम्बन्धमा उक्त कित्ता जग्गाहरु उल्लेखित जोताहा मोहीहरुले साविक देखि हाल सम्म निरन्तर जोत कमोद गरी आउनु भएको व्यहोरा शिफारिस गरीन्छ" भनी च.नं. ३८० मिति २०६०।०५।१२ मा का.म.पा. ४ नं. वडा सचिव शिवजी भट्टराईले गुठीनै कायम नभएको जग्गालाई स्थलगत सर्जमिन समेत नगरी कानूनी रित समेत नपुऱ्याई निवेदकले मागेकै आधारमा मोही दर्ताको लागि शिफारिस गरी का.गु.त.का. पठाएको।

"का.जि. का.म.न.पा. वडा नं. २३ क्ष कि.नं. १४,२५,२८,४२,६३ समेतका कित्ता जग्गा हामी मोहीहरुका नाममा गुठीमा दर्ता गरीपाउँ भन्ने व्यहोराको तुईई भाई भन्ने पंच नारायण महर्जन र तीर्थमाया महर्जनको निवेदन परि कारवाही गर्ने क्रममा केही कुरा बुझ्नु पर्ने भई ७ दिनको म्याद जारी हुँदा उक्त म्याद बुझि उपस्थित भई गु.सं.केन्द्रीय कार्यालयबाट उक्त कित्ता जग्गाको सम्बन्धमा बिभिन्न कुरा सोधनी भएकोमा हाम्रा पिता स्व.श्री सुवर्ण शम्शेर ज.व.रा. देशमा प्रजातन्त्र वहालीको लागि राजनीतिमा लाग्नु भएका कारण तत्कालीन शासकले हाम्रो श्री सम्पत्ति सर्वस्वहरण गरेकोले हामीबाट हरण भएको सम्पत्ति अञ्चालधिश कार्यालयलाई जिम्मा दिएको कारणले श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाशिश कार्यालयको नाममा नापीको समयमा मोहीहरुले लेखाएका हुन यस्तो लेखाई गुठी जग्गामा मात्र नभई यसै सँगका हाम्रा रैकर जग्गामा पनि सोही प्रकारको लेखाई फिल्डबुकमा लेखिएको थियो। देशमा प्रजातन्त्रको पुनरबहाली पश्चात २०४७ सालमा हाम्रो जग्गा फुकुवा भएपछी रैकर तर्फका सम्पूर्ण जग्गाहरु हामीले आफ्नो नाममा दर्ता गरायौ। गुठी जग्गाको सम्बन्धमा गुठी संस्थान ऐनले दर्तावाला मोहीको हक समाप्त गरी जोत्ने जोताहाको मोहीको नाममा जग्गा दर्ता गरीदिने अबस्था गरेकोले साविक खला नं. १० को श्री ५ को सरकार टिकिन्छा गुठी जग्गा समेत हामीहरुले गुठी जग्गा दर्ता नगराएका हौं। हाम्रो साविकमा जग्गा जमिनको कुत समेत असूल गर्न ललिता निवास गोश्वारा तहसिल अड्डा नै राखेको थियो। निवेदक मोहीले पेश गरेको भरपाई हाम्रो तहसिल अड्डाको हो। माथि उल्लेखित कारणबाट मागदावीका जग्गा श्री ५ को सरकार समरजंग कम्पनी वा अञ्चालधिस कार्यालयको नभई राजगुठी अन्तरगत हामी साबिक देखि दर्तावाला मोही भई जोताहा मार्फत जोत भोग हुदै आएका, गुठी जग्गा हुदै गुठी संस्थानको बिद्यमान ऐन, बिनियम अनुसार निवेदक जोताहा मोहीका नाममा गुठी जग्गा दर्ता गरी ज.ध.प्र. पु. दिएमा समेत हाम्रो मञ्जुरी छ, यस कुरालाई लिएर पछी खिचलो गर्ने छैनौ, गरेमा यसै कागजबाट बदर गरीदिनु भनी गुठीको जग्गा होईन भन्ने थाहा हुँदा हुदै सम्बन्धीत निकायमा गर्नु पर्ने कागज व्यक्ति बिशेषको घरमा बसी सुनीति राणा, शैलजा राणा र रुक्म शम्शेर राणाले झुट्टा तथा फरक व्यहोराको मञ्जुरीनामा कागज तयार गरेर व्यहोरा कीर्ते समेत गरी मिति २०६०।०८।११ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा मञ्जुरीनामा दिएको।

उपरोक्त सम्बन्धमा ताँहाको च.नं. ३६५१/०५८/०५९ मिति २०४९।०३।३२ को पत्र प्राप्त भयो, सो पत्रका सम्बन्धमा गुठीको जग्गा हो होईन ? यस कार्यालयवाट भन्न नसकिने, के हो ? तहाँको लगत हेरी गर्नु हुन अनुरोध गर्दछु भन्ने

व्यहोराको च.नं. ५ मिति २०५९।०४।१० गते समरजंग कम्पनी कार्यालयको तर्फबाट रामकुमार सुवेदीले खेस्नालाई हु-बहु उतार गरी जवाफ लेख्ने काम भएको, कार्यालयमा लगत फेला नपरेको खण्डमा माथिल्लो निकायसँग सोधपुछ र पत्राचार गरी आफ्नो रेखदेखमा रहेको जग्गाको स्पष्ट लगत खुलाई जवाफ दिनुपर्नेमा अभिलेख समेत नष्ट गरी गैह्र जिम्मेवार जवाफ दिएको, साथै आफू मृगौला पीडित भनी भावनामा बगी बिचौलियाले दिएको रु.४०,०००/- (चालीस हजार) नगद समेत लिएर गैह्र कानूनी तवरले पत्र लेखेको भनी छानबीन समिति समक्ष कार्यालय प्रमुख अर्जुन प्रसाद भण्डारीले गरी दिएको कागजबाट समेत उल्लेखित च.नं. ५ को झुट्टो व्यहोराको पत्र तयार गरी गुठी संस्थान तहसिल शाखा कार्यालयलाई जवाफ लेखि पठाएको देखिएको।

गुठी संस्थान केन्द्रीय कार्यालयबाट उक्त १४ कित्ता जग्गा सम्बन्धी फाइल गुठी तहसिल कार्यालयमा फिर्ता भइसके पश्चात गुठी तहसिल कार्यालयको च.नं.९७५ मिति २०६०/०८/०२ गतेको पत्रद्वारा गोरखापत्र संस्थानलाई सूचना प्रकाशित गरीदिन अनुरोध गरे बमोजिम जग्गाको हकदावी सम्बन्धी ३५ दिने सूचना गोरखापत्रमा प्रकाशित भएकोमा उक्त जग्गाको हकदावी गर्न आउने वारेको गोरखापत्रमा ३५ दिने सार्वजनिक सूचना जारी हुँदा समेत आफ्नो रेखदेख तथा जिम्मामा रहेको सरकारी जग्गाको दावी गर्न जानु पर्नेमा तत्कालीन समयमा कार्यरत समरजंग कम्पनीका कार्यालय प्रमुख अर्जुन प्रसाद भण्डारी र रमेश कुमार पोखरेल जग्गाको हकदावी गर्न नगएको।

मन्त्रीपरिषदको निर्णय बमोजिम साविकको कि.नं. २२, ३१, ३५, ७३ सँग भिड्ने नयाँ नापीको कि.नं. ४८,५६,८०,२६७,२९५,२६२,२७८,२८४ का जम्मा ८ कित्ता जग्गाहरु पशुपति टिकिन्छा गुठीमा दर्ता गर्ने कार्यबिधि पुरा गर्ने क्रममा गुठी संस्थान केन्द्रीय कार्यालयका प्रशासक बलीराम प्रसाद साह तेलीले समरजंग कम्पनीको नामको लगत कट्टा गरी पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्ने टिप्पणी निर्णय गरी गुठी संस्थान तहसिल कार्यालयलाई कार्यान्वयन गर्नु भनी निर्देशन दिएकोमा उक्त तहसिल कार्यालयवाट नापी कार्यालयलाई पत्राचार गरी माथि उल्लेखित साविकका ४ कित्ता जग्गासँग हाल नापीका कुन कुन जग्गाहरु भिड्ने भनी बुझ्दा माथि उल्लेखित नयाँ नापीका जग्गा कित्ता बाहेक कि.नं. २५९,२३२,२८०,३१४ गरी ४ कित्ता जग्गा बढी भिड्ने भनी जम्मा १२ कित्ता जग्गा भिडाई नापी कार्यालयले जवाफ लेखि पठाएकोमा सोही बमोजिम टिप्पणी उठाई तहसिल कार्यालयले मालपोत कार्यालयलाई जग्गा दर्ता कार्यान्वयन गर्न मिसिल पठाएकोमा पुन: मालपोत कार्यालयबाट नापी कार्यालयलाई माथि उल्लेखित साविकका ४ कित्ता जग्गासँग हाल नापीका कुन कुन जग्गाहरु भिड्छ भनी बुझ्दा माथि उल्लेखित नयाँ नापीका जग्गा कित्ता बाहेक कि.नं. २५९,२३२,३१४ गरी ३ कित्ता जग्गा बढी भिड्छ (तहसिल कार्यालयलाई लेखेको जवाफ भन्दा कि.नं. २८० को कम भिडाई पठाएको) भनी जम्मा ११ कित्ता जग्गा भिडाई नापी कार्यालयले मालपोत कार्यालयलाई जवाफ लेखि पठाएकोमा मालपोत कार्यालयले मिति २०७०।०१।१२ मा नयाँ नापीको कि.नं. ४८,५६, ८०, २६२, २६७, २५९, २९५, २७८, २८४ र २३२ का जम्मा १० कित्ता जग्गा पशुपति टिकिन्छा गुठीमा दर्ता कायम गर्न टिप्पणी निर्णय गरेको।

फरक व्यहोराका पत्रहरु:- एउटै व्यहोराको पत्रहरुको जवाफ दिने क्रममा नापी कार्यालयले जग्गाको फरक फरक लगत भिडाई पठाईएको मालपोत कार्यालय र गुठी संस्थान शाखा कार्यालयको पत्रबाट देखिएको।

मिति २०६६/१२/२९ गते नेपाल सरकार मन्त्री परिषदबाट निर्णय हुने क्रममा मिति २०६६/१२/१८ गते भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट उठेको टिप्पणीको तेश्रो परिच्छेदमा " आ.व. २०६५/०६६ मा यस कार्यालयबाट तयार गरिएको सम्माननीय प्रधानमन्त्रीज्यू निवासको गुरुयोजना बमोजिम सम्माननीय प्रधानमन्त्रीज्यू समक्ष निवासको दक्षिणपट्टि गरीने विस्तारको प्रस्तावित नक्सा तथा आवश्यक विवरणहरु तयार गरी बिभिन्न मितिमा छलफलहरु गरिएको छ। सो छलफलबाट प्राप्त राय सुझावका आधारमा परिसरको सिमानादेखि दक्षिण तर्फ रहेका जग्गाहरु (भौतिक

निर्माण नभएका खुल्ला क्षेत्रका रुपमा रहेका जग्गा) को विवरण तयार गर्न मालपोत कार्यालय, डिल्लीबजार, नापी कार्यालय, डिल्लीबजार र गुठी संस्थानको शाखा कार्यालय, काठमाडौंबाट आवश्यक कागजातहरु संकलन गर्ने कार्यहरु भईसकेका छन् । प्राप्त कागजातहरुको आधारमा हेर्दा नेपाल सरकार, समरजंग कम्पनीको नाममा रहेका सरकारी जग्गा र अनुसूची १ मा उल्लेख भए बमोजिम बिभिन्न व्यक्तिहरुको नाममा रहेको जग्गाको विवरण संकलन भएको छ । उक्त निवासको दक्षिण तर्फ गुठी संस्थानको नाममा कुनै जग्गा रहेको पाईएन" भन्ने व्यहोरा उल्लेख भएको देखिँदा आ.व. २०६५/०६६ मै ललिता निवास क्याम्प भित्र गुठीको नाममा जग्गा नरहेको अवस्थामा २०६९ सालमा पशुपती टिकिन्छा गुठीको जग्गा रहेको भनी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको दर्ता सच्याई पशुपती टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गरी तिर्थमाया महर्जन समेतलाई मोही कायम गर्ने गरी निर्णयको लागि फरक र झुठा व्यहोराको टिप्पणी प्रस्ताव पेश भई जग्गा दर्ता सच्याउने कार्य योजनावद्ध ढंगबाट सरकारी जग्गा मस्यौट गरी व्यक्ति विशेषलाई फाईदा पुऱ्याउने दुषित मनसायबाट सँगठित तवरले सरकारी छाप दस्तखत किर्ते गरी भएको थप तथ्यबाट पुष्टि हुन्छ ।

५ कित्ता (कि.नं. १५,२५,२८,४२,६३ ) जग्गा सम्बन्धमा गुठी तहसिल कार्यालयबाट मिति २०५८।०१।१४ मा वारेस मार्फत निवेदन परेकोमा मिति २०५८।०५।२५ मा टिप्पणी शुरु भई मिति २०६१।०८।०८ मा गुठी संस्थान केन्द्रीय कार्यालयबाट मन्त्रालयमा पठाएको । यसै गरी १६ कित्ता जग्गा सम्बन्धमा मिति २०५९।०७।०५ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा निवेदन परी मिति २०६०।०७।१९ मा गुठी संस्थान तहसिल कार्यालयबाट टिप्पणी शुरु भई गुठी संस्थान केन्द्रीय कार्यालयबाट १३ कित्ता जग्गा ४०,१२,७८,६९,६८,७६,४८,२४, १५,२२,७३,२५ को बारेमा टिप्पणी उठाई मिति २०६१।०८।०८ मा भूमि सुधारका. मन्त्रालय पठाएकोमा मन्त्रालयबाट मिति २०६३।०९।२५ मा बिभागीय मन्त्री प्रभु नारायण चौधरी सदर भएको तर मन्त्री परिषदमा पेश भएको नदेखिएको, सो को ६ बर्ष पछि मिति २०६९।०४।०२ मा मन्त्रालयबाट २१ कित्ता जग्गा सम्बन्धमा पुन: टिप्पणी शुरु भई मिति २०६९।०४।०८ मा मन्त्रीले सदर गरी मिति २०६९।०६।१८ मा म.प. बाट स्वीकृति निर्णय भएको, मिति २०६९।०६।१८ मा निर्णय कार्यान्वयन प्रकृयामा गई मिति २०७०।०१।१७ मा साविक नापीका कि.नं. २२,३१,३५ र ७३ सँग भिड्ने हाल नापीका १० कित्ता जग्गाहरु ५ जना मोहीहरु देवनारायण महर्जन, श्रीमती मोहन महर्जन, द्वारिकामान महर्जन, संजय महर्जन, सकलानन्द महर्जनको नाममा कायम भएकोमा मिति २०७०।०१।२७ मा मोही कायम भएको १० दिन पछि नया नापीका ५ कित्ता जग्गा उमा कुमारी ढकाल, माधवी सुवेदीको नाममा र ५ कित्ता जग्गा राम कुमार सुवेदी र सोभा कान्त ढकालको नाममा संयुक्त रुपमा कायम भई सरकारी जग्गा गुठीको नाममा कायम गराउन कीर्ते तथा झुट्ठा व्यहोराका कागजपत्र तयार गरी मन्त्रीपरिषद समेतलाई तथ्यगत भ्रम सृजना गरी सरकारी जग्गालाई गुठीमा कायम गराई व्यक्ति बिशेषलाई लाभ पुऱ्याएको देखिएको छ ।

यसरी प्रस्तुत खण्डमा माथि उल्लेखित तथ्यहरु र प्रमाणहरु समेतबाट बिरुद्द खण्डमा उल्लेखित प्रतिवादीहरु धर्म प्रसाद गौतम, रमेश कुमार पोखरेल, घमन कुमार कार्की, शिवजी भट्टराई, बाबुराजा महर्जन, देवनारायण महर्जन, रुद्र कुमार श्रेष्ठ, सकलानन्द महर्जन, संजय कुमार महर्जन, राम कुमार सुवेदी, सोभाकान्त ढकाल समेतले नेपाल सरकारले प्रचलित कानूनको रित पुर्याई अधिग्रहण गरेको जग्गा नेपाल सरकार समरजंग कम्पनीलाई रेखदेखको जिम्मा दिई मालपोत कार्यालयका जग्गा श्रेस्ताहरुमा जग्गाधनीको विवरणमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको जग्गाको दर्ता सच्याई श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी कानून बमोजिम निर्णय गर्नु पर्ने पदाधिकारीहरुले उपयुक्त निर्णय नगरी सरकारी सम्पत्तीको संरक्षण गर्नु पर्ने तत्कालीन समयमा नेपाल सरकार समरजंग कम्पनीका कार्यालय प्रमुखहरुले सो नगरी तथ्यगत कुराहरु लुकाई गलत कुराहरु देखाई लेखाई राज्यको सम्पत्ती हानी नोक्सानी पुर्याउने मनसायले प्ररित भई सँगठित तवरले ३ जना भन्दा बढीको समूह भई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता

कायम रहेको सरकारी जग्गाको जग्गाधनीको लगत कट्टा गरी श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गराई आफ्नो हक नपुग्ने नेपाल सरकारको नाममा दर्ता कायम रहेको सरकारी जग्गा फरक व्यहोराको कागज समेत बनाई पेश गरी नेपाल सरकारलाई हानी नोक्सानी हुने र झुट्टा काम गर्ने निज प्रतिवादीहरु आफैलाई फाइदा हुने काम गरी प्रस्तुत किर्ते कसूर गरेको देखिन्छ।

अनुसन्धानको क्रममा प्राप्त समग्र तथ्यहरुबाट जग्गा प्राप्ति ऐन, २०१८ को दफा ७ को उपदफा (१) बमोजिम तत्कालीन श्री ५ को सरकार (म.प.) को मिति २०२१।०८।१५ को निर्णयअनुसार नेपाल गजेटमा २०२१।०८।१७ मा सूचना प्रकाशन भई सम्बन्धित जग्गावाला व्यक्तिहरूलाई जानकारी गराएको, ऐ ऐनको दफा १० बमोजिम टाँसपुर्जी गरी उजुर गर्ने मौका दिइएको, मिति२०२१।०९।०७ मा जग्गाको क्षतिपूर्ति लिन आउनूहोस् भनी गोरखापत्र दैनिकमा सूचना प्रकाशित गरिएको, क्षतिपूर्ति किस्ताबन्दीमा दिइएको, मिति २०२२।२३ सालको क्षतिपूर्ति लिन केहीको बाँकी देखिएको भनी मिति २०२३।०६।०७ मा गो. प. मा सूचना प्रकाशित गरी शिघ्र लिन आउनूहोस् भनी जानकारी दिइएको, ऐनको दफा १३ का आधारमा कसैले लिन नआएमा राजस्व खातामा जम्मा हुने व्यहोराको जानकारी दिइएको र बाग्मती अंचलाधीश कार्यालयले मालपोत कार्यालयलाई मिति २०४४।१०।२२ मा लगत कट्टा गर्न र श्री ५ को सरकारका नाममा जग्गाधनी लालपुर्जा बनाउन पत्राचार गरेको देखिंदा जग्गा प्राप्ति ऐन, २०१८ अनुसारका सबै कानूनी प्रावधानहरू पूरा गरी जग्गा अधिग्रहण भएको प्रष्ट देखिन आयो।

अधिग्रहण गर्ने सम्बन्धी सूचना बमोजिम सुवर्ण शम्शेर र कांचन शम्शेरको भागमा रहेको १४–११–०–० जग्गा मात्र जफत गरिएको देखिन आयो। ललिता निवास क्षेत्रको २८४–१४–३–० जग्गा प्रधानमन्त्री निवास र अन्य विशिष्ट पदाधिकारीको निवास एवं नेपाल राष्ट्र बैंकको केन्द्रिय कार्यालयको लागि जग्गा प्राप्ति ऐन, २०१८ का आधारमा अधिग्रहण गरेको देखिन आयो। अधिग्रहण गरेको जग्गाको मुआब्जा कानून बमोजिम दिएको पनि बिभिन्न सूचना र पत्राचारबाट पुष्टि भएको देखियो।

मालपोत कार्यालय, डिल्लीबजारले तत्कालीन श्री ५को सरकार (म.प.) का मिति २०४७।०२।१४, २०४७।०४।०८ र २०४७।०५।०३ गतेका निर्णयहरू कार्यान्वयन गर्दा जफत गरिएको जग्गा र अधिग्रहण गरिएको जग्गा कति हो यकिन गर्नुपर्ने, क्षेत्रफल र कित्ता स्पष्ट गर्नुपर्ने, तत्पश्चात् अधिग्रहणमा परेको जग्गाको मुआब्जा एवं क्षतिपूर्ति प्राप्त गरे नगरेको बुझ्नु पर्ने, हदबन्दी भित्र पर्ने नपर्ने सुनिश्चित गर्नुपर्ने र क्षतिपूर्ति नपाएको अवस्था देखिएमा पुनः विभाग, मन्त्रालय मार्फत् निर्णय गर्ने निकाय समक्ष प्रतिवेदन गर्नुपर्ने र प्रतिवेदन उपर भएको निर्णय वा निकासा बमोजिम कार्य अगाडि बढाउनु पर्नेमा यी कुनै पनि प्रक्रिया पुऱ्याएको नदेखिएको। तसर्थ हदबन्दी किटान नभई र सो जानकारी सम्बन्धित साधिकार निकाय भूमिसुधार कार्यालयबाट प्राप्त नगरी मालपोत कार्यालय आफैंले जग्गा दर्ता गर्ने निर्णय गरेको।

मिति २०२१।०८।१७ को सूचना बमोजिम अधिग्रहण भएका अन्य ५ वटा दरबार र तिनले चर्चेको जग्गामा जग्गाधनी तथा मोहीहरूले मुआब्जा पाएपछि सुवर्ण शम्शेरका हकदारहरूले पनि पाएको हुनुपर्ने, नपाएको भए सम्बन्धित निकायमा उजुरी निवेदन दिएको हुनुपर्ने वा अन्य कानूनी प्रकृयामा जानु पर्नेमा त्यस्तो भए गरेको कहीं कतै नदेखिएको हुँदा उनीहरूले पनि मुआब्जा पाएका थिए भन्ने स्पष्ट देखिएको।

गुठी संस्थानबाट मिति २०४२।०१।१८ मा केही जग्गा गुठीको जनाउने निर्णय गरेको र मालपोत कार्यालयले सो बमोजिम मिति २०४२।०३।१६ मा जग्गाधनी श्रेस्ता पुर्जा गुठीको जनाई निर्णय गरेको र मालपोत कार्यालय, डिल्लीबजारले पुनः २०४९।०७।२५ र २०४९।०८।३० मा पहिलेको श्रेस्ता सच्याई अर्को व्यक्ति विशेषका नाममा श्रेस्ता कायम गरेको देखिंदा दोहोरो श्रेस्ता कायम गरेको।

पशुपति टिकिन्छा गुठी हो भनी बिभिन्न व्यक्तिहरूले २१ कित्ता जग्गामा मोही कायम गर्न २०५८ सालदेखि निवेदन दिएपनि गुठी संस्थानको प्रस्ताव अनुसार तत्कालीन भूमिसुधार तथा व्यवस्था मन्त्रालयले म.प. मा प्रस्ताव पेश गर्दा साविक का.न.पा. वडा नं २३ को ४ कित्ता जग्गामात्र गुठीमा कायम गरेको तर उक्त गुठीको भूगोल कहाँ हो, कुन ठाउँमा रहेको भन्ने विषयमा जग्गाधनी गुठी संस्थान नै अस्पष्ट रहेको र मन्त्रालयले पनि सत्यतथ्य खोजी नगरी निर्णयको लागि म.प. मा प्रस्ताव पेश गरेको।

सर्वोच्च अदालतबाट प्रतिपादित सिद्धान्तहरूमा जुन कामका लागि कानूनले जुन निकाय वा पदाधिकारीलाई अधिकार दिएको छ, सो कार्य सोही निकाय वा पदाधिकारीको क्षेत्राधिकारमा हस्तक्षेप वा संकुचन हुने गरी अन्य कुनै निकाय वा पदाधिकारीले अधिकार प्रयोग गर्न नपाउने मान्यता रहेकोले सो को विपरित हुने गरी मालपोत कार्यालय, डिल्लीबजारले प्रस्तुत विषयमा निर्णय गरेको देखियो। तसर्थ, अधिकार विहीन निकायबाट भएको काम कारबाहीको कानूनी मान्यता रहदैन। यसरी हेर्दा मिसिल नं १०२४ र १०२५ बाट मालपोत कार्यालय, डिल्लीबजारले गरेका निर्णयहरू सुरूदेखि नै सरकारी जग्गा मस्यौट गरी व्यक्ति विशेषले फाईदा लिने गरी योजनाबद्ध ढंगबाट गरेको देखिन्छ।

**वि.सं. २०४९ सालमा भएका कानून सम्मत नदेखिएका निर्णयहरू:**

(क) मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२४ मिति २०४९/०७/२५ को निर्णय:

साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ भिड्ने ललिता निवासक्याम्प भित्रको तत्कालीन श्री५ को सरकारको नाममा श्रेस्तापूर्जा भएको२९९-९-२-०रोपनी जग्गा मध्येबाट तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा, मालपोत अधिकृत सुरेन्द्रमान कपाली, नायव सुब्बा जगत प्रसाद पुडासैनी र खरिदार युक्त प्रसाद श्रेष्ठको प्रत्यक्ष संलग्नतामा मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२४ मिति २०४९/०७/२५ बाट का. जि. नगर२३ क्ष कि. नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ४१, ४४, ५१, ५३, ५४, ५५, ५६, ५७, ५८, ५९, ६०, ६१, ६२, ७२, ७४, ७५, ७९ र ८९ का कित्ता संख्या २६ को जम्मा क्षेत्रफल२६-६-१-०रोपनी जग्गा सुवर्ण शम्शेरका हकवालाहरू सुनिती राणा, शैलजा राणा, रुक्म शम्शेर समेतको नाममा ना.सा.,दाखिल खारेज, दर्ता गर्ने गरी निर्णय गरेको।

(ख) मालपोत कार्यालय, काठमाडौं, डिल्ली बजारको मि.नं. १०२५ मिति २०४९/०७/२५ को निर्णय:

साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ भिड्ने ललिता निवास क्याम्प भित्रको तत्कालीन श्री५ कोसरकारको नाममा श्रेस्ता पूर्जा भएको २९९-९-२-०रोपनी जग्गामध्ये बाट तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा, मालपोत अधिकृत सुरेन्द्रमान कपाली, नायव सुब्बा जगत प्रसाद पुडासैनी र खरिदार युक्त प्रसाद श्रेष्ठको प्रत्यक्ष संलग्नतामा मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२५ मिति२०४९/०७/२५ मा का.जि. नगर२३हकि.नं. ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, २६, २७, ११रनगर२३क्षकि.नं. १८, २०, २१, २२, २३, २४ गरी कित्ता संख्या २७ को जम्मा क्षेत्रफल ४९-०-३-० रोपनी जग्गा सुवर्ण शम्शेरका हकवालाहरू शैलजा राणा, हेमन शम्शेर र हाटक शम्शेरको संयुक्त नाममा ना.सा., दाखिल खारेज, दर्ता गर्ने गरी निर्णय गरेको।

(ग) मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२४ मिति २०४९/०९/२३ को निर्णय:

साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ भिड्ने ललिता निवास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकारको नाममा श्रेस्ता पूर्जा भएको २९९-९-२-० रोपनी जग्गामध्येबाट तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा, मालपोत अधिकृत सुरेन्द्रमान कपाली, नायव सुब्बा जगत प्रसाद पुडासैनी र खरिदार युक्त प्रसाद श्रेष्ठको प्रत्यक्ष संलग्नतामा मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि. नं. १०२४मिति२०४९/०९/२३ मा का.जि. नगर२३क्षकि. नं. ३०,

३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२ र ८३ का कित्ता संख्या १९ को जम्मा क्षेत्रफल२८-१५-१-० रोपनी जग्गा सुवर्ण शम्शेरका हकवालाहरू रुक्म शम्शेर, शैलजा राणा र सुनिती राणा समेतको संयुक्त नाममा ना.सा., दाखिल खारेज, दर्ता गर्ने गरी निर्णय गरेको देखिएको मा तत्कालीन मालपोत विभागको च.नं. ३९२४ मिति २०४९/०९/२३ को पत्रबाट उक्त जग्गा व्यक्ति विशेषको नाममा दाखिल खारेज नामसारी गर्नको लागि विभागको मिति२०४९/०९/२० को निर्णयानुसार सहमति प्रदान गरेको भनी तत्कालीन महानिर्देशक मुकुन्द प्रसाद आचार्य र शाखा अधिकृत धर्म प्रसाद गौतमको प्रत्यक्ष संलग्नतमा सहमति प्रदान गरेको देखिएको।

(घ) मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२५ मिति २०४९/०९/२३ को निर्णय:

साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ भिड्ने ललिता निवास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकारको नाममा श्रेस्ता पूर्जा भएको२९९-९-२-०रोपनी जग्गा मध्येबाट मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि. नं. १०२५ मिति२०४९/०९/२३ मा का.जि. नगर२३क्षकि. नं. २५, २६, २७२९ का कित्ता संख्या ४ को जम्मा क्षेत्रफल ७-१४-०-० रोपनी जग्गा सुवर्ण शम्शेरका हकवालाहरू शैलजा राणा, हेमन शम्शेर र हाटक शम्शेरको संयुक्त नाममा ना.सा., दाखिल खारेज, दर्ता गर्ने गरी निर्णय गरेको देखिएको मा तत्कालीन मालपोत विभागको च.नं. ३९२४ मिति२०४९/०९/२३ को पत्रबाट उक्त जग्गा व्यक्ति विशेषको नाममा दाखिल खारेज नामसारी गर्नको लागि विभागको मिति२०४९/०९/२०को निर्णयानुसार भनी तत्कालीन महानिर्देशक मुकुन्द प्रसाद आचार्य र शाखा अधिकृतधर्म प्रसाद गौतमको प्रत्यक्ष संलग्नतामा सहमति प्रदान गरेको देखिएको।

(ङ) सरकारी जग्गा आफ्नो र परिवारका सदस्यको नाममा बकस लिएको:

ललिता निवास क्याम्पभित्रको ११२-४-१-० रोपनी सरकारी जग्गा रुक्म शम्शेर जबरा समेतका सुवर्ण शम्शेरका हकदारलाई मालपोत कार्यालय, डिल्लीबजार र भूमिसुधार तथा व्यवस्थापन विभागका कर्मचारी, पदाधिकारीहरूको मिलेमतोमा फिर्ता दिने भनी मिति २०४९/०७/२५र मिति २०४९/०९/२३मा निर्णय गरीसकेपछि त्यसको लगतै जग्गा फिर्ता दिने निर्णय प्रक्रियामा संलग्न मालपोत कार्यालय, डिल्लीबजारका कर्मचारीहरू प्रमुख मालपोत अधिकृत कलाधर देउजा, मालपोत अधिकृत सुरेन्द्र कपाली, नायब सुब्बा जगत प्रसाद पुडासैनी र खरिदार युक्त प्रसाद श्रेष्ठले ललिता निवास क्याम्पभित्र राणाहरूलाई फिर्ता दिएको जग्गामध्येबाट हालैदेखिको बकसपत्रको लिखत पारित गरी-गराई आफ्नै परिवारका सदस्य तथा नजिकैका नातेदारको नाममा जग्गा लिएको देखिन्छ। त्यस्तैगरी जग्गा फिर्ताको लागि सहमति दिने कार्यमा संलग्न विभागका महानिर्देशक मुकुन्द प्रसाद आचार्य र शाखा अधिकृत धर्म प्रसाद गौतम समेतका आफन्तका नाममा सोही मध्येको जग्गा हालैदेखिको बकसपत्रको लिखत मार्फत प्राप्त गरेको देखिन्छ।

मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मिति २०६०/०९/१५ को हालसाविक सम्बन्धी निर्णय:

पुनः नापीमा तत्कालीन श्री५को सरकार समरजंग कम्पनीको नाममा नापनक्सा भई फिल्डबुक समेत कायम भएका ललिता निवास क्याम्प, बालुवाटार भित्रका काठमाडौं नगर २३ (क्ष) कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४, ५१, ५३, ५९, ७९, नगर २३(ह) कि.नं. ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, २६, २७, ११, २३(क्ष) कि.नं. १८, २०, २१, २२, २३, २४, ३०, ३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ८१, ८२, ८३ समेतका ११२ रोपनी भन्दा बढी सरकारी जग्गा मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारबाट मिति २०६०/०९/१५ मा तत्कालीन प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरे, मालपोत अधिकृत हुपेन्द्र मणि के.सी., नायव सुब्बा टिका बहादुर बि.सी. र खरिदार जीवनाथ पोखरेलको प्रत्यक्ष संलग्नतामा सुवर्ण शम्शेरका हकदारहरू सुनिती

राणा, शैलजा राणा, हाटक शम्शेर, हेमन शम्शेर र रुक्म शम्शेर समेतका व्यक्तिहरूका नाममा हालसाविक गरी जग्गाधनी प्रमाण पूर्जा दिएको देखिएकोमा तत्कालीन श्री ५ को सरकार समजंग कम्पनीको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम भएको जग्गा व्यक्ति विशेषको नाममा हालसाविक गरीदिनको लागि भूमिसुधार तथा व्यवस्थापन विभागबाट मिति २०५९/०६/२४ मा सहमति दिने निर्णय गरेको देखिएकोमा उक्त निर्णय प्रक्रियामा तत्कालीन महानिर्देशक रुद्र कुमार श्रेष्ठ, निर्देशक पुष्पराज उपाध्याय, शाखा अधिकृत इन्द्र प्रसाद ढुंगाना र नायव सुब्बा जगन्नाथ पनेरुको संलग्नता रहेकोमा नायब सुब्बा जगन्नाथ पनेरुले कार्यालयबाट प्राप्त निवेदन मात्र पेश गरी आफ्नो स्पष्ट राय दिएको नपाईएता पनि त्यसपश्चातपुन: विभागबाट मिति२०६०/०४/२६ मा महानिर्देशक रुद्र कुमार श्रेष्ठ,निर्देशक पुष्पराज उपाध्यायले मिति २०५९/०६/२४ कै निर्देशन बमोजिम गर्नू भनी मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंलाई लेखी पठाउने निर्णय गरेको।

ललिता निबास क्याम्पभित्रको नेपाल सरकार, समरजंग कम्पनीको नाममा कायम रहेको जग्गाधनी दर्ता श्रेस्ता कट्टा गरी आफू र आफूहरू समेत सञ्चालक रहेको कम्पनीको समेतको नाममा हालसाविक गर्ने-गराउने, बालुवाटारस्थित विशिष्ट व्यक्तिहरूको निवास परिसर बिस्तारको नाममा उक्त क्षेत्रको सरकारी, सार्वजनिक जग्गा आफू समेतका अनाधिकृत व्यक्ति तथा संस्थाहरूको नाममा कायम गराउने, सरकारले अधिग्रहण गरी प्राप्त गरेको जग्गामा उनाउ गुठी कायम गरी-गराई अनाधिकृत व्यक्तिहरूलाई सरकारी, सार्वजनिक जग्गामा मोही कायम गर्ने र ललिता निवास क्याम्प क्षेत्रभित्रका सबैजसो कित्ताहरू खरिद गरी कित्ता एकीकरण गरी पुन: आफू समेत सञ्चालक रहेको कम्पनी, आफ्ना परिवारका सदस्यहरू र आफ्नो समेत नाममा ल्याई सरकारी सार्वजनिक जग्गा मस्यौट गर्ने कार्यमा योजनाकारको भूमिका निर्वाह गरी प्रत्यक्ष लाभ समेत लिएको देखिएको।

विस्तार गर्ने कार्य गुरुयोजना वमोजिम गरिएको भनिए तापनि भवन निर्माण सम्भार डिभिजन कार्यालयको सुरु टिप्पणीको "मन्त्रिपरिषद्बाट निर्णय हुनुपर्ने व्यहोरा" को बुँदा नं. १ मा नेपाल सरकार समरजंग कम्पनीको नाममा मोही जनिएको ललिता निवास क्याम्प क्षेत्रभित्रको जम्मा क्षेत्रफल यकिन गरी सोमा मोही भाग कट्टा गरी बाँकी रहने क्षेत्रफल एवम् साविक बाटो तथा राजकूलोको क्षेत्रफल यकिन गरी कूल क्षेत्रफल १४-१०-३-२.५ रोपनी किटान भएपश्चात् मात्र विस्तारित क्षेत्रको क्षेत्रफल १४-१०-३-२.५रोपनी हुने भनी किटान गरेको देखिएबाट उक्त विस्तार गुरुयोजनाबाट निर्देशित नभई ललिता निवास क्याम्पभित्र नेपाल सरकारका नाममा दर्ता श्रेस्ता कायम भई बिभिन्न व्यक्तिहरूलाई मोही रहेको भनिएको जग्गाहरूमा ती व्यक्तिहरूको मोहीयानी हक प्राप्त हुने कानूनी आधार नरहेकोले सरकारी, सार्वजनिक जग्गामा मोहीयानी हक प्राप्त नहुने प्रचलित कानूनी प्रावधानलाई छल्नको लागि घुमाउरो बाटोबाट अनाधिकृत व्यक्तिहरूलाई सरकारी जग्गामा स्वामित्व स्थापित गराउने निहित उद्देश्यले प्रेरित भई विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्ने नाममा नेपाल सरकार मन्त्रिपरिषद्बाट निर्णय गराउनका लागि सरकारी, सार्वजनिक जग्गामा मोहीको अस्तित्व स्वीकार गरी ड्राइभर भाइचा जस्ता कृत्रिम व्यक्तिहरूलाई योजनाबद्ध ढंगबाट मोही खडा गरी-गराई गलत लिखत तयार गरी गराई सरकारी, सार्वजनिक जग्गा व्यक्तिविशेषको नाममा कायम गराउने दुषित मनशायबाट अभिप्रेरित भई आफ्नो निकायको क्षेत्राधिकार समेत नाघी प्रस्ताव तयार गरी नेपाल सरकार मन्त्रिपरिषद्मा पेश गर्नका स्वीकृति प्रदान गरेको।

सरकारले जुनसुकै प्रयोजनका लागि जग्गा अधिग्रहण गर्दा जग्गा प्राप्ति ऐन, २०३४ बमोजिम गर्नुपर्ने प्रचलित कानूनी व्यवस्था विस्तार गर्ने क्रममा पालना नहुनु, जग्गा सम्बन्धी अभिलेख माग गरी विवरण तयार गर्दा र मन्त्रिपरिष्द्मा पेश गर्ने प्रस्ताव तयार गर्ने लगायतका जग्गा प्रशासनसँग सम्बन्धित कार्यमा भूमिसुधार तथा व्यवस्था मन्त्रालयलाई संलग्न नगराइनु, भूमिसुधार कार्यालय, काठमाडौंको च.नं. ५१४० मिति २०६६/१०/१५ को विवरण

पठाएको सम्बन्धमा प्रेषित पत्रमा १४ जना मोही तथा तिनका हकदारहरूले निवेदन पेश गरी कारबाही चलिरहेको भनी स्पष्ट उल्लेख गरिएको देखिएको अवस्थामा समेत सोको अनदेखा गरी विवरणमा उल्लेखित व्यक्तिहरूलाई मोहीको हैसियतले प्रस्तावमा नाम समावेश गरी तिनलाई समेत जग्गा सट्टाभर्ना दिने व्यवस्था गर्नु, सम्बन्धित मालपोत कार्यालय तथा भूमिसुधार कार्यालयबाट पठाएको विवरणमा पारस्पारिक सामञ्जस्यता नमिलेको अवस्थामा सो विषयमा स्पष्ट नभई मनोगत ढंगले मोहीको विवरण तयार गर्नु, मालपोत कार्यालय तथा भूमिसुधार कार्यालयबाट पठाएको विवरणमा मोही उल्लेख भएको नदेखिएको अवस्थामा राजकुलो एवं विशिष्ट व्यक्तिहरूको निवास क्षेत्र रहेको जग्गामा समेत तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालय र सो अन्तर्गतका निकायबाट तयार गरिएको विवरणमा व्यक्ति विषेशलाई मोही भनी गलत लिखत गर्नु जस्ता कार्यहरू गरेको देखिएबाट उल्लेखित प्रस्ताव विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्नको लागि आवश्यक पर्ने जग्गाको प्रबन्ध गर्नभन्दा सरकारी, सार्वजनिक जग्गामा घुमाउरो बाटोबाट मोहीयानी हक दिलाउने तर्फ केन्द्रित भएको प्रष्ट हुन आएको।

त्यसक्रममा सम्माननीय प्रधान न्यायाधीश निवास तथा सभाध्यक्षको निवासको कम्पाउण्ड फोडी सो भित्रको जग्गा समेत प्रयोग गरी मूल सडकसम्म बाटोको पहुँच पुर्याएको देखिएकोमा उक्त बाटो विशिष्ट व्यक्तिको निवास क्षेत्रको सुरक्षाको दृष्टिकोणले खोलिएको भए बाटोको बाहिरी किनारामा पर्खाल, कम्पाउण्ड लगाई बाटोलाई विस्तार क्षेत्रभित्र पार्नुपर्नेमा उल्टै विस्तार क्षेत्र र उक्त बाटोको बीचमा ठुलो पर्खाल लगाई छुट्याइएको देखिएबाट समेत उक्त कार्य सरकारी सार्वजनिक जग्गाको संरक्षण तथा सुरक्षाको दृष्टिकोणले नभई व्यक्तिविषेशलाई अनुचित फाइदा पुर्याउने गरी विस्तारित निवास क्षेत्रलाई निजी घर जग्गाहरूसँग छुट्याउनको लागि ८ मिटर चौडाई भएको बाटो खोल्ने भनी तयार गरिएको प्रस्ताव विशिष्ट व्यक्तिको निवास क्षेत्रको सुरक्षाको दृष्टिकोणले भन्दा पनि विस्तारित क्षेत्रसँग जोडिएको निजी प्लटिङ्ग भित्र रहेका घर घडेरीमा बाटोको पहुँच पुर्याउने निहित उद्देश्यबाट प्रेरित भई तयार भएको देखिन्छ।

तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालयले तयार गरी पेश गरेको प्रस्ताव बमोजिम नेपाल सरकार मन्त्रिपरिषद्बाट मिति २०६६/१२/२९ मा भएको निर्णयमा विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्ने क्रममा मोहीको हिस्सामा पर्ने जग्गा र परिसर विस्तार गर्दा विस्तारित क्षेत्रमा पर्ने जग्गाको सोधभर्ना र सट्टापट्टा गर्न भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट आवश्यक व्यवस्था मिलाउने भनी निर्णय भएपश्चात् उक्त निर्णय कार्यान्वयन गर्ने गराउने क्रममा भूमिसुधार तथा व्यवस्था मन्त्रालयले तयार गरी पेश गरेको प्रस्तावमा मन्त्रिपरिषद्बाट मिति २०६७/०१/३१ मा निर्णय भएको देखिन्छ । मन्त्रिपरिषद्मा पेश गर्नको लागि तयार गरी स्विकृत भएको भूमिसुधार तथा व्यवस्था मन्त्रालयको प्रस्तावमा भौतिक योजना तथा निर्माण मन्त्रालयले तयार गरेको प्रस्ताव बमोजिम नै नेपाल सरकार जग्गाधनी भएका सरकारी र सार्वजनिक जग्गामा व्यक्ति विशेषलाई मोहीको हैसियत देखिने गरी प्रचलित कानूनी प्रावधानको वर्खिलाप हुने गरी प्रस्ताव तयार भएको देखिन्छ । साथै, मोही सम्बन्धी कार्य गर्ने सम्बन्धित भूमिसुधार कार्यालयलाई निर्णय कार्यान्वयनका क्रममा नियतवश नै संलग्न नगराई जग्गाधनी र मोहीको हक, स्वामित्व, जग्गाको सट्टाभर्ना, प्लट मिलान जस्ता विषयहरू मालपोत कार्यालय काठमाडौं, डिल्लीबजारले गर्ने भनी कार्यालय नै किटान गरी प्रस्ताव तयार गरी नेपाल सरकार मन्त्रिपरिषद्बाट निर्णय गराएको देखिएबाट सरकारी सार्वजनिक जग्गामा अनाधिकृत व्यक्तिहरूलाई मोही खडा गराउने तथा सरकारी सार्वजनिक जग्गा मस्यौट गर्ने गराउने कार्यमा भूमिसुधार तथा व्यवस्था मन्त्रालय र अन्तर्गतका कर्मचारी, पदाधिकारीहरूको समेत प्रत्यक्ष संलग्नता रहेको पुष्टि हुन आउँछ।

काठमाडौं उपत्यका भित्रका ६ वटा घर कम्पाउण्डहरू एकै पटक एउटै प्रक्रियाद्वारा सरकारले अधिग्रहण गरेको देखिएकोमा माथि उल्लिखित घर दरबारहरू सोही समयदेखि सरकारीकरण भई हालसम्म अनवरतरुपमा सरकारी स्वामित्व र भोगमा रहेको तथ्य निर्विवादित देखिन्छ। यसै अनुसन्धानसँग सम्बन्धित काठमाडौं

बालुवाटारस्थित ललिता निवास क्याम्पभित्रको जग्गा समेत माथि उल्लिखित मिति २०२१।०८।१७ को राजपत्रमा प्रकाशित उक्त सूचनाको छैठौ बुँदामा परेको देखिन्छ।

यसरी हालसम्मको अनुसन्धानको सिलसिलामा संकलित मिसिल संलग्न मिति २०१७।०३।२९ गते भूमि प्रशासन कार्यालयबाट पारित भएको र.नं. १५४७ को हालैदेखिको बकसपत्र, मिति २०२१।०८।१७ को नेपाल गजेटमा प्रकाशित जग्गा अधिग्रहण गर्ने बारेको सूचना, मिति २०२१|०९|०६ को जग्गा क्षतिपूर्ति लिन आउने बारेको सूचना, अंचलाधीशको अफिस, बागमती अंचलको मिति२०२३।०६।०७ गतेको क्षतिपूर्ति लिन आउने बारेको सूचना, मिति २०२५ माघ ८ गते गोरखापत्रमा प्रकाशित बुझ्न बाँकी मुआब्जा रकम भूमि प्रशासन कार्यालयको धरौटी खातामा राखिदिने सूचना, मेजिष्ट्रेट अफिस, काठमाडौंको घरकम्पाउण्ड सरकारीकरण भएको भन्ने व्यहोराको मिति२०२२।०२।२४ को सूचना, कनक शम्शेरले साविक नगर ४ कि.नं. २५ क्षे.फ. ८-०-०-० रोपनी जग्गा रु. ४५,८८२।६९ मा खरिद गरी आफ्नो नाममा श्रेस्ता कायम गरीपाउँ भन्ने समेत व्यहोराको निवेदन, बागमती अंचलाधीश कार्यालयको श्री ५ को सरकारको नाममा लालपूर्जा बनाइदिने भन्ने समेत व्यहोराको पत्र, प्रतिवादीहरूको बयान, अनुसन्धानको क्रममा बुझिएका व्यक्तिहरूको कागजको व्यहोरा साथै सम्बन्धित निकायहरूबाट प्राप्त विवरण सहितका प्रमाण कागजातहरूको अध्ययन विश्लेषण गरी हेर्दा, साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निवास क्याम्प भित्रका क्षेत्रफल २९९-९-२-० रोपनी जग्गामध्येको क्षेत्रफल २८४-१४-३-०रोपनी जग्गा तत्कालीन श्री ५ को सरकारले प्रचलित नेपाल कानून बमोजिमका सम्पूर्ण कानूनी प्रक्रिया पूरा गरी सम्बन्धित जग्गाधनीहरूलाई आफ्नो दाबी प्रस्तुत गर्नका लागि पर्याप्त सुनुवाईको मौका समेत दिई कानून बमोजिमको क्षतिपूर्ति निर्धारण गरी सो क्षतिपूर्ति लिन आउनू भनी पटक-पटक सार्वजनिक सूचना जारी गरी सरकारी प्रयोजनका लागि जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरी लिएको र त्यसमध्येको ६० रोपनी जग्गा मिति २०२२/११/२१ मा नेपाल राष्ट्र बैंकलाई प्रदान गरी, कनक शमसेर, पविता देवी, कुमार बस्नेत र दामोदर प्रसाद उपाध्यायलाई जग्गा दिए पश्चात बाँकी क्षेत्रफल २१२-१५-२.५ रोपनी जग्गा श्री समरजंग कम्पनीको रेखदेखमा रहने गरी निर्णय भएको र समरजंग कम्पनीले बिभिन्न ४७ जना किसानलाई सरकारले चाहेको बखत फिर्ता गर्ने र जग्गाको आयस्ता आफूलाई बुझाउने शर्तमा कमाउन दिएको देखिएकोमा समरजंग कम्पनीको रेखदेखमा रहेको उल्लेखित जग्गाहरूमध्ये तत्कालीन श्री ५ को सरकारको मिति २०२२।०४।१० को निर्णयबाट सरकारले खरिद गरेकै मूल्य तिर्नेगरी मे.क. कनक शम्शेरलाई ८ रोपनी जग्गाको मोल रू.४५,८८२।६९ मा बिक्री गरेको, त्यसैमध्येको ४-७-२-० रोपनी जग्गा तत्कालीन सरकारले दामोदर उपाध्याय समेतका व्यक्तिहरूलाई दिनेगरी निर्णय गरेको देखिएकोमा वि.सं. २०२३ सालतिर सुरू नापी हुँदा कायम भएका क्षेत्रीय किताबमा उक्त ललिता निवास क्याम्पभित्रका जग्गाहरूमा श्री ५ को सरकार जग्गाधनी कायम गरी सबैजसो कित्ता जग्गाको कैफियत महलमा यो जग्गा श्री ५ को सरकारको हो, मैले समरजंग कम्पनीलाई आयस्ता बुझाई कमाई आएको छु भन्ने समेतको व्यहोरा उल्लेख भएको त्यसमध्येका केही कित्ता जग्गाहरूमा मिति २०४२/०१/१८ को गुठी संस्थानको पत्रको आधारमा गुठीको नाममा श्रेस्ता कायम गरेको देखिन्छ भने बाँकी कित्ता जग्गाहरूमा श्री ५ को सरकार जग्गाधनी कायम रहिरहेको देखिन्छ।

वि.सं. २०१७ साल पछिको प्रजातन्त्रको पुन:स्थापनाको आन्दोलनमा संलग्न भए बापत राजनीतिक कारणले सरकारबाट हरण भएका जग्गा फिर्ता दिने भन्ने सम्बन्धमा नेपाल सरकार मन्त्रिपरिषद्‌बाट २०४७ सालमा भएका निर्णयहरू, मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२४ मिति २०४९/०७/२५ को निर्णय, मि.नं. १०२५ मिति २०४९/०७/२५ को निर्णय, तत्कालीन श्री ५ को सरकारको मिति २०२२।०४।१० को मे.क. कनक शम्शेरलाई ८ रोपनी जग्गा बिक्री गर्ने सम्बन्धी निर्णय र सोको जानकारी, मालपोत कार्यालय, काठमाडौं,

डिल्लीबजारको मि.नं.१०२४ मिति२०४९/०९/२३ को निर्णय, मि.नं.१०२५ मिति २०४९/०९/२३ को निर्णय समेतका आधार, प्रमाण, कागजातहरू, उल्लेखित निर्णय प्रक्रियामा संलग्न व्यक्तिहरूको बयान व्यहोरा, अनुसन्धानको क्रममा बुझिएका व्यक्तिहरूको कागज, सम्बन्धित निकायहरूबाट प्राप्त विवरण सहितका कागजातहरूको अध्ययन विश्लेषण गरी हेर्दा मालपोत कार्यालय, डिल्लीबजारको मि.नं. १०२४ र मि.नं. १०२५ बाट मिति २०४९/०७/२५ र मिति २०४९/०९/२३ मा ललिता निवास क्याम्प भित्रका तत्कालीन सरकाकारले कानून वमोजिमको सम्पूर्ण प्रक्रिया पूरा गरी कानून वमोजिमको सुनुवाईको मौका र क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी प्राप्त गरेको साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ को लगत भिड्ने क्षे.फ. २८४-१४-३-० रोपनी जग्गाको प्रतिरोपनी रु.५,७३५।३४ का दरले जम्मा हुन आउने रकम रु.१६,३३,९२२।१९ क्षतिपूर्ति समेत दिई प्राप्त गरी मिति २०२२/०२/२४ देखि सरकारीकरण भएका सरकारी जग्गाहरू सुवर्ण शम्शेरका हकदारहरू रुक्म शम्शेर जबरा समेतका ५ जनालाई जग्गाधनी र अन्य ४७ जना अनाधिकृत र कृत्रिम व्यक्तिहरूलाई मोही खडा गरी-गराई जग्गा प्राप्ति ऐन, २०१८, भूमि सम्बन्धी ऐन, २०२१ तथा मालपोत ऐनमा व्यवस्थित सान्दर्भिक कानूनी प्रावधानहरूको बर्खिलाप हुनेगरी व्यक्ति विशेषको नाममा फिर्ता गरे-गराएको देखिन्छ।

सरकारी जग्गा व्यक्ति विशेषलाई फिर्ता दिने निर्णय गरीसकेपछि त्यसको लगतै जग्गा फिर्ता दिने निर्णय प्रक्रियामा संलग्न मालपोत कार्यालय, डिल्लीबजारका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा मालपोत अधिकृत सुरेन्द्र मान कपाली, नायब सुब्बा जगत प्रसाद पुडासैनी र खरिदार युक्त प्रसाद श्रेष्ठ तथा भूमिसुधार तथा व्यवस्थापन विभागका तत्कालीन कर्मचारी, पदाधिकारीहरू महानिर्देशक मुकुन्द प्रसाद आचार्य, शाखा अधिकृतद्वय धर्म प्रसाद गौतम र प्रेम बहादुर खापुङका परिवारका सदस्य र नजिकैका नातेदारहरू एवं विद्या पौडेल गौतम, उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं, रामकल्याण अधिकारी र रामनाथ घिमिरेले गैह्रकानूनीरुपमा फिर्ता दिएको जग्गामध्येबाट जग्गा फिर्ता गरीलिने कार्यमा संलग्न सुनिती राणा, शैलजा राणा समेतका व्यक्तिहरूको नामबाट हालैदेखिको बकसपत्रको लिखत पारित गरी-गराई कमिसनको रुपमा जग्गा बकस गरी लिएको देखिन्छ।

त्यसरी जग्गा बकस गरीलिनेहरू मध्ये निर्मला देवी श्रेष्ठ, विद्या पौडेल गौतम, शशिकला सुब्बा, उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं र मोहन प्रसाद भट्टराई समेतका सात जना व्यक्तिहरूले मिति २०५०/०२/२९ मा पारित लिखतबाट जग्गा प्राप्त गरेको देखिन्छ। जसमध्ये निर्मला देवी श्रेष्ठ, मोहन प्रसाद भट्टराई र शशिकला सुब्बा मिति २०४९/०७/२५ र मिति २०४९/०९/२३ मा गैह्रकानूनी रुपमा फिर्ता दिने निर्णय प्रक्रियामा संलग्न कर्मचारीहरू क्रमश: मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन खरिदार युक्त प्रसाद श्रेष्ठ, भूमिसुधार तथा व्यवस्थापन विभागका शाखा अधिकृतद्वय धर्म प्रसाद गौतम र प्रेम बहादुर खापुङका नजिकैका नातेदारहरू रहेको देखिएकोमा सोही मिति २०५०/०२/२९ मा मालपोत कार्यालय डिल्लीबजारबाट खटिई गएको उही डोरमार्फत ती नै जग्गाधनीहरूबाट उही साक्षीहरू (रामनाथ घिमिरे र राम कल्याण अधिकारी समेत) राखी उस्तै प्रकृतिको हालैदेखिको बकसपत्रको लिखतमार्फत उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं र विद्या पौडेल गौतमले जग्गा गैह्रकानूनी फिर्ता भएको मिति २०४९/०९/२३ बाट जम्मा आठ दिनभित्रमा (२०४९/१०/२) मा तयार भएको र मिति २०५०/०२/२९ मा पारित भएको लिखतबाट आफू समेतको नाममा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा प्राप्त गरेको देखिएको।

यसरी, आठ दिनभित्रको अवधिमा उक्त प्रकरणमा संलग्नता र सरोकार नभएका स्वतन्त्र व्यक्तिहरूले जग्गाधनी भनिएका राणा परिवारलाई खुसी बनाई, रिझाई क्षेत्रफल ६-९-०-० रोपनी जग्गा हालैदेखिको बकसपत्र मार्फत प्राप्त गरेको हो भनी विश्वास गर्नसक्ने स्पष्ट आधार र ठोस प्रमाण समेत नदेखिएको तथा निजहरूले छानविन समितिका संयोजक समक्ष गरेको कागजमा समेत आफूहरूले दाता भनिएका राणाहरूबाट ६ रोपनीभन्दा बढी जग्गा बकस पाउनुपर्ने

आधार र कारण खुलाउन नसकी गोलमटोल जवाफ लेखे-लेखाएको देखिएकोले बकसमार्फत जग्गा प्राप्त गर्ने निजहरू उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं र विद्या पौडेल गौतम गैह्रकानूनी रुपमा जग्गा फिर्ता गर्ने कार्यमा प्रत्यक्ष संलग्न कर्मचारीहरूका आफन्त भएको नदेखिए तापनि निजहरू निर्दोष हुन् भनी माथि विवेचित आधार, कारण र मिसिल संलग्न रहेको हालैदेखिको बकसपत्रको लिखत समेतका परिस्थितिजन्य प्रमाणहरूबाट विश्वास गर्नसक्ने अवस्था नदेखिएको।

मालपोत कार्यालय, डिल्लीबजार, नापी कार्यालय, डिल्लीबजार समेतबाट प्राप्त कागजात, अनुसन्धानको क्रममा लिइएको बयान ब्यहोरा समेतबाट पुनः नापीमा तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नाममा नाप नक्सा भई फिल्डबुक कायम भई नेपाल सरकार, समरजंग कम्पनीको नाममा जग्गाधनी दर्ता श्रेस्ता र प्रमाण पूर्जा समेत कायम भएका ललिता निवास क्याम्प, बालुवाटारभित्रका ११२ रोपनी भन्दाबढी सरकारी जग्गाहरू भूमिसुधारतथा व्यवस्थापन विभाग समेतको सहमतिमा मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारबाट मिति २०६०/०९/१५ मा सुवर्ण शम्शेरका हकदारहरू सुनिती राणा, शैलजा राणा, हाटक शम्शेर, हेमन शम्शेर र रुक्म शम्शेर समेतका व्यक्तिहरूका नाममाजग्गा प्रशासन निर्देशिका, २०५८ को प्रावधान विपरित नेपाल सरकारको नामको लगत कट्टा गर्नका लागि नेपाल सरकार, मन्त्रिपरिषद्मा स्वीकृतिको लागि पेश गर्नुपर्नेमा सो नगरी आफ्नो पद र कार्यालयको क्षेत्राधिकार समेत नाघी गैह्रकानूनीरुपमा सरकारी जग्गाको हालसाविक गरी व्यक्ति विशेषलाई जग्गाधनी प्रमाणपूर्जा समेत दिएको।

मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. ११४मिति२०६२/०२/०३को छुट जग्गा दर्ता सम्बन्धी सक्कलै मिसिल, उल्लिखित जग्गा दर्ता प्रक्रियमा संलग्न व्यक्तिहरूको बयान ब्यहोरा समेतबाटकाठमाडौं जिल्ला बालुवाटारस्थित ललिता निवास क्याम्पभित्रको सरकारले अधिग्रहण गरी आफ्नो नाममा कायम गरेको, साविक नगर २३ स कि.नं. १६मध्येकोकि.नं. २५ क्षे.फ. ८-०-०-० रोपनी जग्गा कनक शमसेरलाई बिक्री गरेपछि नेपाल सरकारको नाममा बाँकी रहेको ऐ.ऐ. को कि.नं. २६ क्षे.फ. ०-१२-२-० रोपनीको हाल नगर ४ सिट नं. १०२-१०२४-१५ कि.नं.१११ र ४८ का जग्गाहरू मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. ११४ मिति २०६२/०२/०३ बाट मालपोत ऐन, २०३४ को बर्खिलाप हुनेगरी गैह्रकानूनी रुपमा सुनिती राणाको नाममा हालसाविक, नामसारी र छुट जग्गादर्ता गर्ने निर्णय गरी जग्गाधनी प्रमाणपूर्जा दिएको देखिएको।

मिति २०६६/१२/२९, मिति २०६७/०१/३१ र मिति २०६७/०४/२८ गतेका नेपाल सरकारका निर्णयहरू, सो सम्बन्धमा सम्बन्धित मन्त्रालयबाट तयार गरिएको प्रस्तावहरू तथा पक्राउ प्रतिवादीहरुको बयान व्यहोरा समेतको अध्ययन, विश्लेषण गरी हेर्दा, काठमाडौं बालुवाटारस्थित विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्ने सम्बन्धमा तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालयबाट प्रस्ताव तयार गरी नेपाल सरकार मन्त्रिपरिषद्बाट मिति २०६६/१२/२९मा बालुवाटार स्थित प्रधानमन्त्री निवासको दक्षिणतर्फ परिसर विस्तार गर्ने कार्य गुरुयोजना वमोजिम गरिएको भनिए तापनि भवन निर्माण सम्भार डिभिजन कार्यालयको सुरु टिप्पणीको "मन्त्रिपरिषद्बाट निर्णय हुनुपर्ने व्यहोरा" को बुँदा नं. १ मा नेपाल सरकार समरजंग कम्पनीको नाममा मोही जनिएको ललिता निवास क्याम्प क्षेत्रभित्रको जम्मा क्षेत्रफल यकिन गरी सोमा मोही भाग कट्टा गरी बाँकी रहने क्षेत्रफल एवम् साविक बाटो तथा राजकूलोको क्षेत्रफल यकिन गरी कूल क्षेत्रफल १४-१०-३-२.५ रोपनी किटान भएपश्चात् मात्र विस्तारित क्षेत्रको क्षेत्रफल १४-१०-३-२.५रोपनी हुने भनी किटान गरेको देखिएबाट उक्त विस्तार गुरुयोजनाबाट निर्देशित नभई ललिता निवास क्याम्पभित्र नेपाल सरकारका नाममा दर्ता श्रेस्ता कायम भई बिभिन्न व्यक्तिहरूलाई मोही रहेको भनिएको जग्गाहरूमा ती व्यक्तिहरूको मोहीयानी हक प्राप्त हुने कानूनी आधार नरहेकोले सरकारी, सार्वजनिक जग्गामा मोहीयानी हक प्राप्त नहुने प्रचलित कानूनी प्रावधानलाई छल्नको लागि घुमाउरो बाटोबाट अनाधिकृत व्यक्तिहरूलाई सरकारी जग्गामा स्वामित्व

स्थापित गराउने निहित उद्देश्यले प्रेरित भई विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्ने नाममा नेपाल सरकार मन्त्रिपरिषद्बाट निर्णय गराउनका लागि सरकारी, सार्वजनिक जग्गामा मोहीको अस्तित्व स्वीकार गरी ड्राइभर भाइचा समेत ५८ जना कृत्रिम व्यक्तिहरूलाई मोही खडा गरी-गराई गलत लिखत तयार गरी गराई सरकारी, सार्वजनिक जग्गा व्यक्तिविशेषको नाममा कायम गराउने दुषित मनशायबाट अभिप्रेरित भई आफ्नो निकायको क्षेत्राधिकार समेत नाघी प्रस्ताव तयार गरी नेपाल सरकार मन्त्रिपरिषद्मा पेश गर्नका स्वीकृति प्रदान गरेको समेत देखिन्छ ।

सरकारले जुनसुकै प्रयोजनका लागि जग्गा प्राप्ति/अधिग्रहण गर्दा जग्गा प्राप्ति ऐन, २०३४ बमोजिम गर्नुपर्ने प्रचलित कानूनी व्यवस्था भएकोमा विशिष्ट व्यक्तिहरूको बालुवाटारस्थित निवास परिसर विस्तार गर्ने क्रममा उक्त कानूनी प्रावधानको पालना नहुनु, जग्गा सम्बन्धी अभिलेख माग गरी विवरण तयार गर्दा र मन्त्रिपरिषद्मा पेश गर्ने प्रस्ताव तयार गर्ने लगायतका जग्गा प्रशासनसँग सम्बन्धित कार्यमा भूमिसुधार तथा व्यवस्था मन्त्रालयलाई संलग्न नगराइनु, भूमिसुधार कार्यालय, काठमाडौंको च.नं. ५१४० मिति २०६६/१०/१५ को विवरण पठाएको सम्बन्धमा प्रेषित पत्रमा १४ जना मोही तथा तिनका हकदारहरूले निवेदन पेश गरी कारबाही चलिरहेको भनी स्पष्ट उल्लेख गरिएको देखिएको अवस्थामा समेत सोको अनदेखा गरी विवरणमा उल्लेखित व्यक्तिहरूलाई मोहीको हैसियतले प्रस्तावमा नाम समावेश गरी तिनलाई समेत जग्गा सट्टाभर्ना दिने व्यवस्था गर्नु, सम्बन्धित मालपोत कार्यालय तथा भूमिसुधार कार्यालयबाट पठाएको विवरणमा पारस्पारिक सामञ्जस्यता नमिलेको अवस्थामा सो विषयमा स्पष्ट नभई मनोगत ढंगले मोहीको विवरण तयार गर्नु, मालपोत कार्यालय तथा भूमिसुधार कार्यालयबाट पठाएको विवरणमा मोही उल्लेख भएको नदेखिएको अवस्थामा राजकुलो एवं विशिष्ट व्यक्तिहरूको निवास क्षेत्र रहेको जग्गामा समेत तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालय र सो अन्तर्गतका निकायबाट तयार गरिएको विवरणमा व्यक्तिविषेशलाई मोही भनी गलत लिखत गर्नु जस्ता कार्यहरू गरेको देखिएबाट उल्लेखित प्रस्ताव विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्नको लागि आवश्यक पर्ने जग्गाको प्रबन्ध गर्नभन्दा सरकारी, सार्वजनिक जग्गामा घुमाउरो बाटोबाट मोहीयानी हक दिलाउनेतर्फ केन्द्रित भएको स्पष्ट देखिएको ।

त्यस क्रममा प्रधान न्यायाधीश निवास तथा सभाध्यक्षको निवासको कम्पाउण्ड फोडी सोभित्रको जग्गा समेत प्रयोग गरी मूल सडकसम्म बाटोको पहुँच पुर्याएको देखिएकोमा उक्त बाटो विशिष्ट व्यक्तिको निवास क्षेत्रको सुरक्षाको दृष्टिकोणले खोलिएको भए बाटोको बाहिरी किनारामा पर्खाल, कम्पाउण्ड लगाई बाटोलाई विस्तार क्षेत्रभित्र पार्नु पर्नेमा उल्टै विस्तार क्षेत्र र उक्त बाटोको बीचमा ठुलो पर्खाल लगाई छुट्याइएको देखिएबाट समेत उक्त कार्य सरकारी सार्वजनिक जग्गाको संरक्षण तथा सुरक्षाको दृष्टिकोणले नभई व्यक्ति विषेशलाई अनुचित फाइदा पुर्याउने गरी विस्तारित निवास क्षेत्रलाई निजी घर जग्गाहरूसँग छुट्याउनको लागि बीचमा ८ मिटर चौडाई भएको बाटो खोल्ने भनी तयार गरिएको प्रस्ताव विशिष्ट व्यक्तिको निवास क्षेत्रको सुरक्षाको दृष्टिकोणले भन्दा पनि विस्तारित क्षेत्रसँग जोडिएको निजी प्लटिङ्ग भित्र रहेका घर घडेरीमा बाटोको पहुँच पुर्याउने निहित उद्देश्यबाट प्रेरित भई तयार भएको देखिएको ।

तत्कालीन भौतिक योजना तथा निर्माण मन्त्रालयले तयार गरी पेश गरेको प्रस्ताव बमोजिम नेपाल सरकार मन्त्रिपरिषद्बाट मिति २०६६/१२/२९ मा भएको निर्णयमा विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्ने क्रममा मोहीको हिस्सामा पर्ने जग्गा र परिसर विस्तार गर्दा विस्तारित क्षेत्रमा पर्ने जग्गाको सोधभर्ना र सट्टापट्टा गर्न भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट आवश्यक व्यवस्था मिलाउने भनी निर्णय भएपश्चात् उक्त निर्णय कार्यान्वयन गर्ने गराउने क्रममा भूमिसुधार तथा व्यवस्था मन्त्रालयले तयार गरी पेश गरेको प्रस्तावमा मन्त्रिपरिषद्बाट मिति २०६७/०१/३१ मा निर्णय भएको । मन्त्रिपरिषद्मा पेश गर्नको लागि तयार गरी स्विकृत भएको भूमिसुधार तथा व्यवस्था मन्त्रालयको प्रस्तावमा भौतिक योजना तथा निर्माण मन्त्रालयले तयार गरेको प्रस्ताव बमोजिम नै नेपाल सरकार जग्गाधनी भएका

सरकारी र सार्वजनिक जग्गामा व्यक्ति विशेषलाई मोहीको हैसियत दिने गरी प्रचलित कानूनी प्रावधानको वर्खिलाप हुने गरी प्रस्ताव तयार भएको देखिन्छ। साथै, मोही सम्बन्धी निर्णय गर्ने सम्बन्धित भूमिसुधार कार्यालयलाई निर्णय कार्यान्वयनका क्रममा नियतवश नै संलग्न नगराई जग्गाधनी र मोहीको हक, स्वामित्व, जग्गाको सट्टाभर्ना, प्लट मिलान जस्ता विषयहरू मालपोत कार्यालय काठमाडौं, डिल्लीबजारले गर्ने भनी कार्यालयनै किटान गरी प्रस्ताव तयार गरी नेपाल सरकार मन्त्रिपरिषद्बाट निर्णय गराएको देखिएबाट सरकारी, सार्वजनिक जग्गामा अनाधिकृत व्यक्तिहरूलाई मोही खडा गराउने तथा सरकारी सार्वजनिक जग्गा मस्यौट गर्ने गराउने कार्यमा भूमिसुधार तथा व्यवस्था मन्त्रालय र अन्तर्गतका कर्मचारी, पदाधिकारीहरूको समेत प्रत्यक्ष संलग्नता रहेको मिसिल संलग्न प्रमाण कागजातहरूबाट देखिन्छ।

नेपाल सरकार मन्त्रिपरिषद्को मिति २०६६/१२/२९र २०६७/०१/३१को निर्णय कार्यान्वयन गर्ने क्रममा उल्लिखित निर्णयहरूमा मानवीय भूलवश त्रुटि हुन गएको भनी भौतिक योजना तथा निर्माण मन्त्रालय र अन्तर्गतका कार्यालयहरूबाट टिप्पणी उठान भई सोही बमोजिम प्रस्ताव तयार गरी नेपाल सरकार मन्त्रिपरिषद्मा पेश गरेको र प्रस्ताव बमोजिम नै मन्त्रिपरिषद्बाट मिति २०६७/०४/२८ मा निर्णय भई उक्त निर्णयको कार्यान्वयन नापी कार्यालय काठमाडौं, डिल्लीबजार र मालपोत कार्यालय काठमाडौं डिल्लीबजारले गरेको देखिन्छ।

यसरी बालुवाटार स्थित विशिष्ट व्यक्तिहरूको निवास विस्तार गर्ने सम्बन्धमा भौतिक योजना निर्माण मन्त्रालयबाट तयार गरेको प्रस्तावमा नेपालसरकार, मन्त्रिपरिषद्बाट बालुवाटार स्थित प्रधानमन्त्री निवासको दक्षिणतर्फ परिसर विस्तारगर्दा विस्तार क्षेत्र बाहिर परेका मोहीको हकमा मोहीले रोजेअनुसार नेपाल सरकार (समरजंग कम्पनी वा राजकूलो वा बाटो) को नामबाट कट्टा गरी आधा जग्गा मोहीको नाममा दाखिल खारेज गर्ने र विस्तार क्षेत्र भित्र परेका मोहीको हकमा विस्तार क्षेत्र बाहिरको नेपालसरकार (समरजंग कम्पनी वा राजकूलोवा बाटो) को नामबाट कट्टागरी आधा जग्गा मोहीको नाममा दाखिल खारेज गर्ने तथा विस्तार क्षेत्र भित्र परेका जग्गाधनीको हकमा विस्तार क्षेत्र बाहिरको नेपाल सरकार (समरजंग कम्पनी वा राजकूलोवा बाटो) को नामबाट कट्टागरी आधा जग्गा मोहीको नाममा र बाँकी आधा जग्गा जग्गाधनीको नाममा दाखिल खारेज गरी दिनेगरी मिति २०६६/१२/२९, मिति २०६७/०१/३१ र मिति २०६७/०४/२८ मा निर्णय भएको देखिएकोमा उल्लेखित प्रस्तावहरू मालपोत ऐन, २०३४, जग्गा प्राप्ति ऐन, २०३४, भूमि सम्बन्धी ऐन, २०२१, जग्गा प्रशासन निर्देशिका, २०५८ समेतको प्रतिकूल हुनेगरी आफ्नो पद र कार्यालयको क्षेत्राधिकार नाघी गैहकानूनी रुपमा तयार गरेको देखिन्छ।

मालपोत कार्यालय, काठमाडौं डिल्लीबजारबाट मिति २०६६/१२/२९, मिति २०६७/०१/३१ र मिति २०६७/०४/२८ का वालुवाटार स्थित विशिष्ट व्यक्तिहरूको निवास विस्तारका सम्बन्धमा नेपाल सरकार, मन्त्रिपरिषद्बाट भएका निर्णयहरूको कार्यान्वयन गर्ने क्रममा उक्त कार्यालयको मिति २०६७/०८/१६, २०६७/०९/१२ र २०६७/१२/१४ का निर्णयहरू मार्फत सरकारी जग्गा बिभिन्न मोही भनिएका व्यक्तिहरूको हकदार एवं विस्तार क्षेत्रमा पर्ने जग्गाका जग्गाधनीहरू लाई उपलब्ध गराएको देखिन्छ।

सिद्धान्ततः सरकारी जग्गामा मोही नहुने भए तापनि नेपाल सरकार मन्त्रिपरिषद्का माथि उल्लिखित निर्णयहरूका आधारमा कायम भएका मोहीहरूले के कति जग्गाहरू प्राप्त गरे भनी विश्लेषण गरी हेर्दा, मोही भनिएका व्यक्तिहरू ड्राइभर भाइचा, कर्ण बहादुर गुरुङ, नारान्चा महर्जन, लक्ष्मी मैयाँ महर्जन र सुवेदार राम बहादुरले मोही भाग बापत पाउनुपर्ने क्षेत्रफलभन्दा अधिक क्षेत्रफल क्रमशः क्षे.फ. ०-०-१-१, ०-१३-३-०, ०-६-१-३, ०-५-०-० र ०-४-०-० रोपनी बढी क्षेत्रफल प्राप्त गरेको देखिन्छ भने पाउनुपर्ने क्षेत्रफल भन्दा कम क्षेत्रफल प्राप्त गर्नेमा मोही भनिएका व्यक्तिहरू मध्ये नाती महर्जन, आशा नाराँ महर्जन, पंच नारायण महर्जन, न्हुच्छे नाराँ महर्जन र हर्क नारायण डंगोलले क्रमशः क्षे.फ. ०-०-३-१, ०-०-३-३, ०-०-१-१, ०-०-०-२ र ०-०-१-१ रोपनी कम क्षेत्रफल प्राप्त गरेको देखिन्छ।

त्यसैगरी विस्तारित क्षेत्रमा परेको कित्ताहरू (८ मिटर चौडा सडकमा पर्ने बाहेकका) को सट्टाभर्ना बापत जग्गा उपलब्ध गराउने क्रममा उमा कुमारी ढकाल्नी र माधवी सुवेदीको संयुक्त नाममा विस्तारित क्षेत्रमा परेको भन्दा क्षे.फ. ०-२-३-१.५ रोपनी जग्गा बढी उपलब्ध गराएको देखिन्छ भने कल्याण गुरुङले सट्टाभर्ना नलिन मञ्जुर भएको संलग्न मिसिलबाट देखिन्छ। मालपोत कार्यालय काठमाडौं, डिल्लीबजारले नेपाल सरकार मन्त्रिपरिषद्का माथि उल्लिखित निर्णयहरू कार्यान्वयन गर्ने क्रममा श्रेस्ता कायम हुन बाँकी रहेका कित्ताहरू, मोहीको नाम थर, विवरण, नाता स्पष्ट नभएका कित्ताहरू समेत व्यक्तिविशेषलाई उपलब्ध गराएको देखिएको।

समग्ररुपमा हेर्दा, मोही भनिएका अधिकांश व्यक्तिहरूले पाउनुपर्ने भन्दा बढी क्षेत्रफल जग्गा प्राप्त गरेको देखिनु, विस्तारित क्षेत्रका जग्गाधनीहरूले सट्टाभर्ना नलिन मञ्जुर गर्नु वा कम क्षेत्रफल प्राप्त हुँदाको अवस्थामा समेत स्वीकार गरेको देखिएबाट समेत विशिष्ट व्यक्तिहरूको निवास परिसर विस्तार गर्ने कार्य घुमाउरो बाटोबाट मोही भनिएका व्यक्तिहरूलाई सरकारी जग्गा उपलब्ध गराउनमा नै केन्द्रित भएको पुष्टी भएको।

यसरी, कानूनत: सरकारी, सार्वजनिक जग्गामा मोही कायम नहुने भए तापनि नेपाल सरकार, समरजंग कम्पनीको नाममा रहेको जग्गाधनी दर्ता श्रेस्ता कट्टा गरी गुठी कायम गर्ने र प्रचलित कानूनको बर्खिलाप मोही समेत कायम गर्ने-गराउने क्रममा मोहीहरूको निवेदन, सर्जमिन मुचुल्का, मोहीहरूसँग बुझ्ने निर्णय भएकोमा मोहीको तर्फबाट वारेस रामकुमार सुवेदीले गरीदिएको कागज, तत्कालिन जग्गाधनी भनिएका सुवर्ण शम्शेर ज.ब.रा.सँग बुझ्ने निर्णय भएकोमा निजको तर्फबाट सुनिती राणा, शैलजा राणा र रुक्म शम्शेर ज.ब.रा.ले गरीदिएको कागज समेतका आधारमा गुठी संस्थान केन्द्रिय कार्यालयबाट ३ रोपनी १२ आनाको उनाउ लगत देखाई नेपाल सरकार, समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको ३३ रोपनीभन्दा बढी जग्गाको सरकारको नामको लगत कट्टा गरी सरकारी अभिलेख प्रमाणमा उक्त क्षेत्रमा कतै अस्तित्वमा नदेखिएको पशुपति टिकिन्छा गुठी कायम गर्न सहमती माग गर्नु र भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट गुठी संस्थानको उक्त मागभन्दा फरक हुने गरी विशिष्ट व्यक्तिहरूको निवास विस्तारको क्रममा गुठी कायम गर्न प्रस्ताव गरीएका मध्येका अन्य जग्गाहरू परिसकेको भनी लगभग ३ रोपनी जग्गा मात्र गुठीको नाममा कायम गर्नको लागि प्रस्ताव तयार गरी नेपाल सरकार, मन्त्रिपरिषद्मा पेश गर्नको लागि स्वीकृति दिएको देखिएबाट गुठी संस्थान, शाखा कार्यालय, काठमाडौंका कर्मचारीहरू, गुठी संस्थान केन्द्रिय कार्यालयका कर्मचारी र पदाधिकारीहरू, भूमिसुधार तथा व्यवस्था मन्त्रालयका कर्मचारी र पदाधिकारीहरू तथा मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंका कर्मचारीहरू समेतको प्रत्यक्ष संलग्नतामा जग्गा प्राप्ति ऐन, २०१८, मालपोत ऐन, २०३४, भूमि सम्बन्धी ऐन, २०२१, गुठी संस्थान ऐन, २०३३ र जग्गा प्रशासन निर्देशिका, २०५८ का सान्दर्भिक कानूनी व्यवस्था समेतको बर्खिलाप हुनेगरी सरकारी सार्वजनिक सम्पत्तिको मस्यौट हुनेगरी बदनियतपूर्वक निर्णय गरे-गराएको देखिएको।

यसरी नेपाल सरकार मन्त्रिपरिषद्बाट मिति २०४७।०२।१४, मिति २०४७/०४/०८ र मिति २०४७/०५/०३ मा वि.सं. २०१७ सालपछि प्रजातन्त्र पुनर्स्थापनाको आन्दोलनमा संलग्न भएबापत सरकारले हरण गरेका जग्गाहरू गृह मन्त्रालयबाट छानबिन गरी तत्कालीन अवस्थामा ७ नं. अनुसूची नभरेको भए सोको मौका समेत दिई भूमि सम्वन्धी ऐन, २०२१ बमोजिम हदबन्दीभित्र पर्ने जग्गा फिर्ता दिने र हदबन्दीभन्दा बढी जग्गाको उचित क्षतिपूर्ति दिने निर्णय गरेकोमा सरकारको उक्त सैद्धान्तिक प्रकृतिको निर्णयलाई अपब्याख्या गरी गृह मन्त्रालयबाट कुनै किसिमको छानबिन भएको समेत नदेखिएको अवस्थामा सुवर्ण शम्शेरको नामबाट जफत भएका जग्गाहरू भनी सुवर्ण शम्शेरले हालैको बकस गरी आफ्ना हकदारलाई वि.सं. २०१७ सालमै हक हस्तान्तरण गरीसकेका र तत्कालीन श्री ५ को सरकारले कानून बमोजिमको प्रक्रिया पूरा गरी अधिग्रहण गरी मिति २०२२/०२/२४ गतेको दिनदेखि सरकारीकरण भई सरकारी भोग र स्वामित्वमा रही सरकारले चाहेको बखत छाड्ने र नेपाल सरकारको पूर्ण स्वामित्वको समरजंग कम्पनीलाई आयस्ता

बुझाउने शर्तमा किसानहरूले कमाई रहेका साविक ललिता निवास क्याम्पभित्रका साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ को लगत भिड्ने क्षेत्रफल २८४-१४-३-० क्षेत्रफलका सरकारी तथा सोही क्षेत्रका राजकूलो र बाटो समेतका सार्वजनिक जग्गाहरू मध्येका १३६ रोपनीभन्दाबढी क्षेत्रफलका बिभिन्न कित्ता सरकारी, सार्वजनिक जग्गाहरूमा प्रचलित कानूनी प्रावधानहरूको बर्खिलाप अनाधिकृत व्यक्तिहरूलाई फिर्ता दिने, कृत्रिम मोही खडा गर्ने, सरकारले अधिग्रहण गरी प्राप्त गरेका साविक लगत र सरकारी अभिलेखमा कुनै पनि गुठीको कुनै खालको अस्तित्व समेत नभएका तत्कालीन श्री ५ सरकारको नाममा कायम रहेका जग्गाहरू उनाउ लगत भिडाई उनाउ गुठीको नाममा कायम गर्ने तथा सरकारले कानून वमोजिम अधिग्रहण गरी प्राप्त गरेका सरकारी र सार्वजनिक जग्गा अनाधिकृत व्यक्ति तथा संस्थाहरूको नाममा कायम गर्ने-गराउने, हुँदै नभएको गुरुयोजना कार्यान्वयन गर्ने भनी काठमाडौं बालुवाटारस्थित विशिष्ट व्यक्तिहरूको निवासको दक्षिणतर्फको परिसर विस्तार गर्ने नाममा नेपाल सरकार, समरजंग कम्पनीको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम रहेका सरकारी र राजकूलो तथा बाटो समेतका सार्वजनिक जग्गामा अनाधिकृत व्यक्तिहरूलाई मोही खडा गराई व्यक्तिविशेषको स्वामित्व स्थापित गर्ने उद्देश्यले सरकारी, सार्वजनिक जग्गा व्यक्तिविशेषको नाममा सट्टाभर्ना दिने प्रयोजनका लागि गलत लिखत तयार गर्ने, सरकारी जग्गा कब्जा गरी व्यक्तिविशेषले गर्न लागेको प्लटिङ्गमा पहुँच पुऱ्याउनका लागि विशिष्ट व्यक्तिको निवास क्षेत्र (प्रधान न्यायाधीश निवास र सभाध्यक्ष निवास) को कम्पाउण्ड समेत फोडी सरकारी जग्गाको दुरुपयोग गरी सरकारी लागतमा मनसायपूर्वक बाटो खोल्ने समेतका बिभिन्न कैफियतयुक्त र गैह्रकानूनी कार्य गर्नको लागि दुषित प्रस्ताव तयार गर्ने, उक्त प्रस्ताव नेपाल सरकार, मन्त्रिपरिषद्मा पेश गर्नको लागि स्वीकृति दिने समेतका निर्णय गरी-गराई सरकारी, सार्वजनिक सम्पत्तिको मस्यौट हुने गरी तत्कालीन भूमिसुधार तथा व्यवस्था मन्त्रालय, भौतिक योजना तथा निर्माण मन्त्रालय र ती अन्तर्गतका कर्मचारी, पदाधिकारीहरू, गुठी संस्थान र सो अन्तर्गतका कर्मचारी, पदाधिकारीहरू समेतको मिलेमतोमा योजनावद्ध तरिकाले आफ्नो पद र सरकारी निकायको दुरुपयोग गरी नेपाल सरकारलाई प्रत्यक्ष हानी र व्यक्तिविशेषलाई गैह्रकानूनी लाभ पुऱ्याउने गरी बदनियतपूर्वक गैह्रकानूनी निर्णयका लागि प्रस्ताव पेश गरे गराएको।

यसबाट ललिता निवास क्याम्प क्षेत्रमा रहेका अधिग्रहण गरी सरकारीकरण गरीएका जग्गाहरूमध्ये सरकारले स्पष्ट भोगचलन नगरेका तर स्वामित्वमा रहेका सम्पूर्ण जग्गाहरू फिर्ता गर्ने नाममा, हालसाविक गर्ने नाममा, छुट जग्गा दर्ताको नाममा, निवास क्षेत्र विस्तार गर्ने नाममा र गुठी कायम गर्ने नाममा बिभिन्न समयमा सुनियोजित ढंगले मासी व्यक्ति विशेषलाई लाभ हुने गरी निर्णयहरू भए गरेको।

मिसिल संलग्न मिति २०१७।०३।२९ गते भूमि प्रशासन कार्यालयबाट पारित भएको र .नं.१५४७ को हालै देखिको बकसपत्र, मिति२०१८ फाल्गुण १९ गते प्रकाशित सुवर्ण शम्शेर समेतको नाउँमा जारी भएको उपस्थितहुन आउने बारेको सूचना, मिति२०२१।०८।१७ को नेपाल गजेट मा प्रकाशित जग्गा अधिग्रहण गर्नेबारेको सूचना, मिति २०२१।०९।०७ को जग्गाको क्षतिपूर्ति दाबी गर्न आउनेबारे को सूचना, मेजिष्ट्रेट अफिस, काठमाडौंको घरकम्पाउण्ड सरकारीकरण भएको भन्ने व्यहोराको मिति२०२२।०२।२४ को सूचना, तत्कालीन श्री५ को सरकारको मिति२०२२।०४।१०को मे.क. कनक शम्शेरलाई ८ रोपनी जग्गा बिक्री गर्ने सम्बन्धी निर्णय र सो को जानकारी, अंचलाधीशको अफिस, बागमती अंचलको मिति२०२३।०६।०७ गतेको क्षतिपूर्ति लिन आउने बारेको सूचना, मिति २०२५ माघ८गते गोरखापत्रमा प्रकाशित बुझ्न बाँकी मुआब्जा रकम भूमि प्रशासन कार्यालयमा धरौटी राखि दिएको सूचना,सुवर्ण शम्शेरका छोरा कनक शम्शेरलाई साविक नगर ४ कि.नं. १६ कित्ताफोड गरी कायम कि.नं.२५क्षे.फ. ८-०-०-० रोपनी जग्गा रु.४५,८८२।६९ मा बिक्री गरीदिने निर्णय र आफूले मोल चुक्ता गरीसकेको हुँदा आफ्नो नाममा श्रेस्ता कायम गरीपाऊँ भन्ने व्यहोराको कनक शम्शेरका वारेस कर्ण बहादुर गुरुङ्गको निवेदन, बागमती अंचलाधीश

कार्यालयको श्री५को सरकारको नाममा लालपूर्जा बनाइदिने भन्ने समेत व्यहोराको पत्र, राजनीतिककारणले हरण भएका जग्गा फिर्ता दिने भन्ने सम्बन्धमा नेपाल सरकार मन्त्रिपरिषद्बाट वि.सं.२०४७ सालमा भएका निर्णयहरु, मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२४ मिति २०४९/०७/२५ को निर्णय, मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२५मिति२०४९/०७/२५ को निर्णय,  मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२४ मिति २०४९/०९/२३ को निर्णय, मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मि.नं. १०२५ मिति २०४९/०९/२३ को निर्णय, मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको मिति२०६०/०९/१५को हाल साविक सम्बन्धी निर्णय, मालपोत कार्यालय, काठमाडौं, डिल्लीबजारको ता.मि.नं. ११४/०६१/६२ मिति २०६२/०२/०३ को छुटजग्गादर्ता सम्बन्धीनिर्णय, मन्त्रिपरिषद्को मिति२०६६/१२/२९ समेतको बालुवाटारस्थित विशिष्ट व्यक्तिहरुको निवासविस्तार गर्ने सम्बन्धको निर्णय, नेपाल सरकार, मन्त्रिपरिषद्को मिति २०६९/०६/१८ को निर्णय र गुठी संस्थानको मिति२०६९/१०/०५ को पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दाखिल खारेज दर्ता गर्ने सम्बन्धी निर्णय समेतका आधार, प्रमाण,  संलग्न व्यक्तिहरुको बयान, अनुसन्धानको क्रममा बुझिएका व्यक्तिको कागज, सम्बन्धित निकायहरुबाट बिभिन्न मितिमा अनुसन्धानको क्रममा प्राप्त विवरण सहितका कागजातहरु समेतको अध्ययन, विश्लेषणगर्दा प्रस्तुत वारदातको अनुसन्धानसँग सम्बन्धित रहेको काठमाडौं बालुवाटारस्थित ललिता निवास क्याम्पभित्रको जग्गा नेपाल सरकारद्वारा जग्गा अधिग्रहण गर्ने बारेको मिति२०२१।०८।१७को राजपत्रमा प्रकाशित सूचनाको छैठौ बुँदामा परेको देखियो। जग्गा प्राप्ति ऐन, २०१८ वमोजिमका चरणबद्ध प्रक्रियाहरू र कानूनवमोजिमको कार्यविधि समेत पूरा गरी मिति२०२१।०८।१७ को नेपाल गजेटमा प्रकाशित जग्गा अधिग्रहण गर्ने बारेको सूचनामा निम्नानुसारका घर जग्गाहरु उल्लेख भएको देखिन्छ।

(१) महाविरभवन, नक्साल, काठमाडौं १५४-४-२-०र सो जग्गामा रहेको सबै घरहरु,

(२) हरिहरभवन, ललितपुर पुल्चोकको २४०-१-२-०जग्गा र जग्गामा रहेका सबै घरहरु,

(३) सीताभवन, नक्साल काठमाडौंको ११९-१२-३-०जग्गा र सोमा रहेका सबै घरहरु,

(४) लक्ष्मीनिवास, महाराजगंजको २५८-१४-०-०जग्गा र सोमा रहेको सबै घरहरु,

(५) बबरमहल कुरियागाउँ २५३-३-३-१ जग्गा मध्ये भरत शम्शेरको भागको घर र जग्गा १२-१२-२-० श्री ५को सरकार लागि सकेकाले (जफत भइ सकेको) सो कट्टागरी बाँकी रोपनी २४०-५-३-१ रोपनी जग्गा र सोमा रहेका सबै घरहरु,

(६) ललितानिवास, बालुवाटारको२९९-९-२-० जग्गा मध्ये सुवर्ण शम्शेर र कंचन शम्शेरको भागमा रहेको १४-११-०-० जग्गा श्री ५ को सरकार लागि सकेकोले (जफत भएको) सो कट्टा गरी बाँकी २८४-१४-३-०जग्गा र सोमा रहेका सबै घरहरु,

उल्लिखित ६ वटा घर कम्पाउण्डहरू एकै पटक एउटै प्रक्रियाद्वारा सरकारले अधिग्रहण गरेको देखिएकोमा माथि उल्लिखित घर दरबारहरू मिति २०२२/०२/२४ देखि सरकारीकरण भई हालसम्म अनवरतरुपमा सरकारी स्वामित्व र भोगमा रहेको तथ्य निर्विवादित देखियो। उक्त राजपत्रमा प्रकाशितमध्येको साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निवास क्याम्पभित्रका २९९-९-२-० रोपनी जग्गामध्येको क्षेत्रफल २८४-१४-३-० रोपनी जग्गा र सो जग्गामा बनेका सबै घर कम्पाउण्ड समेत तत्कालीन श्री ५ को सरकारले तत्कालीन नेपाल कानून बमोजिमका सम्पूर्ण कानूनी प्रक्रिया पूरा गरी सम्बन्धित जग्गाधनीहरुलाई आफ्नो दाबी प्रस्तुत गर्नका लागि पर्याप्त सुनुवाईको मौका समेत दिई कानून बमोजिमको क्षतिपूर्ति निर्धारण गरी सो क्षतिपूर्ति लिन आउनू भनी पटक-पटक सार्वजनिक सूचना जारी गरी सरकारी प्रयोजनका लागि जग्गा प्राप्ति ऐन, २०१८ बमोजिमका कानूनी प्रकिया पूरा गरी अधिग्रहण गरी लिएको देखियो।

सरकारले कानूनवमोजिम प्राप्त गरेको ललिता निवास क्याम्पभित्रको उल्लिखित जग्गामध्येको ६० रोपनी जग्गा मिति २०२२/११/२१ मा राष्ट्र बैंकलाई प्रदान गरेको र बाँकी क्षेत्रफल २१२-१५-२.५ रोपनी जग्गा श्री समरजंग कम्पनीको रेखदेखमा रहने गरी उक्त जग्गाको २०२२ साल देखिको पोत र जग्गाको लगत कट्टा गर्ने भनी मिति २०२५/२/७/२ मा निर्णय भई तत्कालीन भूमि प्रशासन कार्यालय (हालको भूमिसुधार तथा मालपोत कार्यालय) मा रहेको उक्त जग्गाको साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ नं.को लगतमा जनाएको।

सरकारले कानून वमोजिम प्राप्त गरीसकेपछि ललिता निवास क्याम्पभित्र पर्ने जग्गाको साविक हाँडिगाउँ मौजा हा.न. ४५६ को लगत कट्टा गरी ६० रोपनी राष्ट्र बैंकको नाममा कायम गरी बाँकी जग्गा सरकारको पूर्ण स्वामित्वमा रहेको समरजंग कम्पनीको रेखदेखमा आएपछि समरजंग कम्पनीले बिभिन्न किसानहरूलाई सरकारले चाहेको बखत फिर्ता गर्ने र जग्गाको आयस्ता आफूलाई बुझाउने शर्तमा कमाउन दिएको देखिएकोमा समरजंग कम्पनीको रेखदेखमा रहेको उल्लेखित जग्गाहरु मध्ये सरकारले खरिद गरेकै मूल्य तिर्नेगरी तत्कालीन श्री ५ को सरकारको मिति २०२२।०४।१० को निर्णयबाट मेजर कर्नेल कनक शम्शेरलाई ८ रोपनी जग्गाको मोल रू.४५,८८२।६९ मा बिक्री गरेको देखियो। सरकारी स्वामित्व र समरजंग कम्पनीको रेखदेखमा रहेको ललिता निवास क्याम्पभित्रकै जग्गामध्येको ८ रोपनी जग्गा तत्कालीन सरकारले दामोदर उपाध्याय समेतका बिभिन्न व्यक्तिहरुलाई दिने गरी निर्णय गरेको।

वि.सं. २०२३ सालतिर सुरु नापी हुँदा कायम भएका क्षेत्रीय किताबमा उक्त ललिता निवास क्याम्पभित्रका जग्गाहरुमा श्री ५ को सरकार जग्गाधनी कायम गरी कैफियतमा "यो जग्गा श्री ५ को सरकारको हो, मैले समरजंग कम्पनीलाई आयस्ता बुझाई कमाई आएको छु" भन्ने समेतको व्यहोरा उल्लेख भई सोही वमोजिमको जग्गाधनी दर्ता श्रेस्ता कायम भएको देखियो। त्यस मध्येका केही कित्ता जग्गाहरुमा मिति २०४२।०१।१८ को गुठी संस्थानको पत्रको आधारमा गुठीको नाममा श्रेस्ता कायम गरेको देखिएकोमा बाँकी कित्ता जग्गाहरुमा श्री ५ को सरकार जग्गाधनी कायम रहिरहेको देखियो।

यसरी नेपाल सरकार, मन्त्रिपरिषद्बाट मिति२०४७।०२।१४, मिति २०४७/०४/०८ र मिति २०४७/०५/०३ मा वि.सं. २०१७ सालपछि प्रजातन्त्र पुन:स्थापनाको आन्दोलनमा संलग्न भएबापत सरकारले हरण गरेका जग्गाहरु गृह मन्त्रालयबाट छानबिन गरी तत्कालीन अवस्थामा ७ नं. अनुसूची नभरेको भए सोको मौका समेत दिई भूमि सम्वन्धी ऐन, २०२१ बमोजिम हदबन्दीभित्र पर्ने जग्गा फिर्ता दिने र हदबन्दीभन्दा बढी जग्गाको उचित क्षतिपूर्ति दिने निर्णय गरेकोमा सरकारको उक्त सैद्धान्तिक प्रकृतिको निर्णयको पालना नगरी गलत व्याख्या गरी गृह मन्त्रालयबाट कुनै किसिमको छानबिन भएको समेत नदेखिएको अवस्थामा तत्कालीन श्री ५ को सरकारले कानून बमोजिमको सम्पूर्ण प्रक्रियाहरू पूरा गरी सम्बन्धित जग्गाधनीहरूलाई पर्याप्त सुनुवाईको मौका र क्षतिपूर्ति समेत दिई प्राप्त गरी सरकारीकरण भएका सरकारी भोग र स्वामित्वमा रही नेपाल सरकारले चाहेको बखत छाड्ने र समरजंग कम्पनीलाई आयस्ता बुझाउने शर्तमा किसानहरुले कमाई रहेका साविक ललिता निवास क्याम्प भित्रका जग्गाहरुलाई सुवर्ण शम्शेरको नामबाट जफत भएका जग्गाहरु भनी सुवर्ण शम्शेरले हालैको बकस गरी आफ्ना हकदारलाई वि.सं. २०१७ सालमै हक हस्तान्तरण गरीसकेका र त्यसपछि तत्कालीन सरकारले कानून वमोजिम अधिग्रहण गरी मिति २०२२/०२/२४गतेदेखि सरकारी स्वामित्वमा आइसकेका ललिता निवास क्याम्पभित्रका साविक हाँडिगाउँ मौजा हा.नं. ४५६ को लगत भिड्ने बिभिन्न कित्ताका सरकारी जग्गाहरूमध्ये बिभिन्न कित्ता समेतका १३६ रोपनीभन्दा बढी क्षेत्रफलको जग्गाहरु बिभिन्न निकाय, कार्यालयहरूबाट योजनाबद्ध तरिकाले बिभिन्न मितिमा बिभिन्न कैफियतयुक्त गैहकानूनी निर्णयहरू गरी-गराई अनाधिकृत व्यक्ति तथा संस्थाहरुलाई जग्गाधनी बनाउने, सरकारी जग्गामा कृत्रिम मोही खडा गरी अनाधिकृत व्यक्तिहरूलाई मोही कायम गर्ने, साविकदेखिकै राजकूलो र बाटो समेतका सार्वजनिक जग्गामा समेत मोही रहेको भनी

गलत लिखत खडा गरी-गराई अनाधिकृत व्यक्ति तथा संस्थाको नाममा सट्टाभर्ना दिने, सरकारी जग्गाको लगत कट्टा गरी उनाउ गुठीको नाममा कायम गरी अनाधिकृत व्यक्तिहरूलाई मोही कायम गराउने, विशिष्ट व्यक्तिहरूको निवास परिसर फोडी सरकारी, सार्वजनिक जग्गा मासी सरकारी सम्पत्तिको दुरुपयोग गरी व्यक्तिविशेषको प्लटिङ्गमा बाटोको पहुँच पुर्‍याउने गलत मनशायले सरकारी लागतमा सरकारी जग्गा मस्यौट हुने गरी निर्णय गर्नका लागि दुषित प्रस्ताव तयार गर्ने र त्यस्तो प्रस्तावलाई स्वीकृति प्रदान गर्ने समेतका अनाधिकृत कार्यहरु गरे-गराएको देखिएको ।

सरकारी जग्गा व्यक्ति विशेषलाई फिर्ता दिने गरी मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौं समेतबाट मिति २०४९/०७/२५ र मिति २०४९/०९/२३ मा गैह्रकानूनी निर्णय गरीसकेपछि त्यसको लगतै जग्गा फिर्ता दिने निर्णय प्रक्रियामा संलग्न मालपोत कार्यालय, डिल्लीबजारका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा, मालपोत अधिकृत सुरेन्द्र मान कपाली, नायब सुब्बा जगत प्रसाद पुडासैनी र खरिदार युक्त प्रसाद श्रेष्ठ तथा भूमिसुधार तथा व्यवस्थापन विभागका तत्कालीन कर्मचारी, पदाधिकारीहरू महानिर्देशक मुकुन्द प्रसाद आचार्य, शाखा अधिकृतद्वय धर्म प्रसाद गौतम र प्रेम बहादुर खापुङका परिवारका सदस्य र नजिकैका नातेदारहरु एवं विद्या पौडेल गौतम, उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं, रामकल्याण अधिकारी र रामनाथ घिमिरेले गैह्रकानूनीरुपमा फिर्ता दिएको जग्गामध्येबाट जग्गा फिर्ता गरीलिने कार्यमा संलग्न सुनिती राणा, शैलजा राणा समेतका व्यक्तिहरूको नामबाट हालै देखिको बकसपत्रको लिखत पारित गरी-गराई कमिसनको रुपमा जग्गा बकस गरीलिएको देखियो।

त्यसरी जग्गा बकस गरीलिनेहरु मध्ये निर्मला देवी श्रेष्ठ, विद्या पौडेल गौतम, शशिकला सुब्बा, उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं र मोहन प्रसाद भट्टराई समेतका सात जना व्यक्तिहरुले मिति २०५०/०२/२९ मा पारित लिखतबाट जग्गा प्राप्त गरेको देखियो । जस मध्ये निर्मलादेवी श्रेष्ठ, मोहन प्रसाद भट्टराई र शशिकला सुब्बा मिति २०४९/०७/२५ र मिति २०४९/०९/२३ मा गैह्रकानूनी रुपमा फिर्ता दिने निर्णय प्रक्रियामा संलग्न कर्मचारीहरु क्रमश: मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन खरिदार युक्त प्रसाद श्रेष्ठ, भूमिसुधार तथा व्यवस्थापन विभागका शाखा अधिकृतद्वय धर्म प्रसाद गौतम र प्रेम बहादुर खापुङका नजिकैका नातेदारहरु रहेको देखिएकोमा सोही मिति २०५०/०२/२९ मा मालपोत कार्यालय डिल्लीबजारबाट खटिई गएको उही डोरमार्फत ती नै जग्गाधनीहरुबाट उही साक्षीहरु (रामनाथ घिमिरे र राम कल्याण अधिकारी समेत) राखी उस्तै प्रकृतिको हालैदेखिको बकसपत्रको लिखतमार्फत उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं र विद्या पौडेल गौतमले जग्गा गैह्रकानूनी फिर्ता भएको मिति २०४९/०९/२३बाट जम्मा आठ दिन भित्रमा (२०४९/१०/०२) मा तयार भएको र मिति २०५०/०२/२९ मा पारित भएको लिखतबाट आफू समेतको नाममा ललिता निवास क्याम्पभित्रको सरकारी जग्गा प्राप्त गरेको देखियो ।

यसरी, सरकारी जग्गा व्यक्ति विशेषलाई फिर्ता दिने गरी गैह्रकानूनी निर्णय भएको आठ दिन भित्रको अवधिमा उक्त प्रकरणमा संलग्नता र सरोकार नभएका स्वतन्त्र व्यक्तिहरुले जग्गाधनी भनिएका राणा परिवारलाई खुसी बनाई, रिझाई क्षेत्रफल ६-९-०-० रोपनी जग्गा हालै देखिको बकसपत्र मार्फत प्राप्त गरेको हो भनी विश्वास गर्नसक्ने स्पष्ट आधार र ठोस प्रमाण समेत नदेखिएको तथा निजहरुले छानविन समितिका संयोजक समक्ष गरेको कागजमा समेत आफूहरुले दाता भनिएका राणाहरुबाट ६ रोपनीभन्दा बढी जग्गा बकस पाउनुपर्ने आधार र कारण खुलाउन नसकी गोलमटोल जवाफ लेखे-लेखाएको देखिएकोले बकसमार्फत जग्गा प्राप्त गर्ने निजहरु उर्मिला शाह, भुवन कुमारी चापागाईं, सोदा कुमारी चापागाईं र विद्या पौडेल गौतम गैह्रकानूनी रुपमा जग्गा फिर्ता गर्ने कार्यमा प्रत्यक्ष संलग्न कर्मचारीहरुका आफन्त भएको नदेखिए तापनि निजहरु प्रत्यक्ष लाभग्राही भएकाले निर्दोष हुन् भनी माथि विवेचित आधार, कारण र मिसिल

संलग्न रहेको हालैदेखिको बकसपत्रको लिखत समेतका परिस्थितिजन्य प्रमाणहरुबाट विश्वास गर्नसक्ने अवस्था नदेखिएको ।

प्रस्तुत मुद्दामा संलग्न यी जग्गा सरकारी हुन् भन्ने व्यहोराको बुझिएका व्यक्ति नवराज सुवेदीको कागज, समरजंग कम्पनीको रेखदेखमा रहेको भन्ने त्यसबेला प्रकाशित राजपत्र तथा गोरखापत्रका सूचना तथा पत्रहरू, यो जग्गा श्री ५ को सरकारको हो मैले आयस्ता बुझाएको छु भन्ने मिसिल संलग्न साविक क्षेत्रीय किताबको कैफियत व्यहोरा, गुठी संस्थानको पत्रबाट जग्गाधनी श्री ५ को सरकार रहेको भन्ने देखिनु, उक्त जग्गाहरू सरकारले अधिग्रहण गरी प्राप्त गरेको भन्ने समेतको तथ्य खुल्ने साविक हाँडीगाउँ मौजा हा.नं. ४५६ को लगत व्यहोरा, सम्बन्धित विवादित जग्गाको व्यक्ति विशेषको नाममा फिर्ता दिने सम्बन्धको सक्कल मिसिल सम्बन्धित मालपोत कार्यालयमा नभेटिनु, जस्ता तथ्य तथा मिसिल संलग्न प्रमाण कागजातहरूबाट समेत यी जग्गाहरू सरकारी तथा सार्वजनिक जग्गा रहेको भन्ने तथ्य निर्विवादरूपमा पुष्टि हुन आयो ।

यसरी सरकारले प्रचलित कानून वमोजिमका सम्पूर्ण कानूनी प्रक्रिया र कार्यविधि समेत पूरा गरी पटक-पटक नेपाल राजपत्र र गोरखापत्र दैनिकमा सार्वजनिक सूचना प्रकाशित गरी सम्बन्धित जग्गाधनीहरूलाई क्षतिपूर्तिको दाबी गर्नको लागि पर्याप्त सुनुवाईको मौका र कानून वमोजिमको क्षतिपूर्ति समेत दिई मिति २०२२/०२/२४ गतेदेखि सरकारीकरण भएका काठमाडौं उपत्यकाभित्रका हरिहरभवन, ललितपुरपुल्चोक; सीताभवन, नक्सालकाठमाडौं; लक्ष्मीनिवास, महाराजगंज; बबरमहलकुरियागाउँ र ललितानिवास, बालुवाटारको २९९-९-२-० रोपनी जग्गा मध्येको क्षेत्रफल २८४-१४-३-०रोपनी जग्गा र सोमा रहेका सबै घरहरू समेत गरी एक हजार रोपनीभन्दा बढी जग्गा एउटै कानून र उही कानूनी प्रक्रियाहरू पूरा गरी एउटै निर्णयबाट एकै पटक सरकारले अधिग्रहण गरी प्राप्त गरेको देखिएकोमा त्यसै मध्येको साविक ललिता निवास क्याम्पभित्र पर्ने हालको बालुवाटारस्थित क्षेत्रफल २८४-१४-३-०रोपनी जग्गामध्येको १३६ रोपनीभन्दा बढी जग्गा प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा लागेबापत सरकारले हरण गरेका जग्गाहरू छानबिन गरी फिर्ता दिने भन्ने सम्बन्धमा वि.सं. २०४६ सालको प्रजातन्त्र पुनर्स्थापना पछिको श्री ५ को सरकार, मन्त्रिपरिषद्बाट वि.सं. २०४७ मा भएका विशुद्ध सैद्धान्तिक प्रकृतिका निर्णयहरूलाई गलत ब्याख्या गरी सरकारी कार्यालयमा सुरक्षित हुनुपर्ने प्रमाण अभिलेखलाई समेत लुकाई छिपाई नष्ट गरी, नेपाल राजपत्रमा प्रकाशित महत्वपूर्ण सूचनाहरू समेतलाई अनदेखा गरी कानून वमोजिम सरकारी सार्वजनिक जग्गाको संरक्षण गर्नुपर्ने जिम्मेवारी र दायित्व समेत रहे-भएको मालपोत कार्यालय समेतले सरकारी जग्गा व्यक्तिको नाममा कायम गरीदिने, कानून विपरित सरकारी सार्वजनिक जग्गामा अनाधिकृत व्यक्तिहरूको मोहीयानी हक स्थापित गराउनमा प्रत्यक्ष भूमिका निर्वाह गर्ने लगायतका गैह्रकानूनी कार्य गर्ने र सरकारी सम्पत्तिको हानी-नोक्सानी हुने गरी बिभिन्न मितिमा अवैधानिकरुपमा प्राप्त गरेको सरकारी सार्वजनिक सम्पत्तिलाई वैधानिकता दिलाउने खराब मनशायबाट प्रेरित भई सरकारी, सार्वजनिक जग्गाको अभिलेख प्रमाण सुरक्षित राखी जग्गाको संरक्षण गर्नुपर्ने प्रमुख जिम्मेवारी र दायित्व हुने सम्बन्धित मालपोत कार्यालयले उल्टै सरकारी सार्वजनिक जग्गा खान मास्न खोज्ने कार्यमा सहयोग पुग्नेगरी कानून वमोजिम अधिग्रहण गरी प्राप्त गरेको जग्गालाई सरकारले जफत गरेको जग्गा हो भनी गलत तथ्य उल्लेख गरी बिभिन्न विभाग, मन्त्रालयले अन्तर्गतका निकायहरूबाट भए-गरेका गैह्रकानूनी निर्णयहरूलाई वैधानिकता दिन तथा गलत लिखत खडा गरी दुषित प्रस्ताव तयार गर्ने-गराउने र नेपाल सरकार, मन्त्रिपरिषद्मा पेश गर्ने-गराउने समेतका कार्यहरू योजनाबद्धरुपमा सँगठित तवरबाट गरे-गराएको देखिएबाट काठमाडौं बालुवाटारस्थित ललिता निवास क्याम्पभित्रको सयौं रोपनी सरकारी र सार्वजनिक जग्गा लिन खानको लागि बिभिन्न निकायका तल्लोदेखि उपल्लो तहसम्मका सरकारी कर्मचारी, पदाधिकारीले आफ्नो पदको

दुरुपयोग गर्दै आफ्नो कार्यक्षेत्र नाघी अन्य निकाय समेतको कार्यक्षेत्र ग्रहण गरी अन्य व्यक्तिहरू समेतको मिलेमतोमा सरकारी अड्डाहरूको समेत दुरुपयोग गरी अनाधिकृत एवं गैह्रकानूनी कार्य गरेको प्रष्ट देखिन्छ।

प्रस्तुत कसूरमा प्रतिवादीहरुले आ-आफ्नो भूमिका निर्वाह गरी एकापसमा सम्पर्कमा रही योजनावद्ध तवरमा प्रस्तुत कसूर गरे गराएको पाईन्छ। आर्थिक लाभको प्राप्तीको लागि बदनियतका साथ प्रस्तुत कसूर गर्ने बृहत्तर योजनाको कार्यान्वयन गरी २०४२ साल देखि मिति २०७०।०१।२७ गते तथा सो पछाडिका मितिहरुमा समेत निरन्तर सरकारी छाप दस्तखत दूरुपयोग गरी किर्ते गरेको र उक्त कार्यबाट नेपाल सरकारको नाममा रहेको १४३-६-३-३ रोपनी सरकारी जग्गा हानी नोक्सानी भई ब्यक्ति विशेष तथा श्री पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम भई उक्त कार्यबाट कसूरमा संलग्न प्रतिवादीहरुलाई आपराधिक लाभ प्राप्त भएको स्पष्ट भएको छ।

अब के-कुन प्रतिवादीहरुले के-कसरी कीर्ते कागजातहरु तयार गरी सरकारी जग्गा नामसारी दाखिला खारेज गरी सरकारी छाप दस्तखत कीर्ते कसूर गरेका हुन् र निजहरु उपर के-कस्तो कसूर र सजायको मागदावी लिने भन्ने सम्बन्धमा निम्नानुसार विश्लेषण गरिएको छ।

१) **प्रतिवादी रामकुमार सुवेदीको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ मा निर्णय गरी प्रचलित कानून बमोजिम सम्बन्धित जग्गाधनीहरूलाई पर्याप्त सुनुवाईको मौका र क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको जग्गा श्री ५ को सरकार समरजंग कंपनीको जिम्मा तथा रेखदेखमा रहेकोमा प्रजातन्त्र पुनर्स्थापनाको लागि भएका संघर्षहरुमा संलग्न भएको कारणबाट विभिन्न व्यक्तिहरुको जफत भएको सम्पत्ति मात्र गृहमन्त्रालयले छानबिन गरी एकिन भएपछि हदबन्दीको टुङ्गो लगाएर फिर्ता दिने भन्ने तत्कालीन श्री ५ को सरकारको मिति २०४७/०२/१४, २०४७/०४/८, २०४७/०५/०३ गते निर्णय पश्चात जग्गा प्राप्त गर्ने शैलजा राणा र तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारको प्र.मा.अ. कलाधर देउजा समेतको मिलपमतोमा किर्ते गरी, गराई अधिग्रहण गरिएको सरकारी जग्गालाई जफत भएको हो भनी शैलजा राणा समेतको नाममा करिव ११२ रोपनी जग्गा दर्ता भइसके पश्चात योजना बनाई चैत्य नारायण महर्जन समेतको मोही भनिएका व्यक्तिलाई सँगठित गरी मोहीको तर्फबाट वारेश बसी निवेदन समेतको कागजातमा झुठो व्यहोरा उल्लेख गरी किर्ते प्रामाण तथा कागजात पेश गरी, मोही नलाग्ने जग्गामा झुठा व्यहोराको किर्ते कागजातको प्रयोग गरी गराई, सरकारी जग्गामा मोही कायम गरी गराई, चैत्य नारायण महर्जन समेतको कृत्रिम मोहीको नाममा जग्गा दर्ता गराउने कार्यमा संलग्न भई लगतै कृत्रिम मोही र रुक्म शमसेर सेमतको नामबाट र उक्त सरकारी जग्गा नै २०६० सालमा झुठा व्यहोराको किर्ते निवेदन समेतको कागजात प्रयोग गरी गराई, तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारको कर्मचारी हुपेन्द्रमणि के.सी. समेतको मिलेमतो र संलग्नतामा हाल साविक गरी गराई उक्त सरकारी जग्गा निज प्रतिवादी राम कुमार सुबेदी, शोभाकान्त ढकालको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ६४२ को जम्मा ३२.३१ वर्ग मिटर, राम कुमार सुबेदी, मिन बहादुर गुरुङ, शोभाकान्त ढकाल समेतको नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ५०७ को क्षे.फ. ७.९५ वर्ग मिटर क्षे.फ. जग्गा हाल दर्ता कायम रहेको देखिएको, निज सेयर धनी रहेको भाटभटेनी डेभलपमेण्ट कम्पनी प्रा.लि. को नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. २८६, ५७, ५८, सिट नं. १०२-१०२५-२० को कि.नं. १७, ८२, ७९, १०, ८१, १२, १४, सिट नं. १०२- १०२४-१४ को कि.नं. १२१ को जम्मा क्षे.फ. २१९०.३६ वर्ग मि., निज प्रतिवादीको श्रीमती माधवी सुबेदी, सरला गुरुङ र

उमा कुमारी ढकाल्नीको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. २७०, २८५, २८२ को जम्मा १४०८.८२ वर्ग मिटर, माधवी सुबेदी र उमा कुमारी ढकाल्नीको संयुक्त नाममा सि.नं. १०२-१०२५-१५ को कि.नं. ५४६, २६६, ९८, २९४, ७४७, २६५, २७७, ३०८, २७९, ७५१,५४८,१४२,३६,५ को जम्मा ५०३३.३६ वर्गमिटर तथा माधवी सुबेदी र राधा सिग्देलको संयुक्त नाममा सि.नं. १०२-१०२५-१५ को कि.नं. २२१, २२३, २२४, ३०५ को जम्मा ५५६.३२ वर्गमिटर क्षे.फ. को जग्गा दर्ता कायम रहेको, निज प्रतिवादीको छोरा रुपेश कुमार सुवेदी र सरोज ढकालको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ४०५,५२०,२७१, २६३ को जम्मा १२८५.६३ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएको, निज प्रतिवादीको अर्को छोरा विवेक कुमार सुवेदी को नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ७४९, २७६, १०० को जम्मा ९८०.५९ वर्गमिटर क्षे.फ. दर्ता कायम रहेको देखिएको तथा निज प्रतिवादीले साविक का.जि.का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँडफाड गर्ने क्रममा कृत्रिम मोही तीर्थ माया महर्जनले मिति २०६१/८/२२ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये कि.नं. २, ३, ११५,१७६ को क्षे.फ.२-३-०-१ रोपनी जग्गाको रु २२,००,०००/- (बाइस लाख) रकम लिई बिनिता अधिकारी समेतलाई, कृत्रिम मोही अर्जुन महर्जनले मिति २०६१/८/२२ गते साविक २३ क्ष कि.नं. ३५(१६६) को क्षे.फ. ०-०-३-० रोपनी जग्गाको जम्मा रु.५०,०००/- (पचास हजार) र साविक २३ क्ष कि.नं. ३५ (१६२, १६४) को क्षे.फ. ०-१३-१-० रोपनी जग्गाको रु.८,२८१२५/- (आठलाख अठ्ठाईसहजार एकसय पच्चिस) रकम लिई मिन बहादुर गुरुङ र सरला घले गुरुङलाई मोहीयानी हक छाड्दा तयार गरेको लिखतमा साक्षी समेत बसेको देखिन्छ। यसमा बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मेरो बाउ बाजेको पाला देखि नै खेतिपाती तथा भोगचलन गर्दै आइरहेका थियौं,उक्त जग्गाधनि सुवर्ण शमसेर राणा भएकोले तिरो तिर्नका लागि सुवर्ण शमसेरकै घरमा जानुहुन्थ्यो पछि बुबाले समरजंग कम्पनीमा बाली बुझाउन जाने गर्नुहुन्थ्यो,सो जग्गा कति सालमा के,कुन कारणले सरकारले अधिकरण गरेको हो मलाई थाह भएन, उक्त जग्गामा मोही छुट्याई दर्ता गर्न लागेका छन्, सो कुराको जिम्मा कानून व्यवसायी राम कुमारले लिई मोहीले पाउने जग्गा मध्ये तीन भाग लगाएर एक भाग राम कुमारले लिने बाँकी दुई भागको जग्गा धनि पुर्जा दिने भनेका थिए। पछि जग्गा दिन नमिल्ने भनी प्रति रोपनी १३(तेह्र) लाखका दरले दिने भनी बोलाई कागजमा सहिछाप गराई १० लाख दिएका हुन भनी प्रतिवादी मचाबाबु प्रजापती समेतले एकै व्यहोराको छानबिन समिति समक्ष गरेको कागजमा समेत लेखाई दिएको देखिएकोले निज प्रतिवादी राम कुमार सुबेदी समेतले सरकारी सार्वजनिक जग्गालाई व्यक्ति विशेषको नाममा ना.सा.दा.खा. गरी गराई कृत्रिम मोहीहरुको नाममा जग्गा ल्याई आफ्नो अनुकुल आफ्नो परिवार भित्रका व्यक्तिहरु समेतको नाममा जग्गा ल्याई उक्त सरकारी जग्गा बिक्री वितरण गरी मस्यौट गर्ने कार्यमा निज प्रतिवादी राम कुमार सुबेदी समेतले सरकारी जग्गा हिनामिना गरी आफूले फाईदा लिने योजना बनाई, सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई आफ्नो योजनामा संलग्न गराई योजनाकारको भूमिका निर्वाह गरी प्रत्यक्ष लाभ समेत लिएको साथै ललिता निबास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नाममा कायम रहेको जग्गाधनी दर्ता श्रेस्ता कट्टा गरी आफ्नो र आफ्ना नातेदारको नाममा हालसाविक गर्ने-गराउने कार्यमा संलग्न भई प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

साबिकको काठमाडौं जिल्ला का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा सुनिती राणाको नाममा दर्ता गर्ने क्रममा प्रतिवादी राम कुमार सुबेदीको मिलेमतोमा उल्लेखित जग्गा सरकारी जग्गा भएको थाहा हुँदाहुँदै ब्यक्ती बिशेषको हक नपुग्ने सरकारी जग्गा सुनिती राणाको नाममा नामसारी दर्ता गर्ने कार्यको लागि रुक्म शमसेर ज.ब.रा., शैलजा राणा, हाटक शम्सेर राणा, हेमन शमसेर ज.व.रा. समेतले हामी समेतको नाममा रहेको कित्ता नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा लिन बाँकी रहेको सुबर्ण शमसेरको बुहारी कनक शमसेरको श्रीमती का.जि.का.म.पा.वडा नं. ४ बस्ने सुनिती राणाको नाममा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा दिएमा हामीहरुको पुर्ण मन्जुरी छ भनी लेखिएको मिति २०६०।०४।२३ को झुठो ब्यहोराको किर्ते मन्जुरीनामा कागजमा प्रतिवादीहरु राम कुमार सुवेदी समेत साक्षीको रुपमा दस्तखत गरेको र सोही किर्ते मन्जुरीनामा समेतको आडमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट मिति २०६२।०२।०३ मा उक्त जग्गा गैरकानूनी तवरले ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता कायम भएको देखिन्छ, यसरी रामकुमार सुवेदी समेतका प्रतिवादीहरुले सँगठित रुपमा जिम्मेवारी अनुसारको कार्य गरी गैह्रकानूनीरुपमा सरकारी जग्गा व्यक्ती बिशेष सुनिती राणाको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर गरेको देखिन्छ।

प्रतिवादी रामकुमार सुवेदी २०४२ सालतिर काठमाडौं जिल्ला अदालतबाट लेखापढी व्यवसायीको प्रमाणपत्र नं. ३३० प्राप्त गरी मालपोत कार्यालय डिल्लीबजारबाट लेखापढी व्यवसाय शुरु गरेकोले मालपोत तथा भूमिसुधार कार्यालयका कर्मचारीहरुसँग हिमचिम रहेको देखिन आएको, सोही आधारमा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना गर्न प्रतिवादी रामकुमार सुबेदी समेतले योजना बनाई तहगत रुपमा जिम्मेवारी बाडफाड गरी ललिता निवास क्याम्प भित्रको जग्गा पशुपति टिकिन्छा गुठीको लगत सँग भिड्छ भनी २०५८ साल देखि श्रीकृष्ण महर्जन समेत १५ जना नक्कली मोहीको तर्फबाट वारेश बसी प्रक्रिया अगाडि समेत बढाएको, का.म.पा. वडा नं. ४ को च.नं. १९८२, मिति २०५९/३/१२ को झुठा तथा फरक व्यहोराको जोतभोगको कीर्ते सिफारिस, सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी गुठी संस्थान तहसिल शाखाबाट झुठा व्यहोराको हस्ताक्षर समेत नभएको बेरितको सर्जमिन मुचुल्का तयार गराउन प्रमुख भूमिका खेलेको र गुठी संस्थानमा गुठीको जग्गा हो भनी परेको तिनै जग्गाहरुको लागि वि.सं. २०६६।९।१३ गते भूमिसुधार कार्यालयमा राममणि सिग्देललाई वारिस राखी सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले कोही कसैलाई मोही कायम नगरेको भए तापनि सो फैसलाको अपव्याख्या गरी सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ भनी निवेदन पारेको साथै सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलालाई अपव्याख्या गर्दै दिइएको निवेदनमा मालपोत कार्यालयको तत्कालीन प्रमुख मालपोत अधिकृत प्रेमबहादुर खापुङलाई प्रभावमा पारी मालपोत कार्यालय, डिल्लीबजारको च.नं. ९००९, मिति २०६६।१०।१० गते भवन निर्माण संभार डिभिजन कार्यालय, अनामनगरलाई लेखेको पत्रमा सरकारी जग्गामा सर्वोच्च अदालतको मिति २०६४।११।३० गते को फैसलाले मोही कायम गरेको जग्गा भनी मोहीको नाम समेत कार्यालयको अभिलेख भन्दा फरक गरी, गराई पत्राचार गरे, गराएको र सरकारी जग्गामा मोही भएको भनी भूमी सुधार कार्यालयको च.नं. ५१४०, मिति २०६६।१०।१५ को पत्र मोहीको

नामावली समेत कार्यालयको अभिलेख भन्दा फरक पारी (किर्ते गरी) सरकारी जग्गा हडप्ने उदेश्यले कीर्ते पत्र पत्राचार गरे, गराएको साथै विशिष्ठ व्यक्तिको निवास परिसर विस्तार सम्बन्धी नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ को निर्णय पश्चात सर्वोच्च अदालतको मिति २०६४।११।३० को फैसला र मन्त्रिपरिषदको २०६६।१२।२९ को निर्णय समेतबाट हामिलाई मोही कायम गरी ना.सा. समेत गरी पाउँ भनी मालपोत कार्यालय, काठमाडौंमा निवेदन दिएकोमा सो निवेदन समेतमा सर्वोच्च अदालतको मिति २०६४।११।३० को फैसलालाई अपव्याख्या गर्दै झुठा व्यहोराको कीर्ते निवेदन पारेको र नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र २०६७।०१।३१ को निर्णय पश्चात पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी आफै वारेश बसी प्रक्रिया अगाडि बढाई सकेको जग्गा पुन: विशिष्ट व्यक्तिहरुको निवास परिसर विस्तारको नाममा बाबुराजा महर्जन समेत १२ जना नक्कली मोहीहरुको तर्फबाट निवेदन लेखी मालपोत कार्यालय डिल्लिबजारमा निवेदन पेश गरेको, यसरी मालपोत कार्यालय डिल्लिबजारमा निवेदन साथ का.म.पा. ४ नं. वडा कार्यालयको च.नं. १९८२ मिति २०५९/३/३२ को जोतभोग सिफारिशको फोटोकपी पेश गर्दा उक्त सिफारिश पत्रको पहिलो पानामा देव नारायण महर्जन र दोश्रो पानामा द्वारिका मान महर्जन समेतको नाम थप गरी किर्ते फोटोकपी पेश गरी कार्यान्वयनमा लगि निज मोही भनिएका व्यक्तिहरुले प्राप्त गरेको १३-१५-१-० रोपनी जग्गा निज योजनाकार निज राम कुमार सुवेदी समेतले नै खरिद गरी लाभ प्राप्त गरेको देखिएको र निजको नाममा कि.न.६४४ को ४८.३६, कि.न. ६४६ को १९९.५४, कि.न. ६४२ को ३२.३१, कि.न. ६४० को ११०.४८, कि.न. ६३८ को ५३.६६, कि.न. ६८५ को ५३४.१, कि.न.१३८ को ४३.७२, कि.न. ६१४ को ५८८.२३, कि.न. ६२३ को ६६.५८, कि.न. ५४ को ३५.७७, कि.न. १२९ को ५१३.५, कि.न. १३७ को १२३.५ वर्ग मिटर क्षेत्रफलको जग्गा समेत रहेको देखिदा निज प्रतिवादी राम कुमार सुवेदीले प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ ( का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **राम कुमार सुवेदी समेत** भई मिति २०५८।०१।१४ मा गुठी संस्थान शाखा कार्यालयमा गुठीको जग्गा हो भनी निवेदन दिएको साबिक २३क्ष किता नं १५, २५,२८,४२,६३ को सम्बन्धमा निवेदकहरू तीर्थमाया महर्जन (पति: नाती महर्जन), तीर्थमाया महर्जन (पति:-आशा नारायण महर्जन) र पंच नारायण महर्जनको वारेश भई

विभिन्न तीन वटा निवेदन मार्फत निवेदकहरले जग्गाधनी प्रमाण पुर्जा पाउँ भन्ने व्यहोराक निवेदन दिएको, मिति २०५९।०७।०५ गते गुठी संस्थान केन्द्रीय कार्यालयमा विभिन्न ११ जना मोहीहरूको वारेश भई साविक २३ह २२ र २३ क्ष ७३ समेतका जग्गाहरूको सम्बन्धमा ती जग्गाहरू पशुपति टिकिन्छा गुठीको मलिकुली खेतको आशामरू ज्यापूको रोपनी १० सँग भिड्ने र निवेदकहरुले जोत भोग गर्दै आएको हुँदा निजहरूको नाममा दर्ता गरी ज. ध.प्र. पू पाउँ भन्ने व्यहोराको निवेदन दिएको,आशामाया महर्जनको वारेस भई मिति २०५९।०७।०५ मा गुठी संस्थान केन्द्रीय कार्यालयमा साविक २३ क्ष कि.नं. ७३ को सम्बन्धमा सो जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी निवेदन  दिएकोमा सोही जग्गाको सम्बन्धमा भूमिसुधार कार्यालयमा मिति २०६६/०९/१३ गते स.अ. को निर्णय बमोजिम मोही कायम गरी पाउँ भनी सञ्जय कुमार महर्जनको वारेस राममणि सिग्देल भई गुठीको नाम उल्लेख नगरी निवेदन दिंदा सो निवेदनमा राम कुमार सुवेदीकै हस्तलेखन भएको,साविक २३क्ष कित्ता नं १५, २५,२८,४२,६३ का जग्गा श्री ५ को सरकारको गुठीको नाममा नापी हुनु पर्नेमा भुलबस श्री ५ को सरकार भनी नापी भएको भन्ने समेतको व्यहोराको सर्जमिन मुचुल्काको रोहवर खण्डमा बसी हस्ताक्षर गरेको,गुठी संस्थान केन्द्रीय कार्यालयको मिति २०५९।०९।०५ को आदेशानुसार केन्द्रीय कार्यालयमा झिकाई बुझ्दा "माग दाविमा उल्लेखित कित्ता जग्गा साविक देखी कै गुठीका जग्गा हुन सोही अनुसार साविक नापीमा गुठी जनिई जग्गाधनी दर्ता श्रेस्ता तयार भएको हो । उक्त जग्गा श्री ५ को सरकारले अधिग्रहण गरेको भन्ने हल्लाका भरमा हाम्रो अज्ञानताबस श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चालिधिस कार्यालय भनी लेखिन गएको हो । जग्गा गुठीको हो गुठी बाहेक अन्यत्र वाली बुझाएको छैन" भन्ने व्यहोरा खुलाई दिएको,सुरूमा पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गरी धनी प्रमाण पूर्जा पाऊँ भनी निवेदन दिएका जग्गाहरूको सम्बन्ध मा पछि आएर पशुपति टिकिन्छा गुठीको नाम उल्लेख नगरी मन्त्रिपरिषदको मिति २०६७।०१।३१ को निर्णयलाई आधार मानी सोही बमोजिम विभिन्न कित्ता जग्गा नामसारी हा.सा. को लागि मालपोत कार्यालयमा २०६७ सालको विभिन्न निवेदन दिएको, मन्त्रिपरिषदबाट मिति २०६९।०६।१८ मा निर्णय भएपश्चात नयाँ गुठी संस्थान तहसिल कार्यालय. मा २०६९ फागुनमा कि नं  ७३ (४८), २२ (२६७,२६२,२९५,२५९),३१ (२७८,२८४,२३२,२८०,३१४), ३५(५६,८०) भनी वा.को रुपमा निवेदन दिएको,सोही जग्गा पशुपति टिकिन्छा गुठीको हो भनी आफैं वारेस भई निवेदन दिएकोमा सो जग्गा मोही भनिएका श्रीमती मोहन महर्जन, देवनारायण महर्जन, द्वारिकामान महर्जन, संजय महर्जन र सकलानन्द महर्जनको नाममा दर्ता भएको उक्त जग्गा १० दिन पछि (२०७०।०१।२७) निज तथा निजको श्रीमती समेतको नाममा संयुक्त नामसारी भएको ,समरजंग कम्पनीबाट गुठी संस्थान केन्द्रीय कार्यालयलाई लेखेको च.नं ५ को पत्रको खेस्रामा राम कुमार सुवेदीको हस्तलेखन भएको देखिएको, टिकिन्छा गुठीको नभएको जग्गालाई टिकिन्छा गुठीको हो भनी निवेदकहरूको वारेस भई २०५८।०१।१४ र २०५९।०७।०५ मा फरक व्यहोराको निवेदन दिई निवेदनमा नै कीर्ते व्यहोरा लेखि कीर्ते गरेको,फरक व्यहोराको सर्जमिन मुचुल्कामा रोहवर बसेको,एकै प्रकृतिको तथा एउटै जग्गालाई विभिन्न सरकारी कार्यालयहरूमा कहिले टिकिन्छा गुठीको, कहिले श्री ५ को सरकारको गुठी र कहिले गुठीको नाम नै उल्लेख नगरी सट्टा पट्टाको लागि निवेदन दिएको, गुठी संस्थान केन्द्रीय कार्यालयमा बोलाई कारबाहीमा आएका जग्गाहरुको सम्बन्धमा बुझ्दा झुट्टो व्यहोराको कागज गरीदिएको, सर्वोच्च अदालतको २०६४ सालको निर्णय भए पश्चात स. अ.को उक्त निर्णयले  मोही कायम नगरेको जग्गालाई समेत मोही कायम भएको भनी गलत व्याख्या गर्दै २०६६ सालमा राममणि सिग्देल वारेश भई निजले भूमि सुधार कार्यालयमा दिएको फरक व्यहोराको निवेदनमा राम कुमार सुवेदीको हस्तलेखन भएको देखिएको, छानविन समिति समक्ष कागज गर्ने

क्रममा समरजंग कम्पनीका तत्कालीन प्रमुख अर्जुन प्रसाद भण्डारीले उक्त खेस्रा कै हुबहु हुने गरी पत्र जवाफ दिएको स्वीकार गरेको निज राम कुमार सुवेदीले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुऱ्याउने दुषित नियतले फरक व्यहोराका कागजातहरू तयार गरी सरकारी निकायमा पेश गरी कीर्ते गरेको नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न निवेदकहरुको वारेसको रुपमा रही टिकिन्छा गुठीको नाममा बनाउन वारेसको रुपमा निवेदन दिई दावी लिएको, गुठी संस्थानका कर्मचारीहरुले तयार गरेको सरकारी लगत सँग बाझिने खालका झुट्टा, कीर्ते र वेरितका मुचुल्कामा रोहरवमा बसी हस्ताक्षर गरेको, सरकारी जग्गालाई व्यक्तिको नाममा कायम गर्न, झुट्ठो व्यहोराको निवेदन र कागजात पेश गरेको, सम्बन्धित कित्ता जग्गाका मोही भनी दावी गरीएका व्यक्तिहरुले नै सनाखत गर्न नसक्ने र अनबिज्ञता प्रकट गर्ने अवस्थामा कुत बुझाएको नक्कली रसिद पेश गरेको, श्री ५ को सरकारले अधिग्रहण गरेको भन्ने हल्लाका भरमा हाम्रो अज्ञानताबस श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चालाधीश कार्यालय भनी लेखिन गएको हो जग्गा गुठीको हो गुठी बाहेक अन्यत्र वाली बुझाएको छैन” भन्ने व्यहोरा खुलाई दिएकोमा उक्त जग्गा, सरकारले अधिग्रहण गरेको कुरा हल्ला नभई तथ्य हो, जग्गावालाले आफ्नो साथमा भएको कागज प्रमाणको आधारमा कुन प्रकारको जग्गा हो एकिन गर्न सक्छ, भूल भएर वा अज्ञानता भनेर समरजंग कम्पनी भनीदैन त्यसैले झुट्टो व्यहोराको कागज गरी प्रतिवादी रामकुमार सुबेदी समेतका ब्यक्तिहरु मिली ४ (चार) चरणमा विगो **रु.६,८४,२६,००,०००।–** वरावरको सरकारी जग्गालाई ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले गरेको उल्लेखित कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आएको छ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ४,७९,००,००,०००।- | ५,००,००,०००।- | १,६२,९०,००,०००/- | ३७,३६,००,०००/- | ६,८४,२६,००,०००।- |

## २) <u>प्रतिवादी माधवी सुवेदीको हकमा:</u>

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी माधवी सुबेदी, सरला गुरुङ र उमा कुमारी ढकाल्नीको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. २७०, २८५, २८२ को जम्मा १४०८.९२ वर्ग मिटर, माधवी सुबेदी र उमा कुमारी ढकाल्नीको संयुक्त नाममा सि.नं. १०२-१०२५-१५ को कि.नं. ५४६, २६६,

९८, २९४, ७४७, २६५, २७७, ३०८, २७९, ७५१, ३१६ को जम्मा ४३०९.५१ वर्गमिटर तथा माधवी सुबेदी र राधा सिग्देलको संयुक्त नाममा सि.नं. १०२-१०२५-१५ को कि.नं. २२१, २२३, २२४, ३०५ को जम्मा ५५६.३२ वर्गमिटर क्षे.फ.को जग्गा दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी माधवी सुवेदीको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

प्रतिवादी माधवी सुवेदीले जग्गाधनीको हैसियतले नेपाल सरकारको सरकारी जग्गा मध्ये कित्ता नं. ५४८ को १८८.७९, कि.न.१४२को १७४.८८ ब. मी. क्षे. को जग्गा सट्टाभर्ना पाएको र हाल कि. नं. ५४८ को १८८.७९, कि.न. १४२ को १७४.८८, कि.न. ५ को १९६.२, कि.न. ३६ को ४१२.३५, कि.न.११ को ६९५.४२, कि.न.२६ को ८७.४३, कि.न.३८ को १३१.१४,कि.न.१४४ को २९.८५, कि.न.१३६ को १६६.९३ ब. मी. क्षे. जग्गाको जग्गाधनी रहेकी र निज प्रतिवादी माधवी सुवेदीले नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी प्रस्तुत कसूर गरेको देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ ( का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी माधवी सुवेदी समेत भई मोही भनिएका व्यक्तिहरूको नाममा कायम भएको मोही एक हप्ता भित्रै आफ्नो नाममा संयुक्त नामसारी गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले **फरक व्यहोराका** कागजातहरू तयार गर्ने कार्य सहयोग तथा संलग्न रही **कीर्ते** झुट्टा तथा वेरितका कागजातहरुको आधारमा नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गरी विगो **रु.२,८८,४०,८६,४७४।-** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आएको छ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २,३६,३०,४६,४७४।- | - | २६,३०,४०,०००।- | २५,८०,००,०००/- | २,८८,४०,८६,४७४।- |

## ३) प्रतिवादी शोभाकान्त ढकालको हकमा:

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ मा निर्णय गरी प्रचलित कानून बमोजिम सम्बन्धित जग्गाधनीहरूलाई पर्याप्त सुनुवाईको मौका र क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको जग्गा श्री ५ को सरकार समरजंग कंपनीको जिम्मा तथा रेखदेखमा रहेकोमा प्रजातन्त्र पुनर्स्थापनाको लागी भएका संघर्षहरुमा संलग्न भएको कारणबाट विभिन्नव्यक्तिहरुको जफत भएको सम्पत्ति मात्र गृहमन्त्रालयले छानबिन गरी एकिन भए पछी हदबन्दीको टुङ्गो लगाएर फिर्ता दिने भन्ने तत्कालीन श्री ५ को सरकारको मिति २०४७/०२/१४, २०४७/०४/८, २०४७/०५/०३ गते निर्णय पश्चात जग्गा प्राप्त गर्ने शैलजा राणा र तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारको प्र.मा.अ. कलाधर देउजा समेतको मिलेमतोमा किर्ते गरी, गराई अधिग्रहण गरिएको सरकारी जग्गालाई जफत भएको हो भनी शैलजा राणा समेतको नाममा करिव ११२ रोपनी जग्गा दर्ता भइसके पश्चात तिर्थमाया महर्जन समेतको मोहीलाई उचाली मोहीको तर्फबाट मध्यस्थता गरी निवेदन समेतको कागजातमा झुठो व्यहोरा उल्लेख गरी किर्ते प्रमाण तथा कागजात पेश गरी, मोहीहरुलाई प्रभावमा पारी मोहीहरुको नाममा जग्गा आईसके पश्चात ६६ प्रतिशत जग्गा आफु समेतलाई दिने गरी आफ्नै हस्त लिपिमा सम्झौता कागज समेत बनाई तीर्थमाया महर्जन समेतका कृत्रिम मोहीको नाममा जग्गा दर्ता गर्ने, गराउने कार्यमा प्रत्यक्ष संलग्न भई कृत्रिम मोहीको नाममा जग्गा कायम भए पश्चात लगतै आफु र आफ्नो परिवारको नाममा जग्गा ल्याएको र रुक्म शमसेर सेमतको नामबाट र उक्त सरकारी जग्गा नै २०६० सालमा झुठा व्यहोराको किर्ते निवेदन समेतको कागजात प्रयोग गरी गराई तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारको कर्मचारी हुपेन्द्रमणी के.सी. समेतको मिलेमतो र संलग्नतामा हाल साविक गरी, गराई ललिता निवास क्याम्प भित्रको उक्त सरकारी जग्गा निज प्रतिवादी शोभाकान्त ढकाल, राम कुमार सुवेदीको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ६४२ को जम्मा ३२.३१ वर्ग मिटर, राम कुमार सुबेदी, मिन बहादुर गुरुङ, शोभकान्त ढकाल समेतको नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ५०७ को क्षे.फ. ७.९५ वर्ग मिटर क्षे.फ. जग्गा हाल दर्ता कायम रहेको देखिएको, निज सेयर धनी रहेको भाटभटेनी डेभलपमेण्ट कम्पनी प्रा.लि. को नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. २८६, ५७, ५८, सिट नं. १०२-१०२५-२० को कि.नं. १७, ८२, ७९, १०, ८१, १२, १४, सिट नं. १०२- १०२४-१४ को कि.नं. १२१ को जम्मा क्षे.फ. २१९०.३६ वर्ग मि., निज प्रतिवादीको श्रीमती उमा कुमारी ढकाल्नी, माधवी सुवेदी र सरला गुरुङको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. २७०, २८५, २८२ को जम्मा १४०८.९२ वर्ग मिटर, उमा कुमारी ढकाल्नी र माधवी सुबेदीको संयुक्त नाममा सि.नं. १०२-१०२५-१५ को कि.नं. ५४६, २६६, ९८, २९४, ७४७, २६२, २७७, ३०८, २७९, ७५१, ३१६ को जम्मा ४३०९.५१ वर्गमिटर. निज प्रतिवादीको छोरा सरोज ढकाल र रुपेश कुमारको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ४०५,५२०,२७१, २६३ को जम्मा १२८५.६३ वर्ग मिटर क्षे.फ. र शोभाकान्त ढकाल र श्रीमती उमाकुमारी ढकाल्नीको नाममा सिट नं. १०२-१०२५-१४ को कि.नं. ८१, ११३, ८६, ७७, ७९ को जम्मा क्षे.फ. ७०३.५५ वर्ग मिटरको जग्गा दर्ता कायम रहेको देखिएकोले निज प्रतिवादी शोभाकान्त ढकाल समेतले सरकारी सार्वजनिक जग्गालाई व्यक्ति विशेषको नाममा ना.सा.दा.खा. गरी गराई कृत्रिम

मोहीहरुको नाममा जग्गा ल्याई आफ्नो अनुकुल आफ्नो परिवार भित्रका व्यक्तिहरु समेतको नाममा जग्गा ल्याई उक्त सरकारी जग्गा बिक्री वितरण गरी मस्यौट गर्ने कार्यमा निज प्रतिवादी **शोभाकान्त ढकाल** लगायत राम कुमार सुबेदी, मिन बहादुर गुरुङ समेतले योजना बनाई सँगठित तवरबाट सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई योजनाकार, व्यवस्थापक समेतको भूमिका निर्वाह गरी प्रत्यक्ष लाभ समेत लिएको साथै ललिता निबास क्याम्पभित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नाममा कायम रहेको जग्गाधनी दर्ता श्रेस्ता कट्टा गरी आफू र आफ्ना नातेदारहरूको नाममा हाल साविक गर्ने गराउने कार्यमा संलग्न रहि प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

साबिकको काठमाडौं जिल्ला का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा सुनिती राणाको नाममा दर्ता गर्ने क्रममा प्रतिवादीहरु राम कुमार सुबेदी र शोभाकान्त ढकाल समेतको मिलेमतोमा उल्लेखित जग्गा सरकारी जग्गा भएको थाहा हुँदाहुदै ब्यक्ती बिशेषको हक नपुग्ने सरकारी जग्गा सुनिती राणाको नाममा नामसारी दर्ता गर्ने कार्यको लागी रुक्म शमसेर ज.ब.रा., शैलजा राणा, हाटक शम्सेर राणा, हेमन शमसेर ज.व.रा. समेतले हामी समेतको नाममा रहेको कित्ता नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा लिन बाँकी रहेको सुबर्ण शमसेरको बुहारी कनक शमसेरको श्रीमती का.जि.का.म.पा.वडा नं. ४ बस्ने सुनिती राणाको नाममा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा दिएमा हामीहरुको पुर्ण मन्जुरी छ भनी लेखिएको मिति २०६०।०४।२३ को झुठो ब्यहोराको किर्ते मन्जुरीनामा कागजमा प्रतिवादी शोभाकान्त ढकालले साक्षीको रुपमा दस्तखत गरेको र सोही फरक ब्यहोराको किर्ते मन्जुरीनामा कागजात समेतको आडमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट मिति २०६२।०२।०३ मा उक्त जग्गा गैरकानूनी तवरले ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता कायम भएको देखिन्छ, यसरी प्रस्तुत कसूरमा निज **शोभाकान्त ढकाल** समेतको संलग्नता रहेको प्रष्ट देखिन्छ।

पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी निज प्रतिवादी शोभाकान्त ढकालका साझेदार प्रतिवादी राम कुमार सुवेदी वारेश बसी प्रक्रिया अगाडि बढाई सकेको जग्गा सम्बन्धमा नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र २०६७।०१।३१ को निर्णय पश्चात पुन: विशिष्ट व्यक्तिहरुको निवास परिसर विस्तारको नाममा बाबुराजा महर्जन समेत १२ जना नक्कली मोहीहरुले प्राप्त गरेको १३-१५-१-० रोपनी जग्गा योजनाकार निज प्रतिवादी शोभाकान्त ढकाल समेतले नै सरकारी जग्गा हो भन्ने थाहा हुँदाहुदै प्रचलित कानूनको बर्खिलाप हुने गरी खरिद गरेको र यसरी हक हस्तान्तरण नै नहुने जग्गा सँगठित रुपमा योजना बनाई व्यहोरा फरक पारी मोही भनिएका व्यक्तिहरुको नाममा दर्ता कायम हुन आए पश्चात आफूले खरिद गरेको देखिएको र निज प्रतिवादी शोभाकान्त ढकालको नाममा ललिता निवास क्याम्प भित्रको कि.न.६४४ को ४८.३६, कि.न. ६४६ को १९९.५४, कि.न. ६४२ को ३२.३१, कि.न. ६४० को ११०.४८, कि.न. ६३८ को ५३.६६, कि.न. ६८५ को ५३४.१, कि.न.१३८ को ४३.७२, कि.न. ६१४ को ५८८.२३, कि.न. ६२३ को ६६.५८, कि.न. ५४ को ३५.७७, कि.न. १२९ को ५१३.५, कि.न. १३७ को १२३.५, कि.न.१२ को ४९.६८, कि.न.३७ को १४६.०१, कि.न.४० को ३३.७९ वर्ग मिटर क्षेत्रफलको जग्गा समेत रहेबाट निज प्रतिवादी शोभाकान्त ढकालको यस कसूरमा संलग्नता रहेको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **शोभाकान्त ढकाल** समेत भई गलत मोही भनिएका व्यक्तिहरूको नाममा कायम भएको मोही एक हप्ता भित्रै आफ्नो नाममा संयुक्त नामसारी गरेको, जग्गा प्राप्त भए पश्चात ३३% र ६६% को अनुपातमा जग्गा बाँडफाड गर्ने भन्ने लेखिएको कागजमा सोभा कान्त ढकालको हस्तलेखन भएको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराका कागजातहरू तयार गर्ने कार्य सहयोग तथा संलग्न रही कीर्ते गर्न मतियार भएको गलत मोही भनिएका व्यक्तिहरूको नाममा कायम भएको मोही एक हप्ता भित्रै आफ्नो नाममा संयुक्त नामसारी गरेको,जग्गा प्राप्त भए पश्चात ३३% र ६६% को अनुपातमा जग्गा बाँडफाड गर्ने भन्ने लेखिएको कागजमा शोभा कान्त ढकालको हस्तलेखन गरी, झुठ्ठा तथा वेरितका कागजातहरुको आधारमा नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गराई सो कार्यमा संलग्न रही नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको सरकारी अभिलेखको अस्तित्व नै समाप्त पार्ने गरी कीर्ते गरी प्रतिवादी शोभाकान्त ढकालले विगो **रु.६,८४,२६,००,०००।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ४७,९०,०००,०००।- | ५,००,००,०००।- | १,६२,९०,००,००० | ३७,३६,००,०००/- | ६,८४,२६,००,०००।- |

## ४) **<u>प्रतिवादी धर्म प्रसाद गौतमको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई प्रतिवादी निज धर्म प्रसाद गौतमले गुठी लगत तथा तहवील कार्यालयको मिति २०४२।०१।१८ गतेको निर्णय अनुसार गुठी लगत तथा तहवील कार्यालयले मिति २०४२/१/१८ गतेको पत्रबाट ६४ पंचायतको ज.ध.प्र.पु. बनाई पठाई दिन भनी मालपोत कार्यालयलाई पत्राचार

भए पश्चात साविकमा जग्गाधनी दर्ता श्रेष्ताको जग्गाधनी महलमा श्री ५ को सरकार जनिएका जग्गाहरु गुठी संस्थान गुठी लगत तथा तहवील कार्यालयको च.नं.२४२२ मिति २०४२।१।१८ गतेको पत्रानुसार तोक आदेशले मालपोत कार्यालयका तत्कालीन कार्यालय प्रमुख निज धर्म प्रसाद गौतमले मिति २०४२/०३/१६ गते ललिता निवास क्याम्प भित्रका जग्गाको जग्गाधनी दर्ता श्रेष्तामा जग्गाधनी महलमा श्री ५ लेखीएको साविक २३ क्ष को कि.नं. ६७, ६९, ७०, ७१, ८१, ८२ र ८३ गरी जम्मा ७ कित्ता जग्गामा श्री ५ गुठीका नाउँमा श्रेष्तामा जनाएको, त्यस्तै जग्गाधनी महलमा श्री ५ को सरकार लेखीएको साविक वडा नम्वर २३ क्ष को कित्ता नम्वर ९, १०, ११, १२, १३, १४, १५, १६, २५, २६, २७, २९, ३०, ३१, ३२, ४१, ४२, ४५, ४६, ४७, ४९, ५०, ५२, ६३, ६४, ६५ र ६६ गरी जम्मा २७ कित्ता जग्गामा श्री ५ को सरकार गुठीको नाउँमा श्रेष्तामा जनाएको देखिन्छ। २०१७ सालको सुवर्ण शमसेरको वकसपत्र, साविक नापीको फिल्डबुकमा कहि कतै गुठी नदेखिएको, तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले प्रचलित कानून बमोजिम अधिग्रहण गरेको जग्गा हो, यसमा कुनै गुठी हुँदैन, छैन भन्ने जान्दा-जान्दै कुनै आधार कारण बिना आफ्नो पदीय अख्तियारीको दुरुपयोग गरी धनीको स्वामित्व हैसियत फरक पारी बँदनियत पूर्वक जग्गाधनी दर्ता श्रेष्तामा गुठी संस्थानको अर्कै प्रयोजनको पत्रको च.नं., मिति उल्लेख गरी फरक व्यहोराको गुठी जनाई किर्ते गरेको देखिन्छ। त्यस्तै मिति २०४४।१०।२२ गते वाग्मती अञ्चल कार्यालयले गृह मन्त्रालयलाई बोधार्थ दिई आवास तथा भौतिक योजना मन्त्रालयलाई वाग्मती अञ्चलाधिश कार्यालयले लेखेको पत्र बमोजिम सरकारले ललिता निवास क्याम्प भित्रको जग्गा राष्ट्रियकरण भएको र उक्त जग्गा श्री ५ को सरकारको नाममा दर्ता गर्नु भन्ने पत्रादेश गर्दागर्दै पनि निज धर्म प्रसाद गौतम तत्कालीन समयमा प्र.मा.अ. भई मालपोत कार्यालय, डिल्लीबजारमा कार्यरत रहेको अवस्थामा सरकारले अधिग्रहण गरेको जग्गा श्री ५ को सरकारको नाममा दर्ता नगरेको देखिएकोले समेत निजको बदनियत स्पष्ट हुन्छ साथै निज प्रतिवादी मालपोत विभागमा कार्यरत रहंदा मालपोत विभागबाट चं.नं. ३९२४, मिति २०४९।०९।२२ गतेको पत्र अनुसार काठमाडौं जिल्लामा २०४२/४३ सालमा श्रेष्ताबाट गुठी जनिएको जग्गाको पूर्जा तयार गर्ने सिलसिलामा निजी गुठी तथा रैकर जग्गा गुठीमा दर्ता हुन आएमा गुठीको लगत कट्टा गर्ने गुठी संस्थानको मिति २०४२।३।२० को निर्णय मै रहेको र पारित लिखत फिल्ड बुक अनुसार यो जग्गा राज गुठीको नभई मिति २०१७।०३।३१ को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखीएकोमा नापीले श्रेष्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केही कित्तामा श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिदा गुठीको २०४२।०३।२० को निर्णय, मिति २०१७।०३।३१ को लिखत, नापीको फिल्ड बुक बमोजिम गरी श्री ५ को सरकार गुठी जनिएकोलाई संसोधन गर्ने अधिकार मालपोत ऐन २०३४ को दफा ७ (३) बमोजिम संशोधन गरी २०४२।०३।१६ गुठीको नाममा दर्ता भएकोमा सोही ऐन बमोजिम अधिकार प्रयोग गरी मि.नं. १०२४ र १०२५ अन्तर्गतका जग्गाहरु व्यक्तिका नाममा फिर्ता दिने सहमति दिने निर्णय गरी मालपोत कार्यालय डिल्लीबजारलाई पत्र लेखी दिई सरकारी जग्गालाई रोक्का र जफत भनी भूमि सुधार तथा व्यवस्था मन्त्रालयको मिति २०४७।०६।०२ को पत्रानुसार मालपोत विभागको २०४७।०६।०७ को बमोजिम जग्गा फिर्ता दिने निर्देशन गरेको, उल्लेखित निर्देशन दिंदा बास्तविक तथ्यहरुको बिष्लेषण नगरी नियमन गर्ने निकाय मालपोत विभागले नियमन नगरी २०२२।०२।२४ गतेबाटै सरकारी स्वामित्वमा रहेको जग्गगालाई २०४७ सालको मन्त्रिपरिषद्को निर्णयलाई अपब्याख्या, दुरुपयोग र विपरित समेत हुने गरी सरकारले कानून बमोजिम अधिग्रहण गरेको जग्गालाई जफत भनी फरक व्यहोरा पारि किर्तेपूर्ण कार्य गर्नमा आधिकारिक निर्देशन सहित पत्राचार गर्ने कार्यमा हस्ताक्षर गरी मालपोत कार्यालय

डिल्लीबजारलाई पत्राचार गरेको, प्रतिवादी शैलजा राणा समेतले दिएको निवेदनलाई आधार बनाई किर्ते पूर्ण कार्य गर्न निर्देशन दिई सरकारी जग्गा अनधिकृत व्यक्तिहरुलाई ना.सा.दा.खा गरी, गराई सो बापत आफ्ना सालीको छोरा नाता पर्ने मोहन प्रसाद भट्टराई र प्रतिवादी शशिकला सुब्बाको संयुक्त नाममा २३ ह कि.नं. १३ क्षे.फ. १-३-०-० रोपनी जग्गा, श्रीमती खिमादेवी आङ्बुहाङ र मोहन प्रसाद भट्टराईको संयुक्त नाममा २३ ह कि.नं. १८ क्षे.फ. १-१४-२-० रोपनी गरी जम्मा ३-१-२-० रोपनी क्षेत्रफल सरकारी जग्गा राणाहरुबाट हालै देखिको वकसपत्र लिखत पारित गर्ने गराउने कार्य गरेको देखिन्छ, हालै देखिको वकसपत्रको लिखतमा “ तपाई लिनेले हाम्रो हरेक कामकाजमा रिझाई आए बापत उल्लेखित जग्गा हा.बा. गरी दिँए आफ्नो नाममा दा.खा.गराई भोगचलन गर्नुहोला” भन्ने व्यहोरा उल्लेखित भएकोमा निज मोहन प्रसाद भट्टराईले केन्द्रीय अनुसन्धान व्यूरोको छनविन समिति समक्ष गरेको कागजमा शैलजा राणा समेतलाई चिन्दिन,ललिता निवासको जग्गाहरु प्रति आना २५ हजारका दरले शर्मा जी भनी बोलाउने रामनाथ घिमिरे मार्फत लिएको हुँ ,शशिकला शुब्बा मेरो मित भाई मिन बहादुर आङ्बुहाङको श्रीमती भएकोले नपुग पैसा पुर्याएर शशिकला सुब्बासँग संयुक्त रुपमा जग्गा खरिद गरेका हौँ भनी खुलाई लेखाई दिएबाट निज धर्म प्रसाद गौतम, निजको सालिको छोरा मोहन प्रसाद भट्टराई र राणा परिवार सँग कर्मचारी र सेवाग्राही बाहेक पूर्व चिनजान तथा पारिवारिक सम्बन्ध रहेको नदेखिकोले निज प्रतिवादी **धर्म प्रसाद गौतम**ले ललिता निवास क्याम्प भित्रको माथी उल्लेखित सरकारी जग्गामा गुठी जनाउने निर्णय गरेको र उक्त जग्गाहरु लिखत किर्ते मार्फत शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गराउने कार्य गरेको कारणले घुस बापत माथी उल्लेखित जग्गा आफ्ना सालीको छोरा नाता पर्ने मोहन प्रसाद भट्टराई समेतको नाममा हालै देखिको वकसपत्र लिखतबाट लिएको देखिन्छ । यसरी निज प्रतिवादी धर्म प्रसाद गौतम प्रस्तुत किर्ते तथा सँगठित अपराध कसूरमा संलग्न भई लाभ लिएको प्रष्ट देखिन्छ ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ ( का.फौ.त.) ,बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **धर्म प्रसाद गौतम** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही, जग्गाधनीको नम्बर ९१/९२, जग्गाधनीको नाम पशुपती, वतन बागमती अंचल लेखेको भूमि सुधार मन्त्रालय जग्गाधनी दर्ता स्रेस्तामा गुठी लगत तथा तहसिल कार्यालयको च.नं.२४२२ मिति ०४२।१।१८को पत्रको तोक आदेशले वार्ड नं.२३क्ष कि.नं.८, १०,११, १२, १३, १४,१५,१६, २५,२६, २७,२९,३०, ३१, ३२,४१, ४२,४५, ४६,४७,४९,५०,५२,६३,६४,६५,६६ को

जग्गा श्री ५ को सरकार गुठीका नाउमा गएको भनी मिति ०४२।३।१६ मा तोक निर्णय गरेको ,भूमि सुधार मन्त्रालय जग्गाधनी दर्ता श्रेस्तामा गुठी लगत तथा तहसिल कार्यालयको च.नं.२४२२ मिति ०४२।१।१८को पत्रको तोक आदेशानुसार वार्ड नं.२३ क्ष कि.नं. ६७,६९, ७०,७१ ,८१, ८२, ८३ को जग्गा श्री ५ गुठीका नाउमा गएको भनी मिति ०४२।३।१६ मा तोक निर्णय गरेको,प.सं.०४९।५०। १०२४, १०२५ जग्गा दर्ता च.नं २६५२ मिति ०२५६।८।१ को पत्रसाथ संलग्न फायल पेश हुँदा काठमाडौं जिल्ला २०४२।४३ सालमा स्रेस्ताबाट गुठी जनिएको जग्गाको पूर्जा तयार गर्ने सिलसिलामा निजी गुठी तथा रैकर जग्गा गुठीमा दर्ता हुन आएमा गुठीको फिल्डबुक गर्ने गुठी संस्थानको मिति ०५२।५।३० को निर्णयमै रहेको र पारित लिखत फिल्डबुक अनुसार जग्गा राजगुठीको नभै मिति २०१७।३।३१को लिखत भित्रको जग्गा हो भन्ने कुरा लिखतबाट देखीएकोमा नापीले स्रेस्ता तयार गर्दा श्री ५ को सरकार भनी उल्लेख गर्नु पर्नेमा केहि कित्तामा श्री ५ को गुठी भनी गल्ती उल्लेख भएको देखिदा गुठीको ०४२।३।२० को निर्णय मिति २०१७।३।३१को लिखत फिल्डबुक बमोजिम गरी श्री ५ को सरकार गुठी जनिएकोलाई संसोधन गर्ने अधिकार मालपोत ऐन २०३४को दफा ७(३) बमोजिम मालपोत कार्यालयलाई भएकोले मिति २०४७।२।१४, २०४७।४।८, २०४७।५।३ र भूमिसुधार तथा व्यवस्था मन्त्रालयको मिति २०४७।६।२ को पत्र अनुसार मलापोत विभागको मिति २०४७।१।७को पत्र बमोजिम श्रेस्ता रोक्का तथा प्राप्त भएका जग्गाहरु फिर्ता दिन बाकी जग्गाहरु फिर्ता गरी सोको जानकारी गराउन हुन भनी शैलजा राणा समेतको मिसिल थान ०२ श्री मालपोत कार्यालय डिल्लीबजार, काठमाडौंलाई मिति २०४९।९।२२ गते फिर्ता पठाएको निज धर्म प्रसाद गौतमले बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारको जग्गालाई आफ्नो अख्तियार दुरुपयोग गरी सरकारी जग्गालाई गुठी कायम गरी श्रेस्ताबाट लगत कट्टा गरेको,आफू मालपोत कार्यालयवाट मालपोत बिभागमा गए पश्चात भूलबस उक्त कित्ता जग्गाहरु गुठी कायम भएको, अत: मालपोत ऐन, २०३४ बमोजिम गुठीको लगत कट्टा गरी सरकारको नाममा कायम गर्न मालपोत कार्यालय प्रमुखलाई निर्देशन दिई आफूले नै तोक निर्णय गरेको कामलाई भुलबस हुन गएको भनी सच्याउन निर्देशन षडयन्त्र र दोहोरो भूमिका खेलेको सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको तोक निर्णय गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, तोक निर्णय गर्दा कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्ने श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी धर्म प्रसाद गौतम समेतका ब्यक्तिहरुले **विगो रु.३०,४१,४४,६१६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | १,०८,७९,३१०/- | ३०,४१,४४,६१६।- |

५) **प्रतिवादी शिवजी भट्टराईको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिति राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बाली नाली लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापी हुँदा फिल्डबुकमा के कसरी श्री ५ को सरकार समरजंग कम्पनी भन्ने लेखिन गई कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामीलाई केही जानकारी छैन उक्त जग्गा रेखा घिमिरेले राजिनाम पास गरी खरिद गरी लिएको हो, सो जग्गाको नयाँ नापीमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटोको डोब मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिंदा कसैलाई सन्धि समर्पण पर्ने अवस्था समेत छैन। निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अध्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भनी तत्कालीन का.जि.का.म.न.पा. वडा नं. ४ का वडा सचिब निज प्रतिवादी शिबजी भट्टराई समेतले रोहवरमा बसि निजले सहिछाप समेत गरेको देखिन्छ। यसरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा देख्दै पनि उक्त सरकारी जग्गाको संरक्षण समेत गर्नु पर्ने सरकारी कर्मचारीको दायित्व पुरा गर्नु पर्नेमा उक्त जग्गा सरकारको हो भन्ने कुरालाई के कसरी लेखिन गएको हो भनी झुट्टा व्यहोरा र फरक मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्काको रोहबरमा शिवजी भट्टराईले हस्ताक्षर समेत गरेको हुँदा उक्त निज प्रतिवादी लिखत किर्ते कसूरमा संलग्न रहेको प्रष्ट देखिन्छ, अत: निज प्रतिवादी शिबजी भट्टराईले जानी बुझी किर्ते कागजमा साक्षी बसी आरोपित सारभूत कसूर गर्न सहयोग, मद्दत, सल्लाह र परिस्थिति श्रृजना गरीदिने मतियारको भूमिकामा रहेको पुष्टी भएको देखिन्छ।

साबिकको काठमाडौं जिल्ला का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा सुनिती राणाको नाममा दर्ता गर्ने क्रममा काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयका तत्कालिन वडा सचिव शिवजी भट्टराईले उक्त जग्गा सरकारी भएकोले ब्यक्ति विशेषको नाममा दर्ता गर्न मिल्दैन भनी सिफारिस गर्नु नपर्नेमा सो नगरी नेपाल सरकारको जिम्मेवार कर्मचारी भएर कानुन बमोजिम हुनु पर्ने भन्दा तथ्य बिपरित निबेदक हेमाद्री शमसेरको पिता कनक शमसेर जवराको नाममा दर्ता हुने उल्लेखित कित्ताहरु भएको र कनक शम्सेरको परलोक भैसकेकोले परलोकवालाको हकदार निबेदक हेमाद्री शमसेर जवरा छोरा एक र श्रीमती सुनिती राणा समेत जवान २ हकदार भएको र दर्ता समयमा दर्ता छुट भई दर्ता हुन बाँकी भएको निबेदकको माग अनुसार दर्ता हुने निबेदक समेतको हकभोकमा हाल भोगचलन भईरहेको जग्गा भएको हुँदा तहाँको नियम अनुसार नामसारी गरी जग्गा धनि प्रमाण पुर्जा उपलब्ध गराईदिन सिफारिस गर्दछु" भनी मिति २०६०।०५।१२ मा झुठो ब्यहोरा उल्लेख गरी मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको किर्ते पत्र समेतको कागजातहरुको आड हाली मालपोत कार्यालय डिल्लीबजारबाट मिति २०६२।०२।०३ मा गैरकानूनी ढंगबाट उक्त जग्गा सुनिती राणाको नाममा दर्ता कायम भएको देखिन्छ, यसरी शिवजी भट्टराई समेतका प्रतिवादीहरुले सँगठित रुपमा आपराधिक समुहको तहगतरुपमा जिम्मेवारी बाडफाड गरी सरकारी जग्गा ब्यक्ती विशेष सुनिती राणाको नाममा कायम गरी प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

प्रतिवादी शिवजी भट्टराई का.म.पा. वडा नं. ४ को तत्कालिन वडा सचिब रहेको समयमा का.म.पा. वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हानी नोक्सानी हिनामिना गर्ने उद्धेश्यले प्रेरित भई सँगठित रुपमा योजना बनाई उल्लेखित स्थानको बिभिन्न कित्ताका सरकारी जग्गाहरु बिभिन्न व्यक्तिको जोतभोगमा रही निज व्यक्तिहरु मोही समेत रहेको भन्ने समेत व्यहोराको गलत, झुठा तथा काम तामेल गर्ने कर्मचारीको हस्ताक्षर समेत नभएको बेरितको सर्जिमिन मुचुल्काको रोहबरमा बसी सरकारी जग्गा हिमामिना गर्ने कार्य गरेको, मोही भनिएकाहरुले जग्गाहरू नामसारी गरी जग्गाधनी पूर्जा पाऊँ भनी निवेदन दिएकोमा सोही गलत व्यहोराको निवेदनलाई आधार मानी ती जग्गाहरू निवेदकहरूले नै निरन्तररूपमा जोत कमोद गरीरहेको भनी सर्जमिन समेत नगरी बेरितको तथा फरक व्यहोराको कीर्ते सिफारिस प्रदान गरी प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ ( का.फौ.त.) ,बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९

मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **शिवजी भट्टराई** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिडेको देखिन्छ, निवेदकको माग बमोजिम उक्त जग्गाको दर्ता, हा.सा. समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिए फरक पर्ने छैन" भन्ने नगर २३ क्ष को कि.नं. ७३, ६८, ६९, ७८, ४८, ७६, ७७ र नगर २३ ह को कि.नं. १२, २२, ३५, ३७, ३१,२५, १५, २४ को सर्जमिन मुचुल्कामा रोहवरमा बसी हस्ताक्षर गरेको । मिति २०६०।०५।१२ गते गुठी संस्थान तहसिल कार्यालय कालमोचनलाई लेखेको पत्रमा "साविक कित्ता नं ३१,३५,३७ २३क्ष ७७, २४क २१३ का जग्गाहरु टिकिन्छा गुठी मौजे हाडिगाउँ, मलिकुली खेतबाट भिड्ने जग्गा जोताहा मोही निवेदकहरुले नै साविक देखि हाल सम्म निरन्तर जोत कमोद गरी आएकोमा सोही बमोजिम सिफारिस पाउँ भनी मोहीहरुका वा रामकुमार सुवेदी मार्फत निवेदन प्राप्त भएकोमा उल्लेखित कित्ता जग्गाहरु जोताहा मोहीहरुले साविक देखि हाल सम्म निरन्तर जोत कमोद गरी आउनु भएको व्यहोरा सिफारिस गरीन्छ" भन्ने सिफारिस गरेको, निज शिवजी भट्टराईले कुनै पनि सरकारी अभिलेखहरूमा टिकिन्छा गुठी भनी उल्लेख नभएको जग्गालाई जबरजस्ती टिकिन्छा गुठीको हो भनी गलत व्यहोरा उल्लेख गरी खडा गरिएको सर्जमिन मुचुल्कामा रोहबर बसी गैरकानूनी कार्यमा संलग्न भएको, निवेदहरूले झुठो व्यहोरा उल्लेख गरी हुदै नभएको टिकिन्छा गुठीको जग्गाकलाई टिकिन्छा गुठी र उक्त कित्ता जग्गाहरू नामसारी गरी जग्गाधनी पूर्जा पाऊँ भनी निवेदन दिएकोमा सोही गलत व्यहोराको निवेदनलाई आधार मानी ती जग्गाहरू निवेदकहरूले नै निरन्तर रूपमा जोत कमोद गरीरहेको भनी सर्जमिन समेत नगरी बेरितको तथा फरक व्यहोराको सिफारिस प्रदान गरी कीर्ते समेत गरेको, ललिता निवास क्याम्प भित्र हुदै नभएको पशुपति टिकिन्छा गुठीको  नाममा जग्गा दर्ता गरी सरकारी जग्गालाई निवेदनको आधारमा मात्र पशुपति टिकिन्छा गुठीको नै हो भन्ने आसयको सिफारिस गरेको, सार्वजनिक निकायका जिम्मेवार कर्मचारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको सर्जमिन मुचुल्कामा रोहवरमा बसी कागजातहरुलाई बैधता दिनुपर्ने, निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न रही कीर्ते व्यहोराको कागजातलाई बैधता प्रदान गरेको देखिएको, **मुचुल्का गरीने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र मुचुल्का तयार गर्नु पर्ने**मा सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको मुचल्कामा बस्ने समेतको भूमिकामा रही अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी शिवजी भट्टराईले विगो **रु.४२,०३,६८,६३०।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | रु.१,११,११,१११।- | १०,५१,१२,९०३।- | १,०८,७९,३१०/- | ४२,०३,६८,६३०।- |

## ६) प्रतिवादी रुद्र कुमार श्रेष्ठको हकमा:

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयकातत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको देखिन्छ ।यसरी दर्ता प्रमाणित भएका साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनीजग्गा विभिन्न कानूनी प्रकृयाबाट समेत विभिन्न मितिमा व्यक्तिहरुको नाममा हक हस्तान्तरण भएको देखिएको र श्री ५ को सरकारको फिर्ता दिने निर्णय पूर्ब पून: नाप नक्शा भएको कारणले साविक बमोजिम नै ज.ध.महलमा समरजंग कम्पनी लेखीन गएको भएता पनि समर जंग कम्पनीको पत्र र यस कार्यालयको च.नं. ३२३४ को पत्र अनुसार जफत भएको जग्गा सम्बन्धि व्यक्तिलाई नै फिर्ता भएको हुंदा उक्त जग्गाका विभिन्न जग्गाधनीहरुले हाल साविक गरी पाउ भनी निवेदन दिए पश्चात हा.सा. को लागी कित्ता काट गर्न नापी शाखामा पठाउदा साविक दर्ता श्रेष्ता कायम भएको आधारमा नया नापी अनुसारको हा.सा. गरी दर्ता गर्न मनासिब देखिएको भनी मिसिल प्राप्त भएकोले निर्देशनको लागी मालपोत कार्यालय काठमाडौंले पत्राचर गरे पश्चात पनि ना.सु. जगन्नाथ पनेरुले मिसिल निर्देशनार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश तयार गरी तत्कालीन शाखा अधिकृत ईन्द्र प्रसाद ढुंगानाले उक्त जग्गा व्यक्तिविशेषका नाममा दर्ता प्रमाणित रहेको देखिएकोले सोही प्रमाणित श्रेष्ताका आधारमा हाल नापी अनुसारको कायम भएका कि.नं. का जग्गाहरु सोही श्रेष्तालाई आधारमानी हाल साविक श्रेष्ता मिलान गर्न बाधा नपर्ने व्यहोराको निर्देशन पठाउन मनासिब हुने देखि पेश गरेको छु निर्णयार्थ पेश गरेको, तत्कालीन निर्देशक पुष्पराज उपाध्यायले सोही कुरा मनासिब हुने गरी पेश गरे पश्चात तत्कालीन महानिर्देशक प्रतिवादी रुद्र कुमार श्रेष्ठले हुन्छ भनी निर्णय गरी मिति २०५९/०७/०१ गते निर्देशन सहित मिसिल पठाएको देखिन्छ, साथै मिति २०५९।७।१ गतेको निर्देशनले दुबिधा परेकोले श्री ५ को सरकारको सहमति आबश्यक पर्ने हुंदा पुन: बिचारको लागी मालपोत कार्यालयबाट मिसिल फिर्ता पठाएको हुंदा अन्तिम कारबाहीको लागी ना.सु. कृष्ण प्रसाद खनालले टिप्पणी र आदेश तयार गरी पेश गरेकोमा हाल साविक गर्ने काम साविक श्रेष्ताको आधारमा गर्ने बिषय भएको भनी शाखा अधिकृत खडग बहादुर गुरुङले निर्णयार्थ पेश गरे पश्चात सो सम्बन्धमा मिति २०५९।०६।२४ को निर्णय अनुसार विभागको निर्देशन भई सकेको हुंदा थप निर्देशन दिई रहनु नपर्ने र सोही पुर्ब निर्णयानुसार कारबाही गर्न मा.पो.कार्यालयमा पठाउने भनी निर्देशक पुष्पराज उपाध्यायले स्पष्ट राय पेश गरे पश्चात तत्कालीन महानिर्देशक

प्रतिवादी रुद्रकुमार श्रेष्ठले सदर गरेको देखिन्छ। यसरी निज प्रतिवादी **रुद्र कुमार श्रेष्ठ** समेतले तत्कालीन भूमी सुधार तथा व्यवस्थापन विभाग काठमाडौंको महानिर्देशक पदमा रहँदामिति २०५९/६/२४ र मिति २०६०/४/२६ मा साविक हाँडिगाऊँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निबास क्याम्पभित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नामको जग्गाधनी दर्ता श्रेस्ता खारेज गरी सरकारी जग्गाको साविक कित्तालाई नयाँ नापी अनुसार व्यक्ति विशेषको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम हुनेगरी हाल साविक गर्नको लागि मालपोत कार्यालय, डिल्लीबजारलाई गैह्र कानूनी निर्णय गरी सहमति तथा निर्देशन दिई प्रत्यक्षरुपमा प्रस्तुत किर्ते र सँगठित अपराध कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **रुद्र कुमार श्रेष्ठ** समेत भई मिति २०६२।०९।१२ मा हुपेन्द्र मणी के.सी.र रघुनाथ अधिकारी समेतले साविक कि.नं. २२ (२६२,२६७, २९५), ३५(५६,८०,५४,९), ३१ (२७८,२८४), ७३ (४८) समेतका कित्ता जग्गाका सम्बन्धमा गु.सं. केन्द्रीय कार्यालयवाट औचित्य आधार र किटानी राय प्राप्त भएपछि मात्र कारवाही अगाडि बढाउंदा उपयुक्त हुने भनी पेश गरेको टिप्पणी रायमा "गुठी संस्थानले **उल्लेखित कित्ता जग्गाहरु गुठी कायम गर्नु पर्ने आधार, औचित्य वारे एकिन राय लिनु पर्ने देखिंदा उक्त संस्थानबाट राय प्राप्त पश्चात यस वारे कारवाही टुङ्गो लगाउन उपयुक्त हुने"** भनी मिति २०६२।०९।१२ मा मन्त्रालयका सचिव (युवराज भुषाल) समक्ष पेश गरेको, ललिता निवास क्याम्प भित्र कुनै पनि गुठी जग्गा कायम नरहेको अबस्थामा टिकिन्छा गुठीमा जग्गा दर्ता गर्ने सम्बन्धी भूमि सुधार मन्त्रालयबाट टिप्पणी उठाएकोमा उक्त टिप्पणीलाई समर्थन गर्दै कारबाही फायल टिप्पणी सहित अगाडि बढाएको निज रुद्र कुमार श्रेष्ठले १० (वा १५) रोपनीको लगतसँग भिड्ने भनी ३३ रोपनीको दर्ताको लागि लेखि आउदा त्यसमा केही कैफियत नगरेको,श्री ५ को सरकार गुठीको नाममा दर्ता भएको सम्बन्धमा २०४९ सालमा नै मालपोत विभागको पत्रबाट गुठीको नभएको र भुलबस गुठी लेखिन गएको भन्ने उल्लेख भएको अवस्थामा कैफियत नगरी सोही व्यहोराको टिप्पणी उठाएको, सुवर्ण शमशेरको हकवालाले गुठीको भनेको आधारमा गुठी हुने नहुने, तथा सो कागज समेत कीर्ते भएको र सो कीर्ते कागजमा लेखिएका भन्दा बढि जग्गा दर्ताको लागि लेखि आउदा केही कैफियत नगरी सोही व्यहोरा पेश गरेको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा

व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराको टिप्पणी राय पेश गरी कीर्ते कार्यमा संलग्न रहेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको । **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको, **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुठ्ठा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी रुद्र कुमार श्रेष्ठले विगो रु.३०,४१,४४,६१६।– वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी गरेको देखिदा निज प्रतिवादी रुद्र कुमार श्रेष्ठले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | १,०८,७९,३१०/- | ३०,४१,४४,६१६।- |

## ७) प्रतिवादी बालकृष्ण श्रेष्ठको हकमाः

प्रतिवादी बालकृष्ण श्रेष्ठ शहरी बिकाश तथा भवन निर्माण बिभागमा सिनियर डिभिजनल ईन्जिनियर पदमा कार्यरत रहेको अवस्थामा ईन्जिनियर राजेन्द्रमान श्रेष्ठले कीर्ते कागजातको आधारमा तयार गरेको कीर्ते व्यहोराको टिप्पणीमा हस्ताक्षर गरी प्रमाणित गरी अगाडि बढाई नेपाल सरकार समरजंग कंपनीको नाममा रहेको सरकारी जग्गा नक्कली मोही र व्यक्ति तथा संस्थाको नाममा लैजाने टिप्पणीमा संलग्न भई सरकारी जग्गा हानी नोक्शानी गराउने टिप्पणी अगाडी बढाई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणीमा हस्ताक्षर गरी प्रमाणित गरी पेश गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियमका आधारमा टिप्पणी पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा हस्ताक्षर गरी टिप्पणी पेश गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई सँगठित रुपमा योजना बनाई तहगत रुपमा जिम्मेवारी बाडफाड गरी व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी

आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गरी विगो **रु.१०,५१,१२,९०३।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | - | १०,५१,१२,९०३।- |

८) **प्रतिवादी कलाधर देउजाको हकमा:**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४, २०४७।४।८, २०४७।५।३ गतेको निर्णय बमोजिम बि.सं. २०१७ साल पछि प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका जग्गाहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै मिति २०१८।११।१९ गते हाम्रो जग्गा तत्कालीन सरकारले जफत गरेको हो भन्ने एक मात्र ब्याहोरालाई आधार मानी तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई शैलजा राणा समेतले मिलेमतोमा सरकारी जग्गा हानि नोक्शानी गर्ने, गराउने उद्देश्यले राज्यले अधिग्रहण गरी लिएको तथ्य थाहा हुँदा, हुँदै सो तथ्यहरुलाई  लुकाई, छिपाई अनदेखा गरी जफत तथा रोक्का गरिएको भनी वास्तबिक तथ्यलाई तोडमोड गरी झुट्टा, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई तत्कालीन मालपोत कार्यालय डिल्लिबजार काठमाडौंका ना.सु. जगत प्रसाद पुडासैनी समेतले उल्लेखित जग्गा निवेदक शैलाजा राणा समेतका नाममा  ना.सा.दा.खा. दर्ता गरी फिर्ता गर्न उपयुक्त हुन्छ भनी झुट्टा,किर्ते तथा फरक व्यहोराको टिप्पणी उठाई सोही टिप्पणीलाई मालपोत अधिकृत सुरेन्द्रमान कपालीले निर्णयार्थ पेश गरे पश्चात आफ्नै कार्यालयमा रहेको, सरकारले अधिग्रहण गरेको तथ्य समेतलाई नहेरी अधिग्रहण गरेको जग्गालाई जफत भनी फरक व्यहोरा पारी जग्गा सरकारी रहेको प्रयाप्त सरकारी आधार प्रमाण हुँदा-हुदै शैलजा राणा समेतले दिएको निवेदनको व्यहोरालाई मात्र प्रमाणको रुपमा लिई अधिग्रहण गरेको जग्गालाई जफत भनी तत्कालीन मन्त्रिपरिषदको निर्णयहरुको दुरुपयोग, तोडमोड, अप-ब्याख्या तथा विपरित समेत हुने गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै सोही निर्णयलाई हचुवाको भरमा सरकारी आधार प्रमाणहरुको अध्ययन नै नगरी अधिग्रहण गरिएको जग्गा के-कति हो यकिन गर्नुपर्ने, क्षेत्रफल र कित्ता स्पष्ट गर्नुपर्ने, तत्पश्चात् अधिग्रहणमा परेको जग्गाको मुआब्जा एवं क्षतिपूर्ति प्राप्त गरे नगरेको बुझ्नु पर्ने, हदबन्दी भित्र पर्ने, नपर्ने सुनिश्चित गर्नुपर्ने र क्षतिपूर्ति नपाएको अवस्था देखिएमा पुनः विभाग, मन्त्रालय मार्फत् निर्णय गर्ने निकाय समक्ष प्रतिवेदन गर्नुपर्ने र प्रतिवेदन उपर भएको निर्णय वा निकासा बमोजिम कार्य अगाडि बढाउनु पर्नेमा यी कुनै पनि प्रक्रिया नपुर्‍याई कानून बमोजिम जानकार व्यक्तिले थाहा पाई-थाहा पाई कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराईमि.नं. १०२४ मिति २०४९।७।२५गते साविक वडा नं. २३ क्ष कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४,

५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४, ५१, ५३, ५९, र ७९ का जम्मा २६ कित्ता जग्गाको जम्मा क्षे.फ. २६-६-१-० रोपनी, मि.नं.१०२५ मिति २०४९।७।२५गते साविक २३ ह कित्ता नं ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, १६, २७, ११ जम्मा २१ कित्ता र २३ क्ष का कि.नं १८, २०, २१, २२, २३, २४ जम्मा ६कित्ता गरी जम्मा २७ कित्ता जग्गाको जम्मा क्षेत्रफल ४९-०-३-० रोपनी, मि.नं. १०२४ मिति २०४९।९।२३ साविक वडा नं २३ क्ष कि.नं ३०, ३२, ३१, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३ जम्मा १९ कित्ता को जम्मा क्षे.फ. २८-१५-३ रोपनी जग्गा र मि.नं. १०२५, मिति २०४९।०९।२३ गते २३ क्ष को कि.नं. २५, २६, २७, र २९ जम्मा ४ कित्ताको क्षेत्रफल ७-१४-०-० रोपनीसमेत जम्मा ११२-४-१-० रोपनी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. दर्ता गरी फिर्ता दिने टिप्पणी आदेशमा हस्ताक्षर समेत गरी सदर गर्ने निर्णय गरेकोर मि.नं. १०२४ र १०२५ बाट जग्गा दर्ता गर्ने सम्बन्धमा तयार पारिएको राय किताब समेतमा उक्त जग्गा फिर्ता दिन निज प्रतिवादी **कलाधार देउजाले** आफैले हस्ताक्षर समेत उक्त टिप्पणी र आदेश सदर गरी निर्णय गरेको देखिन्छ । साथै का.जि.का.न.पा. वडा नं. २३ क्ष को कि.नं. २५ को क्षेत्रफल ०-१२-०-० रोपनी जग्गा निर्णय नै नगरी राय किताबमा मात्र थपी, जनाई, फरक व्यहोरा पारीशैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरेको देखिन्छ । निज प्र.मा.अ. कलाधर देउजाले सदर गरेको टिप्पणी र आदेशमा मौजा हाडीगाऊ हा.नं. ४५६ को क्षे.फ.२७२।।।३।।२।। मध्ये ६० ने.रा. बैक र २१२।।।३।।२।। समरजंगका नाउमा सुवर्ण शमसेरको नाउबाट कट्टा भै रेखदेखमा रहेको जग्गा दाबि गरीएता पनि मिति२०२२।०२।२४ गतेको गोरखापत्र दैनिकमा मेजिष्ट्रेट अफिस काठमाडौंले प्रकाशित गरेकोसूचना बमोजिम मौजे हाँडिगाउमा दर्ता भएको स्वेत प्रभा १, कनक शमसेर १, रुक्म शमसेर १, शैलजा १, हेमन शमसेर १, हाटक शमसेर १ समेतको नाउंको दर्ता रोपनी २७२।।।।।। को हाल नाप ठहर २८४।।ऽ।।। दुईसय चौरासी रोपनी चौध आना तीन पैसा जग्गा अधिग्रहण गरिएको उल्लेख भएकोले सरकारले स्वेत प्रभा समेत ६ जनाबाट सो जग्गा अधिग्रहण गरेको देखिन्छ तर मि.न. १०२४ मिति २०४९।७।२५ को टिप्पणी र आदेशमा सो जग्गा सुवर्ण शमसेरबाट जफत भएको भनी किर्ते व्यहोरा लेखी निर्णय गरेको देखिन्छ, साथै निजको साढुदाई नाता पर्ने ईन्द्र बहादुर थापा र मिठुदेवी चापागाइँको संयुक्त नाममा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्येबाट साविक २३ ह कित्ता नं. २७ को क्षे.फ. १-१०-२-० र कि.नं. २३ ह २८ क्षे.फ. २-८-०-० हालै देखिको वकसपत्र मार्फत जग्गा लिएको देखिएको, हालै देखिको वकसपत्रको लिखतमा " तपाई लिनेले हाम्रो हरेक कामकाजमा रिझाई आए बापत उल्लेखित जग्गा हा.बा. गरी दिँए आफ्नो नाममा दा.खा.गराई भोगचलन गर्नुहोला" भन्ने व्यहोरा उल्लेख भएकोमा निज इन्द्र बहादुर थापाले केन्द्रिय अनुसन्धान व्यूरोको छनविन समिति समक्ष गरेको कागजमा मैले र मिठुदेवी चापागाईले राणाहरुलाई कुनै कामकाजमा सहयोग गरी रिझाएको होइनौ, साक्षीहरु समेतलाई मैले देखे चिनेको होइन भनी खुलाई लेखाई दिएबाट निज कलाधर देउजाको राणा परिवारसँग कर्मचारी र सेवाग्राही बाहेक पूर्व चिनजान तथा पारिवारिक सम्बन्ध रहेको नदेखिएकोले निज प्रतिवादी कलाधर देउजाले माथी उल्लेखित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरे गराएको कारणले घुस बापत आफ्नो साढु दाई ईन्द्र बहादुर थापा र परिचित अर्का प्रतिवादी मिठु देबि चापागाईको नाममा उल्लेखित जग्गा हालै देखिको वकसपत्र मार्फत प्राप्त गरी गैरकानूनी लाभ लिई प्रतिवादी कलाधर देउजाले किर्ते व्यहोराको लिखत तयार गरी गराई विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा व्यक्ती विशेषको नाममा दर्ता गरेको देखिदा निज

प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

९) **प्रतिवादी मिन बहादुर गुरुङको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ मा निर्णय गरी प्रचलित कानून बमोजिम सम्बन्धित जग्गाधनीहरूलाई पर्याप्त सुनुवाईको मौका र क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको जग्गा श्री ५ को सरकार समरजंग कंपनीको जिम्मा तथा रेखदेखमा रहेकोमा प्रजातन्त्र पुनर्स्थापनाको लागी भएका संघर्षहरुमा संलग्न भएको कारण बाट विभिन्न व्यक्तिहरुको जफत भएको सम्पत्ति मात्र गृहमन्त्रालयले छानबिन गरी एकिन भए पछी हदबन्दीको टुङ्गो लगाएर फिर्ता दिने भन्ने तत्कालीन श्री ५ को सरकार को मिति २०४७/०२/१४, २०४७/०४/८, २०४७/०५/०३ गते निर्णय पश्चात जग्गा प्राप्त गर्ने शैलजा राणा र तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारको प्र.मा.अ. कलाधर देउजा समेतको मिलेमतोमा किर्ते गरी, गराई अधिग्रहण गरिएको सरकारी जग्गालाई जफत भएको हो भनी शैलजा राणा समेतको नाममा करिव ११२ रोपनी जग्गा दर्ता भइसके पश्चात चैत्य नारायण महर्जन समेतको मोहीलाई उक्साही मोहीको तर्फबाट मध्यस्थता गरी निवेदन समेतको कागजातमा झुठो व्यहोरा उल्लेख गरी किर्ते प्रामाण तथा कागजात पेश गरी, गराई मोही नलाग्ने जग्गामा झुठा व्यहोराको किर्ते कागजातको प्रयोग गरी, गराई सरकारी जग्गामा मोही कायम गरी, गराई चैत्य नारायण महर्जन समेतको कृत्रिम मोहीको नाममा जग्गा दर्ता गराउने कार्यमा संलग्न भए लगतै कृत्रिम मोही र रुक्म शमसेर सेमतको नामबाट र उक्त सरकारी जग्गा नै २०६० सालमा झुठा व्यहोराको किर्ते निवेदन समेतको कागजात प्रयोग गरी गराई तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारको कर्मचारी प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरे समेतको मिलेमतो र संलग्नतामा हाल साविक गरी गराई उक्त सरकारी जग्गा निज प्रतिवादी मिन बहादुर गुरुङको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ७०४, ७१२, ७१६, ६६०, ७३३, ७४, ४१३, १३७, ४७६, ७०८, ७२० तथा सिट नं. १०२-१०२५-१४ को कि.नं. ३० को जम्मा क्षे.फ. ११९३.३८ वर्ग मि.र मिन बहादुर गुरुङ, राम कुमार सुबेदी, शोभकान्त ढकाल समेतको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ५०७ को क्षे.फ. ७.९५, वर्ग मिटर निज सेयर धनी रहेको भाटभटेनी डेभलपमेण्ट कम्पनी प्रा.लि. को नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. २८६, ५७, ५८, सिट नं. १०२-१०२५-२० को कि.नं. १७, ८२, ७९, १०, ८१, १२, १४, सिट नं. १०२- १०२४-१४ को कि.नं. १२१ को जम्मा क्षे.फ. २१९०.३६ वर्ग मि.जग्गा हाल दर्ता कायम रहेको देखिएको, निज प्रतिवादीको छोरा कल्याण गुरुङको नाममा सिट नं. १०२५-१५ को कि.नं. ६७१, ३८, १२६, ७३८, १३६, ३०२ र सिट नं. १०२५-१४ को कि.नं. २४, २५, ५९७ को जम्मा २६४८.८३ वर्ग मि. तथा निज प्रतिवादीको छोरी कामना गुरुङको नाममा सिट नं. १०२५-१५ को कि.नं. ३००, ७३१, २८, १५७, ७३९, ७४१, ३८५ सिट नं. १०२-१०२५-१४ को कि.नं. ७८, सिट नं. १०२५-१९ को कि.नं. २५ को जम्मा क्षे.फ. १३९१.३७ वर्ग मिटर जग्गा दर्ता कायम रहेको देखिएको तथा निज प्रतिवादी मिन बहादुर गुरुङ समेतले कि.नं. ११३ को क्षे.फ. ३८७.८ व.मी. जग्गा शोभाकान्त ढकाल समेतलाई, कि.नं. ४४ को क्षे.फ. १८२.८३ व.मी. कि.नं. ४६ को क्षे.फ. १६६.९३ व.मी. जग्गा कुमार रेग्मीलाई कि.नं. १६५ को

क्षे.फ. १९.८७ व.मी. जग्गा बिजेन्द्र जोशीलाई बिक्रि वितरण गरेको देखिएको र निजको नाममा रहेको भाटभटेनी सुपर मार्केट प्रा.लि.को नाममा रहेको कि.नं. २१३ को क्षे.फ. १०३३.३७ व.मी. जग्गा साबित्री घले गुरुङलाई, कि.नं. ८१ को क्षे.फ. १९.९६ व.मी. जग्गा शोभाकान्त ढकाल समेतलाई बिक्रि वितरण गरेको समेत देखिन आएकोले निज प्रतिवादी मिन बहादुर गुरुङले ललिता निवास क्याम्प भित्रको सरकारी सार्वजनिक जग्गालाई ब्यक्ति विशेषको नाममा ना.सा.दा.खा. गरी गराई कृत्रिम मोहीहरुको नाममा जग्गाल्याई आफ्नो अनुकुल आफ्नो परिवार भित्रका व्यक्तिहरु समेतको नाममा जग्गा ल्याई उक्त सरकारी जग्गा बिक्री वितरणगरी मस्यौट गर्ने कार्यमा निज प्रतिवादी **मिन बहादुर गुरुङ**ले सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई ललिता निबास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नाममा कायम रहेको जग्गाधनी दर्ता श्रेस्ता कट्टा गरी आफू र आफन्तहरू समेत सञ्चालक रहेको कम्पनी समेतको नाममा हाल साविक गर्ने-गराउने कार्यमा संलग्न भएबाट निज प्रतिवादी मिन बहादुर गुरुङ प्रस्तुत कसूरमा संलग्न रहेको प्रष्ट देखिन्छ।

प्रतिवादी मिन बहादुर गुरुङ अध्यक्ष रहेको भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि.ले जग्गाधनीको हैसियतले कि.नं. २११ र ५९१ को १३३.१४ ब.मी. क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र निज प्रतिवादी मिन बहादुर गुरुङले सट्टाभर्ना बापत पाएको उक्त जग्गा नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा भएको कुरा निज प्रतिवादी मिन बहादुर गुरुङलाई जानकारी भएकोले निज प्रतिवादी मिन बहादुर गुरुङले उक्त सरकारी जग्गा प्राप्त गर्न योजना बनाई **विगो रु.४,९१,८१,२४,६४६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ४७,९०,०००,०००|- | - | १२,८१,२४,६४६|- | - | ४,९१,८१,२४,६४६|- |

## १०) <u>प्रतिवादी घमन कुमार कार्कीको हकमा:</u>

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार- ४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं. २०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार

समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **घमन कुमार कार्की** समेत भई "साविक २३ क्ष कि नं २२ हाल नगर ४ को कि नं २९५, २५९ भिड्ने, साविक२३ह कि नं ३१ मा हाल नगर ४ कि नं २३२,३१४ समेत भिड्ने र उक्त जग्गामा कुनै सरकारी सार्वजनिक जग्गा नपर्ने," भन्ने व्यहोराको फिल्ड प्रतिवेदन पेश गरेको, प्लट रजिष्ट फिल्ड बुकमा २९५ (नयाँ नापीको वडा नं. ४ सि.नं. १०२५-१५ कि.नं. ९९ बाट आएक) कुलो बाटो देखिएको, हाल नक्सामा पनि बाटो देखिएको, कि.नं. ३१४ नक्सामा बाटो देखिएको, २०६९।११।१७ को गुठी संस्थान शाखा कार्यालयलाई पठाएको पत्रमा साविक वडा नं. २३ ह कि. नं. ३१ को नयाँ नापीमा २३२, २८०, २८४, ३१४, २६८ भिड्छ भनी पठाएको, २०६९।१२।५ मा मालपोत कार्यालयमा पठाएको पत्रमा सोही साविक कित्ता नयाँ नापीको कि. नं. २३२, २८४, ३१४, २६८ सँग भिड्छ भनी पठाएको, कि नं ३१४ बाटो रहेको नक्साबाट समेत देखिने तथा २५९ नयाँ नापीको कि नं ९९ (कुलो बाटो) सँग भिडी दर्ता बाँकी रहेको देखिएको अवस्थामा कुनै सरकारी सार्वजनिक जग्गा नघुसेको भनी गलत फिल्ड प्रतिवेदन पेश गरेको, मिति २०६९।०६।१८ को मन्त्रिपरिषदको निर्णय भन्दा अगाडि नै हालसाविक भिडाई हाल साविक भएका कित्ताहरू समेत किटान गरी सोही कुरा उल्लेख गरेको विषयमा पुन बढी कित्ता जग्गा भिड्छ भनी प्रतिवेदन गरेको, उक्त जग्गामा कुनै सरकारी सार्वजनिक जग्गा नपर्ने, भन्ने व्यहोराको फिल्ड प्रतिवेदन पेश गरेको निज घमन कुमार कार्कीले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक तथा कीर्ते व्यहोराको प्रतिवेदन पेश गरी कीर्ते कागजात तयार गर्ने कार्यमा संलग्न रहेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियमका आधारमा रितपूर्वकको प्रतिवेदन पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको , **प्रतिवेदन तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको । **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** प्रतिवेदन पेश गरेको , **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** म.प.को निर्णय हुदैमा हक मर्दैन, ऐन तथा अभिलेखसँग बाँझिएको व्यहोरालाई कार्यबिधि गत त्रुटी मानेर राष्ट्र सेवक कर्मचारीले ऐन नियमलाई टेकेर त्यस्ता ऐनसँग बाझिने निर्णयहरु कार्यान्वियन नगर्न पनि सक्ने भएतापनि, ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी प्रतिवेदन पेश गर्नु पर्नेमा सो नगरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी विगो **रु.१,०८,७९,३१०/-** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी घमन कुमार कार्कीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | - | - | - | रु.१,०८,७९,३१०/- | रु.१,०८,७९,३१०/- |

**११) प्रतिवादी गोपाल कार्कीको हकमा:**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४, २०४७।४।८ र २०४७।५।३ गतेको निर्णय बमोजिम बि.सं. २०१७ साल पछि प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका जग्गाहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै मिति २०१८।११।१९ गते हाम्रो जग्गा तत्कालीन सरकारले जफत गरेको हो भन्ने एक मात्र ब्याहोरालाई आधार मानी तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा सरकारी जग्गा हानि नोक्शानी गर्ने, गराउने उद्देश्यले राज्यले अधिग्रहण गरी लिएको तथ्य थाहा हुँदा, हुँदै सो तथ्यहरुलाई  लुकाई, छिपाई अनदेखा गरी जफत तथा रोक्का गरिएको भनी वास्तबिक तथ्यलाई तोडमोड गरी झुट्टा, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई तत्कालीन मालपोत कार्यालय डिल्लिबजार काठमाडौंका ना.सु. जगत प्रसाद पुडासैनी समेतले उल्लेखित जग्गा निवेदक शैलाजा राणा समेतका नाममा  ना.सा.दा.खा. दर्ता गरी फिर्ता गर्न उपयुक्त हुन्छ भनी झुट्टा,किर्ते तथा फरक व्यहोराको टिप्पणी उठाई सोही टिप्पणीलाई  मालपोत अधिकृत सुरेन्द्रमान कपालीले निर्णयार्थ  पेश गरे पश्चात आफ्नै कार्यालयमा रहेको, सरकारले अधिग्रहण गरेको तथ्य समेतलाई नहेरी अधिग्रहण गरेको जग्गालाई जफत भनी फरक व्यहोरा पारी जग्गा सरकारी रहेको प्रसस्त सरकारी आधार प्रमाण हुँदा-हुदै शैलजा राणा समेतले दिएको निवेदनको व्यहोरालाई मात्र प्रमाणको रुपमा लिई अधिग्रहण गरेको जग्गालाई जफत भनी तत्कालीन मन्त्रिपरिषदको निर्णयहरुको दुरुपयोग, तोडमोड, अप-ब्याख्या तथा विपरित समेत हुने गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै सोही निर्णयलाई हचुवाको भरमा सरकारी आधार प्रमाणहरुको अध्ययन नै नगरी अधिग्रहण गरिएको जग्गा के-कति हो यकिन गर्नुपर्ने, क्षेत्रफल र कित्ता स्पष्ट गर्नुपर्ने, तत्पश्चात् अधिग्रहणमा परेको जग्गाको मुआब्जा एवं क्षतिपूर्ति प्राप्त गरे नगरेको बुझ्नु पर्ने, हदबन्दीभित्र पर्ने, नपर्ने सुनिश्चित गर्नुपर्ने र क्षतिपूर्ति नपाएको अवस्था देखिएमा पुनः विभाग, मन्त्रालय मार्फत् निर्णय गर्ने निकाय समक्ष प्रतिवेदन गर्नुपर्ने र प्रतिवेदन उपर भएको निर्णय वा निकासा बमोजिम कार्य अगाडि बढाउनु पर्नेमा यी कुनै पनि प्रक्रिया नपुऱ्याई कानून बमोजिम जानकार व्यक्तिले थाहा पाई-थाहा पाई कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ मिति २०४९।७।२५ गते साविक वडा नं. २३ क्ष कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४, ५१, ५३, ५९, र ७९ का जम्मा २६ कित्ता जग्गाको जम्मा क्षे.फ. २६-६-१-० रोपनी, मि.नं.१०२५ मिति २०४९।७।२५गते साविक २३ ह कित्ता नं ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, १६, २७, ११  जम्मा २१ कित्ता र २३ क्ष का कि.नं १८, २०, २१, २२, २३, २४ जम्मा ६कित्ता गरी जम्मा २७ कित्ता जग्गाको जम्मा क्षेत्रफल ४९-०-३-० रोपनी, मि.नं. १०२४ मिति २०४९।९।२३ साविक वडा नं २३ क्ष कि.नं ३०, ३२, ३१, ४१, ४५,

४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३ जम्मा १९ कित्ता को जम्मा क्षे.फ. २८-१५-३ रोपनी जग्गा र मि.नं. १०२५, मिति २०४९।०९।२३ गते २३ क्ष को कि.नं. २५, २६, २७, र २९ जम्मा ४ कित्ताको क्षेत्रफल ७-१४-०-० रोपनी समेत जम्मा ११२-४-१-० रोपनी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. दर्ता गरी फिर्ता दिने टिप्पणी आदेशमा हस्ताक्षर समेत गरी सदर गर्ने निर्णय गरेको र मि.नं. १०२४ र १०२५ बाट जग्गा दर्ता गर्ने सम्बन्धमा तयार पारिएको राय किताब समेतमा उक्त जग्गा फिर्ता दिन कलाधार देउजाले हस्ताक्षर समेत उक्त टिप्पणी र आदेश सदर गरी निर्णय गरेको देखिन्छ। साथै का.जि.का.न.पा. वडा नं. २३ क्ष को कि.नं. २५ को क्षेत्रफल ०-१२-०-० रोपनी जग्गा निर्णय नै नगरी राय किताबमा मात्र थपी, जनाई, फरक व्यहोरा पारी शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरेको देखिन्छ। यसरी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा लिखत किर्ते समेत गरी व्यक्ती विशेषको नाममा ना.सा.दा.खा. गरी दर्ता गर्नको लागि खडा भएका मिसील कागजातहरु सम्मानित सर्वोच्च अदालतको च.नं. २, मिति २०६४।११।०२ को पत्र द्वारा उक्त मिसिलहरु सक्कलै पठाउन आदेश भएकोमा मालपोत कार्यालय, डिल्लीबजारको मिति २०६४/११/३०,च.नं. ४०२ को पत्रले सोही कार्यालयमा कार्यरत खरिदार **गोपाल कार्कीको** हस्ते श्री महान्यायाधिबक्ताको कार्यालय, रामशाहपथ, काठमाडौं पठाएको देखिएको तत् पश्चात, उक्त मिसिल फेला नपरेको भन्ने व्यहोराको मालपोत कार्यालय, डिल्लीबजारको च.नं. ६३७१ मिति २०७६।०१।१५ गतेको पत्र प्राप्त भएको देखिएकोले यसरी सरकारी जग्गा व्यक्ति विशेषको नाममा जग्गा दर्ता गर्ने गरी खडा भएका मिसिलहरू फेला पर्न नसकेको हुँदा मालपोत कार्यालय, डिल्लीबजारमा तत्कालिन अबस्थामा कार्यरत खरिदार **गोपाल कार्कीले** नै बदनियतपूर्वक उक्त किर्ते कसुरबाट बच्नको लागि सरकारी जग्गा किर्ते कागजातको आधारमा हानी नोक्शानी गरे, गराएको कसुरमा प्रमाणमा लाग्ने मि.नं. १०२४ र १०२५ को मिसिलहरु नष्ट गर्ने कार्य गरी निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो। **विगो रु.२९,३२,६५,३०६।– वरावरको**

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

## १२) प्रतिवादी लोकहरी घिमिरेको हकमा:

प्रतिवादी लोकहरी घिमिरे मिति २०४१।११।१२ गते देखि २०५५।७।२१ गते सम्म समरजंग कम्पनिको कार्यालय प्रमुख भई कार्यरत रहेको अबस्थामा २०२२ साल देखि श्री ५ सरकार समरजंग कम्पनीलाई ललिता क्याम्प भित्रको करिब २१२ रोपनी जग्गाको संरक्षण र रेखदेख, हक भोग तथा श्री ५ को सरकारको निर्देशन बमोजिम कुत उठाउने समेत अधिकार पाएकोमा २०२३ सालको नापी र २०४७/२०४८ सालको नयाँ नापीमा समेत श्री ५ को सरकारको नाममा रहेको जग्गामा मोही नलाग्ने भनी भूमि सम्बन्धी ऐन २०२१ मा उल्लेख गरेता पनि नक्कली मोही खडा गर्दा पनि उक्त कार्यालय र कार्यालय प्रमुखको हैसियतले मालपोत कार्यालय, भूमिसुधार कार्यालय र नापी कार्यालयमा कुनै पनि पत्राचार नगरी सरकारी जग्गामा मोही कायम गरी ब्यक्ती बिशेषको नाममा ना.सा.दा.खा. दर्ता गर्ने कार्य गर्दा समेत सो कार्य हुन नदिनेतर्फ कुनै पहल कदमी तथा श्री ५ को सरकारलाई कुनै जानकारी समेत नगराएको, गुठी लगत तथा तहबिल कार्यालयको च.नं.२४२२ मिती २०४२।०१।१८ पत्रानुसार श्री ५ को सरकारको नाममा रहेको ३४ कित्ता जग्गा २०४२।०३।१६ गते गुठीमा

जनाउँदा पनि कुनै पनि पत्राचार गरेको देखिंदैन, मालपोत कार्यालय डिल्लीबजार काठमाडौंको मि.नं. १०२४ र मि.नं. १०२५ मिति २०४९/०७/२५ र २०४९/०९/२३ को अधिग्रण भएको जग्गालाई जफत भएको जग्गा भनी फरक व्यहोरा पारी किर्ते गरी श्रीमती सुनीती राणा, रक्म शमशेर ज.ब.रा, श्रीमती शैलजा राणा, हेमन शम्शेर ज.ब.रा. र हाटक शमशेर ज.ब.रा. समेतको नाममा जग्गा नामसारी, दाखिल खारेज, दर्ता गर्ने कार्य गर्दा सम्म पनि समरजंग कम्पनी कार्यालयका तत्कालीन प्रमुख लोकहरि घिमिरेले कार्यालय प्रमुखको हैसियतले संरक्षणको निमित्त कुनै पहल वा उजुर बाजुर नगरी सरकारी जग्गाको संरक्षण नगरेको तथा समरजंग कम्पनिको च.नं. ४२, ०४९/५० मिति २०४९/५/२ को पत्रले साबिक अञ्चलाधिशको कार्यालय बागमती अञ्चलको मिति २०४४/१०/२२ को जानकारी अनुसार ललिता निबास क्याम्प भित्रको जग्गा जन्ना २९९-९-३ मध्ये जम्मा रोपनी १३५-७-३ रोपनी जग्गा मात्र यस कार्यालयको रेखदेखमा रहेको र सो जग्गा कमाउने मोही जवान ४७ बाट बाली असुल गर्ने कार्य गरी रहेको र साथै यस कार्यालयलाई साबिक अंचलाधिशको कार्यालयबाट मिति २०२३/६/२३ मा प्राप्त जानकारी अनुसार मोहीसँग भएको सम्झौता अनुसार हाल सम्म के कती कारणले मोहीको नाउ फिल्डबुक तथा लगतबाट कहाँ नभएको हो सो लगत कहा गरी पुरै नक्सा श्री ५ को सरकारको नाउमा कायम गरीनु पर्ने र यस कार्यालयको रेखदेखमा रहेको बाहेकको जग्गा कुन कुन ईकाईलाई के कती दिईएको छ र उक्त जग्गा कसरी प्राप्त भएको हो सो को अभिलेख यस कार्यालयमा नभएको भनी जग्गा राणाहरुलाई फिर्ता दिन सहज हुने गरी गोलमटोल जवाफ दिएको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**१३) प्रतिवादी बिनोद प्रसाद पौडेलको हकमा:**

मिसिल संलग्न कागज प्रमाणहरुको आधारमा साबिक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको साबिक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनि जग्गा श्री ५ को सरकारले कानुन बमोजिम उचित क्षेतिपुर्ती दिई अधिग्रहण गरी सरकारीकरण गरी उक्त जग्गाको संरक्षण गर्ने जिम्मा श्री ५ को सरकार समरजंग कम्पनीलाई दिएकोमा उक्त सरकारी जग्गा लिखत किर्तेबाट अनाधिकृत व्यक्तिहरु सुबर्ण शमशरे ज.ब.रा. र काञ्चन शम्शेर ज.ब.राका हकवालाहरू श्रीमती सुनीती राणा, रक्म शमशेर ज.ब.रा., श्रीमती शैलजा राणा, हेमन शम्शेर ज.ब.रा.र हाटक शमशेर ज.ब.रा.हरुको नाममा अनाधिकृत रुपमा ना.सा. दा.खा. गर्ने कार्य भैरहेको अवस्थामा प्रतिवादी बिनोद प्रसाद पौडेल श्री ५ को सरकार समरजंग कम्पनीको सहायक लेखापाल पदमा कार्यरत रहि उक्त कम्पनिको नाममा रहेका सरकारी जग्गाको कुत बुझ्दै आएको र अभिलेख राख्ने जिम्मा समेत निजकै रहेको अवस्थामा कार्यालयको अभिलेख तथा जग्गा सम्बन्धि बिबरणहरु दुरुस्त नराखेको, कार्यालयको अभिलेख बमोजिम कुत बुझ्ने, भर्पाई दिने, अभिलेख राख्ने जिम्मेवार ब्यक्तिले नै गुठी संस्थानबाट जग्गाहरूको सम्बन्धमा माग गरीएका जग्गाहरुको विवरणहरु नदेखिएकोले त्यही कार्यालयको रेकर्ड हेरी आवश्यक कारवाही गर्न हुन भनी मिति २०५९/०४/१० र २०६०।०४।०९ मा गैरजिम्मेवार, लापरवाहीपूर्ण जवाफ पठाएको पत्रबाट प्रष्ट देखिएकोले उक्त सरकारी जग्गा किर्ते लिखत गरी ब्यक्ति विशेषको नाममा ना.सा. दा.खा. दर्ता गर्ने कार्यमा निजको प्रत्यक्ष संलग्न रहेको देखिएको र उक्त कार्य गरे

बापत सोही सरकारी जग्गा मध्येबाट र.नं. १५२१२ मिति २०५०।२।२६ गते आफ्ना नातेदार श्रीमती बिद्या गौतम पौडेलको नाममा का.जि. साविक २३ ह को कि.नं. २१ को क्षे.फ.०-३-०-० र २३ ह को कि.नं. ३४ को क्षे.फ ०-११-०-० गरी जम्मा ०-१४-०-० रोपनी सरकारी जग्गा राणाहरुबाट हालै देखिको बकसपत्रको लिखत पारित गरी गराई विगो **रु.२९,३२,६५,३०६।–** वरावरको जग्गा लिई प्रत्यक्ष लाभ लिएको देखिदा निज प्रतिवादी विनोद प्रसाद पौडेलले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

१४) **प्रतिवादी योगराज पौडेलको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिति राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अद्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भन्ने समेत व्यहोराको ना.सु. श्री हरी पुडासैनी र ना.सु. नारायण राज मिश्रले स्थानियको रोहबरमा मुचुल्का तयार गरे पश्चात तत्कालीन मालपोत कार्यालय डिल्लीबजार काठमाडौंका खरिदार नारायणराज मिश्रले सर्जमिन मुचुल्का अनुसार हा.सा. गर्न उपयुक्त हुन्छ भनी टिप्पणी आदेश उठाए पश्चात प्रतिवादी तत्कालिन ना.सु. **योगराज पौडेलले** उक्त जग्गा हा.सा.को लागी कित्ता काट गरी पठाईदिन नापी शाखालाई लेख्न मनासिब देखिएको भनी टिप्पणी र आदेश पेश गरेको र सोही टिप्पणी आदेशलाई सदर गरी जग्गामा देखिएको बाटोको संकेत कट्टा गरी कि.का. गरी पठाईदिने भनी नापी शाखा डिल्लीबजारलाई लेखी पठाएर कित्ता काट भई आए पश्चात हाल साविक गर्ने मिति २०६१/०६/२० गतेको टिप्पणी र आदेशको निर्णयमा संलग्न भएको देखिन्छ । यसरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा- देख्दै पनि उक्त सरकारी जग्गाको संरक्षण समेत गर्नु पर्ने दायित्व सरकारी कर्मचारीको हैसियतले पुरा गर्नु पर्नेमा झुट्टा व्यहोरा र फरक

मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिने कार्य गरेको देखिदा निज प्रतिवादी योगराज पौडेलले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

१५) **प्रतिवादी नारायणराज मिश्रको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिती राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बाली नाली लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापी हुँदा फिल्डबुकमा के कसरी श्री ५ को सरकार समरजंग कम्पनी भन्ने लेखीन गई कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामीलाई केही जानकारी छैन उक्त जग्गा रेखा घिमिरेले राजिनाम पास गरी खरिद गरी लिएको हो, सो जग्गाको नयाँ नापीमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटोको डोब मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिंदा कसैलाई सन्धि समर्पण पर्ने अवस्था समेत छैन । निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अद्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भनी तत्कालीन खरिदार प्रतिवादी **नारायण राज मिश्र** समेतले सर्जमिन मुचुल्का तयार गरी रोहवरमा बसि निजले सहिछाप समेत गरेको र सोही सर्जमिन मुचुल्का अनुसार हा.सा. गर्न उपयुक्त हुन्छ भनी टिप्पणी आदेश उठाए पश्चात प्रतिवादी योगराज पौडेल समेतले उक्त जग्गा हा.सा.को लागी कित्ता काट गरी पठाई दिन नापी शाखालाई लेख्न मनासिब देखिएको भनी टिप्पणी र आदेश पेश गरेको र सोही टिप्पणी आदेशलाई सदर गरी जग्गामा देखिएको बाटोको संकेत कट्टा गरी कि.का. गरी पठाईदिने भनी नापी शाखा डिल्लीबजारलाई

लेखी पठाएर कित्ता काट भई आए पश्चातहाल साविक गर्ने मिति २०६१/०६/२० गतेको टिप्पणी र आदेशको निर्णयमा संलग्न भएको देखिन्छ। यसरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा- देख्दै पनि उक्त सरकारी जग्गाको सुरक्षा समेत गर्नु पर्ने सरकारी कर्मचारीको हैसियतले दायित्व पुरा गर्नु पर्नेमा उक्त जग्गा सरकारको हो भन्ने कुरालाई के कसरी लेखीन गएको हो भनी झुट्टा व्यहोरा र फरक मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्काको रोहबरमा बसि हस्ताक्षर समेत गरेको तथा रेखा घिमिरेको जग्गाको हा.सा.को टिप्पणी र आदेशमा समेत संलग्न रहेको देखिदा निज प्रतिवादी नारायणराज मिश्रले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**१६) <u>प्रतिवादी अरुण कुमार श्रेष्ठको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा अमिन निज प्रतिवादी अरुण कुमार श्रेष्ठ समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९, ३० र २०४७/०८/०६, ०७,०८,११,१२,१३,२५,२६,२७ र २०४८/१२/२१,२२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ। यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हँदै सोको जानकार रहेका तत्कालीन नापी कार्यालयका कर्मचारीहरु प्रतिवादी अमिन **अरुण कुमार श्रेष्ठ** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ। अत: निज प्रतिवादी अरुण कुमार श्रेष्ठले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदाहुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ। यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**१७) प्रतिवादी ध्रुव प्रसाद अर्यालको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा र प्रतिवादी ध्रुव प्रसाद अर्याल समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७, २८, २९, ३० र २०४७/०८/०६, ०७, ०८, ११, १२, १३, २५,२६,२७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु ना.अ. निज प्रतिवादी **ध्रुव प्रसाद अर्याल** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी ध्रुव प्रसाद अर्यालले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदाहुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार देखिदा निज प्रतिवादी ध्रुव प्रसाद अर्यालले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**१८) प्रतिवादी रमेश कुमार पोखरेलको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत

बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **रमेश कुमार पोखरेल** समेत भई आ-आफ्नो जिम्मेवारीमा रही, मिति २०६९।०६।०१ गतेको गोरखापत्रमा गुठी संस्थान शाखा कार्यालय काठमाडौंबाट प्रकाशित गरिएको हकदावी सम्बन्धी ३५ (पैतिस) दिने सार्वजनिक सूचना पशुपति टिकिन्छा गुठीको लगतमा भिडि दर्ता हुने नापीमा जोताहा मोही नाति डंगोल महर्जनको कालगतिले परलोक भई सकेको हुँदा निवेदन पर्न आएको, मोठ श्रेस्ता हेर्दा जग्गाधनी महलमा श्री ५ सरकार जोताहा नाति डंगोल का.ई. बटुटोल भई कि.नं. ३५ मि.नं. ६६१/०५१/५२ मा भिडेको भनी उल्लेख भई मोठ दर्ता वाँकि रहेको देखिन आएको, निजले जोतभोग गर्दै आएका बिभिन्न कित्ता जग्गाहरु निवेदकहरु (लक्ष्मी महर्जन, देव नारायण महर्जन र मैया महर्जन) का संयुक्त नाममा नामसारी दर्ता तथा हा.सा. समेत गरीदिंदा कसैको हक हनन हुने भए वा गुठी कायम हुनु नपर्ने भए स-प्रमाण तोकिएको म्याद भित्र हकदावी गर्न आउनुहोला अन्यथा नियमानुसार भई जानेछ) (साविक कि.नं. ३५ सम्बन्धी सूचना) प्रकाशित हुँदा उक्त मितिको म्याद भित्र **रमेश कुमार पोखरेल** कार्यालय प्रमुख रहेको निज रमेश कुमार पोखरेलले गोरखापत्रमा ३५ दिने ज.ध. श्री ५ को सरकार समरजंग कम्पनी जनिएको सूचना जारी हुँदा हुँदै जिम्मेवार कम्पनी कार्यालय प्रमुख भएर पनि ज.ध. श्री ५ सरकार जनिएको सूचना जारी हुँदा पनि उक्त सूचना उपर जग्गा दावी उजूर गर्न नगएको, उक्त सूचनाहरु प्रकाशित हुँदा समेत गलत मनसायले आफ्नो जग्गाको प्रमाण लिई दावी उजूर गर्न नगएको, सरकारी जग्गाको हक मेटाई सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा गुठीको नाममा कायम गरी मोही समेत कायम गर्न अनुकुल हुने गरी, जग्गाको अभिलेख समेत खोज तलास नगरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुऱ्याउने गलत नियतले पत्राचार गरी सरकारी जग्गाको हकदावी गर्न आउने सूचना जारी हुँदा समेत दावी गर्न नगएको **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई अभिलेख एकिन गरी गरेर आफ्नो जग्गाको म्याद भित्र दावी लिन जानु पर्नेमा सो नगरी,** अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्यको प्रपञ्चमा सामेल भई आफ्नो स्वामित्वमा भएको जग्गाको दावी गर्न नगएको देखिदा निज प्रतिवादी रमेश कुमार पोखरेलले विगो **रु.१,०८,७९,३१०/-** वरावरको सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादी **रमेश कुमार पोखरेल**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१९) <u>प्रतिवादी बाबुराजा महर्जनको हकमा:</u>**

मिसिल संलग्न कागज प्रमाणहरुबाट साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी

जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम मोही तीर्थमाया महर्जनले मिति २०६१/२/२८ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये साविक २३ क्ष कि.नं. ६०(१७६) को क्षे.फ. ०-९-०-० को जम्मा रु.६,००,०००/- (छ लाख), साविक २३ ह को कि.नं. ८ (८०, २३५, २३९, २४१, २८९, २४४, २४६) को जम्मा क्षे.फ. ५-६-१-३ रोपनी जग्गाको जम्मा रु.५४,००,०००/ (चौवन्न लाख) लिई मिनबादुर गुरुङ, माधवी सुबेदी, उमाकुमारी ढकाल्नीलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही द्वारिकामान महर्जनले मिति २०६१/८/२८ गते सविक २३ ह कि.नं. २७,२८ (२८१, १०२, २७४,२७५,३०७) को जम्मा क्षे.फ. २-५-०-० को रु २२,००,०००/- (बाईस लाख), कि.नं. २७६,१००,२८७ को क्षे.फ.०-१४-३-३ रोपनी जग्गाको रु १९,५०,०००/- (उन्नाईस लाख पचासहजार) तथा साविक २३ ह कि.नं. ३३ (६०) को क्षे.फ. ०-५-०-१ को रु ३,२५,०००/- (तीन पच्चिस हजार) रकम लिई उमा कुमारी ढकाल्नी र माधवी सुबेदीलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही साईला महर्जनले मिति २०६१/८/२२ गतेसाविक २३ क्ष को कि.नं. २२ (कि.नं. १२५, ११८, १२१, १२३, १२८, १३०) को जम्मा क्षे.फ. १-८-३-३ रोपनी जग्गाको जम्मा १०,००,०००/-(दश लाख) रकम लिई सरला घले गुरुङलाई मोहीयानी हक छाडेको रकृत्रिम मोहीकान्छा महर्जनले मिति २०६१/२/२२ गते वडा नं. ०४ कि.नं. २८६, ५७, ५८, ८१, १२, १४ को जम्मा क्षे.फ. ०-१०-२-३.५ रोपनी जग्गाको जम्मा रु ७,००,०००/- (सात लाख) रकम लिई उमाकुमारी ढकाल्नी र सरला घले गुरुङलाई मोहीयानी हक छाड्दा तयार गरेका लिखतहरुमा निज प्रतिवादी **बाबुराजा महर्जन** साक्षी बसी प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार- ४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं. २०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा  फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी बाबुराजा महर्जन समेत भई  "साबिक नगर २३ क्ष कि.नं.७८ को क्षे.फ.२-९-० जग्गा पशुपति टिकिन्छा गुठीको खला नं.१० को दर्तावाला मोही आशामरु ज्यापुको नाउँमा भिड्ने जाग्गा हो र उक्त जग्गा नापीको समयदेखि हालसम्म निवेदक लक्ष्मी नारायण महर्जनले नै जोत भोग गरी आएकोले निजकै नाउँमा दर्ता हा.सा.गरी ज.ध.प्र.पु.उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको ,"साबिक २३ ह कि.नं.४० को क्षे.फ. ०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मध्ये भिड्ने हो,उक्त जग्गाको जोताहा महलमा हर्क नारायण डंगोल लेखिएको भएता पनि नापी अगावैदेखि रामकृष्ण महर्जनले नै जोत भोग गरी आएकोले

निजकै नाउँमा दर्ता हा.सा.समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको**, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुट्ठो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुट्ठा प्रमाणलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा **साक्षी बसी** आरोपित सारभूत कसूर गर्न सहयोग, मद्दत, सल्लाह र परिस्थिति श्रृजना गरीदिने मतियारको भूमिकामा रहेको हुँदा निज प्रतिवादी **बाबुराजा महर्जनले** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिएको छ।

प्रतिवादी बाबुराजा महर्जनको पिता तुईई भाई भन्ने पंच नारायण महर्जनको हकमा मिति २०५८/०१/१४ गते निजका वारेश राम कुमार सुबेदीले साबिक नगर २३ क्ष को कि.नं. २८ र ४२ को क्षेत्रफल क्रमश: ३-१५-०-० र ०-५-०-० गरी जम्मा क्षेत्रफल ४-४-०-० जग्गा कित्ता नापीका समयमा फिल्डबुकमा मोही पंच नारायण महर्जन कायम भई ज.ध. खाली भएको र कैफियत महलमा यो जग्गा श्री ५ को सरकारको भनी जनिएको र मा.पो.का. काठमाडौंको ज.ध. दर्ता श्रेष्तामा श्री ५ को सरकार गुठी भनी जनिन गएकोमा नापीका समयमा अज्ञानता वश मलाई गुठीको यकिन नाम थाहा हुन नसकी ज.ध. श्री ५ को सरकार वा श्री ५ को सरकार गुठी भनी कैफियत महल र ज.ध. दर्ता श्रेष्तामा कायम हुन गएता पनि यस का.गु.त. कार्यालय मार्फत उक्त जग्गा मेरा नाममा दर्ता गरी ज.ध. पुर्जा पाउँ भनी का.गु.त. कार्यालय कालमोचनमा निवेदन दिएको, का.न.प. वडा नं. २३ क्ष कि.नं. २८ को क्षे.फ. ३-१५-० मा मोही पंच नारां महर्जन का.ई. ठहिटी र ज.ध. मा अञ्चल आदेश श्री ५ को सरकारलाई अधिया कुत बुझाएको जनिएको, का.न.प. वडा नं. २३ क्ष को साबिक २ नं. अनुसूची बाट देखिएको भन्ने व्यहोराको भू.सु.का. काठमाडौंको च.नं. ५३१९ मिति ०५८/२/३ को पत्र र नगर २३ क्ष कि.नं. २८, ४२ समेतको जग्गा दोहोरो दावी नदेखिएको भन्ने मा.पो.का. काठमाडौंको प.सं. गुठीमोठ/०५७/०५८ मिति ०५८/२/१८ को पत्र र निवेदकको निवेदन व्यहोरालाई समर्थन गर्ने गरी अन्य निवेदकहरुलाई राखि गुठी संस्थान तहसिल कार्यालयबाट सर्जिमिन गरेको र निज निवेदकको नाममा मोही दर्ताको लागि का.म.पा. ४ वडा कार्यालयका वडाध्यक्ष रत्न प्रसाद जोशीले फिल्डबुक तथा ज.ध. श्रेस्ताको अभिलेख विपरित २०५८/५/११ मा सिफारिश गरेको साथै वि.सं. २०६६।९।१३ गते भूमिसुधार कार्यालयमा मोही तुईई भाई भन्ने पंच नारायण महर्जनको मृत्यु भइसकेकोले निज बाबुको हकमा म छोरा **बाबुराजा महर्जन**लाई सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ भनी श्रीकृष्ण महर्जनको वारेश राममणी सिग्देलले साविक २३ क्ष को कि.नं. ४२, २८ को क्षेत्रफल क्रमश: ३-१५-०-० र ०-५-०-० गरी जम्मा क्षेत्रफल ४-४-०-० रोपनी हाल वडा नं. ४ सिट नं. १०२५-१५ कि.नं. १४५, ७२, ७३, ९१,२०५,२०६ को लागि निवेदन दिएकोमा सम्मानित सर्बोच्च अदालतको उक्त फैसलामा कोहि कसैलाई

मोही कायम नगरेको अवस्थामा समेत नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ को निर्णय पश्चात स.अ. को फैसला र मन्त्रिपरिषदको २०६६।१२।२९ को निर्णय समेतबाट मोही कायम गरी ना.सा. समेत गरी पाउँ भनी स.अ. को मिति २०६४।११।३० को फैसलालाई अपव्याख्या गर्दै निवेदन दिएको र नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र मिति २०६७।०१।३१ को निर्णय पश्चात बाबुराजा महर्जनको हकमा जग्गा मागदाबी लिई मालपोत कार्यालय, डिल्लीबजारमा दिएको निवेदनमा"मालपोत कार्यालयको मिति २०६६/१०/१०, च.नं. ९००९ को पत्र, मन्त्रिपरिषदको मिति २०६६/१२/२९ को निर्णय, सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले समेतबाट मलाई मोही कायम गरेको हुँदा मन्त्रिपरिषदको निर्णय बमोजिम जग्गाधनी प्रमाण पूर्जा पाउँ" भनी झुठा व्यहोरा सहितको निवेदन परेको, पारेको साथै सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले पञ्चनारायण महर्जन भन्ने मेरा पिता तुयुभाई महर्जनलाई मोही ठहर्याए पश्चात सो फैसला विरुद्ध भएको पुनरावलोकनमा समेत सम्मानित सर्वोच्च अदालतबाट मिति २०६५/०८/२० मा मैरै पक्षमा अन्तिम फैसला भएको, नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६/१२/२९ को निर्णयमा मेरो बाबु पञ्च नारायण भन्ने तुयुभाई महर्जन मोही कायम रहेको र यसै कार्यालयको मिति २०६६/१०/१० च.नं. ९००९ को पत्र समेतबाट पञ्चनारायण महर्जन भन्ने मेरा पिता तुयुभाई महर्जनलाई मोही कायम भएको अवस्थामा नेपाल सरकार मन्त्रिपरिषदको निर्णय कार्यान्वयनको क्रममा काठमाडौं नगर ४ सिट नं. १०२५-१५ को कि.नं. ९१ क्षेत्रफल १-५-०-०, कि.नं. ७२ क्षेत्रफल १-१२-३-२.५ रोपनी, कि.नं. ७३ क्षेत्रफल ०-१२-३-३ रोपनी, कि.नं. २०५ क्षेत्रफल ०-०-२-३ रोपनी र कि.नं. १४५ क्षेत्रफल ०-५-०-० रोपनी मध्ये कि.नं. ७२ क्षे.१-१२-३-२.५ रोपनीको पुरै, कि.नं. २०५ को दक्षिण तर्फ बाट क्षे. ०-०-१-१.५ रोपनी, कि.नं. ९१ को पश्चिम तर्फबाट क्षेत्रफल ०-२-२-० रोपनी, कि.नं. १४५ को पुर्व तर्फबाट ०-२-२-० रोपनी म बाबुराजा दा.खा. गरी पाउँ भन्ने समेत व्यहोराको निवेदन दिएको साथै मालपोत कार्यालय, डिल्लीबजारको मि.नं. ५५, मिति २०६७/०८/१६ को निर्णयले निज बाबुराजा महर्जनले सिट नं. १०२५-१५ को कि.नं. ६१५ को क्षेत्रफल ७९.४९ वर्ग मि., कि.नं. ७२ को क्षेत्रफल ९१९.१० वर्ग मि., कि.नं. ६२९ को क्षेत्रफल १०.९५ वर्ग मि. र कि.नं. ६२१ को क्षेत्रफल ७९.४९ वर्ग मि. गरी १०८९.०३ बर्ग मिटर(२ रोपनी २ आना १ पैसा ०.०१ दाम) जग्गा प्राप्त गरेको र तत्कालीन सरकारको मिति २०२१।८।१५ को निर्णयले प्रचलित कानून बमोजिम ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण भइसकेपछि मिति २०२३।३।२९, ३० र ३१ गते भएको साविक नापी बमोजिमको फिल्डबुक र श्रेष्तामा उल्लेख भएको मोहीहरुको नामावली नै कीर्ते व्यहोरा भएको साथै फिल्डबुकको अध्ययन गर्दा साविक वडा नं. २३ क्ष कि.नं. २८ र ४२ मा मोही पञ्चनारायण महर्जन र नयाँ नापी बमोजिमको सिट नं. १०२५-१५ कि.नं. ९१, ७२, ७३ मा मोही पञ्चनारायण महर्जन, २०५ मा मोही हर्क बहादुर महर्जन, १४५ मा मोही देव नारायण महर्जन उल्लेख भएको। यसरी कि.न. २०५ र १४५ मा मोही नमिलेको तर मि.नं. ५५ को टिप्पणी र आदेश खण्डको पेज नं. १६ मा फरक परेको विवरणमा समेत सो तथ्यलाई उल्लेख नगरी ढाकछोप गरेको, सोही पेजमा कि.नं. १४५ को श्रेस्ता कायम बाँकी भनी मात्र उल्लेख गरेको। यसरी मोही नमिलेको, श्रेस्ता कायम हुन बाँकी, मोठ भिडाउन बाँकी हुँदाहुँदै मालपोत अधिकारीबाट बदनियतपूर्वक टिप्पणी सदर भएको। यसरी नयाँ नापीको दुईवटा कित्ताहरू २०५ र १४५ मा मोहीको विवरण फरक परेकोले नक्कली मोही खडा गरेको स्पष्ट हुन आएको र बाबुराजा महर्जनको वारेश राम कुमार सुबेदीले पहिले का.गु.त. कार्यालय कालमोचनमा कुनै पनि गुठीको नभएको जग्गालाई नापीका समयमा अज्ञानतावश निज बाबुराजा महर्जनलाई गुठीको यकिन नाम थाहा हुन नसकी ज.ध. श्री ५ को सरकार वा श्री ५

को सरकार गुठी जनिएकाले गुठीको जग्गा हो भनी झुठो व्यहारको निवेदन दिएको, पछि निजको वारेश राममणी सिग्देलले रामकुमार सुवेदीको हस्तलिपिमा भू.सु.का., काठमाडौंमा गुठी शब्दको कहि कतै उल्लेख नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएको र निज **बाबुराजा महर्जन**ले नै मा.पो.का., डिल्लीबजारामा निवेदन दिँदा गुठी शब्द उल्लेख नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएकोले निज **बाबुराजा महर्जन**ले साबिक नगर २३ क्ष को कि.नं. २८ र ४२ को क्षेत्रफल क्रमश: ३-१५-०-० र ०-५-०-० गरी जम्मा क्षेत्रफल ४-४-०-० जग्गा पटक-पटक प्रयत्न गरी सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी र अन्य गुठी तथा मालपोत कार्यालयको कर्मचारीहरुको मिलेमत्तोमा जग्गा २०५८ साल देखि नै योजना बनाई विगो **रु.४३,४८,६२,८९१।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | २७,५२,८०,०००।- | १,२१,३४,६१५/- | ४३,४८,६२,८९१।- |

## २०) <u>नारायण महर्जनको छोरा प्रतिवादी देबनारायण महर्जनको हकमा:</u>

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं. २०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **देव नारायण महर्जन** समेत भई साविक २३ ह कि.नं. ३५ जनिई मोही नाति डंगोलको हकमा **देव नारायण महर्जन**ले साविक २३ ह कि.नं. ३५ हालको सिट नं. १०२५-१५ कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं. ८० को जम्मा क्षेत्रफल ०-१४-३-० रोपनी जग्गामा मोही कायम भएको भनी निवेदन दिएकोमा, फिल्डबुक बमोजिम साविक २३ ह को कि.नं. ३५ मा मोही नाति डंगोल देखिन्छ भने नयाँ नापी बमोजिमको फिल्डबुक सिट नं. १०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं.८० मा मोही नाति महर्जन देखिन्छ सो अबस्था बिद्यमान रहेकै अबस्थामा गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, गुठीको

जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, जग्गाको अभिलेख राख्ने सरकारी कार्यालयको अभिलेख टिकिन्छा गुठीको भनी उल्लेख नरहेको जग्गालाई वारेश मार्फत **झूट्टो विवरण र फरक व्यहोराको** कागजात तयार गर्न लगाई आफू मोही कायम रही टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गराई **कीर्तेमा संलग्न रेहको,** केन्द्रीय अनुसन्धान ब्यूरोबाट गठीत छानबिन समिमि समक्ष बालुवाटारको असैगाल खेल सरकारी हो पशुपति टिकिन्छा गुठीको होईन भन्ने कुरा पितापुर्खाबाट सुन्दै आएको हुँदा उक्त जग्गा गुठीको हो भन्ने बिश्वास लाग्दैन भन्ने समिति समक्ष कागज गरेको हुँदा **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** वारेस मार्फत मागदावी गरी जग्गाको स्वामित्व प्राप्त गरेको, आफूले मोही प्रमाणपत्र पूर्जा प्राप्त गरेको १० दिन भित्रमा वारेस भनिएका व्यक्तिलाई नै जग्गाको हक हस्तान्तरण गरेको, छानबिन समिति समक्ष मोही दावी गरे वापत रोपनीको १४/१५ लाखका दरले बिचौलिया मार्फत रकम प्राप्त गरेको भनी कागज गरी दिएको हुँदा प्राप्त रकमको श्रोत र बैधानिकता बिचार नगरी आर्थिक लोभमा निज प्रतिवादी **देव नारायण महर्जनले** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गाको मोही कायम भई प्रस्तुत कसूर अपराध गरेको देखिन्छ ।

प्रतिवादी देवनारायण महर्जनले वि.सं. २०५९।०७।०५ गते निज प्रतिवादी देवनारायण महर्जनको बाजे ड्राइभर भाइचाको हकमा २३ क्ष को कि.नं. ४८, ७६ को क्रमश: ०-१४-०-० र २-१२-०-० जम्मा क्षेत्रफल ३-१०-०-० रोपनी जग्गामा म मोही भई मेरो नै जोतभोग भएको उल्लेखित जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी झुठा व्यहोराको निवेदन गुठी संस्थान केन्द्रिय कार्यालयमा वारेश राम कुमार सुवेदी मार्फत दिएको, सो निवेदन पश्चात निवेदन कै व्यहोरानुसार का.म.पा. वडा नं. ४ को च.नं. १९८२, मिति२०५९।३।१२ को स्थानिय निकायको सिफारिस, सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी गुठीसंस्थान तहसिल शाखाबाट मिति२०६०।२।२० मा झुठा व्यहोराको, हस्ताक्षर समेत नभएको बेरितको सर्जमिन मुचुल्का तयार भएको , वि.स. २०६६।९।१३ गते भूमिसुधार कार्यालयमा सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ भनी देवनारायण महर्जनको वारेश राम मणी सिग्देलले साविक २३ क्ष को कि.नं. ४८, ७६ को क्रमश: ०-१४-०-० र २-१२-०-० जम्मा क्षेत्रफल ३-१०-०-० रोपनी जग्गा, हाल वडा नं. ४ सिट नं. १०२५-१४ कि.नं. २६,११,१२,१३,२८ र २१ को लागि निवेदन दिएकोमा सम्मानित सर्बोच्च अदालतको उक्त फैसलामा कोहि कसैलाई मोही कायम नगरेको अवस्थामा नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ को निर्णय पश्चात सर्वौच्च अदालको फैसला र मन्त्रिपरिषदको २०६६।१२।२९ को निर्णय समेतबाट मोही कायम गरी ना.सा. समेत गरी पाउँ भनी स.अ. को मिति २०६४।११।३० को फैसलालाई अपव्याख्या गर्दै निवेदन दिएको साथै नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र मिति २०६७।०१।३१ को निर्णय पश्चात "सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले मोही ठहऱ्याए पश्चात सो फैसला विरुद्ध भएको पुनरावलोकनमा समेत सम्मानित सर्वोच्च अदालतबाट मिति २०६५/०८/२० मा मोही कै पक्षमा अन्तिम फैसला भएको, नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६/१२/२९ को निर्णय बमोजिम मेरो बाजे ड्राइभर भाइचा मोही कायम रहेको र यसै कार्यालयको मिति २०६६/१०/१०, च.नं. ९००९ को पत्र समेतले मेरो बाजे ड्राइभर भाइचा (आशकाजी महर्जन) लाई नै मोही स्पष्ट गरेको अवस्थामा नेपाल सरकार मन्त्रिपरिषद्को विशिष्ट व्यक्तिहरुको निवास विस्तारको क्रममा काठमाडौं नगर ४ सिट नं. १०२५-१४ कि.नं. ११ क्षेत्रफल १-५-३-२ रोपनी, कि.नं. २६ क्षेत्रफल ०-२-३-० रोपनी, कि.नं.

३८ क्षेत्रफल ०-४-०-२ रोपनी, कि.नं. १२ क्षेत्रफल ०-१४-०-३ रोपनी र कि.नं. २१ क्षेत्रफल १-०-१-३ रोपनी मा ड्राइभर भाइचा मोही कायम रहेको र म देवनारायण महर्जन ड्राइभर भाइचाको हकवाला (नाति) को हैसियतले मेरो नाममा कायम रहने आधा जग्गा कि.नं. ११ को पुरै, २६ को पुरै ३८ को पुरै र कि.नं. १२ को उत्तर तर्फबाट ०-०-३-३ रोपनी गरी जम्मा १-१३-२-३ रोपनी  पाउँ भनी निवेदन पेश गरेको, मालपोत कार्यालय, डिल्लीबजारको मि.नं ५५, मिति २०६७/०८/१६ को निर्णयले निज देवनारायण महर्जनले सिट नं. १०२५-१४ को कि.नं.११ क्षेत्रफल ६९५.५३ व.मि., कि.नं. २६ क्षेत्रफल ८७.४३ व.मि., कि.नं. ३८ क्षेत्रफल १३१.१५, कि.नं. १२ बाट कि.नं. १४४ क्षेत्रफल २९.८५ व.मि. गरी जम्मा ९४३.६१ बर्ग मिटर( १ रोपनी १३ आना २ पैसा २ दाम) जग्गा प्राप्त गरेको र तत्कालीन सरकारको मिति २०२१।८।१५ को निर्णयले प्रचलित कानून बमोजिम ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण भइसकेको सन्दर्भमा मिति २०२३।३।२९, ३० र ३१ गते भएको साविक नापी बमोजिमको फिल्डबुक र श्रेष्तामा उल्लेख भएको मोहीहरुको नामावली नै कीर्ते व्यहोरा भएको । फिल्डबुक अध्ययन गर्दा साविकवडा नं. २३ क्ष कि.नं. ७६ पर्ती, नयाँ नापीको सिट नं. १०२५-१४ कि.नं. ११ मा मोही खालि, कि.नं. २६ मा मोही मचाभाई महर्जन, कि.नं. ३८ बाटो, सिट नं. १०२५-१४ कि.नं. १२ मा मोही ओम नारायण महर्जन र कि.नं. २१ पर्ती रहेको । मिसिल नं. ५५ को टिप्पणी र आदेश खण्डको पेज नं. १६ को फरक परेको व्यहोरामा कि.नं. १२ मोही ओमनारायण महर्जन मात्र उल्लेख गरेको तथा अन्य तथ्यहरुलाई उल्लेख नगरी ढाकछोप गर्ने प्रयास गरेको प्रष्ट देखिएको । यसरी ससाविकमा पर्ती र हालमा पनि पर्ती तथा बाटो देखिएको र मोही नमिलेको प्रष्ट देख्दा देख्दै निर्णयकर्ताले सो को बदनियत पूर्वकगैह्रकानूनी रुपले टिप्पणी सदर गरेको । यसरी निज देव नारायण महर्जनले दावी गरेको सवै कित्ताहरूमा मोहीको विवरण फरक परेकोले नक्कली मोही खडा गरेको प्रष्ट भएको, यसरी देव नारायण महर्जनको वारेश रामकुमार सुवेदीले पहिले गुठी संस्थान केन्द्रिय कार्यालयमा कुनै पनि गुठीको नभएको जग्गालाई पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी झुठो व्यहोराको निवेदन दिएको, पछि वारेश राममणी सिग्देलले भू.सु.का., काठमाडौंमा गुठी शब्दको कहि कतै उल्लेख नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएको र निज **देव नारायण महर्जनले** नै मा.पो.का., डिल्लीबजारमा निवेदन दिँदा गुठी शब्द उल्लेख नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएकोले निज देव नारायण महर्जनले २३ क्ष को कि.नं. ४८, ७६ को सरकारी जग्गा लिने खाने बदनियत राखी जग्गा कारोबारी राम कुमार सुवेदी र अन्य गुठी तथा मालपोत कार्यालयको कर्मचारीहरुको मिलेमत्तोमा जग्गा २०५९ साल देखि नै योजना बनाई विगो **रु.२५,०५,३४,६१५।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | २३,८४,००,०००।- | १,२१,३४,६१५/- | २५,०५,३४,६१५।- |

## २१) प्रतिवादी सकलानन्द महर्जनको हकमा:

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ ( का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा

गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **सकलानन्द महर्जन** समेत भई साविक २३ क्ष को कि.नं. ७३ जनिई मोही जित बहादुर महर्जनको हकमा संजय कुमार महर्जन र **सकलानन्द महर्जन**ले साविक २३ क्ष को कि.नं. ७३ हालको सिट नं. १०२५-१४ को कि.नं. ४८ को जम्मा क्षेत्रफल ०-३-०-० जग्गामा मोही कायम भएको भनी निवेदन दिएको देखिन्छ । फिल्डबुक बमोजिम साविक २३ क्ष को कि.नं. ७३ मा मोही जित बहादुर महर्जन देखिन्छ भने नयाँ नापी बमोजिमको फिल्डबुकको सिट नं. १०२५-१४ को कि.नं. ४८ मा मोही महल खालि देखिन्छ । गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अबस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत मागगरी मोहीयानी हक प्राप्त गर्ने, कि.नं. २२ को कित्ता जग्गामा साक्षी समेत बसेर सहीछाप गरेको गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, जग्गाको अभिलेख राख्ने सरकारी कार्यालयको अभिलेख टिकिन्छा गुठीको भनी उल्लेख नरहेको जग्गालाई वारेश मार्फत झूट्टो विवरण र फरक व्यहोराको कागजात तयार गर्न लगाई आफू मोही कायम रही टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गराई कीर्तेमा संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोबाट गठीत छानबिन समिमि समक्ष बालुवाटारको असैगाल खेल सरकारी हो पशुपति टिकिन्छा गुठीको होईन भन्ने कुरा पितापुर्खाबाट सुन्दै आएको हुँदा उक्त जग्गा गुठीको हो भन्ने बिश्वास लाग्दैन भन्ने समिति समक्ष कागज गरेको हुँदा **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** वारेस मार्फत मागदावी गरी जग्गाको स्वामित्व प्राप्त गरेको,आफूले मोही प्रमाणपत्र पूर्जा प्राप्त गरेको १० दिन भित्रमा वारेस भनिएका व्यक्तिलाई नै जग्गाको हक हस्तान्तरण गरेको, छानबिन समिति समक्ष मोही दावी गरेवापत रोपनीको १४/१५ लाखका दरले बिचौलिया मार्फत रकम प्राप्त गरेको भनी कागज गरी दिएको हुँदा प्राप्त रकमको श्रोत र बैधानिकता बिचार नगरी आर्थिक लोभमा गैरकानूनी कार्यमा संलग्न रही विगो **रु.२,४०,००,०००/-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गाको मोही कायम गरेको देखिदा निज **प्रतिवादी सकलानन्द महर्जन**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | २,४०,००,०००/- | २,४०,००,०००/- |

२२)	**प्रतिवादी संजय कुमार महर्जनको हकमा:**

मिसिल संलग्न हुन आएका प्रमाणहरु अध्ययन गरी बिश्लेषण गर्दा जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी सञ्जय महर्जनले साविक २३ क्ष को कि.नं. ३१ हालको का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. २९९, २०४, १९९ को क्रमश: क्षे.फ. ०-१-०-१, १-८-०-०, ०-१५-३-२ र साविक २३ क्ष कै कि.नं. ७२ को सिट नं. १०२५-१५ को कि.नं. १८७ को क्षे. ०-२-१-० रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको किर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार सुवेदी समेतको कार्य कानूनत: गैरकानूनी पूर्ण देखिन्छ। अत: निज प्रतिवादी सञ्जय महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावलि बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु गैरकानूनी देखिन्छ र निज प्रतिवादी **सञ्जय महर्जनले** मिति २०६१/०२/२१ गतेमामोही कायम भई साविक २३ क्ष को कि.नं. ३१ हालको का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. २९९, २०४, १९९ को क्रमश: क्षे.फ. ०-१-०-१, १-८-०-०, ०-१५-३-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु. २६,००,०००/- (छबीस लाख) बुझि मोहीयानी हक सरला घले गुरुङलाई र साविक २३ क्ष कै कि.नं. ७२ को सिट नं. १०२५-१५ को कि.नं. १८७ को क्षे. ०-२-१-० रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु. १,००,०००/- (एक लाख) बुझि मोहीयानी हक चमेली श्रेष्ठलाई हक छाडि वाँडफाँड लगत कट्टा गरी लाभ समेत प्राप्त गरी प्रस्तुत कसूर अपराध गरेको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ (का.फौ.त.) , बि.सं. २०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **संजय कुमार महर्जन** समेत भई साविक २३ क्ष को कि.नं. ७३ जनिई मोही जित बहादुर महर्जनको हकमा संजय कुमार महर्जन र सकलानन्द महर्जनले साविक २३ क्ष को कि.नं. ७३ हालको सिट नं. १०२५-१४ को कि.नं. ४८ को जम्मा क्षेत्रफल ०-३-०-० जग्गामा मोही कायम भएको भनी निवेदन दिएको देखिन्छ। फिल्डबुक बमोजिम साविक २३ क्ष को कि.नं. ७३ मा मोही जित बहादुर महर्जन देखिन्छ भने नयाँ नापी बमोजिमको फिल्डबुकको सिट नं. १०२५-१४ को कि.नं. ४८ मा मोही महल खालि देखिन्छ। गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अबस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत मागगरी मोहीयानी हक प्राप्त गर्ने, कि.नं. २२ को कित्ता जग्गामा साक्षी समेत बसेर सहीछाप गरेको गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, जग्गाको अभिलेख राख्ने सरकारी कार्यालयको अभिलेख टिकिन्छा गुठीको भनी उल्लेख नरहेको जग्गालाई वारेश मार्फत झूट्टो विवरण र फरक व्यहोराको कागजात तयार गर्न लगाई आफू मोही कायम रही टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गराई कीर्तेमा संलग्न रहेको केन्द्रीय अनुसन्धान ब्यूरोबाट गठीत छानबिन समिमि समक्ष बालुवाटारको असैगाल खेल सरकारी हो पशुपति टिकिन्छा गुठीको होईन भन्ने कुरा पितापुर्खाबाट सुन्दै आएको हुँदा उक्त जग्गा गुठीको हो भन्ने बिश्वास लाग्दैन भन्ने समिति समक्ष कागज गरेको हुँदा नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न वारेस मार्फत मागदावी गरी जग्गाको स्वामित्व प्राप्त गरेको, आफूले मोही प्रमाणपत्र पूर्जा प्राप्त गरेको १० दिन भित्रमा वारेस भनिएका व्यक्तिलाई नै जग्गाको हक हस्तान्तरण गरेको, छानबिन समिति समक्ष मोही दावी गरेवापत रोपनीको १४/१५ लाखका दरले बिचौलिया मार्फत रकम प्राप्त गरेको भनी कागज गरी दिएको हुँदा प्राप्त रकमको श्रोत र बैधानिकता बिचार नगरी गैह्र कानूनी आर्थिक लाभ लिई विगो **रु.३०,९०,६६,६६७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | २,४०,००,०००/- | ३०,९०,६६,६६७।- |

## २३) फरार प्रतिवादी उमाकुमारी ढकाल्नीको हकमा:

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङ्गो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी उमाकुमारी ढकाल्नी, सरला गुरुङ, माधवी सुबेदीको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. २७०, २८५, २८२, को जम्मा क्षे.फ. १४०८.९२ वर्ग मिटर, उमा कुमारी ढकाल्नी, शोभाकान्त ढकालको नाममा सि.नं. १०२-१०२५-१४ को कि.नं. ८१, ११३, ८६, ७७, ७९ को जम्मा ७०३.५५ वर्ग मिटर र उमा कुमारी ढकाल्नी, माधवी सुबेदीको नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ५४६, २६६, ९८, २९४, ७४७, २६५, २७७, ३०८, २७९,७५१, ३१६ को जम्मा ४३०९.५१ वर्ग मिटर क्षेत्रफल दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा नामसारी दाखिला खारेज गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका किर्ते कागजातहरुमा निज प्रतिवादी **उमाकुमारी ढकाल्नी**को प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न रहेको प्रष्ट देखिन्छ।

प्रतिवादी उमा कुमारी ढकाल्नी नेपाल सरकारको नाममा कायम हुनु पर्ने निम्न कित्ताका जग्गाहरु क्रमश: कि.नं. ५४८ को १८८.७९, कि.न.१४२ को १७४.८८ ब. मी. क्षे. को जग्गा सट्टाभर्ना पाएको र हाल कि.नं.५४८ को १८८.७९, कि.न. १४२ को १७४.८८, कि.न. ५ को १९६.२, कि.न. ३६ को ४१२.३५, कि.न.११ को ६९५.४२, कि.न.२६ को ८७.४३, कि.न.३८ को १३१.१४,कि.न.१४४ को २९.८५, कि.न.१३६ को १६६.९३ ब.मी. जग्गाको जग्गाधनी भएकी र निज प्रतिवादी उमा कुमारी ढकाल्नीले उल्लेखित जग्गाहरु ब्यक्ति विशेष आफ्नो नाममा कायम गर्ने कार्यको लागि निज प्रतिवादी उमाकुमारी ढकाल्नीले नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको उल्लेखित सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई

दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **उमाकुमारी ढकाल्नी** समेत भई मोही भनिएका व्यक्तिहरूको नाममा कायम भएको मोही एक हप्ता भित्रै आफ्नो नाममा संयुक्त नामसारी गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई गलत नियतले **फरक व्यहोराका** कागजातहरू तयार गर्ने कार्य सहयोग तथा संलग्न रही **कीर्ते** झुट्टा तथा वेरितका कागजातहरुको आधारमा नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गराई सो कार्यमा संलग्न रही मोहीको नाममा जग्गाधनी पुर्जा तयार भएको १० दिन भित्रै उक्त जग्गाहरु आफ्नो तथा नाममा दर्ता कायम गराई वरावरको **रु.२,९२,११,२५,४६७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २,४०,००,८५,४६७।- | - | २६,३०,४०,००० | २५,८०,००,०००/- | २,९२,११,२५,४६७।- |

## २४) फरार प्रतिवादी हुपेन्द्रमणी के.सी. (निरौला) को हकमा:

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयकातत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ.११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हालसाविक गरी पाउ भनी शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदन दिएकै आधारमा समरजंग

कम्पनी कार्यालयले च.नं.४२, मिति २०४९/०५/०२ गतेको पत्रबाट उक्त जग्गा समरजंग कम्पनीको नाममा रहेको मोहीहरुको नाम फिल्डबुकबाट लगत कट्टा गरी पुरै जग्गा श्री ५ को सरकारको नाममा कायम गर्नु पर्ने व्यहोराको पत्र वेवास्ता गरी प्रतिवादी **हुपेन्द्रमणी के.सी**.ले साविक २०२३ ।०३।२९,३०,३१ गते भएको नापीको फिल्डबुक तथा श्रेष्ता र २०४७ /२०४८ सालमा भएको नयाँ नापीको फिल्डबुकमा जग्गा धनि श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता श्रेष्ता कायम रहेको जग्गा आफ्नै कार्यालयमा रहेको जग्गाको प्रकृतिक श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त सरकारी जग्गा नयाँ नापी अनुसार जग्गाको लगत कट्टा गरी हाल साविक गर्न मिल्छ भनी का.जि.का.न.पा. साविक वडा नं.२३ “क्ष” का ४९ कित्ता जग्गा, ऐ. २३ “ह” का २७ कित्ता जग्गाहरु मिति २०६०/०८/०३ गते र मिति २०६०/०९/१५ गते हाल साविक गर्नका लागी खरिदार जिबनाथ पोखरेल समेतका कर्मचारीहरुले टिप्पणी तयार गरी पेश गरे पश्चात मालपोत अधिकृत निज प्रतिवादी हुपेन्द्रमणि के.सी.ले उक्त टिप्पणी र आदेशमा भएको व्यहोरा मनासिब देखिएकोले उक्त जग्गाहरु पून: नापी अनुसार कायम कित्ताहरुसँग श्रेष्ता अध्याबधिक गर्ने तर्फ कारबाही अगाडी बढाउन निर्णयार्थ पेश गरेको छु भनी हस्ताक्षर गरी निर्णयार्थ पेश गरे पश्चात उक्त जग्गा हालसाविक गरी श्रेष्ता अद्यावधिक गरी दिने गरी सदर गरेको छु भनी प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेले हस्ताक्षर गरी हा.सा. गर्ने निर्णय गरेको देखिन्छ, सो पश्चात उक्त जग्गा हा.सा.नामसारी गरी गराई शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतका व्यक्ति विशेषको नाममा जग्गा धनि श्रेष्ता कायम गर्ने कार्य गरेको देखिन्छ । यसरी निज प्रतिवादी हुपेन्द्रमणि के.सी.ले लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा हाल साविक गर्नको लागी निर्णयार्थ पेश गरेको टिप्पणी र आदेश किर्ते गरेको देखिएकोले निज प्रतिवादी हुपेन्द्रमणि के.सी.को प्रस्तुत कसूरमा संलग्नता रहेको प्रष्ट देखिन्छ ।

साबिकको काठमाडौं जिल्ला का.न.प.२३ “स” कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.न.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा निज सुनिती राणाको नाममा दर्ता गर्ने कार्य प्रारम्भ भएको देखिन्छ । जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६२ मा जग्गा दर्ता गर्नको लागि समितिमा पेश गर्नु पहिले जग्गाको बारेमा के कस्तो जग्गा हो ? के कसरी प्राप्त भएको हो ? भनी प्रमाणहरु बुझ्नु पर्ने, दफा ६० मा सरकारी जग्गा भएमा निबेदन खारेज गर्न सकिने भन्ने प्रावधान भएकोमा गलत कार्य हुन गर्नबाट रोक्न सकिने प्राबधान रहेको छ । यसरी उल्लेखित ब्यबस्था भए अनुसार झुठो ब्यहोराको निबेदन समेतका संलग्न किर्ते कागजातहरु खारेजी गर्नु पर्नेमा सो नगरी उक्त सरकारी जग्गा सुनिती राणाको नाममा दर्ता गरी दिए हुन्छ भनी रुक्म शमसेर ज.ब.रा. समेतको मिति २०६०।०३।२३ को झुठो ब्यहोराको मन्जुरिनामा कागज, ४ नं. वडा कार्यालयको तत्कालिन वडा सचिव शिवजि भट्टराईले मिति २०६०।५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको झुठो ब्यहोराको किर्ते सिफारीस, खरिदार श्याम कुमार क्षेत्रीले मिति २०६२।०१।११ मा तयार गरेको झुठो ब्यहोराको किर्ते सर्जमिन मुचुल्का, मिति २०६२।१।११ को हेमाद्री शमसेर ज.ब.राणाको झुठो ब्यहोरा उल्लेख गरेको हकदावी छाडेको पत्र समेतको सरकारी तथ्य विपरीत झुठो ब्यहोराको किर्ते कागजातहरुको आधार बनाई मिति २०६२।२।२ मा सरकारी अभिलेख विपरितका ब्यहोरा उल्लेख गरी सुनिती राणाको नाममा नामसारी दर्ताको लागि छुट जग्गा दर्ता समितिमा राख्नको लागि उठाईएको टिप्पणी र आदेशमा मालपोत अधिकृतको हैसियतमा र छुट जग्गा दर्ता

निर्णय पुस्तिकामा बैठक वसेको निर्णयको अभिलेख समेत नराखी सोही मितिमा उक्त जग्गा सुनिती राणाको नाममा नामसारी दर्ता गर्नको लागि छुट जग्गा दर्ता समितिको सदस्यको हैसियतले दस्तखत गरी सिफारिस गरेको देखिन्छ। यसरी नै जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६४ मा समितिले जग्गा दर्ताको सिफारीश गरेपछि कार्यालयले प्रमाणको मुल्याङ्कन गर्दा कुनै प्रमाण बुझ्न छुट भएको वा बझ्नु पर्ने आवश्यकता देखिएमा सो समेत बुझ्ने भन्ने प्रावधान भएकोमा आफ्नै कार्यालयमा भएको उक्त जग्गाको श्रेष्ता र श्रोतको विषयमा यथार्थ जानकारी हुँदाहुदै उक्त सरकरी जग्गा सुनिती राणाको नाममा नामसारी हुने ठहर्छ भनी गलत/झुठो ब्यहोरा उल्लेख गरिएको मिति २०६२।०२।०३ को निर्णय पर्चामा मालपोत अधिकृतको हैसियतमा दस्तखत गरी प्र.मा.अ. समक्ष पेश गरी प्र.मा.अ. टिकाराम घिमिरेले उक्त निर्णय पर्चामा सदर/निर्णय गरी उक्त सरकारी जग्गा सुनिती राणाको नाममा गैरकानूनी तरिकाबाट दर्ता कायम गरेको देखिएबाट हुपेन्द्र मणी के.सी. (निरौला) समेतको प्रस्तुत कसूर अपराध संलग्नता रहेको प्रष्ट देखिन्छ।

प्रतिवादी हुपेन्द्रमणी के.सी भूमि सुधार तथा ब्यवस्था मन्त्रालयको उप-सचिब पदमा कार्यरत रहेको अवस्थामा मन्त्रिपरिषदबाट मिति २०६६/१२/२९ गते बिशिष्ट व्यक्तिहरुको निवास परिसर विस्तार र जग्गा सट्टापट्टा गर्ने सम्बन्धि भएको निर्णय कार्यान्वयन गर्ने क्रममा भूमी सुधार तथा व्यबस्था मन्त्रालयबाट मिति २०६७/१/२६ गते टिप्पणी उठाउने क्रममा शुरू टिप्पणी उठाई एक तह माथी पेश भई सह-सचिव जीतबहादुर थापाले हस्ताक्षर गरी सकेपछि निजको जानकारी बिना सोही टिप्पणीमा पछिबाट शुरु टिप्पणी उठाउने कर्मचारी निज हुपेन्द्रमणी के.सी.ले किर्ते गरी "**मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट**" भन्ने वाक्यांश थप गरी निम्न बमोजिम गर्ने भनी मोहीले रोजे तर्फको जग्गा नेपाल सरकार समरजंग कंम्पनी वा राजकुलो वा बाटोको नामबाट मोहीको नाममा दा.खा.गर्ने भनी आफुलाई जसरी अनुकुल हुन्छ त्यसैगरी कीर्ते समेत गरी टिप्पणी उठाई मालपोत कार्यालयलाई हुदै नभएको मोही र जग्गा सट्टापट्टा सम्बन्धि अर्को कार्यालयको क्षेत्राधिकारमा प्रवेश गरी सरकारी जग्गा हिनामिना गरी हानि नोक्सानी हुने र व्यक्ति विशेषलाई फाईदा लाभ पुग्ने गरी टिप्पणी प्रस्ताव उठाई सदर गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी, सार्वजनीक जग्गा १८-१४-३-१ रोपनी हानी नोक्शानी हुने कार्य गरी सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको सुरू टिप्पणी उठाई किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा सुरु टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र टिप्पणी तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा सुरु टिप्पणी तयार गरेको र एक तहमाथी पेश भएको टिप्पणी समेत किर्ते गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको देखिदा निज प्रतिवादी हुपेन्द्रमणी के.सी. समेतले योजना बनाई सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई योजनाकार, व्यवस्थापकको भूमिका निर्वाह गरी प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार- ४ हा.नं. ४५६ (का.फौ.त.) ,बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुतबाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **हुपेन्द्रमणि के.सी. (निरौला)** समेत भई गरी साविक कि.नं.२२ (२६२,२६७, २९५), ३५(५६,८०,५४,९), ३१ (२७८,२८४), ७३ (४८) समेतका कित्ता जग्गाहरुको (नाम नखुलेको व्यक्तिले) पेश भएको टिप्पणी उपर केन्द्रीय कार्यालयबाट १९ वटा प्रश्नको जवाफ खुलाई स्वीकृतिको लागि फाइल प्राप्त हुन आएकोमा, सो फायल अध्ययन गर्दा स्पष्ट नभएकोले, गुठी संस्थानबाट श्री ५ को सरकारको स्वीकृति माग भएको जग्गाहरु गुठी संस्थान ऐन, २०३३ को दफा ३९ बमोजिम वा छुट जग्गा दर्ता अन्तर्गत कारबाही गर्ने मध्ये कुन बिषय को हो ? साविक देखि गुठीको जग्गामा के कसरी साविक र पुन: नापीमा अन्यका नाममा नाप नक्सा भएको हो ? यस मन्त्रालयको च.नं. ९४० मिति २०६२।०६।०३ गतेको पत्रबाट सोधनी भएको नं. १६ र १९ नं. उल्लेख भएको बिषयमा के भएको हो ? भन्ने ब्यहोराका थप ३ वटा प्रश्न लेखि मिति २०६२।०९।१२ मा कारवाही फायल अगाडी बढाएको, कारवाहीमा आएका कित्ता जग्गाहरुका सम्बन्धमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा भएको दर्ता बदर गरी पशुपति टिकिन्छा गुठीको नाममा दर्ता गर्न स्वीकृतिको माग भै आएकोमा बिभिन्न विवरण उल्लेख गरी म.प.को स्वीकृती आवश्यक पर्ने र पुन: नापी हुँदा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको गुठी लगत भित्रको जग्गाको नेपाल सरकार समरजंग कम्पनीको नाम कट्टा गरी सम्बन्धित गुठीको नाममा दर्ता गर्ने गुठी संस्थानलाई स्वीकृति दिने गरी नेपाल सरकार म.प.मा पेश हुनु पर्ने भनी मिति २०६३।०९।२१ मा टिप्पणी राय सहित फायल अगाडि बढाएको, कारवाहीमा आएका कित्ता जग्गाहरुका सम्बन्धमा “मालपोत कार्यालय डिल्लीबजारको पत्रानुसार साविक नापीको कित्ता हा.सा.दर्ता बाँकी र हाल नापीमा श्री ५ को सरकार समरजंग कम्पनी र अन्य व्यक्तिको नाममा दर्ता भएको,,समरजंग कम्पनीबाट यस कार्यालयवाट भन्न नसकिने ताँहाको लगत हेरी गर्नु भन्ने भनाई,सुवर्ण शमशेरका हकदारको आफ्नो हरण भएको सम्पत्ती अञ्चलाधिश कार्यालयलाई जिम्मा दिएको कारण श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाधिश कार्यालयको नाम नापीको समयमा मोहीहरुले लेखाएका हुन् भन्ने भनाई, गुठी संस्थानवाट माग भए अनुसार गुठी लगत भित्रका पुन: नापीमा समरजंग कम्पनीका नाउमा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा विनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि मन्त्री परिषदमा पेश गर्नु पर्ने भनी आएको

प्रस्तावलाई मिति २०६३।०९।२५ गते मा. मन्त्रीवाट निर्णय भई ऐ. २७ गते म.प.मा पेश भएको, जग्गा (नापजाँच) ऐन, २०१९ बमोजिम साविक वडा नं. २३ क्ष कि.नं. ७३,३१ ऐ. वडा नं. २३ह २२,३५ जनिई नाप नक्सा भई दर्ता प्रमाणित हुन बाँकी रहेका जग्गाहरु पुन: नापी हुँदा तत्कालीन समयमा जग्गाको रेखदेख गर्ने समरजंग कम्पनीको नाममा दर्ता भएको पुन:नापी बमोजिम का.जि. का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. २६२,२०७,२९५,२७८,२८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६ , ८० का जग्गाहरुको साबिक गुठीको लगतका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता सच्याई प्रचलित कानून बमोजिम पशुपति टिकिन्छा गुठीका नाममा दर्ता भई गुठी संस्थानलाई स्वीकृति दिनका निमित्त नेपाल सरकार मन्त्रीपरिषद् समक्ष छलफलको लागि पेश हुनु पर्ने देखिंदा सोही प्रस्तुत गरेको छु भनी मिति २०६९/०४/०२ गते टिप्पणी उठाई पेश गरेको १० (वा १५) रोपनीको लगतसँग भिड्ने भनी ३३ रोपनीको दर्ताको लागि लेखि आउँदा त्यसमा केही कैफियत नगरेको निज **हुपेन्द्र मणी के.सी**.ले श्री ५ को सरकार गुठीको नाममा दर्ता भएको सम्बन्धमा २०४९ सालमा नै मालपोत विभागको पत्रबाट (पत्रको मिति र च.नं.उल्लेख गर्ने) गुठीको नभएको र भुलबस गुठी लेखिन गएको भन्ने उल्लेख भएको अवस्थामा कैफियत नगरी सोही व्यहोराको टिप्पणी उठाएको, सुवर्ण शमशेरको हकवालाले गुठीको भनेको आधारमा गुठी हुने नहुने, तथा सो कागज समेत कीर्ते भएको र सो कीर्ते कागजमा लेखिएका भन्दा बढि जग्गा दर्ताको लागि लेखि आउँदा केही कैफियत नगरी सोही व्यहोरा पेश गरेको, साथै सुवर्ण शमशेरका हकदारले आफ्नो दावीका जग्गा २०४९ सालको निर्णयबाट (कुन निर्णय) नै पाइसकेको अवस्था रहेकोमा तिनीहरूलाई नै हकदार मानी गरिएको कीर्ते मन्जुरी कागजको आधारमा टिप्पणी उठाई पेश गरेको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराको टिप्पणी राय पेश गरी कीर्ते कार्यमा संलग्न रहेको, गुठी संस्थान केन्द्रीय कार्यालयको च.नं. ११८१ मिति २०६१।०८।०९ को पत्रसाथ आएको टिप्पणी फयललाई मिति २०६३।०९।२१ मा (कित्ता उल्लेख नगरी) शा.अ.को हैसियतमा र छ बर्षपछि रहस्यमय ढंगले २०६९/०४/०२ मा (कित्ता समेत उल्लेख गरी) उप-सचिवको हैसियतमा एउटै टिप्पणी फायलको सम्बन्धमा फरक फरक ब्यहोराको टिप्पणी खडा गरी अगाडी बढाई कीर्ते गरेको, **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजना बनाई सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई योजनाकार, व्यवस्थापकको भूमिका निर्वाह गरेको देखिएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको, **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको टिप्पणी तयार गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई

फाईदा पुग्ने कार्य गरी विगो **रु.४२,०३,६८,६३०।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | रु.१,११,११,१११।- | १०,५१,१२,९०३।- | १,०८,७९,३१०/- | ४२,०३,६८,६३०।- |

**२५) <u>फरार प्रतिवादी कल्याण गुरुङको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङ्गो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी **कल्याण गुरुङको** नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ६७१, ३८, १२६, ७३८, १३६, ३०२,६५१ र १०२-१०२४-१४ का कि.नं. २५, २४, को जम्मा २५५६.८४ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी कल्याण गुरुङको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ।

प्रतिवादी कल्याण गुरुङ्को नाममा तत्कालिन नेपाल सरकारले कानुन बमोजिम अधिग्रहण गरी प्राप्त गरेको का.जि.का.म.पा वडा न.४ स्थितमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी सार्बजनिक जग्गा मध्ये सिट न. १०२५-१५ को कित्ता न. ६१९ को १७८.९, कि.न. २११ को ९९.३५, कि.न. ५९१ को कि.न.३३.७९, कि.न.६२१ को ७९.४९, कि.न.७२१ को ९.१३, कि.न.६१८ को १७८.८५, कि.न.६७८ को १, कि.न.६७३ को १६५.८३, कि.न.५९२ को ३७.७७ बर्गमिटर जग्गा निज प्रतिवादी कल्याण गुरुङ्को नाममा रहेको, निज प्रतिवादी कल्याण गुरुङ्ले तत्कालिन श्री ५ को सरकारले प्रचलित जग्गा प्राप्ती ऐन २०१८ बमोजिम रितपुर्वक अधिग्रहण गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा हक हस्तान्तरण नहुने भन्ने जानकारी हुँदाहुदै खरिद गरी विगो **रु.७८,४४,०१,३५७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ६५,६२,७६,७११।- | - | १२,८१,२४,६४६।- | - | ७८,४४,०१,३५७।- |

**२६) <u>फरार प्रतिवादी दस नारायण महर्जनको हकमा:</u>**

साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम जोगलाल महर्जनले मिति २०६१/२/१२ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये साविक २३ क्ष कि.नं ४३,६२ (१८१) को क्षेत्रफल ०-३-३-१ रोपनी जग्गाको मोहीयानी हक मिन बहादुर गुरुङ र सरला घले गुरुङलाई छोडे बापत रु.२,५००००/- (दुई लाख पचास हजार) रकम लिंदा तयार गरेको लिखतमा प्रतिवादी दसनारायण महर्जन साक्षी बसी लिखत किर्ते कसूरमा संलग्न रहेको प्रष्ट देखिन्छ। अत: निजले जानी बुझी किर्ते कागजमा साक्षी बसी कसूर गर्न संलग्न रहेको देखिदा निज प्रतिवादी **<u>दस नारायण महर्जन</u>**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ (का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र ( हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **दश नारायण महर्जन** समेत भई "साबिक २३ क्ष कि.नं. ७३ को क्षे.फ. ०-३-० जग्गा पशुपतीनाथ टिकिन्छा गुठीको लगतमा खला नं. १० को दर्तावाला मोही आशामरु ज्यापुको नाउँमा भिड्ने जग्गा हो, फि.वु.को जोताहा महलमा उल्लेखित जीत बहादुर महर्जन निजका पति हुन र निजको शेषपछि हाल सम्म निवेदक आशामाया महर्जनले नै जोतभोग गरी आएकोले निजकै नाउमा ना.सा., दर्ता हा.सा.समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको

नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको**, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुठ्ठो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरी तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुठ्ठा प्रमाणलाई समर्थन गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी वसी विगो **रु.१५,९५,८२,८९१।–** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, २०२० को कीर्ते कागजको महलको १ नं.मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | - | १,२१,३४,६१५/- | १५,९५,८२,८९१।- |

२७) **<u>प्रतिवादी बालगोपाल घिमिरेको हकमा:</u>**

साविक का.न.प. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम मोही जोगलाल महर्जनले मिति २०६१/२/१२ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये साविक २३ क्ष कि.नं ४३,६२ (१८१) को क्षेत्रफल ०-३-३-१ रोपनी जग्गाको मोहीयानी हक मिन बहादुर गुरुङ र सरला घले गुरुङलाई छोडे बापत रु २,५००००/- (दुईलाख पचास हजार), कृत्रिम मोही तिर्थमाया महर्जनले साविक २३ क्ष कि.नं. १८ (हाल कि.नं. २,३,११५) को क्षे.फ.२-३-०-१ को जम्मा रु २२,००,०००/- (बाईस लाख) लिई बिनिता अधिकारी समेतलाई मोहीयानी हक छाडेको, अर्का कृत्रिम मोही तिर्थमाया महर्जनले साविक २३ क्ष कि.नं. ६० को क्षे.फ. ०-९-०-० को जम्मा रु ६,००,०००/- (छ लाख), साविक २३ ह को कि.नं. (८८०,२३५, २३९,२४१, २८९, २४४, २४६) को जम्मा ५-६-१-३ को जम्मा रु ५४,००,०००/ (चौवन्न लाख) लिई मिन बहादुर गुरुङ, माधवी सुबेदी र उमा कुमारी ढकाल्नीलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही पंच नारायण भन्ने तुयु भाई महर्जनले साविक २३ ह को कि.नं. १८, (१९, २३८, २४०, २४२, २९०) को क्ष.फ.१-१५-२-२ को जम्मा रु.२६,००,०००/- (छब्बिस लाख) रकम लिई माधवी सुबेदी र उमा कुमारी ढकाल्नीलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही साईला महर्जनले साविक २३ क्ष को कि.नं. २२ (कि.नं. १२५, ११८, १२१, १२३, १२८, १३०) को जम्मा क्षे.फ. १-८-३-३ को जम्मा रु.१०,००,०००/-(दश लाख) लिई सरला घले गुरुङलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही न्हुच्छेंमाया महर्जनले वडा नं. ४ कि.नं. २७, ३१ को क्षे.फ.१-५-०-० को जम्मा रु.१४,००,०००/- (चौध लाख) र वडा नं. ०४ को कि.नं. ०५, २४, १३३, १३२,१२९, को जम्मा क्षे.फ.१-७-३-१ को जम्मा रु.१६,००,०००/- (सोर्ह लाख) लिई मिन बहादुर गुरुङ र सरला घले गुरुङलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही चैत्य नारायण महर्जनले साविक २३ ह कि.नं. १७ (२१६,८६,२९१,२५५) को क्षे.फ. ३-४-१-३ को जम्मा रु ३३,००,०००/- (तेत्तिस लाख) रकम लिई माधवी

सुबेदी र उमा कुमारी ढकाल्नीलाई मोहीयानी हक छाडेको, कृत्रिम मोही कान्छा महर्जनले वडा नं. ०४ कि.नं. २८६, ५७, ५८, ८१, १२, १४ को जम्मा क्षे.फ. ०-१०-२-३.५ को जम्मा रु ७,००,०००/- (सात लाख) रकम लिई मिन बहादुर गुरुङ रसरला घले गुरुङलाई मोहीयानी हक छाडेको,कृत्रिम मोही संजय कुमार महर्जनले साविक २३ क्ष कि.नं. ३१ (२९९, २०४, १९९,) को क्षे.फ.२-८-३-३ को जम्मा रु २६,००,०००/- (६ लाख) र साविक २३ क्ष कि.नं.२३ (१८७) को जम्मा क्षे.फ. ०-२-१-० को जम्मा १,००,०००/-(एक लाख) रकम लिई सरला घले गुरुङ र चमेली श्रेष्ठलाई मोहीयानी हक छाडेको र कृत्रिम मोही कुल बहादुर महर्जनले साविक २३ क्ष कि.नं. ४० (१४७, १४८, १५६,१४४) को जम्मा क्षे.फ.०-१४-२-२ को जम्मा रु.९,५०,०००/- (नौलाख पचास हजार) र वडा नं.०४ कि.नं. १५ (३८,१८) को क्षे.फ. ०-७-१-२ को जम्मा रु.५,००,०००/- (पाँच लाख) रकम लिई बाबा कार्की र सरला घले गुरुङलाई मोहीयानी छाडेको लिखतहरुमा प्रतिवादी **बाल गोपाल घिमिरे** साक्षी बसी प्रस्तुत किर्ते कसूरमा संलग्नता रहेको प्रष्ट देखिन्छ।

प्रतिवादी बालगोपाल घिमिरेले साबिक नगर २३ ह कि.नं.४० को क्षे.फ.०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मध्ये भिड्ने हो उक्त जग्गाको जोताहा महलमा हर्क नारायण डंगोल लेखिएको भए तापनी नापी अगावै देखि रामकृष्ण महर्जनले नै जोत भोग गरी आएकोले निजकै नाउमा दर्ता हा.सा.समेत गरी जग्गाधनी प्रमाण पुर्जा उपलब्ध गराई दिएमा फरक नपर्ने भन्ने व्यहोराको मुचुल्काको साक्षी बसी सरकारी जग्गा मोही भनिएका ब्यक्तिको नाममा कायम गर्न मतियारको काम गरेको र झुठ्ठा प्रमाणलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी आरोपित सारभूत कसूर गर्न सहयोग,मद्दत, सल्लाह र परिस्थिति श्रृजना गरीदिने काम गरेको।

वि.सं.१९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **बालगोपाल घिमिरे** समेत भई "साबिक २३ ह कि.नं.४० को क्षे.फ. ०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मध्ये भिड्ने हो, उक्त जग्गाको जोताहा महलमा हर्क नारायण डंगोल लेखिएको भएता पनि नापी अगावै देखि रामकृष्ण महर्जनले नै जोत भोग गरी आएकोले निजकै नाउँमा दर्ता हा.सा. समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा

गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको** नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुट्ठो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुट्ठा प्रमाणलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी विगो **रु.१६,३६,४२,८९१।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | ४०,६०,०००।- | १,२१,३४,६१५/- | १६,३६,४२,८९१।- |

२८) <u>**प्रतिवादी राममणी सिग्देलको हकमा:**</u>

साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ.११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृतिम मोही तीर्थ माया महर्जनले मिति २०६१/८/२२ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये कि.नं. २,३, ११५, को क्षे.फ.२-३-०-१ रोपनी जग्गाको जम्मा रु.२२,००,०००/- (बाईस लाख) लिई बिनिता अधिकारी समेतलाई मोहीयानी हक छाडेको, अर्का प्रतिवादी तीर्थ माया महर्जनको कि.नं.१७६ को क्षे.फ. ०-९-०-० रोपनी जग्गाको जम्मा रु. ६,०००००/- (छ लाख) लिई मिन बहादुर गुरुङलाई मोहीयानी हक छाडेको, कृतिम मोही अर्जुन महर्जनले मिति २०६१।८।२२ गते साविक २३ क्ष को कि.नं. ३५ (१६६, को क्षे.फ. ०-०-३-० को रु ५०,०००/- (पचास हजार) र साविक २३ क्ष कि.नं. ३५(१६२,१६४) को क्षे.फ. ०-१३-१-० रोपनी जग्गाको रु ८,२८,१२५/- (आठ लाख अठाईस हजार एक सय पचिस) रकम लिई मिन बहादुर गुरुङ र सरला घलेलाई मोहीयानी हक छाडेको र कृत्रिम मोही हिरालाल तण्डुकारले कि.नं. १७२, १७४,२९७ को क्षे.फ.१-०-०-० को रु १०,००,०००/-(दश लाख) र साविक २३ क्ष कि.नं. ५६,५५ (१६७,१७३,१७५) को क्षे.फ. ०-८-०-२ को जम्मा रु ५६२,५००/- (पाच लाख बैसट्ठी हजार पचा सय) रकम लिई माधवी सुबेदी र उमाकुमारी ढकाल्नीलाई मोहीयानी हक छाड्दा तयार गरेको लिखतमा प्रतिवादी **राममणी सिग्देल** साक्षी बसी प्रस्तुत किर्तेको कसूरमा निज राममणी सिग्देलको संलग्नता भएको प्रष्ट देखिन्छ।

प्रतिवादी राममणी सिग्देलले ललिता निवास क्याम्प भित्रको तत्कालीन सरकारले प्रचलित कानून बमोजिम अधिग्रहण गरी सरकारीकरण भएको जग्गामा मोही कायम गर्ने उद्देश्यले वि.स. २०६६।९।१३ गते भूमिसुधार कार्यालय, काठमाडौंमा मोही भनिएका व्यक्तिहरुको सम्बन्धमा निज राममणि सिग्देल वारिस बसी

सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले कोही कसैलाई मोही कायम नगरेको भए तापनि सो फैसलाको अपव्याख्या गरी सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम गरी पाउँ भनी निवेदन दिई सरकारी जग्गा मोही भनिएका ब्यक्तिहरुको नाममा कायम गर्न मतियारको काम गरेको र झुट्ठा प्रमाणलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते ब्यहोराको निवेदन दिई विगो **रु.१४,७४,४८,२७६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | - | - | १४,७४,४८,२७६।- |

२९) **<u>प्रतिवादी सुशिला डंगोल महर्जनको हकमा:</u>**

साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम मोही संजय कुमार महर्जनले मिति २०६१।२।१८ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये साविक २३ क्ष कि.नं. ३१ (२९९, २०४, १९९) को क्षे.फ.२-८-३-३ रोपनी जग्गाको जम्मा रु २६,००,०००/- (छब्बिस लाख) र साविक २३ क्ष कि.नं.७२ (१८७) को जम्मा क्षे.फ. ०-२-१-० रोपनी जग्गाको जम्मा रु. १,००,०००/-(एक लाख) रकम लिई सरला घले गुरुङ र चमेली श्रेष्ठलाई मोहीयानी हक छाड्दा तयार गरेको लिखतमा निज प्रतिवादी शुसिला महर्जन साक्षी बसी प्रस्तुत कसूरमा संलग्नता भएको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | - | - | १४,७४,४८,२७६।- |

३०) **<u>प्रतिवादी गोपाल तण्डुकारको हकमा:</u>**

साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम मोही हिरालाल तन्दुकारले मिति २०६१/८/२९ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये कि.नं. १७२, १७४,२९७ को क्षे.फ.१-०-०-० रोपनी जग्गाको रु.१०,००,०००/- (दश लाख) र साविक २३ क्ष कि.नं. ५६,५५ (१६७,१७३,१७५) को क्षे.फ. ०-८-०-२ रोपनी जग्गाको जम्मा रु.५६२,५००/- (पाच लाख बैसट्ठी हजार पाँचसय) रकम लिई माधवी सुबेदी र उमाकुमारी ढकाल्नीलाई मोहीयानी हक छाड्दा तयार गरेको लिखतमा निज प्रतिवादी गोपाल तण्डुकार साक्षी बसी प्रस्तुत कसूरमा संलग्नता रहेको प्रष्ट देखिन्छ। अत: निज प्रतिवादीले जानी बुझी किर्ते कागजमा साक्षी

बसी आरोपित सारभूत कसूर गर्न सहयोग, मद्दत, सल्लाह र परिस्थिति श्रृजना गरीदिने कार्य गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | - | - | १४,७४,४८,२७६।- |

**३१) <u>प्रतिवादी लुम बहादुर महर्जनको हकमा:</u>**

साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम मोही कुल बहादुर महर्जनले मिति २०६१।२।२२ गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये साविक २३ क्ष कि.नं. ४० ( १४७, १४८, १५६, १४४ ) को जम्मा क्षे.फ.०-१४-२-२ रोपनी जग्गाको जम्मा रु.९,५०,०००/- (नौलाख पचास हजार) र वडा नं.०४ कि.नं. १५ (३८,१८) को क्षे.फ. ०-७-१-२ रोपनी जग्गाको जम्मा रु.५,००,०००/-(पाँच लाख) रकम लिई बाबा कार्की र सरला घले गुरुङलाई मोहीयानी हक छाडदा तयार गरेको लिखतमा निज प्रतिवादी **लुम बहादुर महर्जन** जानी बुझी किर्ते कागजमा साक्षी बसी आरोपित कसूरमा संलग्न भएको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | - | - | १४,७४,४८,२७६।- |

**३२) <u>प्रतिवादी ज्ञान नारा महर्जनको हकमा:</u>**

साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात सो मोही नलाग्ने सरकारी जग्गामा किर्ते कागजातको आधारमा मोही कायम गरी, गराई मोही बाँफाड गर्ने क्रममा कृत्रिम मोही न्हुच्छेंमाया महर्जनले मिति २०६१/३/३० गते ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा मध्ये वडा नं.०४ कि.नं. २७, ३१ को क्षे.फ.१-५-०-० रोपनी जग्गाको जम्मा रु १४,००,०००/-(चौध लाख) र वडा नं. ०४ को कि.नं. ०५, २४ , १३३, १३२,१२९, को जम्मा क्षे.फ.१-७-३-१ रोपनी जग्गाको जम्मा रु १६,००,०००/- ( सोह्र लाख ) रकम लिई मिन बाहदुर गुरुङ र सरला घले गुरुङलाई मोहीयानी हक छाड्दा तयार गरेको लिखतमा निज प्रतिवादी **ज्ञान नारां महर्जन** साक्षी बसी प्रस्तुत किर्ते र सँगठीत कसूर अपराधमा संलग्न भएको प्रष्ट देखिन्छ। अत: निज प्रतिवादीले जानी बुझी किर्ते कागजमा साक्षी बसी आरोपित कसूर गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर अन्तर्गत पर्ने भएकोले निज प्रतिवादीलाई ऐ.को ७ नं. र ९ नं. बमोजिम बिगो भराई बिगो बमोजिम जरिवाना र ऐ. १२ नं. बमोजिम सजायको मागदावी लिई दिनु हुन र निज प्रतिवादीलाई सरकारी छाप दस्तखत कीर्ते कसूर गरेको देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ (का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **ज्ञान नारायण महर्जन** समेत भई "साबिक नगर २३ क्ष कि.नं.४८ र ७६ को क्रमश: क्षे.फ.०-१४-० र २-१२-१ जग्गा पशुपती टिकिन्छा गुठीको लगतमा खला नं. १० को दर्तावाला मोही आशामरु ज्यापूका नाउँमा भिड्ने जग्गा हो, जोताहा महलमा उल्लेखित ड्राईभर भाईचा निवेदकको बाजे हुन्, निज बाजे तथा बाबु परलोक भै निजको शेषपछि हक खाने हकदार निवेदक देवनारायण महर्जन भएकोले निजकै नाउँमा दर्ता नामसारी हा.सा.समेत गरी दिएमा कुनै फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको** नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुठ्ठो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुठ्ठा प्रमाणलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी विगो **रु.१५,९५,८२,८९१।–** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, २०२० को कीर्ते कागजको महलको १ नं.मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,७४,४८,२७६।- | - | - | १,२१,३४,६१५/- | १५,९५,८२,८९१।- |

**३३) प्रतिवादी टेकनाथ भट्टराईको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिती राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्षे.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्षे.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश **टेकनाथ भट्टराईले** पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउँदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्षे.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्षे.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्षे.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्षे.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बाली नाली लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापी हुँदा फिल्डबुकमा के कसरी श्री ५ को सरकार समरजंग कम्पनी भन्ने लेखीन गई कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामीलाई केही जानकारी छैन उक्त जग्गा रेखा घिमिरेले राजिनाम पास गरी खरिद गरी लिएको हो, सो जग्गाको नयाँ नापीमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटोको डोब मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पुर्जा दिंदा कसैलाई सन्धी समर्पण पर्ने अवस्था समेत छैन। निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अद्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भनी **टेक नाथ भट्टराई** समेतले रोहवरमा बसि निजले सहिछाप समेत गरेको देखिन्छ। यसरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा देख्दै पनि उक्त कुरालाई के कसरी लेखीन गएको हो भनी फरक व्यहोरा र मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा.गरी ज.ध. पूर्जा दिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्कामा बसि हस्ताक्षर समेत गरेको र प्रतिवादी रेखा घिमिरेको हकमा वारेश बसी निज प्रतिवादी टेक नाथ भट्टराईले हालसाविकको लागी निवेदन समेत पेश गरेको हुँदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २३,४६,६६,६६७।- | - | - | - | २३,४६,६६,६६७।- |

**३४)** **प्रतिवादी शक्ति बहादुर थापा मगरको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको जग्गालाई जफत भएको भनी शैलजा राणा सेमतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी ललिता निबास क्याम्प भित्रको ११२-४-१-० रोपनी जग्गा सरकारी जग्गा लिखत किर्तेबाट शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गामा साविक २०२३ /०३/२९,३०,३१ गते भएको नापीको फिल्डबुक तथा श्रेष्ता र २०४७ /२०४८ सालमा भएको नयाँ नापीको फिल्डबुकमा जग्गा धनि श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता श्रेष्ता कायम रहेको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी निवेदन गरेकोमा उक्त जग्गाको साविक नक्सामा बाटो नभएको र हाल नयाँ नापिको नक्सामा कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिएको हुँदा सो जग्गा हा.सा. गरी ज.ध. प्रमाणपूर्जा दिँदा सरकारी, सार्वजनिक, ऐलानी, प्रति, सधियारको जग्गा घट्न, घुस्न वा मिचिन गई नाप नक्सा गरी अन्य कसैको कह सवामित्वमा कुनै असर पर्छ पर्दैन साविक भन्दा हाल क्षे.फ. ०-७-३-२ बढी कायम भएको सम्बन्धमा अन्य कसैको जग्गा घट्न घुस्न गई सर्वजनिक वा व्यक्तिगर हक स्वामित्वमा कुनै असर पर्छ पर्दैन यस सम्बन्धमा तपाई साँध सधियार तथा भर्द भलाद्मीखो भनाई के छ बताई दिनुहोस भनी मालपोत कार्यालयबाट डोरमा खटि आउनु भएका कर्मचारीहरुले हामिलाई सोधनी भएकोमा हाम्रो चित्त बुझ्यो यसमा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्षे.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्षे.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्षे.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्षे.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बालि नालि लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापि हुँदा फिल्डबुकमा के कसरी श्रीओ ५ को सरकार समरजंग कम्पनी भन्ने लेखीन गई कि.नं. ५३६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामिलाई केही जानकारी छैन उक्त जग्गा निवेदिकाले राजिनाम पास गरी खरिद गरी लिएको हो सो जग्गाको नयाँ नापिमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटको डोप मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिँदा कसैलाई सन्धि समर्पण पर्ने अवस्था समेत छैन। निवेदकको हक भोगको जग्गाको श्री नापि शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अद्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भनी **शक्ती बहादुर थापा मगर** समेतले रोहवरमा बसि लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आएको माथि उल्लेखित जग्गामा दोर्सो नापिको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा देख्दै भनी उक्त कुरालाई के कसरी लेखीन गएको हो भनी फरक व्यहोरा मतलब हुने गरी उक्त कुरा हटाई निज निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्कामा बसि हस्ताक्षार समेत गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २३,४६,६६,६६७।- | - | - | - | २३,४६,६६,६६७।- |

३५) **फरार प्रतिवादी सुह्रद राज घिमिरेको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा  ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिती राणा समेतबाट आफ्नो नाममा खरिद गरेको  साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजारकाठमाडौंबाटसर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा  दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बाली नाली लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापी हुँदा फिल्डबुकमा के कसरी श्री ५ को सरकार समरजंग कम्पनी भन्ने लेखीन गई कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामीलाई केही जानकारी छैन उक्त जग्गा रेखा घिमिरेले राजिनाम पास गरी खरिद गरी लिएको हो, सो जग्गाको नयाँ नापीमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटोको डोब मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिंदा कसैलाई सन्धि समर्पण पर्ने अवस्था समेत छैन । निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अद्यावधिक गरी दिएमा पछि सम्म  कुनै फरक पर्ने छैन भनी निज प्रतिवादी **सुह्रद राज घिमिरे** समेतले मुचुल्कामा साक्षी बसि निजले सहिछाप समेत गरेको देखिन्छ । यसरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको  माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा देख्दै पनि उक्त कुरालाई के कसरी लेखीन गएको हो भनी फरक व्यहोरा र मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्कामा साक्षी बसि हस्ताक्षर समेत गरी विगो **रु.२३,४६,६६,६६७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २३,४६,६६,६६७।- | - | - | - | २३,४६,६६,६६७।- |

३६) **योजना आयोग काठमाडौंका तत्कालिन शाखा अधिकृत फरार प्रतिवादी गेहनाथ भण्डारीको हकमा**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१।८।१५ गते निर्णय गरी सार्वजनिक कामको लागि विभिन्न कानूनी प्रक्रिया पुरा गरी सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई मालपोत कार्यालय डिल्लिबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतका कर्मचारीहरुले मिति २०४७ सालको मन्त्रिपरिषदको निर्णयको अपब्याख्या, दुरुपयोग र बिपरित समेत हुने गरी शैलजा राणा समेतको निवेदनलाई मात्र आधार लिई फरक ब्यहोराको प्रमाण बनाई जफत गरिएको जग्गा भनी लिखत किर्ते गरी नेपाल सरकारको हक मारी उक्त जग्गा हिनामिना गरी हानी नोक्सानी पुऱ्याई शैलजा राणा समेतका ब्यक्ती बिशेषका नाममा नामसारी दा.खा. दर्ता भए पश्चात प्रतिवादी गेहनाथ भण्डारी तत्कालिन राष्ट्रिय योजना आयोग काठमाडौंमा शाखा अधिकृत पदमा कार्यरत रहेको अबस्थामा उक्त लिखत किर्ते गरी सरकारी जग्गा ब्यक्ति बिशेषका नाममा ना.सा. दा.खा. गराउने कार्यमा प्रत्यक्ष-अप्रत्यक्ष रुपमा संलग्न रही सो कार्य गरे बापत उक्त जग्गा मध्ये बाट आफ्ना नातेदार श्रीमती भुवन कुमारी चापागाई र उर्मिला शाहको नाममा १-०-२-० रोपनी क्षेत्रफल र सासु सोदा कुमारी चापागाँईको नाममा साबिक का.जि.२३ ह को कि.नं. १९ को ०-१०-०-० रोपनी गरी जम्मा १-१०-२-० रोपनी क्षेत्रफल सरकारी जग्गा राणाहरुको नामबाट हालै देखिको बकसपत्रको लिखत पारित गर्ने-गराउने कार्य गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

३७) **मालपोत कार्यालय डिल्लीबजारको तत्कालीन मालपोतअधिकृत प्रतिवादी सुरेन्द्रमान कपालीको हकमाः-**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३। गतेको निर्णय बमोजिम बि.सं. २०१७ साल पछि प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका जग्गाहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै मिति २०१८।११।१९ गते हाम्रो जग्गा तत्कालीन सरकारले जफत गरेको हो भन्ने एक मात्र ब्याहोरालाई आधार मानी तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा सरकारी जग्गा हानि नोक्शानी गर्ने, गराउने उद्देश्यले राज्यले अधिग्रहण गरी लिएको

तथ्य थाहा हुँदा, हुँदै सो तथ्यहरुलाई लुकाई, छिपाई अनदेखा गरी जफत तथा रोक्का गरिएको भनी वास्तबिक तथ्यलाई तोडमोड गरी झुट्टा, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई तत्कालीन मालपोत कार्यालय डिल्लिबजार काठमाडौंका ना.सु. जगत प्रसाद पुडासैनी समेतले उल्लेखित जग्गा निवेदक शैलाजा राणा समेतका नाममा ना.सा.दा.खा. दर्ता गरी फिर्ता गर्न उपयुक्त हुन्छ भनी टिप्पणी उठाई मि.नं. १०२४ मिति २०४९।७।२५ग ते साविक वडा नं. २३ क्ष कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ५४, ५५, ५६, ५७, ५८, ६०, ६१, ६२, ७२, ७४, ७५, ८०, ४३, ४४, ५१, ५३, ५९, र ७९ का जम्मा २६ कित्ता जग्गाको जम्मा क्षे.फ. २६-६-१-० रोपनी, मि.नं.१०२५ मिति २०४९।७।२५गते साविक २३ ह कित्ता नं ३३, ३८, ३९, २८, २९, ३०, ३२, ३४, ३६, १७, २०, १८, १९, २१, २३, ८, १३, १४, १६, २७, ११ जम्मा २१ कित्ता र २३ क्ष का कि.नं १८, २०, २१, २२, २३, २४ जम्मा ६ कित्ता गरी जम्मा २७ कित्ता जग्गाको जम्मा क्षेत्रफल ४९-०-३-० रोपनी, मि.नं. १०२४ मिति २०४९।९।२३ साविक वडा नं २३ क्ष कि.नं ३०, ३२, ३१, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३ जम्मा १९ कित्ता को जम्मा क्षे.फ. २८-१५-३ रोपनी जग्गा र मि.नं. १०२५, मिति २०४९।०९।२३ गते २३ क्ष को कि.नं. २५, २६, २७, र २९ जम्मा ४ कित्ताको क्षेत्रफल ७-१४-०-० रोपनीसमेत गरी कुल ११२-४-१-० रोपनी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. दर्ता गरी फिर्ता दिने भनी तयार गरेको टिप्पणी आदेशमा तत्कालीन मालपोत अधिकृत सुरेन्द्रमान कपालीले उल्लेखित सरकारी जग्गा फिर्ता दिन उपयुक्त हुन्छ भनी पेश गरेको टिप्पणी र आदेशको व्यहोरा मनासिब देखि जग्गा फिर्ता गर्न निर्णयार्थ पेश गरेको छु भनी आफैले दस्तखत गरी किटानी राय पेश गरेको देखिन्छ। का.जि.का.न.पा. वडा नं. २३ क्ष को कि.नं. २५ को क्षेत्रफल ०-१२-०-० रोपनी जग्गा निर्णय नै नगरी राय किताबमा थपी, जनाई, फरक व्यहोरा पारी शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरेको देखिन्छ तथा निजले किटानि राय साथ पेश गरेको टिप्पणी र आदेशमा मौजा हाडीगाऊ हा.नं. ४५६ को क्षे.फ.२७२।।।३।।२।। मध्ये ६० ने.रा. बैक र २१२।।।३।।२।। समरजंगका नाउमा सुवर्ण शमसेरको नाउबाट कट्टा भै रेखदेखमा रहेको जग्गा दाबि गरीएता पनि मिति २०२२।०२।२४ गतेको गोरखापत्र दैनिकमा मेजिष्ट्रेट अफिस काठमाडौंले प्रकाशित गरेको सूचना बमोजिम मौजे हाँडिगाउमा दर्ता भएको स्वेत प्रभा १, कनक शमसेर १, रुक्म शमसेर १, शैलजा १, हेमनशमसेर १, हाटकशमसेर १ समेतको नाउँको दर्ता रोपनी २७२।।।।।। को हाल नाप ठहर २८४।।s।।। दुईसय चौरासी रोपनी चौध आना तीन पैसा जग्गा अधिग्रहण गरिएको उल्लेख भएकोले सरकारले स्वेत प्रभा समेत ६ जनाबाट सो जग्गा अधिग्रहण गरेको देखिन्छ तर मि.न. १०२४ मिति २०४९।७।२५ को टिप्पणी र आदेशमा सो जग्गा सुवर्ण शमसेरबाट जफत भएको भनी किर्ते व्यहोरा लेखी निर्णय गरेको देखिन्छ, यसरी ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गा लिखत किर्ते गरी निज आफैंले जग्गा दर्ता गरी फिर्ता दिन उपयुक्त हुने भनी टिप्पणीमा हस्ताक्षर गरी निर्णयार्थ राय पेश गरी किर्ते व्यहोराको लिखत तयार गरेको देखिन्छ साथै निज प्रतिवादी सुरेन्द्रमान कपालीको भतिजा बुहारी नाता पर्ने शान्ति मल्ल प्रधानाङ्ग र सरस्वति कुमारी श्रेष्ठ समेत दुई जना प्रतिवादीहरु मिठुदेवी चापागाई, र ईन्द्र बहादुर थापा क्षेत्रीको संयुक्त नाममा २३ ह कित्ता नं. २७ को क्षे.फ. १-१०-२-० र २३ ह २८ को क्षे.फ. २-८-०-० रोपनी जग्गा हालै देखिको वकस पत्र मार्फत लिएकोमा उक्त जग्गामा र.नं. १२०१२ मिति २०४९।१२।२३ गते संगोलनामा गराई जग्गा धनिश्रेष्ता लिएको देखिन्छ, हालै देखिको वकसपत्रको लिखतमा "तपाई लिनेले हाम्रो हरेक कामकाजमा रिझाई आए बापत उल्लेखित जग्गा हा.बा. गरी दिंए आफ्नो नाममा दा.खा.गराई भोगचलन गर्नुहोला" भन्ने व्यहोरा उल्लेखित भएको र मिसिल संग्लन अन्य कागजातहरुबाट निज सुरेन्द्रमान कपाली र निजको भतीजा

बुहारी शान्ति मल्ल प्रधानाङ्ग र राणा परिवारको बीच पूर्व चिनजान तथा पारिवारिक सम्बन्ध नरही कर्मचारी र सेवाग्राहीको मात्र सम्बन्ध रहेको देखिएबाट निज प्रतिवादी सुरेन्द्रमान कपालीले उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा ना.सा.दा.खा. गर्न सहयोग पुराएको कारणले घुस बापत माथी उल्लेखित जग्गामा आफ्नो भतिजा बुहारी शान्तीदेबि मल्ल प्रधानाङ्ग समेतको नाममा श्रेष्ता कायम गरी गराई गैर कानूनी लाभ लिएको देखिन्छ । साथै उक्त हालै देखिकोवकस पत्रको लिखतमा निज प्रतिवादी सुरेन्द्रमान कपाली आफैले हस्ताक्षर गरी सदर गरी गराई उर्मिला शाह समेत १३ जनालाई उल्लेखित सरकारी जग्गा दिएको र आफ्ना भतिजा बुहारी शान्तीदेबि मल्ल प्रधानानाङग् समेतलाई संगोलनामा समेत गराएको देखिन्छ । यसरी निज प्रतिवादी सुरेन्द्रमान कपालीले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा लिखत किर्ते मार्फत व्यक्ति विशेषको नाममा ना.सा.दा.खा. गरी गराई आफूले समेत प्रत्यक्ष लाभ लिई विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

३८) **फरार प्रतिवादी हाटक शमशेर ज.ब.रा.को हकमा:**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम सम्बन्धित जग्गा धनिलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३। गतेको निर्णय बमोजिम बि.सं. २०१७ साल पछि प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका जग्गाहरु गृह मन्त्रालयबाट छानबिन गरी हदबन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन गरी हदबन्दिको टुङगो लगाउनु अगावै निज प्रतिवादी रुक्म शमशेर ज.ब.रा. समेतले सरकारले अधिग्रहण गरेको बास्तविक तथ्यलाई लुकाई छिपाई झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई वास्तबिक तथ्यलाई तोडमोड गरी मिति २०१८।११।१९ गते तत्कालीन सरकारले हाम्रो जग्गा जफत गरेको हो भन्ने व्यहोरा मात्र प्रमाणको रुपमा पेश गरी, निज प्रतिवादी रुक्म शमसेर ज.ब.रा., **हाटक शम्सेर**, सुनिति राणा र शैलजा राणा तथा तत्कालीन मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंका प्र.मा.अ. कलाधर देउजा समेतका कर्मचारीहरुको मिलेमतोमा, मि.न. १०२५, मिति २०४९।७।२५ साविक वडा नं. २३ ह को कि.नं. ८, ११, १३, १४, १६, १७, १८, १९, २०, २१, २३, २७, २८, २९, ३०, ३२, ३३, ३४, ३६, ३८, ३९, २३ क्ष को कि.नं. १८, २०, २१, २२, २३, २४ जम्मा २७ कित्ताको क्षे. ४९-०-३-० रोपनी र मि.नं. १०२५ मिति २०४९।९।२३ को निर्णयले २३ क्ष को कि.नं. २५, २६, २७, र २९ जम्मा ४ कित्ताको क्षेत्रफल ७-१४-०-० रोपनी जग्गा गुठीको श्रेष्ता खारेज गरी कुल ५६-१४-३-० रोपनी सरकारी जग्गा किर्ते काजगात खडा गरी ना.सा.दा.खा. गरी लिएको प्रष्ट देखिन्छ । साथै प्रतिवादीहरु रुक्म शमसेर ज.ब.रा., हाटक शम्सेर, सुनिती राणा र शैलजा राणा समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजार, काठमाडौंका प्र.मा.अ. प्रतिवादी कलाधर देउजा समेतको मिलेमतोमा, मि.न. १०२४, मिति २०४९।७।२५ को निर्णयले साविक वडा नं. २३ क्ष को कि.नं. ३३, ३४, ३५, ३६, ३७, ३८, ३९, ४०, ४३,

४४, ५१, ५३, ५४, ५५, ५६, ५७, ५८, ५९, ६०, ६१, ६२, ७२, ७४, ७५, ७९ र ८० गरी जम्मा २६ कित्ताको २६-६-१-० रोपनी र १०२४ मिति २०४९।९।२३ को निर्णयले २३ क्ष कि.नं. ३०, , ३१, ३२, ४१, ४५, ४६, ४७, ४९, ५०, ५२, ६४, ६५, ६६, ६७, ७०, ७१, ८१, ८२, ८३ गरी जम्मा १९ कित्ताको क्षेत्रफल २८-१५-१-० रोपनी जग्गा गुठीको श्रेष्ता खारेज गरी कुल ५५-५-२-० रोपनी सरकारी जग्गा किर्ते कागजात खडा गरी, गराई ना.सा.दा.खा.गरी लिएको प्रष्ट देखिएकोले उल्लेखित कित्ता जग्गाहरु समेत आफ्नो पारिवारीक नाता सम्बन्धका प्रतिवादी रुक्म शमशेर ज.ब.रा. समेतको नाममा लिई जग्गाहरु बाँड फाँड गरी लिई लाभ लिएको प्रष्ट देखिन्छ। मि.नं. १०२५, मिति २०४९।९।२३ गतेको जग्गा दर्ता गर्ने टिप्पणी आदेशमा श्रेष्तामा गुठी जनिएको वडा नं. २३ क्षकोकि.नं. २६, २७ र २९ को जम्मा ३ कित्ता जग्गा शैलजा राणा समेतको नाममा दर्ता गर्ने निर्णय गरेको देखिएको तर २३ क्ष को कित्ता नं. २५ उल्लेख नरहेको भएता पनि राय किताबमा मात्र कि.नं. २५ थप गरी कि.नं. २६, २७ र २९ समेतको क्षे.फ. ७-१४-०-० रोपनी जग्गा दर्ता गरी दिने भनी जनाई किर्ते गरेको देखिन्छ। उक्त जग्गा मध्येबाट मालपोत कार्यालयका डिल्लिबजारका कर्मचारीहरु कलाधर देउजा समेतका नातेदारहरुको नाममा करिब १६ रोपनी जग्गा घुस बापत हालै देखिको वकसपत्र मार्फत दिएको देखिन्छ। साथै उक्त हालै देखिको वकसपत्रको लिखतहरुमा समेत निज प्रतिवादी **हाटक शमशेर ज.ब.रा.** साक्षी बसेको देखिन्छ। निज प्रतिवादी हाटक शमसेर समेतको नाममा जग्गा दर्ता भए पश्चात सोही जग्गा २०६० सालमा हाल साविक समेत गरी उक्त जग्गा बिक्रि वितरण समेत गरी नेपाल सरकार समरजंग कम्पनीलाई हानि नोक्सानी पुर्‍याई प्रत्यक्ष लाभ लिई प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

सरकारी जग्गा भएको थाहा हुँदाहुदै आफ्नो हक नपुग्ने सरकारी जग्गा आफ्नै नाता परिवार भित्रका ब्यक्ति बिशेष सुनिती राणाको नाममा नामसारी दर्ता गर्ने कार्यको लागी **हाटक शम्सेर राणा समेतले** मिति २०६०।०३।२३ मा "का.जि.का.म.नं.पा. वडा नं.२३ "स" साबिक कित्ता नं.१६ कित्ता काट भई कायम हुन आएको कित्ता नं.२६ को क्षेत्रफल ०-१२-२-० जग्गा कित्ता १ दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा लिन बाँकी रहेकोमा हामी समेतको नाममा रहेको साबिक लगत मौजा हाडीगाउ हा.नं.४५६ को २७२॥३॥२॥ बाट भिडी दर्ता हुने जग्गा सुबर्ण शमसेरको बुहारी कनक शमसेरको श्रीमती का.जि.का.म.न.पा.वडा नं. ४ बस्ने सुनिती राणाको नाममा दर्ता गरी जग्गा धनि प्रमाण पुर्जा दिएमा हामीहरुको पुर्ण मन्जुरी छ पछि मन्जुर छैन भनी कुनै अड्डा अदालतमा कुनै प्रकारको उजुर बाजुर गर्ने छैनौ गरेमा यसै मन्जुरीनामाको कागजले बद्दर गरी दिएमा हाम्रो मन्जुरी छ हामीले अड्डा अदालतबाट लागेको दण्ड जरिवाना दसौद आदेशले बाँकी रहेको कोर्ट फि सरकारी बिगो समेत तिर्न बुझाउन बाँकी छैन, किनाराका साक्षीहरुका रोहबरमा हाम्रो राजीखुसी मन्जुरीले यो मन्जुरीनामा कागज लेखि लेखाई सहिछाप गरी मालपोत कार्यालय काठमाडौंमा चढायौ" भनी दस्तखत गरी दिएको झुठो ब्यहोराको किर्ते मन्जुरीनामा कागज समेतका अन्य कागजातहरुको आड हाली मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट मिति **२०६२।२।३** मा उक्त सरकारी जग्गा सुनिती राणाको नाममा गैरकानूनी तवरले दर्ता कायम गरी विगो **रु.२,८९,९०,००,०००।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,७४,०००,०००। | २,५०,००,०००।- | - | - | २,८९,९०,००,०००।- |

३९) **मालपोत कार्यालय, डिल्लीबजारका तत्कालीन प्र.मा.अ. प्रतिवादी टिकाराम घिमिरेको हकमा:**

मिसिल संलग्न कागज प्रमाणहरुको आधारमा तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयकातत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा.भएको जग्गालाई हाल साविक गरी पाउ भनी शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदन दिएकै आधारमा समरजंग कम्पनी कार्यालयले च.नं.४२, मिति २०४९/०५/०२ गतेको पत्रबाट उक्त जग्गा समरजंग कम्पनीको नाममा रहेको मोहीहरुको नाम फिल्डबुकबाट लगत कट्टा गरी पुरै जग्गा श्री ५ को सरकारको नाममा कायम गर्नु पर्ने व्यहोराको पत्र वेवास्ता गरी प्रतिवादी टिकाराम घिमिरेले २०२३।०३।२९,३०,३१ गते भएको नापीको फिल्डबुक तथा श्रेष्ता र २०४७ /२०४८ सालमा भएको नयाँ नापीको फिल्डबुकमा जग्गा धनि श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता श्रेष्ता कायम रहेको जग्गा आफ्नै कार्यालयमा रहेको जग्गाको प्रकृतिक श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त सरकारी जग्गा नयाँ नापी अनुसार जग्गाको लगत कट्टा गरी हाल साविक गर्न मिल्छ भनी का.जि.का.न.पा. साविक वडा नं.२३ “क्ष” का ४९ कित्ता जग्गा, ऐ. २३ “ह” का २७ कित्ता जग्गाहरु मिति २०६०/०८/०३ गते र मिति २०६०/०९/१५ गते हाल साविक गर्नका लागी खरिदार जिबनाथ पोखरेल समेतका कर्मचारीहरुले टिप्पणी तयार गरी पेश गरे पश्चात अधिकृत प्रतिवादी हुपेन्द्र मणिके.सी.ले उक्त टिप्पणी र आदेशमा भएको व्यहोरा मनासिब देखिएकोले उक्त जग्गाहरु पून: नापी अनुसार कायम कित्ताहरुसँग श्रेष्ता अध्याबधिक गर्ने तर्फ कारबाही अगाडी बढाउन निर्णयार्थ पेश गरेको छु भनी हस्ताक्षर गरी निर्णयार्थ पेश गरे पश्चात उक्त जग्गा हाल साविक गरी श्रेष्ता अद्यावधिक गरी दिने गरी सदर गरेको छु भनी प्रमुख मालपोत अधिकृत निज प्रतिवादी टिकाराम घिमिरेले हस्ताक्षर गरी हा.सा. गर्ने निर्णय गरेको देखिन्छ। उक्त जगाहरु हाल साविक गर्ने निर्णय सदर गरी नापी कार्यालयलाई समेत पत्राचार गरेको, सो पश्चात उक्त जग्गा हाल साविक नामसारी गरी गराई शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतका व्यक्ति विशेषको नाममा जग्गा धनिश्रेष्ता कायम गर्ने कार्य गरेको देखिएको हुँदा निज प्रतिवादी टिकाराम घिमिरेले लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्तिविशेषको नाममा हाल साविक गर्नको लागी सदर गरेको टिप्पणी र आदेशको निर्णय किर्ते गरी प्रस्तुत कसूरमा संलग्नता भएको प्रष्ट देखिन्छ।

साबिकको का.जि.का.न.प.२३ “स” कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.न.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा

दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा निज सुनिती राणाको नाममा दर्ता गर्ने कार्य प्रारम्भ भएको देखिन्छ। जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६२ मा जग्गा दर्ता गर्नको लागि समितिमा पेश गर्नु पहिले जग्गाको बारेमा के कस्तो जग्गा हो ? के कसरी प्राप्त भएको हो ? भनी प्रमाणहरु बुझ्नु पर्ने र दफा ६० मा सरकारी जग्गा भएमा निबेदन खारेज गर्न सकिने भन्ने प्रावधान भएकोमा गलत कार्य हुन गर्नबाट रोक्न सकिने प्राबधान रहेको छ। यसरी उल्लेखित ब्यबस्था भए अनुसार गलत कार्य हुन गर्नबाट रोक्ने दायित्व/जिम्मेवारी भएको प्र.मा.अ. टीकाराम घिमिरेले झुठो ब्यहोराको निबेदन समेतका संलग्न किर्ते कागजातहरु खारेजी नगरी उक्त सरकारी जग्गा सुनिती राणाको नाममा दर्ता गरी दिए हुन्छ भनी रुक्म शमसेर ज.ब.रा. समेतको मिति २०६०।०३।२३ को झुठो ब्यहोराको मन्जुरिनामा कागज, ४ नं. वडा कार्यालयको तत्कालिन वडा सचिव शिवजि भट्टराईले मिति २०६०।५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको झुठो ब्यहोराको किर्ते सिफारीस, खरिदार श्याम कुमार क्षेत्रीले मिति २०६२।०१।११ मा तयार गरेको झुठो ब्यहोराको किर्ते सर्जमिन मुचुल्का, मिति २०६२।१।११ को हेमाद्री शमसेर ज.ब.राणाको झुठो ब्यहोरा उल्लेख गरेको हकदावी छाडेको झुठो पत्र समेतको सरकारी तथ्य विपरीत झुठो ब्यहोराको किर्ते कागजातहरुको आधार बनाई उक्त जग्गा सुनिती राणाको नाममा नामसारी दर्ताको लागि छुट जग्गा दर्ता समितिमा राख्नको लागि उठाईएको टिप्पणि आदेश समेत खारेज गर्नु पर्नेमा सो नगरी मिति **२०६२।२।२** मा सरकारी अभिलेख विपरितका ब्यहोरा उल्लेख गरी सुनिती राणाको नाममा नामसारी दर्ताको लागि छुट जग्गा दर्ता समितिमा राख्नको लागि उठाईएको टिप्पणी र आदेशमा हुन्छ भनी हस्ताक्षर गरी सदर गरेको साथै छुट जग्गा दर्ता गर्दा छुट दर्ता सिफारिस समितिले निर्णय गरी निर्णय पुस्तिकामा अभिलेख राख्नु पर्नेमा सो अनुसारको बैठक वसेको निर्णयको अभिलेख समेत नराखी सोही मितिमा उक्त जग्गा सुनिती राणाको नाममा नामसारी दर्ता गर्नको लागि छुट जग्गा दर्ता समितिको प्रमुखको हैसियतले सिफारिस गरेको देखिन्छ। "जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६४ मा समितिले जग्गा दर्ताको सिफारिस गरेपछि कार्यालयले प्रमाण मुल्याङकन गरी निर्णय गर्नु पर्छ" भन्ने प्रावधान रहेकोमा आफ्नै कार्यालयमा भएको जग्गाको श्रेष्ता र श्रोतको विषयमा यथार्थ जानकारी भई सरकारी जग्गा भएको थाहा हुँदाहुदै पनि मिति २०६२।०२।०३ मा उक्त सरकारी स्वामित्वको जग्गा सुनिती राणाको नाममा नामसारी गर्ने टिप्पणि आदेश उठाउन लगाई सो टिप्पणी आदेशको निर्णय पर्चामा समेत हस्ताक्षर तथा सदर गरी गैरकानूनी तरिकाबाट सुनिती राणाको नाममा जग्गा दर्ता कायम गरी विगो **रु.३०,४३,७६,४१७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी **टिकाराम घिमिरेले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | रु.१,११,११,१११।- | - | - | ३०,४३,७६,४१७।- |

**४०) <u>मालपोत कार्यालय, डिल्लीबजारको तत्कालीन नायव सुब्बा टिका बहादुर बि.सी.को हकमा :</u>**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरणगरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत

जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हाल साविक गरी पाउ भनी शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदन दिएकै आधारमा समरजंग कम्पनी कार्यालयले च.नं.४२, मिति २०४९/०५/०२ गतेको पत्रबाट उक्त जग्गा समरजंग कम्पनीको नाममा रहेको मोहीहरुको नाम फिल्डबुकबाट लगत कट्टा गरी पुरै जग्गा श्री ५ को सरकारको नाममा कायम गर्नु पर्ने व्यहोराको पत्र वेवास्ता गरी मालपोत कार्यालयका तत्कालीन ना.सु प्रतिवादी टिका बहादुर बि.सी. ले का.जि.का.न.पा. साविक वडा नं. २३ "क्ष" र २३ "ह" अन्तर्गतका ७६ कित्ता जग्गाहरु नयाँ नापि हुँदाका बखतमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा नाप नक्सा भएको देख्दा देख्दै आफ्नै कार्यालयमा रहेको जग्गाको प्राकृतिक श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त जग्गाहरु हा.सा.गर्न निज प्रतिवादी टिका बहादुर बि.सी.ले मिति२०६०/०८/१८ को हेमन शमशेर ज.ब.रा. समेतको नाममा भएका जग्गाहरु हाल साविक गर्नका लागी उक्त जग्गाहरु कित्ता काट गर्न नापी कार्यालयमा लेखी पठाउनु पर्ने देखिदा पेश गरेको छु भनी टिप्पणी आदेश उठाई पेश गरेको तथा मिति २०६०/०९/१५ गतेको लक्ष्मी नारायण महर्जन समेतको नाममा भएको जग्गाहरु संयुक्त नाममा हालसाविक गरी श्रेष्ता अद्यावधिक हुन निर्णयार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश तयार गरी पेश गरी तत्कालीन प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेले सदर गरेको देखिन्छ। यसरी निज प्रतिवादी टिका बहादुर बि.सी. ले लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा हाल साविक गर्नको लागी निर्णयार्थ तयार गरेको टिप्पणी र आदेश कानून सम्मत भएको देखिदैन। यसरी निज प्रतिवादी टिका बहादुर बि.सी.ले विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

## ४१) मालपोत कार्यालय डिल्लीबजारको तत्कालीन खरिदार प्रतिवादी जिबनाथ पोखरेलको हकमा:

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर

देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हाल साविक गरी पाउ भनी शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदनदिएकै आधारमा समरजंग कम्पनी कार्यालयले च.नं.४२, मिति २०४९/०५/०२ गतेको पत्रबाट उक्त जग्गा समरजंग कम्पनीको नाममा रहेको मोहीहरुको नाम फिल्डबुकबाट लगत कट्टा गरी पुरै जग्गा श्री ५ को सरकारको नाममा कायम गर्नु पर्ने व्यहोराको पत्र वेवास्ता गरी प्रतिवादी **जिवनाथ पोखरेल**ले साविक २०२३ ।०३।२९,३०,३१ गते भएको नापीको फिल्डबुक तथा श्रेष्ता र २०४७ /२०४८ सालमा भएको नयाँ नापीको फिल्डबुकमा जग्गा धनि श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता श्रेष्ता कायम रहेको जग्गा आफ्नै कार्यालयमा रहेको जग्गाको प्रकृतिक श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त सरकारी जग्गा नयाँ नापी अनुसार जग्गाको लगत कट्टा गरी हाल साविक गर्न मिल्छ भनी का.जि.का.न.पा. साविक वडा नं.२३ "क्ष" का ४९ कित्ता जग्गा, ऐ. २३ "ह" का २७ कित्ता जग्गाहरु मिति २०५९/६/०५ गते सुनिती राणाहरु समेतका निबेदकका नाममा भएका जग्गाहरु हाल साविक गर्नका लागी उक्त जग्गाहरु कित्ता काट गर्न नापी कार्यालयमा लेखी पठाउनु पर्ने देखिदा पेश गरेको छु भनी टिप्पणी आदेश उठाई पेश गरेको, मिति २०६०/०८/०२ गते निबेदकहरुको माग अनुसार साविकमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा नाप नक्शा देखिने भएता पनि ज.ध. श्रेष्ता पुर्जा विभिन्न व्यक्तिको नाममा कायम रहेका विभिन्न कित्ता जग्गाहरु नया नापी अनुसार हा.सा गरी श्रेष्ता अध्याबधिक गर्न आबश्यक निर्णयार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश उठाई पेश गरेको, मिति २०६०/०९/०३ गते निबेदक सुनिती राणा समेतको संयुक्त नाममा माग दावी बमोजिम कित्ता जग्गाहरु हा.सा. गरी श्रेष्ता अध्याबधिकको लागी निर्णयार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश उठाई पेश गरेको, मिति २०६०/०८/१८को हेमन शमशेर ज.ब.रा. समेतको नाममा भएका जग्गाहरु हाल साविक गर्नका लागी उक्त जग्गाहरु कित्ता काट गर्न नापी कार्यालयमा लेखी पठाउनु पर्ने देखिदा पेश गरेको छु भनी टिप्पणी आदेश उठाई पेश गरेको तथा मिति २०६०/०९/१५ गतेको लक्ष्मी नारायण महर्जन समेतको नाममा भएको जग्गाहरु संयुक्त नाममा हाल साविक गरी श्रेष्ता अद्यावधिक हुन निर्णयार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश तयार गरी पेश गरी तत्कालीन प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेले सदर गरेको देखिन्छ, सो पश्चात उक्त जग्गा हा.सा. नामसारी गरी गराई शैलजा राणा तथा कृत्रिम मोही भनिएका आशा नारायण महर्जन समेतका व्यक्ति विशेषको नाममा जग्गा धनिश्रेष्ता कायम गर्ने कार्य गरेको मिसिल संलग्न कागज प्रमाणहरुबाट देखिन्छ । यसरी निज प्रतिवादी जिवनाथ पोखरेलले लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा हाल साविक गर्नको लागी निर्णयार्थ पेश गरेको टिप्पणी र आदेश किर्ते पुर्ण देखिदा विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

४२) **मालपोत कार्यालय, डिल्लीबजारका तत्कालीन नायब सुब्बा प्रतिवादी अरुणोदयमान रंजित:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिती राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अद्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भन्ने समेत व्यहोराको ना.सु. श्री हरी पुडासैनी र ना.सु. नारायण राज मिश्रले स्थानियको रोहबरमा मुचुल्का तयार गरे पश्चात तत्कालीन मालपोत कार्यालय डिल्लीबजार काठमाडौंका खरिदार नारायण राज मिश्रले सर्जमिन मुचुल्का अनुसार हा.सा. गर्न उपयुक्त हुन्छ भनी टिप्पणी आदेश उठाए पश्चात निज प्रतिवादी **अरुणोदय मान रंजितले** उक्त जग्गा हा.सा.को लागी कित्ता काट गरी पठाई दिन नापी शाखालाई लेख्न मनासिब देखिएको भनी टिप्पणी र आदेश पेश गरेको र सोही टिप्पणी आदेशलाई सदर गरी जग्गामा देखिएको बाटोको संकेत कट्टा गरी कि.का. गरी पठाईदिने भनी नापी शाखा डिल्लीबजारलाई लेखी पठाई कित्ता काट भई आए पश्चात हाल साविकको मिति २०६१/०६/२० गतेको टिप्पणी र आदेशको निर्णयको लिखतमा संलग्न भएको देखिन्छ । यसरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा-देख्दै पनि उक्त **विगो रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गाको संरक्षण समेत गर्नु पर्ने दायित्व सरकारी कर्मचारीको हैसियतले पुरा गर्नु पर्नेमाझूट्टा व्यहोरा र फरक मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिई सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

४४ **फरार प्रतिवादी सरस्वती घले गुरुङ्गको हकमा:**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३

गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी,गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल प्रतिवादी सरस्वति घले गुरुङको नाममा सिट नं. १०२-१०२५-१५,को कि.नं. १३३, १३२, ५०९, ४६७ को जम्मा ५३४.५ र सरस्वति घले गुरुङ र सरला गुरुङको संयुक्त नाममा सि.नं. १०२ १०२५-१४ को कि.नं. २९, १४७, सि.नं. १०२-१०२५-१५ को कि.नं. ६०१, ६७६ को जम्मा २३३२.०७ वर्ग मिटर क्षे.फ. दर्ता कायम गरी विगो **रु.१,३८,२८,५०,२७५।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेष निज प्रतिवादीको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १,३८,२८,५०,२७५।- | - | - | - | १,३८,२८,५०,२७५।- |

४५) **मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन मा.अ. प्रतिवादी समर बहादुर सिंह ठकुरीको हकमा:**

मिसिल संलग्न कागज प्रमाणहरुको आधारमा तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४, २०४७।४।८, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हाल साबिक गरी पाउ भनी शैलजा राणा तथा कृतिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदन दिएकै आधारमा मालपोत अधिकृत **समर बहादुर सिंह** ठकुरीले का.जि. का.न.पा. साविक वडा नं. २३ “क्ष” र २३ “ह” अन्तर्गतका ७६ कित्ता जग्गाहरु नयाँ नापि हुँदाका बखतमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा नाप नक्सा भएको देख्दा देख्दै आफ्नै कार्यालयमा रहेको जग्गाको श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त जग्गाहरु हाल साबिक गर्न ना.सु. राजेन्द्र बुढाथोकीले मिति २०५९/०७/०५ टिप्पणी तयार गरी उक्त कित्ता जग्गाहरु शैलजा राणा समेतको नाममा हा.सा. गरी श्रेष्ता कायम गर्नको निमित्त उपयुक्त निकासाको लागी मिति २०५९/०८/१७ गते को टिप्पणी आदेशमा नि प्रतिवादी **समर**

**बहादुर सिंह** ठकुरीले हस्ताक्षर गरी टिप्पणी राय पेश गरे पश्चात मिति २०५९/०८/१७ गते नै उक्त टिप्पणी आदेशमा प्रमुख मालपोत अधिकृत बैद्यनाथ चौधरीले मालपोत विभागसँग निकासाको लागि पत्राचार गर्ने निर्णय गरेको देखिन्छ । यसरी प्रतिवादी समर बहादुर सिंह ठकुरीले लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा हाल साबिक गर्नको लागी निर्णयार्थ पेश गरेको टिप्पणी र आदेश किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

४६) **<u>मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन नायव सुव्वा प्रतिवादी राजेन्द्र बुढाथोकीको हकमा :</u>**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हाल साबिक गरी पाउ भनी शैलजा राणा तथा कृतिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदन दिएकै आधारमा मालपोत कार्यालयका तत्कालीन ना.सु **राजेन्द्र बुढाथोकी**ले का.जि. का.न.पा. साविक वडा नं. २३ "क्ष" र २३ "ह" अन्तर्गतका ७६ कित्ता जग्गाहरु नयाँ नापि हुँदाका बखतमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा नाप नक्सा भएको देख्दा देख्दै आफ्नै कार्यालयमा रहेको जग्गाको श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी निज प्रतिवादी राजेन्द्र बुढाथोकीले मिति २०५९/०७/०५ मा उक्त कित्ता जग्गाको नँया नापी अनुसार कित्ता काट गर्नको लागी फायल नापी कार्यालयमा पठाउन पर्ने देखि पेश गरेको छु भनी हाल साबिकको लागी टिप्पणी तयार गरी पेश गरी उक्त कित्ता जग्गाहरु शैलजा राणा समेतको नाममा हा.सा. गरी श्रेष्ता कायम गर्नको निमित्त उपयुक्त निकासाको लागी मिति २०५९/०८/१७ गते समर बहादुर सिंह ठकुरीले हस्ताक्षर गरी निर्णयार्थ टिप्पणी राय पेश गरे पश्चात मिति २०५९/०८/१७गते नै उक्त टिप्पणी आदेशमा तत्कालीन प्रमुख अधिकृत बैद्यनाथ चौधरीले हस्ताक्षर गरी मालपोत विभागसँग निकासाको लागि पत्राचार गर्ने निर्णय गरेको देखिन्छ । यसरी निज प्रतिवादी **राजेन्द्र बुढाथोकीले** लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्तिविशेषको नाममा हाल साबिक गर्नको लागी निर्णयार्थ तयार गरेको टिप्पणी र आदेश किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज

प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

४७) **मालपोत कार्यालय, डिल्लीबजारका तत्कालीन नायब सुब्बा प्रतिवादी राम प्रसाद अर्यालको हकमाः**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयकातत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हाल साबिक गरी पाउ भनी शैलजा राणा समेतका वारेश हाटक शमशेर ज.ब.रा., कृतिम मोही भनिएका देब नारायण महर्जन समेतका वारेश राम कुमार सुबेदी र मेरो नाममा भएका जग्गाहरु हा.सा.गरी पाउ भनी राम कल्याण अधिकारी समेतले निवेदन दिएकै आधारमा मालपोत कार्यालयका तत्कालीन ना.सु प्रतिवादी **राम प्रसाद अर्याल**ले का.जि. का.न.पा. साविक वडा नं. २३ "क्ष" र २३ "ह" अन्तर्गतका ७६ कित्ता जग्गाहरु नयाँ नापि हुँदाका बखतमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा नाप नक्सा भएको देख्दा -देख्दै आफ्नै कार्यालयमा रहेको जग्गाको श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त जग्गाहरु हा.सा.गर्न निज प्रतिवादी राम प्रसाद अर्यालले उल्लेखित जग्गाहरु श्री ५ को सरकार मन्त्रीपरिषदको निर्णयको आधारमा यस कार्यालयले व्यक्तिको नाममा दर्ता गरी श्रेष्ता खडा गरी पुर्जा समेत दिई सकेको हुंदा हा.सा. गरी दिन दुविधा नभएकोले पछि सम्म बिबाद नपर्ने गरी फिल्डमा गई कित्ता काट गर्न नापी कार्यालयमा लेखि पठाउनु पर्ने देखिदा पेश गरेको छु भनी मिति २०६०/०६/१७ गते टिप्पणी आदेश उठाए पश्चात समर बाहदुर सिंह ठकुरीले निर्णयार्थ पेश गरेकोमा सोही मितिमा तत्कालीन प्रमुख मालपोत अधिकृत बैद्यनाथ चौधरीले हालसाबिक हुन सहमतिको लागी भूमि सुधार तथा व्यवस्थापन विभागमा पठाई सहमति प्राप्त पश्चात कारबाही हुन भनी निर्णय गरेको देखिन्छ। निज प्रतिवादी **राम प्रसाद अर्याल**ले लिखत किर्तेबाट आएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा हाल साबिक गर्नको लागी निर्णयार्थ तयार गरेको टिप्पणी र आदेश किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**४८) तत्कालीन मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन ना.सु प्रतिवादी श्रीहरी पुडासैनीको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिती राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बाली नाली लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापी हुँदा फिल्डबुकमा के कसरी श्री ५ को सरकार समरजंग कम्पनी भन्ने लेखिन गई कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामीलाई केही जानकारी छैन उक्त जग्गा रेखा घिमिरेले राजिनाम पास गरी खरिद गरी लिएको हो, सो जग्गाको नयाँ नापीमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटोको डोब मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिंदा कसैलाई सन्धि समर्पण पर्ने अवस्था समेत छैन । निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अध्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भनी प्रतिवादी **श्रीहरी पुडासैनी** समेतले सर्जमिन मुचुल्का तयार गरी रोहवरमा बसि निजले सहिछाप समेत गरेको देखिन्छ । लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको देख्दा- देख्दै पनि उक्त सरकारी जग्गाको संरक्षण समेत गर्नु पर्ने दायित्व सरकारी कर्मचारीको हैसियतले पुरा गर्नु पर्नेमा उक्त जग्गा सरकारको हो भन्ने कुरालाई के कसरी लेखिन गएको हो भनी झुट्टा व्यहोरा र फरक मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्काको रोहबरमा बसि हस्ताक्षर समेत गरेको मिसिल संलग्न प्रमाणहरुबाट देखिएको हुँदा प्रस्तुत कसूरमा निज प्रतिवादी श्रीहरी पुडासैनीको संलग्नता प्रष्ट देखिन्छ ।

साबिकको का.जि.का.न.प.२३ “स” कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा निज सुनिती राणाको नाममा दर्ता गर्ने कार्य प्रारम्भ भएको देखिन्छ। जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६० मा सरकारी जग्गा भएमा निबेदन खारेज गर्न सकिने र दफा ६२ मा ज ग्गा दर्ता गर्नको लागि समितिमा पेश गर्नु पहिले जग्गाको बारेमा प्रमाणहरु बुझ्नु पर्ने भन्ने ब्यबस्था भएकोमा सो तर्फ कुनै चासो नगरी थाहा पाएर पनि नपाए जस्तो गरी जानीजानी गलत मनसाय राखी कानून बमोजिम हुनु पर्ने भन्दा फरक ब्यहोराको रुक्म शमसेर ज.ब.रा. समेतको मिति २०६०।०३।२३ को झुठो ब्यहोराको किर्ते मन्जुरिनामा कागज, ४ नं. वडा कार्यालयको तत्कालिन वडा सचिव शिवजि भट्टराईले मिति २०६०।५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको झुठो ब्यहोराको किर्ते सिफारीस, खरिदार श्याम कुमार क्षेत्रीले मिति २०६२।०१।११ मा तयार गरेको झुठो ब्यहोराको किर्ते सर्जमिन मुचुल्का, मिति २०६२।१।११ को हेमाद्री शमसेर ज.ब.राणाको झुठो ब्यहोरा उल्लेख गरेको हकदावी छाडेको किर्ते पत्र समेतका तथ्य विपरीत झुठो ब्यहोराको किर्ते सरकारी कागजातहरुलाई आधार बनाईजानीजानी गलत मनसाय राखी कानून बमोजिम हुनु पर्ने भन्दा फरक ब्यहोरा उल्लेख गरेको छुट जग्गा दर्ता समितिमा राख्नको लागि उठाईएको मिति २०६२।२।२ को टिप्पणी र आदेशमा **ना.सु.श्रीहरी पुडासैनीले** रुजु गरेको साथै जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६४ मा समितिले जग्गा दर्ताको सिफारिस गरेपछि कार्यालयले प्रमाणको मुल्याङकन गर्दा कुनै प्रमाण बुझ्न छुट भएको वा बुझ्नु पर्ने आवश्यकता देखिएमा सो समेत बुझ्ने भनी उल्लेख भए अनुसार उक्त जग्गाको श्रेष्ता, श्रोतको विषयमा सम्पुर्ण बिबरण कार्यालयमा हुँदाहुदै पनि उक्त सरकरी जग्गा सुनिती राणाको नाममा नामसारी हुने ठहर्छ भनी गलत तथा झुठो ब्यहोरा उल्लेख गर्न लगाईएको टिप्पणी र आदेशमा मिति २०६२।२।३ मा **ना.सु. श्रीहरी पुडासैनीले** दस्तखत गरी टिप्पणी र आदेश रुजु गरी मालपोत अधिकृत हुपेन्द्रमणी के.सी. मार्फत प्र.मा.अ.मा पेश गरी प्र.मा.अ. टिकाराम घिमिरेबाट सदर गरी उक्त सरकारी जग्गा **सुनिती राणाको** नाममा गैरकानूनी तरिकाबाट दर्ता गरी विगो **रु.३०,४३,७६,४१७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेष सुनिती राणाको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी **श्रीहरी पुडासैनीले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | रु.१,११,११,१११।- | - | - | ३०,४३,७६,४१७।- |

४९) **<u>भूमिसुधार तथा ब्यबस्था विभाग काठमाडौंका तत्कालीन शाखा अधिकृत प्रतिवादी ईन्द्रप्रसाद ढुङ्गानाको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा

समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको देखिन्छ । यसरी दर्ता प्रमाणित भएका साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी जग्गा विभिन्न कानूनी प्रकृयाबाट समेत विभिन्न मितिमा व्यक्तिहरुको नाममा हक हस्तान्तरण भएको देखिएको र श्री ५ को सरकारको फिर्ता दिने निर्णय पूर्ब पून: नाप नक्शा भएको कारणले साविक बमोजिम नै जग्गाधनी महलमा समरजंग कम्पनी लेखीन गएको भएता पनि समरजंग कम्पनीको पत्र र यस कार्यालयको च.नं. ३२३४ को पत्र अनुसार जफत भएको जग्गा सम्बन्धि व्यक्तिलाई नै फिर्ता भएको हुंदा उक्त जग्गाका विभिन्न जग्गाधनीहरुले हाल साविक गरी पाउ भनी निवेदन दिए पश्चात हा.सा. को लागी कित्ताकाट गर्न नापी शाखामा पठाउदा साविक दर्ता श्रेष्ता कायम भएको आधारमा नया नापी अनुसारको हा.सा. गरी दर्ता गर्न मनासिब देखिएको भनी मिसिल प्राप्त भएकोले निर्देशनको लागी मालपोत कार्यालय काठमाडौंले पत्राचार गरे पश्चात तत्कालीन ना.सु. जगन्नाथ पनेरुले मिसिल निर्देशनार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश तयार गरी तत्कालीन शाखा अधिकृत **प्रतिवादी अधिकृत ईन्द्र प्रसाद ढुंगानाले** उक्त जग्गा व्यक्ति विशेषका नाममा दर्ता प्रमाणित रहेको देखिएकोले सोही प्रमाणित श्रेष्ताका आधारमा हाल नापी अनुसारको कायम भएका कि.नं. का जग्गाहरु सोही श्रेष्तालाई आधार मानी हाल साविक श्रेष्ता मिलान गर्न बाधा नपर्ने व्यहोराको निर्देशन पठाउन मनासिब हुने देखि पेश गरेको छु भनी निर्णयार्थ पेश गरेको, तत्कालीन निर्देशक प्रतिवादी पुष्पराज उपाध्यायले सोही कुरा मनासिब हुने गरी पेश गरे पश्चात तत्कालीन महानिर्देशक प्रतिवादी रुद्र कुमार श्रेष्ठले हुन्छ भनी निर्णय गरी मिति २०५९/०७/०१ गते निर्देशन सहित मिसिल पठाएको देखिन्छ । यसरी निज प्रतिवादी ईन्द्र प्रसाद ढुंगाना समेतले तत्कालीन भूमी सुधार तथा व्यवस्थापन विभाग काठमाडौंको शाखा अधिकृतको पदमा रहँदा मिति २०५९/६/२४ मा साविक हाँडिगाऊँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निबास क्याम्पभित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नामको जग्गाधनी दर्ता श्रेस्ता खारेज गरी सरकारी जग्गाको साविक कित्तालाई नयाँ नापी अनुसार व्यक्ति विशेषको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम हुने गरी हाल साविक गर्नको लागी मनासिब देखिन्छ भनी राय टिप्पणी र आदेशको निर्णय पेश गरी प्रत्यक्षरुपमा प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ ( का.फौ.त.) ,बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने

उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **ईन्द्र प्रसाद ढुङ्गाना** समेत भई कारवाहीमा आएका कित्ता जग्गाका सम्बन्धमा केन्द्रीय कार्यालयबाट श्री ५ को सरकार समरजंग कम्पनीको नामको दर्ता कट्टा गरी गुठीको नाममा दर्ता स्वीकृतिको लागि लेखि आएकोमा नेपाल सरकार म.प.को स्वीकृती आवश्यक पर्ने र पुन: नापी हुँदा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको गुठी लगत भित्रको जग्गाको नेपाल सरकार समरजंग कम्पनीको नाम कट्टा गरी सम्बन्धित गुठीको नाममा दर्ता गर्ने गुठी संस्थानलाई स्वीकृति दिने गरी नेपाल सरकार म.प.मा पेश हुनु पर्ने भनी पेश गरेको फायल उपर **यसमा माथि पेश भए अनुसार पुन: नापीमा समरजंग कम्पनीको नाममा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा बिनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि म.प. प्रस्ताव पेश गर्नु पर्ने देख्दछु** भनी मिति २०६३।०९।२१ मा फायल अगाडि बढाएको निज ईन्द्र प्रसाद ढुङ्गानाले गुठीको लगत भित्रको हुन भन्ने लेखि आएको २१ कित्ताको क्षेत्रफलले प्रष्ट देखिने अवस्था यो कुरालाई अनदेखा गरेको देखिएको,अधिग्रहण र क्षतिपूर्ति बुझ्न आउने सम्बन्धी गजेट र गोरखापत्रमा प्रकाशित सूचनाहरू हुँदा हुदै राणाहरूको जफत भएको जग्गा भनी मानी अगाडि बढाएको कारबाहीलाई समर्थन गरेको,ललिता निवास क्याम्प भित्रको जग्गा सबै रैकर हुन भन्ने सुवर्ण शमशेरकै २०१७ सालको लगतबाट देखिएको, राणाहरूले गलत रूपमा दावी गरेको ११२ रोपनी पहिले नै फिर्ता लिई सकेको अवस्थामा राणाहरूको कीर्ते कागजलाई प्रमाणको रूपमा लिईएको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराको टिप्पणी राय पेश गरी कीर्ते कार्यमा संलग्न रहेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका **आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको,**टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै**निर्णय आदेश गरेको , **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई अगाडि बढाउने कार्यगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी विगो रु.३०,४१,४४,६१६।– वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी निज **प्रतिवादी ईन्द्र प्रसाद**

**ढुङ्गाना**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | १,०८,७९,३१०/- | ३०,४१,४४,६१६।- |

५०) **भूमिसुधार व्यवस्था विभागका तत्कालीन नायव सुब्बा फरार प्रतिवादी कृष्ण प्रसाद खनालको हकमा:**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयकातत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९/७/२५ र २०४९/९/२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको देखिन्छ ।यसरी दर्ता प्रमाणित भएका साबिक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साबिक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनि जग्गा विभिन्न कानूनी प्रकृयाबाट समेत विभिन्न मितिमा व्यक्तिहरुको नाममा हक हस्तान्तरण भएको देखिएको र श्री ५ को सरकारको फिर्ता दिने निर्णय पूर्ब पून: नाप नक्शा भएको कारणले साबिक बमोजिम नै जग्गाधनी महलमा समरजंग कम्पनी लेखिन गएको भएता पनि समर जंग कम्पनीको पत्र र यस कार्यालयको च.नं. ३२३४ को पत्र अनुसार जफत भएको जग्गा सम्बन्धि व्यक्तिलाई नै फिर्ता भएको हुंदा उक्त जग्गाका विभिन्न जग्गाधनीहरुले हाल साबिक गरी पाउ भनी निवेदन दिए पश्चात हा.सा. को लागी कित्ता काट गर्न नापी शाखामा पठाउदा साबिक दर्ता श्रेष्ता कायम भएको आधारमा नया नापी अनुसारको हा.सा. गरी दर्ता गर्न मनासिब देखिएको भनी मिसिल प्राप्त भएकोले निर्देशनको लागी मालपोत कार्यालय काठमाडौंले पत्राचर गरे पश्चात मिति २०५९/७/१ गते भूमिसुधार तथा व्यवस्थापन विभागले साबिकको नापीको कित्ता काट अनुसार हाल साबिक गर्न मिल्ने भनी निर्देशन दिएकोमा उक्त निर्देशनबाट दुबिधा परेकोले श्री ५ को सरकारको सहमति आबश्यक पर्ने हुंदा पुन: बिचारको लागी मालपोत कार्यालयबाट मिसिल फिर्ता पठाएको हुंदा अन्तिम कारबाहीको लागी तत्कालीन नायब सुब्बा प्रतिवादी **कृष्ण प्रसाद खनाल**ले मिति २०६०/०६/२३ गते टिप्पणी र आदेश तयार गरी पेश गरेकोमा हाल साबिक गर्ने काम साबिक श्रेष्ताको आधारमा गर्ने बिषय भएको भनी तत्कालीन शाखा अधिकृत प्रतिवादी खडग बहादुर गुरुङले निर्णयार्थ पेश गरे पश्चात सो सम्बन्धमा मिति २०५९/०६/२४ को निर्णय अनुसार विभागको निर्देशन भई सकेको हुंदा थप निर्देशन दिई रहनु नपर्ने र सोही पूर्ब निर्णयानुसार कारबाही गर्न मा.पो.कार्यालयमा पठाउने भनी तत्कालीन निर्देशक प्रतिवादी पुष्पराज उपाध्यायले स्पष्ट राय पेश गरे पश्चात तत्कालीन महानिर्देशक प्रतिवादी रुद्रकुमार

श्रेष्ठले सदर गरेको देखिन्छ । यसरी निज प्रतिवादी **कृष्ण प्रसाद खनाल** समेतले तत्कालीन भूमी सुधार तथा व्यवस्थापन विभाग काठमाडौंको नायब सुब्बा पदमा रहँदा मिति २०६०/४/२६ मा साविक हाँडिगाऊँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निबास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नामको जग्गाधनी दर्ता श्रेस्ता खारेज गरी सरकारी जग्गाको साविक कित्तालाई नयाँ नापी अनुसार व्यक्ति विशेषको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम हुनेगरी हाल साविक गर्नको लागी टिप्पणी र आदेश तयार गरी निर्णयको लागी पेश गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी कृष्ण प्रसाद खनालले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**५१) <u>भूमिसुधार तथा व्यवस्था विभागका तत्कालीन शाखा अधिकृत प्रतिवादी खड्ग बहादुर गुरुङको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको किर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९/७/२५ र २०४९/९/२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको देखिन्छ । यसरी दर्ता प्रमाणित भएका साबिक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साबिक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी जग्गा विभिन्न कानूनी प्रकृयाबाट समेत विभिन्न मितिमा व्यक्तिहरुको नाममा हक हस्तान्तरण भएको देखिएको र श्री ५ को सरकारको फिर्ता दिने निर्णय पुर्ब पून: नाप नक्शा भएको कारणले साबिक बमोजिम नै जग्गाधनी महलमा समरजंग कम्पनी लेखिन गएको भएता पनि समरजंग कम्पनीको पत्र र यस कार्यालयको च.नं. ३२३४ को पत्र अनुसार जफत भएको जग्गा सम्बन्धि व्यक्तिलाई नै फिर्ता भएको हुँदा उक्त जग्गाका विभिन्न जग्गाधनीहरुले हाल साबिक गरी पाउ भनी निवेदन दिए पश्चात हा.सा. को लागी कित्ता काट गर्न नापी शाखामा पठाउदा साबिक दर्ता श्रेष्ता कायम भएको आधारमा नया नापी अनुसारको हा.सा. गरी दर्ता गर्न मनासिब देखिएको भनी मिसिल प्राप्त भएकोले निर्देशनको लागी मालपोत कार्यालय काठमाडौंले पत्राचर गरे पश्चात मिति २०५९/७/१ गते भूमिसुधार तथा व्यवस्थापन विभागले साबिकको नापीको कित्ता काट अनुसार हाल साबिक गर्न मिल्ने भनी निर्देशन दिएकोमा उक्त निर्देशनबाट दुबिधा परेकोले श्री ५ को सरकारको सहमति आबश्यक पर्ने हुंदा पुन: बिचारको लागी मालपोत

कार्यालयबाट मिसिल फिर्ता पठाएको हुंदा अन्तिम कारबाहीको लागी तत्कालीन नायब सुब्बा प्रतिवादी कृष्ण प्रसाद खनालले मिति २०६०/०६/२३ गते टिप्पणी र आदेश तयार गरी पेश गरेकोमा हाल साबिक गर्ने काम साबिक श्रेष्ताको आधारमा गर्ने बिषय भएको भनी तत्कालीन शाखा अधिकृत प्रतिवादी प्रतिवादी **खडग बहादुर गुरुङले** निर्णयार्थ पेश गरे पश्चात सो सम्बन्धमा मिति २०५९/०६/२४ को निर्णय अनुसार विभागको निर्देशन भई सकेको हुंदा थप निर्देशन दिई रहनु नपर्ने र सोही पुर्ब निर्णयानुसार कारबाही गर्न मा.पो.कार्यालयम पठाउने भनी तत्कालीन निर्देशक प्रतिवादी पुष्पराज उपाध्यायले स्पष्ट राय पेश गरे पश्चात तत्कालीन महानिर्देशक प्रतिवादी रुद्रकुमार श्रेष्ठले सदर गरेको देखिन्छ । यसरी निज प्रतिवादी **खड्ग बहादुर गुरुङ** समेतले तत्कालीन भूमी सुधार तथा व्यवस्थापन विभाग काठमाडौंको शाखा अधिकृत पदमा रहँदा मिति २०६०/४/२६ मा साविक हाँडिगाऊँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निबास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नामको जग्गा जग्गाधनी दर्ता श्रेस्ता खारेज गरी सरकारी जग्गाको साविक कित्तालाई नयाँ नापी अनुसार व्यक्ति विशेषको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम हुनेगरी हाल साविक गर्नको लागी साबिक श्रेष्ताको आधारमा गर्ने बिषय भएको र यसमा फिल्ड बुकको व्यहोरालाई आधार मान्न मिल्ने वा नमिल्ने बिषयमा स्पष्ट हुन आबश्यक देखिएकोले पेश गरेको छु भनी टिप्पणी र आदेश निर्णयको लागी पेश गरी प्रत्यक्ष रुपमा लिखत किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५२) **पहिलो नापिमा नापी कार्यालय काठमाडौंका तत्कालीन अमिन फरार प्रतिवादी कबिराज बरालको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ को निर्णयले प्रचलित कानून बमोजिम अधिग्रहण गरी सरकारीकरण गरी समरजंग कम्पनीको जिम्मा तथा रेखदेखमा रहेको सरकारी जग्गाको साविक नापीको बखतमा नापी कार्यालय काठमाडौंका तत्कालीन अमिन **कबिराज बराल** समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा श्री ५ को सरकार समरजंग कम्पनीको जग्गामा फिल्डबुक तथा जग्गाधनी दर्ता श्रेष्तामा किसानको नाम उल्लेख गरेको तर जग्गावालाको नाममा केहि उल्लेख नगरेको तथा मिति २०२३/६/२३ गतेको ५७ जवान किसानले मोही दाबी नगर्ने गरी कमाउन दिने भन्ने पत्र अञ्चलाधीशको अफिस बाग्मती अञ्चलले समरजंग कम्पनीलाई पत्र लेखेको तर मिति २०२३/०३/२९,३०,३१ गते भएको नापीको फिल्ड बुकमा किसानको नाम र किसानको व्यहोरामा "यो जग्गा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाई आएको" भन्ने व्यहोरा उल्लेख भएको देखिन्छ। उक्त नापीको समयमा जग्गाधनी महलमा नापीको फिल्डबुकमा किसानको नाम र उक्त व्यहोरा नापीको श्रेष्तामा के कसरी लेखीयो ? नापी भएको समय र अंचलाधिश कार्यालयले लेखेको पत्रको समय अबधि ३ महिनाको फरक देखिएकोले उक्त नापीको फिल्ड बुक र अञ्चलाधिश कार्यालयको पत्र व्यहोरा फरक भएको मिसिल कागजातबाट देखिएको हुंदा तत्कालीन समयमा नापी गर्ने नापी कार्यालयका कर्मचारीहरु प्रतिवादी श्याम बिनोद गोपाली समेतले फरक व्यहोरा उल्लेख गरी

किर्ते गरेको देखिन्छ । यसरी तत्कालीन सरकारले कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गामा नापी कार्यालय काठमाडौंका तत्कालीन अमिन निज प्रतिवादी **कबिराज बराल** समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा साविकको फिल्डबुक समेतको लिखतमा फरक व्यहोरा उल्लेख गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५३) **फरार प्रतिवादी सरला घले गुरुङको हकमा:**

मिसिल संलग्न कागज प्रमाणहरुको आधारबाट ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्री परिषद्को मिति २०४७।२।१४, २०४७।४।८, २०४७।५।३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हदबन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी सरला गुरुङको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ७३५, ७३६, ७३७, २८३, ५१८, ३७४ को जम्मा २७८९.२१ वर्ग मिटर क्षे.फ., सरला गुरुङ र सरस्वति घले गुरुङको संयुक्त नाममा सि.नं. १०२-१०२५-१४ को कि.नं. २९, १४७, सि.नं. १०२-१०२५-१५ को कि.नं. ६०१, ६७६, २६६, ९८, २९४, ७४७,२६५, २७७, ३०८, २७०,७५१ को जम्मा ४४०५.९६ वर्ग मिटर क्षे.फ.र सरला गुरुङ, उमाकुमारी ढकाल्नी तथा माधवी सुबेदीको संयुक्त नाममा सि.नं. १०२-१०२५-१५ को कि.नं. २७०, २८५, २८२ को जम्मा १४०८.९२ वर्गमिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी सरला घले गुरुङको समेत प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिन्छ, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्नता भएको प्रष्ट देखिन्छ ।

प्रतिवादी सरला गुरुङ घलेको नाममा तत्कालिन श्री ५ को सरकारले कानुन बमोजिम अधिग्रहण गरी प्राप्त गरेको का.जि.का.म.पा वडा न.४ स्थितमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी सार्बजनिक जग्गा मध्ये सिट न. १०२५-१५ को कित्ता न. ७२२ को ७०.३६ बर्गमिटर जग्गा निज प्रतिवादी सरला गुरुङ्को नाममा रहेको, निज प्रतिवादी सरला गुरुङ्ले तत्कालिन श्री ५ को सरकारले प्रचलित जग्गा प्राप्ती ऐन २०१८ बमोजिम रितपुर्वक अधिग्रहण गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको

नाममा हक हस्तान्तरण नहुने भन्ने थाहा हुँदा हुदै जान्दा जान्दै आफ्नो नाममा खरिद गरी विगो रु.१,०८,६९,५४,८०७।– बरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ९५,८८,३०,१६१।- | - | १२,८१,२४,६४६।- | - | १,०८,६९,५४,८०७।- |

५४) **दोश्रो नापीको नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत प्रतिवादी शम्भु प्रसाद शर्माको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत **शम्भु प्रसाद शर्मा** समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७। ०७। ११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ। यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु प्रमुख नापी अधिकृत **शम्भु प्रसाद शर्मा** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ। अत: निज प्रतिवादी शम्भु प्रसाद शर्मा तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्डबुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ। यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको ब्यबस्थाको विपरित र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी लिखत किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५५) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंबाट खटिएका टोली प्रमुख प्रतिवादी दान बहादुर श्रेष्ठको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा  समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत प्रतिवादीशम्भु प्रसाद शर्मा तथा निज प्रतिवादी **दान बहादुर श्रेष्ठ** समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापी कार्यालयबाट खटिएका कर्मचारी टोली प्रमुख **दान बहादुर श्रेष्ठ** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी **दान बहादुर श्रेष्ठले** तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको ब्यबस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५६) **दोश्रो नापीको नापी कार्यालय काठमाडौंका तत्कालीन प्रमुख नापी अधिकृत प्रतिवादी अग्निधर शर्माको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा  समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा निज प्रतिवादी **अग्निधर शर्मा** समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र  २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु प्र.ना.अ.**अग्निधर शर्मा** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी **अग्निधर शर्माले**

तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी विगो **रु.२९,३२,६५,३०६।–** वारवरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५७) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका टोली प्रमुख प्रतिवादी श्री नन्द किशोर सिंहको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा  समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा र निज प्रतिवादी **नन्द किशोर सिंह** समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ, मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु टोली प्रमुख निज प्रतिवादी **नन्द किशोर सिंह** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी नन्द किशोर सिंहले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी **विगो रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी **नन्द किशोर सिहले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५८) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका तत्कालीन नापी निरिक्षक प्रतिवादी जित बहादुर मिजार (अछामी) को हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा निज प्रतिवादी जित बहादुर अछामी समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु नापी निरीक्षक निज प्रतिवादी **जित बहादुर अछामी** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी **जित बहादुर अछा**मीले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी लिखत किर्ते गरेको देखिई विगो **रू.२९,३२,६५,३०६।–** वारवरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

५९) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका अमिन प्रतिवादी बाल केश्वर मण्डल धानुकको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा अमिन निज प्रतिवादी बाल केश्वर मण्डल समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार

समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु अमिन **बाल केश्वर मण्डल** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी बाल केश्वर मण्डलले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी लिखत किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

६०) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका तत्कालीन ना.नि. प्रतिवादी गणेशमान मुल्मीको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा नापी निरीक्षक प्रतिवादी गणेशमान मुल्मी समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको र मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा कुनै मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था भएकोमा सो कुराको बारेमा प्रतिवादी गणेशमान मुल्मी समेतलाई जानकारी हुँदा-हुँदै तत्कालीन नापि कार्यालयका कर्मचारीहरु नापी निरीक्षक प्रतिवादी **गणेशमान मुल्मी** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी गणेशमान मुल्मीले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार

गरी विगो रु.२९,३२,६५,३०६।– वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

६१) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका तत्कालीन टोली प्रमुख प्रतिवादी ज्ञानुराज तुलाधरको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा तत्कालिन नापी टोलीका प्रमुख प्रतिवादी ज्ञानराज तुलाधर समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु टोली प्रमुखज्ञानराज तुलाधरसमेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी ज्ञानराज तुलाधरले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी लिखत किर्ते गरी विगो **रु.२९,३२,६५,३०६।**– वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

६२) **दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका तत्कालीन ना.नि. प्रतिवादी केशवराज मिश्रको हकमा:**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा प्रतिवादी नापी

निरीक्षक केशवराज मिश्र समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ तथा मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भूमि सम्बन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु नापी निरीक्षक प्रतिवादी **केशवराज मिश्र** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी केशवराज मिश्रले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदाहुँदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्डबुकको जग्गाधनी महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी लिखत किर्ते गरी **विगो रु.२९,३२,६५,३०६।– वरावरको** सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**६३) <u>दोश्रो नापीमा नापी कार्यालय काठमाडौंका तत्कालीन अमिन प्रतिवादी स्वयमराज शाक्यको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले अधिग्रहण गरेको सरकारी जग्गा  समरजंग कम्पनीको जिम्मामा रहेकोमा दोस्रो नापीको क्रममा नापी कार्यालय काठमाडौंका प्रमुख नापी अधिकृत शम्भु प्रसाद शर्मा तथा नापी निरीक्षक प्रतिवादी स्वयमराज शाक्य समेतका कर्मचारीहरुको मिलेमतो र संलग्नतामा ललिता निवास क्याम्प भित्रको साविक वडा नं. २३ क्ष र २३ ह को जग्गाको दोस्रो नापी मिति २०४७/०७/११, १२, १३, १३, १४, १५, १६, १८, १९, २०, २१, २५, २६, २७,२८, २९ ,३० र २०४७/०८/०६, ०७ ०८, ११, १२, १३, २५, २६, २७ र २०४८/१२/२१, २२ गते भएकोमा नापीको फिल्डबुक र श्रेष्तामा जग्गाधनीको महलमा श्री ५ को सरकार समरजंग कम्पनी कार्यालय उल्लेख गरेको देखिन्छ  र मोही महलमा विभिन्न मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी भुमि संबन्धी ऐनमा सरकारी जग्गामा मोही नलाग्ने स्पष्ट कानूनी व्यवस्था हुँदा-हुँदै सोको जानकार रहेका तत्कालीन नापि कार्यालयका कर्मचारीहरु नापी निरीक्षक प्रतिवादी **स्वयमराज शाक्य** समेतले ऐनको बर्खिलाप हुने गरी मोही महलमा फरक व्यहोरा उल्लेख गरी किर्ते गरेको देखिन्छ । अत: निज प्रतिवादी स्वयमराज शाक्यले तत्कालीन श्री ५ को सरकारले कानून बमोजिम क्षतिपूर्ति समेत दिई अधिग्रहण गरी

सरकारीकरण भई श्री ५ को सरकारको भोग र स्वामित्वमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै मोही नभएको कुरा स्पष्ट हुँदा हुदै २०४७/०४८ सालको विभिन्न मितिमा भएको नापीको फिल्ड बुकको जग्गाधनि महलमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख गरेको तर मोहीको महलमा कुल बहादुर महर्जन समेतका मोहीहरुको नाम उल्लेख गरेको देखिन्छ । यसरी जग्गाधनी श्री ५ को सरकार रहेको जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको विपरीत र ऐनसँग बाझिने गरी बदनियतपूर्ण कार्य गरी कृत्रिम मोही खडा गरी झुट्टा तथा फरक व्यहोराको फिल्डबुक तथा लगत समेत तयार गरी लिखत किर्ते गरी विगो रु.२९,३२,६५,३०६।– वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

६४) **<u>प्रतिवादी बैकुण्ठ शर्मा रेग्मीको हकमा:</u>**

साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा तत्कालीन श्री ५ को सरकारको नाममा रहि समरजंग कम्पनीको जिम्मामा रहेकोमा मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतका कर्मचारीहरुको मिलोमतो शैलजा राणा समेतले ललिता निवास क्याम्प भित्रको जग्गा सुवर्ण शमशेर ज.ब.रा.बाट निज प्रजातन्त्र पुनर्स्थापनाको लागी संघर्षमा लागेको कारणले जफत भएको हो भनी दिएको झुट्टा फरक तथा किर्ते व्यहोराको निवेदनलाई मात्र आधार मानी सरकारी कामको लागी अधिग्रहण भएको जग्गालाई जफत भएको हो भनी उक्त मन्त्री परिषद्को निर्णयको अपब्याख्या, दुरुपयोग तथा विपरीत समेत गरी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. गरेको देखिन्छ । सो पश्चात साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा मध्येबाट निज प्रतिवादी वैकुण्ठ शर्मा रेग्मीले तत्कालीन अवस्थामा भूमि सुधार विभागका तत्कालीन महानिर्देशक मुकुन्द प्रसाद आचार्य आफ्ना ससुरा नाता पर्ने भएकोले सुबर्ण शमशेर ज.ब.रा. र काञ्चन शम्शेर ज.ब.रा.का हकवालाहरू श्रीमती शैलजा राणा, हेमन शमशेर ज.ब.रा., हाटक शमशेर ज.ब.रा. समेतबाट आफ्नो नाममा हालै देखिको वकसपत्रको लिखत पारित गरी र.नं. ७२६१, मिति २०४९/१०/०२ मा साविक का.जि.का.न.पा.वडा नं. २३ क्ष कि.नं.२२ को क्षेत्रफल १-०-०-० रोपनी सरकारी जग्गा हालै देखिको वकस पत्रबाट लिएको देखिन्छ तर उक्त हालै देखिको वकसपत्रको लिखतमा “ तपाई लिनेले हाम्रो हरेक कामकाजमा रिझाई आए बापत उल्लेखित जग्गा हा.बा. गरी दिंए आफ्नो नाममा दा.खा.गराई भोगचलन गर्नुहोला” भन्ने व्यहोरा उल्लेख भएकोमा निज **बैकुण्ठ प्रसाद रेग्मी**ले केन्द्रिय अनुसन्धान व्यूरोको छनविन समिति समक्ष गरेको कागजमा "शैलजा राणा समेतलाई म चिन्दिन, माथि उल्लेखित जग्गा मैले प्राप्त गरेको पनि छैन, मेरो ससुरा बुबा स्व. मुकुन्द प्रसाद आचार्य बबरमहल स्थितमा रहेको भूमिसुधार तथा मालपोत व्यवस्था विभागमा महानिर्देशक पदमा कार्यरत हुनुहुन्थ्यो । वहाँले मलाई मिति २०४९/१०/०१ गते भन्दा केहीदिन पहिले एक दिन कार्यालयमा बोलाई ८/१० वटा खाली कागजातहरुमा

दस्तखत गराइ वारेस मार्फत मेरो नाममा सुवर्ण शमसेरको हकवाला शैलजा राणा समेतबाट साविक २३ क्ष को कि.नं.२२ को क्षेत्रफल १-०-०-० रोपनी जग्गा मिति २०४९/१०/०१ गते पास गरेको कुरा अख्तियार दुरुपयोग तथा अनुसन्धानको कार्यालयबाट मलाई बोलावट भई सोधपुछ पश्चात मात्र थाहा पाएको हुँ। शैलजा राणा समेतलाई चिनेको तथा रिझाएको छैन"भनी खुलाई लेखाई दिएबाट निज **बैकुण्ठ शर्**मा रेग्मी तथा ससुरा मुकुन्द प्रसाद आचार्यको राणा परिवारसँग पूर्व चिनजान तथा पारिवारिक सम्बन्ध रहेको नदेखिएबाट निज प्रतिवादी बैकुण्ठ शर्मा रेग्मीले आफ्नो ससुरा बुबा मुकुन्द प्रसाद आचार्य भूमिसुधार तथा मालपोत व्यवस्था विभागमा महानिर्देशक पदमा कार्यरत रहेकोले निजले उक्त लिखत किर्ते कागजातबाट सरकारी जग्गा व्यक्ति विशेषको नाममा ना.सा.दा.खा गराउने कार्यमा प्रत्यक्ष अप्रत्यक्ष रुपमा सहयोग पुर्याएकोले घूस बापत उक्त सरकारी जग्गा **बैकुण्ठ शर्मा रेग्मीको** नाममा लिएको पुष्टी हुन्छ। निज प्रतिवादी बैकुण्ठ शर्मा रेग्मी समेतले किर्ते लिखत कागजात मार्फत ब्यक्ति विशेषको नाममा ना.सा.दा.खा.भएको सरकारी जग्गा मध्येबाट माथी उल्लेखित जग्गा प्राप्त गरी **विगो रु.१९,३०,६६,६६७।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १९,३०,६६,६६७।- | - | - | - | १९,३०,६६,६६७।- |

**६५) <u>प्रतिवादी खिमादेवी आङबुहाङको हकमा</u> :**

साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा तत्कालीन श्री ५ को सरकारको नाममा रहि समरजंग कम्पनीको जिम्मामा रहेकोमा मालपोत कार्यालय डिल्लीबजारका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतका कर्मचारीहरुको मिलोमतो शैलजा राणा समेतले ललिता निवास क्याम्प भित्रको जग्गा सुवर्ण शमशेर ज.ब.रा.बाट निज प्रजातन्त्र पुनर्स्थापनाको लागी संघर्षमा लागेको कारणले जफत भएको हो भनी दिएको झुट्टा फरक तथा किर्ते व्यहोराको निवेदनलाई मात्र आधारमानी सरकारी कामको लागी अधिग्रहण भएको जग्गालाई जफत भएको हो भनी उक्त मन्त्रि परिषदको निर्णयको अपब्याख्या, दुरुपयोग तथा विपरीत समेत गरी शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरेको देखिन्छ। सो पश्चात साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा मध्येबाट प्रतिवादी खिमा देबी आङबुहाङले तत्कालीन अवस्थामा भूमि सुधार विभागको शाखा अधिकृत प्रेम बहादुर खापुङ आफ्ना श्रीमान भएको कारणले सुबर्ण शमशरे ज.ब.रा. र काञ्चन शम्शेर ज.ब.राका हकवालाहरू श्रीमती शैलजा राणा, हेमन शमशेर ज.ब.रा., हाटक शमशेर ज.ब.रा. समेतबाट आफ्नो श्रीमान् मार्फत आफ्नो र मोहन प्रसाद भट्टराईको नाममा हालै देखिको वकसपत्रको लिखत पारित गरी र.नं. ४१२४, मिति २०४९/०८/०१गते का.जि. का.न.पा. साविक वडा नं.२३ ह को कि.नं.१८ को क्षेत्रफल १-१४-२-० (एक रोपनी चौंध आना दुई पैसा) सरकारी जग्गा हालैको वकसबाट लिएको देखिन्छ, उक्त हाले देखिको वकसपत्रको लिखतमा "तपाई लिनेले हाम्रो हरेक कामकाजमा रिझाई आए बापत उल्लेखित जग्गा हा.बा. गरी दिंए आफ्नो नाममा दा.खा. गराई भोगचलन गर्नुहोला" भन्ने व्यहोरा

लेखिएको तर गुठी शब्दावली उल्लेख भएको देखिदैन । दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **बील बहादुर महर्जन** समेत भई "साबिक २३ क्ष कि.नं. ६८ र ६९ को क्रमश: क्षे.फ.१-८-० र ०-६-२ जग्गा पशुपती टिकिन्छा गुठीको लगतमा खला नं. १० मा आशामरु ज्यापुको नाउँमा भिड्ने जग्गा हो, फि.वु.को जोताहा महलमा उल्लेखित कि.नं. ६८ को मोही न्हुच्छे महर्जन पीता हुन र कि.नं. ६९ को जोताहा मोही उल्लेख भएको भएतापनि नापी अगावै देखि न्हुच्छे महर्जनले जोतभोग गरी आएकोमा निजको शेष पछि निवेदक मचानानी महर्जनले नै जोतभोग गरी आएको हुँदा निजकै नाउमा ना.सा., दर्ता हा.सा.समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको, "साबिक २३ क्ष कि.नं. २८ को क्षे.फ.३-१५-०, ऐ. कि.नं. ४२ को क्षे.फ. ०-५-०, ऐ. कि.नं. १५ को क्षे.फ. ८-५-०, ऐ. कि.नं. ६३ को क्षे.फ. ०-४-० र ऐ. कि.नं. २५ को क्षे.फ. ०-१२-० का जग्गाहरु श्री ५ सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलवाट श्री ५ सरकार मात्र लेखिएको गुठी जग्गा हो । गुठीमा दर्ता हुने भई उक्त जग्गा गुठी कायम हुनु पर्ने हो । उल्लेखित कि.नं. का जग्गाहरु निवेदकहरुबाट नै भोगचलन गरी रहेको जग्गा हुन । निवेदकले दिएको निवेदन पढि सुनेर निवेदनमा माग दावी गरे अनुसार नै आ-आफ्नो जग्गा भोगचलन जोतिभोगी आएका छन । निवेदकको माग अनुसार गरी दिएमा फरक पर्ने छैन । वाली बुझाएको सम्न्धमा हाल सम्म नबुझाएको र बुझाउनु पर्ने नियमानुसार गुठीमा नै बुझाउनु पर्ने हो" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको**, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुट्टो, वेरित र फरक व्यहोरा लेखि कीर्ते मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुट्टा प्रमाणलाई समर्थन गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी आरोपित सारभूत कसूर गर्न सहयोग, मद्दत, सल्लाह र परिस्थिति श्रृजना गरी **विगो** रु.१३,९०,१५,५६७।- वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १२,६८,८०,९५२।- | - | - | १,२१,३४,६१५/- | १३,९०,१५,५६७।- |

९३) **<u>प्रतिवादी बेखा नारायण महर्जनको हकमा:</u>**

जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **बेखानारायण महर्जनले** का.जि.का.म.न.पा. वडा नं. २३ ह कित्ता नं. १६ को २-६-०-० र २३ क्ष को कि.नं. ७० को २-४-०-० रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते देखिन्छ। अत: निज प्रतिवादी बेखानारायण महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१),(२),(३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख हुँदा पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते देखिन्छ र निज प्रतिवादी **बेखा नारायण महर्जन**ले मिति २०५७/१०/२७ मा मोही कायम भई २३ ह को कि.नं. ४२ को क्षे.फ. १-३-०-० क्षेत्रफल जग्गा प्राप्त गरी उक्त जग्गा बिक्री वितरण तथा हक हस्तान्तरण गरी लिखत कीर्तेबाट लाभ समेत प्राप्त गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी बेखा नारायण महर्जनले साबिक नगर २३ ह कि.नं.४० को क्षे.फ.०-१३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मध्ये भिड्ने हो उक्त जग्गाको जोताहा महलमा हर्क नारायण डंगोल लेखिएको भए तापनी नापी अगावै देखि रामकृष्ण महर्जनले नै जोत भोग गरी आएकोले निजकै नाउमा दर्ता हा.सा.समेत गरी जग्गाधनी प्रमाण पुर्जा उपलब्ध गराई दिएमा फरक पर्ने छैन भन्ने व्यहोराको मुचुल्कामा साक्षी बसी सरकारी जग्गा मोही भनिएका ब्यक्तिको नाममा कायम गर्न समर्थन गरी विगो रु.**१३,९०,१५,५६७।-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका

निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १२,६८,८०,९५२।- | - | ४०,६०,००० | - | १३,०९,४०,९५२।- |

**९४) प्रतिवादी अष्ट नारायण महर्जनको हकमा:**

भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख हुँदाहुदै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र प्रतिवादी **अष्ट नारायण महर्जन**ले साविक २३ क्ष को कि.नं. ३० को २-१०-०-० रोपनी जग्गामा मोही दाबी गरी मिति २०५७/१०/२७ मा मोही कायम भई २३ क्ष को कि.नं. ४६ को १-५-०-० क्षेत्रफल जग्गा प्राप्त गरी उक्त जग्गा बिक्री वितरण तथा हक हस्तान्तरण गरी लाभ समेत प्राप्त गरी निज प्रतिवादी **अष्ट नारायण महर्जनले विगो रु.१२,६८,८०,९५२।-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १२,६८,८०,९५२।- | - | - | - | १२,६८,८०,९५२।- |

**९५) प्रतिवादी मयजु महर्जन (२०४९ जग्गा फिर्ता) को हकमा:**

प्रतिवादी मयजु महर्जनले भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख हुँदाहुदै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही

हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **मयजु महर्जन**ले साविक २३ ह को कि.नं. २१ को २-४-२-० र २३ क्ष को कि.नं. ३८ को ०-८-०-० रोपनी जग्गामा मोही दाबी गरी मिति २०५७/१०/२७ मा मोही कायम भई २३ ह को कि.नं. ५० को १-६-१-० क्षेत्रफल जग्गा प्राप्त गरी उक्त जग्गा बिक्री वितरण तथा हक हस्तान्तरण गरी लाभ समेत प्राप्त गरी निज प्रतिवादी **मयजु महर्जनले विगो रु.१२,६८,८०,९५२।-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १२,६८,८०,९५२।- | - | - | - | १२,६८,८०,९५२।- |

९६) **<u>प्रतिवादी लक्ष्मी महर्जन भन्ने लक्ष्मी माया महर्जनको हकमा</u>**:

प्रतिवादी लक्ष्मी महर्जन भन्ने लक्ष्मी माया महर्जनले भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानी हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख हुँदाहुदै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **लक्ष्मी महर्जन भन्ने लक्ष्मी माया महर्जन**ले साविक २३ क्ष को कि.नं. २४ को क्षे. १-२-०-० रोपनी जग्गामा मोही दाबि गरी मिति २०५७/१०/२७ मा मोही कायम भई २३ ह को कि.नं.११६ को ०-१०-२-० क्षेत्रफल जग्गा प्राप्त गरी उक्त जग्गा बिक्री वितरण तथा हक हस्तान्तरण गरी लाभ समेत प्राप्त गरी निज प्रतिवादी **लक्ष्मी महर्जन भन्ने लक्ष्मी माया महर्जनले विगो रु.१२,६८,८०,९५२।-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १२,६८,८०,९५२।- | - | - | - | १२,६८,८०,९५२।- |

९७) **<u>प्रतिवादी श्री नारां (नारायण) महर्जनको हकमा</u> :**

मिसिल संलग्न कागजातहरुको आधार प्रमाणहरुबाट जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट

कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **नाराँ (नारायण) महर्जन**ले का.जि.का.म.न.पा. वडा नं. २३ क्ष कित्ता नं. ६५ को क्षे.फ. ०-१०-२-० रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरेको देखिन्छ । यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार  समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ । अत: निज प्रतिवादी श्री **नाराँ (नारायण) महर्जन**ले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१  को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुनेगरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते देखिन्छ र निज प्रतिवादी श्री **नाराँ (नारायण) महर्जन**ले मिति २०५७/१०/०२ मा मोही कायम भई कि.नं. ११० को ०-५-१-० क्षेत्रफल जग्गा प्राप्त गरी उक्त जग्गा बिक्री वितरण तथा हक हस्तान्तरण गरी लाभ प्राप्त निज प्रतिवादी **नाराँ (नारायण) महर्जनले विगो रु.१२,६८,८०,९५२।-** वरावरको नेपाल सरकारको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १२,६८,८०,९५२।- | - | - | - | १२,६८,८०,९५२।- |

९८) **<u>प्रतिवादी पंचनारायण भन्ने तुयु भाई महर्जनको हकमा:</u>**

जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त

नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **पंचनारयण भन्ने तुयु भाई महर्जनले** भई साविक २३ ह कि.नं. १८,१९ हालको का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. २३८, २४०, २४२, २९० को क्रमश: क्षे.फ. ०-१०-०-०, ०-९-१-२, १-४-०-०, ०-१-१-० जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ । अत: निज प्रतिवादी पंचनारयण भन्ने तुयु भाई महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते देखिन्छ र निज प्रतिवादी **पंचनारायण भन्ने तुयु भाई महर्जन**ले मिति २०६१।०९।०६ गते मोही कायम भई साविक २३ ह कि.नं. १८,१९ हालको का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. २३८, २४०, २४२, २९० को क्रमश: क्षे.फ. ०-१०-०-०, ०-९-१-२, १-४-०-०, ०-१-१-० रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु २६,००,०००/- (छब्बिस लाख ) रकम बुझि मोहीयानी हक माधवी सुवेदी, उमा कुमारी ढकाल्नीलाई हक छाडि वाँडफाँड लगत कट्टा गरी निज प्रतिवादीको प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार -४ हा.नं.४५६ ( .फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी

तुई भाई भन्ने **पंच नारायण महर्जन** समेत भई "साबिक २३ क्ष कि.नं. २८ को क्षे.फ.३-१५-० , ऐ. कि.नं. ४२ को क्षे.फ. ०-५-० , ऐ. कि.नं. १५ को क्षे.फ. ८-५-० , ऐ. कि.नं. ६३ को क्षे.फ. ०-४-० र ऐ. कि.नं. २५ को क्षे.फ. ०-१२-० का जग्गाहरु श्री ५ सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलवाट श्री ५ सरकार मात्र लेखिएको गुठी जग्गा हो । गुठीमा दर्ता हुने भई उक्त जग्गा गुठी कायम हुनु पर्ने हो । उल्लेखित कि.नं. का जग्गाहरु निवेदकहरुबाट नै भोगचलन गरी रहेको जग्गा हुन । निवेदकले दिएको निवेदन पढि सुनेर निवेदनमा माग दावी गरे अनुसार नै आ- आफ्नो जग्गा भोगचलन जोतिभोगी आएका छन । निवेदकको माग अनुसार गरी दिएमा फरक पर्ने छैन । वाली बुझाएको सम्न्धमा हाल सम्म नबुझाएको र बुझाउनु पर्ने नियमानुसार गुठीमा नै बुझाउनु पर्ने हो" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको**, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुठ्ठो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुठ्ठा प्रमाणलाई समर्थन गरी को नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी निज प्रतिवादी **पंचनारायण भन्ने तुयु भाई महर्जन**ले **विगो रु.२९,७२,०१,२८२।-** वरावरको नेपाल सरकारको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | १,२१,३४,६१५/- | २९,७२,०१,२८२।- |

९९) **प्रतिवादी पंच नारायण महर्जनको हकमा:**

मिसिल संलग्न कागजातहरुको आधार प्रमाणहरुबाट प्रतिवादी पंच नारायण महर्जनको बुवा बेखानारायण महर्जनले भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु

मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी बेखा नारायण महर्जनले मिति २०५७/१०/२७ मा मोही कायम भई २३ ह को कि.नं. ४२ को क्षे.फ. १-३-०-० क्षेत्रफल जग्गा प्राप्त गरी उक्त जग्गा बिक्री वितरण तथा हक हस्तान्तरण गरी लाभ समेत प्राप्त गरी प्रतिवादी **पंच नारायण महर्जन**ले केन्द्रिय अनुसन्धान ब्यूरोबाट गठित छानबिन समिति समक्ष कागज गर्दा मेरो बुवाले मोही वापत माथि उल्लेखित जग्गा लिएकोमा उक्त जग्गा तपाईले नपाउने हुनु भयो, सो बाफत रकम लिएर जानुस भनी हामीलाई रु.१४,००,०००/- (चौध लाख) दिई राम कुमारले तयार गरी राखेको कागजमा बुवालाई सहिछाप गराएका थिए, सो पश्चात हामिले उक्त रकम लिई गएका हौँ, उक्त जग्गा बिक्रि वितरण भै सकेको कुरा हाल थाहा पाएको हुँ,भनी खुलाई लेखाई दिएकोले निज प्रतिवादी **पंच नारायण महर्जन**ले उक्त जग्गा सरकारी हो भन्ने कुरा थाहा पाई जानि जानि सो बाफत रकम लिई लाभ प्राप्त गरी निज प्रतिवादी **पंच नारायण महर्जनले विगो रु.२८,५०,६६,६६७।- बराबरको** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

**१००) <u>प्रतिवादी तीर्थमाया महर्जनको (पति नाती महर्जन) हकमा:</u>**

मिसिल संलग्न हुन आएको कागज समेतका आधार प्रमाणहरु अध्ययन गरी बिश्लेषण गर्दानिज प्रतिवादी तीर्थमाया महर्जनले भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख हुँदाहुदै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी तीर्थमाया महर्जनले मिति २०६१/०९/०७ गतेमा नयाँ नापिमा का.जि. नगर वडा नं.०४ सि.नं.१०२५-१५ कि.नं. २, ३ ,११५ को क्रमश क्षे.फ. ०-०-१-१,०-३-०-२,१-१५-२-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु २२,००,०००/- (बाईस लाख) रकम बुझि मोहीयानी हक बिनिता अधिकारी, सुधिरा भट्टराई, चमेली श्रेष्ठ, बाबा कार्की, खिमलाल खरेल, अगम ढुङ्गाना समेतलाई छाडि वाँडफाँड लगत कट्टा गरी लाभ समेत प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ।

मिति २०५८/०१/१४ गते नाती महर्जनको हकमा वारेश राम कुमार सुबेदीले साबिक नगर २३ क्ष को कि.नं. २५ को क्षेत्रफल ०-१२-०-० रोपनी जग्गा कित्ता नापीका समयमा फिल्डबुकमा नाति महर्जन कायम भई ज.ध. खाली भएको र कैफियत महलमा यो जग्गा श्री ५ को सरकारको भनी जनिएको र मा.पो.का. काठमाडौंको

ज.ध. दर्ता श्रेष्तामा श्री ५ को सरकार गुठी भनी जनिन गएकोमा नापीका समयमा अज्ञानतावश मलाई गुठीको यकिन नाम थाहा हुन नसकी ज.ध. श्री ५ को सरकार वा श्री ५ को सरकार गुठी भनी कैफियत महल र ज.ध. दर्ता श्रेष्तामा कायम हुन गएता पनि यस का.गु.त. कार्यालय मार्फत उक्त जग्गा मेरा नाममा दर्ता गरी ज.ध. पुर्जा पाउँ भनी निवेदन दिएको, यस सम्बन्धमा का.न.प. वडा नं. २३ क्ष कि.नं. २५ को क्षे.फ. ०-१२-०-० रोपनी जग्गामा मोही नाति महर्जन का.ई. पानीपोखरी र ज.ध. मा अञ्चल आदेश श्री ५ को सरकारलाई अधिया कुत बुझाएको जनिएको, का.न.प. वडा नं. २३ क्ष को साबिक २ नं. अनुसूचीबाट देखिएको भन्ने व्यहोराको भू.सु.का. काठमाडौंको च.नं. ५३२१ मिति ०५८/२/३ को पत्र र नगर २३ क्ष कि.नं. २८, ४२, २५ समेतको जग्गा दोहोरो दावी नदेखिएको भन्ने व्यहोराको मा.पो.का.काठमाडौंको प.सं. गुठीमोठ/०५७/०५८ मिति ०५८/२/१८ को पत्र रहेको, निवेदन व्यहोरालाई समर्थन गर्ने गरी निज निवेदकको नाममा मोही दर्ताको लागि का.म.पा. ४ वडा कार्यालयका वडाध्यक्ष रत्न प्रसाद जोशीले फिल्डबुक तथा ज.ध. श्रेस्ताको अभिलेख विपरित २०५८/५/११ मा सिफारिश गरेको, वि.स.२०६६।९।१३ भूमिसुधार कार्यालयमा मोही नाति महर्जनको मृत्यु भइसकेकोले स.अ.को मिति २०६४/११/३० को फैसला मुताविक निज पतिको हकमा म श्रीमती **तिर्थमाया महर्जन**लाई मोही कायम गरी पाउँ भनी निज तिर्थमाया महर्जनको वारेश राममणी सिग्देलले साविक २३ क्ष को कि.नं. २५ को ०-१२-०-० रोपनी हाल वडा नं. ४ सिट नं. १०२५-१५ कि.नं. ७४,२११ को लागि निवेदन दिएको, सम्मानित सर्बोच्च अदालतको उक्त फैसलाले कोहि कसैलाई मोही कायम नगरेको अवस्थामा समेत नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ को निर्णय पश्चात स.अ. को फैसला र मन्त्रिपरिषदको २०६६।१२।२९ को निर्णय समेतबाट मोही कायम गरी ना.सा. समेत गरी पाउँ भनी स.अ. को मिति २०६४।११।३० को फैसलालाई अपव्याख्या गर्दै निवेदन दिएको, नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र मिति २०६७।०१।३१ को निर्णय पश्चात मालपोत कार्यालय, डिल्लीबजारमा सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले मलाई मोही ठहऱ्याए पश्चात सो फैसला विरुद्ध भएको पुनरावलोकनमा समेत सम्मानित सर्वोच्च अदालतबाट मिति २०६५/०८/२० मा मेरै पक्षमा अन्तिम फैसला भएकोमा नेपाल सरकार मन्त्रिपरिषद्को मिति २०६६/१२/२९ को निर्णयमा पनि मेरो पति नाति महर्जन मोही कायम रहेको र यसै कार्यालयको मिति २०६६/१०/१०, च.नं. ९००९ को पत्र समेतले नगर ४ सिट नं. १०२५-१५ को कि.नं. ७४ र २११ मा मेरो पति नाति महर्जन मोही स्पष्ट देखिएकोले नेपाल सरकार मन्त्रिपरिषद्को विशिष्ट व्यक्तिहरुको निवास भवन परिसर विस्तारको क्रममा मोहीको हैसियतले नगर ४ सिट नं. १०२५-१५ को कि.नं. ७४ को क्षेत्रफल ०-११-१-० रोपनीको पूर्व तर्फबाट ०-५-२-२ रोपनी र कि.नं. २११ को क्षेत्रफल ०-३-०-० रोपनी मध्ये पूर्व तर्फबाट ०-१-२-० रोपनी म मोही तिर्थमायाले पाउने भन्ने दावी गरी निवेदन पेश गरेको, मि.नं ५५, मिति २०६७/०८/१६ को निर्णयले निज तिर्थमाया महर्जनले सिट नं. १०२५- १५ को कि.नं. ७४ बाट कि.नं. ६१९ को १७८.८५ व.मि. र कि.नं. २११ बाट कि.नं. ५९२ क्षे. ३७.७७ व.मि. गरी जम्मा २१६.६२ व.मि (६ आना ३ पैसा १ दाम) जग्गा प्राप्त गरेको, तत्कालीन सरकारको मिति २०२१।८।१५ को निर्णयले प्रचलित कानून बमोजिम ललिता निवास क्याम्प भित्रको जग्गा अधिग्रहण भइसकेको सन्दर्भमा मिति २०२३।३।२९, ३० र ३१ गते भएको साविक नापी बमोजिमको फिल्डबुक र श्रेष्तामा उल्लेख भएको मोहीहरुको नामावली नै कीर्ते व्यहोरा भएको,फिल्डबुकको अध्ययन गर्दा साविक वडा नं. २३ क्ष को मोही नाति महर्जन, नयाँ नापी बमोजिमको सिट नं. १०२५-१५ को कि.नं. ७४ मा मोही तिर्थमाया महर्जन र कि.नं. २११ मा मोही लक्ष्मी माया डंगोल देखिएको, कि.नं. ७४ र २११ को श्रेस्ता समेत कायम नभएको, यसरी कि.नं.

७४ र २११ मा मोही नमिले तापनि सो तथ्य मिसिल नं. ५५ को टिप्पणी र आदेश खण्डको पेज नं. १६ को फरक परेको विवरण समेतमा उल्लेख नगरी निर्णय गर्ने अधिकृतले समेत बदनियतपूर्वक गैर कानूनी तवरले टिप्पणी सदर गरी दिएको, यसरी निज तिर्थमाया महर्जनले दावी गरेको सबै कित्ताहरूमा मोहीको विवरण फरक परेकोले नक्कली मोही खडा गरेको देखिएको साथै तिर्थमाया महर्जनको वारेश रामकुमार सुवेदीले पहिले का.गु.त. कार्यालय कालमोचनमा कुनै पनि गुठीको नभएको जग्गालाई नापीका समयमा अज्ञानतावश गुठीको यकिन नाम थाहा हुन नसकी ज.ध. श्री ५ को सरकार वा श्री ५ को सरकार गुठी जनिएकाले गुठीको जग्गा हो भनी झुठो व्यहोराको निवेदन दिएको, पछि वारेश राममणी सिग्देलले भू.सु.का. काठमाडौंमा गुठी शब्दको कहि कतै उल्लेखै नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएको र निज तिर्थमाया महर्जनले मा.पो.का., डिल्लीबजारमा निवेदन दिँदा गुठी शब्द उल्लेखै नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएकोले निज तिर्थमाया महर्जनले २३ क्ष को कि.नं. २५ को सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी र अन्य गुठी तथा मालपोत कार्यालयको कर्मचारीहरुको मिलेमत्तोमा २०५८ साल देखि नै सरकारी जग्गा मस्यौट गर्ने योजना परिपञ्च राखेको स्पष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार -४ हा.नं.४५६(का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **तिर्थमाया महर्जन** समेत भई "साबिक २३ क्ष कि.नं. २८ को क्षे.फ.३-१५-०, ऐ. कि.नं. ४२ को क्षे.फ. ०-५-०, ऐ. कि.नं. १५ को क्षे.फ. ८-५-०, ऐ. कि.नं. ६३ को क्षे.फ. ०-४-० र ऐ. कि.नं. २५ को क्षे.फ. ०-१२-० का जग्गाहरु श्री ५ सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलवाट श्री ५ सरकार मात्र लेखिएको गुठी जग्गा हो। गुठीमा दर्ता हुने भई उक्त जग्गा गुठी कायम हुनु पर्ने हो। उल्लेखित कि.नं. का जग्गाहरु निवेदकहरुबाट नै भोगचलन गरी रहेको जग्गा हुन। निवेदकले दिएको निवेदन पढि सुनेर निवेदनमा माग दावी गरे अनुसार नै आ-आफ्नो जग्गा भोगचलन जोतिभोगी आएका छन। निवेदकको माग अनुसार गरी दिएमा फरक पर्ने छैन। वाली बुझाएको सम्न्धमा हाल सम्म नबुझाएको र बुझाउनु पर्ने नियमानुसार गुठीमा नै बुझाउनु पर्ने हो" भनी मिति २०५८।०५।०६ गते मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन**

**मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको**, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुट्टो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुट्टा प्रमाणलाई समर्थन गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी कसूर गर्न सहयोग गरी निज प्रतिवादी **तीर्थमाया महर्जनले विगो रु. ३५,१६,०१,२८२।- वरावरको** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम मोहीको मतियारको भुमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | ५,४४,००,०००।- | १,२१,३४,६१५/- | ३५,१६,०१,२८२।- |

**१०१) <u>प्रतिवादी कुल बहादुर महर्जनको हकमा:</u>**

मिसिल संलग्न हुन आएको कागज समेतका आधार प्रमाणहरु अध्ययन गरी बिश्लेषण गर्दाजग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **कुल बहादुर महर्जनले** साविक २३ क्ष कि.नं. ४० हालको नयाँ नापिमा का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. १४७, १४८, १५६, १४४ को क्रमश: क्षे.फ. ०-४-३-०, ०-८-३-०, ०-०-१-०, ०-०-२-२ र का.जि. नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं.१८, ३८ को क्रमश: क्षे.फ. ०-२-०-०, ०-५-१-२ जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्रतिवादीले प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ । यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ । अत: निज प्रतिवादी **कुल बहादुर महर्जन**ले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन

२०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गाधनी र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनी श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१),(२),(३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनी र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताहा भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते देखिन्छ र निज प्रतिवादी **कुल बहादुर महर्जन**ले मिति २०६१/२/२५ गतेमा मोही कायम भई साविक २३ क्ष कि.नं. ४० हालको नयाँ नापिमा का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. १४७, १४८, १५६, १४४ को क्रमश: क्षे.फ. ०-४-३-०, ०-८-३-०, ०-०-१-०, ०-०-२-२ रोपनी जग्गा मध्येबाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु ९,५०,०००/- (नौ लाख पचास हजार) रकम बुझि मोहीयानी हक बाबा कार्की र का.जि. नगर वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं.१८, ३८ को क्रमश: क्षे.फ. ०-२-०-०, ०-५-१-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु.५,००,०००/- (पाँच लाख) रकम बुझि मोहीयानी हक सरला घले गुरुङलाई हक छाडि वाँडफाँड लगत कट्टा गरी लाभ समेत प्राप्त गरी निज प्रतिवादी **कुल बहादुर महर्जनले विगो रु. २८,५०,६६,६६७।- बराबरको** नेपाल सरकारको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

**१०२) <u>प्रतिवादी चैत्य नारायण डंगोल (महर्जन) को हकमा</u>:**

मिसिल संलग्न कागजातहरुको आधार प्रमाणहरुबाट प्रतिवादी चैत्य नारायण डंगोल (महर्जन) ले भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख भएको हुँदाहुदै पनि जग्गाधनी र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते देखिन्छ । यसमा निज प्रतिवादी चैत्य नारायण डंगोल (महर्जन)ले मिति २०५७/१०/२७ मा मोही कायम भई साविक २३ ह को कि.नं. १७ नगर

४ १०२५-१५ कि.नं. २१६, ८६, २९१, २५५ को क्रमश: क्षे.फ. १-६-३-१, १-१२-१-२, ०-०-३-०, ०-०-२-० क्षेत्रफलको को जग्गा बापत रु ३३,००,०००/- (तेत्तिस लाख) रकम बुझि मोहीयानी हक माधवी सुबेदी, उमा कुमारी ढकाल्नी समेतलाई छाडि वाँडफाँड लगत कट्टा गरी आर्थिक लाभ समेत लिई प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **चैत्य नारायण महर्जन** समेत भई साबिक २३ क्ष कि.नं. २८ को क्षे.फ.३-१५-०, ऐ. कि.नं. ४२ को क्षे.फ. ०-५-०, ऐ. कि.नं. १५ को क्षे.फ. ८-५-०, ऐ. कि.नं. ६३ को क्षे.फ. ०-४-० र ऐ. कि.नं. २५ को क्षे.फ. ०-१२-० का जग्गाहरु श्री ५ सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलवाट श्री ५ सरकार मात्र लेखिएको गुठी जग्गा हो। गुठीमा दर्ता हुने भई उक्त जग्गा गुठी कायम हुनु पर्ने हो । उल्लेखित कि.नं. का जग्गाहरु निवेदकहरुबाट नै भोगचलन गरी रहेको जग्गा हुन। निवेदकले दिएको निवेदन पढि सुनेर निवेदनमा माग दावी गरे अनुसार नै आ-आफ्नो जग्गा भोगचलन जोतिभोगी आएका छन। निवेदकको माग अनुसार गरी दिएमा फरक पर्ने छैन। वाली बुझाएको सम्बन्धमा हाल सम्म नबुझाएको र बुझाउनु पर्ने नियमानुसार गुठीमा नै बुझाउनु पर्ने हो" भनी मिति २०५८।०५।०६ गते मुचुल्कामा हस्ताक्षर गरेको श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको, सरकारी अभिलेख सँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको** नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुठ्ठो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुठ्ठा प्रमाणलाई समर्थन गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी निज प्रतिवादी **चैत्य नारायण महर्जनले** विगो **रु.२९,७२,०१,२८१।-** वरावरको नेपाल

सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते गर्न साक्षी मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | १,२१,३४,६१५/- | २९,७२,०१,२८१।- |

**१०३) <u>प्रतिवादी कान्छा महर्जनको हकमा</u> :**

जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **कान्छा महर्जनले** का.जि.का.म.न.पा. वडा नं. ०४ कि.नं. २८६,५७,५८,८१,१२,१४को क्रमश:क्षे.फ. ०-५-०-०,०-४-०-०,०-०-१-०,०-१-०-०,०-०-२-२,०-०-०-१/२ रोपनी जग्गा झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ । यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा.गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते देखिन्छ । अत: निज प्रतिवादी **कान्छा महर्जनले** माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी कान्छा महर्जनले मि.नं.१२१/०६०/६१, मिति २०६१/०२/२८ मा का.जि.का.म.न.पा. वडा नं. ०४ कि.नं. २८६,५७,५८,८१,१२,१४को क्रमश: क्षे.फ. ०-५-०-०,०-४-०-०,०-०-१-०,०-१-०-०,०-०-२-२,०-०-०-१/२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु ७,००,०००/- (सात लाख) रकम

बुझि मोहीयानी हक  उमा कुमारी ढकाल्नी, सरला घले समेतलाई छाडि वाँडफाँड लगत कट्टा गरी लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं.४५६ (का.फौ.त.),बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको,  बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **कान्छा महर्जन** समेत भई  "साबिक २३ ह कि.नं.२५ को क्षे.फ. १-३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मा मोही आशामरु ज्यापूको नाउँमा भिड्ने जग्गा हो, फि.बु.को जोताहा महलमा उल्लेखित ब्यक्ति नारन चा महर्जन निवेदकका पिता हुन र निजको शेषपछि उक्त जग्गा हालसम्म ग्वाराभाई महर्जनले नै जोतभोग गरा आएको ब्यहोरा साँचो हो र उक्त जग्गा निवेदकको माग अनुसार दर्ता हा.सा.समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको, श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरेको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी क्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने  गलत नियतले मुचुल्का तयार **गरी कीर्ते गरेको** नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन तयार गरिएको झुट्टो, वेरित र फरक व्यहोरा लेखि कीर्ते गरीकन तयार पारिएको मुचुल्कालाई सही साँचो हो भनी साक्षीको रुपमा सहीछाप गरेको, कारवाहीमा आएका कित्ता जग्गाहरु  सरकारी जग्गा हो भनी थाहा हुँदा हुँदै पनि गुठीमा कायम गराउने नियतले खडा गरेको मुचुल्का लगायतका झुट्टा प्रमाणलाई समर्थन गरी **नेपाल सरकार समरजंग** कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी कसूर गर्न सहयोग, मद्दत, सल्लाह र परिस्थिति श्रृजना गरी निज प्रतिवादी **कान्छा महर्जनले  विगो रु. २९,७२,०१,२८१।-  वरावरको** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोहीको मतियारको भूमिका निर्वाह गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | १,२१,३४,६१५/- | २९,७२,०१,२८१।- |

१०४) **प्रतिवादी लक्ष्मी महर्जनको हकमा:**

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **लक्ष्मी महर्जनले** २३ क्ष को कि.नं. ३३,३६ का.जि. नगर वडा नं. ०४ मि.नं. १०२५-१५ कि.नं. २०३, १६० को क्रमश: क्षे.फ. ०-२-०-० र ०-७-२-० र २३ क्ष को कि.नं. ६६ को का.जि. नगर वडा नं. ०४ मि.नं. १०२५-१५ को कि.नं.१९१,१८३,१९७ को क्रमश: क्षे.फ. १-४-३-१, ०-०-२-१, ०-०-२-३ रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा निज प्रतिवादी लक्ष्मी महर्जनले प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादी लक्ष्मी महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते देखिन्छ र निज प्रतिवादी **लक्ष्मी महर्जन**ले मिति २०६१।०२।२१ मामोही कायम भई २३ क्ष को कि.नं. ३३,३६ का.जि. नगर वडा नं. ०४ मि.नं. १०२५-१५ कि.नं. २०३, १६० को क्रमश: क्षे.फ. ०-२-०-० र ०-७-२-० रोपनी जग्गा मध्येबाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु २६,००,०००/- (छबीस लाख) रकम बुझि मोहीयानी हक सरला घले र २३ क्ष को कि.नं. ६६ को का.जि. नगर वडा नं. ०४ मि.नं. १०२५-१५ को कि.नं.१९१,१८३,१९७ को क्रमश: क्षे.फ. १-४-३-१, ०-०-२-१, ०-०-२-३रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १४,००,०००/- (चौध लाख) रकम बुझि मोहीयानी हक अगम ढुङ्गानालाई छाडि वाँडफाँड लगत कट्टा गरी

लिखत कीर्तेबाट लाभ समेत लिई निज प्रतिवादी **लक्ष्मी महर्जनले विगो रु. २८,५०,६६,६६७।–** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

१०५) **<u>प्रतिवादी द्वारिकामान महर्जनको हकमा:</u>**

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **द्वारिकामान महर्जनले** का.जि.का.म.न.पा. वडा नं. २३ ह कित्ता नं. २७ र २८ हालको कित्ता नं. २८१, १०२,२७४,२७५,३०७ को क्रमश: क्षे.फ. ०-०-२-३,१-१-२-३, ०-१३-३-२, ०-१-३-२, ०-१-१-२ र २३ ह को कि.नं.२७, २८ हालको सि.नं. १०२५-१५ कि.नं. २७६, १०० र २८७ क्रमश: क्षे.फ. ०-८-०-२, १-४-३-३, ०-१-३-२, र २३ ह कि.नं. ३३ को नयाँ नापि का.जि.नगर वडा नं.०४ सि.नं. १०२५-१५ को कि.नं. ६० को क्षे.फ. ०-५-०-१ रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्रतिवादी द्वारिकामान महर्जनले प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादी द्वारिकामान महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१),(२),(३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका

व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी द्वारिकामान महर्जनले मिति २०६१/०९/०६ गतेमा मोही कायम भई का.जि.का.म.न.पा. वडा नं. २३ ह कित्ता नं. २७ र २८ हालको कित्ता नं. २८१, १०२,२७४,२७५,३०७ को क्रमश: क्षे.फ. ०-०-२-३,१-१-२-३, ०-१३-३-२, ०-१-३-२, ०-१-१-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु २२,००,०००/- (बाईस लाख) रकम बुझि मोहीयानी हक उमा कुमारी ढकाल्नी, २३ ह को कि.नं.२७, २८ हालको सि.नं. १०२५-१५ कि.नं. २७६, १०० र २८७ क्रमश: क्षे.फ. ०-८-०-२, १-४-३-३, ०-१-३-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १९,५०,०००/- (उन्नाईस लाख पचास हाजर) रकम बुझि मोहीयानी हक माधवी र २३ ह कि.नं. ३३ को नयाँ नापि का.जि. नगर वडा नं.०४ सि.नं. १०२५-१५ कि.नं. ६० को क्षे.फ. ०-५-०-१ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु ३,२५,०००/- (तीन लाख पच्चिस हजार) रकम बुझि मोहीयानी हक माधवी, उमा कुमारी ढकाल्नी समेतलाई छाडि वाँडफाँड लगत कट्टा गरी आर्थिक लाभ समेत प्राप्त गरी प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

प्रतिवादी द्वारिकामान महर्जनले वि.सं. २०५९।०७।०५ गते २३ हको ३१,२३ क्ष को ७७ नं. कित्ताको क्षेत्रफल क्रमश: १-३-०-० र ०-१०-०-० गरी जम्मा १-१३-०-० रोपनी जग्गामा म मोही भई मेरो नै जोतभोग भएको उल्लेखित जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी झुठा व्यहोराको निवेदन गुठी संस्थान केन्द्रिय कार्यालयमा वारेश राम कुमार सुवेदी मार्फत दिएको, काठमाडौ महानगरपालिका ४ नं. कार्यालयले निवेदककै निवेदन व्यहोरा मुताविकको च. नं. १९८२ को किर्ते गरिएको सिफारिस पत्र दिएको र नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र मिति २०६७।०१।३१ को निर्णय पश्चात द्वारिका महर्जनको हकमा सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसला, सर्वोच्च अदालतकै मिति २०६५/०८/२० को पुनरावलोकन निर्णय, नेपाल सरकार म.प.को मिति २०६६/१२/२९ को निर्णय र मालपोत कार्यालय, डिल्लीबजारको च.नं.९००९, मिति २०६६/१०/१० पत्र समेतले मेरो बाजे सुकु महर्जन भन्ने न्हुच्छे बहादुर महर्जनका नाममा मोही कायम भएको र आफु हकदार नाती भनी काठमाडौं नगर ४ सिट नम्वर १०२५-१९ कित्ता नम्वर १(०-३-१-१ रोपनी), ३(०-९-२-१ रोपनी) र १२(०-१-२-१ रोपनी) मध्ये कि.नं. १२ पूरै, कि.नं. ३ को दक्षिण तर्फबाट ०-४-२-१.५ र कि.नं. १ को दक्षिण तर्फबाट ०-१-०-१ म मोहीले पाउने गरी उल्लेखित जग्गाहरुको नेपाल सरकार म.प.को निर्णय बमोजिम जग्गाधनी प्रमाण पूर्जा पाउँ भनी द्वारिकामान महर्जनले निवेदनमा दावी गरेको, मालपोत कार्यालय, डिल्लीबजारको मिति २०६७/०८/१६, मि.नं. ५५ को निर्णय पश्चात द्वारिकामान महर्जनले सिट नं. १०२५-१९ को कि.नं. १२ को ०-१-२-१( ४९.६८ बर्गमिटर), कि.नं. १ बाट कि.नं. ४० को ३३.७९ वर्ग मि. र कि.नं. ३ बाट कि.नं. ३७ को १४६.०१ वर्ग मि. गरी जम्मा २२९.४८ बर्गमिटर( ७ आना ३.४८ दाम) जग्गा प्राप्त गरेको तर सम्मानित सर्वोच्च अदालतको उल्लेखित फैसलाले कोही कसैलाई मोही कायम नगरेको, नगराएको साथै फिल्डबुक अध्ययन गर्दा साविक वडा नं. २३ क्ष कि.नं. ७७ को मोही सुकु महर्जन, नयाँ नापी बमोजिमको सिट नं. १०२५-१९ को कि.नं. १ मा पर्ती जग्गा जनिएको, कि.नं. ३ मा मोहीको महल खाली र १२ मा मोही अष्ट महर्जन देखिएको त्यस्तै कि.नं. १२ को श्रेस्ता कायम नभएको तर मि.नं. ५५ को टिप्पणी र आदेश खण्डको पेज नं. १६ मा फरक परेको विवरणमा माथि उल्लेखित तथ्य उल्लेख नगरी मालपोत कार्यालय, डिल्लीबजारका कर्मचारीले ढाकछोप गरी व्यहोरा फरक पारेको तथा निर्णय गर्ने

अधिकारीले सेमत गैह्रकानूनी रूपमा बदनियतपूर्वक टिप्पणी सदर गरीदिएको स्पष्ट देखिएकाले सो तीनवटै कित्तामा मोहीको विवरण फरक परेकोले नक्कली मोही खडा गरी प्रस्तुत कसूर गरेको देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं.४५६(का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **द्वारीकामान महर्जन** समेत भई मन्त्रिपरिषदको निर्णय हुँदा २३ ह कि.नं. ३१ हाल सिट नं. १०२५-१५ कि.नं. २७८, २८४ को जम्मा क्षेत्रफल १-३-०-० रोपनी उल्लेख भएको तर साविक २३ ह को कि.नं. ३१ जनिई मोही न्हुन्छे बहादुर महर्जनको हकमा द्वारिकामान महर्जनले निवेदन दिंदा साविक २३ ह को कि.नं. ३१ हाल को सिट नं. १०२५-१५ को कि.नं. २३२, २७८, २८४ जम्मा क्षेत्रफल १-१५-२-२ रोपनी जग्गामा मोही कायम भएको भनी उल्लेख गरेको देखिन्छ। निज मोही भनिएको व्यक्तिको नाममा जग्गा दर्ता हुँदा मन्त्रिपरिषदको निर्णय भन्दा फरक परि सोहि निवेदन बमोजिम कि.नं. २३२(क्षेत्रफल ०-१२-२-२) थप गरी म.प.को निर्णय भन्दा फरक व्यहोरा पारी कीर्ते गरी साविक २३ ह कि.नं. ३१ हाल सिट नं. १०२५-१५ को कि.नं. २३२, २७८, २८४ को जम्मा क्षेत्रफल १-१५-२-२ दर्ता गरीदिएको, यसरी म.प. को निर्णयमा उल्लेख नभएको कि.नं. २३२ पनि दर्ता भएको हुँदा म.प. को निर्णय भन्दा ०-१२-२-२ रोपनी जग्गा समेत बढि दर्ता गरी थप जग्गा नोक्सान गराएको देखिन्छ। त्यस्तै फिल्डबुक बमोजिम साविक २३ ह को कि.नं. ३१ मा मोही न्हुन्छे बहादुर महर्जन देखिन्छ भने नयाँ नापी बमोजिमको फिल्डबुकको सिट नं. १०२५-१५ को कि.नं. २३२ मा मोही कुल बहादुर महर्जन, कि.नं. २८४ मा लक्ष्मी नारायण महर्जन देखिन्छ। यसरी साविक र नयाँ नापी बमोजिमको फिल्डबुकमा मोही फरक परेको र म.प. को निर्णय भन्दा ०-१२-२-२ रोपनी बढि जग्गा दर्ता गरीदिएबाट यसरी बढी जमीन जानुमा कर्मचारीहरु समेतको मिलेमतो देखिन्छ। द्वारिकामान महर्जनले यस कार्यालयमा पेश गरेको वि. सं १९८७, १९९५र २००९ को ललिता निवास कुत तिरेको भरपाईमा टिकिन्छा गुठीको नाम कही उल्लेख भएको देखिएकोबाट निजले दावी गरेको जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा नभएको कुरा प्रष्ट भएको अबस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको ,कि.नं. ३५ र ३७ मा साक्षी बसि सही छाप गरेको , मन्त्रिपरिषदको निर्णय हुँदा २३ ह कि.नं. ३१ हाल सिट नं. १०२५-१५ कि.नं. २७८, २८४ को जम्मा क्षेत्रफल १-३-०-० रोपनी उल्लेख भएको तर साविक २३ ह को कि.नं. ३१ जनिई मोही न्हुन्छे बहादुर महर्जनको हकमा द्वारिकामान महर्जनले निवेदन दिंदा साविक २३ ह को कि.नं. ३१ हाल को सिट

नं. १०२५-१५ को कि.नं. २३२, २७८, २८४ जम्मा क्षेत्रफल १-१५-२-२ रोपनी जग्गामा मोही कायम भएको भनी उल्लेख गरेको देखिन्छ। निज मोही भनिएको व्यक्तिको नाममा जग्गा दर्ता हुँदा मन्त्रिपरिषदको निर्णय भन्दा फरक परि सोहि निवेदन बमोजिम कि.नं. २३२(क्षेत्रफल ०-१२-२-२) थप गरी म.प.को निर्णय भन्दा फरक व्यहोरा पारी कीर्ते गरी साविक २३ ह कि.नं. ३१ हाल सिट नं. १०२५-१५ को कि.नं. २३२, २७८, २८४ को जम्मा क्षेत्रफल १-१५-२-२ दर्ता गरीदिएको ,यसरी म.प. को निर्णयमा उल्लेख नभएको कि.नं. २३२ पनि दर्ता भएको हुँदा म.प. को निर्णय भन्दा ०-१२-२-२ रोपनी जग्गा समेत बढि दर्ता गरी थप जग्गा नोक्सान गराएको देखिन्छ। त्यस्तै फिल्डबुक बमोजिम साविक २३ ह को कि.नं. ३१ मा मोही न्हुन्छे बहादुर महर्जन देखिन्छ भने नयाँ नापी बमोजिमको फिल्डबुकको सिट नं. १०२५-१५ को कि.नं. २३२ मा मोही कुल बहादुर महर्जन, कि.नं. २८४ मा लक्ष्मी नारायण महर्जन देखिन्छ। यसरी साविक र नयाँ नापी बमोजिमको फिल्डबुकमा मोही फरक परेको र म.प. को निर्णय भन्दा ०-१२-२-२ रोपनी बढि जग्गा दर्ता गरीदिएबाट यसरी बढी जमीन जानुमा कर्मचारीहरु समेतको मिलेमतो देखिन्छ। द्वारिकामान महर्जनले यस कार्यालयमा पेश गरेको वि. सं १९८७, १९९५र २००९ को ललिता निवास कुत तिरेको भरपाईमा टिकिन्छा गुठीको नाम कही उल्लेख भएको देखिएकोबाट निजले दावी गरेको जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा नभएको कुरा प्रष्ट भएको अबस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, जग्गाको अभिलेख राख्ने सरकारी कार्यालयको अभिलेख टिकिन्छा गुठीको भनी उल्लेख नरहेको जग्गालाई वारेश मार्फत **झूट्टो विवरण र फरक व्यहोराको** कागजात तयार गर्न लगाई आफू मोही कायम रही टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गराई **कीर्तेमा संलग्न रहेको,** केन्द्रीय अनुसन्धान ब्यूरोबाट गठीत छानबिन समिमि समक्ष बालुवाटारको असैगाल खेल सरकारी हो पशुपति टिकिन्छा गुठीको होईन भन्ने कुरा पितापुर्खाबाट सुन्दै आएको हुँदा उक्त जग्गा गुठीको हो भन्ने बिश्वास लाग्दैन भन्ने समिति समक्ष कागज गरेको हुँदा **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** वारेस मार्फत मागदावी गरी जग्गाको स्वामित्व प्राप्त गरेको। आफूले मोही प्रमाणपत्र पूर्जा प्राप्त गरेको १० दिन भित्रमा वारेस भनिएका व्यक्तिलाई नै जग्गाको हक हस्तान्तरण गरेको, छानबिन समिति समक्ष मोही दावी गरे वापत रोपनीको १४/१५ लाखका दरले बिचौलिया मार्फत रकम प्राप्त गरेको भनी कागज गरी दिएको हुँदा प्राप्त रकमको श्रोत र बैधानिकता बिचार नगरी आर्थिक लाभ लिई निज प्रतिवादी **द्वारीकामान महर्जनले विगो** रु. ५७,६७,९४,६६७।– वराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | ५,७७,२८,०००।- | २३,४०,००,०००/- | ५७,६७,९४,६६७।- |

**१०६) <u>प्रतिवादी साहिला महर्जनको हकमा:</u>**

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा

ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **साहिला महर्जनले** का.जि.का.म.न. पा. वडा नं. २३ क्ष कित्ता नं. २२ नयाँ नापिमा का.जि.नगर वडा नं. ०४ कि.नं. १२५, ११८, १२१, १२३, १२८,१३० को क्रमश: क्षे.फ. ०-१०-०-०, ०-०-२-१, ०-०-३-२, ०-०-३-०, ०-१०-३-० र ०-२-०-० रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार  समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादीसाहिलामहर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१  को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप  हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका  प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **साहिला महर्जन**ले मिति २०६१/०२/२८ गतेमा मोही कायम भई का.जि.का.म.न.पा. वडा नं. २३ क्ष कित्ता नं. २२ नयाँ नापिमा का.जि. नगर वडा नं. ०४ कि.नं. १२५, ११८, १२१, १२३, १२८, १३०  को क्रमश: क्षे.फ. ०-१०-०-०, ०-०-२-१, ०-०-३-२, ०-०-३-०, ०-१०-३-० र ०-२-०-० रोपनी जग्गा मध्येबाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १०,००,०००/- (दश लाख) रकम बुझि मोहीयानी हक सरला घले गुरुङलाई छाडि वाँडफाँड लगत कट्टा गरी आर्थिक लाभ लिई निज प्रतिवादी **साईला महर्जनले विगो रु.२८,५०,६६,६६७।–** बरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

**१०७) प्रतिवादी अर्जुन महर्जनको हकमा**:

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **अर्जुन महर्जनले** भई का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ कि.नं. १६२, १६४ को क्षे.फ. ०-७-०-१, ०-६-०-३ र का.जि.का.म.न.पा. वडा नं.०४ को कि.नं.१६६ को क्षे.फ.०-०-३-० जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादी अर्जुन महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **अर्जुन महर्जन**ले मिति २०६१।०९।०७ गतेमा मोही कायम भई का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ कि.नं. १६२, १६४ को क्षे.फ.०-७-०-१,०-६-०-३ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु ८,२८,१२५/- (आठ लाख अठाईस हजार एक सय पच्चिस) रकम बुझि मोहीयानी हक सरला घले गुरुङ र का.जि.का.म.न.पा. वडा नं.०४ को कि.नं.१६६ को क्षे.फ.०-०-३-०रोपनी जग्गा मध्येबाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु ५०,०००/- (पचास हजार) रकम बुझि मोहीयानी हक मिन बहादुर गुरुङलाई हक छाडि वाँडफाँड लगत कट्टा गरी आर्थिक लाभ प्राप्त गरी निज प्रतिवादी **अर्जुन महर्जनले** विगो **रु. २८,५०,६६,६६७।-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

**१०८) प्रतिवादी हिरालाल तण्डुकारको हकमा:**

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **हिरालाल तण्डुकारले** भई का.जि. नगर वडा नं. ०४ सि.नं. १०२५-१५ कि.नं. १७२,१७४,२९७ को क्षे.फ. ०-०-३-०,०-१४-१-०,०-१-०-० र साविक २३ क्ष को कि नं. ५६५५ को हाल १०२५-१५ को कि नं. १६७,१७३,१७५ को क्षे.फ क्रमश: ०-७-०-२, ०-१-०-२, ०-०-३-२ रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादी **हिरालाल तण्डुकारले** माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **हिरालाल तण्डुकार**ले मिति २०६१/०९/०७ गतेमा मोही कायम भई का.जि.नगर वडा नं. ०४ सि.नं. १०२५-१५ कि.नं. १७२, १७४,२९७ को क्षे.फ. ०-०-३-०,०-१४-१-०,०-१-०-० जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १०,००,०००/- (दश लाख) रकम बुझिलिई मोहीयानि हक माधवी सुबेदीलाई छाडी र साविक २३ क्ष को कि नं. ५६५५ को हाल १०२५-१५ को कि नं. १६७,१७३,१७५ को क्षे.फ क्रमश: ०-७-०-२, ०-१-०-२, ०-०-३-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु ५,६२,५०० (पाँच लाख बैसठि हजार पाँच सय )रकम बुझि मोहीयानी हक उमा

कुमारी ढकाल्नीलाई हक छाडि बाँडफाँड लगत कट्टा गरी आर्थिक लाभ समेत प्राप्त गरी निज प्रतिवादी **हिरालाल तण्डुकारले रु.२८,५०,६६,६६७।- वरावरको** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

१०९) **प्रतिवादी जोगलाल महर्जनको हकमा:**

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **जोगलाल महर्जनले** २३ क्ष को कि.नं. ६२ का.जि. नगर वडा नं. ०४ कि.नं. ४३ को क्षे.फ. ०-१-१-२ र २३ क्ष को कि.नं. ६२ को का.जि. नगर वडा नं. ०४ मि.नं. १०२५-१५ को कि.नं.१८१ को क्रमश: क्षे.फ. ०-२-१-३ रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानी हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादी जोगलाल महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन २०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **जोगलाल महर्जन**ले मिति २०६१/०२/२५ मा मोही कायम भई २३ क्ष को कि.नं. ६२ का.जि. नगर वडा नं. ०४ कि.नं. ४३ को क्षे.फ. ०-

१-१-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १,००,०००/- (एक लाख) रकम बुझि मोहीयानी हक मिन बहादुर गुरुङ र २३ क्ष को कि.नं. ६२ को का.जि. नगर वडा नं. ०४ मि.नं. १०२५-१५ को कि.नं.१८१ को क्रमश: क्षे.फ. ०-२-१-३ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १,५०,०००/-(एक लाख पचास हजार) रकम बुझि मोहीयानी हक सरला घले गरुङलाई छाडि वाँडफाँड लगत कट्टा गरी आर्थिक लाभ समेत प्राप्त गरी निज प्रतिवादी **जोगलाल महर्जनले विगो रु.२८,५०,६६,६६७।- वरावरको** नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

**११०) <u>प्रतिवादी न्हुछेमाया महर्जनको हकमा :</u>**

भिम शमसेरले जग्गा प्राप्ति ऐन २०१८ को दफा १६ बमोजिम मुआब्जा दिई अधिग्रहण गरेको जग्गामा कसैको कुनै कुराको हकदैया कायम नरही जग्गा श्री ५ को सरकारको हुने स्पष्ट कानूनी प्रावधान समेत रहेको अवस्थामा ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा कुनै पनि मोही नरहेको तथा जग्गा कमाउने व्यक्ति मोहीयानी हक प्राप्त नगर्ने जोताहा किसान मात्र रहेको अवस्थामा निज प्रतिवादी **न्हुछेमाया महर्जनले** भई वडा नं. ०४ सि.नं. १०२५-१४ को कि.नं. २७, ३१ को क्रमश: क्षे.फ. १-१-२-१, ०-३-१-३ र वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. ५, २४, १३३, १३२, १३९ को क्षे. फ. क्रमश: ०-१-०-१, ०-३-२-१, ०-१३-०-१, ०-१-३-०, ०-४-१-२ रोपनी जग्गा जोतभोग गरी आएकोले मोहीयानी हकको प्रमाणपत्र पाउँ भनी झुठा तथा फरक व्यहोराको कीर्ते निवेदन भूमीसुधार कार्यालय काठमाडौंमा पेश गरी सो झुठा तथा फरक व्यहोराको कागजातहरुको आधारमा ललिता निवास क्याम्प भित्रको माथि उल्लेखित सरकारी जग्गा प्राप्त गरी रकम बुझि मोहीयानि हक छाडी मोही लगत कट्टा गराउने कार्य गरेको देखिन्छ। यसरी ऐनसँग बाझिने गरी बदनियत राखि मोही उल्लेख गर्न नपर्नेलाई कृत्रिम मोही खडा गरी फरक व्यहोरा पारी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दर्ता गरी मोही समेत खडा गर्ने निर्णय गरी ना.सा.दा.खा. गर्ने गराउने कार्यमा संलग्न तत्कालीन नापी कार्यालय काठमाडौंका कर्मचारीहरु, समरजंग कम्पनी कार्यालयका कर्मचारीहरु, भूमि व्यवस्था कार्यालयका कर्मचारीहरु, मोही कायम हुने व्यक्तिहरु र कृत्रिम मोहीहरुको तर्फहरुबाट वारेश बसी ललिता निवास क्याम्प भित्रको सरकारी जग्गामा मोही कायम गराउन परिपञ्च मिलाउन योजनाकारको भूमिका खेल्ने राम कुमार समेतको कार्य कानूनत: कीर्ते पूर्ण देखिन्छ। अत: निज प्रतिवादी न्हुछेमाया महर्जनले माथी उल्लिखित मिसिल संलग्न कागज प्रमाणहरुबाट भूमि सम्बन्धी ऐन२०२१ को दफा २५ बमोजिम मोहीयानि हकको प्रमाणपत्र पाउनका लागि भूमि सम्बन्धी ऐन २०२१ तथा नियमावली बमोजिम मोही कायम हुन २ नं. अनुसूची भरेको र २५(२) बमोजिम मोही हुनका लागि जग्गा धनि र जोताहा बीच कबुलियतनामा हुनुपर्ने व्यवस्था भएको हुँदा जग्गाधनि श्री ५ सरकार समरजंग कम्पनी कायम भएको जग्गामा भूमि सम्बन्धी ऐन २०२१ को दफा २५को उपदफा ५ मा उपदफा (१), (२), (३) र (४) मा जुन सुकै कुरा लेखीएको भएता पनि उपदफा ५(ग) मा नेपाल सरकारको स्वामित्वमा भएको जग्गा कमाउने व्यक्तिहरुलाई मोही को हक प्राप्त हुने छैन भन्ने कुरा स्पष्ट उल्लेख गर्दा गर्दै

पनि जग्गाधनि र जोताहा बीच कबुलियतिनामा हुनुपर्ने र सरकारी जग्गामा मोही कायम नहुने ऐनको व्यवस्थाको बर्खिलाप हुने गरी प्रमाण लाग्ने कागजात पेश गरी ऐनसँग बाझिने मोही नलिने गरी जोताह भएका व्यक्तिहरु मोही हौं भनी मोहीयानी हक प्राप्त गर्न दिएका झुठो र फरक व्यहोराका निवेदन लगायतका प्रमाणहरु कीर्ते पूर्ण देखिन्छ र निज प्रतिवादी **न्हुछेमाया महर्जन**ले मिति २०६१/०८/२३ गतेमा मोही कायम भई वडा नं. ०४ सि.नं. १०२५-१४ को कि.नं. २७, ३१ को क्रमश: क्षे.फ. १-१-२-१, ०-३-१-३ जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १४,००,०००/- (चौध लाख) रकम बुझिलिई मोहीयानि हक मिन बहादुर गुरुङ लाई छाडेको र वडा नं. ०४ सि.नं. १०२५-१५ को कि.नं. ५, २४, १३३, १३२, १३९ को क्षे. फ. क्रमश: ०-१-०-१, ०-३-२-१, ०-१३-०-१, ०-१-३-०, ०-४-१-२ रोपनी जग्गा मध्ये बाट निजले मोहीयानी हक बापत पाउने जग्गाको रु १६,००,०००/- (सोह्र लाख) रकम बुझिलिई मोहीयानि हक सरला घले गुरुङ लाई छाडि लगत कट्टा गरी आर्थिक लाभ समेत लिई निज प्रतिवादी **न्हुछेमाया महर्जनले विगो रु.२८,५०,६६,६६७।–** वराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २८,५०,६६,६६७।- | - | - | - | २८,५०,६६,६६७।- |

१११) **प्रतिवादी बैद्यनाथ चौधरीको हकमा :**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रिपरिषद्को मिति २०४७।२।१४।, २०४७।४।८।, २०४७।५।३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको कीर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९।७।२५ र २०४९।९।२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गालाई हाल साबिक गरी पाउ भनी शैलजा राणा तथा कृतिम मोही भनिएका आशा नारायण महर्जन समेतले निवेदन दिएकै आधारमा प्रमुख मालपोत अधिकृत **बैधनाथ चौधरीले** का.जि. का.न.पा. साविक वडा नं. २३ "क्ष" र २३ "ह" अन्तर्गतका ७६ कित्ता जग्गाहरु नयाँ नापि हुँदाका बखतमा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा नाप नक्सा भएको देख्दा देख्दै आफ्नै कार्यालयमा रहेको जग्गाको श्रोत नै नहेरी सरकारी जग्गा संरक्षण गर्नु पर्ने दायित्व निर्बाह नगरी उक्त जग्गाहरु हाल साबिक गर्न ना.सु. राजेन्द्र बुढाथोकीले मिति २०५९/०७/०५ टिप्पणी तयार गरी उक्त कित्ता जग्गाहरु शैलजा राणा समेतको नाममा हा.सा. गरी श्रेष्ता कायम गर्नको निमित्त उपयुक्त निकासाको लागी मिति

२०५९/०८/१७ गते को टिप्पणी आदेशमा तत्कालीन मालपोत अधिकृत प्रतिवादी समर बहादुर सिंह ठकुरीले हस्ताक्षर गरी निर्णयार्थ पेश गरे पश्चात मिति २०५९/०८/१७ गते नै उक्त टिप्पणी आदेशमा प्रमुख मालपोत अधिकृत निज प्रतिवादी बैद्यनाथ चौधरीले मालपोत विभागसँग निकासाको लागि पत्राचार गर्ने निर्णय गरेको देखिन्छ, साथै कृतिम मोही भनिएका कुल बहादुर महर्जन समेत १४ जना मोहीहरुको नाममा मोहीयानी हक कायम गराई जग्गा दाखिला खारेज गरे पश्चात निजहरुले प्राप्त गरेको जग्गा सरला घले गुरुङ समेतका व्यक्तिहरुलाई हक छाडी सो वापत नगद रकम बुझि लिई जग्गा बाँडफाँड तथा मोही लगत कट्टा गर्ने निर्णय पर्चा लगायतका कागजातहरु ना.सु. देवलाल थेच्मी समेतले तयार गरी, शाखा अधिकृत जानकी राम शर्मा बरालले पेश गरी निज प्रतिवादी **बैधनाथ चौधरीले** दस्तखत समेत गरी निर्णय सदर समेत गरी निज प्रतिवादी बैद्यनाथ चौधरीले लिखत कीर्तेबाट आएको सरकारी जग्गा व्यक्ति विशेषको नाममा हाल साबिक गर्नको लागी सदर गरेको टिप्पणी आदेशको निर्णय र जग्गा बाडफाड तथा मोही लगत कट्टा गर्न गरी निज प्रतिवादीले विगो **रु.२९,३२,६५,३०६।–** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गर्न मतियारको भूमिका निर्वाह गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**११२) प्रतिवादी श्रवण कुमार गोयलको हकमा :**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रिपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा कीर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कीर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादीहरु **श्रवण कुमार गोयल** समेत संचालक रहेको डि.एल.एफ. डेभलपर्सको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ५८३, ५१५, २५१,५७०,५१९,२५४, २९२,२१५, २३९,२४८,५५५, ५८०,५४२,५१७, २९३, २५२, २४१, २१६, ५६४, ५६८,२५६,८६,५६६, २९१, ६१२, २७३, २६८ को जम्मा ७३७७.०५ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत कीर्ते कागजातहरुमा निज प्रतिवादी श्रवण कुमार गोयल समेतको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा

विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ।

प्रतिवादी श्रवण कुमार गोयल श्रवण कुमार गोयल शेयर धनी रहेको डि.एल.एफ. डेभलपर्स प्रा.लि. ले जग्गाधनीको हैसियतले कि.न.२९६ को १५८.९५, कि.न.२७३ को ११.९१, कि.न. २६८ को १५.९, कि.न.६१२ को ११.९, कि.न.६२२ को ६६.५८, कि.न. ६२८ को १०.९, कि.न. १३९ को १७८.८५, कि.न.१४०को ७.९६,कि.न.१४१ को १५३.०२, कि.न. ३५ को ५१४.७१, कि.न.३८ को ५५.६४, कि.न.४१ को २१.८९, कि.न.४३ को २४.८७ को जम्मा १२३२.९८ व.मि. जग्गा रहेको देखिन्छ। तत्कालिन श्री ५ को सरकार समरजंग कम्पनीको नाममा भएको उल्लेखित जग्गाहरु प्रतिवादी श्रवण कुमार गोयल समेत संचालक भएको डि. एल.एफ. डेभलपर्स प्रा.लि. को नाममा भई प्रतिवादीले लाभ प्राप्त गरी निज प्रतिवादी **श्रवण कुमार गोयल**लले विगो **रु.२,२४,३६,५७,८००।-** वरावरको नेपाल सरकार समरजंग कम्पनिको नाममा कायम रहेको सरकारी जग्गा आफु शेयर धनी रहेको कम्पनीमा सट्टाभर्ना समेतबाट प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २१,६६,०५७,८००। | - | ७,७६,००,०००।- | - | २,२४,३६,५७,८००।- |

**११३) <u>प्रतिवादी शिवरतन शारदाको हकमा</u> :**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रिपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा कीर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कीर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी शिवरत्न शारदा समेत संचालक रहेको डि.एल.एफ. डेभलपर्सको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ५८३, ५१५, २५१, ५७०,५१९,२५४,२९२,२१५,२३९,२४८,५५५,५८०,५४२, ५१७, २९३, २५२, २४१, २१६, ५६४, ६८, २५६, ८६,५६६, २९१, ६१२, २७३, २६८ को जम्मा ७३७७.०५ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत कीर्ते कागजातहरुमा निज प्रतिवादीहरु कैलाश चन्द्र गोयल, श्रवण कुमार गोयल, शिवरत्न शारदा र संदिप कुमार

शारदाको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ ।

प्रतिवादी शिवरत्न सारदा समेत शेयर धनी रहेको डि.एल.एफ. डेभलपर्स प्रा.लि. ले जग्गाधनीको हैसियतले कि.नं. २९६ को १५८.९५,कि.न.२७३ को ११.९१, कि.न. २६८ को १५.९, कि.न.६१२ को ११.९, कि.न.६२२ को ६६.५८, कि.न. ६२८ को १०.९, कि.न. १३९ को १७८.८५, कि.न.१४० को ७.९६, कि.न.१४१ को १५३.०२, कि.न. ३५ को ५१४.७१, कि.न.३८ को ५५.६४, कि.न.४१ को २१.८९, कि.न.४३ को २४.८७ को जम्मा १२३२.९८ व.मि. जग्गाको जग्गाधनी रहेको र निज प्रतिवादी शिवरत्न सारदाले सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई योजनाकार, व्यवस्थापकको भूमिका निर्वाह गरी नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा आफु शेयर धनी रहेको कम्पनीमा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी राखी निज प्रतिवादी **शिवरतन शारदाले** विगो **रु.२,२४,३६,५७,८००।–** वरावरको नेपाल सरकार समरजंग कम्पनिको नाममा कायम रहेको सरकारी जग्गा आफु शेयर धनी रहेको कम्पनीमा सट्टाभर्ना समेतबाट प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २,१६,६०,५७,८००।- | - | ७,७६,००,००० | - | २,२४,३६,५७,८००।- |

**११४) <u>प्रतिवादी संदिप कुमार शारदाको हकमा :</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रिपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा कीर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कीर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी सन्दिप कुमार शारदा समेत संचालक रहेको डि.एल.एफ. डेभलपर्सको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं.५८३, ५१५, २५१, ५७०,५१९,२५४,२९२,२१५, २३९, २४८, ५५५, ५८०, ५४२,५१७,२९३, २५२, २४१, २१६, ५६४,५६,२५६,८६,५६६, २९१, ६१२, २७३, २६८ को जम्मा ७३७७.०५ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरिएका लिखत कीर्ते

कागजातहरुमा निज प्रतिवादीहरु कैलाशचन्द्र गोयल, श्रवण कुमार गोयल, शिवरत्न शारदा र संदिप कुमार शारदाको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य प्रमाणबाट सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई योजनाकार, व्यवस्थापकको भूमिका निर्वाह गरी उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको प्रष्ट देखिन्छ।

प्रतिवादी सन्दिप कुमार सारदा शेयर धनी रहेको डि.एल.एफ. डेभलपर्स प्रा.लि. ले जग्गाधनीको हैसियतले कि.न.२९६ को १५८.९५, कि.न.२७३ को ११.९१, कि.न. २६८ को १५.९, कि.न.६१२ को ११.९, कि.न.६२२ को ६६.५८, कि.न. ६२८ को १०.९, कि.न. १३९ को १७८.८५, कि.न.१४० को ७.९६, कि.न.१४१ को १५३.०२, कि.न. ३५ को ५१४.७१, कि.न.३८ को ५५.६४, कि.न.४१ को २१.८९, कि.न.४३ को २४.८७ को जम्मा १२३२.९८ व.मि. व.मि. जग्गाको जग्गाधनी रहेको र निज प्रतिवादी सन्दिप कुमार सारदाले नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा आफु शेयर धनी रहेको कम्पनीमा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता गरी राखी सरकारी जग्गा दुरुपयोग गरी निज प्रतिवादी **सन्दिप कुमार सारदाले** विगो **रु.२,२४,३६,५७,८००।–** वरावरको नेपाल सरकार समरजंग कम्पनिको नाममा कायम रहेको सरकारी जग्गा आफु शेयर धनी रहेको कम्पनीमा सट्टाभर्ना समेतबाट प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता गरी किर्ते गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २,१६,६०,५७,८००।- | - | ७,७६,००,०००।- | - | २,२४,३६,५७,८००।- |

**११५) <u>प्रतिवादी जगन्नाथ पनेरुको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारको मिति २०२१/८/१५ को निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम सम्बन्धित जग्गाधनीलाई क्षतिपुर्ति समेत दिई अधिग्रहण गरी सरकारीकरण गरेको ललिता निवास भित्रको जग्गालाई तत्कालीन श्री ५ को सरकार मन्त्रिपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको जफत जग्गा मात्र फिर्ता दिने सम्वन्धि भएको निर्णयलाई अपव्याख्या, दुरुपयोग र विपरीत समेत गरी शैलजा राणा समेतले दिएको निवेदनलाई मात्र आधार मानी अधिग्रहण गरिएको तथ्यलाई लुकाई, छिपाई जफत गरिएको भनी फरक व्यहोराको प्रमाण खडा गरी मालपोत कार्यालयका तत्कालीन प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा कानून बमोजिम अधिग्रहण गरिएको जग्गालाई जफत र रोक्का भएको जग्गा हो भनी झुठा तथा फरक व्यहोराको कीर्ते लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ मिति २०४९/७/२५ र २०४९/९/२३ को निर्णयले साविक वडा नं. २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको देखिन्छ। यसरी दर्ता प्रमाणित भएका साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी जग्गा विभिन्न कानूनी प्रकृयाबाट समेत विभिन्न मितिमा व्यक्तिहरुको नाममा हक हस्तान्तरण भएको देखिएको र श्री ५ को सरकारको फिर्ता दिने निर्णय पूर्ब पून: नाप नक्शा भएको कारणले साविक बमोजिम नै जग्गाधनी महलमा समरजंग कम्पनी लेखीन गएको भएता पनि समर

जंग कम्पनीको पत्र र यस कार्यालयको च.नं. ३२३४ को पत्र अनुसार जफत भएको जग्गा सम्बन्धी व्यक्तिलाई नै फिर्ता भएको हुंदा उक्त जग्गाका विभिन्न जग्गाधनीहरुले हाल साविक गरी पाउ भनी निवेदन दिए पश्चात हा.सा. को लागी कित्ता काट गर्न नापी शाखामा पठाउदा साविक दर्ता श्रेष्ता कायम भएको आधारमा नयाँ नापी अनुसारको हा.सा. गरी दर्ता गर्न मनासिब देखिएको भनी मिसिल प्राप्त भएकोले निर्देशनको लागी मालपोत कार्यालय काठमाडौंले पत्राचर गरे पश्चात तत्कालीन ना.सु. निज प्रतिवादी **जगन्नाथ पनेरु**ले मिसिल निर्देशनार्थ पेश गरेको छु भनी टिप्पणी र आदेश तयार गरी तत्कालीन शाखा अधिकृत ईन्द्र प्रसाद ढुंगानाले उक्त जग्गा व्यक्ति विशेषका नाममा दर्ता प्रमाणित गरेको देखिएकोले सोही प्रमाणित श्रेष्ताका आधारमा हाल नापी अनुसारको कायम भएका कि.नं. का जग्गाहरु सोही श्रेष्तालाई आधारमानी हाल साविक श्रेष्ता मिलान गर्न बाधा नपर्ने व्यहोराको निर्देशन पठाउन मनासिब हुने देखि पेश गरेको छु भनी निर्णयार्थ पेश गरेको, तत्कालीन निर्देशक प्रतिवादी पुष्पराज उपाध्यायले सोही कुरा मनासिब हुने गरी पेश गरे पश्चात तत्कालीन महानिर्देशक प्रतिवादी रुद्र कुमार श्रेष्ठले हुन्छ भनी निर्णय गरी मिति २०५९/०७/०१ गते निर्देशन सहित मिसिल पठाई निज प्रतिवादी **जगन्नाथ पनेरु** समेतले तत्कालीन भूमी सुधार तथा व्यवस्थापन विभाग काठमाडौंको नायब सुब्बा पदमा रहँदा मिति २०५९/६/२४ मा साविक हाँडिगाऊँ मौजा हा.नं. ४५६ को लगत भिड्ने ललिता निबास क्याम्प भित्रको तत्कालीन श्री ५ को सरकार, समरजंग कम्पनीको नामको जग्गाधनी दर्ता श्रेस्ता खारेज गरी सरकारी जग्गाको साविक कित्तालाई नयाँ नापी अनुसार व्यक्ति विशेषको नाममा जग्गाधनी दर्ता श्रेस्ता कायम हुने गरी हाल साविक गर्नको लागी निर्देशनार्थ टिप्पणी र आदेशको निर्णय तयार गरी प्रत्यक्षरुपमा लिखत कीर्ते गरी निज प्रतिवादी **जगन्नाथ पनेरुले** विगो **रु.२९,३२,६५,३०६।–** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा ब्यक्तिको नाममा कायम भई प्रस्तुत कसूर अपराध गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**११६) <u>प्रतिवादी प्रविन ताम्राकारको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी प्रविन ताम्राकारको नाममा सिट नं. १०२-१०२५-

१५, कि.नं. ४२२, ४३१, ४२९ को जम्मा २४८.३ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी **प्रविन ताम्राकारको** प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाणबाट देखिएकोले, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी विगो **रु. ६,२४,६५,४०७।–** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ६,२४,६५,४०७।- | - | - | - | ६,२४,६५,४०७।- |

**११७) <u>प्रतिवादी सन्दिप कुमार ढकालको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषदको मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी सन्दिप ढकाल भन्ने **सन्दिप कुमार ढकालको** नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. २८१, २७४, २७५, ३०७, ४८, ७४५, को जम्मा १०४९.९४ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी सन्दिप ढकाल भन्ने सन्दिप कुमार ढकालको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी निज प्रतिवादी सन्दिप कुमार ढकालले विगो **रु.२६,४१,३५,८४१।–** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज प्रतिवादीको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २६,४१,३५,८४१।- | - | - | - | २६,४१,३५,८४१।- |

**११८) प्रतिवादी बिवेक कुमार सुवेदीको हकमा:**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी **विवेक कुमार सुवेदीको** नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ७४९, २७६, १०० को जम्मा ९८०.५९ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी विवेक कुमार सुवेदीको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाणबाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी विगो **रु.२४,६६,८९,३०१।-** वरावरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज प्रतिवादीको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २४,६६,८९,३०१।- | - | - | - | २४,६६,८९,३०१।- |

**११९) प्रतिवादी कैलाश चन्द्र गोयलको हकमा:**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी कैलाशचन्द्र गोयल समेत संचालक रहेको डि.एल.एफ. डेभलपर्सको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ५८३,५१५,२५१,५७०, ५१९, २५४, २९२, २१५,२३९,२४८,५५५,५८०,५४२,५१७,२९३,२५२,२४१, २१६,५६४, ५६८, २५६,८६,५६६,

२९१, ६१२, २७३, २६८ को जम्मा ७३७७.०५ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी कैलाशचन्द्र गोयल समेतको संलग्नता रहेको तथ्य, प्रमाणबाट देखिएको र उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई हस्तान्तरण हुदै हाल निज प्रतिवादी कैलाशचन्द्र गोयल समेतले खरीद गरी जग्गाको लाभ प्राप्त गरी प्रस्तुत कसूरमा संलग्न भएको देखिन्छ।

प्रतिवादी कैलाश चन्द्र गोयल अध्यक्ष रहेको डि.एल.एफ. डेभलपर्स प्रा.लि.ले जग्गाधनीको हैसियतले कि.नं. २९६ को १५८.९५, कि.न.२७३ को ११.९१, कि.न. २६८ को १५.९, कि.न.६१२ को ११.९, कि.न.६२२ को ६६.५८, कि.न. ६२८ को १०.९, कि.न. १३९ को १७८.८५, कि.न.१४० को ७.९६, कि.न.१४१ को १५३.०२, कि.न. ३५ को ५१४.७१, कि.न.३८ को ५५.६४, कि.न.४१ को २१.८९, कि.न.४३ को २४.८७ को जम्मा १२३२.९८ व.मि. जग्गाधनी रहेको देखिन्छ। यसरी नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा निज प्रतिवादी कैलाश चन्द्र गोयलले सम्बन्धित कार्यालयका कर्मचारी र अन्य व्यक्तिहरु समेतलाई संलग्न गराई योजनाकार, व्यवस्थापक आफु अध्यक्ष रहेको कम्पनीमा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी राखी निज प्रतिवादी कैलाशचन्द्र गोयलले विगो **रु. २,२४,३६,५७,८००।-** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २,१६,६०,५७,८००। | - | ७,७६,००,०००।- | - | २,२४,३६,५७,८००।- |

**१२०) <u>प्रतिवादी रुपेश कुमार सुवेदीको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधि ग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्री परिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी **रुपेश कुमार सुवेदी** र सरोज ढकालको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ४०५,५२०,२७१,२६३ को जम्मा १२८५.६३ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत

किर्ते कागजातहरुमा निज प्रतिवादी रुपेश कुमार सुवेदी समेतको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाणबाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी निज प्रतिवादी रुपेश कुमार सुवेदीले विगो **रु.३२,३४,२८,९२१।–** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ३२,३४,२८,९२१।- | - | - | - | ३२,३४,२८,९२१।- |

**१२१) <u>प्रतिवादी सरोज ढकालको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल प्रतिवादी **सरोज ढकाल** समेतको संयुक्त नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ४०५,५२०,२७१,२६३ को जम्मा १२८५.६३ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी सरोज ढकाल समेतको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाणबाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरी निज प्रतिवादी सरोज ढकालले विगो **रु.३२,३४,२८,९२१।-** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज प्रतिवादी सरोज ढकालको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ३२,३४,२८,९२१।- | - | - | - | ३२,३४,२८,९२१।- |

**१२२) <u>प्रतिवादी बाबा कार्कीको हकमा:</u>**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३

गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हद बन्दिको टुङगो लगाउनु अगावै बेरितकाझुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी बाबा कार्कीको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ७४० को जम्मा ८७१.६५ वर्ग मिटर क्षे.फ. र **बाबा कार्की** समेत ६ जनाको नाममा सिट नं. १०२५-१५ को कि.नं. ६१३ र १०२५-१९ को कि.नं. १४ को जम्मा ५५.६६ वर्ग मि. जग्गा दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी प्रतिवादी बाबा कार्कीको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिएको, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ निज प्रतिवादी बाबा कार्की समेतले प्राप्त गरेको देखिदा निज प्रतिवादीले सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी बाबा कार्कीले चमेली श्रेष्ठ लगायत ५ जनाको संयुक्त नाममा जग्गाधनीको हैसियतले कि.नं. २१९ को ४७.६९, कि.न.१४ को २७.८, कि.न.३४ को ६७.५७, कि.न.१२८ को ५४७.५, कि.न.६१७ को ३३३.८६, कि.न.६१३ को २७.८६ गरी जम्मा १०५२.२८ ब.मि. क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र हाल कि. नं. २१९, १४,३४,१२८,६१७,६१३ को १०५२.२८ ब.मि. क्षे.जग्गाको जग्गाधनी बाबा कार्की समेत भएको देखिन्छ। यसरी प्रतिवादी बाबा कार्की समेतले योजना बनाई नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी निज प्रतिवादी बाबा कार्कीले विगो **रु.५५,०९,५४,०४८।-** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ४९,८०,१०,०४८।- | - | ५,२९,४४,०००।- | - | ५५,०९,५४,०४८।- |

## १२३) <u>प्रतिवादी खेमलाल खरेलको हकमा:</u>

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हदबन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेतापपनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृह मन्त्रालयबाट छानबिन भई

हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी खेमलाल खरेलको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. ४४६ को जम्मा २२१.३३ वर्ग मिटर क्षे.फ. रखेमलाल खरेल समेत ६ जनाको नाममा सिट नं. १०२५-१५ को कि.नं. ६१३ र १०२५-१९ को कि.नं. १४ को जम्मा ५५.६६ वर्ग मि. जग्गादर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी खेमलाल खरेलको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिन्छ, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरेको देखिएको हुँदा यसरी निज प्रतिवादीले सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी खेमलाल खरेलले चमेली श्रेष्ठ लगायत ५ जनाको संयुक्त नाममा जग्गाधनीको हैसियतले कि.नं. २१९ को ४७.६९, कि.न.१४ को २७.८, कि.न.३४ को ६७.५७, कि.न.१२८ को ५४७.५, कि.न.६१७ को ३३३.८६, कि.न.६१३ को २७.८६ गरी जम्मा १०५२.२८ब.मि. क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र हाल कि. नं. २१९, १४,३४,१२८,६१७,६१३ को १०५२.२८ ब.मि. क्षेत्रफल प्रतिवादी खेमलाल खरेल समेतको नाममा कायम रहेको देखिन्छ। यसरी प्रतिवादी खेमलाल खरेल समेतले योजना बनाई नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी निज प्रतिवादी खेमलाल खरेलले विगो **रु. ३८,७३,५१,५३७।–** बराबरको सरकारी जग्गा सट्टाभर्ना समेत बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी प्रस्तुत कसुर गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ३३,४४,०७,५३७।- | - | ५,२९,४४,०००।- | - | ३८,७३,५१,५३७।- |

## १२४) प्रतिवादी अगम ढुङगानाको हकमा:

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितकाझुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले

तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी अगम ढुङ्गानाको नाममा सिट नं. १०२-१०२५-१५, कि.नं. २२६, ३८, ४४३, ४३८, ४३६, ४४५, ४२६, ४४०, ३४१, १९४, ४२४, ३३८, ४४९ को जम्मा ७६८.२४ वर्ग मिटर क्षे.फ. र अगम ढुङ्गाना समेत ६ जनाको नाममा सिट नं. १०२५-१५ को कि.नं. ६१३ र १०२५-१९ को कि.नं. १४ को जम्मा ५५.६६ वर्ग मि. जग्गादर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी प्रतिवादी अगम ढुङ्गानाको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिन्छ, उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरेको देखिएको हुँदा यसरी निज प्रतिवादीले सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी अगम ढुङ्गानाले चमेली श्रेष्ठ लगायत ५ जनाको संयुक्त नाममा जग्गाधनीको हैसियतले कि.नं. २१९ को ४७.६९, कि.न.१४ को २७.८, कि.न.३४ को ६७.५७, कि.न.१२८ को ५४७.५, कि.न.६१७ को ३३३.८६, कि.न.६१३ को २७.८६ गरी जम्मा १०५२.२८ ब.मि. क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र हाल कि. नं. २१९, १४,३४,१२८,६१७,६१३ को १०५२.२८ ब.मि. क्षेत्रफल प्रतिवादी अगम ढुङगाना समेतको नाममा कायम छ। यसरी प्रतिवादी अगम ढुङगाना समेतले योजना बनाई नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी विगो **रु.५२,४९,३८,९५५।–** वरावरको उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी निज प्रतिवादी अगम ढुङगानाले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ४७,१९,९४,९५५।- | - | ५,२९,४४,०००।- | - | ५२,४९,३८,९५५।- |

**१२५) <u>प्रतिवादी चमेली श्रेष्ठको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालय डिल्लीबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते व्यहोराका लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गाकिर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनुपर्नेमा निज प्रतिवादी चमेली श्रेष्ठ, अगम ढुङ्गाना, बाबा कार्की, खेमलाल खरेल, लक्ष्मी ढकाल समेतको नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ६१३ को जम्मा क्षे.फ. २७.८६ वर्ग मिटर, सिट नं. १०२-१०२५-१९ को कि.नं. १४ को जम्मा क्षे.फ. २७.८० वर्ग मिटर समेतका जग्गा हाल कायम

रहेको देखिएको, कि.नं. १८७, १८६, १८४ को क्षेत्रफल ८९०.२९ वर्ग मिटर सरकारी जग्गा सुनिती राणा समेतबाट खरिद गरी आफ्नो नाममा राजिनामा पारित गरी लिएको देखिन आएको र निज प्रतिवादी चमेली श्रेष्ठले उक्त जग्गा कि.का. गरी गोबिन्दलाल संघाईलाई कि.नं. ४९७, ४८९, प्रतिमा बैद्य प्रधानलाई कि.नं. ४९८, ४९४, ४९५, सुष्मा बज्राचार्यलाई कि.नं. ४८८,४९१,४८१, ओम बिरमान ताम्राकारलाई कि.नं. ४९०, युरीशोभा तुलाधरलाई कि.नं. ४९२, रेखा श्रेष्ठलाई कि.नं. ४९३, सानुछोरी बज्राचार्यलाई कि.नं. ४९६, शर्मिला बज्राचार्यलाई कि.नं. ४८० विक्री वितरण समेत गरेको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा किर्ते गरी आएको सरकारी जग्गा खरिद गरी, गराई व्यक्ति विशेषलाई बेचबिखन कार्य गरी सरकारी जग्गा हानी नोक्सानी गरी,गराई आफुले आर्थिक लाभ प्राप्त प्राप्त गरी प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

प्रतिवादी चमेली श्रेष्ठ लगायत ५ जनाको संयुक्त नाममा जग्गाधनीको हैसियतले कि.नं. २१९ को ४७.६९, कि.न.१४ को २७.८, कि.न.३४ को ६७.५७, कि.न.१२८ को ५४७.५, कि.न.६१७ को ३३३.८६, कि.न.६१३ को २७.८६ गरी जम्मा १०५२.२८ वर्ग मिटरको क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र हाल कि. नं. २१९, १४,३४,१२८,६१७,६१३ को १०५२.२८ ब.मि. क्षेत्रफल प्रतिवादी चमेली श्रेष्ठ समेतको नाममा दर्ता कायम भएको देखिन्छ। यसरी प्रतिवादी चमेली श्रेष्ठ समेतले योजना बनाई नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी निज प्रतिवादी चमेली श्रेष्ठले विगो **रु. ३३,१६,७१,०३६।-** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २७,८७,२७,०३६।- | - | ५,२९,४४,०००।- | - | ३३,१६,७१,०३६।- |

**१२६) <u>प्रतिवादी लक्ष्मी ढकालको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालय डिल्लिबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते व्यहोराका लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गाकिर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनुपर्नेमा निज प्रतिवादी चमेली श्रेष्ठ, अगम ढुङ्गाना, बाबा कार्की, खेमलाल खरेल, लक्ष्मी ढकाल समेतको नाममा सिट नं. १०२-१०२५-१५ को कि.नं. ६१३ को जम्मा क्षे.फ. २७.८६ वर्ग मिटर, सिट नं. १०२-१०२५-१९ को कि.नं. १४ को जम्मा क्षे.फ. २७.८० वर्ग मिटर समेतका जग्गा हाल कायम रहेको देखिएको, कि.नं. १८७, १८६, १८४ को क्षेत्रफल ८९०.२९ वर्ग मिटर सरकारी जग्गा सुनिती राणा समेतबाट खरिद गरी आफ्नो नाममा राजिनामा पारित गरी लिएको देखिन आएको र उक्त जग्गा गोबिन्द लाल संघाई

समेतलाई बिक्री बिक्री वितरण समेत गरेको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा निजले किर्ते भई आएको सरकारी जग्गा खरिद गरी, गराई व्यक्ति विशेषलाई बेच बिखन कार्य गरी सरकारी जग्गा हानि नोक्सानी गरी, गराई आफुले आर्थिक लाभ प्राप्त गरी प्रस्तुत कसूर अपराध गरेको प्रष्ट देखिन्छ।

प्रतिवादी लक्ष्मी ढकालले चमेली श्रेष्ठ लगायत ५ जनाको संयुक्त नाममा जग्गाधनीको हैसियतले कि.नं. २१९ को ४७.६९, कि.न.१४ को २७.८, कि.न.३४ को ६७.५७, कि.न.१२८ को ५४७.५, कि.न.६१७ को ३३३.८६, कि.न.६१३ को २७.८६ गरी जम्मा १०५२.२८ ब.मि. क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र हाल कि. नं. २१९, १४,३४,१२८,६१७,६१३ को १०५२.२८ ब.मि. क्षेत्रफलको जग्गाधनी प्रतिवादी लक्ष्मी ढकाल समेतको नाममा दर्ता कायम भएको देखिन्छ। यसरी प्रतिवादी लक्ष्मी ढकाल समेतले योजना बनाई नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा सट्टाभर्ना बापत प्राप्त गरी उक्त सरकारी जग्गा आफ्नो नाममा समेत दर्ता कायम गरी निज प्रतिवादी लक्ष्मी ढकालले विगो रु**.३३,१६,७१,०३६।–** बराबरको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २७,८७,२७,०३६।- | - | ५,२९,४४,०००।- | - | ३३,१६,७१,०३६।- |

**१२७) <u>प्रतिवादी निर्मला देवी गोयलको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालय डिल्लिबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते व्यहोराका लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गा किर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनुपर्नेमा निज प्रतिवादी **निर्मला देबि गोयलले** कि.नं. ५४० को १३.९० वर्ग मिटर सरकारी जग्गा शोभाकान्त ढकाल समेतबाट खरिद गरी आफ्नो नाममा राजिनामा पारित गरी लिएको देखिन आएको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा निज प्रतिवादी निर्मला देबी गोयल प्रस्तुत किर्ते कसूरमा प्रत्यक्ष संलग्नता रहेको तथ्य प्रमाणबाट देखिएकोले उक्त सरकारी जग्गा विभिन्न चरणमा खरीद बिक्री भई निजले समेत खरीद गरी जग्गाको लाभ प्राप्त गरेको देखिदा निज प्रतिवादी निर्मला देवी गोयल समेतले आर्थिक लाभ लिएको प्रष्ट हुन्छ।

प्रतिवादी निर्मला देवी गोयलले मिति २०६७/५/१५ गतेको रा.पा.ले कि.न. ५३१ रजनी पनेरुको नामबाट दा.खा भई भई निज निर्मला देवी गोयलको नाममा कायम भएकोमा प्रधानमन्त्री निवास परिसर विस्तारको क्रममा उल्लेखित कित्ता जग्गा बिस्तार क्षेत्रमा परी सट्टापट्टा सोधभर्ना बापत कि.न. ३९ को १०२.३५, कि.न. ४२ को २४.८७, कि.न.५४४ को ४६६.६१, कि.न.५४० को १३.९,कि.न.२५७ को

११५.२५, कि.न. २१२ को ८७.४४, कि.न.५७८ को १३.९३, कि.न.५५८ को ३.९८ को जग्गा पाएकी र निजले सट्टाभर्ना सोधभर्ना बापत पाएकी उक्त जग्गा विगो **रु.४२,०२,८१,७५५।–** बराबरको नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा ब्यक्ति विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २१,१८,८१,७५५।- | - | २०,८४,००,०००।- | - | ४२,०२,८१,७५५।- |

**१२८)** **<u>सावित्री घले गुरुङको हकमा</u>**:

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालय डिल्लीबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते व्यहोराका लिखत तयार गरी, गराई मिसिल नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गा किर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनु पर्नेमा प्रतिवादी सावित्री घले गुरुङले कि.नं. २१३ क्षेत्रफल १०३३.३७ वर्ग मिटर सरकारी जग्गा भाटभटेनी सुपरमार्केट प्रा.ली.बाट खरिद गरी आफ्नो नाममा राजिनामा पारित गरी लिएको देखिन आएको र निज प्रतिवादी सावित्री घले गुरुङले उक्त जग्गा कि.का. गरी डि.एल.एफ.डेभलपर्स प्रा.ली. लाई कि.नं. ५१३ बिक्री वितरण समेत गरेको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा निजले किर्ते भई आएको सरकारी जग्गा खरिद गरी, गराई व्यक्ति विशेषलाई बेच बिखन कार्य गरी सरकारी जग्गा हानि नोक्सानी गरी,गराई आफुले आर्थिक लाभ प्राप्त गरी प्रतिवादी सावित्री घले गुरुङ शेयर सदस्य रहेको भाटभटेनी डेभलपमेन्ट कम्पनी प्रा.लि.ले जग्गाधनीको हैसियतले कि.नं. २११ र ५९१ को १३३.१४ ब.मि. क्षेत्रफलको जग्गा सट्टाभर्ना पाएको र निज प्रतिवादी सावित्री गुरुङले सट्टाभर्ना बापत पाएको उक्त जग्गा विगो **रु.३८,८०,९१,९३४।–** वरावरको नेपाल सरकार समरजंग कम्पनिको नाममा रहेको सरकारी जग्गा भएकोले निज प्रतिवादी **सावित्री घले गुरुङले** सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २५,९९,६७,२८८।- | - | १२,८१,२४,६४६ | - | ३८,८०,९१,९३४।- |

**१२९) प्रतिवादी कामना गुरुङको हकमा :**

ललिता निवास क्याम्प भित्रको जग्गा सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको सरकारी जग्गालाई तत्कालीन सरकारको मन्त्रीपरिषद्को मिति २०४७/२/१४, २०४७/४/८, २०४७/५/३ गतेको निर्णय बमोजिम प्रजातन्त्रको पुनर्स्थापनाको आन्दोलनमा संलग्न भए बापत सरकारले जफत गरेका सम्पतिहरु गृह मन्त्रालयबाट छानबिन गरी हद बन्दिको समेत एकिन गरी फिर्ता दिने भन्ने कुरा उल्लेख गरेता पनि उक्त मन्त्रिपरिषदका निर्णयहरुलाई तोडमोड अप-ब्याख्या गरी गृहमन्त्रालयबाट छानबिन भई हदबन्दिको टुङगो लगाउनु अगावै बेरितका झुठो, फरक तथा किर्ते व्यहोराको निवेदन पेश गरी, गराई सरकारले अधिग्रहण गरेको तथ्यलाई लुकाई, छिपाई, अनदेखा गरी वास्तबिक तथ्यलाई तोडमोड गरी रुक्म शमसेर ज.ब.रा. समेतले तत्कालीन मालपोत कार्यालय, डिल्लीबजारका प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतको मिलेमतोमा किर्ते कागजातहरु खडा गरी, गराई व्यक्ति विशेषको नाममा नाममा दर्ता गरे, गराएको उक्त सरकारी जग्गा व्यक्ति विशेषको नाममा हक हस्तान्तरण हुँदै हाल निज प्रतिवादी कामना गुरुङको नाममा सिट नं. १०२-१०२५-१४, कि.नं. ७८, सि.नं. १०२-१०२५-१५,कि.नं. ३००, ३८५, ७३१, २८, १५७, ७३९, ७४१, रसि.नं. १०२-१०२५-१९ को कि.नं. २५ को जम्मा १३९१.३७ वर्ग मिटर क्षे.फ. दर्ता कायम रहेको देखिएकोले ललिता निवास क्याम्प भित्रको सरकारी जग्गाधनी भनिएका शैलजा राणा समेतको नाममा ना.सा.दा.खा.गरी सरकारी जग्गा हिनामिना तथा हानी नोक्सानी गर्ने, गराउने गरी तयार गरीएका लिखत किर्ते कागजातहरुमा निज प्रतिवादी कामना गुरुङको प्रत्यक्ष रुपमा संलग्नता रहेको तथ्य, प्रमाण बाट देखिन्छ।

तत्कालिन श्री ५ को सरकारले कानुन बमोजिम अधिग्रहण गरी प्राप्त गरेको का.जि.का. म.पा वडा न.४ स्थितमा रहेको ललिता निवास क्याम्प भित्रको सरकारी सार्बजनिक जग्गा मध्ये सिट न. १०२५-१५ को कित्ता न. ६८३ को २१.४७, कि.न.६८६ को ६ र कि.न. ६७९ को १.७५ बर्गमिटर जग्गा निज प्रतिवादी कामना गुरुङ्को नाममा रहेको, निज प्रतिवादी कामना गुरुङ्ले तत्कालिन श्री ५ को सरकारले प्रचलित जग्गा प्राप्ती ऐन २०१८ बमोजिम रितपुर्वक अधिग्रहण गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा हक हस्तान्तरण नहुने भन्ने जान्दा जान्दै योजना बनाई खरिद गरी आफ्नो नाममा दर्ता गरी निज प्रतिवादी **कामना गुरुङले विगो रु.६१,५५,०५,७६८।–** बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टेकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ३५,७३,८१,१२२।- | - | १२,८१,२४,६४६ | - | ६१,५५,०५,७६८।- |

**१३०) प्रतिवादी रेखा घिमिरेको हकमा:**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने **रेखा घिमिरेले** सुनिती राणा समेतबाट

आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्षे.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी फरक, झुटो तथा किर्ते व्यहोराको निवेदन प्रतिवादी रेखा घिमिरेको वारेश टेकनाथ भट्टराईले पेश गरेको निवेदनको आधारमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ रोपनी जग्गा मालपोत कार्यालयका कर्मचारी तथा स्थानिय जान प्रतिनिधी र साथ संधियार समेतको मिलोमतो र सहयोग लिई साविक नापी तथा दोश्रो नापीको श्रेष्तामा समेत उल्लेखित जग्गाहरुमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भई आएकोमा उक्त कुरा हटाई उल्लेखित जग्गाहरु हाल साविक गरी गराई आफ्नो नाममा श्रेष्ता समेत कायम गरी उक्त जग्गाहरु खण्डिकरण, कित्ता काट समेत गरी मिन बहादुर गुरुङ, ईन्दु शर्मा, राम कुमार सुबेदी, शोभाकान्त ढकाल, मन्ती गोर्खाली र अच्युत राज श्रेष्ठ समेतलाई बिक्री वितरण गरी आर्थिक लाभ समेत लिई प्रतिवादी **रेखा घिमिरेले विगो रु.७०,३९,१४,४४६।–** बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर गरेको देखिदा निज प्रतिवादी रेखा घिमिरेले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ७०,३९,१४,४४६।- | - | - | - | ७०,३९,१४,४४६।- |

**१३१) <u>प्रतिवादी मचाबाबु प्रजापतीको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालय डिल्लिबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते व्यहोराका लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गा किर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनुपर्नेमा निज प्रतिवादी मचाबाबु प्रजापतिले आफ्नी आमा माया प्रजापति, माधवी सुबेदी, उमा कुमारी ढकाल्नीबाट उक्त जग्गा मध्येबाट कि.नं. २६६, २७२, ९८, २९४, ३०९ को जम्मा क्षेत्रफल १-२-१-१ रोपनी सरकारी जग्गा ना.सा. गरी आफ्नो नाममा लिएको र उक्त जग्गा माधवी सुबेदी र उमा कुमारी ढकाल्नीलाई बिक्री गरेको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा निजले किर्ते भई आएको सरकारी जग्गा ना.सा.गरी, गराई व्यक्ति विशेषलाई बेच बिखन कार्य गरी सरकारी जग्गा हानि नोक्सानी गरी, गराई आफुले आर्थिक लाभ प्राप्त गरेको देखिन्छ।

१९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.) , बि.सं.२०२१ सालमा गुठी

शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र (हा.नं. ४५६) पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **मचाबाबु महर्जन** समेत भई "साबिक २३ ह कि.नं.२५ को क्षे.फ. १-३-२ जग्गा पशुपती टिकिन्छा गुठीको खला नं.१० मा मोही आशामरु ज्यापूको नाउँमा भिड्ने जग्गा हो, फि.बु.को जोताहा महलमा उल्लेखित ब्यक्ति नारन चा महर्जन निवेदकका पिता हुन र निजको शेषपछि उक्त जग्गा हालसम्म ग्वाराभाई महर्जनले नै जोतभोग गरा आएको ब्यहोरा साँचो हो र उक्त जग्गा निवेदकको माग अनुसार दर्ता हा.सा.समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको,"साबिक २३ ह कि.नं.१५ र २४ को क्रमश: क्षे.फ. २-३-० र ०-९-० जग्गा पशुपती टिकिन्छा गुठीको लगतमा खला नं. १० मा आशामरु ज्यापुको नाउँमा भिड्ने जग्गा हो ,जोताहा महलमा उल्लेखित ब्यक्ति निवेदकका बाबु हुन, निजको शेष पछि उक्त जग्गा निवेदक रेना गुरुङले नै जोतभोत गरी आएकोले निजको माग बमोजिम दर्ता हा.सा.समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिएमा फरक पर्ने छैन" भनी मुचुल्कामा हस्ताक्षर गरेको श्री पशुपतिनाथ टिकिन्छा गुठीको नाममा कायम नभएको जग्गालाई टिकिन्छा गुठीको जग्गाको लगतसँग भिड्ने भनी सहमति जनाएको, **फरक व्यहोराको सर्जमिन मुचुल्का**मा साक्षी बसी हस्ताक्षर गरी निज प्रतिवादी **मचाबाबु प्रजापतिले विगो रु.**१५,८६,१७,६३०।– बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | १४,६४,८३,०१५।- | - | - | १,२१,३४,६१५/- | १५,८६,१७,६३०।- |

**१३२) <u>प्रतिवादी तरिबाबु महर्जनको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालय डिल्लिबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते व्यहोराका लिखत तयार गरी,

गराई मि.नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र  मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गा किर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनु पर्नेमा निज प्रतिवादी  **तरि बाबु महर्जनको** बुवा देव नारायण महर्जनले मिति २०५७/१०/२७ गते का.जि. साविक २३ क्ष को कि.नं. ४४ (११२) को क्षे.फ. ०-७-२-० रोपनी सरकारी जग्गा सुनिती राणा समेतबाट मोहीयानी हक वाफत भू.सु.दा.खा.गरी लिएकोमा उक्त जग्गा मिति २०५७/११/२२ गते र.नं. ७२६१ बाट देव नारायण महर्जन, उमा कुमारी ढकाल्नी, मधवी  समेतले सगोलनामा गरेकोमा मिति २०६०/१२/१० गते उक्त जग्गा मध्ये कि.का. भई कि.नं. १३४ को क्षे.फ. ०-४-१-३, कि.नं. १३७ को क्षे.फ. ०-०-३-१, कि.नं. १३८ क्षे.फ. ०-२-१-० रोपनी जग्गा देव नारायण महर्जन समेतबाट प्रतिवादी तरि बाबु महर्जन, उमा कुमारी ढकाल्नी, मधवी ले ना.सा. गरी लिएको र निज प्रतिवादीहरुले उक्त जग्गा मिन बहादुर गुरुङलाई विभिन्न मितिमा विक्रि वितरण समेत गरेको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा निजले किर्ते भई आएको सरकारी जग्गा खरिद गरी, गराई व्यक्ति विशेषलाई बेच बिखन गरी सरकारी जग्गा हानिनोक्सानी गरी, गराई आफुले आर्थिक लाभ प्राप्त गरी निज प्रतिवादी **तरिबाबु महर्जनले** विगो **रु.५,९९,९२,४५१।–** बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ५,९९,९२,४५१।- | - | - | - | ५,९९,९२,४५१।- |

**१३३)  <u>प्रतिवादी तिर्थ नारायण महर्जनको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गते निर्णय गरी सार्वजनिक कामको लागि प्रचलित कानून बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको सरकारी जग्गालाई शैलजा राणा समेतको मिलेमतोमा तत्कालीन मालपोत कार्यालयडिल्लिबजारको प्रमुख मालपोत अधिकृत कलाधर देउजा समेतले अधिग्रहण गरिएको जग्गालाई जफत गरिएको जग्गा हो भनी किर्ते भइरहेको साविकको फिल्डबुक समेतको कागजातको आधार लिई, झुठा तथा फरक व्यहोराको टिप्पणी लगायतका किर्ते  व्यहोराका लिखत तयार गरी, गराई मि.नं. १०२४ र १०२५ बाट मिति २०४९/७/२५ र  मिति २०४९/०९/२३ गतेको निर्णयले ललिता निवास क्याम्प भित्रको साविकको जम्मा ७६ कित्ता जग्गाको जम्मा ११२-४-१-० रोपनी क्षेत्रफलको सरकारी जग्गाकिर्ते व्यहोराको लिखतको आधारमा शैलजा राणा समेतको नाममा दर्ता भएकोमा उक्त जग्गा सरकारी हो भन्ने थाहा जानकारी हुनुपर्नेमा निज प्रतिवादी **तिर्थ नारायण** महर्जनको बुवा नारां महर्जनले मिति २०५७/१०/२७ गते का.जि. साविक २३ क्ष को कि.नं. ६५ (११०) को क्षे.फ. ०-५-१-० रोपनी सरकारी जग्गा सुनिती राणा समेतबाट मोहीयानी हक वाफत भू.सु.दा.खा. गरी लिएकोमा उक्त जग्गा मिति २०५७/११/०२ गते र.नं. ७२०९ बाट नारां महर्जन, उमा कुमारी ढकाल्नी, मधवी  समेतले सगोलनामा गरेकोमा मिति २०६०/०९/१५ गते उक्त जग्गा हाल साविक हुँदा कि.नं. १८२ भएकोमा उक्त जग्गा  नारां महर्जन समेतबाट प्रतिवादी तिर्थ नारायण महर्जन, उमा कुमारी ढकाल्नी, माधवी ले ना.सा. गरीलिएको र निज प्रतिवादीहरुले उक्त

जग्गा मिन बहादुर गुरुङलाई राजिनामा पारित गरी मिति २०६०/१२/१२ गते विक्रि वितरण समेत गरेको संकलित कागज प्रमाणहरुबाट खुल्न आएको हुँदा निजले किर्ते भई आएको सरकारी जग्गा खरिद गरी, गराई व्यक्ति विशेषलाई बेचबिखन कार्य गरी सरकारी जग्गा हानिनोक्सानी गरी, गराई आफुले आर्थिक लाभ प्राप्त गरी निज प्रतिवादी **तिर्थ नारायण महर्जनले विगो रु. ४,१९,९४,९६७।–** वरावरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर गरेको देखिदा निज प्रतिवादी तिर्था नारायण महर्जनले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ४,१९,९४,९६७।- | - | - | - | ४,१९,९४,९६७।- |

**१३४) <u>प्रतिवादी रत्न प्रसाद जोशीको हकमा:</u>**

तत्कालीन श्री ५ को सरकारले मिति २०२१/८/१५ गतेको निर्णयले जग्गा प्राप्ति ऐन, २०१८ बमोजिम अधिग्रहण गरेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० रोपनी सरकारी जग्गालाई जफत भएको भनी शैलजा राणा समेतले झुट्टा, फरक तथा किर्ते व्यहोरा उल्लेख गरी पेश गरेको निवेदनलाई मात्र प्रमाण बुझी भूमिसुधार तथा मालपोत कार्यालयको कर्मचारी समेतको मिलोमतोमा शैलजा राणा समेतको नाममा ना.सा. दा.खा. भएको जग्गा मध्ये का.जि.का.म.न.पा. वडा नं.०४ बस्ने रेखा घिमिरेले सुनिती राणा समेतबाट आफ्नो नाममा खरिद गरेको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा हाल सविक गरी ज.ध. प्रमाण पुर्जा पाउँ भनी रेखा घिमिरेको वारेशटेकनाथ भट्टराईले पेश गरेको निवेदन सम्बन्धमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट सर्जमिन मुचुल्का गराउदा रेखा घिमिरेको नाममा दर्ता भएको साविक नगर २३ क्ष कि.नं. ७० को क्ष.फ. २-४-०-० रोपनी जग्गा र ऐ. कि.नं. ८३ को क्ष.फ. ३-४-०-० जग्गा नयाँ नापिको नगर ४ सिट नं.१०२५-१५ कि.नं. ५३, ६३ को क्ष.फ. ०-६-०-०, २-११-०-३ र ऐ सिट नं. १०२५-२० कि.नं.८ को क्ष.फ. २-१४-२-३ मा भेट्ने जग्गा हो, उक्त जग्गामा पूर्व पश्चिम र दक्षिण तर्फ वाल कम्पाउण्ड लगाई र उत्तर तर्फ बार लगाई चारै तर्फ सिमाना कायम भई सकेको अवस्थाको जग्गा छ र उक्त जग्गामा निवेदकले बाली नाली लगाई जाने उमार्ने गरी सो को आयस्था खाई सो जग्गामा आफैले भोग गरी आउनु भएको छ, नयाँ नापी हुँदा फिल्डबुकमा के कसरी श्री ५ को सरकार समरजंग कम्पनी भन्ने लेखिन गई कि.नं. ५३, ६३ को बीचमा बाटोको संकेत देखिन गएको हो सो सम्बन्धमा हामीलाई केही जानकारी छैन उक्त जग्गा रेखा घिमिरेले राजिनाम पास गरी खरिद गरी लिएको हो, सो जग्गाको नयाँ नापीमा देखिएको बाटो अन्य साँध सधियार सरकारी सार्वजनिक ऐलानी तथा व्यक्ति विशेषको जग्गामा जाने आउने बाटो होईन र निज निवेदककै जग्गा भित्रको आलीबाट हिडेको बाटोको डोब मात्र हो, उक्त बाटोको संकेत हटाई सो जग्गा निजको नाममा हा.सा. गरी ज.ध. पूर्जा दिंदा कसैलाई सन्धि समर्पण पर्ने अवस्था समेत छैन । निवेदकको हक भोगको जग्गाको श्री नापी शाखाबाट प्राप्त बिवरण अनुसार हा.सा. गरी नक्साको बीचमा देखिएको बाटोको संकेत हटाई निजकै नाममा कायम गरी श्रेष्ता अध्यावधिक गरी दिएमा पछि सम्म कुनै फरक पर्ने छैन भनी तत्कालीन का.जि.का.म.न.पा. वडा नं. ४ का वडा अध्यक्ष रत्न प्रसाद जोशी समेतले रोहवरमा बसि निजले सहिछाप समेत गरी लिखत किर्तेबाट व्यक्ति विशेषका नाममा ना.सा. दा.खा. दर्ता भई आए पश्चात रेखा घिमिरेले खरिद गरेको माथि उल्लेखित जग्गामा दोश्रो नापीको श्रेष्तामा समेत श्री ५ को सरकार समरजंग

कम्पनी उल्लेख भएको देख्दा देख्दै पनि उक्त सरकारी जग्गाको सुरक्षा समेत गर्नु पर्ने जन प्रतिनिधी/वडा अध्यक्षको दायित्व पुरा गर्नु पर्नेमा उक्त जग्गा सरकारको हो भन्ने कुरालाई के कसरी लेखिन गएको हो भनी फरक व्यहोरा र मतलब हुने गरी श्री ५ को सरकार समरजंग कम्पनीको नाम हटाई निवेदकको नाममा हा.सा. गरी ज.ध. पूर्जादिएमा फरक पर्ने छैन भनी मिति २०६०/११/३० गतेको सर्जमिन मुचुल्काको रोहबरमा बसि हस्ताक्षर समेत गरेको हुँदा उक्त लिखत किर्ते कसूरमा निज प्रतिवादीको संलग्नता रहेको प्रष्ट देखिन्छ।

प्रतिवादी रत्न प्रसाद जोशी का.म.न.पा. वडा नं. ४ को तत्कालीन वडाध्यक्ष रहेको समयमा जग्गा योजनाकार राम कुमार सुवेदीको बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हिनामिना हानी नोक्सानी हुने गरी का.म.पा. ४ नं. वडा कार्यालयको च.नं. १९८२, मिति २०५९/३/१२ को जोतभोग सम्बन्धी झुठो विवरण सहितको कीर्ते सिफारिस दिई सरकारी जग्गा हिमामिना गर्ने कार्यमा संलग्न भएको देखिन्छ।

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार– ४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **रत्न प्रसाद जोशी** समेत भई आ-आफ्नो जिम्मेवारीमा रही साविक नगर २३ क्ष को कि.नं. १५,२५,२८,४२,६३ को जग्गाहरु श्री ५ को सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलवस श्री ५ सरकार मात्र लेखिएको, गुठी दर्ता भई गुठी नै कायम हुनु पर्ने हो, उक्त जग्गाहरुमा निवेदकहरुबाट नै भोगचलन गरी रहेकाले निवेदनमा माग दावी गरे अनुसार नै जग्गा दर्ता नामसारी गरी दिएमा फरक पर्ने छैन'' भन्ने व्यहोराको सर्जमिन मुचुल्काको रोहवर खण्डमा बसी सहीछाप गरेको, मिति २०५९।०३।३२ मा गुठी संस्थान तहसिल कार्यालय कालमोचन काठमाडौंलाई सिफारिस गरी पठाएको पत्रमा ''कान्छा महर्जन लगायतका मोहीहरुको वा. राम कुमार सुवेदी मार्फत साविक कि.नं. २२ समेतका १२ थान कित्ता जग्गाहरु गुठीको लगतमा हाडिगाउ मौजाबाट भिड्ने गुठीको जग्गा निज मोहीहरुले साविक देखि नै जोत कमोद गर्दै आई रहेकोले उक्त जग्गा हामीले जोत कमोद गरेको जनाई सिफारिस पाउँ भनी निवेदन दिएकोमा निवेदकहरुले नै जोत कमोद गरी आएको बुझिएकोले उक्त जग्गा गुठीको हो होईन ? त्यस कार्यालयको नियमअनुसार छानबिन गरी आवश्यक कारवाही गरीदिनु हुन सिफारिस गरीन्छ'' भन्ने व्यहोराको सिफारिस पत्र, (२३ह कि नं १२,४०, १५, २४, २२, २५ २३क्ष ४८,७६,६८,६९,७३,७८) कुनै पनि सरकारी अभिलेखहरूमा टिकिन्छा गुठी भनी उल्लेख नभएको जग्गालाई जबरजस्ती टिकिन्छा गुठीको हो भनी

गलत व्यहोरा उल्लेख गरी खडा गरिएको सर्जमिन मुचुल्कामा रोहबर बसी प्रस्तुत कसूरमा संलग्न भएको, निवेदहरूले झुठो व्यहोरा उल्लेख गरी हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई टिकिन्छा गुठी र उक्त कित्ता जग्गाहरू नामसारी गरी जग्गाधनी पूर्जा पाऊँ भनी निवेदन दिएकोमा सोही गलत व्यहोराको निवेदनलाई आधार मानी ती जग्गाहरू निवेदकहरूले नै निरन्तर रूपमा जोत कमोद गरीरहेको भनी सर्जमिन समेत नगरी बेरितको तथा फरक व्यहोराको सिफारिस प्रदान गरी कीर्ते समेत गरी निज प्रतिवादी **रत्न प्रसाद जोशीले** बिगो **रु.४३,२२,६९,२६२।–** बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | १२,८१,२४,६४६।- | १,०८,७९,३१०/- | ४३,२२,६९,२६२।- |

**१३५) प्रतिवादी किशोरी राणाको हकमा:**

साविक का.जि. का.न.पा वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको जग्गा मध्ये साविक २ ३ क्ष र २३ ह को ७६ कित्ताको क्षे.फ. ११२-४-१-० रोपनी सरकारी जग्गा शैलजा राणा समेतको नाममा ना.सा.दा.खा. गरी दर्ता कायम गरे पश्चात शैलजा राणा समेतले कर्मचारीका आफन्तहरुलाई घुस बापत सोही फिर्ता भएको जग्गा मध्ये मिति २०५०/२/२९ गते साविक २३ ह कि.नं. ३६ को क्षेत्रफल१-०-२-० रोपनी जग्गा भुवन कुमारी चापागाई, मिति २०४९/०८/०१ गते साविक २३ ह कि.नं. २७ र २८ को क्षेत्रफल १-१०-२-० र २-८-०-० रोपनी जग्गा मिठु देबि चापागाई र ईन्द्र बहादुर थापा, मिति २०४९/१०/१९ गते साविक २३ ह कि.नं. ११ र १७ को क्षेत्रफल ०-११-२-० र ३-५-०-० रोपनी जग्गा भुवन कुमारी चापागाई र उर्मिला चापागाई तथा मिति २०४९/०८/०१ गते साविक २३ ह कि.नं. १८ को क्षेत्रफल १-१४-२-० रोपनी जग्गा खिमादेवी आङबुहाङ र मोहन प्रसाद भट्टराईको नाममा हालै देखिको वकसपत्रको किर्ते लिखत मार्फत जग्गा दिंदा सो हालै देखिको वकसपत्रको लिखतमा किशोरी राणाले जानी बुझी किर्ते कागजमा साक्षी बसी निज प्रतिवादी **किशोरी राणाले** बिगो **रु.८,९०,००,०००।–** बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | ८,९०,००,०००।- | - | - | - | ८,९०,००,०००।- |

**१३६) भूमिसुधार तथा व्यबस्थापन विभागका कर्मचारी प्रतिवादी उमानाथ प्रसाद शर्मा ज्ञावालीको हकमा:**

तत्कालिन श्री ५ को सरकारबाट रितपूर्वक मुआब्जा दिई अधिग्रहण गरिएको काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा संरक्षण गर्ने दायित्व भएका पदाधिकारी/कर्मचारीहरू समेतबाट मिति २०४७/०२/१४, मिति २०४७/०४/०८ र मिति २०४७/०५/०३ गतेको जफत जग्गा मात्र फिर्ता दिने मन्त्रिपरिषदको निर्णयको अपव्याख्या, दुरुपयोग र विपरित समेत हुने गरी बहाल रहेको कानूनको दुरुपयोग गरी बदनियतपूर्वक आफ्नो हक नपुग्ने अर्काको हकको चल-

अचल सम्पत्ति आफ्नो हो भनी श्री ५ को सरकार समरजंग कम्पनीलाई हानी हुने र अन्य व्यक्तिलाई फाईदा हुने गरी झूठ्ठा, फरक तथा किर्ते समेतको फरक व्यहोराका सरकारी कागजात तयार पारी तत्कालिन श्री ५ को सरकार समरजंग कम्पनीको संरक्षणमा रहेको ललिता निवास क्याम्प भित्रको ११२-४-१-० (एक सय बाह्र रोपनी चार आना एक पैसा ) रोपनी क्षेत्रफलको सरकारी जग्गा रुक्म शमशेर ज.ब.रा. समेतका राणाहरुको नाममा नामसारी दाखिला खारेज भए पश्चात राणाहरुले नै मोहीको लगत कट्टा गरी पाऊँ भनी दिएको मुद्दामा मिति २०५५।०१।०६ गते श्री भूमि सुधार कार्यालयका भूमि सुधार अधिकारी श्री उमानाथ प्रसाद ज्ञवालीले सरकारले जफत गर्नु भन्दा अगाडी देखि नै उल्लेखित जग्गामा मोही कायम रहेको हुँदा भूमि सम्बन्धी ऐन, २०२१ अनुसार किसान कायम भएको देखिने भनी मोहीको नाममा लगत कट्टा गर्न नमिल्ने ठहर फैसला गरी २७ जना मोही भनिएका ब्यक्तीहरुको निबेदन अनुसार मोहीयानी हकको प्रमाण पत्र दिने ठहर फैसला गरी निज प्रतिवादी उमानाथ प्रसाद शर्मा ज्ञावलीले विगो **रु.२९,३२,६५,३०६।–** बराबरको सरकारी जग्गा ब्यक्ती विशेषको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले गरेको उल्लेखित कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | २९,३२,६५,३०६।- | - | - | - | २९,३२,६५,३०६।- |

**१३७. भूमिसुधार तथा ब्यवस्था मन्त्रालयका कर्मचारी प्रतिवादी तेजराज पाण्डेको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त),बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **तेज बहादुर पाण्डे** समेत भई कारवाहीमा आएका कित्ता जग्गाहरुका सम्बन्धमा “मालपोत कार्यालय डिल्लीबजारको पत्रानुसार साविक नापीको कित्ता हा.सा.दर्ता वाँकी र हाल नापीमा श्री ५ को सरकार समरजंग कम्पनी र अन्य व्यक्तिको नाममा दर्ता भएको,, समरजंग कम्पनीबाट यस कार्यालयवाट भन्न नसकिने ताँहाको लगत हेरी गर्नु भन्ने भनाई, सुवर्ण शमशेरका हकदारको आफ्नो हरण भएको सम्पत्ती अञ्चलाधिश कार्यालयलाई जिम्मा दिएको कारण श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाधिश कार्यालयको नाम

नापीको समयमा मोहीहरुले लेखाएका हुन् भन्ने भनाई, गुठी संस्थानवाट माग भए अनुसार गुठी लगत भित्रका पुन: नापीमा समरजंग कम्पनीका नाउमा दर्ता हुन गएका र दर्ता वाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा विनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि मन्त्री परिषदमा पेश गर्नु पर्ने भनी आएको प्रस्तावलाई मिति २०६३।०९।२५ गते मा. मन्त्रीवाट निर्णय भई ऐ. २७ गते म.प.मा पेश भएको, जग्गा (नापजाँच) ऐन, २०१९ बमोजिम साविक वडा नं. २३ क्ष कि.नं. ७३,३१ ऐ. वडा नं. २३ह २२,३५ जनिई नाप नक्सा भई दर्ता प्रमाणित हुन बाँकी रहेका जग्गाहरु पुन: नापी हुँदा तत्कालीन समयमा जग्गाको रेखदेख गर्ने समरजंग कम्पनीको नाममा दर्ता भएको पुन: नापी बमोजिम का.जि. का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. २६२,२०७,२९५,२७८,२८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६ , ८० का जग्गाहरुको साबिक गुठीको लगतका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता सच्याई प्रचलित कानून बमोजिम पशुपति टिकिन्छा गुठीका नाममा दर्ता भई गुठी संस्थानलाई स्वीकृति दिनका निमित्त नेपाल सरकार मन्त्रीपरिषद् समक्ष छलफलको लागि पेश हुनु पर्ने देखिंदा सोही प्रस्तुत गरेको छु भनी मिति **२०६९/०४/०२** मा उ.स. हुपेन्द्र मणी के.सी.को टिप्पणी उपर **" पेश भए अनुसारको निर्णयको लागि नेपाल सरकार म.प.मा प्रस्ताव पेश गर्न मनासिव देख्दछु"** भनी मिति **२०६९।०४।०५** गते सचिव दिनेश हरि अधिकारी समक्ष टिप्पणी फायल पेश गरेको, हुपेन्द्रमणी के.सी. को टिप्पणीलाई सदर गर्दै हस्ताक्षर गरेको निज **तेजराज पाण्डे**ले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले **फरक व्यहोराको** टिप्पणी रायलाई समर्थन गरी पेश गरी **कीर्ते कार्यमा संलग्न रहेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको ,**टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको , **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुठ्ठा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **तेजराज पाण्डे**ले विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज **प्रतिवादीले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

१३८) **गुठी संस्थान प्रधान कार्यालय त्रिपुरेश्वर काठमाडौंका गुठी संस्थान केन्द्रीय कार्यालयका कर्मचारी प्रतिवादी हरिवोल आचार्यको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **हरिवोल आचार्य** समेत भई आ-आफ्नो जिम्मेवारीमा रही, वारेश राम कुमार सुवेदीले मिति २०५९।०७।०५ मा दिएको निवेदनहरुको सम्बन्धमा लगत बमोजिम गुठी कायम हुनु पर्ने हो होईन ? अन्य कुनै प्रमाण भए सम्बन्धित मोहीसँग बुझि यथार्थ विवरण तहसिल कार्यालयवाट आएपछि मात्र निर्णयमा पुग्नु पर्ने भन्ने देखिएको भनी मिति २०६१।०६।१९ गते गुठी केन्द्रीय कार्यालयमा टिप्पणी राय पेश गरेको, साविक २३ क्ष र ह कि.नं. ७३,२२ समेतका जग्गाहरु टिकिन्छा गुठीको साविक मलिकुलि खेत १० र असौगाल खेत ५ वाट भिडि दर्ता हुने भन्ने समेतको निवेदन परि कारबाही अगाडी बढाईएकोमा सो जग्गा हाल सम्म हाल साविक भिडी दर्ता भएको नदेखिएकोले सो गुठीको नाउमा दर्ता गराउनु पर्ने हुन्छ तर उल्लेखित जग्गा समरजंग कम्पनीमा दर्ता भई सकेकोले सो दर्ता कट्टा गरी गुठीको नाउमा दर्ता गराउन सम्बन्धित फाईल नै भु.सु. मन्त्रालयमा पठाउनु पर्ने देखिएको भनी समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको नाउमा दर्ता गराउन मिति २०६१।०७।११ टिप्पणी राय सहित फायल पेश गरेको, मिति २०५९।०५।२४ गते गु.सं. केन्द्रीय कार्यालयका. का.स.(खरिदार) वासुदेव पौडेलले उठान गरेको टिप्पणी उपर राय दिने क्रममा निवेदकहरुले माग दावी लिएको जग्गा साविक लगत नभिड्दैमा गुठीको होईन भन्न सक्ने अवस्था नरहेकोले उल्लेखित कि.नं. का जग्गाहरु हाल साविक भिडाई हाल कायम मोहीहरुको नाममा मोही कायम गरी नियमानुसार वाली लिई र नामसारी दा.खा. गर्ने कार्य शाखा कार्यालयकै क्षेत्राधिकार भएकोले त्यहीवाट गर्न भनी निर्देशन दिनुपर्ने देखि निर्णयार्थ पेश गरेको छु" भनी मिति २०५९।०६।१४ मा का.प्र. सेमन्तराज चापागाई समक्ष पेश गरेको, कारवाहीमा आएका कि.नं.२८, ४२, १५, ६३ र २५ का जग्गाहरुका सम्पूर्ण ब्यहोरा नापीसँग खुलाई पेश गर्नु र यस सम्बन्धमा कुनै कागज प्रमाण भए सो समेत राख्न लगाउने भनी मिति २०५९।०९।०५ मा राय टिप्पणी फायल अगाडि बढाएको, साविक कित्ता नं.१५,२५,२८,४२ र ६३ का जग्गा गुठी लगत तथा भद्रकालीको मिति २०४२।०१।१८ चं.नं. २४२२ पत्रानुसार

तोक आदेशले २०४२।०३।१६ मा दर्ता प्रमाणित भएकोले गुठी संस्थानले अन्यथा भन्ने नमिल्ने समेत र जग्गाधनी महलमा मोहीले पनि उक्त जग्गा गुठी कै हो भनेकोले साबिक २८ र ४२ लाई नयां नापी कि.नं. ७२,७३,९१,१८ र साविक कि.नं. १५,६३,२५ हाल कि.नं. ७६, ७८, ७४ र ४७ कायम भएकोमा कि.नं. ७८ लाई गुठी तैनाथी कायम गरी वाँकि कित्ताको सम्बन्धमा लगत भिडाई गुठीको नाममा दर्ता गरी कुत समेत असुल गर्न भनी तहसिल शाखालाई आदेश हुनु पर्ने भनी मिति २०५९।१०।१३ मा निर्णयार्थ का.प्र. सेमन्तराज चापागाई समक्ष पेश गरेको, गुठी तहसिल कार्यालयको २०४२।०१।१८ को पत्रानुसार श्री ५ को सरकार गुठीमा गएको र गुठीको नाम एकिन हुन नसकि अज्ञानतावस श्री ५ गुठी, श्री ३ गुठी, श्री ५ को सरकार गुठी उल्लेख भएको , मोहीसँग भएको प्रमाणवाट समेत कुन गुठी हो भनी एकिन नभएमा गुठी संस्थानको नाममा लगत कायम गरी वक्यौता असुल गर्ने भन्ने २०५२।०५।३० को स.सं.को निर्णय भएको, उक्त ठाउमा सुवर्ण शमशेरको समेत जग्गा भई श्री ५ को सरकारले अधिग्रहण गरी समरजंग कम्पनीलाई रेखदेख गर्न दिएकोले निजको हकवाला तथा सन्तानसँग समेत यथार्थ जानकारी लिई निर्णयमा पुग्नु पर्ने भनी मिति २०६०।०७।२४ मा राय दिई टिप्पणी फायल पेश गरेको, मिति २०६०।०८।२९ गते साविक कि.नं. १५,२५,२८, ४२ र ६३ का जग्गा सम्बन्धमा बिभिन्न विवरण उल्लेख गर्दै गुठीमा लगत भिडाउने तर्फ पनि कारवाही गर्न तहसिल शाखामा आदेश हुनु अगावै कानून शाखाको पनि परामर्श लिई कारवाही टुङगोमा पुग्न उपयुक्त हुने भनी राय लेखी फायल पेश गरेको, साविक कित्ता नं. २८, ४२ (हाल कि.नं. ७२,७३, १८, ९१) तथा साविक कित्ता नं. १५, ६३, २५ (हाल ७६, ७८, ७४, ४७, ३४) कायम भएकोमा त्यस मध्ये कि.नं. ४७, ७६, आयोगको आदेशले रोक्का भनिएको जग्गा हाल यथावत राखी पछी नियमानुसार गर्ने र वाँकी कि.नं. ३४, ७८ को घुस्न गएको भनिएकोले पछी नियमानुसार कित्ता काट गर्ने र गुठीको नाममा कायम गर्न २०६०।१२।२७ मा निर्णय गरी कार्यान्वयनको लागी शाखा कार्यालयमा लेखी पठाउदा उक्त सम्पूर्ण जग्गा समरजंग कम्पनीको नाउमा दर्ता प्रमाणित भई सकेकोले दुविधा पर्यो भनी लेखि आएको हुँदा उल्लेखित जग्गा गुठी कायम गर्न संलग्न फायल समेत भु.सु. मन्त्रालयमा पठाउनु पर्ने भनी मिति २०६१।०६।१८ मा राय सहित फायल पेश गरेको, च.नं. २२२ बाट गुठीको नाममा दर्ता प्रमाणित नभएको जग्गालाई गुठीको नाममा दर्ता प्रमाणित भएको रहेछ भनी उल्लेख गरेको, राम कुमार सुवेदीको कागज र राणाहरूको कीर्ते मन्जुरी कागजलाई सदर गर्दै अगाडि बढाएको, समरजंग कम्पनी एउटा सरकारी संस्था भएको अवस्थामा त्यसको प्रमुखले गैर जिम्मेवार पूर्ण रूपमा मौन बसेको आधारमा श्रेस्तामा जग्गाधनी भनी प्रमाणित रहेका समरजंग कम्पनीलाई जग्गाधनी नै होईन भनी टिप्पणी उठाएको, आफ्नो स्वार्थ जोडिएका निवेदक मोहीहरूले आफू मोही भएको गुठीको जग्गा हो भनेको भरमा "निवेदकहरुले माग दावी लिएको जग्गा साविक लगत नभिड्दैमा गुठीको होईन भन्न सक्ने अवस्था नरहेकोले उल्लेखित कि.नं. का जग्गाहरु हाल साविक भिडाई हाल कायम मोहीहरुको नाममा मोही कायम गरी नियमानुसार वाली लिई र नामसारी दा.खा. गर्ने कार्य शाखा कार्यालयकै क्षेत्राधिकार भएकोले त्यहाँवाटै गर्न भनी निर्देशन दिनुपर्ने देखि निर्णयार्थ पेश गरेको छु" भन्ने जस्तो टिप्पणी उठाई राय पेश गरेको, कित्ता नं १५, २५, २८, ४२, ६३ मध्ये कित्ता नं २८ श्रेस्तामा गुठी नजनिएको अवस्थामा केहि कैफियत नगरी सदर गर्दै टिप्पणी उठाएको, २०५८।१।१४ को सुरू निवेदनमा श्री ५ को सरकारको गुठीको नाममा दर्ता भएको जग्गाहरू भनी दावी लिइएको र त्यसैलाई गुठीको जग्गा हो भनी पुष्टि गर्न राणाहरुले गरेको कीर्ते मन्जुरी कागजको आधारमा उठेको प्रकृयामा गुठी भनी कहिल्यै नजनिएका जग्गाहरू समेत संलग्न गरी जग्गा दर्ता प्रकृया अगाडि बढाएको,२०५२।०५।३० को गुठी संस्थान संचालक समितिको निर्णयको सम्बन्धमा उक्त निर्णयमा श्री ५ को

सरकार गुठी, कालमोचन गुठी, श्री ५ को गुठी जस्ता राज गुठी जनिने विषयलाई समेटेकोमा कहिल्यै गुठी जनिदै नजनिएका जग्गालाई समेत गुठीको नाममा दर्ता गर्ने प्रकृया अगाडि बढाएको,कारवाहीका आएका जग्गा गुठीको हो वा होईन भन्ने सम्बन्धमा सम्बन्धित कार्यालयका अभिलेख र अन्य व्यक्तिसँग बुझ्नु पर्नेमा गलत मागदावी गर्ने निवेदकसँग नै बुझ्नु पर्ने भनी राय दिएको,च.नं. २२२ मिति २०६१।०८।०९ बाट गुठीको नाममा दर्ता प्रमाणित नभएको जग्गालाई गुठीको नाममा दर्ता प्रमाणित भएको रहेछ भनी उल्लेख गरेको ,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई गलत नियतले गुठीमा दर्ताको लागि माथिल्लो कार्यालयमा पठाउनु नै गैर कानूनी हुने कार्यलाई श्री ५ को सरकारको निर्णय भएमा गुठीमा दर्ता गर्न सकिने भन्ने **आशयको फरक व्यहोराको** राय सहितको टिप्पणी पेश गरी **कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, गलत तथ्य कागजहरुलाई आधार मानी (फि.वु.को किसानको व्यहोरामा अञ्चल आदेश मार्फत सरकारलाई अधिया तिरेको, निवेदक सँग बुझ्दा अज्ञानतावस श्री ५ को सरकार समरजंग कम्पनी लेखिन गएको, समरजंग सँग बुझ्दा मिति २०५९।०४।१० को च.नं.५ पत्रबाट गुठीको हो होईन एकिन गर्न नसकिने भन्ने व्यहोरा प्राप्त भएको, स्थलगत सर्जमिन गर्दा सम्बन्धित वडाले गुठीको हो भनी सिफारिस गरेको, जग्गाधनी महलमा मोहीले पनि उक्त जग्गा गुठी कै हो फि.वु.को घर जग्गा महलमा उल्लेखित व्यक्ति वा संस्थाले पनि आफ्नो जग्गा होईन भनेको (कागजात भिडाई एकिन गर्नु पर्ने), टिप्पणी उठाएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। मिति २०६१।०७।०२ मा तहसिल शाखाको **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुठ्ठा तथा बेरितको टिप्पणी तयार गर्ने, समर्थन गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **हरिवोल आचार्यले विगो रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१३९) प्रतिवादी बलिराम प्रसाद साह तेलीको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार -४ हा.नं. ४५६(का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **बलिराम प्रसाद शाह तेली** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही, साविक कि.नं. ७३, २२, ३१,३५ का जग्गाहरुको हाल नापीवाट सिट नं.१०२५-१४ (४८), १०२५-१५ को (५६,२७८,२८४, २६२,२६७,२९५), १०२५-२० (८०) कायम भएको जग्गा सम्बन्धमा मिति २०६९।०९।२२ मा म.प.को निर्णय बमोजिम उक्त जग्गा पशुपति टिकिन्छा गुठी कायम गर्न तुल्सी पोखरेलले पेश गरेको टिप्पणी उपर राय दिने क्रममा मुख्य कानून अधिकृत हेमराज सुवेदीले "स्वीकृति माग गरेका अन्य जग्गा प्रधान मन्त्री निवासको परिसर बिस्तार तथा ८ मिटर बाटो निर्माण गर्ने भन्ने निर्णय भएको भन्ने भूमि सुधार तथा ब्यबस्था मन्त्रालयको पत्रबाट देखिदा सो को जग्गा नै सट्टा भर्ना दिन वा कानून बमोजिम हुने मुआब्जा नेपाल सरकारसँग माग गर्ने (ऐनको दफा समेत उल्लेख गरी) समेत निकासाका लागि पेश गरेको" भनी राय दिई मिति २०६९।१०।०२ गते पेश गरेकोमा निज वलिराम प्रसाद साह तेलीले "उपरोक्त अनुसार गुठी कायम गर्न पर्चा खडा गर्ने समेत गरी सदर" भनी मिति २०६९।१०।०४ मा निर्णय गरेको, मुख्य कानूनी अधिकृत हेमराज सुवेदीको टिप्पणी रायको सम्बन्धमा मन्त्रिपरिषदबाट कुनै निर्णय नै नभएको र सो कुरा निर्णय गर्नु पर्ने विषय नै नभएको अवस्थामा समेत सोही अनुसार पर्चा खडा गर्ने गरी सदर भनी निर्णय गरेको (म.प. को निर्णय भन्दा फरक विषय र प्रशंग टिप्पणी सदर गरेको) वलीराम प्रसाद साह तेलीले मन्त्रिपरिषदबाट निर्णय भएका जग्गाको सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयले नै छुट जग्गा अन्तर्गत दर्ता गर्ने धारणा व्यक्त भई सोही बमोजिम हुन निर्णय भएकोमा छुट जग्गाहरूलाई छुट जग्गा दर्ता समितिले दर्ता गर्ने कानूनी प्रावधान भएको अवस्थामा (गुठी छुट जग्गाको सम्बन्धमा के हुने राय लिई एकिन हुनु पर्ने) समेत गुठी कायम गर्न पर्चा खडा गर्ने समेत गरी सदर गरेको, (दफा ३९ बमोजिम दर्ता नहुने भनी मालपोत कार्यालयले लेखेको पत्रको सम्बन्धमा गु सं शा का, गु, सं के का हुदै मन्त्रालयमा पेश भई मन्त्रालयको टिप्पणी समेतमा उल्लेख भई निर्णयको लागि नेपाल सरकार समक्ष पेश भएकोले यो निर्णय कानून बमोजिम नरहेको), यी जग्गा गुठी प्रशासकले निर्णय पर्चा खडा गर्ने प्रकृतिको नभई छुट जग्गा दर्ता अन्तर्गत दर्ता गर्नु पर्ने जग्गा रहेको गुठी संस्थान केन्द्रीय कार्यालयले धारणा व्यक्त गरेको अवस्था त्यस सम्बन्धी कानूनी बिषय स्पष्ट नगरी निर्णय पर्चा खडा गरेको, राणाहरूको कागज, सर्जमिन मुचुल्का वडाको सिफारिस, समरजंग कम्पनीको पत्रलाई लिईएको आधार समेतका तथ्यहरूबाट निवेदकको नाममा दर्ता हुन

नहुने जग्गा देखिएको (हेर्नुहोस् छानविन प्रतिवेदन पृष्ठ २६२), सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई ,लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले टिप्पणी सदर **गरी कीर्ते गरी**, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको टिप्पणी सदर गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **बलिराम प्रसाद शाह तेलीले विगो रू. १,०८,७९,३१०/-** वरावरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१४०) <u>प्रतिवादी दिनेश प्रसाद शर्माको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार- ४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **दिनेश प्रसाद शर्मा** समेत भई साविक कि.नं. ७३, २२, ३१, ३५ र २१३ खारेज गरी नयाँ कि.नं. ४८,२६७ ,२६२,२९५,२५९, २७८,२८४,२३२ ५६, ८० र १७१ का जग्गाहरु ज.ध.मा पशुपति टिकिन्छा गुठी कायम गर्ने भनी साविक दर्ता वाँकी श्रेस्ता खारेज गरी म.प.को निर्णय कार्यान्वयन हुन मनासिव देखि निर्णयार्थ पेश गरेको टिप्पणी माथि बद्री कार्कीले उक्त जग्गाको जोताहा सम्बन्धमा भूमि सुधार कार्यालयबाट ०७०।०१।०३ को निर्णयले छोरा देवनारायण महर्जनको नाममा मोही नामसारी हुने निर्णय प्राप्त भएको जनाउ पत्र प्राप्त नभएको हुँदा सोही ब्यहोरा श्रेस्तामा कैफियत जनाउनका साथै पूर्जा र प्राप्त सक्कल मिसिल समेत गुठीमा फिर्ता पठाउन मनासिव देखि पेश गरेकोमा मिति २०७०।०१।१२ मा लक्ष्मी नारायण उप्रेतीले राय सहित फायल पेश गरेकोमा “पेश भए बमोजिम रोक्का फुकुवा गरी साबिकको दर्ता प्रमाणित र अप्रमाणित श्रेस्ता समेत खारेजी गरी नेपाल

सरकार मन्त्री परिषदको निर्णयको आधारमा नेपाल सरकारको दर्ता समेत सच्याई उपरोक्त एघार कित्ता जग्गाहरु टिकिन्छा गुठीको नाममा दर्ता कायम गरी मोहीका नाम समेत सम्बन्धित कित्ता जग्गाको महलमा माथि टिप्पणीमा उल्लेख भए बमोजिम कायम गरी गुठीको कार्यालयमा निर्णयको जानकारी समेत दिई सक्कल फायल फिर्ता पठाई दिनु" भनी मिति २०७०।०१।१२ मा का.प्र.को हैसियतले टिप्पणी सदर गरेको निज दिनेश प्रसाद शर्माले साविकमा गुठीमा कायम नै नभएको जग्गाको सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयबाट गुठी संस्थान ऐन २०३३ को दफा ३९ बमोजिम निर्णय गर्न नसक्ने अवस्थामा जग्गा दर्ता सम्बन्धी प्रमाण बुझेर जग्गा दर्ता सम्बन्धी कारबाही गर्ने दायित्व भएको मालपोत कार्यालयले गुठीमा जग्गा दर्ता गर्ने सम्बन्धी गुठी संस्थान केन्द्रीय कार्यालयले खडा गरेको निर्णय पर्चाको आधारमा पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले **फरक व्यहोराको** राय टिप्पणी सदर गरी **कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको । **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको, **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गरेको, मन्त्रीपरिषदले निर्णय गरेको भन्दा कि.नं. २५९,२८४,२३२ (तीन कित्ता) बढी कित्ता जग्गा टिकिन्छा गुठीको नाममा दर्ता गर्न सुरू टिप्पणी लाई सदर गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **दिनेश प्रसाद शर्माले विगो रु. १,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१४१) <u>प्रतिवादी जय प्रसाद रेग्मीको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा

गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **जय प्रसाद रेग्मी** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही, उल्लेखित कि.नं. का (२३ क्ष का १५, २५,२८, ४२,६३) जग्गाहरु सम्वन्धमा उपरोक्तानुसार काम कारवाही भएको हुँदा सो कि.नं. का जग्गाहरुको सम्बन्धमा केन्द्रीय कार्यालयवाट नै आवश्यक निर्देशन भई आउनको लागि कारवाही फायलहरु साथै राखी गु.सं. केन्द्रीय कार्यालयमा पेश गरेको भन्ने राय व्यक्त गरी सोही टिप्पणी मिति २०६०।०७।१९ गते सदर गरेको, मिति २०६०।०८।०२ गते डवल सिंह ठगुन्ना र रामेश्वर बिडारीले पेश गरेको (२३ क्ष का ४८, ६८, ६९, ७३, ७६, ७८ र २३ह का १२, १५, २२, २४,२५,२६,४०) टिप्पणीका सम्बन्धमा गो.प.मा ३५ दिने सार्वजनिक सूचना प्रकाशित गर्न वाँकि नै रहेको देखिंदा उक्त सूचना प्रकाशित गरी कहिकतैवाट दावी बिरोध नभएको र मोहीहरुले यो गुठीको यो खलाको यति नं. भिडि आधारभूत प्रमाणहरु पेश गरी समरजंग कम्पनीको नभई गुठीको जग्गा हो भन्ने कुरा पुष्टि हुने आधार प्रमाण पेश भएको आधारमा छानबिन गरी एकिन कारवाही हुने नै हुँदा केन्द्रीय कार्यालयको आदेश अनुसार भएको भन्ने लगायतको व्यहोरा उल्लेख गरी मिति २०६०।०८।०३ मा टिप्पणी सदर गरी केन्द्रीय कार्यालयमा पठाएको, मिति २०६१।०५।०७ मा पेश भएका टिप्पणी सम्बन्धमा बिबिध कुराहरु उल्लेख गर्दै कारवाहीका क्रममा आएका कित्ता जग्गाहरु श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित श्रेस्ता समेत रहेको अवस्थामा श्री ५ को सरकारको सहमति लिई मात्र आवश्यक कारबाही हुनु पर्ने भन्ने व्यहोरा उल्लेख गरी मिति २०६१।०५।०७ गते टिप्पणी फायल गु.सं. केन्द्रीय कार्यालयमा पेश गरेको, मिति २०६१।०६। २६ मा श्री ५ को सरकारको नाममा रहेको लगत कट्टा गरी गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकारबाट निर्णय भई आउनु पर्ने देखिंदा सोही पेश गर्दछु भनी राम कुमार घिमिरेले पेश टिप्पणीलाई समर्थन जनाई उक्त टिप्पणी फायल मिति २०६१।०६।२६ मा गु.सं.केन्द्रीय कार्यालय मा पेश गरेको, निज जय प्रसाद रेग्मीले गुठीको जग्गा होईन भन्ने विभिन्न प्रमाणहरुले पुष्टि भई रहेको अवस्था तथा आफैंले समेत विभिन्न समयमा ती जग्गा गुठीमा दर्ता गर्न नमिल्ने भनी टिप्पणी उठाई विभिन्न आधार प्रमाण सहित गुठी संस्थान केन्द्रीय कार्यालयमा पत्राचार समेत गरीसकेको अवस्थामा मिति २०६१।०६।२६ मा टिकिन्छा गुठीको नाममा दर्ता गर्न श्री ५ को सरकारको स्वीकृतको लागि पठाउनु पर्ने भनी गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको देखिएको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई गलत नियतले गुठीमा दर्ताक लागि माथिल्लो कार्यालयमा पठाउनु नै गैर कानूनी हुने कार्यलाई श्री ५ को सरकारको निर्णय भएमा गुठीमा दर्ता गर्न सकिने भन्ने आशयको फरक

व्यहोराको टिप्पणी सदर **गरी कीर्ते गरेको,** गुठी संस्थानको २०४२।०१।१८ को तोक निर्णय अनुसार मालपोत कार्यालयले मिति २०४२।०३।१६ मा निर्णय गर्दा समेत कारवाहीमा आएका २१ कित्ता मध्ये चार कित्ता जग्गा (२३क्ष को १५,२५,४२,६३) मात्र रहेको अवस्थामा सबै कित्ताको लागि एउटै व्यहोरा टिप्पणी फाईल सदर गरी श्री ५ को सरकारबाट निर्णय भएमा गुठीको नाममा जग्गा दर्ता हुन सक्ने भनी फाईल निर्णयको लागि पेश गरेको, उक्त जग्गाहरु गुठीको होईन भन्ने तथ्यगत प्रमाणहरु हुँदा हुदै पनि सरकारको निर्णय भएमा गुठी कायम गर्न सकिन्छ भन्ने गलत राय लेखि पेश गरेको, **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गरी राय दिनु पर्ने**मा निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको, गुठीका जग्गा **छानबिन गर्ने समित गठन गरी एकिन गरेर कारवाही प्रकृया अगाडि बढाउनु पर्नेमा सो नगरी** उक्त जग्गाहरु गुठीको होईन भन्ने तथ्यगत प्रमाणहरु हुँदा हुदै पनि सरकारको निर्णय भएमा गुठी कायम गर्न सकिन्छ भन्ने गलत राय लेखि गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरी, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको मुचल्कामा बस्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **जय प्रसाद रेग्मीले बिगो रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१४२) प्रतिवादी लक्ष्मी नारायण उप्रेतीको हकमा :**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त.),बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत

बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **लक्ष्मी नारायण उप्रेती** समेत भई साविक कि.नं. ७३, २२, ३१, ३५ र २१३ खारेज गरी नयाँ कि.नं.४८, २६७, २६२, २९५, २५९, २७८, २८४, २३२, ५६, ८० र १७१ का जग्गाहरु ज.ध.मा पशुपति टिकिन्छा गुठी कायम गर्ने भनी साविक दर्ता वाँकी श्रेस्ता खारेज गरी म.प.को निर्णय कार्यान्वयन हुन मनासिव देखि निर्णयार्थ पेश गरेको टिप्पणी माथि बद्री कार्कीले उक्त जग्गाको जोताहा सम्बन्धमा भूमि सुधार कार्यालयबाट ०७०।०१।०३ को निर्णयले छोरा देवनारायण महर्जनको नाममा मोही नामसारी हुने निर्णय प्राप्त भएको जनाउ पत्र प्राप्त नभएको हुँदा सोही ब्यहोरा श्रेस्तामा कैफियत जनाउनका साथै पूर्जा र प्राप्त सक्कल मिसिल समेत गुठीमा फिर्ता पठाउन मनासिव देखि पेश गरेकोमा “ पेश भएको विवरण कार्यान्वयन हुन मनासिव देखिएकोले निर्णयार्थ पेश गरेको छु” भनी मिति २०७०।०१।१२ मा राय सहित टिप्पणी फायल अगाडि बढाएको निज लक्ष्मी नारायण उप्रेतीले साविकमा गुठीमा कायम नै नभएको जग्गाको सम्बन्धमा गुठी संस्थान केन्द्रीय कार्यालयबाट गुठी संस्थान ऐन २०३३ को दफा ३९ बमोजिम निर्णय गर्न नसक्ने अवस्थामा जग्गा दर्ता सम्बन्धी प्रमाण बुझेर जग्गा दर्ता सम्बन्धी कारबाही गर्ने दायित्व भएको मालपोत कार्यालयले गुठीमा जग्गा दर्ता गर्ने सम्बन्धी गुठी संस्थान केन्द्रीय कार्यालयले खडा गरेको निर्णय पर्चाको आधारमा पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गरेको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले **फरक व्यहोराको** टिप्पणी पेश गरी **कीर्ते गरेको**, **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको ,**हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणी फायल अगाडि बढाउने कार्य गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **लक्ष्मी नारायण उप्रेतीले विगो रु.**१,०८,७९,३१०/- बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१४३) प्रतिवादी अंगुर कुमार सिग्देलको हकमा :**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.) ,बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **अंगुर कुमार सिग्देल** समेत भई सरोकारवाला वारेस राममणी सिग्देलको माग बमोजिम अ.ब. २११ नं. बमोजिम पानाको रु तिनका दरले हुने रु ६(छ) को टिकट रद्द गरी यो नक्कल दिईएको छ भनी मिति २०७०।०१।०८ मा निर्णय गरी दस्तखत गरेको ,सुवर्ण शमशेर ज.ब.रा. को नाममा दर्ता भई नेपाल सरकारको नाममा दर्ता भएको साविक नगर २३(ह) कि..नं. ३१ को क्षेत्रफल १-३-०० जग्गा हाल गुठी संस्थानको निर्णय बमोजिम पशुपतीनाथ टिकिन्छा गुठीको नाममा दर्ता हुने नया नापी बमोजिम नगर ४ सि.नं. १०२-१०२५-१५ कि.नं. २७८, २८४, २३२ र ३१४ को क्षे.फ. १-११-२-२, ०-२-३-०, ०-१-१-० र ०-२-१-२ जग्गाको मोही स्व पिता वोध सुकु महर्जन, जोगमान भन्ने न्हुछे बहादुर महर्जन,भएको उक्त जग्गा निज मोहीको मृत्यु पश्चात द्वारीकामान महर्जनको नाममा नाम सारी गर्ने निर्णयमा मिति २०७०।५।०५मा दस्तखत गरेको, व्यहोरा फरक पारी बढी कित्ता जग्गाहरूमा तथा बाटोको जग्गामा समेत मोही कायम गर्ने निर्णय गरेको, **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको पर्चा तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **पर्चा तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको । **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** पर्चा खडा गरी, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** म.प.को निर्णय भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पर्चा खडा गरी गलत निर्णयलाई पनि समर्थन गरेको ,नेपाल सरकार

समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **अंगुर कुमार सिग्देल** समेत भई नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी अंगुर कुमार सिग्देल भूमि सुधार कार्यालय काठमाडौंको नायब सुब्बा पदमा कार्यरत रहेको अवस्थामा सरकारी जग्गा हडप्ने उदेश्यले सरकारी जग्गामा मोही भएको भनी भूमी सुधार कार्यालयको च.नं. ५१४०, मिति २०६६/१०/१५ को फरक व्यहोराको पत्र तयार गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्था बिशेषको नाममा दर्ता कायम गराईव्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्र तयार गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्र तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र पत्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा पत्र तयार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट विगो **रु.११,५९,९२,२१३।–** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | १,०८,७९,३१०/- | ११,५९,९२,२१३।- |

**१४४) <u>प्रतिवादी नारायण गोपाल मलेगोको हकमा :</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.),बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने

उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **नारायण गोपाल मलेगो** समेत भई कारवाहीमा आएका कित्ता जग्गाका सम्बन्धमा केन्द्रीय कार्यालयबाट श्री ५ को सरकार समरजंग कम्पनीको नामको दर्ता कट्टा गरी गुठीको नाममा दर्ता स्वीकृतिको लागि लेखि आएकोमा नेपाल सरकार म.प.को स्वीकृती आवश्यक पर्ने र पुन: नापी हुँदा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको गुठी लगत भित्रको जग्गाको नेपाल सरकार समरजंग कम्पनीको नाम कट्टा गरी सम्बन्धित गुठीको नाममा दर्ता गर्ने गुठी संस्थानलाई स्वीकृति दिने गरी नेपाल सरकार म.प.मा पेश हुनु पर्ने भनी पेश गरेको फायल उपर यसमा माथि पेश भए अनुसार पुन: नापीमा समरजंग कम्पनीको नाममा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा बिनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि म.प. प्रस्ताव पेश गर्नु पर्ने देख्दछु भनी मिति २०६३।०९।२१ मा उ.स. ईन्द्र प्रसाद ढुङगानाले टिप्पणी सहित फायल अगाडि बढाएकोमा थप टिप्पणी नगरी सोही टिप्पणीलाई समर्थन गर्दै मिति २०६३।०९।२४ मा फायल अगाडि बढाएको , ईन्द्र प्रसाद ढुगानाको टिप्पणीमा समर्थन गरी हस्ताक्षर गरेको निज नारायण गोपाल मलेगोले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराको टिप्पणी रायलाई समर्थन गरी पेश गरी कीर्ते कार्यमा संलग्न रहेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको, **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गर्दै फायल अगाडि बढाउने कार्य गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **नारायण गोपाल मलेगो** समेतले नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी **नारायण गोपाल मलेगोले** भौतिक योजना तथा निर्माण मन्त्रालयको सह सचिब पदमा कार्यरत रहेको अवस्थामा विशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गर्ने क्रममा पुर्व निर्धारित र पुर्व निर्देशित (Pre-occupied mind) तवरले सरकारी जग्गामा मोही कायम गर्ने परिपञ्च र योजना मुताबिक नै नेपाल

सरकार समरजंग कम्पनीको नाममा कायम रहेको सरकारी तथा सार्वजनिक जग्गा राजकुलो बाटोमा समेत मोही कायम हुने गरी मोही र जग्गा सम्बन्धि विषय हेर्ने जिम्मेवारी रहेको भूमी सुधार मन्त्रालयको क्षेत्राधिकार भित्र प्रवेश गरी भौतिक योजना तथा निर्माण मन्त्रालयको तर्फबाट मन्त्रिपरिषदमा निर्णायार्थ प्रस्ताव लैजाने गरी किर्ते कागजात, झुठो विवरण र फरक व्यहोराका आधारमा तयार पारी पेश हुन आएको टिप्पणीलाई मिति २०६६/१२/१९ गते स्वीकृत गरी अगाडी बढेको फरक व्यहोराको कीर्ते कागजातबाट शुरु भएको भौतिक योजना तथा निर्माण मन्त्रालयको मिति २०६६/१२/१९ गतेको प्रस्तावमा नेपाल सरकार मन्त्रिपरिषदबाट निर्णय भई कार्यान्वयनको चरणमा रहेका जग्गाको सम्वन्धमा अनुसूची १, २ र ३ मा मानवीय गल्तीले गर्दा केही जग्गाधनीको नाम र प्राप्त क्षेत्रफल फरक परेको, मोही नभएको जग्गामा मोहीको नाम उल्लेख भएको र केही कित्ता छुट भएको देखिएकाले उक्त भुलसुधार आवश्यक निर्णयार्थ पेश गरेको छु भन्ने ब्यहोराको टिप्पणीलाई **ऐन नियम परामर्श शाखाको राय बमोजिम हुन निर्णायार्थ पेश गरेको छु  भनी** अनुसूची हेरफेर गरी संशोधन गर्ने टिप्पणी फायलमा राय सहित **मिति २०६७।०३।१८ गते** सचिब  समक्ष पेश गर्दा पुर्व प्रस्ताव साथ संलग्न अनुसुची तयार पार्दा लिईएका आधारहरु समेतको अध्ययन नगरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले मोही र जग्गा सम्बन्धी विषय हेर्ने जिम्मेवारी रहेको भूमी सुधार मन्त्रालयको क्षेत्राधिकार भित्र प्रवेश गरी फरक व्यहोराको टिप्पणीमा राय सहित पेश गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी  मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणीमा राय दिई पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते  प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी  जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा उठान भएको टिप्पणी लाई राय साथ पेश गरेको, सोही टिप्पणीबाट उठेको प्रस्ताब सदर भई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरेको,  व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा तथा मोही भनिएका ब्यक्तिहरुको नाममा कायम गराएको यसरी गलत तथ्य प्रयोग गरी किर्ते ब्यहोराको टिप्पणी पेश गरी निज प्रतिवादी **नारायण गोपाल मलेगो**ले **विगो रु.११,५९,९२,२१३।-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | १,०८,७९,३१०/- | ११,५९,९२,२१३।- |

**१४५) <u>प्रतिवादी रविन्द्रमान जोशीको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि.बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी

शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **रविन्द्रमान जोशी** समेत भई कारवाहीमा आएका कित्ता जग्गाका सम्बन्धमा केन्द्रीय कार्यालयबाट श्री ५ को सरकार समरजंग कम्पनीको नामको दर्ता कट्टा गरी गुठीको नाममा दर्ता स्वीकृतिको लागि लेखि आएकोमा नेपाल सरकार म.प.को स्वीकृती आवश्यक पर्ने र पुन: नापी हुँदा नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता भएको गुठी लगत भित्रको जग्गाको नेपाल सरकार समरजंग कम्पनीको नाम कट्टा गरी सम्बन्धित गुठीको नाममा दर्ता गर्ने गुठी संस्थानलाई स्वीकृति दिने गरी नेपाल सरकार म.प.मा पेश हुनु पर्ने भनी पेश गरेको फायल उपर यसमा माथि पेश भए अनुसार पुन: नापीमा समरजंग कम्पनीको नाममा दर्ता हुन गएका र दर्ता बाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा बिनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि म.प. प्रस्ताव पेश गर्नु पर्ने देख्दछु भनी मिति २०६३।०९।२१ मा उ.स. ईन्द्र प्रसाद ढुङगानाले टिप्पणी सहित फायल अगाडि बढाएकोमा थप टिप्पणी नगरी सोही टिप्पणीलाई समर्थन गर्दै मिति २०६३।०९।२४ मा नारायणगोपाल मलेगोले पेश गरेको फायललाई समर्थन जनाउदै थप टिप्पणी समेत नगरी मिति २०६३।०९।२५ मा मन्त्री ज्यू समक्ष पेश गरेको ईन्द्र प्रसाद ढुगानाको टिप्पणीमा समर्थन गरी हस्ताक्षर गरेको निज रबिन्द्र मान जोशीले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराको टिप्पणी रायलाई समर्थन गरी पेश गरी कीर्ते कार्यमा संलग्न रहेको ,सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको। **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** निर्णय आदेश गरेको, **हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले** पेश भएको टिप्पणीलाई समर्थन गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा

तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **रबिन्द्रमान जोशीले विगो रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

१४६) **प्रतिवादी दिनेश हरी अधिकारीको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि.बालुवाटार-४ हा.नं. ४५६ (का.फौ.त.),बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र,पहिलो नापीमा फिल्ड बुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **दिनेश हरि अधिकारी** समेत भई कारवाहीमा आएका कित्ता जग्गाहरुका सम्बन्धमा "मालपोत कार्यालय डिल्ली बजारको पत्रानुसार साविक नापीको कित्ता हा.सा.दर्ता वाँकी र हाल नापीमा श्री ५ को सरकार समरजंग कम्पनी र अन्य व्यक्तिको नाममा दर्ता भएको, समरजंग कम्पनीबाट यस कार्यालयवाट भन्न नसकिने ताँहाको लगत हेरी गर्नु भन्ने भनाई,सुवर्ण शमशेरका हकदारको आफ्नो हरण भएको सम्पत्ती अञ्चलाधिश कार्यालयलाई जिम्मा दिएको कारण श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाधिश कार्यालयको नाम नापीको समयमा मोहीहरुले लेखाएका हुन् भन्ने भनाई, गुठी संस्थानवाट माग भए अनुसार गुठी लगत भित्रका पुन: नापीमा समरजंग कम्पनीका नाउमा दर्ता हुन गएका र दर्ता वाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा विनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि मन्त्री परिषदमा पेश गर्नु पर्ने भनी आएको प्रस्तावलाई मिति २०६३।०९।२५ गते मा. मन्त्रीवाट निर्णय भई ऐ. २७ गते म.प.मा पेश भएको, जग्गा (नापजाँच) ऐन, २०१९ बमोजिम साविक वडा नं. २३ क्ष कि.नं. ७३,३१ ऐ. वडा नं. २३ह २२,३५ जनिई नाप नक्सा भई दर्ता प्रमाणित हुन बाँकी रहेका जग्गाहरु पुन: नापी हुँदा तत्कालीन समयमा जग्गाको रेखदेख गर्ने समरजंग कम्पनीको नाममा दर्ता भएको पुन: नापी

बमोजिम का.जि. का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. २६२,२०७,२९५,२७८,२८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६, ८० का जग्गाहरुको साबिक गुठीको लगतका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता सच्याई प्रचलित कानून बमोजिम पशुपति टिकिन्छा गुठीका नाममा दर्ता भई गुठी संस्थानलाई स्वीकृति दिनका निमित्त नेपाल सरकार मन्त्रीपरिषद् समक्ष छलफलको लागि पेश हुनु पर्ने देखिंदा सोही प्रस्तुत गरेको छु भनी मिति २०६९/०४/०२ मा उ.स. हुपेन्द्र मणी के.सी.को टिप्पणी उपर " पेश भए अनुसारको निर्णयको लागि नेपाल सरकार म.प.मा प्रस्ताव पेश गर्न मनासिव देख्दछु" भनी मिति २०६९।०४।०५ मा स.स. तेजराज पाण्डेले पेश गरेको टिप्पणी फायलमा " पेश भए अनुसार हुनका लागि पेश गरेको छु" भनी मिति २०६९।०४।०७ गते मन्त्री चन्द्र देव जोशी समक्ष टिप्पणी फायल पेश गरेको, हुपेन्द्रमणी के. सी. र तेजराज पाण्डे को टिप्पणी लाई सदर गर्दै हस्ताक्षर गरेको निज दिनेश हरी अधिकारीले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले फरक व्यहोराको टिप्पणी रायलाई समर्थन गरी पेश गरी कीर्ते कार्यमा संलग्न रहेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै निर्णय आदेश गरेको, हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले पेश भएको टिप्पणीलाई फायल पेश गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **दिनेश हरि अधिकारी**ले विगो **रु. १,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१४७) प्रतिवादी डबलसिहं ठगुन्नाको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई

दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको किसानको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको साथै दोश्रो नापीको श्रेस्तामा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा हुन भनी किटानी उल्लेख नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) बि.स. १९८७, १९९५ र २००९ का पेश गरेको जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको, सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हुन भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **डबल सिंह ठगुन्ना** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही साविक नगर २३ क्ष को कि.नं. ७३, ७६, ४८, ७७, ७८, ६८, ६९ र नगर २३ ह को कि.नं. १२, २२, ३५, ३७, ४०, ३१, २५, १५,२४ का कित्ता जग्गाहरु पशुपतिनाथ टिकिन्छा गुठीको लगतमा खला नं. १० को दर्तावाला मोही आशामरु ज्यापुको नाउमा भिड्ने जग्गा हो, फि.वु.को जोताहामा उल्लेखित बिभिन्न व्यक्तिहरुको हकवालाले नै जोत भोग गरी आएकोले निजहरुकै नाउमा दर्ता नामसारी, हा.सा. समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिए फरक पर्ने छैन" भन्ने व्यहोराको मिति २०६०।०२।२० गते सर्जमिन मुचुल्का खडा गरी काम तामेल गरेको। उल्लेखित कित्ता जग्गाहरु मध्ये साविक कि.नं. २२,३५,३१ र ७३ मिति २०७०।०१।१७ मा जग्गाधनी पशुपति टिकिन्छा गुठी कायम भई बिभिन्न मोहीहरुको नाममा दर्ता भएको देखिएको र बाँकी कि.नं. १२,३७ र ४० लगाएतका बाँकी जग्गाहरु भने टिकिन्छा गुठीको नाममा दर्ता कायम गराउन प्रयास (उद्योग) गरेको, मिति २०६०।०७।१९ गते तहसिल कार्यालयवाट गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरिएको टिप्पणीका सन्दर्भमा "कार्यबिधि पुरा गरी पेश गर्न आदेश भएकोमा आदेश अनुसार गरी पठाईएको नदेखिएकोले सोही अनुसार गरी पठाउन भनी गुठी संस्थान केन्द्रीय कार्यालयको २०६०।०७।२६ को पत्रवाट लेखि आएको व्यहोरा पेश गरेको" भन्ने व्यहोरा उल्लेख गरी मिति २०६०।०८।०२ मा का.प्र.अच्युतानन्द पोखरेल समक्ष पेश गरेको, लगायतका कार्यहरु गरेको, निज प्रतिवादी डवल सिंह ठगुन्नाले मुचुल्कामा खटाईएका अन्य व्यक्तिको हस्ताक्षर नगराएको र मिति समेत नराखेको, मिति र हस्ताक्षर उल्लेख गर्नु पर्नेमा सो नगरी बेरीतको मुचुल्का तयार पारेको, सो सम्बन्धमा केन्द्रीय अनुसन्धान ब्यूरोको छानबिन समिति समक्ष के कसरी मिति र हस्ताक्षर छुट्न गएको हो भनी मन गढन्ते र गैरजिम्मेवार जवाफ दिई कागज गरेको, सार्वजनिक निकायका जिम्मेवार कर्मचारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने बुझि एकिन गरी ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको सर्जमिन मुचुल्का तयार गर्नु पर्नेमा निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, मुचुल्का कार्य सम्पन्न भयो भनी निवेदन पेश गरेको, ललिता निवास क्याम्प भित्र हुदै नभएको टिकिन्छा गुठीको नाममा सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी समेत पुर्याई गैह्र कानूनी तरिकाले सरकारी जग्गालाई टिकिन्छा गुठीको नाममा कायम गराउन झुट्टा, फरक तथा वेरितको मुचुल्का तयार गरेको, नेपाल सरकार

समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न टिप्पणी उठाउने, पेश गर्ने, समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य **निज प्रतिवादी डबल सिंह ठगुन्ना**ले समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिन्छ।

प्रतिवादी डबल सिंह ठगुन्नाले का.म.पा. वडा नं. ४ बालुवाटार स्थित ललिता निवास क्याम्प भित्रको सरकारी जग्गा हानी नोक्सानी हिनामिना गर्ने उद्धेश्यले प्रेरित भई उल्लेखित स्थानको बिभिन्न कित्ताका सरकारी जग्गाहरु बिभिन्न व्यक्तिको जोतभोगमा रही निज व्यक्तिहरु मोही समेत रहेको भन्ने समेत व्यहोराको गलत, झुठा तथा काम तामेल गर्ने कर्मचारीको हस्ताक्षर समेत नभएको बेरितको सर्जिमिन मुचुल्का तयार गरी विगो रु.११,५९,९२,२१३।– बराबरको सरकारी जग्गा हिमामिना गरी प्रस्तुत किर्ते गरी निज **प्रतिवादी डवल सिहं ठगुन्नाले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | १,०८,७९,३१०/- | ११,५९,९२,२१३।- |

**१४८) <u>प्रतिवादी रामेश्वर विडारीको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **रामेश्वर बिडारी** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही साविक नगर २३ क्ष को कि.नं. ७३,६८,६९ र नगर २३ ह को कि.नं. १५,२४, २५ को जग्गा पशुपतिनाथ टिकिन्छा गुठीको लगतमा खला नं. १० को दर्तावाला मोही आशामरु ज्यापुको नाउमा भिड्ने जग्गा हो, फि.वु.को जोताहामा उल्लेखित व्यक्ति निवेदकका पति हुन र पतिको शेष पछि हाल सम्म पनि निवेदकले नै जोत भोग गरी आएकोले निजकै नाउमा दर्ता नामसारी, हा.सा. समेत गरी ज.ध.प्र.पु. उपलब्ध गराई दिए फरक पर्ने छैन" भन्ने व्यहोराको सर्जमिन मुचुल्का तयार गरी काम तामेल गरेको, मिति २०६०।०७।१९ गते तहसिल का.वाट गु.सं.केन्द्रीय कार्यालयमा पेश गरिएको टिप्पणीका

सन्दर्भमा “कार्यबिधि पुरा गरी पेश गर्न आदेश भएकोमा आदेश अनुसार गरी पठाईएको नदेखिएकोले सोही अनुसार गरी पठाउन भनी गु.सं. केन्द्रीय कार्यालयको २०६०।०७।२६ को पत्रवाट लेखि आएको व्यहोरा पेश गरेको” भन्ने व्यहोरा उल्लेख गरी मिति २०६०।०८।०२ मा का.प्र.अच्युतानन्द पोखरेल समक्ष पेश गरेको, कारवाहीमा आएका जग्गाहरु दर्ता गर्ने क्रममा गोरखापत्रमा हकदावी सम्बन्धी सूचना प्रकाशित गर्न बाँकि नै रहेको देखिएकोले कारवाही अगाडि बढान उचित आदेश हुन टिप्पणी पेश गर्दछु” भन्ने व्यहोराको टिप्पणी लेखि गुठी संस्थान केन्द्रीय कार्यालय बाट आएको ११ थान फाइल मिति २०६०।०७।१९ मा का.प्र. अच्युतानन्द पोखरेल समक्ष पेश गरेको । मुचुल्कामा आफ्नो र खटाईएका अन्य व्यक्तिको हस्ताक्षर र मिति उल्लेख नगरेको तर कार्यालयमा पेश गर्दाका बखत आफ्नो हस्ताक्षर भएको देखिएको, निज **रामेश्वरी विडारीले** मुचुल्का कार्य सम्पन्न भयो भनी वेरित र फरक ब्यहोराको मुचुल्का तयार गरी पेश गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई गलत नियतले सरकारी जग्गालाई टिकिन्छा गुठीको नाममा कायम गराउन झुट्टा, फरक तथा वेरितको मुचुल्का तयार गरी कीर्ते कसूर गरेको, मिति र हस्ताक्षर उल्लेख गर्नु पर्नेमा सो नगरी बेरीतको मुचुल्का तयार पारेको, सो सम्बन्धमा केन्द्रीय अनुसन्धान ब्यूरोको छानबिन समिति समक्ष के कसरी मिति र हस्ताक्षर छुट्न गएको हो भनी मन गढन्ते र गैरजिम्मेवार जवाफ दिई कागज गरेको, सार्वजनिक निकायका जिम्मेवार कर्मचारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने बुझि एकिन गरी ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको सर्जमिन मुचुल्का तयार गर्नु पर्नेमा निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, मुचुल्का गरीने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र मुचुल्का तयार गर्नु पर्नेमा सो नगरेको देखिएको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको मुचल्का गर्ने, टिप्पणी उठाउने, पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य **प्रतिवादी रामेश्वर बिडारीले** विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

## १४९) प्रतिवादी विश्व विनय पन्तको हकमा:

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं.४५६(का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा

गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी बिश्व बिनय पन्त समेत भई आ- आफ्नो जिम्मेवारीमा रही साविक नगर २३ क्ष को कि.नं. १५,२५,२८,४२,६३ को जग्गाहरु श्री ५ को सरकार गुठी जनिई नापी हुनुपर्नेमा भुलवस श्री ५ सरकार मात्र लेखिएको , गुठी दर्ता भई गुठी नै कायम हुनु पर्ने हो ,उक्त जग्गाहरुमा निवेदकहरुबाट नै भोगचलन गरी रहेकाले निवेदनमा माग दावी गरे अनुसार नै जग्गा दर्ता नामसारी गरी दिएमा फरक पर्ने छैन" भन्ने व्यहोराको सर्जमिन मुचुल्का तयार गरी काम तामेल गरेको , भुमि सुधार तथा व्यवस्था मन्त्रालयको मिति २०६३।०७।१९ को पत्रबाट कारबाहीमा आएका कित्ता जग्गाहरुको सम्बन्धमा बिभिन्न तथ्यहरुले गुठीका जग्गा हुन भनी देखिएकोमा संस्थानको कुनै राय उल्लेख नभएको र व्यहोरा बाझिएको भनी लेखि आएकोले उचित आदेशको लागि मिति ०६३।०७।२१ मा मन्त्रालयको टिप्पणी फायल पेश गरेको, मिति २०६३।०६।१९ मा मन्त्रालयबाट प्राप्त फायल ऐ.२१ मा शाखा कार्यालयमा पठाएकोमा शाखा कार्यालयबाट केन्द्रीय कार्यालयमा पठाएको टिप्पणी फायल सम्बन्धमा बिभीन्न बिषयहरु उल्लेख गर्दै जहाँ सम्म गुठी संस्थानको धारणा प्रस्तुत गर्नु पर्ने बिषय छ, गुठी संस्थानको धारणा केन्द्रीय कार्यालयवाटै प्रस्तुत हुन उपयुक्त हुने भनी फायल सहित शाखा कार्यालयबाट लेखि आएकोले पेश गरेको भनी २०६३।०७।२६ गते फायल पेश गरेको, नापी शाखा डिल्लीबजारमा पत्राचार गर्दा कारवाहीमा आएको कित्ता जग्गाहरु २०२१ साल मार्गमा नेपाल गजेटमा प्रकाशित सूचनाको चारकिल्ला भित्र पर्ने व्यहोरा अनुरोध गरीन्छ भनी लेखि आएकोले पेश गरेको भनी मिति २०६३।०७।२८ गते राय पेश गरेको, निज विश्व बिनय पन्तले सि नं १ र सि नं ४ का कुरा बाझिएको कुरा उल्लेख गरी सो सम्बन्धमा केही राय नदिएको, ललिता निवास क्याम्प भित्र गुठी जग्गा छैन भन्ने कुरा मिति २०१७।०३।३१ को लगत, मालपोत विभागको मिति २०४९।०९।२२ को पत्र लगायतका प्रमाणहरूबाट पुष्टि भई रहेको अवस्थामा गुठीको कारवाहीमा आएका जग्गाहरु २०२१ साल मार्गमा नेपाल गजेटमा प्रकाशित सूचना (जग्गा अधिग्रहण सम्बन्धी) को चारकिल्ला भित्र पर्ने भन्ने नापी कार्यालयको पत्रको व्यहोरामा कुनै टिप्पणी नगरेको, मुचुल्कामा खटाईएका अन्य व्यक्तिको हस्ताक्षर नगराई निवेदन पेश गरेको, मन्त्रालय, तहसिल कार्यालयबाट आएका टिप्पणी फायल र नापी शाखाबाट आएको पत्रका व्यहोराहरु कोड गरी कागजातहरु कार्यालयमा पेश गरेको, सर्जमिन मुचुल्का जग्गाको वस्तुस्थिति थाहा पाउन गरीने भए तापनि सर्जमिनमा लगत भिड्ने हो होईन र गुठीको जग्गा हो होईन जस्तो प्राविधिक तथा कार्यालयबाट अभिलेख हेरी गर्नु पर्ने विषय सर्जमिन गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई गलत

नियतले सरकारी जग्गालाई टिकिन्छा गुठीको नाममा कायम गराउन झुट्टा, फरक तथा वेरितको मुचुल्का तयार गरी कीर्ते कसूर गरेको, सार्वजनिक निकायका जिम्मेवार कर्मचारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको सर्जमिन मुचुल्का तयार गर्नु पर्नेमा निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको मुचुल्का गरीने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र मुचुल्का तयार गर्नु पर्नेमा सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको मुचल्का गर्ने, टिप्पणी उठाउने, पेश गर्ने, समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी विश्व विनय पन्तले विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१५०) <u>प्रतिवादी राम कुमार घिमिरेको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **राम कुमार घिमिरे** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही निवेदकहरुको माग दावी अनुसार मिति २०६०।०९।२७ गते गो.प.मा सूचना प्रकाशित हुँदा सो को दावी संलग्न फायलबाट देखिन नआएको, साविक नापीमा श्री ५ को सरकार समरजंग कम्पनी उल्लेख भएको भन्ने लगायतका व्यहोरा उल्लेख गरी मिति २०६१।०५।०७ मा का.प्र.समक्ष फायल पेश गरेको, टिकिन्छा गुठीको मौजे हाडिगाउ लगायतका

असुलीलगतहरु हेर्दा भद्रकाली, हाडीगाउँ आदिका जग्गाहरु हा.सा.भै लगत कायम भएको देखिएको गुठी लगत भद्रकालीको रेकर्डमा आशा मरु ज्यापूको नामको खेत १० मध्येबाट भिड्ने देखिएता पनि अध्यावधिक भएको नदेखिएकोले हाल साविक गराउनु पर्ने देखिंएको, फिल्ड बुकमा अञ्चल आदेश मार्फत श्री ५ को सरकारलाई अधिया गरी कुत बुझाई खाएको, साबिक नापी र नयाँ नापीमा ज.ध. समरजंग कम्पनी उल्लेख भई मोही महलमा साबिक र हाल बिभिन्न ब्यक्ति भएको कारण श्री ५ को सरकारको सहमति लिनु पर्ने देखिएको भन्ने आदि तथ्यहरुबाट कारवाहीमा आएका उक्त कित्ता जग्गाहरु,गुठी जग्गा होईनन् भन्ने अबस्था नरहेकोले श्री ५ को सरकारको नाममा रहेको लगत कट्टा गरी गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकारबाट निर्णय भई आउनु पर्ने देखिएकोले लेखि पेश गरेको भन्ने व्यहोरा उल्लेख गरी फायल पेश गरेको, गुठी संस्थानको २०४२।०१।१८ को तोक निर्णय अनुसार मालपोत कार्यालयले मिति २०४२।०३।१६ मा निर्णय गर्दा समेत कारवाहीमा आएका २१ कित्ता मध्ये चार कित्ता जग्गा (२३क्ष को १५,२५,४२,६३) मात्र रहेको अवस्थामा सबै कित्ताको लागि एउटै व्यहोरा टिप्पणी फाईल सदर गरी श्री ५ को सरकारबाट निर्णय भएमा गुठीको नाममा जग्गा दर्ता हुन सक्ने भनी फाईल निर्णयको लागि पेश गरेको,निज राम कुमार घिमिरेले उक्त जग्गाहरु गुठीको होईन भन्ने तथ्यगत प्रमाणहरु हुँदा हुदै पनि श्री ५ को सरकारको निर्णय भएमा लगत कट्टा गरी गुठी कायम गर्न सकिन्छ भन्ने गलत मनसायको राय पेश गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुऱ्याई गुठीमा दर्ताका लागि माथिल्लो कार्यालयमा पठाउनु नै गैर कानूनी हुने कार्यलाई श्री ५ को सरकारको निर्णय भएमा गुठीमा दर्ता गर्न सकिने भन्ने आशयको **फरक व्यहोराको** टिप्पणी उठाई **कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्ने**मा निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र टिप्पणी तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको मुचल्कामा लाई आड हाली अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **राम कुमार घिमिरेले विगो रु.**१,०८,७९,३१०/- बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१५१) प्रतिवादी अच्युतानन्द पोखरेलको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. बालुवाटार- ४ हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **अच्युतानन्द पोखरेल** समेत भई आ-आफ्नो जिम्मेवारीमा रही, उल्लेखित कि.नं.का (२३क्ष का १५, २५,२८, ४२,६३) जग्गाहरु सम्वन्धमा उपरोक्तानुसार काम कारवाही भएको हुँदा सो कि.नं. का जग्गाहरुको सम्वन्धमा केन्द्रीय कार्यालय वाट नै आवश्यक निर्देशन भई आउनको लागि कारवाही फायलहरु साथै राखी गु.सं. केन्द्रीय कार्यालयमा पेश गरेको भन्ने राय व्यक्त गरी सोही टिप्पणी मिति २०६०।०७।१९ गते सदर गरेको ,मिति २०६०।०८।०२ गते डवल सिंह ठगुन्ना र रामेश्वर बिडारीले पेश गरेको (२३क्ष का ४८, ६८, ६९, ७३, ७६, ७८ र २३ह का १२, १५, २२, २४,२५,२६,४०) टिप्पणीका सम्बन्धमा गो.प.मा ३५ दिने सार्वजनिक सूचना प्रकाशित गर्न वाँकि नै रहेको देखिंदा उक्त सूचना प्रकाशित गरी कहिकतैवाट दावी बिरोध नभएको र मोहीहरुले यो गुठीको यो खलाको यति नं. भिडि आधारभूत प्रमाणहरु पेश गरी समरजंग कम्पनीको नभई गुठीको जग्गा हो भन्ने कुरा पुष्टि हुने आधार प्रमाण पेश भएको आधारमा छानबिन गरी एकिन कारवाही हुने नै हुँदा केन्द्रीय कार्यालयकोआदेश अनुसार भएको भन्ने लगायतको व्यहोरा उल्लेख गरी मिति २०६०।०८।०३ मा टिप्पणी सदर गरी केन्द्रीय कार्यालयमा पठाएको ,मिति २०६१।०५।०७ मा पेश भएका टिप्पणी सम्बन्धमा बिबिध कुराहरु उल्लेख गर्दै कारवाहीका क्रममा आएका कित्ता जग्गाहरु श्री ५ को सरकार समरजंग कम्पनीको नाममा दर्ता प्रमाणित श्रेस्ता समेत रहेको अवस्थामा श्री ५ को सरकारको सहमति लिई मात्र आवश्यक कारबाही हुनु पर्ने भन्ने व्यहोरा उल्लेख गरी मिति २०६१।०५।०७ गते टिप्पणी फायल गु.सं. केन्द्रीय कार्यालयमा पेश गरेको ,मिति २०६१।०६। २६ मा श्री ५ को सरकारको नाममा रहेको लगत कट्टा गरी गुठी कायम गर्ने सम्बन्धमा श्री ५ को सरकारबाट निर्णय भई आउनु पर्ने देखिंदा सोही पेश गर्दछु भनी राम कुमार घिमिरेले पेश टिप्पणीलाई समर्थन जनाई उक्त टिप्पणी फायल मिति २०६१।०६।२६ मा गु.सं.केन्द्रीय कार्यालय मा पेश गरेको ,निज अच्युतानन्द पोखरेलले गुठीको जग्गा होईन भन्ने विभिन्न प्रमाणहरुले पुष्टि भई रहेको अवस्था तथा आफैंले समेत विभिन्न समयमा ती जग्गा गुठीमा दर्ता गर्न नमिल्ने भनी टिप्पणी उठाई विभिन्न आधार प्रमाण सहित गुठी संस्थान केन्द्रीय कार्यालयमा पत्राचार समेत गरीसकेको अवस्थामा मिति २०६१।०६।२६ मा टिकिन्छा गुठीको नाममा दर्ता गर्न श्री ५ को सरकारको स्वीकृतको लागि पठाउनु पर्ने भनी गुठी संस्थान केन्द्रीय कार्यालयमा पठाएको

देखिएको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले गुठीमा दर्ताक लागि माथिल्लो कार्यालयमा पठाउनु नै गैर कानूनी हुने कार्यलाई श्री ५ को सरकारको निर्णय भएमा गुठीमा दर्ता गर्न सकिने भन्ने आशयको फरक व्यहोराको टिप्पणी सदर **गरी कीर्ते गरेको,** गुठी संस्थानको २०४२।०१।१८ को तोक निर्णय अनुसार मालपोत कार्यालयले मिति २०४२।०३।१६ मा निर्णय गर्दा समेत कारवाहीमा आएका २१ कित्ता मध्ये चार कित्ता जग्गा(२३क्ष को १५,२५,४२,६३) मात्र रहेको अवस्थामा सबै कित्ताको लागि एउटै व्यहोरा टिप्पणी फाईल सदर गरी श्री ५ को सरकारबाट निर्णय भएमा गुठीको नाममा जग्गा दर्ता हुन सक्ने भनी फाईल निर्णयको लागि पेश गरेको,उक्त जग्गाहरु गुठीको होईन भन्ने तथ्यगत प्रमाणहरु हुँदा हुदै पनि सरकारको निर्णय भएमा गुठी कायम गर्न सकिन्छ भन्ने गलत राय लेखि पेश गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गरी राय दिनु पर्नेमा निवेदक भनिएका ब्यक्तिहरुका वारेसले दिएको निवेदनलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको,गुठीका जग्गा छानबिन गर्न समित गठन गरी एकिन गरेर कारवाही प्रकृया अगाडि बढाउनु पर्नेमा सो नगरी उक्त जग्गाहरु गुठीको होईन भन्ने तथ्यगत प्रमाणहरु हुँदा हुदै पनि सरकारको निर्णय भएमा गुठी कायम गर्न सकिन्छ भन्ने गलत राय लेखि गुठी संस्थान केन्द्रीय कार्यालयमा पेश गरी, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको मुचल्कामा बस्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **अच्युतानन्द पोखरेलले विगो रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१५२) <u>प्रतिवादी हेमराज सुवेदीको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं ४५६(का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा

दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **हेमराज सुवेदी** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही, वारेश राम कुमार सुवेदीले मिति २०५९।०७।०५ मा दिएको निवेदनहरुको सम्बन्धमा लगत बमोजिम गुठी कायम हुनु पर्ने हो होईन ? अन्य कुनै प्रमाण भए सम्बन्धित मोहीसँग बुझि यथार्थ विवरण तहसिल कार्यालयवाट आएपछि मात्र निर्णयमा पुग्नु पर्ने भन्ने देखिएको भनी मिति २०६१।०६।१९ गते गुठी केन्द्रीय कार्यालयमा टिप्पणी राय पेश गरेको, साविक २३ क्ष र ह कि.नं. ७३, २२ समेतका जग्गाहरु टिकिन्छा गुठीको साविक मलिकुलि खेत १० र असौगाल खेत ५ वाट भिडि दर्ता हुने भन्ने समेतको निवेदन परि कारबाही अगाडी बढाईएकोमा सो जग्गा हाल सम्म हाल साविक भिडी दर्ता भएको नदेखिएकोले सो गुठीको नाउमा दर्ता गराउनु पर्ने हुन्छ तर उल्लेखित जग्गा समरजंग कम्पनीमा दर्ता भई सकेकोले सो दर्ता कट्टा गरी गुठीको नाउमा दर्ता गराउन सम्बन्धित फाईल नै भु.सु. मन्त्रालयमा पठाउनु पर्ने देखिएको भनी समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको नाउमा दर्ता गराउन मिति २०६१।०७।११ टिप्पणी राय सहित फायल पेश गरेको , मिति २०५९।०५।२४ गते गु.सं.केन्द्रीय कार्यालयका. का.स. (खरिदार) वासुदेव पौडेल उठान गरेको टिप्पणी उपर राय दिने क्रममा निवेदकहरुले माग दावी लिएको जग्गा साविक लगत नभिड्दैमा गुठीको होईन भन्न सक्ने अवस्था नरहेकोले उल्लेखित कि.नं. का जग्गाहरु हाल साविक भिडाई हाल कायम मोहीहरुको नाममा मोही कायम गरी नियमानुसार वाली लिई र नामसारी दा.खा. गर्ने कार्य शाखा कार्यालयकै क्षेत्राधिकार भएकोले त्यहीवाट गर्न भनी निर्देशन दिनुपर्ने देखि निर्णयार्थ पेश गरेको छु" भनी मिति २०५९।०६।१४ मा का.प्र. सेमन्तराज चापागाई समक्ष पेश गरेको,माग भएका कि.नं. २८, ४२, १५, ६३ र २५ का जग्गाहरुका सम्पूर्ण ब्यहोरा नापीसँग खुलाई पेश गर्नु र यस सम्बन्धमा कुनै कागज प्रमाण भए सो समेत राख्न लगाउने भनी मिति २०५९।०९।०५ मा राय टिप्पणी फायल अगाडि बढाएको ,साविक कित्ता नं. १५, २५,२८,४२ र ६३ का जग्गा गुठी लगत तथा भद्रकालीको मिति २०४२।०१।१८ चं.नं. २४२२ पत्रानुसार तोक आदेशले २०४२।०३।१६ मा दर्ता प्रमाणित भएकोले गुठी संस्थानले अन्यथा भन्ने नमिल्ने समेत र जग्गाधनी महलमा मोहीले पनि उक्त जग्गा गुठी कै हो भनेकोले साबिक २८ र ४२ लाई नयां नापी कि.नं. ७२,७३,९१,१८ र साविक कि.नं. १५,६३,२५ हाल कि.नं. ७६,७८,७४ र ४७ कायम भएकोमा कि.नं. ७८ लाई गुठी तैनाथी कायम गरी वाँकि कित्ताको सम्बन्धमा लगत भिडाई गुठीको नाममा दर्ता गरी कुत समेत असुल गर्न भनी तहसिल शाखालाई आदेश हुनु पर्ने भनी मिति २०५९।१०।१३ मा निर्णयार्थ का.प्र. सेमन्तराज चापागाई समक्ष पेश गरेको ,गुठी तहसिल कार्यालयको २०४२।०१।१८ को पत्रानुसार श्री ५ को सरकार गुठीमा गएको र गुठीको नाम एकिन हुन नसकि अज्ञानतावस श्री ५ गुठी, श्री ३ गुठी, श्री ५ को सरकार गुठी उल्लेख भएको, मोहीसँग भएको प्रमाणवाट समेत कुन गुठी हो भनी एकिन नभएमा गुठी संस्थानको नाममा लगत कायम गरी वक्यौता असुल गर्ने भन्ने २०५२।०५।३० को स.सं.को निर्णय भएको, उक्त ठाउमा सुवर्ण शमशेरको समेत जग्गा भई श्री ५ को सरकारले अधिग्रहण गरी समरजंग कम्पनीलाई रेखदेख गर्न दिएकोले निजको हकवाला

तथा सन्तानसँग समेत यथार्थ जानकारी लिई निर्णयमा पुग्नु पर्ने भनी मिति २०६०।०७।२४ मा राय दिई टिप्पणी फायल पेश गरेको, मिति २०६०।०८।२९ गते साविक कि.नं. १५,२५,२८, ४२ र ६३ का जग्गा सम्बन्धमा बिभिन्न विवरण उल्लेख गर्दै गुठीमा लगत भिडाउने तर्फ पनि कारवाही गर्न तहसिल शाखामा आदेश हुनु अगावै कानून शाखाको पनि परामर्श लिई कारवाही टुङगोमा पुग्न उपयुक्त हुने भनी राय लेखी  फायल पेश गरेको, साविक कित्ता नं. २८, ४२ (हाल कि.नं.  ७२, ७३, १८, ९१) तथा  साविक कित्ता नं. १५, ६३, २५ (हाल  ७६, ७८, ७४, ४७, ३४) कायम भएकोमा त्यस मध्ये कि.नं. ४७, ७६, आयोगको आदेशले रोक्का भनिएको जग्गा हाल यथावत राखी पछी नियमानुसार  गर्ने  र वाँकी कि.नं. ३४, ७८ को घुस्न गएको भनिएकोले पछी नियमानुसार कित्ता काट गर्ने र  गुठीको नाममा कायम गर्न २०६०।१२।२७ मा निर्णय गरी कार्यान्वयनको लागी शाखा कार्यालयमा लेखी पठाउदा उक्त सम्पूर्ण जग्गा समरजंग कम्पनीको नाउमा दर्ता प्रमाणित भई सकेकोले दुविधा पर्यो भनी लेखि आएको  हुँदा उल्लेखित जग्गा गुठी कायम गर्न संलग्न फायल समेत भु.सु. मन्त्रालयमा पठाउनु पर्ने भनी  मिति २०६१।०६।१८ मा  राय सहित फायल पेश गरेको ,च.नं. २२२ बाट गुठीको नाममा दर्ता प्रमाणित नभएको जग्गालाई गुठीको नाममा दर्ता प्रमाणित भएको रहेछ भनी उल्लेख गरेको , राम कुमार सुवेदीको कागज र राणाहरूको कीर्ते मन्जुरी कागजलाई सदर गर्दै अगाडि बढाएको, समरजंग कम्पनी एउटा सरकारी संस्था भएको अवस्थामा त्यसको प्रमुखले गैर जिम्मेवार पूर्ण रूपमा मौन बसेको आधारमा श्रेस्तामा जग्गाधनी भनी प्रमाणित रहेका समरजंग कम्पनीलाई जग्गाधनी नै होईन भनी टिप्पणी उठाएको, आफ्नो स्वार्थ जोडिएका निवेदक मोहीहरूले आफू मोही भएको गुठीको जग्गा हो भनेको भरमा “निवेदकहरुले माग दावी लिएको जग्गा साविक लगत नभिड्दैमा गुठीको होईन भन्न सक्ने अवस्था नरहेकोले उल्लेखित कि.नं. का जग्गाहरु  हाल साविक भिडाई हाल कायम मोहीहरुको नाममा मोही कायम गरी नियमानुसार वाली लिई र नामसारी दा.खा. गर्ने कार्य शाखा कार्यालयकै क्षेत्राधिकार भएकोले त्यहाँवाटै  गर्न भनी निर्देशन दिनुपर्ने देखि निर्णयार्थ पेश गरेको छु” भन्ने जस्तो टिप्पणी उठाई राय पेश गरेको, कित्ता नं १५, २५, २८, ४२, ६३ मध्ये कित्ता नं २८ श्रेस्तामा गुठी नजनिएको अवस्थामा केहि कैफियत नगरी सदर गर्दै टिप्पणी उठाएको, २०५८।१।१४ को सुरू निवेदनमा श्री ५ को सरकारको गुठीको नाममा दर्ता भएको जग्गाहरू भनी दावी लिइएको र त्यसैलाई गुठीको जग्गा हो भनी पुष्टि गर्न राणाहरुले गरेको कीर्ते मन्जुरी कागजको आधारमा उठेको प्रकृयामा गुठी भनी कहिल्यै नजनिएका जग्गाहरू समेत संलग्न गरी जग्गा दर्ता प्रकृया अगाडि बढाएको,२०५२।०५।३० को गुठी संस्थान संचालक समितिको निर्णयको सम्बन्धमा उक्त निर्णयमा श्री ५ को सरकार गुठी, कालमोचन गुठी, श्री ५ को गुठी जस्ता राज गुठी जनिने विषयलाई समेटेकोमा कहिल्यै गुठी जनिदै नजनिएका जग्गालाई समेत गुठीको नाममा दर्ता गर्ने प्रकृया अगाडि बढाएको,कारवाहीका आएका जग्गा गुठीको हो वा होईन भन्ने सम्बन्धमा सम्बन्धित कार्यालयका अभिलेख र अन्य व्यक्तिसँग बुझ्नु पर्नेमा गलत मागदावी गर्ने निवेदकसँग नै बुझ्नु पर्ने भनी राय दिएको,च.नं. २२२ मिति २०६१।०८।०९ बाट गुठीको नाममा दर्ता प्रमाणित नभएको जग्गालाई गुठीको नाममा दर्ता प्रमाणित भएको रहेछ भनी उल्लेख गरेको निज हेमराज सुवेदीले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने  गलत नियतले गुठीमा दर्ताको लागि माथिल्लो कार्यालयमा पठाउनु नै गैर कानूनी हुने कार्यलाई श्री ५ को सरकारको निर्णय भएमा गुठीमा दर्ता गर्न सकिने भन्ने **आशयको फरक व्यहोराको** राय सहितको टिप्पणी पेश गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी

भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, गलत तथ्य कागजहरुलाई आधार मानी (फि.वु.को किसानको व्यहोरामा अन्चल आदेश मार्फत सरकारलाई अधिया तिरेको, निवेदक सँग बुझ्दा अज्ञानतावस श्री ५ को सरकार समरजंग कम्पनी लेखिन गएको,समरजंग सँग बुझ्दा मिति २०५९।०४।१० को च.नं.५ पत्रबाट गुठीको हो होईन एकिन गर्न नसकिने भन्ने व्यहोरा प्राप्त भएको, स्थलगत सर्जमिन गर्दा सम्बन्धित वडाले गुठीको हो भनी सिफारिस गरेको, जग्गाधनी महलमा मोहीले पनि उक्त जग्गा गुठी कै हो फि.वु.को घर जग्गा महलमा उल्लेखित व्यक्ति वा संस्थाले पनि आफ्नो जग्गा होईन भनेको (कागजात भिडाई एकिन गर्नु पर्ने), टिप्पणी उठाएको, टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको ।मिति २०६१।०७।०२ मा तहसिल शाखाको हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले पेश भएको टिप्पणीलाई समर्थन गरी, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको टिप्पणी तयार गर्ने, समर्थन गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी हेमराज सुवेदीले विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेकोदेखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१५३) <u>प्रतिवादी दिलिप कुमार भट्टको हकमा:</u>**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको,

जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **दिलिप कुमार भट्टराई** समेत भई आ- आफ्नो जिम्मेवारीमा रही, साविक २३क्ष को १५,२५,२८,४२,६३ कित्ता जग्गाको सम्बन्धमा पेश गरेको टिप्पणी उपर उपरोक्त बमोजिम विवरण र राय माग गर्न उल्लेख गरी मिति २०६१।०६।२० मा आदेश गरेको ,मिति २०६१।०७।११ मा हरिवोल आचार्यले समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको नाउमा दर्ता गराउन भनी पेश गरेको टिप्पणी रायलाई कानूनी राय दिने लेखि मिति २०६१।०७।२४ मा फायल अगाडि बढाएको , मिति २०६१।०८।०८ गते प्राप्त टिप्पणी फायललाई राय सदर गर्दै श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठीको लगत अनुसार पशुपती टिकिन्छा गुठीको नाममा हाल साविक भिडाई दर्ता गर्ने स्विकृतीका लागी भूमी सुधार तथा ब्यवस्था मन्त्रालयमा पेश गरेको छु भनी मिति २०६१।०८।०८ मा भूमि सुधार तथा ब्यवस्था मन्त्रालयमा पेश गरेको, साविक कित्ता नं. २८, ४२ (हाल कि.नं. ७२,७३, १८, ९१) तथा साविक कित्ता नं. १५, ६३, २५ (हाल ७६, ७८, ७४, ४७, ३४) कायम भएकोमा त्यस मध्ये कि.नं. ४७, ७६, आयोगको आदेशले रोक्का भनिएको जग्गा हाल यथावत राखी पछी नियमानुसार गर्ने र वाँकी कि.नं. ३४, ७८ को घुस्न गएको भनिएकोले पछी नियमानुसार कित्ता काट गर्ने र गुठीको नाममा कायम गर्न २०६०।१२।२७ मा निर्णय गरी कार्यान्वयनको लागी शाखा कार्यालयमा लेखी पठाउदा उक्त सम्पूर्ण जग्गा समरजंग कम्पनीको नाउमा दर्ता प्रमाणित भई सकेकोले दुविधा पर्यो भनी लेखि आएको हुँदा उल्लेखित जग्गा गुठी कायम गर्न संलग्न फायल समेत भु.सु. मन्त्रालयमा पठाउनु पर्ने देखी पेश गरेको" भन्ने व्यहोराको मिति २०६१।०६।१८ मा हरिबोल आचार्यले पेश गरेको हुँदा सो सम्बन्धमा "भएको प्रमाण सवै हेरी के गर्न पर्ने हुन्छ राय सहित पेश गर्ने" भनी मिति कानून शाखालाई तोक आदेश दिएको, मिति २०६१।०८।०८ मा हेमराज सुवेदीले पेश गरेको यसै लगाउको फायल यही कारवाहीमा आएका साविक नापी बमोजिमको कि.न. ४८,७६,७३,७७,७८,१५, २८, २५,४२, ६३,६९,६८,३१,३५, २२,१२,४०,१५,२४,२५,३७ समेतका जग्गा नयाँ नापीमा श्री ५ को समयमा समरजंग कम्पनीका नाममा दर्ता भएका फायलमा आजै राय लेखी सकेको हुँदा यसमा पनि सोहि बमोजिम हुनुपर्ने राय पेस गरेको भन्ने टिप्पणी रायलाई मिति २०६१।०८।८ मा सदर गरेको, पञ्च नारायण र तिर्थमाया महर्जनका वा. राम सुवेदीले साविक कि.नं. १५,२५,२८,४२ र ६३ का जग्गा दर्ता तथा नामसारी ज.ध.प्र. पु. पाउँ भनी दिएको निवेदनका सम्बन्धमा र निवेदक रेना गुरुङ समेत जना ९ ले साविक कि.नं. ८,१२,१५,२२,२४, २५, ४०,४८,६२,६८,६९,७३, ७६ र ७८ का जग्गाहरु टिकिन्छा गुठीका नाममा जग्गा दर्ता गरी मोही कायम गरीपाउँ भनी दिएको निवेदनका सम्बन्धमा कारवाहीमा आएका जग्गाको श्री ५ को सरकार समरजंग कम्पनीको नाम कट्टा गरी गुठी लगत अनुसार पशुपति टिकिन्छा गुठीको नाममा हाल साबिक भिडाई दर्ता गर्ने स्वीकृतिको लागि यस संस्थानको मिति २०६१।०८।०८ को निर्णय टिप्पणीबाट भूमि सुधार तथा ब्यबस्था मंन्त्रालयमा पेश भएकोमा भूमि सुधार तथा ब्यबस्था मन्त्रालयको च.नं. ९४० मिति २०६२।०६।०३ को पत्रबाट बिभिन्न १९ वटा कुराहरु सोधनी भै आएको देखिएको, सो सम्बन्धमा तहसिल शाखा कार्यालयबाट जवाफ लेखि आएकोले सोही व्यहोरा फाँटबाट उल्लेख गरी सकेको देखिएकोले पेश गरेको छु भनी मिति २०६२।०७।०६ मा प्रेम हरि ढकालको राय उपर " हरिवोल जी, कानून बमोजिम एकिन गरी पेश गर्ने" भनी निर्देशन दिएको, पञ्च नारायण र तिर्थमाया महर्जनका वा. राम सुवेदीले साविक कि.नं. १५,२५,२८,४२ र ६३ का जग्गा दर्ता तथा नामसारी ज.ध.प्र. पु. पाउँ भनी दिएको निवेदनका सम्बन्धमा र निवेदक रेना गुरुङ समेत जना ९ ले साविक कि.नं. ८,१२,१५,२२,२४, २५, ४०,४८,६२,६८,६९,७३,७६ र

७८ का जग्गाहरु टिकिन्छा गुठीका नाममा जग्गा दर्ता गरी मोही कायम गरीपाउँ भनी दिएको निवेदनका सम्बन्धमा मिति २०६२।११।१९ मा पेश गरेको फायलमा "सवै कुरा मन्त्रालयले दिएको निर्देशन अनुसार बुझि पठाउन मिसिल कार्यालयमा पठाउने" भनी मिति २०६२।११।२१ मा निर्देशन दिएको निज दिलिप कुमार भट्टले च.नं. २२२ बाट गुठीको नाममा दर्ता प्रमाणित नभएको जग्गालाई गुठीको नाममा दर्ता प्रमाणित भएको रहेछ भनी उल्लेख गरेको । गुठीको होईन भन्ने तथ्यगत प्रमाणहरु (श्रेस्तामा गुठीमा गएको भन्ने उल्लेख नरहेको, मालपोत विभागको २०४९।०९।२२ को पत्र, समरजंग कम्पनीको २०२३।०६।२३ को पत्र, २०१७।३।३१ को मालपोत कार्यालयको जग्गाको लगत आदि) हुँदा हुदै पनि मन्त्रिपरिषदको निर्णय भएमा लगत कट्टा गरी गुठी कायम गर्न सकिन्छ भन्ने फरक व्यहोराको टिप्पणी सदर गरी मन्त्रालय पठाएको,सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले गुठीमा दर्ताको लागि माथिल्लो कार्यालयमा पठाउनु नै गैर कानूनी हुने कार्यलाई श्री ५ को सरकारको निर्णय भएमा गुठीमा दर्ता गर्न सकिने भन्ने आशयको फरक व्यहोराको टिप्पणी सदर गरी कीर्ते गरेको सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै निर्णय आदेश गरेको , हुँदै नभएको टिकिन्छा गुठीको जग्गालाई सरकार निर्णय भई आएमा गुठी कायम गर्न सकिने भन्ने गलत मनसायले पेश भएको टिप्पणीलाई समर्थन गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्ठा तथा बेरितको टिप्पणी समर्थन गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **दिलिप कुमार भट्टराईले विगो रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेकोदेखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

१५४) **<u>प्रतिवादी देवनारायण महर्जनको (बुबाको नाम नाती महर्जन) हकमा</u>** :

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई

दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा  फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **देव नारायण महर्जन** समेत भई साविक २३ ह कि.नं. ३५ जनिई मोही नाति डंगोलको हकमा देव नारायण महर्जनले साविक २३ ह कि.नं. ३५ हालको सिट नं. १०२५-१५ कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं. ८० को जम्मा क्षेत्रफल ०-१४-३-० रोपनी जग्गामा मोही कायम भएको भनी निवेदन दिएकोमा, फिल्डबुक बमोजिम साविक २३ ह को कि.नं. ३५ मा मोही नाति डंगोल देखिन्छ भने नयाँ नापी बमोजिमको फिल्डबुक सिट नं. १०२५-१५ को कि.नं. ५६ र सिट नं. १०२५-२० को कि.नं.८० मा मोही नाति महर्जन देखिन्छ सो अबस्था बिद्यमान रहेकै अबस्थामा गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, गुठीको जग्गा होईन भनी बिभिन्न समयका कागजातहरुवाट स्पष्ट भएको अवस्थामा सोही जग्गा टिकिन्छा गुठीको हो भनी वारेस मार्फत माग गरी मोहीयानी हक प्राप्त गरेको, जग्गाको अभिलेख राख्ने सरकारी कार्यालयको अभिलेख टिकिन्छा गुठीको भनी उल्लेख नरहेको जग्गालाई वारेश मार्फत **झूट्टो विवरण र फरक व्यहोराको** कागजात तयार गर्न लगाई आफू मोही कायम रही टिकिन्छा गुठीको नाममा जग्गा दर्ता गराई **कीर्तेमा संलग्न रेहको,** केन्द्रीय अनुसन्धान ब्यूरोबाट गठीत छानबिन समिमि समक्ष बालुवाटारको असैगाल खेल सरकारी हो पशुपति  टिकिन्छा गुठीको होईन भन्ने कुरा पितापुर्खाबाट सुन्दै आएको हुँदा उक्त जग्गा गुठीको हो भन्ने बिश्वास लाग्दैन भन्ने समिति समक्ष कागज गरेको हुँदा **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** वारेस मार्फत मागदावी गरी जग्गाको स्वामित्व प्राप्त गरेको, आफूले मोही प्रमाणपत्र पूर्जा प्राप्त गरेको १० दिन भित्रमा वारेस भनिएका व्यक्तिलाई नै जग्गाको हक हस्तान्तरण गरेको, छानबिन समिति समक्ष मोही दावी गरे वापत रोपनीको १४/१५ लाखका दरले बिचौलिया मार्फत रकम प्राप्त गरेको भनी कागज गरी दिएको हुँदा निज प्रतिवादी देवनारायण महर्जनले प्रस्तुत कसूर गरेको प्रष्ट देखिन्छ।

प्रतिवादी देवनारायण महर्जनले वि.सं. २०६०।०५।१९ गते निज प्रतिवादी देवनारायण महर्जनको बाबु नाति महर्जनको हकमा पहिले का.गु.त. कार्यालय. कालमोचनमा पशुपति टिकिन्छा गुठीको जग्गाहो भनी निवेदन दिइ २३ ह को कि.नं. ३५, ३७ को क्षेत्रफल क्रमश:  ०-१४-३-० र १-१५-०-० गरी जम्मा २-१३-३-० रोपनी जग्गामा मेरो नै जोतभोग भएको र उल्लेखित जग्गा पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी झुठा व्यहोराको निवेदन गुठी संस्थान केन्द्रिय कार्यालयमा वारेश राम कुमार सुवदी मार्फत दिएको र सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी गुठी संस्थान तहसिल शाखाबाट झुठा व्यहोराको, मिति समेत नभएको बेरितको सर्जमिन मुचुल्कातथा काठमाडौ महानगरपालिका ४ नं. कार्यलयले च. नं. ३८०, मिति २०६०/०५/१२ गते को पत्र मार्फत निज देवनारायण महर्जन पशुपति टिकिन्छा गुठीसँग भिड्ने २३ हको

३१,२३ क्ष को ७७ नं. कित्ता जग्गाको जोताहा मोही हो भनी मोही नै नभएको सरकारी जग्गामा नक्कली मोही सिफारिस तयार भई गुठी संस्थानबाट लेखापढी भए पश्चात तत्कालीन भूमिसुधार मन्त्रालयबाट मन्त्रिपरिषदमा प्रस्ताव पेश भए तापनि निर्णय नभई प्रक्रिया रोकिई उक्त सरकारी जग्गा हानीनोक्सानी गर्न, गराउन नसकेको र नेपाल सरकार मन्त्रिपरिषदको मिति २०६६।१२।२९ र मिति २०६७।०१।३१ को निर्णय पश्चात देवनारायण महर्जनको हकमा जग्गा माग दाबी लिईमालपोत कार्यालय, डिल्लीबजारमा दिएको निवेदनमा "मालपोत कार्यालयको मिति २०६६/१०/१०, च.नं. ९००९ को पत्र, मन्त्रिपरिषदको मिति २०६६/१२/२९ को निर्णय, सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को  फैसलाले समेतबाट मलाई मोही कायम गरेको हुँदा मन्त्रिपरिषदको निर्णय बमोजिम जग्गाधनी प्रमाण पूर्जा पाउँ" भनी झुठा व्यहोरा सहितको निवेदन परेको, पारेको, सम्मानित सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले मलाई मोही ठहर्याए पश्चात सो फैसला विरुद्ध भएको पुनरावलोकनमा समेत सम्मानित सर्वोच्च अदालतबाट मिति २०६५/०८/२० मा मेरै पक्षमा अन्तिम फैसला भएको, नेपाल सरकार मन्त्रिपरिषद्को २०६६/१२/२९ को निर्णय बमोजिम पनि मेरो बाबु नाती महर्जन मोही कायम रहेको र यसै कार्यालयको मिति २०६६/१०/१०, च.नं. ९००९ को पत्र समेतले मेरो बाबु नाति महर्जनलाई मोही स्पष्ट गरेकोमा नेपाल सरकार मन्त्रिपरिषद्को विशिष्ट व्यक्तिहरुको निवास भवन परिसर विस्तारको क्रममा मोहीको हैसियतले काठमाडौं नगर ४ सिट नं. १०२५-१५ को कि.नं. ९ क्षेत्रफल ०-१-०-२ रोपनी र सिट नं. १०२५-२० को कि.नं. ५४ को क्षेत्रफल २-१-१-१ रोपनीमा मेरो जोत भोगमा रहेको उल्लेखित जग्गामा नेपाल सरकार मन्त्रिपरिषदको निर्णय कार्यान्वयनको क्रममा बाबुको शेष पछि हकवाला म देवनारायण महर्जनले पाउने आधा जग्गा कि.नं. ५४ को पुरै र कि.नं. ९ को उत्तर तर्फबाट १-०-०-१.५ रोपनी तथा कित्ता काट भै अन्यलाई जाने कि.नं. ९ को दक्षिण तर्फ बाट कि.नं. २,३,११५ लक्ष्मी ढकाल समेतलाई क्षेत्रफल १-०-०-३.५ रोपनी भनी दावी गरी निवेदन पेश गरेको देखिन्छ । मालपोत कार्यालय, डिल्लीबजारको मि.नं ५५, मिति २०६७/०८/१६ को निर्णयले निज देवनारायण महर्जनले सिट नं. १०२५- १५ को कि.नं. ५४ को ३५.७७ वर्ग मि. र १०२५-२० को कि.नं. ९ बाट कि.नं. १२९ को क्षे. ५१३.५० वर्ग मि. गरी जम्मा ५४९.२७ बर्गमिटर (१ रोपनी १ आना १ पैसा ०.४ दाम) जग्गा  प्राप्त गरेको देखिन्छ साथै फिल्डबुकको अध्ययन बाट साविक वडा नं. २३ ह कि.नं. ३७ को मोही नाति डंगोल, नयाँ नापीको सिट नं. १०२५-१५ को कि.नं. ५४ र १०२५-२० को कि.नं. ९ दुबैको मोहीको महल खालि देखिए तापनि मि.नं. ५५ को टिप्पणी र आदेश खण्डको पेज नं. १६ मा फरक परेको विवरणमा सो तथ्य उल्लेख नगरी साविक मोही नाती महर्जन मात्र उल्लेख गरी व्यहोरा फरक पारेको देखियो साथै निर्णयकर्ता समेतले सोको गैर कानूनी रूपमा बदनियत पूर्वक टिप्पणी आदेश सदर गरीदिएको देखियो, यसरी निज देव नारायण महर्जनले दावी गरेको नयाँ नापी बमोजिमको कित्ता नम्बर ९ र ५४ को मोहीको महल खाली देखिएकोले नक्कली मोही खडा गरेको  देखिन्छ, यसरी मोही भनिएको देवनारायण महर्जनको वारेश रामकुमार सुवेदीले पहिले का.गु.त. कार्यालय कालमोचनमा कुनै पशुपति टिकिन्छा गुठीको जग्गा हो भनी झुठो व्यहारको निवेदन दिएको, पछि निज देवनारायण महर्जनले मालपोत कार्यालय, डिल्लीबजारमा निवेदन दिंदा गुठी शब्द उल्लेखै नगरी म मोही भएको जग्गा भनी कीर्ते व्यहोराहरु उल्लेख गरी निवेदन दिएकोले निज देवनारायण महर्जनले सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी र अन्य गुठी तथा मालपोत कार्यालयको कर्मचारीहरुको मिलेमत्तोमा २०६० साल देखि नै सरकारी जग्गा मस्यौट गर्ने कार्यमा संलग्न रही निज प्रतिवादी **देव नारायण महर्जनले विगो रु.२५,७४,४०,०००।-**

**गरी अभिलेखमा समेत भिडे पश्चात मात्र  एकिन भई पत्राचार  गर्नु पर्ने**मा सो नगरेको देखिएको , **गलत तथ्यको आधारमा बढी** कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा  गुठीको नाममा कायम गर्न**  म.प.को निर्णय भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पत्राचार  गर्नु पर्नेमा  सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई  पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको  भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **दुर्गा दास महर्जनले** बिगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**१९९)** **प्रतिवादी मग्नु दत्तको हकमा** :

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार - ४ हा.नं. ४५६ ( का.फौ.त.) ,बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा  फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **मग्नु दत्त** समेत भई मालपोत कार्यालयमा पठाइएको पत्रमा हस्ताक्षर गरेको,प्लट रजिष्टर, फिल्डबुकमा २९५ (नयाँ नापीको वडा नं. ४ सि. नं. १०२५-१५ कि. नं. ९९ बाट आएको) कुलो बाटो देखिएको, हाल नक्सामा पनि बाटो देखिएको, ३१४ नक्सामा बाटो देखिएको भनी प्रतिवेदन पेश गरेको। मिति २०६९।०६।१८ को मन्त्रिपरिषदलको निर्णय भन्दा अगाडि नै हालसाविक भिडाई हाल साविक भएका कित्ताहरू समेत किटान गरी सोही कुरा उल्लेख गरेको विषयमा पुन बढी कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको निज मग्नु दत्तले  सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख  विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी

पुर्याई गलत नियतले **फरक व्यहोराको** पत्राचार गरी पेश गरी **कीर्ते गरेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको कार्य गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको , **कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र एकिन भई पत्राचार गर्नु पर्ने**मा सो नगरेको देखिएको ,**गलत तथ्यको आधारमा बढी** कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** म.प.को निर्णय हुदैमा हक मर्दैन, ऐन तथा अभिलेख सँग बाँझिएको व्यहोरालाई कार्यबिधिगत त्रुटी मानेर राष्ट्र सेवक कर्मचारीले ऐन नियमलाई टेकेर त्यस्ता ऐनसँग बाझिने निर्णयहरु कार्यान्वयन नगर्न पनि सक्ने भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पत्राचार गर्नु पर्नेमा सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **मग्नु दत्तले** विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

२००) <u>**प्रतिवादी कर्ण बहादुर चन्दको हकमा**</u> :

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.),बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएको र दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **कर्ण**

**बहादुर चन्द** समेत भई साविक नगर २३ह र क्ष हाल नगर ४ सिट नं. १०२५-१४ कि.नं कि.नं.११,१२,२०,२१ सिट नं.१०२५-१९ कि.नं.३,५,६,१ र सिट नं.१०२५-१५ कि.नं.७४, १६,४७, ६४,६२, ५६,९४, ९५,८१, ८३, १०४,१०६, ५४ र सि.नं. ०१२५-२० कि.नं. ९,११ समेत साविक कुन कुन कित्ता भिड्ने हुन विविरण खुलाई पठाई दिन भनी नापी शाखा काठ्माण्डौले च.नं.१४०४४ मिति २०६१।३।११गते मालपोत कार्यालय डिल्लीबजार काठमाडौंलाई लेखेको पत्रमा दस्तखत गरेको, मिति २०६९।०६।१८ को मन्त्रिपरिषदलको निर्णय भन्दा अगाडि नै हालसाविक भिडाई हाल साविक भएका कित्ताहरू समेत किटान गरी सोही कुरा उल्लेख गरेको विषयमा पुन बढी कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको निज कर्ण बहादुर चन्दले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुऱ्याउने गलत नियतले **फरक व्यहोराको** पत्राचार गरी पेश गरी **कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको कार्य गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको **कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र एकिन भई पत्राचार गर्नु पर्ने**मा सो नगरेको देखिएको , **गलत तथ्यको आधारमा बढी** कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** म.प.को निर्णय हुदैमा हक मर्दैन , ऐन तथा अभिलेख सँग बाँझिएको व्यहोरालाई कार्यबिधिगत त्रुटी मानेर राष्ट्र सेवक कर्मचारीले ऐन नियमलाई टेकेर त्यस्ता ऐनसँग बाझिने निर्णयहरु कार्यान्वयन नगर्न पनि सक्ने भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पत्राचार गर्नु पर्नेमा सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **कर्ण बहादुर चन्दले** विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

२०१) **प्रतिवादी वेचन यादवको हकमा** :

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई

दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **वेचन यादव** समेत भई हाल कायम कि.नं. १७१ को श्रेत्रफल ००१५०.५१ कायम भए आनुसार नै कायम हुने देखिका सोही अनुसारको व्यहोरा अनुरोध छ भन्ने नापी कार्यालय काठमाडौंको च.नं. ३५४३ मिति ०६९।१२।१ गतेको कि.का. सम्बन्धमा श्री मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको पत्रमा मिति २०६९।१२।१ मा दस्तखत गरेको, मिति २०६९।०६।१८ को मन्त्रिपरिषदलको निर्णय भन्दा अगाडि नै हालसाविक भिडाई हाल साविक भएका कित्ताहरू समेत किटान गरी सोही कुरा उल्लेख गरेको विषयमा पुन बढी कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको निज वेचन यादवले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुऱ्याउने गलत नियतले **फरक व्यहोराको** पत्राचार गरी पेश गरी **कीर्ते गरेको**, **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको कार्य गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र एकिन भई पत्राचार गर्नु पर्ने**मा सो नगरेको देखिएको, **गलत तथ्यको आधारमा बढी** कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** म.प.को निर्णय भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पत्राचार गर्नु पर्नेमा सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **वेचन यादवले** बिगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

२०२) **प्रतिवादी राजेन्द्र प्रसाद मण्डलको हकमा**:

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **राजेन्द्र प्रसाद मण्डल** समेत भई सर्भेक्षेकको प्रतिवेदन चेक जाँच गर्ने,प्लट रजिष्ट फिल्ड बुकमा २९५ (नयाँ नापीको वडा नं. ४ सि.नं. १०२५-१५ कि.नं. ९९ बाट आएक) कुलो बाटो देखिएको, हाल नक्सामा पनि बाटो देखिएको, कि.नं. ३१४ नक्सामा बाटो देखिएको, २०६९।११।१७ को गुठी संस्थान शाखा कार्यालयलाई पठाएको पत्रमा साविक वडा नं. २३ ह कि. नं. ३१ को नयाँ नापीमा २३२,२८०,२८४,३१४,२६८ भिड्छ भनी पठाएको, २०६९।१२।५ मा मालपोत कार्यालयमा पठाएको पत्रमा सोही साविक कित्ता नयाँ नापीको कि. नं. २३२, २८४, ३१४, २६८ सँग भिड्छ भनी पठाएको , मिति २०६९।०६।१८ को मन्त्रिपरिषदको निर्णय भन्दा अगाडि नै हालसाविक भिडाई हाल साविक भएका कित्ताहरू समेत किटान गरी सोही कुरा उल्लेख गरेको विषयमा पुन बढी कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको निज राजेन्द्र प्रसाद मण्डलले सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याई ठगी समेत गर्ने गलत नियतले **फरक व्यहोराको** पत्राचार गरी **कीर्ते गरेको**, **सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको कार्य गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, **कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र एकिन भई पत्राचार गर्नु पर्ने**मा सो नगरेको देखिएको ,**गलत तथ्यको आधारमा बढी** कित्ता जग्गा भिड्छ भनी पत्राचार गरेको, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्न** म.प.को निर्णय हुदैमा हक मर्दैन, ऐन तथा अभिलेख सँग बाँझिएको व्यहोरालाई कार्यबिधिगत त्रुटी मानेर राष्ट्र सेवक कर्मचारीले ऐन नियमलाई टेकेर त्यस्ता ऐनसँग बाझिने निर्णयहरु कार्यान्वयन नगर्न पनि सक्ने

भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पत्राचार गर्नु पर्नेमा सो नगरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **राजेन्द्र प्रसाद मण्डलले** बिगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**२०३) <u>प्रतिवादी भेष बहादुर कार्कीको हकमा</u>** :

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **भेष बहादुर कार्की** समेत भई साविक नगर २३ (ह) कि.नं. ३५, हाल नापी सि.नं. १०२५-१५ कि.नं. ५६, सि.नं.१०२५-२० को कि.नं. ८० को जग्गाको स्वर्गीय मोही नाति महर्जनको नामवाट छोरा देव नारायण महर्जनको नाममा मोही हक नामसारी हुने ठहर्छ भनी मिति २०७०।०१।०३ मा निर्णय पर्चा खडा गरेको ,साविक नगर २३ (ह) कि.नं. ३१, हाल नापी सि.नं. १०२५-१५ कि.नं. २७८,२८४,२३२ र ३१४ का जग्गाको मोही जोगमान भन्ने न्हुच्छे महर्जनको नामवाट नाति द्वारीकामान महर्जनको नाममा र मोही हक नामसारी हुने ठहर्छ भनी मिति २०७०।०१।०५ मा निर्णय पर्चा खडा गरेको ,साविक नगर २३ (ह) कि.नं. २२ हाल नापी सि.नं. १०२५-१५ को कि.नं. २६२,२६७,२९५,२५९ जग्गाको मोही स्व. कृष्ण महर्जनको नामवाट निजको पत्नी श्रीमती मोहन महर्जनको नाममा मोही हक नामसारी हुने ठहर्छ भनी मिति २०७०।०१।०५ गते निर्णय पर्चा खडा गरेको निज भेष बहादुर कार्कीले मिति २०६९।०६।१८ मा मन्त्रिपरिषदले नयाँ नापी हाल साविक अनुसारको कित्ता नै किटान गरी निर्णय गरेको अवस्थामा गुठी संस्थानका प्रशासक र मन्त्रिपरिषदले निर्णय गरे भन्दा बढी

कित्ता (२३२,३१४,२५९) जग्गामा मोही नामसारी गर्ने निर्णय गरेको, मालपोत कार्यालयले पशुपति टिकिन्छा गुठीको नाममा जग्गा दर्ता नगर्दै (जग्गाधनी नै कायम नभएको अवस्थामा) पशुपति टिकिन्छा गुठीलाई जग्गाधनी कायम गरी मोही नामसारी गरेको ,कित्ता नं ३१४ (बाटो) र कित्ता नं २५९ (नयाँ नापीको कि नं ९९ कुलो बाटो सँग भिडी हाल दर्ता खाली रहेको जग्गा) समेत मोही कायम गरी नामसारी गरेको ,व्यहोरा फरक पारी बढी कित्ता जग्गाहरूमा तथा बाटोको जग्गामा समेत मोही कायम गर्ने निर्णय गरेको ,**सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको निर्णय पर्चा तयार गर्नु पर्ने**मा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको ,**पर्चा तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्ने**मा सो नगरेको देखिएको । **गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै** पर्चा खडा गरेको, **नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको टिकिन्छा गुठीको नाममा कायम गर्ने** म.प.को निर्णय भएतापनि ऐन कानून र नियमको अनदेखा गरी निर्णयमा पुगी पर्चा खडा गरी गलत निर्णयलाई पनि समर्थन गरी, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्ने श्रेस्ताबाट लगत कट्टा गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य प्रतिवादी **भेष बहादुर कार्कीले** विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

२०४) **प्रतिवादी सुरेन्द्र राज थापाको हकमा** :

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस,बि.सं.२०२१ को लगत का.जि. बालुवाटार-४हा.नं. ४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ मा गुठी लगत तथा तहबिल कार्यालयले मालपोत कार्यालयलाई ६४ पञ्चायतको नाममा जग्गाधनी पुर्जा बनाई दिने भनी लेखेको पत्र विवरणमा समेत बालुवाटार तथा ललिता निवास क्याम्प भित्रको क्षेत्रमा गुठीको लगत भएको नदेखिएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाई जिम्मा दिईएको पत्र, पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको,बि.सं. १९९४,१९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेतापनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज ( रसिद ) पेश गरेको,

जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी **सुरेन्द्र राज थापा** समेत भई साविक गुठी जग्गा श्री ५ को सरकारको नाउमा दर्ता हुन गएको देखिएमा गुठी संस्थानले गुठी संस्थान ऐन, २०३३ को दफा ३९ अनुसार पहिले नै निर्णय नगरी गुठी कायम हुनु पर्ने दायित्व आधार र किटानी राय समेत उल्लेख गरी गुठी कायम गर्ने बिषयमा श्री ५ को सरकारको स्वीकृतिको लागि यस मन्त्रालयमा पेश गर्नु भन्ने ऐनको दफा ५२ बमोजिम च.नं. ५०४५ मिति २०५५।०३।०८ को पत्रबाट निर्देशन भई आएको रहेछ, माथि उल्लेखित जग्गा पुरानो नापी बमोजिमका कित्ता श्री ५ को सरकार गुठीका र अन्यको नममा दर्ता भएकोमा नयाँ नापीमा श्री ५ को सरकार समरजंग कम्पनीका नापी दर्ता भएको र ती जग्गा पशुपति टिकिन्छा गुठीको लगत भित्रको हुँदा श्री ५ को सरकार समरजंग कम्पनीको नाममा भएको दर्ता कट्टा गरी श्री पशुपति टिकिन्छा गुठीका नाउमा दर्ता गर्ने स्वीकृतिको लागि भु.सु. मन्त्रालयमा पठाउन भनी २०६१।०८।०८ मा आदेश भएकोले आदेशानुसार सक्कल टिप्पणी सहितको प.व. फायल थान १८ साथ राखी अनुरोध गर्दछु भनी गुठी संस्थान केन्द्रीय कार्यालयको च.नं. ११८१ मिति २०६१।०८।१४ को पत्रबाट लेखि आएकोले पेश गरेको छु भन्ने व्यहोराको टिप्पणी उठाएको, केही कैफियत नगरी सोही व्यहोरा पेश गरेको, सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्‍याउने तथा सरकारको हक मेटाई हानी पुर्‍याउने गलत नियतले फरक व्यहोराको टिप्पणी राय पेश गरी कीर्ते कार्यमा संलग्न रहेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने अभिलेख एकिन गरी गरेर मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, टिप्पणी तयार गर्ने कित्ता जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको गलत मनसायले पेश भएको टिप्पणी पेश गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुठ्ठा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य निज प्रतिवादी **सुरेन्द्र राज थापा** विगो **रु.१,०८,७९,३१०/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्तिको नाममा मोही कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | १,०८,७९,३१०/- | १,०८,७९,३१०/- |

**२०५) प्रतिवादी चन्द्रदेव जोशीको हकमा:**

वि.सं. १९८७ सालको लालमोहर, बि.सं.२०१७ सालको सुवर्ण शम्शेर राणाले निजका सन्तानलाई दिएको बकस, बि.सं.२०२१ को लगत का.जि. वालुवाटार-४ हा.नं.४५६ (का.फौ.त.), बि.सं.२०२१ सालमा गुठी

शब्दावली उल्लेख नगरीकन गोरखापत्रमा प्रकाशित अधिग्रहण सम्बन्धी सूचना, बि.सं. २०४२।०१।१८ गतेको ६४ पञ्चायतको बिबरण गुठी शब्दावली प्रयोग नभएको, बि.सं.२०२३।०६।२३ मा उल्लेखित कित्ता जग्गा समेत समरजंग कम्पनीलाइ जिम्मा दिईएको पत्र (हा.नं. ४५६), पहिलो नापीमा फिल्डबुकको व्यहोरामा सरकारलाई अधिया तिरी खाएको छु भन्ने लेखिएको तर गुठी शब्दावली उल्लेख नभएकोर दोश्रो नापीमा जग्गाधनी महलमा नेपाल सरकार समरजंग कम्पनी भन्ने उल्लेख गरिएको र किसानले पनि गुठीको जग्गा किटान नगरेको, बि.सं. १९९४, १९९५ र २००९ मा कुत बुझाएको रसिद प्रतिवादी रामकुमार सुवेदीले पेश गरेता पनि सम्बन्धित मोहीलाई बुझ्दा उक्त रसिद सम्बन्धमा थाहा जानकारी नभएको भनी कागज गरेको र कुत बाली बुझाएको सम्बन्धमा छुट्टै कागज (रसिद) पेश गरेको, जसमा टिकिन्छा गुठी शब्दावली उल्लेख नभएको सो कारबाहीमा आएका कित्ता जग्गाहरु नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम भएका सरकारी जग्गा हो भन्ने थाहा जानकारी हुँदा हुँदै प्रतिवादी चन्द्र देव जोशी समेत भई कारवाहीमा आएका कित्ता जग्गाहरुका सम्बन्धमा "मा.पो.का. डिल्लीबजारको पत्रानुसार साविक नापीको कित्ता हा.सा.दर्ता वाँकी र हाल नापीमा श्री ५ को सरकार समरजंग कम्पनी र अन्य व्यक्तिको नाममा दर्ता भएको, समरजंग कम्पनीबाट यस कार्यालयवाट भन्न नसकिने ताँहाको लगत हेरी गर्नु भन्ने भनाई, सुवर्ण शमशेरका हकदारको आफ्नो हरण भएको सम्पत्ती अञ्चलाधिश कार्यालयलाई जिम्मा दिएको कारण श्री ५ को सरकार समरजंग कम्पनी र अञ्चलाधिश कार्यालयको नाम नापीको समयमा मोहीहरुले लेखाएका हुन् भन्ने भनाई, गुठी संस्थानवाट माग भए अनुसार गुठी लगत भित्रका पुन: नापीमा समरजंग कम्पनीका नाउमा दर्ता हुन गएका र दर्ता वाँकी रहेका बिभिन्न कित्ता जग्गा प्रचलित ऐन नियम तथा विनियमका आधारमा गुठी संस्थानले आफ्नो लगत भित्रको जग्गा दर्ता गरी अध्यावधिक समेत गर्न सैद्दान्तिक स्वीकृतिको लागि मन्त्री परिषदमा पेश गर्नु पर्ने भनी आएको प्रस्तावलाई मिति २०६३।०९।२५ गते मा. मन्त्रीवाट निर्णय भई ऐ. २७ गते म.प.मा पेश भएको, जग्गा (नापजाँच) ऐन, २०१९ बमोजिम साविक वडा नं. २३ क्ष कि.नं. ७३,३१ ऐ. वडा नं. २३ह २२,३५ जनिई नाप नक्सा भई दर्ता प्रमाणित हुन बाँकी रहेका जग्गाहरु पुन: नापी हुँदा तत्कालिन समयमा जग्गाको रेखदेख गर्ने समरजंग कम्पनीको नाममा दर्ता भएको पुन: नापी बमोजिम का.जि.का.म.न.पा. वडा नं. ४ सिट नं. १०२५-१५ को कि.नं. २६२,२०७,२९५,२७८,२८४ सिट नं. १०२५-१४ को कि.नं. ४८ र सिट नं. १०२५-२० को कि.नं. ५६, ८० का जग्गाहरुको साबिक गुठीको लगतका आधारमा नेपाल सरकार समरजंग कम्पनीको नामको दर्ता सच्याई प्रचलित कानून बमोजिम पशुपति टिकिन्छा गुठीका नाममा दर्ता भई गुठी संस्थानलाई स्वीकृति दिनका निमित्त नेपाल सरकार मन्त्रीपरिषद् समक्ष छलफलको लागि पेश हुनु पर्ने देखिंदा सोही प्रस्तुत गरेको छु भनी मिति २०६९/०४/०२ मा उ.स. हुपेन्द्र मणी के.सी.को टिप्पणी उपर "पेश भए अनुसारको निर्णयको लागि नेपाल सरकार म.प.मा प्रस्ताव पेश गर्न मनासिव देख्दछु" भनी मिति २०६९।०४।०५ मा स.स. तेजराज पाण्डेले पेश गरेको टिप्पणी फायलमा " पेश भए अनुसार हुनका लागि पेश गरेको छु" भनी मिति २०६९।०४।०७ मा सचिव दिनेश हरि अधिकारीले पेश गरेको टिप्पणी फायललाई "**सदर**" भनी मिति २०६९।०४।०८ गते **चन्द्रदेव जशीले** मन्त्रीको हैसियतमा म.प.मा पेश गर्नको लागि सदर गरे पश्चात मन्त्रिपरिषदमा पेश भएको, हुपेन्द्रमणी के. सी., तेजराज पाण्डे र दिनेश हरी अधिकारीको टिप्पणीलाई सदर गर्दै हस्ताक्षर गरेको निज **चन्द्रदेव जोशीले** सरकारी अभिलेखसँग बाझिने गरी तथा अभिलेख विपरितका व्यहोरा उल्लेख गरी सरकारी स्वामित्वको जग्गा व्यक्तिलाई मोही कायम गरी गुठीको नाममा दर्ता गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी रायलाई समर्थन गरी पेश गरेको राय टिप्पणी सदर गरी किर्ते

कार्यमा संलग्न रहेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा गुठीको जग्गा हो भन्ने एकिन भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वकको टिप्पणी तयार गर्न लगाई पेश भएको टिप्पणी सदर गर्नु पर्नेमा सो नगरी प्राप्त कागजातलाई आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, गलत तथ्यको आधारमा दिएको रायलाई समर्थन जनाउँदै गलत मनसायले पेश भएको टिप्पणीलाई सदर गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई पशुपति टिकिन्छा गुठीको नाममा दर्ता कायम गर्न झुट्टा तथा बेरितको टिप्पणी पेश गर्ने समेतको भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराई प्रतिवादी **चन्द्रदेव जोशीले** विगो **रु. ६३,१०,००,०००/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा अन्यत्र कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | - | ६३,१०,००,०००/- | ६३,१०,००,०००/- |

२०६) **प्रतिवादी श्याम कुमार क्षेत्रीको हकमा** :

साबिकको का.जि.का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा निज सुनिती राणाको नाममा दर्ता गर्ने क्रममा रुक्म शमसेर ज.ब.रा. समेतको मिति २०६०।०३।२३ को झुठो ब्यहोराको किर्ते मन्जुरिनामा कागज, काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको तत्कालिन वडा सचिव शिवजि भट्टराईले मिति २०६०।५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको झुठो ब्यहोराको किर्ते सिफारीस, निजै खरिदार **श्याम कुमार क्षेत्रीले** मिति २०६२।०१।११ मा तयार गरेको झुठो ब्यहोराको किर्ते सर्जमिन मुचुल्का, मिति २०६२।१।११ को हेमाद्री शमसेर ज.ब.राणाको झुठो ब्यहोरा उल्लेख गरेको हकदावी छाडेको किर्ते पत्र समेतका सरकारी तथ्य विपरीत झुठो ब्यहोराको किर्ते सरकारी कागजातहरुलाई आधार बनाई जग्गा प्रशासन निर्देशिका २०५८ को दफा ६० मा दफा ६२ मा ब्यबस्था भए अनुसारको कार्य पुरा नगरी थाहा पाएर पनि नपाए जस्तो गरी जानीजानी गलत मनसाय राखी कानून बमोजिम हुनु पर्ने भन्दा फरक तथा झुठो ब्यहोरा उल्लेख गरी खरिदार श्याम कुमार क्षेत्रीले मिति २०६२।२।२ मा टिप्पणी र आदेश तयार गरी सो टिप्पणी र आदेशमा दस्तखत गरेको, मिति २०६२।२।२ मा नै जग्गा दर्ताको लागि सिफारिस गर्दा भर्नु पर्ने फारामको बुदा नं.२१ मा संरक्षण कागजात सवुत प्रमाण तथा कार्यालयले श्रेष्ता भिडेको छ भनी झुठो ब्यहोरा उल्लेख गरी किर्ते प्रमाणित गरेको साथै निबेदकको माग बमोजिम सुनिती राणाको नाममा नामसारी हुने ठहर्छ भनी गलत तथा झुठो ब्यहोराको निर्णय पर्चा तयार गरी प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेको निर्णयबाट उक्त जग्गा गैरकानूनी तवरले सुनिती राणाको नाममा दर्ता कायम भई प्रतिवादी श्याम कुमार क्षेत्रीले विगो

रु.१,११,११,१११।- बराबरको सरकारी जग्गा ब्यक्ति विशेष सुनिती राणाको नाममा कायम गरेको देखिदा निज **प्रतिवादी**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | रु.१,११,११,१११।- | - | - | रु.१,११,११,१११।- |

२०७) **प्रतिवादी मो.साविर हुसेनको हकमा** :

साबिकको काठमाडौं जिल्ला का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि.सरकारी जग्गा सुनिती राणाले आफ्नो नाममा दर्ता कायम गर्न २०५८।०२।०८ मा ६ नं. नापी गोश्वारा महाराजगंजमा झुठो ब्यहोराको किर्ते निबेदन दिए पछि उक्त जग्गा निज सुनिती राणाको नाममा दर्ता गर्ने कार्य शुरू भएको देखिन्छ । यसरी उक्त सरकारी जग्गा सुनिरी राणाको नाममा दर्ता गर्ने क्रममा रुक्म शमसेर ज.ब.रा.समेतको मिति २०६०।०३।२३ को झुठो ब्यहोराको किर्ते मन्जुरिनामा कागज, काठमाडौं महानगरपालिका ४ नं. वडा कार्यालयको तत्कालिन वडा सचिव शिवजि भट्टराईले मिति २०६०।५।१२ मा मालपोत कार्यालय डिल्लीबजारलाई लेखेको झुठो ब्यहोराको किर्ते सिफारीस, खरिदार श्याम कुमार क्षेत्रीले मिति २०६२।०१।११ मा तयार गरेको झुठो ब्यहोराको किर्ते सर्जमिन मुचुल्का, मिति २०६२।१।११ को हेमाद्री शमसेर ज.ब.राणाको झुठो ब्यहोरा उल्लेख गरेको हकदावी छाडेको किर्ते निबेदन समेतको झुठो ब्यहोराको किर्ते कागजातहरुको आडमा छुट जग्गा दर्ता गर्दा छुट जग्गा दर्ता सिफारिस समितिले निर्णय पुस्तिकामा हस्ताक्षर समेत गरी निर्णयको अभिलेख राख्नु पर्नेमा अभिलेख नराखी उक्त सरकारी जग्गा सुनिती राणाको नाममा नामसारी दर्ता गर्ने प्रयोजनको लागि छुट जग्गा दर्ता समितिको सदस्यको हैसियतले मिति २०६२।०२।०२ मा प्रतिवादी **मो.साविर हुसेन** समेतले गरेको छुट जग्गा दर्ता समितिको सिफारिस कागज समेतका किर्ते गरेका झुठो ब्यहोराको अन्य सरकारी कागजातहरु समेतको आडमा प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेको मिति **२०६२।०२।०३** को निर्णयबाट उक्त जग्गा गैरकानूनी तरिकाबाट सुनिती राणाको नाममा दर्ता कायम भई प्रतिवादी मो.साविर हुसेनले विगो **रु.१,११,११,१११।–** वरावरको सरकारी जग्गा ब्यक्ति विशेष सुनिती राणाको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | रु.१,११,११,१११।- | - | - | रु.१,११,११,१११।- |

२०८) **प्रतिवादी कृष्णराज बिष्टको हकमा** :

साबिकको का.जि.का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल सरकारी जग्गा सुनिती राणाको नाममा दर्ता कायम गर्न काठमाडौं

महानगरपालिका ४ नं. वडा कार्यालयको तत्कालिन वडा **सचिव कृष्णराज बिष्टले** कानुन बमोजिम ब्यक्तिको नाममा दर्ता गर्न नमिल्ने उक्त सरकारी जग्गालाई वडा सचिव जस्तो जिम्मवार कर्मचारी भएर निबेदकसँग मिलेमतो गरी कानुन बमोजिम हुनु पर्ने भन्दा बिपरित तथ्य फरक पारी "का.जि.का.म.पा.वडा नं. ४ बस्ने सुनिती राणाले साबिक मौजा हाडिगाउ हा.नं.४५६ मध्ये भिडी दर्ता हुने नापीको समयमा नाप नक्सा हुँदा पति कनक शमसेर ज.ब.रा.को नाममा नाप नक्सा भएको साबिक नगर २३ "स" कित्ता नं.२६ क्षेत्रफल ०-१२-२-० को हाल नयाँ नापिमा का.म.नं.पा. वडा नं.४ सिट नं.१०२५-२० कि.नं.४८ क्षेत्रफल १४०.८६ र ऐ.ऐ. कि.नं.१११ क्षेत्रफल ३९२.९९ को जग्गा निज दर्तावालाको शेष पछि हकखाने हकदारमा निजको श्रीमती सुनिती राणा र छोरा होमाद्री शमसेर ज.ब.रा.जना २ मात्र भएको, दर्तावाला कनक शमसेरको मिति ०४३।०९।०६ मा मृत्यु भईसकेको र हाल उक्त नयाँ नापी अनुसारको जग्गा समेत निबेदकले नै परापुर्वक कालदेखी कम्पाउण्ड लगाई निर्बिबादरुपमा भोगचलन गरी आउनु भएको छ, उक्त जग्गा निबेदककै पृतिक जग्गा हो निबेदकका माग बमोजिम दर्ता गरीदिएमा फरक पर्दैन कुनै सरकारी तथा सार्वजनिक र ब्यक्ती बिशेषको जग्गा समेत पर्दैन" भनी मिति **२०६२।०१।११ को** झुठो तथा गलत ब्यहोराको किर्ते **सर्जमिन मुचुल्कामा** रोहवरमा दस्तखत गरेकोले उक्त किर्ते सर्जमिन मुचुल्का समेतका अन्य कागजातहरुको आड हाली मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट मिति २०६२।०२।०३ मा गैरकानूनी तवरले उक्त जग्गा सुनिती राणाको नाममा दर्ता कायम भई प्रतिवादी कृष्णराज बिष्टले विगो रु.**१,११,११,१११।–** बराबरको सरकारी जग्गा ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | रु.१,११,११,१११।- | - | - | रु.१,११,११,१११।- |

२०९) **<u>प्रतिवादी हेमाद्री शम्सेर ज.व.राणाको हकमा</u>** :

काठमाडौं जिल्ला का.न.प.वडा नं.२३ "स" कि.नं.१६ को क्षेत्रफल ८-१२-२ कट्टा गरी पुर्जा पाउ भन्ने माग र माग अनुसार रोपनी ८-×-× कनक शमसेर ज.ब.रा.को नाउमा बाँकी ×-१२-२ श्री ५ को सरकारले प्राप्त गर्ने गरी साबिक कि.नं.१६ बाट कित्ता फोड भै कि.नं.२५ कनक शमसेर कि.नं.२६ **श्री ५ को सरकार कायम गरी** दिनु पर्ने देखि आदेशले श्रीमान समक्ष पेश गरेको छु" भन्ने समेत ब्यहोराको टिप्पणी र आदेश समेत पाना-१४ को छाँया कपि भर्पाई गरी **मिति ०५७।०३।२१ मा प्रतिवादी हेमाद्री शमसेर ज.ब.राणाले** बुझी लिई गएको यस कसूरमा साक्षीको रुपमा कागज गर्ने **रमेश कुमार पोखरेल** र **लक्ष्मी प्रसाद काफ्ले** आफुले गरेको कागजमा उल्लेखित पाना-१४ का कागजातहरु निज हेमाद्री शम्सेर ज.व.राणाले नै बुझी लगेका हुन भनी खुलाई लेखाई दिएको ब्यहोरा समेतबाट निज प्रतिवादी हेमाद्री शमसेर ज.ब.राणालाई उक्त जग्गा सरकारी जग्गा हो भन्ने बिषयमा जानकारी भएको स्पष्टरुपमा देखिन्छ।

यसरी सरकारी जग्गा भएको जानकारी हुँदा हुदै पनि प्रतिवादी हेमाद्री शम्सेर ज.व.राणाले ४ नं. वडा कार्यालयका वडा सचिव शिवजी भट्टराईले **मिति २०६०।५।१२ मा** कानुन बमोजिम हुनु पर्ने भन्दा फरक मतलब निस्कने झुठो ब्यहोराको किर्ते सिफारिस पत्र प्रतिवादी हेमाद्री शमसेर ज.ब.राणाले मिति २०६०।०५।१५ मा मालपोत कार्यालय डिल्लीबजारमा पेश गरेको साथै आफ्नो हक नपुग्ने सरकारी जग्गा

ब्यक्ती बिशेष आफ्नो आमा सुनिती राणाको नाममा दर्ता गर्नको लागि "मेरो पिता कनक शमसेर ज.व.रा.को नाममा नाप नक्सा भई दर्ता हुन छुट भएको का.जि.का.म.न.पा.वडा न.२३ "स" कि.न.२६ क्षेत्रफल ०-१२-२-० जग्गाको हाल नया नापीमा कायम का.म.पा.वडा नं.४ सिट न.१०२५-२० कि.न.४८ क्षेत्रफल १४.८६ र ऐ.ऐ.कि.न.१११ क्षेत्रफल ३९२.९९ जग्गाको हकदारहरुमा म र मेरो आमा सुनिती राणा मात्र भएको, अन्य हक खाने हकदारहरु कोही नभएको र पिता कनक शमसेरको मिति ०४३।०९।०६ मा मृत्यु भैसकेकोले उक्त किता जग्गा आमा सुनिती राणाको नाम मात्र एकलौटी ना.सा. दर्ता भएमा मेरो मन्जुरी छ। मेरो मनोमान राजीखुसी सँग यो हकदाबी छाडी दिएको छु, पछि कहि दाबी गरेमा यसै निबेदनले बदर गरी दिए हुन्छ" भनी मिति २०६२।०१।११ मा प्रतिवादी हेमाद्री शमसेर ज.व.राणाले किर्ते गरी तथ्य बिपरीत झुठो ब्यहोरा उल्लेख गरी **हकदाबी छोडेको निबेदन** मालपोत कार्यालय डिल्लीबजारमा पेश गरी सो किर्ते गरेका सरकारी कागजातहरुको आड हाली मालपोत कार्यालय डिल्लीबजार काठमाडौंको तत्कालिन प्रमुख मालपोत अधिकृत टिकाराम घिमिरेको मिति **२०६२।०२।०३** को निर्णयबाट उक्त जग्गा सुनिती राणाको नाममा गैरकानूनी तवरले दर्ता कायम गरी प्रतिवादी हेमाद्री शम्सेर ज.ब.राणाले विगो **रु.१०,००,००,०००।-** बराबरको सरकारी जग्गा ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता कायम गरी प्रस्तुत कसूर अपराध गरेको देखिदा निज प्रतिवादी**ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | १०,००,००,०००।- | - | - | १०,००,००,०००।- |

२१०) **प्रतिवादी मेघराज कोईरालाको हकमा**:

साबिकको का.जि.का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल जग्गाको हकदारमा श्रीमती सुनिती राणा र छोरा हेमाद्री शमसेर ज.ब.रा.जना २ मात्र भएको, कनक शमसेरको मिति ०४३।०९।०६ मा मृत्यु भईसकेको र हाल उक्त जग्गा समेत निबेदकले नै परापुर्वक कालदेखि कम्पाउण्ड लगाई निर्बिबादरुपमा भोगचलन गरी आउनु भएको छ, उक्त जग्गा निबेदककै पैतृक जग्गा हो माग बमोजिम दर्ता गरी दिएमा फरक पर्दैन, कुनै सरकारी तथा सार्वजनिक र ब्यक्ति बिशेषको जग्गा समेत पर्दैन" भनी **मिति २०६२।१।११ मा** " मालपोत कार्यालय डिल्लीबजारको खरिदार श्याम कुमार क्षेत्रीले झुठो कुरालाई ठीक हो भनी किर्ते गरी लेखेको झुठो ब्यहोराको सर्जमिन मुचुल्कामा **मेघराज कोईराल** समेतले साक्षी बसी दस्तखत गरेका कागज समेत अन्य सरकारी कागजातहरुको आधारमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट मिति **२०६२।०२।०३** उक्त सरकारी जग्गा सुनिती राणाको नाममा गैरकानूनी तवरले दर्ता कायम भई प्रतिवादी मेघराज कोईरालाले **विगो रु. १,४२,८५,७१४।–** बराबरको सरकारी जग्गा ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी **मेघराज कोईराला**ले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | १,४२,८५,७१४।- | - | - | १,४२,८५,७१४।- |

**२११) <u>प्रतिवादी मन्दिरा कोईरालाको हकमा</u>** :

साबिकको का.जि.का.न.प.२३ "स" कि.नं. २६ को ०-१२-२-० हालको नयाँ नापीमा कायम का.म.पा. वडा नं. ४ को सिट नं.१०२५-२० को कि.नं.४८ को ०००१४.८६ ब.मि. क्षेत्रफल जग्गा र सिट नं.१०२५-१५ को कि.नं.१११ को ००३९२.९९ ब.मि. क्षेत्रफल जग्गाको हकदारमा श्रीमती सुनिती राणा र छोरा हेमाद्री शमसेर ज.ब.रा.जना २ मात्र भएको, कनक शमसेरको मिति ०४३।०९।०६ मा मृत्यु भईसकेको र हाल उक्त जग्गा समेत निबेदकले नै परापुर्वक कालदेखि कम्पाउण्ड लगाई निर्बिबादरुपमा भोगचलन गरी आउनु भएको छ, उक्त जग्गा निबेदककै पैतृक जग्गा हो माग बमोजिम दर्ता गरी दिएमा फरक पर्दैन, कुनै सरकारी तथा सार्वजनिक र ब्यक्ति बिशेषको जग्गा समेत पर्दैन" भनी मिति २०६२।१।११ मा " मालपोत कार्यालय डिल्लीबजारको खरिदार श्याम कुमार क्षेत्रीले झुठो कुरालाई ठीक हो भनी किर्ते गरी लेखेको झुठो ब्यहोराको सर्जमिन मुचुल्कामा मन्दिरा कोईराल समेतले साक्षी बसी दस्तखत गरेका कागज समेत अन्य सरकारी कागजातहरुको आधारमा मालपोत कार्यालय डिल्लीबजार काठमाडौंबाट मिति २०६२।०२।०३ उक्त सरकारी जग्गा सुनिती राणाको नाममा गैरकानूनी तवरले दर्ता कायम भई प्रतिवादी मन्दिरा कोईरालाले **विगो रु.१,४२,८५,७१४।–** बराबरको सरकारी जग्गा ब्यक्ति बिशेष सुनिती राणाको नाममा दर्ता कायम गरेको देखिदा निज प्रतिवादी मन्दिरा कोईरालाले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | १,४२,८५,७१४।- | - | - | १,४२,८५,७१४।- |

**२१२) <u>प्रतिवादी मोतीराजा महर्जनको हकमा</u>** :

प्रतिवादी मोतिराजा महर्जनले सरकारी जग्गा मस्यौट गर्ने बद्नियतले जग्गा कारोबारी रामकुमार सुवेदी समेतको मिलोमतोमा निजको दाजु श्रीकृष्ण महर्जनलाई हाल वडा नं. ४ सिट नं. १०२५-१९ कि.नं. ५,६ र १४ को जग्गाको मोही भनिएको लक्ष्मीनारायण महर्जनको हकमा हकवाला छोरा श्रीकृष्ण महर्जनलाई उक्त कित्ताहरुको मोहीले पाउने भाग दिए हुन्छ भनी मिति २०६७/०३/०९ गते मालपोत कार्यलय डिल्लिबजारमा मञ्जुरी दिई सरकारी जग्गा मोही भनिएका ब्यक्तिको नाममा कायम गर्न मतियारको काम गरेको र झुट्ठा प्रमाणलाई समर्थन गरी निज प्रतिवादी मोतीराजा महर्जनले विगो **रु.३,८२,५०,०००।–** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते व्यहोरामा मन्जुरी दिई कसूर गरेको देखिदा निज प्रतिवादी**ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | ३,८२,५०,०००।- | - | ३,८२,५०,०००।- |

२१३) **प्रतिवादी कान्छा महर्जनको हकमा** :

प्रतिवादी कान्छा महर्जनले सरकारी जग्गा मस्यौट गर्ने बद्नियतले जग्गा कारोबारी रामकुमार सुवेदी समेतको मिलोमतोमा निजको दाजु ग्वाराभाई महर्जनलाईहाल वडा नं. ४ सिट नं. १०२५-१५ कि.नं. १०६ जग्गाको मोही भनिएको नारन्चा महर्जनको हकमा हकवाला छोरा ग्वाराभाई महर्जनलाई उक्त कित्ताको मोहीले पाउने भाग दिए हुन्छ भनी मिति २०६७/०३/०९ गते मालपोत कार्यलय डिल्लि बजारमा मञ्जुरी दिई सरकारी जग्गा मोही भनिएका ब्यक्तिको नाममा कायम गर्न मतियारको काम गरेको र झुट्ठा प्रमाणलाई समर्थन गरी निज प्रतिवादी कान्छा महर्जनले विगो **रु.७,५५,६०,०००/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते व्यहोराको मन्जुरी दिएको देखिदा निज प्रतिवादी **कान्छा महर्जनले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | ७,५५,६०,०००/- | - | ७,५५,६०,०००/- |

२१४) **प्रतिवादी नरयन्द्र महर्जनको हकमा** :

प्रतिवादी नरयन्द्र महर्जनले सरकारी जग्गा मस्यौट गर्ने बद्नियतले जग्गा कारोबारी रामकुमार सुवेदी समेतको मिलोमतोमा निजको दाजु देवनारायण महर्जनलाई हाल वडा नं. ४ सिट नं. १०२५-१४ कि.नं. २६,११,१२,१३,२८ र २१ को जग्गाको मोही भनिएको ड्राइभर भाईचाको हकमा हकवाला नाती देवनारायण महर्जनलाई उक्त कित्तहरुको मोहीले पाउने भाग दिए हुन्छ भनी मिति २०६७/०३/०९ गते मालपोत कार्यलय डिल्लिबजारमा मञ्जुरी दिई सरकारी जग्गा मोही भनिएका ब्यक्तिको नाममा कायम गर्न मतियारको काम गरेको र झुट्ठा प्रमाणलाई समर्थन गरी निज प्रतिवादी नरयन्द्र महर्जनले विगो **रु.११,९२,००,०००/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराउन जानी बुझी कीर्ते कागजमा साक्षी बसी कसूर गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | ११,९२,००,०००/- | - | ११,९२,००,०००/- |

२१५) **प्रतिवादी प्रेम बहादुर खापुङको हकमा** :

प्रतिवादी प्रेम बहादुर खापुङ मालपोत कार्यालय डिल्लिबजारको तत्कालिन मालपोत अधिकृत पदमा कार्यरत रहेको अवस्थामा सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले कोही कसैलाई मोही कायम नगरेको अवस्था बिद्यमान हुँदाहुँदै सो फैसलालाई गलत व्याख्या गरी मिति २०६६/१०/१० गते, च.नं. ९००९ को मालपोत कार्यालयको पत्रमा सर्बोच्च अदालतको मिति २०६४/११/३० को फैसला मुताविक मोही कायम भएको जग्गा भनी कार्यालयको अभिलेख भन्दा फरक मोहीहरुको नामावली उल्लेख गरी सरकारी जग्गामा

मोही छ भनी फरक व्यहोराको पत्र भवन निर्माण सम्भार डिभिजन कार्यालयलाई पत्राचार गरेको, निजले लेखि पठाएको सोही पत्रको आधारमा नेपाल सरकार (मन्त्रिपरिषद) को निर्णयार्थ अनुसूची तयार भएको र मन्त्रिपरिषदको निर्णय पश्चात मोही भनिएका व्यक्तिहरुले मालपोत कार्यालय, डिल्लीबजारको च.नं. ९००९, मिति २०६६/१०/१० गतेको पत्र समेतले हामीलाई मोही कायम गरेको भनी निवेदन दाबि गरेको, भूमिसुधार कार्यालय, काठमाडौंको च.नं. ५१४०, मिति २०६६।१०।१५ को पत्रले "...मोही तथा तिनका हकदारहरुले निवेदन माग गरी कारवाही चलिरहेको..." भनी उल्लेख गरेको तर सो भन्दा अगावै मालपोत कार्यालय, डिल्लीबजारको च.नं. ९००९, मिति २०६६।१०।१० को पत्रले मोही कायम गरेको भनी उल्लेख गरेको पाईएकोले पनि मालपोत कार्यालयको च.नं. ९००९ को पत्र जग्गा बिचौलियाको प्रभावमा पत्राचार गरेको स्पष्ट देखिन आएको र निज प्रतिवादी **प्रेम बहादुर खापुङ्ले** अधिग्रहण भएको ललिता निवास क्याम्प भित्रको जग्गा मध्येबाटै व्यक्तिको नाममा गएको जग्गाबाट २०४९ सालमा १-१४-२-० रोपनी श्रीमती खिमादेवी आङ्बुहाङको नाममा हा.व. गरी लिएको समेत देखिए बाट निज प्रतिवादी **प्रेम बहादुर खापुङ्ले** सरकारी जग्गा मस्यौट गरी व्यक्ति विशेषका नाममा दर्ता कायम हुने गरी योजनाबद्ध ढंगबाट फरक व्यहोराको पत्र लेखी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी तथा व्यक्ति बिशेषको नाममा मोही कायम गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्राचार गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भनी एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वक पत्राचार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र पत्राचार गर्नु पर्नेमा सो नगरेको देखिएको, गलत तथ्यको आधारमा समर्थन जनाउँदै पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको मोहीको नाममा कायम गर्न पत्राचार गरी अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको देखिदा निज प्रतिवादी **प्रेम वहादुर खापुङ्ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२१६) <u>प्रतिवादी हरीकृष्ण तिमल्सिनाको हकमा</u>** :

प्रतिवादी हरिकृष्ण तिमल्सिना मालपोत कार्यालय डिल्लिबजारको प्रमुख मालपोत अधिकृत रहेको अवस्थामा गलत व्यहोरा आउने गरी मोठ भिडाएको मि.नं. ५५ मा सरकारी जग्गा मालपोत अधिकृत पर्शुराम पोखरेलबाट पेश भएको राय, टिप्पणीमा पेश भए अनुसार संलग्न म.प.का निर्णय, मन्त्रालयको पत्र र प्राप्त अनुसुची बमोजिम हुने गरी मन्त्रिपरिषदको निर्णयको आड लिई प्रचलित कानूनको अनदेखा गरी बिचौलिया रामकुमार सुवेदी

समेतको प्रभावमा परी सरकारी जग्गा व्यक्ति विशेषको नाममा दा.खा. हुने गरी मालपोत कार्यालय, डिल्लीबजारको, मि.नं. ५५ मिति २०६७/८/१६ मा सदर गरी सरकारी जग्गा व्यक्ति विशेषको नाममा जग्गा दा.खा. समेत गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्राचार गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भनी एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वक टिप्पणी सदर गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र टिप्पणी सदर गर्नु पर्नेमा सो नगरेको देखिएको, गलत तथ्यको आधारलाई समर्थन जनाउँदै पत्राचार गरी निज प्रतिवादी हरिकृष्ण तिमल्सिनाले विगो **रु.१०,५१,१२,९०३।–** बराबरको नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको मोहीको नाममा कायम गर्न टिप्पणी सदर गरी अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | - | १०,५१,१२,९०३।- |

२१७) **प्रतिवादी टंकनाथ पौडेलको हकमा** :

प्रतिवादी टंकनाथ पौडेल मोही भनिएका व्यक्ति तथा विस्तारित क्षेत्रमा पर्ने व्यक्तिको नाममा जग्गा सट्टाभर्ना दिनेगरी मालपोत कार्यालयबाट निर्णय कार्यान्वयन गर्ने क्रममा उठेको मि.नं. ५५ मा प्रचलित कानूनको अनदेखा गरी बिचौलिया रामकुमार सुवेदी समेतको प्रभावमा परी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी उठाई किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भनी एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वक टिप्पणी उठाउनु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र टिप्पणी तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा समर्थन जनाउँदै सुरु टिप्पणी तयार गरेको, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको मोहीको नाममा कायम गर्न सुरु टिप्पणी उठाउने भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी **टंकनाथ पौडेलले विगो रु.१०,५१,१२,९०३।–** बराबरको नेपाल सरकार समरजंग

कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको देखिदा निज प्रतिवादी **ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | - | १०,५१,१२,९०३।- |

**२१८) प्रतिवादी अर्जुन खतिवडाको हकमा** :

प्रतिवादी अर्जुन खतिवडाले सरकारी जग्गामा मोही नहुने कानूनी प्रावधानको बारेमा जानकार हुँदा-हुँदै सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलाले कोही कसैलाई मोही कायम नगरेको अवस्थामा समेत सो फैसलालाई अपव्याख्या गरी उक्त फैसलाले मोही कायम गरेको भनी झुठो तथा फरक व्यहोराको पत्राचार गरेको, मालपोत कार्यालय, डिल्लीबजारको च.नं. ९००९, मिति २०६६/१०/१० गते भवन निर्माण संभार डिभिजन कार्यालय, अनामनगरलाई लेखेको पत्रमा मोहीको नाम कार्यालयको अभिलेख भन्दा फरक हुने तथा सरकारी जग्गामा मोही छ भनी उल्लेख गरी झुठा तथा फरक व्यहोराको कीर्ते पत्र तयार गरी पत्राचार गरेको र मालपोत कार्यालयको मि.नं. ५५ मा सरकारी जग्गामा मोही कायम रहेको तथा फरक व्यहोरा आउने गरी मोठ भिडाई निज प्रतिवादी अर्जुन खतिवडा समेतले नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम गरेको भनी पत्राचार गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्राचार गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भनी एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वक पत्राचार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र पत्राचार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा समर्थन जनाउँदै पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको मोहीको नाममा कायम गर्न पत्राचार गरी भूमिकामा रहि अर्काको हक जाने नोक्सान हुने झुट्टा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी अर्जुन खतिवडाले विगो **रु.१०,५१,१२,९०३।–** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गर्ने कार्य गरेकोले निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३।- | - | १०,५१,१२,९०३।- |

**२१९) प्रतिवादी चिरन्जिवी अधिकारीको हकमा** :

प्रतिवादी चिरन्जिवी अधिकारी नेपाल सरकार समरजंग कम्पनीको कार्यालय प्रमुख भई कार्यरत रहेको अवस्थामा तत्कालीन सरकारले मिति २०२१।०८।१५ को निर्णयले अधिग्रहण गरी प्राप्त समरजंग कंपनीको

रेखदेखमा रहेको सरकारी जग्गाको अभिलेख नराखेको, सरकारी जग्गाको संरक्षण नगरेको, आफ्नो कार्यालयको जिम्मामा के-कति जग्गा रहेको छ भनी खोज्ने कार्य नगरेको साथै नेपाल सरकार समरजंग कम्पनीकोनाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गराउन गैह्र जिम्मेवारीपुर्ण तरीकाले आफ्नो कार्यालयको जिम्मा, संरक्षण, रेखदेखमा रहेको जग्गाकोसंरक्षण नगरीगलत मनसाय तथा अदृष्य शक्तिको प्रभावमा परी आफ्नो जग्गाको प्रमाण लिई दावी उजूर गर्न नगएको,सरकारी जग्गाको हक मेटाई सरकारी स्वामित्वको जग्गा ब्यक्ती तथा संस्थाको नाममा कायम गर्न अनुकुल हुनेगरी, जग्गाको अभिलेख समेत खोज तलास नगरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले सरकारी जग्गाको हकदावी गर्न आउने सूचना जारी हुँदा समेत दावी गर्न नगएकोले फरक व्यहोरा तयार गरी किर्ते गरेको सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई एकिन गरेर आफ्नो जग्गाको अभिलेख राख्ने, संरक्षण गर्नु पर्नेमा सो नगरी निज प्रतिवादी **चिरन्जिवी अधिकारीले** विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गराउन र अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गर्ने कार्य गरेकोले निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२२०) **प्रतिवादी दिप बस्न्यातको हकमा** :

प्रतिवादी दिप बस्न्यातले भौतिक योजना तथा निर्माण मन्त्रालयको सचिव पदमा कार्यरत रहेको अवस्थामा विशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गर्ने क्रममा जग्गाहरुको विवरण तयार गर्न मालपोत कार्यालय डिल्लीबजार, नापी कार्यालय, डिल्लीबजार र गुठी संस्थानको शाखा कार्यालय काठमाडौंबाट कागजातहरु संकलन गर्ने कार्यहरु भईसकेका छन् भनी उल्लेख भएको टिप्पणी र सोही टिप्पणीमा सरकारी जग्गामा मोही भए/नभएको भए के कति छन् सो को एकिन गर्ने निर्देशन प्राप्त भए बमोजिम सरकारी जग्गामा रहेका मोहीहरुको लगत तयार गरिएको छ भनी उक्त टिप्पणी लेखिएबाट विशिष्ट व्यक्तिहरुको निवास परिसर साँघुरो भई आवश्यकताको आधारमा परिसर विस्तार गर्ने कार्य गरेको नभई पूर्व निर्धारित र पूर्व निर्देशित (Pre-occupied mind) तवरले सरकारी जग्गामा मोही कायम गर्ने परिपञ्च र योजना मुताबिक नै नेपाल सरकार समरजंग कम्पनीको नाममा कायम रहेको सरकारी तथा सार्वजनिक जग्गा राजकुलो बाटोमा समेत मोही कायम हुने गरी मोही र जग्गा सम्बन्धि विषय हेर्ने जिम्मेवारी रहेको भूमी सुधार मन्त्रालयको क्षेत्राधिकार भित्र प्रवेश गरी भौतिक योजना तथा निर्माण मन्त्रालयको तर्फबाट मन्त्रिपरिषदमा निर्णायार्थ प्रस्ताव लैजाने गरी किर्ते कागजात, झुठो विवरण र फरक व्यहोराका आधारमा तयार पारी पेश हुन आएको टिप्पणीलाई मिति २०६६/१२/१९ गते स्वीकृत गरी अगाडी बढाएको, यसै गरी फरक व्यहोराको कीर्ते कागजातबाट शुरु भएको भौतिक योजना तथा निर्माण मन्त्रालयको मिति २०६६/१२/१९ गतेको प्रस्तावमा नेपाल सरकार मन्त्रिपरिषदबाट निर्णय भई कार्यान्वयनको चरणमा रहेका जग्गाको विवरणहरुमा केही मानविय भूल तथा त्रुटीहरु देखिन गएकोले सो

सच्याई कार्यान्वयन गर्न गराउन भुल सुधार गरी कायम हुने अनुसुची १,२ र ३ लाई नेपाल सरकार मन्त्रिपरिषदको निर्णयबाटै हुनु कानून सम्मत हुने हुँदा मन्त्रिपरिषदमा प्रस्ताव पेश गर्न भनी उप प्रधानमन्त्री समक्ष पेश गरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी स्वीकृत गरी मन्त्रालयको तर्फबाट मन्त्रिपरिषदमा निर्णायार्थ प्रस्ताव लगी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणी स्विकृत गरी पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा टिप्पणी स्विकृत गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गरी निज प्रतिवादी **दिप बस्न्यात समेतले विगो रु.१०,५१,१२,९०३/-** बराबरको किर्ते गरेको देखिदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२२१) <u>प्रतिवादी अशोक नाथ उप्रेतीको हकमा</u>** :

प्रतिवादी अशोकनाथ उप्रेती शहरी विकास तथा भवन निर्माण बिभागमा महानिर्देशक पदमा कार्यरत रहेको अवस्थामा ".का.मु. डिभिजन प्रमुखको मिति ०६६/१२/१८ को राय बमोजिम मन्त्रीपरिषद समक्ष प्रस्ताव पेश गर्न मनासिब भएको व्यहोरा पेश गरेको छु" भन्ने व्यहोरा उल्लेख गरी कीर्ते कागजातको आधारमा तयार गरिएको फरक व्यहोराको टिप्पणी र आदेशमा टिप्पणी पेश गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा नक्कली मोही, व्यक्ति तथा संस्थाको नाममा लैजाने टिप्पणीमा सरकारी जग्गा हानी नोक्शानी गराउने टिप्पणी अगाडी बढाई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी पेश गरी किर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणी पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा टिप्पणी पेश गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक

जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट निज प्रतिवादी **अशोक नाथ उप्रेतीले विगो रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको देखिदा निज प्रतिवादी ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२२२) **प्रतिवादी सुरोजराज राजकर्णिकारको हकमा:**

प्रतिवादी सुरोजराज राजकर्णिकार शहरी विकास तथा भवन निर्माण विभागमा सुपरिटेण्डेन्ट ईन्जिनियर पदमा कार्यरत रहेको अवस्थामा सिनियर डिबिजनल ईन्जिनियर बाल कृष्ण श्रेष्ठले पेश गरेको टिप्पणीमा सहमत भएको र सम्माननिय प्रधानमन्त्रीज्यूको निवास परिसर बिस्तार सम्बन्धमा मन्त्रीपरिषद समक्ष प्रस्ताव पेश गर्न पंजिका बमोजिमको कागजात एवं नक्सा समेत संलग्न गरी सिफारीस सहित स्विकृतीको लागि निर्णयार्थ पेश गरेको छु भन्ने व्यहोराको टिप्पणी लेखी तत्कालिन महानिर्देशक समक्ष पेश गरेको र झुठो तथा कीर्ते कागजातको आधारमा उठेको कीर्ते व्यहोराको टिप्पणीमा सहमत भई तथा स्विकृतीको लागि निर्णयार्थ पेश गरी नेपाल सरकार समरजंग कंपनीको नाममा रहेको सरकारी जग्गा नक्कली मोही र व्यक्ति तथा संस्थाको नाममा लैजाने टिप्पणीमा संलग्न भई सरकारी जग्गा हानीनोक्शानी गराउने टिप्पणीमा सहमत भई अगाडी बढाई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी पेश गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणी पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा टिप्पणी पेश गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्य गरी निज प्रतिवादी सुरोज राज राजकर्णिकारले विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा प्रतिवादी**ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२२३) **प्रतिवादी राजेन्द्रमान श्रेष्ठको हकमा:**

प्रतिवादी राजेन्द्रमान श्रेष्ठ शहरी विकाश तथा भवन निर्माण विभागमा ईन्जिनयर पदमा कार्यरत रहेको अवस्थामा मिति २०६६/१२/१८ गतेको टिप्पणीमा सुरक्षा संवेदनशिलता उल्लेख गरी प्रधानमन्त्री निवास परिसर विस्तार गर्न आवश्यक रहेको उल्लेख गरेकोमा भौतिक योजना तथा निर्माण मन्त्रालयको कर्मचारी सुरक्षा विज्ञ नभएकोले सुरक्षा संवेदनशिलताको आड हालेकोले सोमा समेत मिलेमतो देखिएको, नेपाल सरकार समरजंग कम्पनीको नाममा कायम भएको सरकारी सार्वजनिक जग्गा (राजकुलो,बाटो) मा समेत मोही कायम हुने गरी मिति २०६६/१२/१८ गते २७-७-२-१ रोपनी सरकारी जग्गा मध्ये मोहीको भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५ जग्गा र साविक बाटो तथा राजकुलो समेतको क्षेत्रफल ०-१५-०-२ रोपनी गरी जम्मा क्षेत्रफल १४-१-३-२.५ मा प्रधानमन्त्री निवास परिसर विस्तार गर्ने, विस्तारित क्षेत्रभित्र पर्ने व्यक्ति तथा संस्थाको नाममा रहेको जग्गा सोध भर्ना र सट्टापट्टा गर्ने, ५७० मि. लम्बाई र ८ मि. चौडा बाटो निर्माण गर्ने तथा उक्त बाटोमा नेपाल सरकारको नाममा रहेको १-११-२-० रोपनी र व्यक्तिको नाममा दर्ता रहेको ७-३-१-१ रोपनी जग्गा सहमति बमोजिम प्राप्त गर्ने भन्ने लगायतको विषय उल्लेख गरेको, यसरी मन्त्रालयबाट प्रस्ताव उठाउँदा भूमि सुधार, मालपोत, नापी, गुठी कार्यालयबाट विभिन्न विवरणहरु माग गरिएकोमा भूमिसुधार कार्यालय, काठमाडौंको च.नं. ५१४०, मिति २०६६/१०/१५ को कीर्ते पत्र, मालपोत कार्यालय, काठमाडौंको च.नं. ९००९ को फरक तथा झुठो व्यहोराको कीर्ते पत्र रहेको ,यसरी झुठो तथा फरक व्यहोराको कीर्ते पत्रको आडमा आफ्नो कार्यालयको क्षेत्राधिकार भित्र नपर्ने कार्यमा टिप्पणी उठाई नेपाल सरकार समरजंग कंपनीको जग्गा नक्कली मोही र व्यक्ति तथा संस्थाको नाममा लैजान नेपाल सरकार मन्त्रिपरिषद्मास प्रस्ताव लैजानशुरु टिप्पणी उठाई एक तह माथीकासि.डि.ई. बालकृष्ण श्रेष्ठ समक्ष पेश गरेको, टिप्पणी र आदेशको मन्त्रिपरिषदबाट निर्णय हुनुपर्ने व्यहोराको १ नं. बुँदामा नेपाल सरकार, समरजंग कम्पनीको नाममा (मोही जनिएको) ललिता निवासको क्याम्प क्षेत्रको चार किल्ला भित्र जम्मा क्षेत्रफल २७-७-२-१ रोपनी सरकारी जग्गा उल्लेख भएको तर प्रस्तावको अनुसूची १ (प्र.म. निवासको दक्षिण तर्फको परिसर विस्तार गर्ने सरकारी जग्गाको विवरण) मा उल्लेखित सम्पूर्ण जग्गाको जम्मा क्षेत्रफल ३०-१४-१-१.६ रोपनी रहेको देखिन आएको, यसरी प्रस्तावको बुँदा र अनुसूचीको क्षेत्रफलमा समेत फरक व्यहोरा पारेको, प्रस्तावमा ५७० मिटर लामो ८ मिटर चौडा बाटो निर्माण गर्न आवश्यक जग्गा अनुसूची ३ मा उल्लेख भए बमोजिम क्षेत्रफल ८-१४-३-० रोपनी जग्गा मध्ये नेपाल सरकारको नाममा रहेको क्षेत्रफल १-११-२-० रोपनी र व्यक्तिको नाममा दर्ता रहेको क्षेत्रफल ७-३-१-१ रोपनी (सट्टाभर्ना नपाउनेगरी) सहमति बमोजिम प्राप्त गर्ने बुँदागत उल्लेख भएकोमा संलग्न अनुसूची ३ मा उल्लेखित सरकारी जग्गाको जम्मा क्षेत्रफल ४-१४-२-३ रोपनी र व्यक्तिका जग्गाको क्षेत्रफल ४-०-०-२ रोपनी भई गराई अनुसूची ४ बिपरित समेत गरी बाटो ८-१२-२-२ रोपनी क्षेत्रफलको बनेको सो बाटोमा व्यक्तिको तर्फबाट ३-१२-३-१ रोपनी पारेको र सरकारी जग्गा ४-१५-३-१ रोपनी पारेको साथै झुठो तथा कीर्ते कागजातको आधारमा कीर्ते व्यहोराको टिप्पणी उठाई नेपाल सरकार समरजंग कंपनीको नाममा रहको सरकारी जग्गा नक्कली मोही र व्यक्ति तथा संस्थाको नाममा लैजाने टिप्पणी उठाई सरकारी जग्गा हानीनोक्शानी गराउने टिप्पणी अगाडी बढाई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी पेश गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणी पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र

योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी  जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र  तयार गर्नु पर्नेमा सो नगरेको देखिएको ।  गलत तथ्यको आधारमा टिप्पणी पेश गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्य गरी प्रतिवादी **राजेन्द्रमान श्रेष्ठले बिगो रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा निज प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२२४) प्रतिवादी छविराज पन्तको हकमा :**

प्रतिवादी छविराज पन्त भूमि सुधार तथा ब्यवस्था मन्त्रालयको सचिव पदमा कार्यरत रहेको अवस्थामा सरकारी, सार्वजनिक जग्गामा मोही नलाग्ने कानूनी प्रावधानको जानकार हुँदाहुँदै पनि सरकारी जग्गामा मोही कायम हुने गरी मोहीले रोजे तर्फको समरजंग कम्पनी वा राजकुलो वा बाटोको जग्गा मोहीलाई दिने गरी भए गरेको टिप्पणीमा आफ्नो पदीय जिम्मेवारी अनुसारको राय परामर्श नदिई सरकारी सार्वजनिक जग्गा हिनामिना हुने गरी पेश हुन आएको टिप्पणीमा सहमती जनाई  पेश भए अनुसार मन्त्रिपरिषदमा  पेश गर्नुपर्ने विषयहरुको हकमा प्रस्ताव पेश गर्न र अन्य विषयका हकमा संबन्धित निकायहरुमा कार्यान्वयनको लागी लेखी पठाउन मनासिव हुने भनी सो टिप्पणी तत्कालिन भूमीसुधार मन्त्री डम्बर बहादुर श्रेष्ठ समक्ष पेश गरी  नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्था बिशेषको नाममा दर्ता कायम गराउन टिप्पणी प्रस्तावउठाई सदर गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने  गलत नियतले फरक व्यहोराको टिप्पणी सदर गरी कीर्ते गरेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको  जग्गा हो भन्ने एकिन गरी  मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणी सदर गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी  जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र  टिप्पणी सदर गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा टिप्पणी सदर गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाईव्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्य गरी निज प्रतिवादी **छविराज पन्तले** बिगो **रु. १०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा निज प्रतिवादी ले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२२५) <u>प्रतिवादी जित बहादुर थापाको हकमा :</u>**

प्रतिवादी जित बहादुर थापा भूमि सुधार तथा ब्यवस्था मन्त्रालयको योजना महाशाखा र जग्गा प्रशासन महाशाखाको सह-सचिवको पदमा कार्यरत रहेको अवस्थामा सरकारी, सार्वजनिक जग्गामा मोही कायम हुने गरी मोहीले रोजेतर्फको समरजंग कम्पनी वा राजकुलो वा बाटोको नाममा रहेको जग्गा मोही तथा व्यक्ति विशेषका नाममा दा.खा. नामसारी हुने गरी भए गरेको टिप्पणीमा आफ्नो पदीय जिम्मेवारी अनुसारको राय परामर्श नदिई सरकारी सार्वजनिक जग्गा हिनामिना हुने गरी भएको कीर्ते कार्यमा संलग्न भई टिप्पणी बढाई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्था बिशेषको नाममा दर्ता कायम गराउन टिप्पणी प्रस्ताव उठाई सदर गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणीमा राय परामर्श नदिई कीर्ते गरेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्रमा टिपण्णी अगाडी बढाउनु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र टिप्पणी अगाडी बढाउनु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा टिप्पणी अगाडी बढाएको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाईव्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्य गरी प्रतिवादी **जित बहादुर थापाले** विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गरेको देखिदा प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२२७) <u>प्रतिवादी कृष्ण बहादुर राउतको हकमा:</u>**

प्रतिवादी कृष्ण बहादुर राउतले झुठो विवरण र फरक व्यहोराका आधारमा तयार पारी पेश हुन आएको लिखतलाई मिति २०६६/१२/१९ गते स्वीकृत गरी अगाडी बढाएको, व्यहोराको कीर्ते कागजातबाट शुरु भएको भौतिक योजना तथा निर्माण मन्त्रालयको मिति २०६६/१२/१९ गतेको प्रस्तावमा नेपाल सरकार मन्त्रिपरिषदबाट निर्णय भई कार्यान्वयनको चरणमा रहेकोमा प्रतिवादी कृष्ण बहादुर राउतले भौतिक योजना तथा निर्माण मन्त्रालयको शाखा अधिकृत पदमा कार्यरत रहेको अवस्थामा "काठमाडौं जिल्ला का.म.न.पा वडा

नं. ४ वालुवाटार स्थित विशिष्ट व्यक्तिहरुको सरकारी भवन परिसर क्षेत्रको जग्गा प्राप्त गरी विस्तार गर्ने विषयमा नेपाल मन्त्रि परिषदको मिति २०६६।१२।२९ र मिति २०६६।०१।३१ मा निर्णय भई कार्वान्वयनको क्रममा रहेको छ । उक्त विस्तार कार्यसँग सम्बन्धित जग्गाको विवरण उल्लेख भएको अनूसुची १,२,३ मा मानविय गल्तिले गर्दा केहि जग्गाधनीको नाम र प्राप्त क्षेत्रफल फरक परेको, मोही नभएको जग्गाको मोहीको नाम उल्लेख भएको र केहि कित्ता छुट भएको देखिएकाले उक्त भुल सुधार र भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट पेश भए बमोजिम हुन उपर्युक्त देखि आवश्यक निणर्यार्थ पेश गरेको छु" भन्ने व्यहोराको टिप्पणी उठान गरेको र सोही टिप्पणीको आधारमा नै नेपाल सरकार समरजंग कम्पनीको नाममा कायम रहेको सरकारी तथा सार्वजनिक जग्गा राजकुलो बाटोमा समेत मोही कायम हुने गरी मोही र जग्गा सम्बन्धी विषय हेर्ने जिम्मेवारी रहेको भूमी सुधार मन्त्रालयको क्षेत्राधिकार भित्र प्रवेश गरी भौतिक योजना तथा निर्माण मन्त्रालयको तर्फबाट मन्त्रिपरिषदमा निर्णायार्थ प्रस्ताव लैजाने गरी किर्ते लिखत तयार गरेको देखिन्छ ।

निज प्रतिवादी कृष्ण बहादुर राउतले अनुसन्धान तथा तहकिकातको क्रममा गरिदिएको बयान व्यहोरामा "बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजनाको कार्यान्वयनका लागि बालुवाटार स्थित प्रधानमन्त्री निवाससँग जोडिएको जग्गाको सट्टापट्टा, सोधभर्ना समेतका लागि नेपाल सरकार समरजंग कम्पनीको नाममा (मोही जनिएको ) ललिता निवासको क्याम्प क्षेत्रको चारकिल्ला भित्र जम्मा क्षेत्रफल २७-७-०-१ रोपनी सरकारी जग्गा मध्ये मोही भाग कट्टा गरी बाँकी रहने १३-११-३-०.५ जग्गा र सार्वजनिक बाटो तथा राजकुलो समेतको क्षेत्रफल ०-१५-०-२ रोपनी गरी जम्मा क्षेत्रफल १४-१०-३-२.५ रोपनी अनुसूची १ मा उल्लेख भए बमोजिमका जग्गा मिलान गरी नक्सा बमोजिम दक्षिणतर्फ (प्रधानमन्त्री निवास क्षेत्र परिसर) बिस्तार गर्ने, मोहीको हिस्सामा पर्ने क्षेत्रफल १३-११-३-०.५ रोपनी जग्गा र परिसर बिस्तार गर्दा बिस्तारित क्षेत्रमा पर्ने अनुसूची २ मा उल्लेख भए बमोजिमका जग्गा व्यक्तिको नाममा दर्ता रहेको जग्गाको सोधभर्ना तथा सट्टापट्टा गर्न भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट आवश्यक व्यवस्था मिलाउने भन्ने समेत नेपाल सरकार (मन्त्री परिषद) बाट मिति २०६६/१२/२९ मा निर्णय भएको र नेपाल सरकार ( मन्त्री परिषद ) को मिति २०६६/१२/२९ को निर्णय कार्यान्वयनको सिलसिलामा भूमिसुधार तथा व्यवस्था मन्त्रालयको प्रस्तावमा मालपोत कार्यालय डिल्लीबजारबाट परिसर बिस्तार क्षेत्रमा पर्ने जग्गाको दाखिल खारेज गर्ने समेतको काम गर्ने भनी मिति २०६७/१/३१ मा निर्णय भएकोमा उल्लेखित निर्णयहरु कार्यान्वयनको क्रममा मानवीय त्रुटीका कारण पूर्व निर्णयमा उल्लेखित अनुसुचीहरुमा भुल सुधारका लागि भवन निर्माण सम्भार डिभिजन कार्यालयबाट तहगत रुपमा कानूनी प्रकृया पुरा गरी पेश भई आएको टिप्पणी फायलमा ऐन नियम परामर्श शाखाको राय सहित सचिवज्यू समक्ष पेश भई सचिवज्यूबाट प्रशासन महाशाखा प्रमुखलाई रायका लागि तोक आदेश भएको । प्रशासन महाशाखा प्रमुखबाट आन्तरिक प्रशासन शाखालाई तोक आदेश भए पश्चात असल नियतका साथ पदीय जिम्मेवारी निर्वाह गर्ने सिलसिलामा उक्त राय टिप्पणी लेखि शाखा प्रमुख समक्ष पेश गरेको हुँ भनी किर्ते सम्बन्धी कसूरमा संलग्नता खुलाई कसूर स्वीकार गरीदिएको देखिन्छ ।

जग्गाको विवरणहरुमा केही मानविय भूल तथा त्रुटीहरु देखिन गएकोले सो सच्याई कार्यान्वयन गर्न गराउन भुल सुधार गरी कायम हुने अनुसुची १,२ र ३ लाई नेपाल सरकार मन्त्रिपरिषदको निर्णयबाटै हुनु कानून सम्मत हुने हुँदा मन्त्रिपरिषदमा प्रस्ताव पेश गर्न भनी उप प्रधानमन्त्री समक्ष पेश भएको व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी स्वीकृत गराई मन्त्रालयको तर्फबाट मन्त्रिपरिषदमा निर्णायार्थ प्रस्ताव लगेकोमा सार्वजनिक निकायका जिम्मेवार पदाधिकारीले सरकारी

अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा टिप्पणी स्विकृत गरी पेश गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको गलत तथ्यको आधारमा टिप्पणी उठान गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुठ्ठा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्यबाट निज प्रतिवादी कृष्ण बहादुर राउत**ले** विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादीले साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२२८) **प्रतिवादी कृष्ण प्रसाद पौडेलको हकमा :**

प्रतिवादी कृष्ण प्रसाद पौडेल मालपोत कार्यालय डिल्लिबजारमा कार्यरत रहँदाको अवस्थामा बालुवाटार स्थित विशिष्ट व्यक्तिहरुको निवास परिसर विस्तार गर्ने क्रममा नेपाल सरकार (मन्त्रिपरिषद) बाट भएका तिनवटा फरक- फरक मितिका निर्णय कार्यान्वयन गर्ने क्रममा मालपोत कार्यालयमा भएको जग्गाधनी र मोहीको नाम अभिलेखमा उल्लेख भएको भन्दा फरक पारी सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलालाई समेत गलत व्याख्या गरी मोही भनिएका व्यक्ति तथा विस्तारित क्षेत्रमा पर्ने व्यक्तिको नाममा जग्गा सट्टाभर्ना दिनेगरी मालपोत कार्यालबाट निर्णय कार्यान्वयन गर्ने क्रममा उठेको मिसिल नं. ५५ मा दस्तखत गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गा व्यक्ति विशेषको नाममा जग्गा दा.खा. समेत गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणीमा हस्ताक्षर गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भनी एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वक हस्ताक्षर गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र पत्राचार गर्नु पर्नेमा सो नगरेको देखिएको, गलत तथ्यलाई समर्थन जनाउँदै हस्ताक्षर गरेको, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको मोहीको नाममा कायम गर्न टिप्पणीमा हस्ताक्षर गरी अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी सो कार्य गरी निज प्रतिवादी **कृष्ण प्रसाद पौडेलले विगो रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति

बिशेषको नाममा मोही कायम गराई गरेको हुँदा प्रतिवादी**ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२२९) **प्रतिवादी शंकर प्रसाद सुवेदीको हकमा :**

प्रतिवादी शंकर प्रसाद सुवेदी भूमि सुधार कार्यालय काठमाडौंको भूमि सुधार अधिकृत पदमा कार्यरत रहेको अवस्थामा सरकारी जग्गा हडप्ने उदेश्यले सरकारी जग्गामा मोही नलाग्ने कानूनी प्रावधानको जानकार हुँदाहुँदै मोही भएको भनी भूमी सुधार कार्यालयको च.नं. ५१४०, मिति २०६६/१०/१५ को पत्रबाट सरकारी जग्गा हडप्ने उदेश्यले पत्राचार गरेको, सो पत्रमा भएको मोहीहरुको नाम समेत कार्यालयको अभिलेख भन्दा फरक पारेको साथै सरकारी जग्गा हडप्ने उदेश्यले योजना र परिपञ्च गरी सरकारी जग्गामा मोही भएको भनी भूमी सुधार कार्यालयको च.नं. ४७१८, मिति २०६६/१०/३ को पत्रबाट २ नं. अनूसुची अनुसार देखिएको मोहीको विवरण भनी भवन निर्माण सम्भार डिभिजन कार्यालयलाई पत्राचार गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्था बिशेषको नाममा दर्ता कायम गराई,व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्राचार गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्राचार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी **शंकर प्रसाद सुवेदीले विगो रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा प्रतिवादी**ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२३०) **प्रतिवादी केदार प्रसाद श्रेष्ठको हकमा:**

प्रतिवादी केदार प्रसाद श्रेष्ठ भूमि सुधार कार्यालय काठमाडौंको नायब सुब्बा पदमा कार्यरत रहेको अवस्थामा सरकारी जग्गा हडप्ने उदेश्यले सरकारी जग्गामा मोही नलाग्ने कानूनी प्रावधानको जानकार हुँदाहुँदै सरकारी

जग्गामा मोही भएको भनी भूमी सुधार कार्यालयको च.नं. ४७१८, मिति २०६६/१०/३ को पत्रबाट २ नं. अनूसुची अनुसार देखिएको मोहीको विवरण भनी भवन निर्माण सम्भार डिभिजन कार्यालयलाई पठाउने पत्र तयार गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्था बिशेषको नाममा दर्ता कायम गराई व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्रमा हस्ताक्षर गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्र तयार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको , जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र पत्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा दस्तखत गरी पत्र तयार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी केदार प्रसाद श्रेष्ठले विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा प्रतिवादीले गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२३१) **प्रतिवादी प्रकाश नारायण भट्टको हकमा :**

प्रतिवादी प्रकाश नारायण भट्टले विशिष्ट व्यक्तिहरुको निवास परिसर विस्तार गर्ने क्रममा नेपाल सरकार (मन्त्रिपरिषद) बाट भएका तिनवटा फरक फरक मितिका निर्णय कार्यान्वयन गर्ने क्रममा मालपोत कार्यालयमा भएको जग्गाधनी र मोहीको नाम अभिलेख भन्दा फरक पारी, सर्वोच्च अदालतको मिति २०६४/११/३० को फैसलालाई समेत गलत व्याख्या गरी, मोही भनिएका व्यक्ति तथा विस्तारित क्षेत्रमा पर्ने व्यक्तिको नाममा जग्गा सट्टाभर्ना दिनेगरी मालपोत कार्यालबाट निर्णय कार्यान्वयन गर्ने क्रममा फरक व्यहोराको टिप्पणीबाट उठेको मिसिल नं. ५५ मा टिप्पणी उठाई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गा व्यक्ति विशेषको नाममा जग्गा दा.खा. समेत गरी नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको टिप्पणी उठाई कीर्ते गरेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भनी एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा रितपूर्वक टिप्पणी उठाउनु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा

संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र टिप्पणी उठाउनु पर्नेमा सो नगरेको देखिएको, गलत तथ्यको आधारमा टिप्पणी उठाएको, नेपाल सरकार समरजंग कम्पनीको जग्गालाई हुँदै नभएको मोहीको नाममा कायम गर्न टिप्पणी उठाई अर्काको हक जाने, नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी **प्रकाश नारायण भट्टले विगो रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराई गरेको हुँदा निज प्रतिवादी **ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

२३२) **प्रतिवादी जनक बहादुर भण्डारीको हकमा :**

प्रतिवादी जनक बहादुर भण्डारी नापी कार्यालय डिल्लिबजारको तत्कालिन नापी अधिकृतको पदमा कार्यरत रहेको अवस्थामा नेपाल सरकार मन्त्रिपरिषदको २०६६/१२/२९ को निर्णय कार्यान्वयनको सिलसिलामा सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी तथा मालपोत कार्यालयको कर्मचारीहरुसँगको मिलेमत्तोमा बालुवाटारस्थित ललिता निबास क्याम्प भित्रको सरकारी जग्गामा प्र.म. निवासको दक्षिण तर्फको विस्तारको लागि र त्यसको दक्षिण तर्फको ८ मि. बाटो विस्तारको लागि रेखाङ्कन गरी सरकारी सार्वजनिक जग्गामा मोही भएको विवरण सहित भवन निर्माण संभार डिभिजन कार्यालय, अनामनगरलाई नापी अधिकृतको हैसियतले दस्तखत गरी च.नं. २६४८, मिति २०६६/११/२५ को पत्र पठाईनेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्राचार गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्राचार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानी सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको , जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको, गलत तथ्यको आधारमा पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी जनक बहादुर भण्डारीले विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|

| | | | | | |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२३३) प्रतिवादी देव बहादुर लामिछानेको हकमा :**

प्रतिवादी देव बहादुर लामिछाने नापी कार्यालय काठमाडौंको सर्वेक्षक पदमा कार्यरत रहेको अवस्थामा सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी तथा मालपोत कार्यालयको कर्मचारीहरु सँगको मिलेमत्तोमा बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना बनाउने क्रममा जिम्मेवारी बाडफाड गरी बालुवाटारस्थित ललिता निबास क्याम्पभित्रको सरकारी जग्गा व्यक्ति विशेषको नाममा जाने गरी कित्ताकाट गरी कित्ताकाटको विवरण मालपोत कार्यालय डिल्लिबजारलाई च. नं. ६९८, मिति २०६६/०७/१२ को पत्रबाट पठाई बालुवाटारस्थित ललिता निबास क्याम्पभित्रको सरकारी जग्गामा प्र.म. निवासको दक्षिण तर्फको विस्तारको लागि र त्यसको दक्षिण तर्फको ८ मि. बाटो विस्तारको लागि रेखाङ्कन गरी सरकारी सार्वजनिक जग्गामा मोही भएको भनी भवन निर्माण संभार डिभिजन  कार्यालय, अनामनगरलाई च.नं. २६४८, मिति २०६६/११/२५ को पत्र नापी सर्वेक्षकको हैसियतले दस्तखत गरी पठाई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई  व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई  व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्रमा दस्तखत गरी कीर्ते गरेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको  जग्गा हो भन्ने एकिन गरी  मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्राचार गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण ) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र  तयार गर्नु पर्नेमा सो नगरेको देखिएको । गलत तथ्यको आधारमा दस्तखत गरी पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्टाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी **देव बहादुर लामिछाने**ले विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गरेको देखिदा निज प्रतिवादी**ले** साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो ।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२३४) प्रतिवादी भरत चन्द्र अर्यालको हकमा :**

प्रतिवादी भरत चन्द्र अर्याल नापी कार्यालय काठमाडौं को अमिन पदमा कार्यरत रहेको अवस्थामा सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी तथा मालपोत कार्यालयको कर्मचारीहरु सँगको मिलेमत्तोमा बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना बनाउने क्रममा बालुवाटारस्थित ललिता निबास क्याम्पभित्रको सरकारी जग्गा व्यक्तिविशेषको नाममा जाने गरी कित्ताकाट गरी

कित्ताकाटको विवरण मालपोत कार्यालय डिल्लिबजारलाई च. नं. ६९८, मिति २०६६/०७/१२ को पत्रबाट पठाई बालुवाटारस्थित ललिता निबास क्याम्पभित्रको सरकारी जग्गामा प्रधानमन्त्री निवासको दक्षिण तर्फको विस्तारको लागि र त्यसको दक्षिण तर्फको ८ मिटर बाटो विस्तारको लागि रेखाङ्कन गरी सरकारी सार्वजनिक जग्गामा मोही भएको भनी भवन निर्माण संभार डिभिजन कार्यालय, अनामनगरलाई च.नं. २६४८, मिति २०६६/११/२५ को पत्रमाअमिनको हैसियतले दस्तखत गरी पठाई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्रमा हस्ताक्षर गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्रमा दस्तखत गर्नु पर्नेमा प्राप्त कागजातलाई मात्र आधार लिई, बिश्वास गरी र अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा दस्तखत गरी पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुठ्ठाकाम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी निज प्रतिवादी प्रतिवादी भरतचन्द्र अर्यालले विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा निज प्रतिवादी **ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं. | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२३५) <u>प्रतिवादी कमल घिमिरेको हकमा :</u>**

प्रतिवादी कमल घिमिरे नापी कार्यालय काठमाडौंको नापी अधिकृत पदमा कार्यरत रहेको अवस्थामा सरकारी जग्गा लिने खाने बदनियत राखी, जग्गा कारोबारी राम कुमार सुवेदी तथा मालपोत कार्यालयको कर्मचारीहरुसँगको मिलेमत्तोमा जिम्मेवारी बाडफाड गरी बालुवाटार स्थित बिशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गुरुयोजना बनाउने क्रममा बालुवाटारस्थित ललिता निबास क्याम्पभित्रको सरकारी जग्गा व्यक्ति विशेषको नाममा जाने गरी कित्ताकाट गरी कित्ताकाटको विवरण मालपोत कार्यालय डिल्लिबजारलाई च.नं.६९८, मिति २०६६/०७/१२ को पत्र नापी अधिकृतको हैसियतले दस्तखत गरी पठाई नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाई व्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले फरक व्यहोराको पत्रमा हस्ताक्षर गरी कीर्ते गरेको, सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको जग्गा हो भन्ने एकिन गरी मिल्ने भए मात्र ऐन, नियम र बिनियमका आधारमा पत्रमा दस्तखत गर्नु पर्नेमा प्राप्त

कागजातलाई मात्र आधार लिई, अन्तिम तथ्य मानि सरकारी जग्गा ब्यक्तिको नाममा लैजान आधारभूत प्रमाण (कीर्ते  प्रमाण) जुटाउने प्रपञ्च र योजनामा संलग्न भएको देखिएको, जग्गाको मोठ श्रेस्ता अध्ययन गरी जग्गाहरुको श्रोत एकिन गरी अभिलेखमा समेत भिडे पश्चात मात्र  तयार गर्नु पर्नेमा सो नगरेको देखिएको। गलत तथ्यको आधारमा  दस्तखत गरी पत्राचार गरेको, नेपाल सरकार समरजंग कम्पनीको नाममा दर्ता कायम रहेको सरकारी जग्गालाईव्यक्ति तथा संस्थाको नाममा दर्ता कायम गरी व्यक्ति बिशेषको नाममा मोही कायम समेत गराई अर्काको हक जाने नोक्सान हुने, झुट्टा काम गरी आफैलाई वा अरु कसैलाई फाईदा पुग्ने कार्य गरी प्रतिवादी **कमल घिमिरे**ले विगो **रु.१०,५१,१२,९०३/-** बराबरको नेपाल सरकार समरजंग कम्पनीको नाममा रहेको सरकारी जग्गा व्यक्ति बिशेषको नाममा मोही कायम गराएको हुँदा उक्त निज प्रतिवादी**ले** गरेको उक्त कार्य साविकको मुलुकी ऐन, कीर्ते कागजको महलको १ नं. र २ नं. मा परिभाषित कसूर गरेको देखिन आयो।

| सि.नं | जग्गा फिर्ता २०४९ | छुट जग्गा २०६२ | सट्टापट्टा २०६७ | टिकिन्छा गुठी २०६९ | जम्मा रु. |
|---|---|---|---|---|---|
| १ | - | - | १०,५१,१२,९०३/- | - | १०,५१,१२,९०३/- |

**२३६) प्रतिवादी नरहरी शर्मा भण्डारीको हकमा:**

प्रतिवादी नरहरी शर्मा भण्डारीले भौतिक योजना तथा निर्माण मन्त्रालयको उप सचिब पदमा कार्यरत रहेको अवस्थामा विशिष्ट व्यक्तिहरुको निवास परिसर बिस्तार गर्ने क्रममा पूर्वनिर्धारित र पूर्वनिर्देशित (Pre-occupied mind) तवरले सरकारी जग्गामा मोही कायम गर्ने परिपञ्च र योजना मुताबिक नै नेपाल सरकार समरजंग कम्पनीको नाममा कायम रहेको सरकारी तथा सार्वजनिक जग्गा राजकुलो बाटोमा समेत मोही कायम हुने गरी मोही र जग्गा सम्बन्धि विषय हेर्ने जिम्मेवारी रहेको भूमी सुधार मन्त्रालयको क्षेत्राधिकार भित्र प्रवेश गरी भौतिक योजना तथा निर्माण मन्त्रालयको तर्फबाट मन्त्रिपरिषदमा निर्णायार्थ प्रस्ताव लैजाने गरी कीर्ते कागजात, झुठो विवरण र फरक व्यहोराका आधारमा तयार पारी पेश हुन आएको टिप्पणीलाई मिति २०६६/१२/१९ गते स्वीकृत गरी अगाडी बढेको फरक व्यहोराको कीर्ते कागजातबाट शुरु भएको भौतिक योजना तथा निर्माण मन्त्रालयको मिति २०६६/१२/१९ गतेको प्रस्तावमा नेपाल सरकार मन्त्रिपरिषदबाट निर्णय भई कार्यान्वयनको चरणमा रहेका जग्गाको सम्वन्धमा शाखा अधिकृत कृष्ण राउत भन्ने कृष्ण बहादुर राउतले पेश गरेको अनुसूची १, २ र ३ मा मानवीय गल्तीले गर्दा केही जग्गाधनीको नाम र प्राप्त क्षेत्रफल फरक परेको, मोही नभएको जग्गामा मोहीको नाम उल्लेख भएको र केही कित्ता छुट भएको देखिएकाले उक्त भुलसुधार आवश्यक निर्णयार्थ पेश गरेको छु भन्ने ब्यहोराको टिप्पणीलाई **यसमा क्षेत्रफलमा कुनै फरक नपर्ने तर थप आर्थिक दायित्व पर्ने नपर्ने विषयमा उल्लेख छैन। प्राप्त हुने जग्गाको क्षेत्रफल जम्मा १४-१०-३-२.५ रोपनी नघट्ने र पेश भए अनुसार भूल सुधार गर्दा थप आर्थिक दायित्व नपर्ने गरी संसोधनको लागि निर्णयार्थ पेश गरेको भनी टिप्पणी लेखी** अनुसूची हेरफेर गरी संशोधन गर्ने टिप्पणी फायलमा राय सहित सह सचिब  समक्ष पेश गर्दा पुर्व प्रस्ताव साथ संलग्न अनुसुची तयार पार्दा लिईएका आधारहरु समेतको अध्ययन नगरी व्यक्तिलाई लाभ पुर्याउने तथा सरकारको हक मेटाई हानी पुर्याउने गलत नियतले मोही र जग्गा सम्बन्धि विषय हेर्ने जिम्मेवारी रहेको भूमी सुधार मन्त्रालयको क्षेत्राधिकार भित्र प्रवेश गरी फरक व्यहोराको टिप्पणीमा राय सहित पेश गरी कीर्ते गरेको , सार्वजनिक निकायका जिम्मेवार पदाधिकारी भएकोले सरकारी अभिलेखसँग भिडाई उक्त जग्गा सरकारी हो वा मोही कायम भएको  जग्गा हो भन्ने एकिन गरी  मिल्ने भए मात्र ऐन, नियम र बिनियमका

